| | | |
|---|---|---|
| ग्रन्थको नाम | : | अनुस्मृति (जीवनयात्रा) |
| लेखक | : | श्रीशरदकुमार भट्टराई |
| सर्वाधिकार | : | @ लेखकमा सुरक्षित |
| प्रकाशिका | : | श्रीमती इन्दिरा भट्टराई<br>विजयचोक, प्रयागमार्ग,<br>बत्तीसपुतली–९, काठमाडौं<br>फोन : ४११००९५ |
| प्रकाशन मिति | : | वि.सं. २०६७ वैशाख १३ गते, जन्मदिन |
| प्रकाशित सङ्ख्या | : | ६०० प्रति |
| मूल्य | : | रु. ६००।– |
| वितरक | : | साझाप्रकाशन<br>पुलचोक, ललितपुर<br><br>श्रीपशुपतिनाथशरण सहकारी सं.लि.<br>पशुपति, काठमाडौं<br><br>रत्नपुस्तकभण्डार<br>ग्रीनहाउस २७१, माइतीघर, काठमाडौं |
| कम्प्युटर सेटिङ्ग | : | श्रीखड्गप्रसाद खनाल |
| मुद्रक | : | एन्.पी.टी.सी. लिमिटेड<br>विमासमिति मार्ग, सरस्वतीनगर<br>फोन नं. ४८११२२६, ४८११३७१ |



# समर्पण

जस्का कारणले गर्दा जन्मैँ मानव भैकन ।
त्रिशुक्लयुत वात्सल्य पाई सम्पुष्ट भो तन ॥
मेरो सामर्थ्य नै छैन गर्न सम्मान अर्हण ।
पत्रं पुष्पं यही गर्छु उहाँमा म समर्पण ॥

*प्रा.डा. तारानाथ शर्मा*
*सरस्वतीनगर, काठमाडौँ*

*फोन : ४४७१९५५*



# एक कुशल प्रशासक तथा चिन्तकको अनुकरणीय जीवनयात्रा

श्रीशरदकुमार भट्टराईको जीवनीलाई प्रकाश पार्ने यो संस्मरणात्मक निबन्धहरूको सङ्कलन नेपाली साहित्यका फाँटमा अविस्मरणीय प्रभाव पार्ने कृतिका रूपमा पाठकहरूसमक्ष प्रस्तुत भएको छ । छन्दोबद्ध शैलीमा 'यात्रैयात्रा' को रचनाद्वारा लेखकले आफ्ना संसारभरिका अनेकौँ देशहरूको सूत्रात्मकरूपमा बयान गरेर अनि भारतका उत्तर र दक्षिणका प्रसिद्ध तीर्थस्थलहरूको भ्रमण गर्दा प्राप्त अनुभवहरूको प्रस्तुतिद्वारा पाठकहरूका जिज्ञासाको समुचित पूर्ति गरेर ग्रन्थकार यस कृतिमा व्यापकरूपले प्रकट हुनाले संस्मरणात्मकता, पद्यात्मकता र यात्राविवरणको क्षेत्र लाभान्वित भएको छ ।

आफ्नो पुर्ख्यौलीको चित्रणबाट प्रारम्भ भएको यो संस्मरणात्मक कृति एकातिर ग्रन्थकारको आत्मजीवनी हो भने त्यसका साथसाथै अर्कातिर मातृभूमिका विभिन्न प्रतिनिधिमण्डलहरूको नेतृत्व गर्दै समुद्रपारिका अनेकौँ राष्ट्रहरूको भ्रमण र त्यहाँका विशिष्ट व्यक्तिहरूका सम्पर्क र अन्तरक्रियाबाट प्राप्त तथ्यहरूको प्रामाणिक उद्घाटनसमेत गरिएको हुनाले बौद्धिक भ्रमणवृत्तान्तसमेत हो । दक्षिण अमेरिका, अफ्रिका र रुसको मूलभूमिबाहेक समस्तजसो महत्त्वपूर्ण देशहरूको उच्चस्तरीय यात्राको आकर्षक वर्णनले यो ग्रन्थ सिंगारिएको छ । बत्तीस वर्षसम्मको सरकारी प्रशासनमा उच्च तहको सेवा राष्ट्र र जनतालाई प्रदान गर्ने व्यक्तिका अनुभवहरू यति स्पष्टरूपमा यहाँ चित्रित भएकाले यो 'अनुस्मृति' पठनीय र सङ्ग्रहणीय भएको छ ।

डा. तारानाथ शर्मा

२०६६।१२।१२

*शरदकुमार भट्टराई*
*विजयचोक, प्रयागमार्ग*
*बत्तीसपुतली–९, काठमाडौँ*

**फोन : ४११००९५**
**४११००५८**



# भूमिका

भोगा न भुक्ता वयमेव भुक्तास्तपो न तप्तं वयमेव तप्ताः ।
कालो न यातो वयमेव यातास्तृष्णा न जीर्णा वयमेव जीर्णाः ॥
बलिभिर्मुखमाक्रान्तं पलितेनाङ्कितं शिरः ।
गात्राणि शिथिलायन्ते तृष्णैका तरुणायते ॥

*– वैराग्यशतक, भर्तृहरिः*

भर्तृहरिको यो कालजयी तथा शाश्वत उक्ति अत्यन्त जीवन्त र मर्मस्पर्शी पनि छ । जब जब म यो कविता पढ्दछु, तब तब यो कविता मलाई नै लक्ष्य गरेर कविले लेखेका हुन् कि ? जस्तो मलाई भान हुन्छ । सायद मजस्ता उमेर नाघेका संवेदनशील मान्छे सबैलाई यस्तै अनुभूति हुन्छ होला । यदि हुँदैन भने त्यो दुर्भाग्य हो । खास कुनै महत्त्व र उपयोगिता नभए तापनि यिनै भावनाहरूको अन्तरालमा रहेर मैले यो मेरो अर्थहीन जीवनयात्रा अर्थात् अनुस्मृति लेख्ने रहर गरेको हुँ ।

तीन दशकभन्दा पनि बढी लामू समयसम्म जागिरमा रहँदा मेरो बानी एकोहोरो भइसकेको थियो । त्यहाँबाट बाहिर निस्किएपछि दिनचर्या नियमित गर्न मलाई शुरु शुरुमा मुश्किल परेको थियो । एषणा र संस्कारको वशीभूत भएर मैले केही समय पुनः केही प्राप्तिको कामना गरेँ । शुरु शुरुमा अवकाश प्राप्त जीवन अभिशाप लागेको थियो, तर बिस्तारै यसलाई वरदानका रूपमा परिणत गर्ने मैले निश्चय गरेँ । मैले व्यवहारमा गर्नुपर्ने छोराहरूको विवाहका साथै अन्य धार्मिक कृत्यहरू पनि यसैबेला गरेँ । यात्रा गर्न बाँकिरहेका उत्तर भारत र दक्षिण भारतका चारधाम लगायतका तीर्थहरूको यात्रा श्रीमती र परिजनका साथ मैले यसै समयमा गरेँ । यसका अतिरिक्त मैले केही पुस्तकहरू लेखेर प्रकाशित पनि गरेँ । यात्रा र प्रकाशनका सम्बन्धमा मैले विभिन्न किताबहरू र यसै पुस्तकमा पनि उल्लेख गरेको छु ।

फुर्सतका समयमा मैले केही कृतिहरूको लेखन र प्रकाशन गर्ने काम २०२६ सालदेखि नै नियमितरूपमा गर्दै आएको हुँ । अवकाश लिएपछि पनि २०५८ सालमा यात्रैयात्रा र २०५९ सालमा पत्रैपत्र नामका दुई कवितासङ्ग्रहहरू तयार गरेर मैले प्रकाशित गरेको थिएँ । लोकार्पण समारोहमा तिनको समीक्षा प्रा.डा. तारानाथ शर्माले गर्नुभएको थियो । उहाँले तिनै कृतिहरूलाई लिएर एउटा लेख कान्तिपुर पत्रिकामा प्रकाशित पनि गराउनु भएको थियो । त्यस लेखमा कृतिहरूको समीक्षाका साथै प्राञ्जल गद्यमा आफ्नू जीवनको अनुभव लेख्न शर्माले मलाई उत्प्रेरित पनि गर्नुभएको थियो ।

त्यसरी डा. शर्माको उत्प्रेरणाका साथै मेरा परम मित्र मुकुन्द शंशेर थापाले पनि मलाई बारम्बार घच्घच्याउनुभएको थियो । खास उपयोगी र महत्त्वको नहुने मैले ठानेको थिएँ तापनि मित्रहरूको प्रेरणा र मैले पनि आफ्नू फुर्सतको समयलाई सदुपयोग गर्ने सदुद्देश्यले संस्मरण लेख्तै कम्प्युटर गराउँदै गरेको थिएँ । त्यसरी लेखिसक्नै लागेको समयमा कम्प्युटरको हार्डडिस्क जल्यो र त्यसमा सुरक्षित मेरो सम्पूर्ण संस्मरण पनि जलेर समाप्त भएको थियो ।

त्यसपछि म फेरि संस्मरण लेख्नेतर्फ नलागेर अरू नै किताबहरू लेखी प्रकाशित गर्ने तर्फ लागेँ । यसै बेलामा फेरि प्रा. डा. तारानाथ शर्मा र मित्र मुकुन्द शम्शेर थापाले जसरी पनि लेख्ने भनेर अत्यन्त प्रेरित गर्नुभएको हुँदा मैले पुनः संस्मरण लेख्न थालेँ र लामू समय लगाएर लेखेर पूरा पनि गरेको हुँ । यसै बीचमा यस संस्मरण लेखनका उत्प्रेरक मध्येका एकजना मित्र मुकुन्द शम्शेर थापा यस संसारबाट बिदाभइसक्नु भएको छ ।

संस्मरण लेखिसकेर पनि यसको उपयुक्त नाम भने मैले जुराउँन सकेको थिइन । यसका धेरैथरी नामहरू जुर्न सक्तथे । नाम आत्मकथा पनि हुनसक्तथ्यो । म जस्तो सामान्य मान्छेको जीवनीलाई आत्मकथा कसरी भन्न सुहाउँछ ? महात्मा गान्धी, विश्वेश्वरप्रसाद कोइरालाजस्ता महामानवहरूको जीवनकथालाई पो आत्मकथा भन्न सुहाउँछ भन्ने मलाई लाग्यो । आत्मकथा, आत्मवृत्तान्त आदि जस्ता शब्दहरू पनि मेरा लागि नमिल्ने देखेपछि मेरा अग्रज जागिरेहरूले लेखेजस्तै गरेर जागिरे जीवन, जागिरेको अनुभव, जागिर खाँदा, जागिरतिर अलमलिँदा जस्ता सबैले बुझ्ने जागिरसँग सम्बन्धित शीर्षक राखौँ कि ! जस्तो पनि मलाई लागेको थियो, तर जागिर खानकै लागि यो मनुष्य जीवन पाएजस्तो गरेर त्यसैमा

मात्रै सीमित भएको नाम के राख्नु ! जस्तो लाग्यो, उपयुक्त लागेन । किनभने जागिरको कुरामात्रै नलेखेर जन्मदेखि अर्थात् मैले सम्भन सक्ने उमेर भएदेखिका र अहिले यो भूमिका लेख्तैगरेको समयसम्मका सबै कुरा मैले यसमा समावेश गर्ने प्रयास गरेको छु । अतः जागिरमा मात्रै सीमित भएर किताबको शीर्षक जुराउँन मिलेन । धेरै शोचविचार पछि यसको शीर्षक 'जीवनयात्रा' राख्नु पो ठीक हुन्छ कि भनेर मैले नाम जुराउँन खोजेँ । किनभने म टुकुटुकु हिँड्न थालेपछि यो सत्तरी वर्षको उमेरसम्म जसरी तसरी म हिँडिरहेकै छु । यो ठीकै होलाजस्तो लाग्यो । फेरि अर्को कुरा मैले मेरा लेख र किताबहरूको नाम राख्ता पनि कतिपयको नाम यात्रा शब्द अघि र पछि जोडेर राखेको छु । जस्तै – चीनको यात्रा, पूर्वको यात्रा, फ्रान्सको यात्रा, अष्ट्रेलियाको यात्रा, अष्ट्रियाको यात्रा, अन्तिम यात्रा वृद्धावस्था, विविधयात्रा, यात्रैयात्रा, यात्रावृत्तान्त, आदि इत्यादि कुराहरूले गर्दा पनि मलाई यो जीवनयात्रा नाम ठीकै लागेको थियो ।

किताबको शीर्षक अझै राम्रो जुरिनसकेको समयमा मैले बिहान बिहान पाठ गर्ने गरेको पञ्चरत्नगीतामध्येको एक गीता 'अनुस्मृतिः'मा र ब्रह्मसूत्रको 'अनुस्मृतेश्च' भन्ने सूत्रमा पनि मेरो ध्यान गएको थियो । त्यस 'अनुस्मृतेश्च' सूत्रको अर्थमा – 'अनुभवं अनु उत्पद्यमाना स्मृतिरेव अनुस्मृतिः' अर्थात् अनुभवपछि उत्पन्न हुने स्मरण नै अनुस्मृति हो भनेर लेखिएको छ । तर पञ्चरत्नगीताको अनुस्मृतिको अर्थ त्यतिमा मात्र सीमित छैन । त्यो अनुस्मृति त महाभारतको युद्धमा पराजित भएर एकान्त स्थानमा एक्लै शरशय्यामा छटपटाएर सुतिरहेका भीष्मपितामहले धर्मराज युधिष्ठिरलाई बताएको तत्त्वसम्बन्धी कुराको अनुस्मृति हो । यो शब्द अनु+स्मृ+क्तिन् भएर बन्दछ । यो शीर्षक मलाई अझ राम्रो र मिल्दोजुल्दो लाग्यो । किनभने यो मेरो जीवनको प्रतिछाया हो र तत्त्वजिज्ञासा गर्ने उत्कण्ठाको प्रतिध्वनियुक्त अनुस्मरण हो । लामू जीवनको युद्ध हारेर विविध रोगहरूका शरशय्यामा सुतेर एकान्तमा छटपटाउँदै अहिले बिस्तारै जुन म सम्भिरहेको छु । शरशय्यामा सुतेका मरणासन्न भीष्मपितामहले अनुस्मृतिपछि 'इति मतिरुपकल्पिता वितृष्णा' भनेर आफ्नू तृष्णारहित मतिलाई भगवान्मा समर्पण गरेका थिए भने म चाहिँ रोगहरूको शरशय्यामा सुतेर मेरो तृष्णायुक्त मति भगवान्लाई समर्पण गर्न चाहन्छु ।

यसरी दुवै नाम मलाई मन परेपछि यस किताबको मुख्य नाम

'अनुस्मृति' र कोष्ठभित्रको उपनाम 'जीवनयात्रा' राख्नु उपयुक्त हुने मलाई लाग्यो। किनभने मेरा पनि दुइटा नाम छन्। यसरी लामू ऊहापोहपछि किताबको नाम पनि जुऱ्यो अर्थात् नामकरण भयो।

उपर्युक्त अनुसार पुस्तकको नाम जुरेको छ। मैले माथि उल्लेख गरेजस्तै मेरो आफ्नै नामका बारेमा पनि स्पष्टीकरण दिनुपर्ने भएको छ। किनभने म लौकिक वा सांसारिक विषयमा लेख्ता शरदकुमार भट्टराई लेख्तछु भने ज्ञान, भक्ति वा आध्यात्मिक विषयमा लेख्ता भने मैले शरत्कुमार भट्टराई लेख्नेगरेकोछु। केही वर्ष अघि मदन पुरस्कार गुठी तथा पुस्तकालयका अध्यक्ष कमलमणि दीक्षितले टेलिफोनबाट यही प्रश्न गर्नुभएको थियो। मैले दुवै नाम लेख्ने गरेको कुरा भनेको थिएँ, तर यसरी विषय छुट्याएर भने मैले सायद भन्न बिर्सिएँ कि ! सो कुरा अहिले लेख्नु प्रासङ्गिक नै हुने ठान्दछु।

यस भूमिकामा अब लामू गन्थन लेख्नेतिर नलागेर म यसको बिट मार्नेतर्फ लागेकोछु। किनभने धेरै लामू कुरा त मैले मूल किताबमा नै लेखिसकेको छु।

जन्मिएपछि मर्नु पर्ने, माथि पुगेपछि तल खस्नुपर्ने, भेटिएपछि छुट्टिनु पर्ने र उदाएपछि अस्ताउनु पर्ने त यो प्रकृतिको अकाट्य नियम नै हो। भनिएको पनि छ –

सर्वे क्षयान्ता निचयाः पतनान्ताः समुच्छ्रयाः।
संयोगा विप्रयोगान्ता मरणान्तं च जीवितम्॥

*– वाल्मीकि २।१०५।१६*

संसार यस्तै मायिक छ, अस्थिर छ र कुटिल पनि छ। यस संसारमा आ–आफ्ना प्रारब्ध अनुसार हामीहरू विभिन्न योनिमा घुम्ने गर्दछौँ र सुखदुःख पनि भोग्दछौँ। एकैनास दुःख पनि कसैलाई हुँदैन र सुख पनि हुँदैन। यो त घुमिरहने चक्र नै हो। यही कुरा महाकवि कालिदासले आफ्नू मेघदूतकाव्यमा व्यक्त गर्नुभएको छ। जस्तै –

कस्यात्यन्तं सुखमुपनतं दुःखमेकान्ततो वा।
नीचैर्गच्छत्युपरि च दशा चक्रनेमिक्रमेण॥

सुख र दुःख कसैले दिन पनि सक्तैन र लिन पनि सक्तैन। आफ्नै कर्मका डोरीमा सबै प्राणीहरू बाँधिएका हुन्छन्। नीतिले पनि यही कुरो भनेको छ। जस्तै –

सुखस्य दुःखस्य न कोऽपि दाता परोददातीति कुबुद्धिरेषा।
अहं करोमीति वृथाभिमानः स्वकर्मसूत्रे ग्रथितो हि लोकः॥

अनेकौँ जन्महरूमा सञ्चय गरेका शुभाशुभ कर्महरूको फल हामीहरूले अहिले भोगिरहेका छौँ। यस जन्ममा पनि गरेका शुभाशुभ कर्महरूको फलसमेत आगामी जन्महरूमा हामीहरूले भोग्नु पर्ने नै हुन्छ। अविद्या, काम र कर्मको दुश्चक्रमा परेर युगयुगान्तर, जन्मजन्मान्तर र कल्पकल्पान्तरसम्म हामीहरूले संसारमा घुमिरहनु नै पर्नेहुन्छ। यसबाट सधैँका लागि मुक्ति पाउन सकेमा नै मनुष्यजीवन पाएको सार्थक हुन आउँछ। अन्यथा मनुष्यजीवन निरर्थक हुन्छ। निरर्थक हुने मात्रै होइन, त्यस्ता व्यक्तिलाई आत्मघाती भनेर शास्त्रहरूले भनेका छन्। जस्तै – 'इह चेदवेदीदथ सत्यमस्ति न चेदिहावेदीन्महती विनष्टिः।' (केनोपनिषद् २।५) 'तांस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनो जनाः।' (ईशावास्यो–पनिषद् ३) यही कुरा श्रीमद्भागवतले पनि भनेको छ। जस्तै –

नृदेहमाद्यं सुलभं सुदुर्लभं प्लवं सुकल्पं गुरुकर्णधारम्।
मयानुकूलेन नभस्वतेरितं पुमान् भवाब्धिं न तरेत्स आत्महा॥

– *भा.११।२०।१७*

यो दुर्लभ मनुष्यजीवन सुलभ भएको बेलामा नै ब्रह्मज्ञान गरेर अनन्त जन्मदेखि हाम्रा अन्तःकरणमा जम्मा भएर रहेका सम्पूर्ण सञ्चितकर्महरूको हामीहरू नाश गर्न सक्तछौँ। ज्ञानद्वारा सम्पूर्ण सञ्चितकर्महरू नाश हुने कुरा गीताले उद्घोष गरेको छ। जस्तै–

यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा॥

ब्रह्मज्ञान भएपछि सम्पूर्ण कर्महरू भस्म भएर जान्छन्। यही कुरा मुण्डकोपनिषद्ले पनि भनेको छ। जस्तै –

भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे॥

ब्रह्मज्ञानी आफूमात्रै मुक्त हुँदैन, उसको कुल पनि पवित्र हुन्छ। उसकी आमा कृतार्थ हुन्छिन्। पृथिवी पुण्यवती हुन्छिन्। यही कुरा स्कन्दपुराणको माहेश्वरखण्डले भनेको छ। जस्तै –

कुलं पवित्रं जननी कृतार्था वसुन्धरा पुण्यवती च तेन।
अपारसंवित्सुखसागरेऽस्मिन् लीनं परे ब्रह्मणि यस्य चेतः॥

यस अनुस्मृतिको भूमिका र उपसंहारमा समेत ज्ञान र भक्तिका कुराहरू विनाप्रसङ्ग किन लेखिएका होलान् भन्ने जिज्ञासा पनि आउँन सक्ने म देख्तछु। ज्ञान र भक्ति मेरा जीवनसँग सम्बन्धित छन्। मेरो जीवनको

प्रथम कालखण्डको कुरा भूमिकाले इङ्गित गर्दछ भने सेवाबाट अवकाश लिएपछिको कालखण्डको चाहिँ उपसंहारले प्रतिनिधित्व गर्दछ । बीचको लामू कालखण्डलाई चाहिँ अनुस्मृतिको बीचको भागले प्रतिनिधित्व गर्दछ ।

सैनिक तालीमसमेत लिएर गृहप्रशासनमा प्रवेश गरेपछि मेरो कर्मक्षेत्र अत्यन्त कण्टकाकीर्ण र जटिल भएको थियो । चक्रव्यूहभित्र पसेको अभिमन्युजस्तो म भएको थिएँ । शक्तिको मद बिस्तारै चढ्दै गएपछि अहंको उन्मादले पनि म आक्रान्त बन्दै गएको थिएँ । त्यस्तै बेलामा भगवान् श्रीकृष्णजस्तो कुनै ज्ञानी सद्गुरुको आवश्यकता पर्ने हुन्छ र गुरुलाई 'तत्किंकर्मणि घोरे मां नियोजयसि केशव' (गीता ३।१) भनेर प्रश्न सोध्न पाइन्छ । त्यसपछिमात्र सद्गुरुले देखाएको श्रेयोमार्गमा हिंडेर जीवन सुधार्न सकिन्छ । तर त्यो मैले पाउन सकिन ।

यसरी असहजगतिमा अघिबढेका मेरा जीवनका तीन अवस्थाहरूलाई मैले भक्ति, कर्म र ज्ञानका तीन कालखण्डमा विभाजित गरेको छु । तदनुसार अनुस्मृतिका तीन खण्डहरू मेरा जीवनका तीन काल खण्डहरूका प्रतीक हुन् भन्ने मैले ठानेको छु । यसको पारख भने विज्ञ पाठकहरूले नै गर्नुहुनेछ । सारगर्भिक तथा संक्षिप्त आफ्नो मन्तव्य लेखेर यस किताबको गरिमा बढाइदिनु भएकोमा वरिष्ठ विद्वान् प्रा.डा. तारानाथ शर्माज्यूमा म हार्दिक धन्यवाद ज्ञापन गर्दछु ।

अन्त्यमा यो अनुस्मृति ग्रन्थ मैले २०५६ साल बैशाखबाट शुरु गरेर २०६६ सालसम्मको लामो अवधि लगाएर तयार गरेको हुँ । सम्पादनमा सहयोग गर्नुहुने विश्वनाथ रूपाखेती र कम्प्युटरकर्मी खड्गप्रसाद खनाललाई पनि म धन्यवाद दिन्छु ।

२०६७ साल वैशाख १३ गते
जन्मदिवस

विनीत

*इन्दिरा भट्टराई*
*विजयचोक, प्रयागमार्ग*
*बत्तीसपुतली–९, काठमाडौँ*



**फोन :** *४११००९५*
*४११००५८*

# प्रकाशिकाको भनाइ

यो अनुस्मृति अर्थात् जीवनयात्रा एक दशकभन्दा पनि लामो समयको लेखनपछि जन्मिएको अमूल्य रत्न हो । यसमा सात दशकको सत्य तथा ज्वलन्त इतिवृत्त समाविष्ट छ । मेरो उहाँसँग २००६ सालमा अनजानमै विवाह भएको हो । म केही बुझ्ने भएपछि घरमा आएँ । घरमा परिआउने कामकाजका साथै मातापिता र अरू मान्यजनहरूको सेवा शुश्रूषाको अभिभारा मलाई जिम्मा लगाएर उहाँ २०११ सालमा दिङ्ला र त्यसपछि २०१२ सालमा काठमाडौँ पढ्न जानुभयो । पति परदेश लागेपछि मैले मेरा पतिकी प्रतिनिधि भएर घर व्यवहारको सम्पूर्ण काम सम्हालेँ । सनातनी कट्टर ब्राह्मणको घरमा गृहवधू भएर मैले आफ्नू कर्तव्य अत्यन्त सहजताका साथ निर्वहन गरेकी थिएँ । मेरा पति अत्यन्त लगनशील, कर्मठ, सङ्घर्षशील र मातृ तथा पितृभक्त हुनुभएको हुँदा आफ्नू मिहिनेत, मातापिता र गुरुमाताको शुभाशीर्वादले २०२२ सालसम्मको छोटो अवधिमा नै संस्कृततर्फ आचार्यसम्म, अङ्ग्रेजीतर्फ स्नातक गरेर २०२२ सालमा सरकारी सेवामा प्रवेश गर्नुभएको हो । त्यसपछि म २०२३ सालमा उहाँसँग काठमाडौँ आएँ ।

नैतिकबल र चरित्रका अदम्य धनी मेरा पतिलाई राजादेखि लिएर मन्त्री, प्रधानमन्त्रीलगायतका व्यक्तिहरूले पनि कहिल्यै विचलित र भ्रंश गर्न नसकेको रोमाञ्चकारी सत्य विवरण अनुस्मृतिका पानामा यत्रतत्र पाठकहरूले पढ्न पाउनुहुनेछ । यस अनुस्मृतिमा वर्णित सरकारी पदहरूमा रहेर काम गर्दा पनि माथिदेखि लिएर तलसम्मका व्यक्तिहरूमा देखिएको पदलोलुपता र नैतिकताको खडेरीको कहानी कहाली लाग्दो देखिन्छ । यसबाट तात्कालिक नेपालको सामाजिक, राजनैतिक र आर्थिक अवस्था पनि

बुझ्न सकिन्छ । नैतिकता, सच्चरित्रता, स्पष्टवादिता र एकपत्नीव्रतलाई आफ्नू मूल मन्त्र बनाएर कार्यक्षेत्रमा उत्रिनुभएका युवक मेरा पतिलाई कुनै कलियुगी इन्द्रका वज्रले र कलियुगी मेनकाका कटाक्ष वाणले पनि विचलित गर्न सकेनन् । यो नै उहाँको आत्मिक शक्तिको ज्वलन्त उदाहरण हो ।

अदम्य साहसी र नैतिकबलका धनी पतिकी सहचरी र सुखदुःखकी साथी हुँदै ६ दशकसम्म उहाँकी छायाका रूपमा रहेर ७ दशक लामू उमेर पार गर्दै आज एक सफल धर्मपत्नी र गृहिणीका रूपमा म आफ्ना स्वजन र परिवारका बीचमा ठाडो शिर गरेर उभिन सफल भएकी छु । योभन्दा ठूलो एउटी सधवा पतिव्रता हिन्दू नारीका लागि अरू केही उपलब्धि हुनसक्तैन । यसमा मलाई ठूलो गौरव छ । त्यतिमात्रै होइन सानै उमेरदेखि घरमा भक्तिमार्गमा लाग्नुभएका मेरा पतिले पछि काठमाडौँ आएपछि अद्वैतवेदान्तमा आचार्यसम्म अध्ययन गर्नुभएको परिप्रेक्ष्यमा वर्तमान समयमा ती दुवै मार्ग मेरा लागि पनि जीवनका सम्बल बनेका छन् । एक दशकभन्दा बढी समयदेखि हाम्रा घरमा उपनिषद्, गीता, ब्रह्मसूत्र, श्रीमद्भागवत महापुराण लगायतका शास्त्रहरूको अवच्छिन्न रूपमा दैनिक पारायणका साथै स्वाध्यायसमेत चलिरहेको छ । अद्वैतवेदान्तका विषयमा सधैँ शास्त्रार्थ हुनेगर्दछ । त्यसमा मेरा पतिका नैष्ठिक विद्वान् मित्रहरू सहभागी हुने गर्नुहुन्छ । त्यस दुर्लभ ब्रह्माभ्यासमा म जस्ती अशिक्षिता नारीले पनि सहभागी हुने सौभाग्य पाएकी छु । यो सौभाग्य मलाई ठूलाठूला हावाहुण्डरी, झञ्झावात र सङ्कष्टसमेतबाट हात समातेर तान्दै यहाँसम्म ल्याइपुऱ्याउनुहुने मेरा पतिको सहृदयता र मेरो प्रारब्धले नै मैले पाएकी हुँ भन्ने मैले ठानेकी छु । योभन्दा ठूलो सौभाग्य मलाई अरू केही हुनसक्तैन ।

एकातर्फ पाठकहरूलाई यो अनुस्मृति पढ्दा र सुन्दा आध्यात्मिक कहानी अथवा कुनै बहादुर सैनिकको युद्धक्षेत्रको कथाजस्तो लाग्नसक्ने छ भने अर्कोतर्फ मनोयोगपूर्वक पढेमा प्रत्येक जागिरेको जीवनी र सङ्घर्षशील व्यक्तिको आत्मकथाजस्तो पनि यो अनुस्मृति लाग्ने छ । यो कथा आधा मेरा पतिको हो र आधा मेरो पनि कथा हो भन्ने मैले सम्झेकी छु । यसका

प्रत्येक पङ्क्तिमा मेरो मौन कथा पनि वैखरी वाणीका अन्तस्मा परावाणी लुकेर बसेजस्तै गरेर लुकेर बसेको छ । कहिल्यै पनि मुखरित नभएर चुपचाप आफ्ना पतिलाई सफल बनाउन आफ्ना सुखलाई तिलाञ्जलि दिने एक आदर्श हिन्दू नारीको पृष्ठपङ्क्तिमा उभिन पाएकोमा म आफूलाई भाग्यमानी ठान्दछु । पतिलाई सफलताको शिखरमा पुऱ्याउन आफू जगको इँटा भएर बस्न मन पराउने म जस्ती सामान्य नारीले आज मेरा पतिद्वारा लेखिएको अत्यन्त महत्त्वपूर्ण जीवनीपरक ग्रन्थ अनुस्मृतिकी प्रकाशिका भएर बाहिर प्रकाशित हुन पाउँदा म अत्यन्त गौरवान्वित भएकी छु । एक सफल र चरित्रवान् पतिकी धर्मपत्नी र शिक्षित तथा क्रियाशील ५ सन्तानकी आमा भएर पूर्ण शान्तिका साथ सुखी तथा समृद्ध घरकी गृहिणी भएर सातदशकसम्म स्वस्थ तथा कर्मठ पतिका साथ विभिन्न धार्मिक स्थल र तीर्थहरूको यात्रा गर्दै नित्य धार्मिक अनुष्ठान र वेदान्त श्रवणका साथ बाच्न पाउनुभन्दा ठूलो सौभाग्य म केही देख्तिन । यसका लागि म मेरा आदरणीय पतिप्रति हार्दिक कृतज्ञता ज्ञापन गर्दछु ।

२०६७ साल वैशाख १३ गते

विनीता

इन्दिरा भट्टराई

# विषयसूची

# अनुस्मृति

## पुर्ख्यौली

यो अनुस्मृति मैले स्वान्तःसुखायका लागि लेखेको हुँ। यो लेख्ता मेरा मूलपुरुषहरूसम्म पुग्ने प्रयास मैले गरेको छु। सृष्टिको प्रथम प्रभातदेखि अहिलेसम्म मैले अनन्त पटक अनन्त योनिहरूमा जन्म लिइसकेको छु। मलाई जन्म दिने मेरा अनन्त मातापिताहरू भइसकेका छन्। मैले जति पटक र जुन योनिमा जन्म लिए तापनि सबै योनिहरूमा उनै परब्रह्म परमात्मा मेरा साथमा साक्षीचैतन्यका रूपमा सधैँ साथै रहनुहुन्छ। शुरुमा उनैबाट आएर अन्त्यमा मैले उनैमा गएर मिल्नु पर्दछ। 'यतो वा इमानि भूतानि जायन्ते। येन जातानि जीवन्ति। यत्प्रयन्त्यभिसंविशन्ति। तद्विजिज्ञासस्व। तद्ब्रह्म ॥' *(तै.उ.३।१।१)* भनेर उपनिषद्मा उल्लेख भएको पाइन्छ। शास्त्र अनुसार प्राणीहरूको सृष्टिको क्रम भगवान् नारायाणबाट शुरुभएको देखिन्छ। डार्बिनको विकासवादी सिद्धान्तजस्तो बाँदरको विकसितरूप हामीहरू होइनौँ। वेदमा 'सोऽकामयत एकोऽहं बहुस्याम् र तत्सृष्ट्वा तदेवानु प्राविशत्' भनेर उल्लेख भएको हुँदा परब्रह्म परमेश्वरले धेरै हुने इच्छाले प्राणीहरूको सृष्टि गर्नुभएको र जीवात्माका रूपमा प्राणीभित्र आफैँ प्रवेश गर्नुभएको देखिन्छ। यसरी विचार गर्दा सम्पूर्ण प्राणीहरू परब्रह्मकै प्रतिबिम्ब हुन् र म पनि ब्रह्मकै प्रतिबिम्ब हुँ।

मूलपुरुषको खोजिगर्दै जाँदा हाम्रो वैदिकपरम्परा अनुसार भगवान् शेषशायी नारायणसम्म पुग्नुपर्ने हुन्छ। सबै थरीका वंशावलीहरूका लेखकहरूले प्रायः यसै गर्नु भएको छ। वसिष्ठ, इन्द्रप्रमद र आभरत्वसु गरेका तीन प्रवर भएका हामी भट्टराईहरूको वंशदर्पणमा उल्लेख भएको क्रमलाई नै यहाँ मैले अनुसरण गरेको छु। सो अनुसार भगवान् शेषशायी नारायणका नाभिकमलबाट ब्रह्माजीको उत्पत्ति भयो। ब्रह्माजीका मानसपुत्रका रूपमा ब्रह्मर्षि वसिष्ठ जन्मनुभयो। उहाँ र उहाँकी पत्नी अरुन्धतीबाट शक्तिको जन्म भयो। शक्ति

र उहाँकी पत्नी सोपाबाट पराशर जन्मनुभयो । ऋषि पराशर र सत्यवतीबाट द्वैपायन व्यासको उत्पत्ति भयो । व्यास र उहाँकी पत्नी ऋत्तिकाबाट शुकदेव स्वामीको जन्म भयो । शुकदेव स्वामी र उहाँकी पत्नी पीवरीबाट ४ छोराहरू जन्मिएका थिए । तीमध्येमा कृष्ण भन्ने हाम्रा पुर्खा भएको कुरा पुराणहरूमा उल्लेख भएको पाइन्छ । त्यसपछि धेरै लामू समयसम्म पुर्खाहरूको इतिहासका


शेषशायी भगवान् नारायण

बारेमा कहीं कतै उल्लेख भएको पाइँदैन । धेरै लामू समयको अन्तरालपछि दशौँ शताब्दीमा आएरमात्रै आधुनिक कालका प्रथमपुर्खा ऋषि भट्टको उल्लेख भएको पाइन्छ । ऋषि भट्टलाई प्रथम मूलपुरुष मानेर गणना गर्दा क्रमसङ्ख्या २ मा रघु भट्ट, ३ मा कपिल भट्ट, ४ मा लीला भट्ट, ५ मा देवी भट्ट, ६ मा गर्भु भट्टराई, ७ मा थलु भट्टराई, ८ मा रिट्ठु भट्टराई, ९ मा कृष्ण भट्टराई, १० मा ब्रह्मानन्द भट्टराई, ११ मा लक्ष्मीश्वर भट्टराई, १२ मा शिव भट्टराई र १३ मा ऋषीश्वर भट्टराई भएका देखिन्छन् ।

उपर्युक्त अनुसार आधुनिक कालका पुर्खाहरूको नाम उल्लेख गर्ने क्रममा उल्लेखनीय काम गर्ने पुर्खाहरूका सम्बन्धमा केही विशेष उल्लेख गर्नु उपयुक्त हुने ठान्दछु । दशौँ शताब्दीतिर बाग्लुङको गल्कोट भन्ने ठाउँमा माथि उल्लेख भएका भट्टराईहरूका आधुनिक कालका प्रथम पुर्खा ऋषि भट्टको बसोवास भएको बुझिन्छ । उहाँकै छैटौं पुस्ताका गर्भु भट्ट विद्वान् भएका र उहाँलाई सिञ्जाका राजा अभय मल्लले राजपुरोहितका साथै जिम्मावालसमेत बनाएर राखेका थिए भन्ने वंशावलीबाट देखिन्छ । त्यसै समयमा खुशी भएर गर्भु

भट्टलाई राजाले राईको उपाधि पनि दिएका थिए ।

त्यसै बेलादेखि भट्टमा राईको उपाधि जोडिएपछि भट्टराई थर भएको हो भन्ने उल्लेख भएको पाइन्छ । त्यसै वंशका १३ औं पुस्ताका हाम्रा पुर्खा ऋषीश्वर भट्टराई गोरखाबाट नुवाकोटहुँदै सिन्धुपाल्चोकमा बिर्ता प्राप्त गरेर पूर्वतर्फ लाग्नुभएको रहेछ । उहाँका कान्छा छोरा अर्थात् हाम्रा १४ औं पुस्ताका पुर्खा लक्ष्मीदास भट्टराईका तीन भाइ छोराहरूमध्ये जेठा छोरा हाम्रा १५ औं पुस्ताका पुर्खा गङ्गादास भट्टराई सालुबिर्ता प्राप्त गरेर बसाइँ सर्नुभएकोरहेछ । उहाँका चार भाइ छोराहरूमध्ये कान्छा अर्थात् १६ औं पुस्ताका हाम्रा पुर्खा कृष्णानन्द भट्टराई हुनुहुन्थ्यो । उहाँ सालुबिर्ता अन्तर्गत सुनारपानीबिर्तामा बस्नुहुन्थ्यो । उहाँ त्यस बेलाका त्यस क्षेत्रका धनीमानी र सम्मानित व्यक्ति हुनुभएको हुँदा तत्कालीन राजाले उहाँलाई गादो लगाएर हिंड्ने अधिकार दिएका कारण कृष्णानन्द भट्टराईलाई गादेकिसनको नामले पनि सम्बोधन गरिन्थ्यो भनेर मेरा पिता धर्मदत्त भट्टराईज्यूले पुर्खाहरूको चर्चा गर्ने क्रममा मलाई बताउनु भएको थियो। मेरा पिताजीलाई बिर्ता उन्मूलन हुनु अघिसम्म बिर्तावालको नाताले २०१६ सालसम्म पनि त्यहाँबाट केही कोसेलीपात प्राप्त हुने गर्दथ्यो भनेर मैले पिताजीबाट सुनेको थिएँ । कृष्णानन्द भट्टराईका ६ भाइ छोराहरूमध्ये काहिंला छोरा अग्निधर भट्टराई हाम्रा १७ औं पुस्ताका पुर्खा हुनुहुन्थ्यो । उहाँका दुई भाइ छोराहरूमध्ये हाम्रा १८ औं पुस्ताका पुर्खा गङ्गाराम भट्टराई हुनुहुन्थ्यो । उहाँका ४ भाइ छोराहरूमध्ये जेठा रामचन्द्र भट्टराई हाम्रा १९ औं पुस्ताका पुर्खा हुनुहुन्थ्यो ।

केही पूर्वजहरू दूधकोशीको किनारामा रहेको चिसङ्खु भन्ने ठाउँमा बिर्ता प्राप्त गरेर बसाइँ सर्दै गएझैं गरेर उहाँ पनि रावाखोलाको दुभे भन्ने ठाउँमा रेग्मीको बिर्ता किनेर सालुसुनारपानी बिर्ताबाट त्यहाँ सर्नु भएको रहेछ । त्यहाँ सरेपछि उहाँका १० भाइ छोराहरू जन्मिनएछन् । रावादुभेबिर्तामा रेग्मीहरूसँग मुद्दा चलेपछि अन्त्यमा रेग्मीहरूले मुद्दा जितेछन् । त्यसपछि रावादुभेबाट हाम्रा पुर्खाहरू यत्रतत्र छरिनु भएछ । २० औं पुस्ताका पुर्खा उदयनारायण भट्टराईका ७ भाइ छोराहरूमध्ये सबैभन्दा कान्छा बृहस्पति भट्टराई मेरा २१ औं पुस्ताका पुर्खा हुनुहुन्थ्यो । रावादुभेको बिर्ता हारेपछि त्यहाँबाट केही पुर्खाहरू रावाखोलाको शिरमा पर्ने दिप्सुङबिर्तामा जानुभएछ र केही पुर्खाहरू रावाखार्पाको कल्लेरी

भन्ने ठाउँमा पनि बसाइँ सर्नु भएछ। मेरा २१ औँ पुस्ताका पुर्खा (भाइहरूमा सबैभन्दा कान्छा) बृहस्पति भट्टराई आफ्ना जन्तरे दाजु डम्बरनाथ भट्टराईकासाथमा रावालामीडाँडाको बिर्तामा गएर बस्नुभएछ । केही वर्षपछि दाजु डम्बरनाथ भट्टराईकै नजिक जङ्गल फँडानी गरेर उहाँले बसोबास गर्नु भएछ । उहाँका ३ भाइ छोराहरू जन्मिएछन् । उहाँहरूमध्ये जेठा भवानीशङ्कर भट्टराई मेरा २२ औँ पुस्ताका पितामह हुनुहुन्थ्यो। उहाँका पनि २३ औँ पुस्ताका ४ भाइ छोराहरू जन्मिएछन् । उहाँहरूमध्ये जेठा बलभद्र भट्टराई जन्मनुभएछ र उहाँको चाडै मृत्यु भएछ। त्यसपछि माहिला छोरा मेरा पिताजी धर्मदत्त अर्थात् भोजराज भट्टराई संवत् १९५९ साल फागुन महिनामा जन्मनुभएछ । त्यसपछि क्रमशः तेस्रा छोरा कुलप्रसाद भट्टराई र कान्छा छोरा चन्द्रकान्त भट्टराई जन्मनुभएछ। नु भएको थियो। मेरा पिता श्रीधर्मदत्त भट्टराई र माता रन्धता भट्टराईबाट २४ औँ पुस्ताका हामी ६ भाइ छोराहरू जन्मिएछौँ। जन्मिएका ६ भाइ छोराहरूमध्ये अहिले दाजु पशुपतिप्रसाद भट्टराई र ममात्रै जीवित छौँ।

उपर्युक्त अनुसार मेरा पुर्खाहरूको पूर्वइतिहासदेखि लिएर मेरो जन्मसम्मको विवरण सारांशमा मैले यहाँ उल्लेख गरेँ। रावा-लामीडाँडामा बसोवास गर्ने भट्टराईहरूमध्ये १७ औँ पुस्ताका जेठा पुर्खा देवहरि भट्टराईका सन्तान चारघरे भट्टराईहरू, साहिँला पुर्खा काशीराम भट्टराईका सन्तान जैसीटोले भट्टराईहरू र काहिँला पुर्खा अग्निधरका सन्तान हामीहरू भएको कुरा मैले माथि उल्लेख गरिसकेको छु। भगवान् नारायणदेखि शुरु गरेर आधुनिक कालका पुर्खाहरूसम्म आइपुग्दा केही पुस्ताहरूको बारेमा कल्पना र अनुमानका भरमा पनि वंशावलीमा लेखिएको पाइन्छ। वंशावलीको आधारमा अहिलेसम्मका पुस्ताहरूका बारेमा मैले यहाँ सङ्क्षिप्तरूपमा उल्लेख गरेको छु। वंशावलीका अतिरिक्त धेरै वर्ष पहिले मेरा पिताजीबाट पुर्खाहरूका बारेमा चर्चा हुँदा मैले सुनेको विवरणका आधारमा पनि उल्लेख गरेको हुँ। ब्रह्मर्षि वसिष्ठजस्ता मन्त्रद्रष्टा तथा ब्रह्मज्ञानी अयोनिज महान् ऋषिका कुलमा जन्मन पाएकोमा म आफूलाई भाग्यमानी ठान्दछु ।



# बाल्यजीवन

मेरो अतीतलाई आजको वर्तमानमा उभिएर सम्झने म प्रयास गर्न लागिरहेको छु। आफ्नो वर्तमान आफ्नै समकालीन हुनसक्तैन। वर्तमानले कि त अतीतको लट्ठी टेकेर हिंड्ने कोशिश गर्दछ कि त भविष्यको स्वप्निल संसारतर्फ चियाएर बाँच्ने प्रयत्न गर्दछ। आफ्नू विगत राम्रो नहुनेले अनागतको प्रतीक्षा गरेर पश्चात्ताप गर्दै बाँच्नुपर्दछ। जीवन अतीतको भग्नावशेष र अनागतको कल्पनाको नाम हो। यसरी भूत र भविष्यको अन्तरालमा अनवरत हिंडिरहनुको नाम नै जीवन हो। म मेरा बाल्यजीवनका बारेमा सम्झिएका केही कुराहरू यस परिच्छेदमा उल्लेख गर्नेछु। मेरो अबोध बाल्यजीवनका बारेमा म आफैंले अनुभव गरेर लेख्न सक्ने कुरै भएन। साह्रै अबोध शिशु हुँदाका कुराहरू सामान्य मान्छेले प्रायः संझन सक्तैन। त्यसैकारण मेरो जन्मतिथि, मिति र स्थानको बारेमा मेरा जन्म दिने माता, पिता, अग्रज र अभिभावकहरूले भन्नुभएका कुराहरूका साथै आफ्नै चिनाका आधारमा समेत मैले यो आत्मवृत्तान्त लेख्न लागेको हुँ। म जन्मनुभन्दा पहिले पिता श्रीधर्मदत्त भट्टराई र माता रन्धता भट्टराईबाट सबैभन्दा जेठी ठूली दिदी रमा (तिलोत्तमा) को जन्म वि.सं. १९८५ साल पुस २२ गते भएको थियो। अबोध बाल्यावस्थामा नै उहाँको विवाह खोटाङजिल्ला अन्तर्गत रावाखार्पा निवासी श्रीशम्भुनाथ पोखरेलसँग भएको थियो। दिदीका ६ भाइ छोराहरू र ४ बहिनी छोरीहरू जन्मिए। भिनाजुको २०६४ साल माघ ९ गते ८३ वर्षको उमेरमा सुनसरी



पिता श्रीधर्मदत्त भट्टराई र माता रन्धता भट्टराई,
२०१८ साल चैत्रमा लिएको तस्वीर

जिल्लाको इनरुवाको घरमा निधन भयो। हाल दिदी इनरुवा बलाहाको घरमा बस्नुहुन्छ। ठूली दिदीपछि अरू दुई दाजुहरू जन्मेर परलोक हुनुभएछ। त्यसपछि दाजु श्रीपशुपतिप्रसाद अर्थात् श्रीपार्वतीप्रसाद भट्टराईको जन्म वि.सं. १९९१ साल वैशाख १४ गते भएको थियो।


भिनाजु श्रीशम्भुनाथ र दिदी रमा पोखेल

उहाँको पहिलो विवाह वि.सं. २००२ सालमा खोटाङजिल्ला अन्तर्गत रावाकुभिण्डे गाउँका रेग्मीकी छोरीसँग भएको थियो। उहाँले दोस्रो विवाह वि.सं. २०२३ सालमा बुइँपा बसेरीका श्रीदीनानाथ पोखरेलकी छोरी निर्मलासँग गर्नुभएको थियो। उहाँका दुवै श्रीमतीहरूबाट ५ छोराहरू र तीन छोरीहरू जन्मिएका छन्। हाल दाजु आफ्नी कान्छी श्रीमतीका साथ काठमाडौँको गौरीनगर गुह्येश्वरीको घरमा र उहाँकी जेठी श्रीमती चन्द्रकला भट्टराई आफ्ना छोरा बुहारीहरूका साथ सुनसरी जिल्लाको इनरुवाको घरमा बस्नुहुन्छ।


दाजु श्रीपशुपतिप्रसाद भट्टराई र उहाँकी जेठी श्रीमती चन्द्रकला भट्टराई

मेरो जन्म मातापिताको पाँचौँ सन्तानका रूपमा विक्रम संवत् १९९५ साल वैशाख १३ गते कृष्णपक्षको एकादशीको रात सोमवारका दिन भएको हो। मेरो न्वारानको नामबाट लेख्ने गर्दछु। न्वारानको नाम सूर्यप्रसाद भट्टराई हो। गाउँघरमा मलाई त्यसै नामबाट बोलाउने गरिन्थ्यो। २०१२ साल फागुन महिनामा काठमाडौँमा पढ्न आउँदा मैले पाठशालामा सोही नाम लेखाएको थिएँ। बीचमा घर गएर फेरि २०१४ सालमा पढ्न काठमाडौँ आएर पाठशालामा नाम लेखाउन जाँदा विशेष कारणवश मैले सूर्यप्रसाद भट्टराईको साटो शरदकुमार भट्टराई नाम लेखाएर वाराणसेय संस्कृत विश्वविद्यालय भारतबाट पूर्वमध्यमा परीक्षा उत्तीर्ण गरेको थिएँ। सोही नाम हाल सबैतिर प्रचलित भएको छ। मैले साहित्यको रचना गर्दा र लेखहरू लेख्ताभने शरद् भट्टराई, शरदकुमार भट्टराई, शकु भट्टराई, सुयोग वासिष्ठ आदि विभिन्न नामहरूबाट लेख्ने गरेको छु। आध्यात्मिक लेख र ग्रन्थहरू लेख्ता भने मैले शरत्कुमार भट्टराईको नामबाट लेख्नेगरेको छु। मेरो

न्वारानको नाम सूर्यप्रसाद भट्टराई भने सबैतिरबाट हराएरजस्तै भएको छ ।

म जन्मनुभन्दा पहिले मातापिताबाट जन्मिएका ५ सन्तानहरूमध्ये एक दाजु र एक दिदीमात्र हाल जीवित हुनुहुन्छ । अरू दुई दाजुहरू र एउटी दिदी शिशु अवस्थामा नै यो संसार छोडेर जानुभएछ । मेरो जन्म भएपछि मेरी नवप्रसूता आमा निकै बिरामी भएर ६ महिनासम्म ओछ्यानमा पर्नुभएछ । म सो अवधिभरि आमाको अमृततुल्य दूध, सञ्जीवनीरूपी स्नेह र वात्सल्यबाट समेत वञ्चित हुन पुगेँछु । मेरो लालनपालन बूढी आमै बालकुमारी र कान्छी काकी सरस्वतीले गर्नुभएछ । आँखा खुल्दैदेखि म गाईभैंसीको दूध, लिटो र जाउलोमा निर्भर भएँछु । आमालाई सञ्चो भएपछि पनि खेतीपाती र घरको काममा सधैँ व्यस्त रहनुपर्ने पहाडी नारीहरूको नियति अनुसार उहाँलाई कहिल्यै पनि फुर्सद नै भएनछ । कामबाट फुर्सद भएको समयमा कहिलेकहीँ आमाको काख र वात्सल्य मैले प्राप्त गर्ने सौभाग्य पाएकोरहेछु । धूलो र हिलोसँग मितेरी गाँस्दै म अबोध शिशु अवस्थाबाट बाल्यावस्थामा प्रवेश गरेँछु । म बाल्यावस्थामा अत्यन्त सन्तोषी भएको कुरा मलाई लालनपालन गर्ने मेरा अभिभावकहरूबाट मैले सुनेको थिएँ ।


दाजु श्रीपशुपति र लेखक, २०१५ साल पुस २५ गते खिचिएको पहिलो तस्वीर

बाल्यावस्थामा टुकुटुकु हिंड्न थालेपछिबाट भने घरका कुराहरू म केही सम्झन्छु । ज्यामैको मृत्युको हृदयविदारक दृश्य, पिताजी र काकाहरू भिन्न हुँदा मैले अंशबन्डाको चिट्ठा झिकेको क्षण, पिताजीले पहिलो पटक घरमा श्रीमद्भागवतमहापुराणको पारायण गर्नुभएको धार्मिक कार्य, आमा मावल जाँदा म पनि सँगै जान रुँदै पच्छ्याउँदै पाखो र घारी छिचोल्दै तल्लाघरसम्म पुगेको घटना, घरको बारमा चढ्दाखेरि लडेर निधारमा गहिरो चोट लागेको पीडादायक क्षण, दाजुसँग खार्पा जाँदा सिमखर्कमा चिप्लो ढुङ्गामा चिप्लिएर लडेको घटना र त्यहीँ सर्पले खेदेको भयावह क्षणसमेत म धूमिलरूपमा सम्झन्छु । म त्यस बखत अबोध बालक नै थिएँ । अंशबन्डाको कुरा लेख्ता माहिला काकाका जेठा छोरा जयकुमारको पनि यहाँ उल्लेख गर्नु सान्दर्भिक

ठान्दछु । जयकुमार मभन्दा केही कान्छा भएता पनि हामी समकालीन हौँ । हामी दुवैले एक एक ओटा अंशबन्डाका चिट्ठा उठाएका थियौँ । हामी सँगै खेल्थ्यौँ र उपद्रो पनि सँगै गर्दथ्यौँ ।

एक दिन हामी दुई भाइ घरको अगेना नजिकको मूल ओछ्यानमा खेलिरहेका थियौँ । त्यसै बेला पिताजीले मोही पारेर नौनी घिउ तताउन अँगेनामा बसाल्नुभएको थियो । खेल्ने सुरमा हामीहरूले त्यतातर्फ ध्यानै दिएनछौँ । घिउ तात्तै गरेको कराहीमा मेरो लात लागेर कराहीको घिउ घोप्टिन पुगेको थियो । पिताजी रिसाएपछि हामीहरू दुवै भाइ भागेर वनतिर बेपत्ता भएका थियौँ । जयकुमार र म मिलेर केही न केही उपद्रो गरी नै रहन्थ्यौँ । कहिले ठेकीमा जमाएको दही चोरेर खान्थ्यौँ । कहिले आमैको सन्दुसमा राखेका सखर, चिनी, घिउ आदि जेसुकै भेटे पनि चोरेर खान्थ्यौँ । त्यसै गरी मौका परे आमा र माहिली काकीका सन्दुसबाट पनि चोरेर खान्थ्यौँ र जङ्गलतिर भागेर बेपत्ता हुन्थ्यौँ ।

जब म केही ठूलो भएँ त्यसपछि गाईबाख्रा चराउन जाने छिमेकका समकालीन साथीहरू र गोठालाहरूसँग वनमा जान थालेँ । व्रतबन्ध हुनुभन्दा पहिलेदेखि नै पिताजी, काका र दाजुका साथमा लागेर जजमानहरूका घरमा म जाने गर्दथेँ । उहाँहरूले पढेको र कर्मकाण्ड गरेको समेत अत्यन्त उत्सुकताका साथ हेरेर म बसिरहन्थेँ । त्यस बेला दक्षिणाको रूपमा टीका लगाएर पाइने एक दुई पैसाबाट पनि म अत्यन्त सन्तुष्ट हुन्थेँ । दौरा र टोपी त्यस बेला मेरो परिधान थियो । त्यसरी जजमानहरूका घरमा गरिएका धार्मिक कृत्यहरू हेर्दाहेर्दै म व्रतबन्ध गरिनसकेको फुच्चो भए तापनि केही जान्ने भइसकेको थिएँ । बूढी आमै मेरी गुरुमाता बालकुमारीका काखमा बसेर मैले पढ्न सिकेको थिएँ । मेरो अक्षरारम्भ खेल्दाखेल्दै भानुभक्तको रामायणबाट भएको थियो । मलाई गुरुमाता बालकुमारीले अक्षरारम्भ गराउनु भएको थियो र पढ्न पनि सिकाउनुभएको थियो । सर्वप्रथम काठको पाटीमा माटाको धूलो राखेर


गुरुमाता बालकुमारी,
२०१८ साल चैत्रमा खिचेको तस्वीर

काठको डिकोद्वारा मैले क ख लेख्न सिकेको थिएँ। त्यसपछि आगोमा सोझ्याएर बनाइएका बाँसका पटचाँसहरूमा कालो ध्वाँसोबाट बनेको मसीमा बाँसको छड्के टाँका भएको कलम चोबेर मैले लेख्न सिकेको थिएँ। मैले त्यसरी केही लेख्न सिकेपछिभने म जे पायो त्यसैमा जथाभाबी लेख्ने गर्दथें। मैले पिताजी र दाजुले पढ्ने गरेका किताबहरूमा जथाभावी लेखेर फोहोर पारिदिएको थिएँ। त्यसबाट मैले पटक पटक लज्जितसमेत हुनुपरेको थियो।

मलाई सानै उमेरदेखि नै देश र विदेशको यात्रा गर्ने प्रबल इच्छा थियो। नीलो आकाशतर्फ हेरेर धेरै बेरसम्म म टोलाइरहन्थें। धरती र आकाशको मिलन भएको ठाउँलाई म भेट्न चाहन्थें। मेरो मावल धरती र आकाश जोडिएको क्षितिजको तल पर्दथ्यो। मेरो गाउँभन्दा ५ कोस टाढा रावाखोलाको शिरमा बाक्सिला भन्ने गाउँमा मेरो मावल थियो। त्यहीँका दाहालहरू मेरा मावली थिए। म मावल जान सानैदेखि लालायित रहन्थें। मलाई किन हो किन मावलप्रति अत्यन्त आकर्षण थियो। केही हिँड्न सक्ने भएपछि कहिले पिताजीका साथमा, कहिले आमाका साथमा र कहिले काकाका साथ लागेर म मावल जाने गर्दथें।


(बायाँबाट) लेखक, कान्छा मामा पं.नरनाथ र दाजु पशुपति

मावलकी ज्यामै मलाई अत्यन्त माया गर्नुहुन्थ्यो। जेठा मामा श्रीधर्मप्रसाद दाहाल, माहिला मामा श्रीरामप्रसाद दाहाल र कान्छा मामा पं. श्रीनरनाथ दाहालहरूसमेत सबैले मलाई अत्यन्त स्नेह गर्नुहुन्थ्यो। मामाहरूका थुप्रै जजमानहरू थिए। म पनि मामाहरूका साथ लागेर जजमानका घरमा जाने गर्दथें। दक्षिणा पाएर खुशी हुन्थें। कान्छा मामा पण्डित हुनुहुन्थ्यो। सबै मामा र माइजूहरूबाट म माया र स्नेह पाउँथें। अहिले विधुर कान्छा मामा बाहेक अरू कोही पनि जीवित हुनुहुन्न। हाल कान्छा मामा सुनसरी जिल्लाको इँटहरीमा उहाँका कान्छा छोरासँग बस्नुहुन्छ। उहाँ बूढो र अत्यन्त कमजोर हुनुभएको छ। म अन्तिम पटक २०१५ सालको चुनावको बेलामा मावल गएको थिएँ। सरकारी सेवामा प्रवेश गरेपछि २०२३ सालमा सपरिवार म काठमाडौँ आएपछि फेरि मावल गएको छैन। मावलको के कुरा गरौँ आफ्नै

जन्मथलो रावालामीडाँडामा पनि जान सकेको छैन । सबै बिराना भैसकेका छन् र म पनि आफैँ हराइसकेको छु । कल्पनाको संसार जस्तै अहिले पनि मावल सम्झँदा मलाई रोमाञ्च भएर आउँछ । अब त त्यो सम्झना सम्झनामामात्रै सीमित भएर रह्यो । माहिला र कान्छा मामाहरूले केही वर्ष हाम्रो घर रावालामीडाँडामा नै बसेर पढ्नुभएको थियो । पछि मावलीभाइहरू श्रीरत्नप्रसाद दाहाल र श्रीछवि दाहालले पनि केही समय हाम्रै घरमा बसेर पढेका थिए । त्यसैकारणले पनि मावलीहरूको संझना अहिलेसम्म पनि मलाई आइरहेको होला । ए ! म ता आफ्नू बाल्यकालको कुरा लेख्तालेख्तै मावलतिर पुगेँछु । अब फेरि म बाल्यकालकै प्रसङ्गतिर फर्किन्छु ।

व्रतबन्ध हुनुभन्दा पहिले ७ वर्षको उमेरसम्ममा सामान्य पढ्न, अक्षर र अङ्क लेख्नसमेत घरमै बूढीआमै बालकुमारीसँग सिकेर म जान्ने भइसकेको थिएँ । आठ वर्षको उमेरमा तिर्पा गाउँमा खार्पाली ठूलाघरे श्रीकेशवप्रसाद पोखरेलका घरमा उहाँका छोराहरूका साथमा मेरो व्रतबन्ध पिताजीले गरिदिनुभएको थियो । शास्त्र अनुसार मलाई गायत्रीमन्त्र सुनाउने अधिकार पिताजीकै थियो तापनि मेरा पुरोहितबा श्रीतारानाथ सुवेदीले गायत्रीमन्त्र सुनाउनु भएको थियो । उहाँ सत्ययुगी, सोझा, सरल र सामान्य पढेलेखेका वृद्ध व्यक्ति हुनुहुन्थ्यो । उहाँ खाँडीको लामू दौरा लगाउनु हुन्थ्यो, धोतीको पटुका कम्मरमा बाध्नु हुन्थ्यो र खाँडीको लगौँटी लगाउनु हुन्थ्यो । उहाँले सुरुवाल र जुत्ता लगाएको मैले कहिल्यै पनि देखिन । त्यसै कारणले पनि मैले उहाँलाई अत्यन्त पुरानू समयको प्रतीकका रूपमा सत्ययुगी भनेर संज्ञा दिएको थिएँ । उहाँप्रति मेरो अत्यन्त श्रद्धा थियो र अहिले पनि म उहाँलाई अत्यन्त श्रद्धा गर्दछु ।

मैले गायत्रीमन्त्र सुनेको अर्को दिनदेखि नै पिताजीले मलाई दैनिकरूपमा सन्था दिएर यजुर्वेद पढाउनु भएको थियो । मैले क्रमशः सबै चालीस अध्याय वेद, रुद्री र चण्डीसमेत पढेको थिएँ । त्यसैगरी दाजु श्रीपशुपतिप्रसाद भट्टराईसँग संस्कृत पढ्न पनि मैले शुरु गरेको थिएँ । पढाइका साथै घरमा परिआउने सबै कामहरू पनि म गर्दथें । कर्मकाण्ड पनि सिकिसकेको थिएँ । घाँस काटेर ल्याउने, गाईभैँसी दुहुने, गोबर सोहोर्ने, नाम्लादाम्ला बाट्ने, दाउराको कच्चेट मार्ने, बारीका डल्ला फोर्ने, खेतका आली काट्ने,

आली लगाउने, बाउसे गर्ने, धान गोड्ने, काट्ने, दाइँ गर्ने, धान, पराल बोक्ने र गोठमा बस्ने आदि परिआउने सबै कामहरू म गर्दथेँ। मलाई कुनै पनि काम गर्न अल्छी लाग्दैनथ्यो।

म निरोगी भएको हुँदा सानो छँदा मोटोघाटो र सलक्क परेको थिएँ। २००६ सालको शुरुमा हाम्रा गाउँघरहरूमा माई अर्थात् बिफरको खोप हालिएको थियो जसलाई खोली भनिन्थ्यो। परम्परागत तरिकाले गाउँकै धामीहरूले सो काम गरेका थिए। एउटा गाउँमा खोली हाल्दा अरू गाउँमा आउने जाने गर्दा रोग सर्छ भनेर ढुङ्गा बाँधेर प्रवेश निषेध गर्ने चलन थियो। हाम्रो गाउँमा पनि त्यसै गरेर अरू गाउँमा सम्पर्क राख्न निषेध गरिएको थियो। त्यसबेला माई पाकेर कैयौँ मानिसहरू हाम्रो गाउँमा मरेका थिए। त्यो त्रासदीपूर्ण घटनाको सम्झना मलाई अहिलेसम्म पनि ताजै छ।

शुरुमा म एकातिर घरमा सामान्य संस्कृत पढ्दथेँ भने अर्कोतिर बेलामौकामा पिताजी र दाजुसँग जजमानहरूका घरमा कर्मकाण्ड गर्न पनि



आमा जानुकादेवी पोखरेल र छोरी इन्दिरा भट्टराई, २०४० विजयादशमी, इनरुवा, सुनसरी



जानुकादेवी पोखरेल, १०४ वर्षको उमेरमा २०६४।१२।१४ मा स्वर्गारोहण भएको

जान्थेँ। त्यसो गर्दागर्दै मेरो उमेर ११ वर्षको भइसकेको थियो। त्यस बेला गाउँघरको चलन अनुसार १० वर्षको उमेरभित्र छोराहरूको र ८ वर्षको उमेरभित्र छोरीहरूको विवाह नगरिदिएमा केही हुनेखाने घरका मानिसहरूको इज्जतै जान्थ्यो। त्यसै कारण मेरो पनि १० वर्षको उमेरदेखि नै विवाह गर्ने भनेर पिताजीले धेरै ठाउँमा केटीको कुरा चलाउनु भएको थियो। तिर्पा,

खार्पा, कुभिण्डे र आफ्नै गाउँ रावालामीडाँडामा समेत केटीहरूको कुरा चलाएको मलाई संझना छ। त्यस बेला सामान्यरूपमा साटो नदिई ब्राह्मणकुमारहरूको विवाह गर्न गाह्रो पर्दथ्यो। मेरो पनि त्यसै भएर होला जेठा मामाकी जेठी छोरी लीलाको विवाह मेरा जेठान श्रीसिद्धिनाथ पोखरेलसँग गरिदिने वचन दिएर मेरो विवाह भएको थियो।

म ११ वर्षको हुनलाग्दा २००६ साल फागुनमा मेरो विवाह रावाकुभिण्डेका श्रीहरिकृष्ण पोखरेल र श्रीमती जानुका देवी पोखरेलकी साँहिली छोरी सुश्री लालकुमारी पोखरेलसँग भएको हो। उनको जन्म वि.सं. १९९६ साल पुस ३० गते भएको हो। उनी विवाहको समयमा १० वर्षकी थिइन्। उनको न्वारानको नाम लालकुमारी हो र काठमाडौँ आएपछि इन्दिरा भनेर नाम राखिएको हो। मेरो विवाहको समयमा हाम्रा गाउँमा एकजना बन्धु हाडनाताको बात लागेर हटकमा परेका थिए। त्यसै कारण गाउँबाट बरियाँत नलगेर केही छानिएका गण्यमान्य, आफ्ना कुलकुटुम्ब र नातागोतालाईमात्र लिएर दुलहीको गाउँ रावाकुभिण्डेमा हामीहरू विवाह गर्न गएका थियौँ। त्यस बेला त्यसरी विवाह गर्नुलाई कुम्लेविवाह भन्ने चलन थियो। कुम्लेविवाह सबै कुरामा छरितो र किफायतसमेत हुने गर्दथ्यो। मेरो विवाह रातको लगनमा भएको थियो। त्यस बेला दिनमा विवाह गर्दा फाप्दैन भनेर रातमा नै विवाह गर्ने चलन थियो। मेरो विवाह केटाकेटी खेले जस्तो भएको थियो। मेरो विवाह विनाउत्साह र विनाआकर्षणको भएको थियो। म जग्गेमा गएपछि बेलुका नै सुतेको थिएँ। जग्गेमा माडो घुम्दा मलाई बोकेर घुमाएको म अलिअलि सम्झन्छु। बेहुलीलाई गहना झरीझुट्टै लगाइदिइएको थियो। त्यसबेला सामान्यरूपमा सुनका र चाँदीका गहनाहरू लैजाने चलन थियो। तिनमा सुनको फूल, नौगेडी, तिलहरी, चुरा, फूली, बुलाकी र चाँदीका कल्लीहरूसमेत पर्दथे। ती गहनाहरूमध्ये धेरै जसो श्रीयदुनाथ भट्टराईका घरबाट मागेर लगिएको थियो। बेहुला र बेहुलीलाई विधिविधान अनुसार घरमा भित्र्याउने काम भएको थियो। दिदीबहिनीहरूले आरतीस्याउली गर्ने, ढोका छेक्ने, सासूबुहारीको चुल्ठो जोड्ने, मानुपाथी भर्ने, बेहुला र बेहुलीले चूल्हामा सुत्ने, बेहुलीभत्तेर खुवाउने, दुरान फर्काउने र सोह्र दिने साइत गर्ने आदि सबै कुरा भएका थिए।

सामान्यरूपमा बाल्यकाल, छात्रजीवन र त्यस पछि विवाह गरेर गृहस्थजीवनमा प्रवेश गर्नु पर्नेमा मेरो सो अनुसारको क्रम हुन सकेको थिएन। बाल्यकाल, छात्रजीवन र वैवाहिक जीवनको सीमा रहेको थिएन। तीनैथरी अवस्था सीमारहित भएका थिए। अरू विवाह गरेर बाँधिन्छन् तर म विवाह गरेर फुक्का भएको थिएँ। अरू बाहिर गएर पढेर घर फर्किएपछि विवाह गर्दछन् भने म चाहिँ विवाह गरेपछि पढ्न हिँडेको थिएँ। अरू विवाह गरेपछि पढाइमा बाधा पर्छ भन्छन् तर मैले भने नवविवाहिता श्रीमतीलाई मैले गर्नुपर्ने घरको काम जिम्मा लगाएर म पढ्न हिँडेको थिएँ। विवाह गरेर पढ्न हिँड्नु, पढ्दापढ्दै जागिर खानु, जागिर खाएर पनि एक दशकभन्दा बढी समयसम्म पढिरहनु आदि कार्यहरूले मेरो जीवन कति असहजरूपमा अगाडि बढिरहेको थियो भन्ने कुराको सङ्केत दिन्छ। त्यसरी मेरा जीवनका विभिन्न अवस्थाहरू एक अर्कासँग खप्टिन पुगेका थिए। मभन्दा मुनि भाइ र बहिनीहरू पनि थिए। एउटा भाइको ठूलै भएपछि मृत्यु भएको थियो।


लेखक श्रीमती इन्दिरा भट्टराईका साथ २०२३ साल

माहिली बहिनी सीता (सोमा) को जन्म १९९८ साल जेठ ७ गते भएको थियो। उनको विवाह चार्खुका श्रीमायानाथ पोखरेलका छोरा श्रीकेशवराज पोखरेलसँग २००७ साल फागुन २६ गते भएको थियो। त्यसैवर्ष दाजुले १७ वर्षकै उमेरमा श्रीमद्भागवतमहापुराणको वाचन गर्नुभएको थियो। पुराणको साङ्गेका दिन बहिनीको विवाह भएको थियो। दुर्भाग्यवश केही वर्ष अघि ज्वाईंको मृत्यु भइसकेको छ। तीन भाइ छोराहरू र चार बहिनी छोरीहरूकी आमा विधवा बहिनी सीता हाल


ज्वाइँ श्रीकेशवराज पोखरेल र माहिली बहिनी सीता पोखरेल

उदयपुरको असारी भन्ने ठाउँमा आफ्नू शेषजीवन बिताइरहेकी छिन् ।

कान्छी बहिनी तारा(तेजा)को जन्म २००६ साल जेठ २७ गते भएको थियो । उनको विवाह २०१७ साल वैशाख ६ गते खोटाङ जिल्ला मजुवाका श्रीनारायणप्रसाद पोखरेलसँग भएको थियो । उनका दुई भाइ छोराहरू र तीन बहिनी छोरीहरू छन् । उनी हाल आफ्ना पतिका साथ सुनसरी जिल्ला अन्तर्गत इनरुवाको बलाहामा बस्तछिन् ।


ज्वाई श्रीनारायण पोखरेल र कान्छी बहिनी तारा

पिताजी १४ वर्षकै उमेरमा टुहुरो हुनु भएको रहेछ । आफूभन्दा मुनिका अरू दुई भाइ र तीन बहिनीहरूको समेत पालनपोषण, शिक्षादीक्षा, व्रतबन्ध र विवाहसमेत सबै विधिव्यवहार गर्नु पर्ने ठूलो दायित्व पिताजीका काँधमा त्यस बेला आएको रहेछ । विधवा आमा वेदमाया र विधवा फुपू बालकुमारीसमेतलाई पाल्नु पर्ने दायित्व पनि पिताजीकै जिम्मामा आइपरेको रहेछ । त्यसका अतिरिक्त आफ्नो विवाह पनि आफैँले गर्नु पर्ने परिस्थिति उत्पन्न भएको भए तापनि सबै व्यवहार पिताजीले अत्यन्त धैर्य र सुझबुझका साथ सम्पन्न गर्नुभएछ ।


कान्छी काकी सरस्वती भट्टराई, २०५९ मा स्वर्गारोहण

घरको अत्यन्त कमजोर आर्थिक अवस्था र आम्दानीको कुनै स्रोत नभए तापनि मेरा पिताजीले सबै व्यवहार धान्नु भएकोरहेछ । त्यही कमजोरीको मौका छोपेर जैसीटोले भट्टराई बन्धुहरूले हाम्रो जग्गाजमीन अतिक्रमण गरेछन् । पिताजी टुहुरो भएको र उहाँको सहारा कोही पनि नभएकाले दाजुभाइहरूले गरेको अन्यायको प्रतिकार नगरी सहन उहाँ बाध्य हुनुभएछ । दैव र मानिसले समेत गरेको अन्याय र थिचोमिचोलाई सहँदै अत्यन्त धैर्यकासाथ मेरा पिताजीले आफ्नू घरव्यवहारलाई अगाडि बढाउनु भएछ । त्यसपछि बहिनीहरूको विवाह, भाइहरूको व्रतबन्ध र विवाहसमेत क्रमैले गरिदिनु भएछ । संवत् १९९४ सालमा कान्छा काकाको मृत्यु भएछ । पिताजीका भरपर्दा सहयोगी भाइ अकालमा नै जानुभएको हुँदा पिताजीलाई ठूलो पीर पर्न गएछ । कान्छी काकी त्यस बेला भर्खर १६

वर्षकी हुनुहुन्थ्यो अरे । बालविधवा भाइबुहारीको उत्तरदायित्त्व पनि पिताजीमाथि नै थपिन गएछ । विधवा आमा, फुपू र भाइबुहारीलाई समेत सम्हाल्दै पिताजीले आफ्नू गृहस्थी अत्यन्त धैर्य र साहसका साथ अगाडि बढाउँदै जानु भएछ । कान्छी काकी श्रीमती सरस्वती भट्टराईले विधवा भएपछि जीवनभर हाम्रै घरमा बसेर बिताउनु भएको थियो । उहाँको मृत्यु गत २०५९ साल जेठ २१ गतेका दिन ८५ वर्षको उमेरमा सुनसरी जिल्लाको इनरुवाको घरमा भएको थियो ।

मेरा कान्छा भाइ गणेश २०१० सालमा हैजा लागेर ६ वर्षको उमेरमा नै खसेका थिए । मातापिताबाट ६ भाइ छोराहरू र ४ बहिनी छोरीहरू जन्मिएका थिए । तीमध्ये हामी २ भाइ छोराहरू र ३ बहिनी छोरीहरूमात्र हाल जीवितरहेका छौँ । त्यसरी सन्तान जन्माउँदा, तिनको पालनपोषण गर्दा र मृत्यु भएकाहरूको शोक मनाउँदामनाउँदै र काजक्रिया गर्दागर्दै आमाको शरीर जीर्णशीर्ण भइसकेको थियो । छोराछोरीहरूको पालनपोषण, शिक्षादीक्षा, व्रतबन्ध र विवाह आदि विधिव्यवहार गर्दागर्दै पिताजीका दिनहरू पनि समाप्त हुँदै गएकाथिए । सन्तानका लागि नै सधैँ सङ्घर्ष गरिरहनुपर्ने मातापिताको नियति भएकोथियो । अत्यन्त स्वाभिमानी, कर्मठ र अन्यायमा कसैसँग पनि नझुक्ने पिताजीको स्वभाव भएको हुँदा उहाँले सधैँ सङ्घर्ष गरेर बाँच्नुपरेको थियो । मेरो चेतना आएदेखि र मैले सम्झन थालेदेखि मैले बुझेको पिताजीको व्यक्तित्व त्यस्तै नै थियो ।

त्यसरी म सानो छँदा पिताजीसँग बोल्न सक्तिनथेँ । उहाँको आज्ञा नै मेरा लागि आदेश हुन्थ्यो । पिताजी कसैसँग पनि डराएको र हार मानेको मैले कहिल्यै पनि देखेको थिइन । पिताजी काम पर्दा जस्तोसुकै ठाउँमा पनि रातदिन एक्लै हिंड्न डराउनु हुन्नथ्यो । भूत, प्रेत, पिशाच, जङ्गली जनावर र मान्छे कोहीसँग पनि नडराउने उहाँको स्वभाव थियो । व्यावहारिक शोचाइ राख्नुहुन्थ्यो र आँटेको काम गरेरै छोड्नुहुन्थ्यो । उहाँको आहारविहार अत्यन्त सन्तुलित थियो । बेलुका चाँडै सुत्नुहुन्थ्यो र बिहान सबेरै उठ्नु हुन्थ्यो । बिहानको नित्यकर्म समाप्त गरेर बिहान आफूले गर्नु पर्ने घरव्यवहारको बाहिरी काम सबै सकेर पिताजी घर फर्कंदा पनि धेरैजसो म सुतिरहेकै हुन्थेँ । बाल्यकालमा बिहानको निद्रा अत्यन्त मीठो हुनेहुँदा म सबेरै उठ्नै सक्तिनथेँ ।

पिताजीले ए कुम्भे ! उठ् ! कति सुतेको ? भनेर भनेपछिमात्र म उठ्तथेँ । हामी दुई दाजुभाइहरूमध्ये दाजुलाई अलि बढी पुलपुल्याएर बाआमाले हुर्काउनु भएको थियो । त्यसको कारण दाजुभन्दा पहिलेका दुई भाइ छोराहरू जन्मदै मर्दै गरेपछि दाजुको जन्म भएको हुँदा मातापिताको दाजुमाथि विशेष स्नेह रहनु स्वाभाविकै थियो । त्यसै कारण दाजुलाई पिताजीको त्यति ठूलो दबाब पर्दैनथ्यो । दाजुलाई नानी भनेर बोलाउने गरिन्थ्यो र उहाँलाई लाउने लुगा र खाने कुरामा समेत विशेष ध्यान दिइन्थ्यो । म सानैदेखि सबै कुरामा सन्तोषी भएको हुनाले ममा कुनै कुराको आग्रह र चाहनासमेत हुँदैनथ्यो । जीवनमा पहिलोपल्ट मैले मेरो विवाहको समयमा खोटाङका सार्कीले सिएको जुत्ता लगाएको थिएँ । काँचो र अररो छालाको जुत्ता भएकोहुँदा खुट्टामा घाउ बनाइदिएकाले त्यो पनि नलगाएर मैले फ्याँकिदिएको थिएँ ।

२००७ सालको जनक्रान्ति पछि नेपालमा राणाशासन समाप्त भएर प्रजातन्त्र आएको थियो । हाम्रातिर क्रान्तिको हल्ला २००६ सालमा मेरो विवाहको बेलामा पनि चलिरहेको थियो । क्रान्तिको लहर बिस्तारै जिल्ला र गाउँहुँदै हाम्रा घरहरूमा पनि आइपुगेको थियो । क्रान्तिको समयमा हाम्रो गाउँ नै क्रान्तिकारीहरू आउने, जानेर थर्पु हालेर बस्ने केन्द्रसमेत भएको थियो । हतियारधारी हजारौँ हजारको हूल ओखल्ढुङ्गामा राणाका फौजसँग लडाइँ गर्न स्थानीय क्रान्तिकारी किराँती, मगर, तामाङसमेतको फौज गाउँ नै थर्काउँदै ओहोरदोहोर गरिरहन्थ्यो । कहिले ओखल्ढुङ्गामा गएर राणाको फौजलाई सखाप पारेर फर्कन्थ्यो भने कहिले राणाको फौजबाट मार खाएर फर्कन्थ्यो । जितेर फर्कंदा पनि मदमत्त भएर गाउँलेलाई तिनीहरूले दुःख दिन्थे भने हारेर फर्केका बेलामा त तिनीहरूले झन् गाउँका खसी, बाख्रा, राँगा, भैँसी जे भेटे पनि काटेर खाइदिन्थे । त्यतिमात्रै होइन गाउँ नै लूटेर सखाप पार्दथे ।

एकपटक त्यसै क्रान्तिका समयमा २००७ साल मङ्सिर महिनामा गाउँको ठूलो आहालमा बाहिरबाट काङ्ग्रेसका ठूला नेताहरू आएका छन् , घरलौरी जम्मा हुनुपर्छ भनेर उर्दी भएको थियो । रातको बेलामा पिताजी हाजिर हुन ठूलो आहालमा जानुभएको थियो । माहिला काकासहित हामी केटाकेटीहरूभने आफ्नो जो भएको श्रीसम्पत्ति, खसी र बाख्रासमेत लिएर घर मुनिको खोल्सामा लुक्न गएका थियौँ । त्यतिमात्रै होइन त्यसपछि भोजपुर

जिल्ला अन्तर्गत दिङ्ला गाउँका त्यस बेलाका क्रान्तिकारी नेता श्रीमुक्तिनाथ चापागाईं आफ्नू ससुराली रावाकुभिण्डे गाउँमा आएर अड्डा जमाएर बसेका थिए । त्यहीँबाट वरिपरि सबै गाउँका ब्राह्मण, क्षेत्री, नेवार आदि सबै जातजातिका लडाइँ लड्नसक्ने पुरुषहरू घरको एक जनाका दरले अनिवार्यरूपमा ओखल्ढुङ्गा हान्न जाने भनेर उर्दी गरेका थिए । हाम्रा गाउँमा पनि उर्दी लगाउँदै काङ्ग्रेसका क्रान्तिकारीहरू आएका थिए । नगएर सुखै थिएन । उक्त लडाइँमा सामेल हुन मेरा पिताजी र माहिला काकासमेत सातुसामलको पोको पारेर घरमा भएका घरेलु हातहतियारहरू तरबार र खुकुरी भिरेर जहानपरिवारसँग सधैँका लागि बिदा भएर दूधकोशीका तीरमा अवस्थित रभुवातर्फ झर्नुभएको थियो । हामी केटाकेटी र महिलाहरूमात्रै घरमा थियौँ । गाउँभरि सबैतिर रुवाबासी र हाहाकार मच्चिएको थियो । वरिपरि सबै गाउँका बूढापाकाहरू रभुवामा झरेर सामेल हुनु भएको थियो । सो हुल लडाइँका लागि रभुवाबाट ओखल्ढुङ्गातर्फ प्रस्थान गर्न लागेका बेलामा पूर्वतर्फबाट श्रीरामप्रसाद राईको नेतृत्वमा क्रान्तिकारीहरूको एउटा ठूलो फौज हातहतियारसहित ओखल्ढुङ्गा हान्न जाने क्रममा हाम्रो गाउँ रावालामीडाँडामा आएर रातमा बसेको थियो । नेता श्रीरामप्रसाद राईले ब्राह्मण र क्षत्री लगायतका जातहरूलाई लडाइँमा जानबाट रोक लगाएर रभुवाबाटै आ–आफ्ना घर फर्कन आदेश दिएका थिए । उनको जय मनाउँदै पिताजीहरू घर फर्किनु भएको थियो । त्यसपछि पनि लडाइँको क्रम चलेको नै थियो । २००७ साल माघ १ गते ओखल्ढुङ्गामा ठूलो लडाइँ भएको थियो । हामीहरूले दमारडाँडामा गएर ओखल्ढुङ्गामा पड्केका तोप र बन्दुकहरूको आवाज सुनेका थियौँ । त्यस लडाइँमा पूर्वतिरबाट धेरै लडाकुहरू गएका थिए ।

अब फेरि एकपटक पछाडि फर्केर हेरौँ । एकपटकको कुरा हो । म ५ वर्षको फुच्चेमात्रै थिएँ । त्यस बेला दिदी र दाजुसँग म पनि गाईबाख्रा चराउन जुकेखोलाको पाखामा गएको थिएँ । हाम्रो घरमा राघे भन्ने एउटा असाध्य असल गोरु थियो । चर्दै जाँदा त्यो गोरु भीरबाट लडेर जुके खोलामा झरेर उठ्नै नसक्ने गरी पसारिएको थियो । हामीहरू दौडेर अत्तालिँदै खबर गर्न घर गएका थियौँ । त्यस बेला आमा सुत्केरी भएर सुत्नुभएको थियो । सानो भाइ जन्मेको थियो । गोरु लडेको खबर गर्न घर जाँदा आमाले दिउँसोको ज्वानु

र भात खान लाग्नुभएको रहेछ । ज्वानु र भात मलाई पनि आमाले दिनुभएको थियो । मलाई त्यो ज्वानुको रस र भात असाध्य नै मीठो लागेको थियो । अहिलेसम्म पनि मेरा स्मृतिमा त्यसको स्वाद ताजै भएर रहेको छ । गाउँका मानिसहरूलाई लिएर राघे गोरुलाई बोकेर घर ल्याउन पिताजी गोरु लडेको ठाउँ जुकेखोलामा जानुभएको थियो । गोरुको ढाडै भाँचिएकोरहेछ । त्यसकारण घर ल्याउन सकिएको थिएन । अर्को दिन हामीहरू त्यसलाई हेर्न जुकेखोलामा गएका थियौँ । राघे गोरुले हामीहरूतिर हेरेर आँखाभरि आँशु पारेर रोएको थियो । केही दिनपछि हामीहरूसँग सधैँको लागि बिदा भएर राघेगोरु परमधाम गएको थियो । मेरो अत्यन्त अबोध बाल्यकालको कलिलो मस्तिष्कमा परेको त्यो कारुणिक घटनाको छाप अहिलेसम्म पनि ताजै छ ।

उपर्युक्त प्रकारका मेरा बाल्यजीवनमा मैले अनुभव गरेका धेरै घटनाहरू छन् , तिनको उल्लेख गरेर यहाँ साध्य छैन । एक दिनको कुरा हो दाजु, तल्लाघरका दुर्गा, विष्णु, श्याम र म समेत भएर सधैँझैँ गाईबाख्रा चराउन घर नजिकै चिउरीबोटको पाखामा हामीहरू गएका थियौँ । त्यस दिन श्रीयदुनाथ भट्टराईको चिउरी टिप्ने कार्यक्रम थियो । त्यसैकारणले हामीहरू त्यही चिउरीको बोट वरिपरि गाईबाख्रा चराउँदै चिउरी टिपेको रमिता हेर्न लागेका थियौँ । चिउरी टिप्ता हामी केटाकेटीहरूलाई उत्सव आए जस्तो हुन्थ्यो । गाउँका बूढापाका र युवाहरूसमेत सबै नै चिउरी टिप्न जम्मा हुन्थे । हल्लाखल्ला, गफगाफ र भेटघाट हुन्थ्यो । हाटबजार लागेजस्तो रमाइलो हुन्थ्यो । रुख चढ्न सक्ने मानिसहरू रुखमा चढेर चिउरी टिप्थे । नसक्नेहरू तल भुइँमा बसेर चिउरी बटुल्थे । पाकेका चिउरी भेटेभने चुस्तै पनि जान्थे । चिउरीको विशाल वृक्ष थियो । प्रशस्त चिउरी फल्दथे । चिउरीको फल हामीहरू खान्थ्यौँ र भित्रको बियाँबाट तेल पनि निकाल्थ्यौँ । त्यसबेला गाउँमा बत्ती बाल्ने मट्टीतेल र अरू तेलकोसमेत अभाव भएको हुँदा धनीगरीब सबैले जतिसक्यो धेरै चिउरी टिपेर त्यसको बियाँ पेलेर बत्ती बाल्ने काम पनि गरिन्थ्यो । गरीबहरूले त्यसैलाई भुटुन हाल्ने र रोटी पकाएर खाने पनि गर्दथे । त्यसैकारण चिउरी टिप्न भर्सक भ्याएसम्म गाउँका सबै मान्छे जम्मा हुन्थे ।

चिउरी टिप्न पिताजी र काकासमेत चिउरीको रुखमा चढ्नुभएको

थियो । हामी भुराहरू तल भुइँमा बसेर चकचक गरिरहेका थियौँ र ढुङ्गा हानाहान गरेर खेलिरहेका थियौँ । त्यस्तैमा दाजुले हानेको ढुङ्गो मेरो दाहिने आँखामा लागेर रगत फुटेको थियो । म आँखो फुट्यो भनेर चिच्याएर रोएको थिएँ । हल्लाखल्ला मच्चिएको थियो । पिताजी हस्याङफस्याङ गर्दै रुखबाट भुइँमा झर्नु भएकोथियो । मेरो आँखा मुनिबाट रगत बगिरहेको देखेर रिसाउँदै पिताजीले लट्ठी लिएर दाजुलाई छोप्नुभएको थियो । दाजु डरले भागेर घर गएर आमैको शरण पर्नुभएछ । पिताजीका साथमा म पनि टोपीले घाउबाट चुहेकोरगत रोक्तै घर फर्किएको थिएँ । रगत चुहिरहेको थियो । घरमा पुगेर राम्ररी हेर्दा आँखामा ढुङ्गो नलागेर आँखै मुनि लागेकोरहेछ । भाग्यले आँखो जोगिएको थियो । त्यसबेला घरमा रगत थाम्ने अरू कुनै औषधी नभएको हुँदा गाउँघरको चलन अनुसार झुम्रो पोलेर रगत चुहिरहेको घाउमा लगाएपछि रगत थामिएको थियो । मेरो नाकको दाहिने पाटामा अझै पनि गहिरो खत छँदैछ । आफ्नू शरीरको नमेटिने चिन्ह कहीं उल्लेख गर्नुपर्दा त्यही नाकको दाहिनेपट्टि भएको गहिरो खतलाई नै मैले दिने गरेकोछु ।

त्यसरी नानाथरीका उपद्रोहरू गर्दै हामीहरू केटाकेटी अवस्थामा गाईबाख्राहरू चराउने गर्दथ्यौँ । दिनभरि खोला र चउरमा लगेर गाईबाख्रा छेकेर राख्दथ्यौँ । हामी दुई दाजुभाइ साथीहरूका साथमा नानाथरीका खेलहरू खेलेर दिन बिताउने गर्दथ्यौँ । हामीहरू गाईबाख्रा लिएर वनमा चराउन जाँदा कहिलेकाहीँ घर मुनिको खोल्सामा लगेर थुन्दथ्यौँ र खेल्दथ्यौँ । ढुङ्गाका ससाना टुक्राहरूलाई कुँदेर काली अँगेरीको रङ्गले रङ्गाएर पैसा बनाउँदथ्यौँ र रुखका पहेँला, हरिया, राता नानाथरीका पातहरू बटुलेर सामानका रूपमा किनबेच गरेर खेल्दथ्यौँ । कहिले जुकेखोलाको दहमा हामफाल्ने, कहिले बाँस नुहाएर पिङ खेल्ने, कहिले अग्लाअग्ला रुखहरूमा चढेर हल्लाउने, कहिले बरका बोटमा पलाएका लामालामा जराहरूमा झुण्डिएर पिङ खेल्ने र कहिलेकाहीँ ढुङ्गाको छेलो हानेर पनि हामीहरू उट्पटचाङका खेलहरू खेल्ने गर्दथ्यौँ । एकपटक चौकेबारी मुनिको जङ्गलमा र सिमलबोट वरिपरिको पाखामा गाईब्राख्रा चराउन लाने क्रममा नेवारगाउँ मुनिको बरपीपलका चौरमा गाईबाख्राहरू थुनेर बरका लामालामा जराहरूमा झुण्डिएर हामीहरूले पिङ खेल्नथालेका थियौँ । त्यसरी बरका जरामा

झुण्डिएर पिङ मच्चाउँदा अर्कातिरबाट बरको जरामा झुण्डिएर पिङ मच्चाइरहेका मेरा बालसखा श्रीविष्णु भट्टराईले अज्ञानवश मेरो नाकमा खुट्टाले हिर्काउन पुगेका थिए। त्यसबाट मेरो नाकको नाथ्री फुटेर धेरै बेरसम्म रगत बगेको थियो। त्यसपछि मैले कहिल्यै पनि बरको जरामा झुण्डिएर पिङ खेलेको थिइन।

त्यसरी खेल्ने साथीहरूमा तल्लाघरे श्रीयदुनाथ भट्टराईका छोरा दुर्गा, विष्णु, श्यामका साथै नेवारगाउँका श्रीअमृतबहादुर श्रेष्ठसमेत थिए। हामीहरू कहिलेकहीँ आफ्नै पराल राखेको माचमा र तल्लाघर श्रीयदुनाथ भट्टराईका माचमा समेत चढेर परालको कुरी बनाएर खेल्दथ्यौँ र उपद्रो मच्चाउँदथ्यौँ। त्यसो गर्दा हामीहरू गाली पनि खान्थ्यौँ। त्यसैगरी साउन भदौ महिनामा श्रीयदुनाथ भट्टराईका कोठेबारीमा बडहर पाक्तथ्यो। हामीहरू तँछाडमछाड गरेर बडहरका रुखमा चढेर बडहरको फल टिपेर खान्थ्यौँ। मलाई त्यस बेला बडहरको फल अत्यन्त नै मीठो लाग्दथ्यो। अनि फागुन चैत्रको बेलामा उनकै बारीका कोइरालाका बोटहरू लटरम्मै फुल्दथे। त्यस बेला तिहुनतरकारीको असाध्य अभाव हुनेहुँदा तिहुन र अचारसमेत खान कोइरालाको फूल टिपेर हामीहरू घर लैजान्थ्यौँ। कहिलेकहीँ कोइरालाको फूल टिप्न पिताजी र काकासमेत जानुहुन्थ्यो। कोइरालाको फूल टिपेपछि आधाभाग बोटधनीलाई दिनुपर्ने चलन थियो।

गाईवस्तु चराउन लैजाँदा कहिलेकहीँ म पुराना साथीहरूसँग गाईवस्तु चराउन नलगेर घुमाउने चउरका वृद्ध व्यक्ति श्रीविष्णुप्रसाद भट्टराईका साथ घरदेखि धेरै टाढा नकटीवन, बिरसेगहिरो र सानीटारतिर पनि लैजानेगर्दथेँ। मलाई त्यस बेला कृष्णभक्तिको धुन चढेको थियो। म आफ्ना साथमा सधैँ मुरली लिएर हिँड्दथेँ र वनमा भगवान् श्रीकृष्णले जस्तै रुखमा चढेर मुरली बजाउनेगर्दथेँ। मलाई त्यसबाट असाध्य आनन्द आउँथ्यो। दिनभरि वनमा गाईवस्तु चराएर साँझमा घर फर्काएर ल्याउँदा बाटैमा पर्ने उत्तरेपानीमा गाईवस्तुलाई पानी खुवाइन्थ्यो र दिनभरिको तिर्खा मेट्न आफू पनि पानी खाइन्थ्यो। त्यहाँको पानी अत्यन्त मीठो थियो। त्यसै गरी कहिलेकहीँ गाउँका वयोवृद्ध तथा अत्यन्त रमाइला व्यक्ति श्रीदेवमित्र तिमल्सिनाका गाईवस्तुहरूका साथ आफ्ना गाईवस्तुहरू चराउन

भञ्ज्याङको सार्कीगाउँको बाटो हुँदै लङ्गुरखोलाका पाखामा पनि म लैजाने गर्दथैं । श्रीदेवमित्र तिमल्सिना टाढाको साइनुले ठूला बा पर्नुहुन्थ्यो र मलाई पढाउने गुरु श्रीमहाप्रसाद तिमल्सिनाका उहाँ पिता हुनुहुन्थ्यो । उहाँसँग गाई चराउन जान, सँगै हिंड्न र बातचित गर्न मलाई अत्यन्त रमाइलो लाग्दथ्यो । उहाँ आँखामा हाले पनि नबिझ्झाउने खालका असल र असाध्य रसिक व्यक्ति हुनुहुन्थ्यो । त्यसैकारणले होला उहाँले धेरैओटी श्रीमतीहरू विवाह गर्नुभएको थियो ।

यसरी गाईवस्तु चराउने कुराको चर्चा गर्दा आमाले बाख्रा चराउने गरेको प्रसङ्गको पनि अहिले मलाई सम्झना आयो । शुरुशुरुमा हामीहरू गाईवस्तु लिएर टाढाटाढाका वनहरूमा चराउन जानेगर्दथ्यौं । तर पछि गएर हामीहरूले गाईहरूका साथमा बाख्रा चराउन वनमा लैजान छोडेका थियौं । भैंसी चराउनभने नयाँ आहालको पाखामा बूढी आमै अथवा फुर्सद भएका बेलामा पिताजीले पनि लैजाने गर्नुहुन्थ्यो । बाख्रा चराउनभने धेरैजसो आमाले नै लङ्गुर खोलाको भीरालो पाखोतिर लैजानुहुन्थ्यो । एकातिर आमाको स्वास्थ्य असाध्य कमजोर थियोभने अर्कातिर चञ्चल बाख्राहरूलाई भीरमा चराउन लैजाँदा आमालाई अत्यन्त दुःख हुन्थ्यो । त्यो सबै व्यवहारको बाध्यता थियो । आमाले नसक्तानसक्तै पनि बाख्रा हेर्ने काम पछिसम्म पनि गरिहनुभएको थियो । आमाकै सम्झनाको क्रममा अर्को कुरा पनि यहाँ उल्लेख गर्नु प्रासङ्गिक ठान्दछु ।

म बाल्यकालदेखि नै अग्लाअग्ला रुखहरूमा चढेर घाँस झार्न, बाँस नुहाउन र अप्ठेरा भीरपाखाहरूमा गएर घाँस काट्न डराउँदिनथैं । हाम्रो बारीको कान्लामा माहिला काका र हाम्रो साझारूपमा रहेको एउटा सारै अग्लो विशाल बडहरको रुख थियो । त्यसको घाँस झार्न माहिला काका र म बाहेक अरू कसैले पनि सक्तैनथ्यो । त्यसैगरी हाम्रा बारीमा ठूला र अग्ला पट्मिरा र खनिउका रुखहरू पनि थिए । ती रुखहरूमा जोपायो उही चढ्न सक्तैनथ्यो । म भने ती सबै रुखहरूका टुप्पासम्म पुगेर घाँस झार्ने गर्दथैं । ती रुखहरू घरको जस्केलाबाटै देखिन्थे । म रुखमा चढेपछि आमा जस्केलामा बसेर हेरिरहनु हुन्थ्यो र केही भइहाल्छ कि भन्ने डरले ए मूल्याहा ! रुखबाट चाँडो झर् भनेर अत्यन्त स्नेहका साथ कराइरहनुहुन्थ्यो ।

त्यति गर्दा पनि रुखबाट तल भूमिमा नझरेमा म चढेको रुखै मुनि गएर रुखबाट तल नझरुञ्जेल सत्याग्रह नै गरेर बस्नुहुन्थ्यो । त्यो कुरा सम्झँदा अहिले पनि मेरो हृदय भरिएर आउँछ । घाँस काट्ने कुरा गर्दा मलाई कहिले लेक, कहिले बेसी र कहिले टाढाका वनजङ्गलहरूमा घाँस काट्न गएको सम्झना पनि आउँछ । हामी समयअनुसार कहिले बेसीतिर झरेर र कहिले लेकतिर चढेर घाँस ल्याउँथ्यौं ।

कार्तिक महिनामा दिदीले माहिला काकाका बारीको अमलाका बोटमुनि सधैँजसो वनभोजको आयोजना गर्नुहुन्थ्यो । हामी सबै केटाकेटीहरू दिदीको वनभोजमा सामेल हुने गर्दथ्यौं । हामीहरूलाई अत्यन्त रमाइलो हुन्थ्यो । त्यसैगरी पिताजीहरूबाट वनमा आयोजना गरिने सनसारी पूजामा पनि हामीहरू अत्यन्त रमाइलोका साथ भेला हुन्थ्यौं । त्यसरी हामीहरू गाउँमा बेलामौकामा आयोजना गरिने विभिन्न उत्सवहरूमा राम्रा नयाँ लुगाहरू लगाएर सामेल हुने गर्दथ्यौं ।

कहिलेकाहीँ चाडबाड र उत्सवहरूका समयमा माथिल्लो गाउँको ठूलो आहालमा पनि हामीहरू जम्मा हुने गर्दथ्यौं । त्यहाँ गाउँका बूढापाकाहरू अत्यन्त रमाइला र ज्ञानप्रद कुराहरू गरेर बसेका हामीहरू देख्तथ्यौं । त्यसरी अत्यन्त मित्रता र स्नेहका साथ बातचित गरी ठट्टासमेत गरेर रमाइलो गर्नेहरूमा श्रीदेवमित्र तिमल्सिना, श्रीहीरालाल ढुङ्गेल, श्रीतिलु खत्री, श्रीगडुलध्वज पराजुली, श्रीकालु खत्री, हबलदार श्रीविष्णुकान्त भट्टराई, श्रीमुक्तिनाथ भट्टराई, पं. श्रीदेवीप्रसाद भट्टराई, श्रीचेतनाथ भट्टराई, सुबेदार श्रीकालिदास भट्टराई र मेरा पिताजीसमेत हुनुहुन्थ्यो । एकातर्फ त्यही आहालको चउरमा बाहिरबाट आउने ठूलाबढा व्यक्तिहरूको स्वागत सत्कार गरिन्थ्यो भने अर्कोतर्फ गाउँमा आइपर्ने समस्याहरूको छिनोफानो गर्न पञ्चायतसमेत त्यसै आहालको चउरमा बस्ने चलन थियो । प्रायः न्यायनिसाफ गर्दा आफूले हेपेका र निमुखाहरूलाई दण्डजरिबाना र समाजबाट हटक गर्नेसमेत गरिन्थ्यो । कहिलेकाहीँ गाउँका शोषकहरूले मौकाको फाइदा उठाएर गरीबहरूको शोषणसमेत गर्दथे ।

त्यसरी मैले आफ्नू सीमित परिवेशमा विभिन्न कुराहरूको अनुभव गर्दागर्दै माथि उल्लेख गरे अनुसार ११ बर्षको उमेरमा नै मेरो विवाह भएको

थियो । अबोध अवस्थामा नै म संसारको दलदलमा भासिन पुगेको थिएँ । जीवनको प्रथमकालमा सम्पादन गर्नुपर्ने आवश्यक आधारभूत कुराहरू पूरा नहुँदै अनजानमा नै मेरा शैशव र बाल्यावस्थाहरू समाप्त भएका थिए । **'प्रथमे नार्जिता विद्या द्वितीये नार्जितं धनम् । तृतीये नार्जितं धर्मं चतुर्थे किं करिष्यति'** भन्ने नीतिवाक्य मेरो सामुन्ने प्रश्नवाचक चिन्ह भएर त्यसबेला उभिएको थियो । उक्त नीतिवाक्य अनुसार प्रथम अवस्थामा मैले प्राप्त गर्नुपर्ने उचित शिक्षादीक्षा त्यसबेलाको सामाजिक र घरको अवस्थाले गर्दासमेत प्राप्त गर्न सकेको थिइन । त्यसरी मेरो बाल्यजीवन, छात्रजीवन र वैवाहिकजीवनहरू छुट्याउनै नसकिने भएर एकअर्कामा मिसिएका छन् । बाल्यकालमा मैले ब्राह्मणोचित षोडश संस्कार, वेदाध्ययन, गुरुकुलको शिक्षा र सनातनी ब्राह्मणका छोराहरूले प्राप्त गर्नु पर्ने अरू सबै संस्कारहरू प्राप्त गर्न सकेको भए सायद मेरो जीवन पूर्ण निवृत्ति मार्गतर्फ उन्मुख हुने थियो कि ! अब ती दिनहरू गइसके । पश्चात्ताप गरेर केही हुन सक्तैन । अब त केवल मैले मेरो बाँकीरहेको शेष जीवनलाई सन्मार्गतर्फ लगाएर सदुपयोग गर्नु बाहेक अरू कुनै उपाय छैन ।





# छात्रजीवन

सानू उमेरदेखि नै म पढ्न चाहन्थेँ, तर शैशवकाल बितिसकेपछिमात्रै औपचारिकरूपमा पढ्न थालेको कुरा बाल्यजीवनको प्रसङ्गमा मैले उल्लेख गरिसकेकै छु। विकट तथा दुर्गम तत्कालीन ओखलढुङ्गा र हालको खोटाङजस्तो पहाडी जिल्लाको रावालामिडाँडामा सामान्य ब्राह्मणपरिवारमा जन्मिएको मजस्तो सामान्य मान्छेले उच्चशिक्षा हासिल गर्ने कल्पना पनि त्यसबेला मैले गरेको थिइन। त्यसका साथै सरकारी सेवामा प्रवेश गरेर सरकारको विशिष्ट श्रेणीको सचिवजस्तो गरिमामय पदमा पुगौँला भन्ने कुरा त झन् मैले शोचेकोसम्म पनि थिइन। घरको दुर्बल आर्थिक अवस्था र आफ्नै बन्धुहरूबाट शोषित अनि उत्पीडित भएर बितिरहेको पिताजीको गार्हस्थ्यजीवन थियो। पौरोहित्यवृत्ति, खेतीपाती र आसामीसमेतबाट प्राप्त निम्न आयले धान्नु परिरहेको अपेक्षाकृत ठूलो परिवारको बोझले पिताजीलाई अहोरात्र दुःख दिनेगरेको मैले शिशु अवस्थादेखि नै देखेको थिएँ। हामी दुई दाजुभाइ र तीन दिदीबहिनी गरी जीवित अवस्थामा जम्मा ५ जना थियौँ। यस बारेमा मैले बाल्यजीवनको प्रसङ्गमा उल्लेख गरिसकेको छु।

हाम्रो घरै मुनि करेसामा अनवरत बगिरहने हिमनदी दूधकोशी बगेझैँ विभिन्न आरोह र अवरोह पार गर्दै हाम्रो गृहस्थजीवन चलिरहेको थियो। व्यवहारमा पिताजीलाई सघाउन मैले थालिसकेको थिएँ। दाजु पढ्न काठमाडौँ जानुभएको हुँदा पिताजीलाई सहयोग गर्ने घरमा मबाहेक अरू कोही पनि थिएन। घरमा भएका महिलाहरूबाट खेती र गाईवस्तुको हेरचाह गर्ने काममा सहयोग पुगे तापनि अरू दौडधूप गर्नु पर्ने काममा पिताजीलाई सहयोगको आवश्यकता थियो। म सानै भए तापनि पिताजीलाई



खोटाङ जिल्लाअन्तर्गत रावालामिडाँडामा रहेको घरको पछाडिपट्टिको भाग देखिन्छ। त्यसमा म सुत्ने तत्कालीन कोठाको आँखीझ्यालसमेत देखिन्छ। सौजन्य : छोरा सञ्जीव भट्टराई

सक्दो सहयोग पुऱ्याउँदथैं । मैले अक्षरारम्भ गरेदेखि लिएर साधारण शिक्षा घरमा नै पाएको थिएँ । बूढी आमै बालकुमारीबाट घरका सबै स्त्रीपुरुषहरूले साक्षर हुने मौका पाएका थियौं । बालकुमारी आबाल विधवा हुनुहुन्थ्यो । सात वर्षको उमेरमा नै विधवा भएर माइतीको घर धानेर उहाँले जीवन बिताउनु भएको थियो । वास्तवमा उहाँ हाम्रो वंशको सिङ्गो गुरुकुल नै हुनुहुन्थ्यो । उहाँले हाम्रो वंशलाई ठूलो गुन लगाउनु भएको छ । त्यो गुन मैले तिर्नै नपाइ हामीहरूका बीचबाट गुरुमाता बालकुमारी बिदा भएर जानुभयो । उहाँप्रति  असीम श्रद्धा दर्शाउन मैले उहाँको नाममा एउटा कविता उनको सम्झनामा लेखेर मेरो पहिलो कवितासङ्गह सिर्जनाका फूलहरू २०५२ मा प्रकाशन पनि गरिसकेको छु ।

शुरुमा मैले सामान्यरूपमा घरमा नै दाजुसँग केही संस्कृत पढ्न शुरु गरेको थिएँ तापनि लघुकौमुदी, अमरकोश र रघुवंश भने पढ्न शुरु गरेको थिइन । एक दिन बिहानको भात खाएर घरमा म बसिरहेको बेला हाम्रो घरमाथिको बाटोबाट नयाँ आहालमा पानी खुवाउन गाईवस्तु लिएर जाँदै गरेका पं. लक्ष्मीप्रसाद सुवेदीका छोरा वैजहरि सुवेदीले ‘नत्वा सरस्वतीं देवीं शुद्धां गुण्यां करोम्यहम् । पाणिनीयप्रवेशाय लघुसिद्धान्तकौमुदीम्’ भन्ने लघुकौमुदीको मङ्गलाचरणश्लोक उच्च स्वरमा भन्दै हिंडेको मैले सुनें । लौ यिनले त लघुसिद्धान्तकौमुदी पनि पढ्न थालेछन्, म चाहिं पछि परें भन्ने मैले ठानेको थिएँ । त्यसपछि मलाई लघुसिद्धान्तकौमुदी पढ्ने इच्छा जागेर आयो र मैले अर्को दिनदेखि नै दाजुसँग लघुसिद्धान्तकौमुदीका साथै अमरकोश र रघुवंश पनि पढ्न शुरु गरेको थिएँ । तर दाजु अध्ययनका लागि काठमाडौं हिंडेपछि मलाई पढाउने घरमा कोही नभएको हुँदा मैले गुरु महाप्रसाद तिमल्सिनासँग उहाँका घरमा गएर पढ्न थालेको थिएँ ।

त्यसपछि गाउँमा पाठशाला स्थापना गर्ने अभियान चलेको थियो । सो अभियानमा गाउँभरि चन्दा उठाउने र तिहारमा द्यौसी खेल्ने आदि कामहरू पनि भएका थिए । त्यसै सन्दर्भमा गडुलध्वज पराजुलीका छोरा त्यसबेला नेपाली सेनाका जमदार जीतबहादुर पराजुली (अहिलेका भूतपूर्व मेजर भीमबहादुर थापा) दशैं र तिहारका धेरैजसो बिदामा काठमाडौंबाट घर जाने गर्दथे । उनी नाच्न र हास्य अभिनयसमेत गर्न जान्दथे । त्यसैकारण

उनलाई नचाएर तिहारमा रकम सङ्कलन गर्ने काम गरिएको थियो। त्यस समयमा दाजु पनि काठमाडौँबाट घर जानु हुन्थ्यो। उक्त अभियानमा गाउँका बूढापाका, युवक, शिक्षक, विद्यार्थी र अविभावकहरूसमेतले भाग लिएका हुन्थे। दलित वर्गको पनि त्यसमा सहभागिता हुन्थ्यो। तीमध्येमा घैँटे दमाई र जबरे कामी नाच्ने र गाउँने मध्येका मुख्य व्यक्तिहरू थिए। तिहारको बेलामा द्यौसी खेल्ने काम अत्यन्त मनोरञ्जनपूर्ण र सबैका लागि आकर्षणको केन्द्रसमेत हुने गर्दथ्यो।

त्यसरी विविध कार्यक्रमहरू गरी आर्थिक सङ्कलन गरेर स्थापना गरिएको पाठशालामा मुख्यरूपमा संस्कृत नै पढ्ने र पढाउने गरिन्थ्यो। संस्कृत पढाउने गुरु श्रीमहाप्रसाद तिमल्सिना हुनुहुन्थ्यो। त्यस पाठशालामा पढ्ने समकालीन साथीहरूमा श्रीस्थिरप्रसाद सुवेदी, श्रीवैजहरि सुवेदी, श्रीखेमरञ्जन भट्टराई, श्रीभरतमणि भट्टराई, श्रीनारायणप्रसाद भट्टराई, श्रीलावण्यप्रसाद भट्टराईसमेतका बन्धुहरू थिए। मसँग पढ्नेहरूमा रघे कामीका छोरा काले कामी पनि थिए। अरूहरू पनि धेरै साथीहरू मसँगसँगै संस्कृत पढ्दथे। तिनीहरू सबैको नाम म अहिले सम्झन सक्तिन।

बीच गाउँमा अत्यन्त रमाइलो ठूला आहालका छेउको चउरमा त्यो विद्यालय भएको हुँदा प्रायः आउने जाने व्यक्तिहरूको जमघट भइरहन्थ्यो। तीमध्येमा मलाई सम्झना भएअनुसार एक दिन गाउँका गण्यमान्य धनी व्यक्तिहरूमध्येका श्रीमुक्तिनाथ भट्टराई हामीहरू पढिरहेको विद्यालयमा आउनुभएको थियो। हामीहरूले पढिरहेको धेरै बेर हेरिसकेपछि मतिर फर्किएर यो पण्डित धर्मदत्त भट्टराईको छोरो सूर्यले पढेर उन्नति गर्छ। यसको भविष्य मैले राम्रो देखेँ। बाँकी यी अरूले भने धेरै उन्नति गर्लान् जस्तो म देख्दिन भनेर भन्नु भएको कुरा म अहिले पनि झलझली सम्झन्छु। यसरी सकारात्मकरूपमा श्रीमुक्तिनाथ भट्टराइले र केही नकारात्मक शैलीमा श्रीदेवीप्रसाद भट्टराईले पनि मलाई अघि बढ्ने प्रेरणा दिनुभएको थियो। तर म पढ्न काठमाडौं आउनुभन्दा पहिले नै श्रीमुक्तिनाथ भट्टराइको मृत्यु भइसकेको थियो। उहाँका कान्छा छोरा श्रीपुण्यप्रसाद भट्टराई, थर्पु जमदारका नाति श्रीजगदीश (जनक) भट्टराई र मेरा दाजु श्रीपशुपतिप्रसाद भट्टराईसमेतले खार्पाको भाषापाठशालामा धाएर त्यहाँका

गुरु श्रीबालानन्द पोखरेलसँग संस्कृत पढ्नु भएको थियो । श्रीपुण्यप्रसाद भट्टराई र मेरा दाजु श्रीपशुपतिप्रसाद भट्टराईले आफ्ना आफ्ना घरमा २००७ साल माघमा एउटै समय पारेर पुराण पनि भन्नु भएको थियो । तर उहाँहरूले पढाइमा अपेक्षित उन्नति गर्न भने सक्नुभएन । अहिले पुण्यप्रसाद भट्टराईको मृत्यु भइसकेको छ ।

गाउँमा मभन्दा अगाडिका दाजुका समकालीन व्यक्तिहरूमा श्रीभवानीप्रसाद (भानुभक्त) भट्टराई, श्रीलोकहरि भट्टराई, थुम्मे खत्री, बेचे खत्री, दले पराजुली, चाटे भन्ने मोहनसमेतका युवाहरू गाउँमा नेतृत्व गरेर हिँड्ने गर्दथे । उनीहरू पढ्नुभन्दा गाउँमा रमाइलो गरेर नै दिन बिताउने गर्दथे । त्यसैकारण उनीहरूले कुनै पनि क्षेत्रमा उन्नति गर्न सकेनन् । वर्तमान समयमा पनि उनीहरूको व्यक्तिगत जीवन त्यति सन्तोषजनक देखिँदैन । त्यस प्रकारको गाउँको वातावरण भए तापनि त्यसबाट जोगिएर म घरको व्यवहारका साथै पढ्नमा पनि लागेको थिएँ । आफ्नै गाउँमा गुरु श्रीमहाप्रसाद तिमल्सिनासँग पढ्न शुरु गरेपछि पछि गएर खार्पाको भाषापाठशालामा पनि गुरुहरूसँग मैले संस्कृत र अङ्ग्रेजी साथसाथै पढेको थिएँ । गुरु श्रीढुण्डिराज पोखरेलसँग मैले संस्कृत र श्रीज्वालाप्रसाद पोखरेलसँग अङ्ग्रेजी पढेको थिएँ । त्यस बेला अङ्ग्रेजी पढ्नु भनेको अनौठो विषय ठहरिन्थ्यो । घरबाट आउन जान ४ कोशभन्दा टाढा रहेको खार्पा पाठशालामा घरैबाट धाएर पढ्दापढ्दै मलाई अझै ठूलो पाठशालामा गएर पढ्ने इच्छा भएको थियो । मलाई पढ्ने आकाङ्क्षाले सधैँ उत्प्रेरित गरिरहन्थ्यो । सो कुरा म पिताजीलाई भन्न सक्तिनथेँ । पिताजीलाई घरव्यवहारमा एक्लै छोडेर पढ्न जाने कुरा म गर्न पनि सक्तिनथेँ । त्यसका साथै दुई भाइ छोराहरूलाई एकैचोटि पढ्न बाहिर पठाउन व्यावहारिक र आर्थिकस्थितिले पनि अनुमति नदिने हुँदा म त्यसै मन मारेर बसेको थिएँ ।

त्यसैबेला मेरा केही साथीभाइहरू अध्ययनका लागि भोजपुरको दिङ्ला संस्कृतपाठशालामा जाने भएको मैले थाहा पाएँ र तिनैसँग साथ लागेर घरमा कसैलाई थाहै नदिई संवत् २०११ साल फागुनमा म घरबाट भागेर साथीहरूका साथ दिङ्ला संस्कृतपाठशालामा पढ्न गएको थिएँ । मसँग पढ्न जानेहरूमा श्रीदिव्यप्रसाद भट्टराई, श्रीनारायणप्रसाद भट्टराई, श्रीभरतमणि

भट्टराई र श्रीताराकृष्ण पोखरेलसमेत थिए । दिङ्लामा आबालब्रह्मचारी श्रीषडानन्दज्यूद्वारा संस्थापित संस्कृतविद्यालयमा गएर हामीहरूले अध्ययन शुरु गरेका थियौं । केही महिना बसेपछि हामीहरू सबैलाई जरो आउन थाल्यो र लुतोसमेत निस्किएर अत्यन्त दुःख दिएको थियो । दिङ्लाको उक्त विद्यालय रहेको ठाउँ जङ्गलको बीचमा पर्ने र ठाउँ पनि खाँच भएको हुँदा बर्षाको समयमा बस्न नसकिने देखेर २०१२ साल जेठमा हामीहरू घर फर्किएका थियौं । पढाइ छोडेर त्यसरी बीचैमा घर फर्किनु पर्दा मलाई अत्यन्त लाज लागेको थियो । पिताजीका अगाडि कसरी मुख देखाउने भनेर शोच्तै घर आउँदै गरेको बेला भञ्ज्याङ भन्ने ठाउँमा पिताजीसँग झ्वास्स भेट भएको थियो । पिताजीले ए पण्डित भएर आइस् ? भनेर मलाई सोध्नु भएको थियो । मैले कुनै जबाफ दिनसकेको थिइन । दिङ्ला पढ्न जाने रहर पनि मेरो पुगेको थियो । त्यसरी दिङ्लाको संस्कृतपाठशालामा पढ्न जानेहरूमध्ये अहिले म बाहेक अरू कोही पनि यस संसारमा छैनन् । मसँग उनीहरूको केवल सम्झनामात्र बाँकी छ ।

दिङ्लाबाट घर फर्किएपछि म फेरि घरको नियमित काममा संलग्न भएको थिएँ र आफ्नो अध्ययनलाई पनि कुनै न कुनै रूपमा चालू गर्दै रहेको थिएँ । आत्मोन्नति जसरी पनि गर्नु पर्दछ भन्ने मेरो अन्तर्मनको चाहनालाई मैले थिचेर राख्न सकेको थिइँन । म जीवनमा केही न केही गर्न चाहन्थेँ । त्यसै समयमा हाम्रा गाउँमा काठमाडौँबाट श्रीकविप्रसाद गौतमको हरिनामसङ्कीर्तनमण्डली घरघरमा धर्मस्तम्भहरू स्थापना गराउँदै र कीर्तन गराउँदै पुगेको थियो । गाउँका धेरै जसो घरहरूमा धर्मस्तम्भहरू संस्थापित गरिएका थिए । पिताजीको अनुमति प्राप्त नभएकाले मेरा घरमा भने धर्मस्तम्भ स्थापना गर्न सकिएको थिएन । त्यो टोली काठमाडौँ फर्कियो । तर मेरो इच्छा भने अपूरै रहेको थियो । गाउँमा हुने कीर्तनका कार्यक्रमहरूमा म सम्मिलित हुने गर्दथेँ । काठमाडौँबाट गएका कालिगढले ढुङ्गामा कुँदेर बनाएकै जस्तो धर्मस्तम्भ र श्रीकृष्णको मूर्तिसमेत मैले आफ्नै हातले निर्माण गरेर घरमा तुलसीको मठमा स्थापना गरेको थिएँ । त्यो खबर काठमाडौँमा श्रीकविप्रसाद गौतमको हरिनामसङ्कीर्तनकुञ्ज, देवपाटन, पशुपतिमा पुगेछ । श्रीकविप्रसादका भाइ श्रीज्योतिप्रसाद गौतमले मेरो भगवद्भक्तिसम्बन्धी कुराको

प्रशंसा गर्दै प्रोत्साहनस्वरूप स्वर्णाक्षरमा प्रशंसापत्र काठमाडौँमा नै तयार गरेर मलाई दिन मेरो घर रावालामीडाँडामा उहाँ दलबलसहित पुग्नुभएकोथियो। त्यसबाट पनि मलाई आध्यात्मिक मार्गतर्फ अग्रसर हुन प्रेरणा नै मिलेको थियो। त्यसबाट मूर्तिकला र चित्रकलातर्फ मेरो प्रवृत्तिले बढ्ने मौका पाएको थियो। मैले घरमै बसेर भगवान् श्रीकृष्णाका केही मूर्ति र चित्रहरूसमेत तयार गरेर गाउँमा बाँडेको थिएँ। तीमध्ये एउटा मूर्ति मेरी आमालाई पूजा गर्नका लागि घरको मूल ढोकामाथि मैले राखिदिएको थिएँ भने अर्को मूर्ति तयार गरेर मेरी ठूलीआमा पर्ने नारायणप्रसाद भट्टराईकी आमालाई पूजा गर्न दिएको थिएँ।



पिता श्रीधर्मदत्त भट्टराई (सं.२०२०)
सौजन्य ई. वीरेन्द्रकेशरी पोखरेल

मैले निर्माण गरेको धर्मस्तम्भ अद्यापि रावालामीडाँडाको मेरो पुरानो घरको तुलसीको मठमा छँदैछ। आमाका निमित्त पूजा गर्न मैले निर्माण गरेको श्रीकृष्णाको मूर्ति इनरुवा सुनसरीको घरमा आमा गइसकेपछि पनि अझै पूजा गरिँदै छ। त्यसरी म प्रतिभा–स्फुरित हुने उचित अवसर नपाएर यत्रतत्र भौँतारिइरहेको समयमा मेरा दाजु आफ्नो पढाइ पूरा गरेर शिक्षकको तालीम नर्मलस्कूलबाट लिएर घर फर्कनुभएको थियो। त्यसपछि उहाँले आफ्नै गाउँमा नै विद्यालय खोलेर पढाउन पनि थाल्नुभएको थियो। त्यसरी मैले काठमाडौं पढ्न जान पाउने वातावरण बन्दै गएको थियो। त्यसैबेला श्रीवीरेन्द्रकेशरी पोखरेल आफ्नू इन्जिनीयरिङ्को पढाइ पूरा गरेर कलकत्ताबाट घर फर्कनुभएको थियो। मेरो कलासम्बन्धी प्रतिभा देखेर उहाँ अत्यन्त प्रभावित हुनुभएको थियो। उहाँको प्रोत्साहन, पिताजीको र दाजुसमेतको अनुमतिबाट २०१२ साल फागुनमा म अध्ययनका लागि काठमाडौं आएको थिएँ र धोबीधारामा डिल्लीराज पोखरेलहरूसँग डेरा गरेर बसेर मैले आफ्नू अध्ययन शुरु गरेको थिएँ। केही महिना काठमाडौं बसेपछि मलाई नर्कटको जरोले भेट्यो र म निकै बिरामी भएँ।

मैले आफ्नू अध्ययन चालू राख्न सकेको थिइन। यहाँसम्म कि, २०१३ साल वैशाख महिनामा काठमाडौँको टुँडिखेलमा भएको श्री ५ महेन्द्रको शुभराज्याभिषेकको उत्सवसमेत हेर्नसमेत म जानसकेको थिइन। त्यसै मौकामा दाजु अरू शिक्षकहरूकासाथ आफ्नू तलब लिन काठमाडौँ आउनु भएको थियो। जरो आएर बिरामी भएको देखेपछि दाजुले आफ्नैसाथ मलाई घर लिएर फर्कनु भयो। घरमा पुगेपछि म स्वस्थ भएको थिएँ। म फेरि पहिलेजस्तै घरको नियमित काममा लागेको थिएँ।

एकातर्फ मेरो पढ्ने इच्छा पूर्ण भएको थिएन भने अर्कातर्फ दुई दुई पटक पढ्न भनेर परदेश गएको म दुवै पटक बिरामी भएर घर फर्किएको हुँदा पढ्न नसक्ने भनेर प्रमाणित भइसकेको थिएँ। काठमाडौँ पढ्न जाने चाहना प्रष्टरूपमा व्यक्त गर्ने अवस्थामा म थिइन तापनि म फेरि पनि काठमाडौँमै अध्ययन गर्न जान चाहन्थेँ। त्यसरी दोधारमा परिरहेको अवस्थामा तत्कालीन गोरखापरिषद्को पूर्वाञ्चलसम्मेलन २०१३ सालको माघ महिनामा भोजपुरको सदरमुकाम भोजपुर बजारमा भएको थियो। त्यस सम्मेलनमा भाग लिन मेरा पिताजी, डिट्ठा श्रीभवकृष्ण पोखरेल, श्रीसर्वधन राई र श्रीखेमराज पोखरेलसमेत भोजपुर जानु भएको थियो। पिताजीकासाथ लागेर म पनि भोजपुर गएको थिएँ। गोरखापरिषद्का नेता जर्नेल श्रीमृगेन्द्र शम्शेर राणाले काठमाडौँमा मलाई आर्थिक सहयोग गर्ने वचन दिएपछि २०१३ साल चैत्र महिनामा श्रीचक्रप्रसाद पोखरेलका साथ लागेर म फेरि काठमाडौँ आएको थिएँ। काठमाडौँ आएर श्रीमृगेन्द्र शम्शेर राणासँग भेट्न म धेरै पटक बबरमहल धाएको थिएँ। उहाँले कहिल्यै पनि मलाई भेट दिनु भएन र उहाँका जेठा छोरा श्रीभरत शम्शेरले मलाई बिहानभरि बबरमहलको बगैँचामा घुमाएर फिर्ता पठाइदिनुभएको थियो। सहयोग प्राप्त नहुने देखेपछि मैले त्यहाँ जान छोडिदिएको थिएँ। सोही कुरा मैले पिताजीलाई लेखेर पठाएपछि घरैबाट खर्च प्राप्त हुन थालेको थियो। त्यसपछि म आफ्नू अध्ययनलाई अघि बढाउन सफल भएको थिएँ।

कलाको अध्ययन गर्ने दृष्टिकोणबाट सुरुमा मैले काठमाडौँ आउने मौका पाएको थिए। तर काठमाडौँ आएपछि म कला अध्ययन गर्नेतर्फ नलागेर रातमा रात्रिपाठशाला नक्शालमा अङ्ग्रेजी र दिनमा रानीपोखरी

संस्कृतप्रधानपाठशालामा संस्कृत पढ्नेतर्फ लागेको थिएँ । अत्यन्त सङ्घर्षका साथ रानीपोखरी संस्कृतप्रधान–पाठशालामा म प्रविष्ट भएको थिएँ । २०१४ सालको सम्पूर्ण पूर्वमध्यमाको परीक्षामा सम्मिलित भएर म उत्तीर्णसमेत भएको थिएँ । (यो कुरा मैले मेरो "पत्रैपत्र" कवितासङ्ग्रह र "ज्ञान र भक्ति"को भूमिकामा समेत उल्लेख गरिसकेको छु) धेरै वर्षदेखि रोकिएर रहेको तीनधारा संस्कृतछात्रावासको भर्ना २०१५ सालको दशैँको अवसर पारेर आश्विन महिनामा खुलेको थियो । साहित्य विषयमा सम्पूर्ण पूर्वमध्यमा द्वितीयश्रेणीमा उत्तीर्ण भएको नाताले मैले पनि अरू विद्यार्थीहरू सरह तीनधारा संस्कृतछात्रावासमा भर्ना हुने मौका पाएको थिएँ । मलाई तत्कालीन राजकीय संस्कृत–महाविद्यालयका श्रद्धेय प्राचार्य श्रीपद्मप्रसाद भट्टराईज्यूको ठूलो आशीर्वाद प्राप्तभएको थियो । म जस्तो दुर्गम पहाडबाट काठमाडौं पढ्न आएको निम्नमध्यम वर्गको व्यक्तिले पूर्णरूपले आफ्नै खर्चले अध्ययन गरेर उच्च शिक्षा प्राप्त गर्न सक्नु अत्यन्त असम्भव थियो । तीनधारा संस्कृतछात्रावासको भर्नाले सो कुरा मलाई सम्भव बनाइदिएको थियो । तीनधारा छात्रावासको बसाइ अत्यन्त सुविधाजनक थियो । नेपाल अधिराज्यभरिका विद्यार्थीहरू बस्ने केन्द्रको रूपमा रहेको संस्कृतछात्रावासले हामीहरूजस्ता धेरै अकिञ्चन विद्यार्थीहरूको उद्धार गरेको थियो र भविष्यमा पनि  उद्धार गर्दै जानेछ भन्ने मैले ठानेको छु ।

त्यस छात्रावासले २००४ सालको "जयतु संस्कृतम्" जस्तो ऐतिहासिक आन्दोलन जन्माएको थियो भने विभिन्न ठूला नेता, दार्शनिक, साहित्यकार र प्रशासकहरू पनि त्यही छात्रावासले उत्पादन गरेको थियो र भविष्यमा पनि त्यसै प्रकारले उत्पादन गर्दै जानेछ । सोही कुरा सोचेर म तीनधारा संस्कृतछात्रावासमा बस्न पाएकोमा अत्यन्त गौरवान्वित भएको थिएँ ।

छात्रावासमा भर्ना हुनेबित्तिकै नेपालको पहिलो संसदीय निर्वाचन २०१५ सालको फागुन ७ गतेदेखि शुरु भएको थियो । हामीहरूलाई पनि राजनीतिको हावा लागिसकेको थियो र निर्वाचनको अभियानमा आफूले विश्वास गरेका दलका नेताहरूलाई विजयी गराउन हामीहरू संलग्न भएका थियौं । आमनिर्वाचनका कारण सम्पूर्ण शिक्षणसंस्थाहरू बिदा गरिएका हुँदा हामीहरूलाई निर्वाचनको प्रचारमा जान कुनै बाधा थिएन । काठमाडौंभित्रको

निर्वाचनको प्रचार समाप्त गरेर हामीहरू पूर्वतिर घर भएका केही विद्यार्थीहरू श्रीसूर्यप्रसाद उपाध्यायका साथमा लागेर पूर्वतर्फ गएका थियौँ। त्यो निर्वाचन अहिलेको जस्तो एक वा दुई चरणमा नभएर विभिन्न चरणहरूमा सम्पन्न भएको थियो। जुन क्षेत्रको निर्वाचन समाप्त हुन्थ्यो त्यसको परिणाम पनि तुरुन्तै घोषणा गरिन्थ्यो। त्यसले गर्दा पछि हुने निर्वाचनमा प्रभाव पर्दथ्यो। कर्मचारीहरू र सुरक्षाकर्मीहरूको समेत सीमितताले गर्दा त्यसरी निर्वाचन गराउन तत्कालीन निर्वाचन आयोग विवश भएको थियो। श्रीसूर्यप्रसाद उपाध्याय काठमाडौँ भित्रको ५ नं. क्षेत्रबाट चुनाव हार्नु भएको थियो। उपाध्याय १२ नं. निर्वाचन क्षेत्र रामेछापबाट पनि चुनाव लड्नु भएको थियो र उहाँलाई जिताउन नै हामीहरू पूर्वका केही विद्यार्थीहरू त्यसतर्फ गएका थियौँ। त्यस क्षेत्रमा तत्कालीन गोरखापरिषद्का नेता श्रीवेणीबहादुर कार्की पनि चुनाव लड्नु भएको थियो। त्यो क्षेत्र राणाजीका आठपहरिया, ढोके, पाले र नोकरचाकरहरूको बाहुल्य भएको क्षेत्र भएको हुँदा गोरखापरिषद्को निकै प्रभाव थियो। नेपाली काङ्ग्रेसको कम प्रभाव भएको हुँदा त्यहाँ पनि श्रीसूर्यप्रसाद उपाध्यायले चुनाव हार्नुभएको थियो।

हामीहरू रामेछापबाट अत्यन्त निराशाका साथ पूर्वतर्फ बढेका थियौँ। तत्कालीन पूर्व ३ नं. ओखल्ढुङ्गाभित्र पर्ने १६, १७, र १८ नं.का निर्वाचन क्षेत्रहरूमा हामी विद्यार्थीहरूले प्रचार गरेका थियौँ र आफ्ना उम्मेदवारहरूलाई सबै क्षेत्रमा विजयी गराउन सफल भएका पनि थियौँ। त्यसरी विजयी हुनेहरूमा श्रीबलबहादुर राई, श्रीमणिराम पोखरेल र श्रीपेशलकुमार पोखरेलहरू हुनुहुन्थ्यो। देशभरिको निर्वाचन सम्पन्न भएको थियो। दुईतिहाइ स्थानहरू नेपाली काङ्ग्रेसले जितेको थियो र जननेता श्रीविश्वेश्वरप्रसाद कोइराला देशका पहिला निर्वाचित प्रधानमन्त्री घोषित हुनुभएको थियो। आम निर्वाचन नै गराउन न चाहने निहितस्वार्थ भएका श्री ५ महेन्द्रले भद्रअवज्ञा आन्दोलनपछि बाध्य भएर निर्वाचन गराएका थिए। उनले नेपाली काङ्ग्रेसलाई बहुमतमा आउन नदिन अनेक षड्यन्त्र गरेका थिए। नेपाली काङ्ग्रेसको दुईतिहाइ बहुमत आएको देखेपछि संसद बोलाउन र मन्त्रिमण्डलको घोषणा गर्न ढिला गरिएकोबाट पनि श्री ५ महेन्द्रबाट भविष्यमा प्रजातन्त्रलाई खतरा आउन सक्ने आशङ्का त्यसबेला राजनीतिकवृत्तमा गरिएको थियो। ढिलै भए पनि

२०१६ साल असार महिनामा संसदको अधिवेशन बोलाइएको थियो र नयाँ सरकार गठन गरिएको थियो। देशमा संसदीय प्रजातन्त्र र सरकारले सुचारुरूपले काम गर्न थालेपछि सम्पूर्ण राष्ट्र आफ्नू नियमित गतिमा अघि बढ्न थालेको थियो। हाम्रा शिक्षणसंस्थाहरू पनि खुलेका थिए र निर्वाचनको कामपछि हामीहरू फेरि अध्ययनतर्फ संलग्न भएका थियौँ। मेरो दोहोरो पढाइ पहिलेकै क्रममा फेरि चालू भएको थियो। टुटेको शृङ्खला पुनः जोडिएको थियो।

त्यस बेला वाल्मीकि संस्कृतमहाविद्यालयमा म अध्ययन गर्दथेँ। त्यहाँका प्राचार्य संस्कृत जगत्का अद्वितीय विद्वान् श्रीपद्मप्रसाद भट्टराईज्यू हुनुहुन्थ्यो। उहाँको पुर्ख्यौली थलो रामेछाप जिल्लाको सालुबिर्ता थियो। मेरा पुर्खाहरूको बसोवास पनि त्यहाँबाट पूर्वतर्फ जानुभन्दा पहिले सालुबिर्ता अन्तर्गत सुनारपानी बिर्तामा थियो। हाम्रा पुर्खा श्रीऋषीश्वर भट्टराई काठमाडौँबाट पूर्व लागेपछि सर्वप्रथम सिन्धुपाल्चोक जिल्लाको फूलबारी बिर्तामा गएर बसोवास गर्नु भएको वंशावलीबाट देखिन्छ। कालान्तरमा उहाँका सन्तानहरू सालु र सुनारपानी बिर्तामा गएर बसोवास गर्नु भएको थियो। सालु र सुनारपानीमा बसोवास गर्ने भट्टराईहरू एकै हाँगाका हुनुभएको हुँदा श्रीपद्मप्रसाद भट्टराईज्यूका पुर्खाहरू र मेरा पुर्खाहरूको सम्बन्ध नजिकै गाँसिएको कारणबाट ममाथि उहाँको विशेष शुभदृष्टि थियो। संस्कृतमहाविद्यालयमा साहित्य विषय लिएर मैले उत्तरमध्यमाको कक्षामा पढ्न थालेको थिएँ। शुरुमा मलाई पढाउने गुरुहरूमा श्रीजूनानाथ पण्डितज्यू, (पछि उहाँ श्री ५ को बडागुरुज्यू पनि हुनुभयो) श्रीडिल्लीराज रेग्मीज्यू, श्रीचूडानाथ भट्टराईज्यू, श्रीरामचन्द्र पौडेलज्यू र श्रीलोकनाथ ढकालज्यूहरू हुनुहुन्थ्यो। म दोहोरो पढाइका साथसाथै छात्रराजनीतिमा पनि चाख राख्न थालिसकेको थिएँ। मलाई २०१४ सालको भद्रअवज्ञा आन्दोलनदेखि नै नेपाली काङ्ग्रेसको सिद्धान्तले राजनीतितिर बलपूर्वक तान्न लागेको थियो र २०१५ सालको संसदीय निर्वाचनले भने मलाई पूरै तानिसकेको थियो। यहाँ अनुस्मृतिको क्रममा मैले भद्रअवज्ञा आन्दोलनको प्रसङ्गसमेत उठाएको हुँदा त्यस बारेमा पनि पाठकहरूलाई सङ्क्षिप्त जानकारी दिनु सान्दर्भिक ठान्दछु।

२००७ सालको क्रान्तिपछि नेपालको राणाशासन समाप्त भएको

थियो र क्रमशः जनताको सरकार बन्ने क्रम जारिरहेको थियो। श्री ५ त्रिभुवनले संविधानसभाका लागि गर्ने भनेर घोषणा गरेको निर्वाचन श्री ५ त्रिभुवनको मृत्युपछि त्यसै सेलाएर गएको थियोभने संसदका लागि गर्ने भनेको निर्वाचनतर्फ पनि श्री ५ महेन्द्रले कुनै चासो नदेखाएपछि राजनीतिकवृत्तमा शङ्का र उपशङ्का उत्पन्न हुन थालेका थिए। बारम्बार सरकारहरू बदलिइरहनुका साथै राजनीतिमा अत्यन्त अस्थिरता र तरलता आउन थालको थियो। त्यसरी देशमा बढ्दै गएको राजनीतिक अस्थिरताको फाइदा उठाएर दरबारले राजनीतिमा विखण्डन ल्याएर देशमा संसदका लागि निर्वाचन नै नगराउने दुराशय राखेको थाहा पाएपछि देशमा फेरि आन्दोलन गर्नु पर्ने परिस्थिति सिर्जना भएको थियो। सो कुरा मैले मेरो क्रान्तिदूत नामक राजनीतिक खण्डकाव्य २०५३ मा उल्लेख गरिसकेको छु। नेपाली काङ्ग्रेसका नेता श्रीविश्वेश्वरप्रसाद कोइरालाको नेतृत्वमा संवत् २०१४ सालको वैशाख महिनामा काठमाडौँमा भद्रअवज्ञा आन्दोलन भएको थियो।

काठमाडौँका सिंहदरबार र चारखाललगायतका मुख्यमुख्य सरकारी कार्यालयहरूमा नेपाली काङ्ग्रेसका नेताहरूबाट ढोकामा बसेर धर्ना दिने काम शुरु गरिएको थियो। आन्दोलनका शुरुका दिनदेखि नै कर्मचारीहरूलाई अड्डामा काम गर्न जान नदिन सिंहदरबारका मूलढोकामा श्रीविश्वेश्वरप्रसाद कोइरालासहितका नेताहरूले धर्ना दिनुभएको थियोभने चारखालमा नेपाली काँग्रेसका नेता श्रीमहेन्द्रविक्रम शाह लगायतका नेताहरूले धर्ना दिनु भएको थियो। त्यसै बेला पहाडबाट काठमाडौँ आएर रानीपोखरी संस्कृत प्रधानपाठशालामा संस्कृत पढ्न थालेको मजस्तो सरल पहाडी ठिटोलाई राजनीति र आन्दोलनसमेतमा कुनै चासो र चाखसमेत थिएन। तर परिस्थितिले मलाई त्यतातिर चाख राख्ने बनाइदिएको थियो। त्यसबेला बानेश्वरमा श्रीहरिकृष्ण पोखरेलका घरमा म डेरा गरेर बसेको थिएँ।

बानेश्वरबाट रानीपोखरी संस्कृत प्रधानपाठशालातिर पढ्न जाँदा डिल्लीबजार चारखालको बाटो भएर जानुपर्ने भएकाले म डेरामा बिहान १० बजे भात खाएर डिल्लीबजार चारखाल पुगेको थिएँ। चारखाल डिल्लीबजारमा चारैतिर मान्छेको भीड र पुलिसको ओहोरदोहोरसमेत मैले

देखेको थिएँ । त्यसै दिन बिहानदेखि भद्रअवज्ञा आन्दोलन शुरु भएको कुरा मलाई थाहै थिएन । चारखालमा मानिसको भीड देखेपछि ए ! के भएको रहेछ ? भनेर जिज्ञासावश म धर्ना बसेको ठाउँमा हेर्न पुगेको थिएँ । कर्मचारीहरू र अरू मानिसहरूलाई समेत कार्यालयभित्र जान नदिन नेताहरू बाटो रोकेर धर्ना बस्नु भएको रहेछ । त्यहाँ मैले हेर्दाहेर्दै मानिसहरूको एउटा समूहले धर्ना दिएर बसेका नेताहरूलाई खोर्सानीका ढिँडीहरू र कुखुराका फुलका बोक्राहरूको माला लगाइदिएर कालो झण्डासमेत देखाउँदै विरोध गरेको थियो । भीडमा हलचल भएको थियो । पुलिसहरूको सक्रियता देखियो । म छक्क परेर त्यसै भीडमा नै बसिरहेको थिएँ । मलाई त्यसको उद्देश्य र परिणामका बारेमा केही पनि थाहा थिएन । मलाई त त्यो मनोरञ्जनको विषय भएको थियो । त्यसैबेला एउटा थोत्रो लरी मानिसको भीड भित्र पसेको थियो । कुखुराका फुलका बोक्रा र खोर्सानीका ढिँडीका माला लगाएका, खाँडीका कुर्तासुरुवाल र जवाहरकोट लगाएका नेताहरूलाई पुलिसले समातेर उक्त लरीमा हालेको थियो ।

त्यसपछि त्यहाँ भएका अरू नेताहरू, कार्यकर्ताहरू र मजस्ता अबोध तथा अनजान दर्शकहरूलाई समेत पुलिसले समातेर थोत्रो लरीमा कोचेको थियो । म भाग्न खोजेको थिएँ तर सकिन । मैले काखीमा च्यापेका कापी र किताबहरू छरिएर भीडमा बेपत्ता भएका थिए । लरीमा सैयौँ मानिसहरूलाई खाँदेर डिल्लीबजारको पीपलको बोटहुँदै पुतलीसडकतिर लगिएको थियो । त्यहाँबाट पनि हामीहरूलाई सिंहदरबारको मूलढोका अगाडि लगिएको थियो । सिंहदरबारको मूलढोकामा धर्ना बसेका श्रीविश्वेश्वरप्रसाद कोइराला–समेतका नेताहरूलाई दमकलबाट पानीको फोहोरा हानेर अज्ञात स्थानतिर समातेर लगिसकेको रहेछ । त्यहाँ चारैतिर मानिसहरूको भीड देखिन्थ्यो । हामीहरू चढेको लरीलाई त्यहाँको भीडले रोक्यो र टायरको हावा फुस्काइदिएको थियो । हामीहरू सर्वोच्च अदालत अगाडि पुगेर हावा फुस्काइएको लरीबाट निस्किएर भागेका थियौँ ।

त्यसपछि म आफ्नू पाठशाला रानीपोखरीतर्फ लागेको थिएँ । तर त्यसतर्फ पनि मानिसहरूको ठूलो भीड थियो । त्यहाँ पनि के भएको रहेछ भनेर म हेर्न गएको थिएँ । रत्नपार्कको उत्तरपट्टि जहाँ हाल डि.आइ.जी.

कार्यालय छ त्यसबेला स्वतन्त्र न्यायालय थियो । त्यहाँ पनि आन्दोलनकारीहरूले सत्याग्रह गरेका रहेछन् । सत्याग्रहीहरूलाई हटाउन पुलिसले अश्रुग्याँस हान्न र लाठी चार्ज गर्नसमेत थालेको रहेछ । जाँदाजाँदै म अश्रुग्याँसमा परेको थिएँ । अश्रुग्याँसले आँखा पोलेर हेर्नै नहुने भएपछि जेपबाट रुमाल झिकेर पानीमा भिजाएर पखालेपछि आँखा केही हेर्नुहुने भएको थियो । त्यहाँ सबैले त्यसै गर्थे र मैले पनि त्यसै गरेको थिएँ । धेरै बेरसम्म दोहोरो हानाहान चलिरहेको थियो । बिजुली अड्डाको कम्पाउण्डको छेउमा बसेर मैले उत्सुकताका साथ ती घटनाहरू दिनभरि नै हेरिरहेँ र साँझमा म डेरा फर्किएको थिएँ ।

त्यस घटनाले मलाई छात्रराजनीतितर्फ आकर्षण गरेको थियो । छात्रराजनीतिमा संलग्न हुँदाहुँदै पनि मैले आफ्नू दोहोरो पढाइलाई भने यथावत् चालू राखेको थिएँ । २०१५ सालमा नै पढाइबाट फुर्सद निकालेर त्यस बेला प्रचलित निजामती मध्यमा जसलाई सबै पास मिलाएर एघार पास भन्ने चलन थियो, त्यसको पनि परीक्षा दिएर म उत्तीर्ण भएको थिएँ । तर त्यस पढाइबाट मैले कुनै पनि काम लिन सकिन । पढाइका साथसाथै संस्कृत महाविद्यालयको र छात्रावासको छात्रयूनियनको समेत म नेतृत्व गर्दथेँ । तीनधारा संस्कृतछात्रावासमा बस्ने विद्यार्थीहरूले नै विद्यालयका छात्रसमितिहरूमा र नेपाल संस्कृतछात्रसङ्घमा पनि प्रभाव पार्ने भएका हुँदा तीनधारा संस्कृतछात्रावासमा बस्ने विद्यार्थीहरूको त्यस बखत अत्यन्त महत्त्वपूर्ण भूमिका रहन्थ्यो । नयाँ विद्यार्थीहरूको समूह छात्रावासमा भर्ना नहोउन्जेल त्यहाँको वातावरण भिन्नै खालको थियो । नयाँ विद्यार्थीहरूको भर्ना निकै वर्षदेखि रोकिएको हुँदा त्यहाँ बस्ने विद्यार्थीहरूको सङ्ख्या अत्यन्त थोरै भएको थियो । छात्रावासका कोठाहरू प्रायः सबै खालि नै रहने र छात्रावास सुनसान रहने हुँदा त्यसभित्र त्यस बेला प्रतिबन्धित अवस्थामा रहेको नेपाल कम्युनिष्ट पार्टीका नेताहरू त्यहाँ लुकेर बस्ने र बैठकसमेत गर्ने गर्दारहेछन् । हामीहरू प्रवेश गर्नु अघि त्यहाँ बसिरहेका हाम्रा अग्रजहरूमध्ये धेरैजसो नेपाल कम्युनिष्ट पार्टीका सदस्य र अनुयायी भएर काम गर्दथे । छात्रावासभित्रको यूनियन, संस्कृतमहाविद्यलयको छात्रकार्यसमिति र राष्ट्रव्यापी कार्यक्षेत्र भएको नेपाल संस्कृतछात्रसङ्घमा पनि तिनीहरूले नै

एकछत्र अधीनमा राखेका थिए ।

नयाँ विद्यार्थीहरूको ठूलो समूह छात्रावासमा प्रवेश गरेपछि आफ्नू अस्तित्व समाप्त हुने आशङ्काले पुराना विद्यार्थीनेताहरू सतर्क भएका थिए । आफ्नू एकाधिकारमा खलल पर्न सक्ने सम्भावना देखेर उनीहरूले मजस्ता नेतृत्व गर्न सक्ने विद्यार्थीहरूलाई छानी छानी आफ्नू सङ्गठनतर्फ मिलाउन साम, दान, दण्ड र भेद आदि सबै उपायहरूको प्रयोग गरेका थिए । मैले थोरै समयमा नै त्यहाँको यथार्थता बुझिसकेको थिएँ । शुरुमा कतैतिर पनि नलागी तटस्थ विद्यार्थीको रूपमा रहेर अध्ययन गर्ने र छात्रहितमा मात्र काम गर्ने भन्ने मैले नीति लिएको थिएँ । तर त्यसबेलाका विद्यार्थीहरूले कुनै न कुनै समूहमा संलग्न नभएमा आफ्नो अस्तित्व नै संरक्षण गर्न नसकिने वातावरण भएका कारण मैले मेरो तटस्थ नीतिलाई धेरै दिन जोगाउन सकेको थिइन ।

त्यस समयमा नेपाली काङ्ग्रेसको संसदीय दलका नेतामा श्रीविश्वेश्वरप्रसाद कोइराला निर्वाचित भई उहाँ देशका प्रथम निर्वाचित प्रधानमन्त्रीसमेत हुनुभइसकेको थियो । त्यसबाट प्रजातान्त्रिक समूहका विद्यार्थीहरूको फूर्ति निकै बढेको थियो । एकलौटीरूपमा कम्युनिष्टसमर्थक विद्यार्थीहरूले आफ्ना नियन्त्रणमा राखेका छात्रसङ्घहरूमा हामीहरूले बिस्तारै प्रवेश गर्न खोजेका थियौँ । तर उनीहरूले अल्पमतमा परिसकेर पनि जालझेल गरेर सङ्घसंस्थाहरूलाई आफ्नै अधीनमा राख्ने दुष्प्रयास गरेका थिए । सङ्घसंस्थाहरू आ–आफ्ना अधीनमा राख्न दुई समूहहरूका बीचमा दोहोरो तानातान र हानाहान हुन थालेको थियो । कम्युनिष्टसमर्थक छात्रहरूले प्रजातान्त्रिकसमर्थक विद्यार्थीहरूमाथि बाहिरका हुल्लडबाजहरू ल्याएर हुलहुज्जत र बल प्रयोगसमेत गर्न थालेका थिए । उनीहरूको अभद्र व्यवहार, बलमिचाइ र हमलाबाट हाम्रा साथीहरू बेलाबेलामा घाइते पनि हुनेगर्दथे । प्रहरी गुहार्ने अवस्थासमेत आउने गर्दथ्यो । अल्पमतमा परिसकेर अधिकार समाप्त भइसक्दा पनि कम्युनिष्टहरूको बलमिचाइ गर्ने स्वभावअनुसार संस्कृत छात्रसङ्घको छात्रावासमा रहेको कार्यालयलाई बाहिरिया हुल्लडबाज व्यक्तिहरू ल्याएर हुलहुज्जत गरेर दिउँसै लूटेर लगेका थिए ।

त्यसरी कार्यालय लूटेर लैजाँदा महत्त्वपूर्ण सामान र फायलहरूसमेत लूटेर

बेपत्ता बनाइएका थिए । दिउँसै तिनीहरूले अराजकताको स्थिति सिर्जना गरेका थिए । त्यति हुँदाहुँदै पनि हामीहरूले अत्यन्त शालीनताका साथ तनावपूर्ण स्थितिलाई साम्य पारेर विद्यार्थीजगत्मा नेतृत्व प्रदान गर्न सफल भएका थियौँ । हामीहरूसँग भिन्न मत राख्ने साथीहरूले छात्रावासभन्दा बाहिर गएर आफ्नू कार्यालय खोलेका थिए । हामीहरूले पनि वागबजारमा कार्यालय खोलेर नेपाल संस्कृतछात्रसङ्घ सञ्चालन गरेका थियौँ । हाम्रो पक्षमा अत्यधिक विद्यार्थीहरूको समर्थन थियो । हामीहरूसँग असहमत विद्यार्थीहरूले धेरै वर्षदेखि संस्कृतछात्रावासमा अड्डा जमाएर बसेको सुरक्षित स्थानलाई एकाएक छोडेर बाहिर पलायन हुनुपर्दा उनीहरूमा आक्रोश पैदा हुनु स्वाभाविकै थियो । समय अगाडि बढ्दै गयो । वाग्मतीको पुल मुनिबाट धेरै पानी बगिसकेको थियो ।





# भारतभ्रमणमा

सं. २०१६ सालमा पनि विगत वर्षहरूमाजस्तैगरेर नेपाली विद्यार्थीहरूलाई भारतसरकारबाट भारतभ्रमण (All India tour) का लागि निमन्त्रण प्राप्त भएको थियो। दुईथरी विद्यार्थीहरूका बीचमा उक्त भ्रमणमा विद्यार्थीप्रतिनिधि पठाउन तानातान भएपछि सर्वसम्मतरूपमा भारतभ्रमणमा जान मेरो नाम छानिएको थियो। त्यसरी सर्वसम्मतरूपमा म छानिएपछि २०१६ साल मङ्सिर १४ गते तदनुसार सन् १९५९ नेभेम्बर ३० तारिखका दिन मैले १ महिनाको भारतभ्रमणका लागि प्रस्थान गरेको थिएँ। मसँग त्यस बेलाका नेपालभरिका कलेजहरूका विद्यार्थीप्रतिनिधिहरू पनि साथमा थिए। विद्यार्थीटोलीका नेता प्राध्यापक श्रीबी.सी. मल्ल हुनुहुन्थ्यो।



श्रीगणेशमानसिंह छात्रप्रतिनिधिमण्डलका साथ

हामीहरू मङ्सिर १४ गते मध्याह्नमा त्रिभुवन विमानस्थलबाट डकोटा विमानमा चढेर भारतको विहार राज्यको राजधानी पटनातर्फ उडेका थियौँ। हामीहरूलाई बिदा गर्न नेपाली काङ्ग्रेसका वरिष्ठ नेता, निर्माण तथा यातायात मन्त्री श्रीगणेशमान सिंह त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा जानु भएको थियो। हामीहरू काठमाडौँबाट उडेपछि दिनको अपराह्न समयमा भारतको विहारराज्यको राजधानी पटनाको हवाइअड्डामा उत्रिएका थियौँ। त्यहाँ हाम्रो स्वागत गर्न भारतसरकारको केन्द्रीय शिक्षामन्त्रालयबाट खटिएका अधिकृत श्रीसुदर्शन मल्लिक हवाइअड्डामा आफ्ना अरू सहयोगीहरूका साथ आउनु भएको थियो। उहाँ हाम्रो एकमहिने भ्रमण अवधिभरि भारतसरकारका तर्फबाट सम्पर्क–अधिकृतका रूपमा हामीहरूसँगै

रहनु भएको थियो। हाम्रो यातायात, आवास, स्वागतसत्कार र भ्रमणका समयमा परिआउने सबै व्यवस्था उहाँले नै मिलाउनु भएको थियो। धेरैजसो हामीहरू हाम्रालागि छुट्याइएको ट्रेनको बोगीमा नै गएर सुत्ने गर्दथ्यौं। पटनामा हामीहरू दुई दिन बसेर त्यहाँका पुरातात्त्विक सङ्ग्रहालयहरू, हिन्दुमन्दिरहरू, विभिन्न विद्यालयहरू र प्रसिद्ध बौद्धविहारहरूको पनि भ्रमण गरेका थियौं। त्यसका अतिरिक्त त्यहाँ रहेको प्रसिद्ध पुस्तकालयको पनि हामीहरूले निरीक्षण गरेका थियौं। त्यहाँको भ्रमण समाप्त गरेर तेस्रो दिन राती नै ट्रेनमा चढेर हामीहरू पटनाबाट कलकत्तातर्फ प्रस्थान गरेका थियौं।



भ्रमणटोलीका विद्यार्थीहरूकासाथ लेखक

कलकत्तामा पुगेर सर्वप्रथम कलकत्ताकी कालीको दर्शन गर्नुका साथै त्यहाँका महत्त्वपूर्ण म्युजियमहरू र बोटानिकल गार्डेनसमेतको अवलोकन हामीहरूले गरेका थियौं। बोटानिकल गार्डेनमा रहेको विश्वप्रसिद्ध विशाल बटवृक्ष हाम्रो भ्रमणको मुख्य आकर्षणको केन्द्र बनेको थियो। त्यसपछि हामीहरू ट्रेनबाटै उडिसाराज्यको राजधानी भुवनेश्वर गएका थियौं। त्यहाँको छोटो भ्रमण समाप्त गरेर त्यहाँबाट आन्ध्रप्रदेश राज्यमा पर्ने त्यहाँको महत्त्वपूर्ण पानीजहाजको केन्द्र विशाखापत्तनम्मा हामीहरू गएका थियौं। मैले जीवनमा पहिलो पटक समुद्र त्यहीं गएर देखेको थिएँ। समुद्रमा तैरिइरहेका विशालविशाल पानीजहाज र अन्य साना जहाजहरू पनि देखेर म छक्क परेको थिएँ। अत्यन्त सुन्दर त्यस नगरीमा हामीहरू समुद्रको किनाराकै होटेलमा एक रात बसेका थियौं। सानासाना पहाडहरूले घेरिएको समुद्रको किनारामा रहेको त्यो शहर अत्यन्त मनोरम र पर्यटकहरूका लागि गन्तव्यस्थल रहेछ। त्यो ठाउँ पानीजहाजको बन्दरगाह हुनुको साथै पानीजहाज बनाउने स्थान पनि रहेछ। त्यहाँ हामीहरू सानू पानीजहाजमा चढेर केही समय समुद्रमा घुमेका पनि थियौं। समुद्रमा जहाज चढेर घुमेको मेरो त्यो नै पहिलो रोमाञ्चकारी अनुभव थियो। त्यहाँबाट भारतको त्यस बेलाको अत्यन्त सफा तथा आधुनिक शहरका रूपमा चिनिने मद्रासमा हामीहरू ट्रेनबाटै पुगेका थियौं।

२०१६ साल मङ्सिर २५ गते हामीहरू मद्रास पुगेर सर्वप्रथम विश्वप्रसिद्ध श्रीमीनाक्षी देवीको दर्शन गर्न गएका थियौँ। विशाल तथा भव्य मीनाक्षी देवीको मन्दिर घुमेर साध्य नै नहुने मैले अनुभव गरेको थिएँ। मन्दिरभित्र अत्यन्त सुन्दर तथा आकर्षक मीनाक्षी देवीको मूर्तिका साथै अरू देवदेवीका मूर्तिहरू पनि सुन्दररूपमा सजाएर त्यहाँ पूजा गर्ने चलन रहेछ। मन्दिरको बाहिरपट्टिको भागमा तलदेखि गजूरसम्म नै विभिन्न देवीदेवताका सुन्दर मूर्तिहरू निर्माण गरिएका रहेछन्। साह्रै अवोध अवस्थामा मैले श्रीमीनाक्षी देवीको महत्त्व नबुझिकन नै दर्शन गर्ने मौका पाएको थिएँ। मलाई सो कुराको अहिले राम्रो सम्झना नभएको हुँदा फेरि मद्रास गएर श्रीमीनाक्षी देवीको दर्शन र पूजा गर्ने धोको मनभित्र अझै रहिरहेको छ। हेरौँ भविष्यमा भगवती श्रीमीनाक्षीको कस्तो कृपा हुँदो रहेछ। श्रीमीनाक्षीका अतिरिक्त हामीहरू अरू पनि धेरै हिन्दुदेवदेवीका मन्दिरहरूमा दर्शन गर्न गएका थियौँ। जहाँ जुन मन्दिरमा गए पनि त्यहाँको मन्दिरनिर्माणको वास्तुशैली एकैप्रकारको भएको मैले पाएको थिएँ। ढुङ्गैढुङ्गाबाट निर्माण गरिएका मन्दिरहरू सुन्दर हुनुका साथै धेरै वर्ष टिक्ने पनि हुँदारहेछन्। मद्रासका सबैका घरमा बिहानै उठेर घरको आँगन लिपेर सुन्दर रेखी हालेर पूजा गर्ने चलन हुँदोरहेछ। स्त्रीपुरुष सबैले निधारमा सेतो विभूति लेपन गर्दा रहेछन्। प्रायः सेता धोतीहरू लगाउने र कमै मान्छेलेमात्रै जुत्ता लगाउने गर्दा रहेछन्। उनीहरूको भाषामा स्वागतम् भनेर भन्दा ओडक्कम् भन्ने गर्दा रहेछन्।


श्रीमीनाक्षीको मन्दिर, मद्रास, तमिलनाडु

मद्रासको भ्रमण गर्ने क्रममा हामीहरू महिलापुरम्का साथै विभिन्न सुन्दर शहरहरूमा पनि गएका थियौँ। त्यस समयमा त्यहाँ महिलाहरूलेमात्रै पढ्ने विश्वविद्यालयमा हामीहरूलाई लगिएको थियो। त्यहाँ केही महिलाहरू अत्यन्त सुन्दरी वैजयन्तीमाला र श्रीदेवीजस्ता हुँदारहेछन् भने केही महिलाहरू हेर्नै नहुने काला पनि हुँदा रहेछन्। हामीहरूलाई त्यहाँ विभिन्न विद्यालयहरूमा घुमाइयो र मद्रास शहरबाट निकै टाढा समुद्रको किनारामा रहेको महाबली

पुरम् भन्ने ऐतिहासिक ठाउँमा पनि बसबाट लगिएको थियो। त्यहाँ ढुङ्गाबाट बनेका ठूलाठूला हात्तीका मूर्तिहरूका साथै पाण्डवहरूको वनवासका समयका मूर्तिहरू पनि ढुङ्गाबाटै तयार गरिएका रहेछन्। समुद्रको किनारा भएको र समुद्रले बारम्बार छालले हिर्काइरहने हुँदा मलाई त्यो ठाउँ अत्यन्त आकर्षक र रमाइलो लागेको थियो। हामीहरूलाई त्यहीँ नै वनभोजसमेत ख्वाइएको थियो। हामीहरूले मद्रासमा जैमिनी फिल्मस्टुडियोमा भ्रमण गरेका थियौँ र नायक जैमिनी गणेशन्लाई समेत भेटेका थियौँ। त्यस बेला त्यस स्टुडियोमा वैजयन्तीमाला र दिलीपकुमारले खेलेको पैगाम भन्ने हिन्दी फिल्मको सुटिङ भइरहेको थियो।


महाबलीपुरम्, तमिलनाडु, सन् १९५९ डिसेम्बर ६

त्यसरी मद्रासको भ्रमण समाप्त गरेर त्यहाँबाट हामीहरू सानू मिटरगेजको ट्रेनमा चढेर मैसूर गएका थियौँ। मैसूर पुगेर सर्वप्रथम श्रीरङ्गपट्टम्मा हामीहरूले भगवान् विष्णु श्रीरङ्गनाथको दर्शन गरेका थियौँ। त्यसपछि प्रसिद्ध चामुण्डाहिलमा गएर महिषासुर–मर्दिनी चामुण्डा देवीको हामीहरूले दर्शन गरेका थियौँ। ती देवी त्यहाँका पूर्वराजाहरूकी कुलदेवी रहिछन्। महिषासुर शब्दको अपभ्रंश भएर नै मैसूर शब्द बन्नुकासाथै त्यसैबाट मैसूर राज्यको नामसमेत रहन गएको रहेछ। त्यहाँ प्राचीन समयका राजाहरूका भव्य दरवारहरूकासाथै प्रसिद्ध योद्धा टिपुसुल्तानको समाधिमा पनि हामीहरूले भ्रमण गरेका थियौँ। मैसूरमा प्राचीन र अर्वाचीनको अत्यन्त राम्रो सम्मिश्रण भएको रहेछ। त्यस बेला मैसूर प्रदूषण र कोलाहलबाट मुक्त भएको अत्यन्त सुन्दर शहरको रूपमा मैले पाएको थिएँ। मैसूरमा हामीहरूले एक रात वृन्दावन गार्डेनको पनि अवलोकन गरेका थियौँ। पवित्र कृष्णानदीमा बाँध बाँधेर त्यो वृन्दावन गार्डेन बनाइएको रहेछ। रङ्गिचङ्गी विजुलीका बल्बहरू लगाएर पानीका फोहाराहरू रातमा छोड्दा अत्यन्त मनमोहक दृश्यहरू देखिँदारहेछन्। सातै थरी रङ्ग मिसिएका पानीका फोहोराहरू वृन्दावन गार्डेनभरि नै छोडेर

हामीहरूलाई देखाइएको थियो। सोही दृश्य नै हिन्दीचलचित्र “झनक झनक पायल बाजे”मा दृश्याङ्कन गरिएको कुरा मैले त्यसबेला सुनेको थिएँ। त्यहाँको सारा चमत्कार विजुली बत्तीकै थियो।

त्यहाँको भ्रमण समाप्त गरेर त्यहाँबाट हामीहरू मैसूरको राजधानी बङ्लोर गएका थियौँ। प्राकृतिक सौन्दर्यका साथै आधुनिक निर्माणसमेतको सम्मिश्रणले बङ्लोर शहर अत्यन्त सुन्दर देखिन्थ्यो। त्यहाँ लालबाग लगायतका विभिन्न पार्कहरूमा हामीहरूले भ्रमण गरेका थियौँ। त्यहाँको विधानसभाभवन अत्यन्त राम्रो र आकर्षक थियो। केही दिन बङ्लोर घुमेर ट्रेनबाटै हामीहरू मुम्बई गएका थियौँ।

मुम्बईमा ७ दिनसम्म हामीहरू बसेर त्यहाँका विभिन्न स्थानको भ्रमण गरेका थियौँ। गेटवे अफ इण्डियाको नामले प्रसिद्ध समुद्रको तीरमा रहेको मूलढोकाबाट छिरेर हामीहरू पानीजहाज चढेर समुद्रको बीचमा रहेको इलिफेण्ट केभमा गएका थियौँ। त्यहाँका गुफाहरू प्राचीन समयका मानिसहरूले खोपेर बनाएका रहेछन्। जता हेरे पनि समुद्रै समुद्र देखिने हरियालीपूर्ण त्यो स्थान अत्यन्त रमणीय देखिन्थ्यो। त्यसपछि हामीहरू मुम्बईबाट बाहिर पहाडको फेदीमा पर्ने आर्. ए. मिल्क कोलोनी भन्ने ठाउँमा पनि गएका थियौँ। त्यहाँ विशालरूपमा भैँसीपालन गरेर मुम्बई शहरलाई दूधको आपूर्ति गरिँदो रहेछ। त्यहीँ रहेको विशाल नदीलाई बाँधेर मुम्बई शहरका लागि खाने पानीको पनि आपूर्ति गरिँदो रहेछ। हामीहरूलाई त्यहाँ भव्यरूपमा वनभोज गराइएको थियो। हाम्रो एकहप्ता लामू मुम्बई बसाइका समयमा हामीहरूले हिन्दीचलचित्र निर्माण गर्ने सेन्ट्रल स्टुडियोको अवलोकन गरेका थियौँ र त्यहाँ भइरहेको सुटिङ्गसमेत हेरेका थियौँ। त्यसका अतिरिक्त जुहुबिचमा रहेको कमला नेहरू पार्कको भ्रमणका साथै समुद्रमा पानीजहाजद्वारा हामीहरूले यात्रा पनि गरेका थियौँ।

उपर्युक्त अनुसार मुम्बईको ७ दिने बसाइ समाप्त गरेर हामीहरू त्यहाँबाट सन् १९५९ डिसेम्बर २३ तारिखका दिन ट्रेनद्वारा भारतको राजधानी नयाँदिल्ली पुगेका थियौँ। दिल्ली पुगेको भोलिपल्टै डिसेम्बर २४ तारिखका दिन हामीहरूलाई दिल्लीको यमुनाको तीरमा रहेको राजघाट अर्थात् महात्मा गान्धीको समाधिस्थलमा लगिएको थियो। हामीहरूले त्यहाँ

माल्यार्पण गरेका थियौँ ।

त्यसै दिन अपराह्न हामीहरूले दिल्लीमा मुगलराजा अकबरको पालामा बनेको ऐतिहासिक लालकिल्लाको भ्रमण गरेर अत्यन्त प्रभावित भएका थियौँ । त्यसपछि हामीहरू बिडालाले निर्माण गरेको गीतामन्दिरमा गएका थियौँ । सन् १९४७ मा हत्यारा नत्थुराम गोडसेले महात्मागान्धीको त्यही गीताभवनमा भजन गर्दागर्दै हत्या गरेको थियो । रामनाम जपेर बसिरहेका महात्मागान्धी जस्ता आध्यात्मिक व्यक्तिलाई पनि निर्ममतापूर्वक हत्या गरेको सुनेर मलाई अत्यन्त दुःखको अनुभूति भएको थियो । त्यताबाट गएर हामीहरू कुतुबुद्दिनका पालामा निर्माण गरिएको अग्लो कुतुबमीनारमा चढेका थियौँ । त्यहाँबाट दिल्लीको सम्पूर्ण भाग देखिनेरहेछ । त्यसपछि हामीहरू दिल्लीका अरू दर्शनीय स्थानहरू घुम्दै आफ्नू वासस्थान ट्रेनमा नै फर्किएका थियौँ ।


महात्मागान्धीको समाधिमा माल्यार्पण गर्दै ।

अर्को दिन हामीहरू भ्रमणकै सन्दर्भमा नयाँदिल्लीमा रहेका प्रसिद्ध देवीदेवताका मन्दिरहरूमा जानुका साथै अपराह्न नयाँदिल्लीमा रहेको अल इण्डिया रेडियोको नेपाली विभागको स्टुडियोमासमेत गएर अवलोकन गरेका थियौँ । त्यस समयमा हाम्रासाथमा गएका सुश्रीमृदुला थापा र सुश्रीसुमित्रा वैद्यले स्टुडियोमा नेपाली गीत गाएका थिए । नयाँदिल्ली पुगेको चौथो दिन अर्थात् डिसेम्बर २६ तारिखका दिन बिहान भारत सरकारका तत्कालीन केन्द्रीय शिक्षामन्त्री श्रीएस्. के. श्रीमालीलाई भेट्न हामीहरू शिक्षा मन्त्रालयमा गएका थियौँ । उहाँले हामीहरूसँग


अलइण्डिया रेडियो नेपाली विभाग, नयाँदिल्ली


केन्द्रीय शिक्षामन्त्री श्रीएस्.के.श्रीमालीकासाथ


नेपाली राजदूतावासले आयोजना गरेको रात्रिभोजमा

नेपालको शिक्षानीति र शिक्षा विकासका बारेमा धेरै लामू छलफल गर्नुभएको थियो । हामीहरूले उहाँकै साथमा दिनको भोजन पनि गरेका थियौँ । त्यसै रात नयाँदिल्लीस्थित नेपाली राजदूतावासले हाम्रो सम्मानमा रात्रिभोजको आयोजना गरेको थियो । त्यसबेला त्यहाँ राजदूत श्रीदमन शम्शेर राणा हुनु हुन्थ्यो ।

सन् १९५९ डिसेम्बर २७ तारिखका दिन दिल्लीबाट केही टाढा आगरामा रहेको विश्वको सातौँ आश्चर्यमा पर्ने ताजमहलको पनि हामीहरूले अवलोकन गरेका थियौँ । त्यो ताजमहल मुगल बादशाह शाहजाँहले आफ्नी स्वर्गीया पत्नी मुमताजको नाममा बनाएका थिए । त्यसैकारण त्यस स्मारकको नाम नै ताजमहल रहन गएको हो । त्यो ताजमहल संसारको एउटा उत्कृष्ट स्मारकहरूमध्येमा पर्दछ र त्यसलाई युनेस्कोले संरक्षित स्मारकको रूपमा सूचीकृतसमेत गरेको छ । वास्तवमा त्यो ताजमहल जति हेरे पनि हेरिरहुँ जस्तो लाग्दछ । जूनेली रातमा ताजमहललाई हेर्न जानेहरू प्रशस्त हुँदारहेछन् । जुनेली रातमा त्यो ताजमहल अत्यन्त आकर्षक र सुन्दर देखिन्छ भनिँदोरहेछ । तर हामीहरू भने झलमल्ल घाम लागेको दिनमा गएका हुँदा जुनेली रातको अनुभूति गर्न नै पाएनौँ तापनि ताजमहल अत्यन्त सुन्दर मलाई लागेको थियो । त्यताबाट हामीहरू फत्तेपुरसिक्री गएका थियौँ । त्यहाँको दरबार अत्यन्त विशाल र प्राचीन मुगलवास्तुकलाको नमुना नै रहेछ । त्यहाँ राजा अकबरकी हिन्दूरानीले पूजा गर्ने मन्दिरका साथै राजा अकबरका मन्त्री वीरबलको बस्ने भवनको समेत हामीहरूलाई अवलोकन गराइएको थियो । त्यहाँ राजा अकबरका समयका प्रसिद्ध सङ्गीतकार तानसेन र बैजुबाबराले शास्त्रीय सङ्गीत गाउने गरेको स्थान पनि देखाइएको थियो ।

त्यसपछि अर्को दिन हामीहरू त्यहाँबाट भगवान् श्रीकृष्णको जन्मस्थल मथुरा गएका थियौँ । मथुरामा हामीहरूले श्रीकृष्णाको जन्मस्थानका साथै भगवान् श्रीकृष्णाकोसमेत दर्शन गरेका थियौँ । भगवान् श्रीकृष्ण जन्मेको तत्कालीन मथुराका राजा कंसको कारागारलाई मुगलकालका अन्तिम

राजा औरङ्गजेबले भत्काएर मस्जिद बनाएका रहेछन् । पछि हिन्दुहरूले भगवान् श्रीकृष्णाको जन्मस्थानको सम्झनाका निमित्त त्यही मस्जिदसँगै जोडेर भगवान् श्रीकृष्णको जन्मस्थलमा मन्दिर बनाएर सुरक्षित बनाएका रहेछन् । वास्तवमा हिन्दुहरूका ऐतिहासिक पवित्र स्थलहरूलाई नाश गरेर मुसलमानहरूले त्यहाँमात्रै होइन काशी, अयोध्या, सोमनाथलगायत धेरै ठाउँहरूमा अतिक्रमण गरेर मस्जिद बनाएको देखिन्छ । आफ्नू धर्मलाई बढाउनका लागि अरूको धर्मलाई नाश गर्ने मुसलमानहरूको नीच मनोवृत्ति देखेर मलाई अत्यन्त दुःख लागेको थियो । मैले २०५२ सालमा काशीको यात्रा गर्दा काशीविश्वनाथको मन्दिर भत्काएर मुसलमानहरूले आफ्नू मस्जिद बनाएको जघन्य काम देखेको थिएँ । त्यस बेला मैले अत्यन्त भावुक भएर त्यहीँ बसेर मन्दाक्रान्ता छन्दमा कविता लेखेर त्यस घृणित कार्यको विरुद्धमा आफ्नो आक्रोश व्यक्त गरेको थिएँ । मैले २०५४ सालमा पाकिस्तानको भ्रमण गर्दा त्यहाँ हिन्दूहरू र हिन्दूमन्दिरहरूमाथि भएको अत्याचारको विरुद्धमा पनि कविता लेखेर मेरो कविता सङ्ग्रह विविधयात्रा २०५५ मा प्रकाशन गरेको थिएँ । हाम्रो धर्मप्रति भएको त्यसप्रकारको जघन्य अतिक्रमण देखेर मलाई भित्रैदेखि अशान्ति भएको थियो । मथुरा शहरमा घुम्दाघुम्दै हाम्रो वृन्दावन जाने कार्यक्रम त्यसै स्थगित भएको थियो । साँझमा यमुनानदीको पूजाआजाका साथै भगवान् श्रीकृष्णको पूजाआजा र दर्शनपछि हामीहरू त्यहीँबाट ट्रेन चढेर काशीतर्फ प्रस्थान गरेका थियौँ । काशी पुगेर हामीहरूले गङ्गाको जलसेचन गर्नुका साथै भगवान् श्रीविश्वनाथको समेत दर्शन गरेका थियौँ । समय अत्यन्त छोटो भएको हुँदा हामीहरूले काशीमा घुमेर अरू देवीदेवताहरूको दर्शन गर्ने र शहरको अवलोकन गर्ने अवकाशै पाएका थिएनौँ ।

त्यसपछि सन् १९५९ डिसेम्बर २९ तारिखका दिन अबेर रातमा काशीबाट ट्रेन चढेर हामीहरू काठमाडौं फर्कने क्रममा विहारको राजधानी पटना गएका थियौँ । डिसेम्बर ३० तारिखका दिन हामीहरू पटनाबाट अपराह्न डकोटा हवाइजहाजबाट काठमाडौं फर्किएका थियौँ । हामीहरूलाई भ्रमणको अवधिभर भारत सरकारको केन्द्रीय शिक्षामन्त्रालयबाट खटिएर आएका सम्पर्क अधिकारी श्रीसुदर्शन मल्लिकले हाम्रो अत्यन्त सेवा पुऱ्याउनु भएको

थियो। अन्त्यमा हामीहरूलाई उहाँले नै स्वागत सत्कारका साथ बिदा गर्नु भएको थियो । म त्यस बेला साह्रै अबोध भएको र भर्खरै पढ्न थालेको हुँदा अङ्ग्रेजी, हिन्दी र अरू भारतीय भाषाहरू पनि बोल्न सक्तिन थेँ। भ्रमणको अवधिभरि भाषाको कारण मैले भ्रमणबाट जे जस्तो फाइदा उठाउनुपर्दथ्यो त्यो उठाउन सकेको थिइन । म एक किसिमले साथीहरूकै भर परेर आफ्नू व्यवहार चलाउने गर्दथेँ। मैले जीवनमा प्रथम पटक नेपालको सीमा काटेर विदेशको भ्रमण गरेको थिएँ। मलाई भ्रमणका अवधिभरि सबै कुरा नौला र आश्चर्यजनक लागेका थिए। मैले त्यस भ्रमणबाट धेरै नभए पनि केही जान्ने र सिक्ने मौकाभने अवश्य पाएको थिएँ।



भारतभ्रमणपछि पटना विमानस्थलबाट काठमाडौँतर्फ उड्ने क्रममा

भ्रमणमा गएका विभिन्न कलेज र विश्वविद्यालयहरूमा अध्ययन गर्ने मित्रहरूमा श्रीकृष्णबहादुर प्रधान (त्रि.वि.वि.), श्रीखड्गमान श्रेष्ठ (दरबार कलेज), श्रीमधुप्रसाद शर्मा (ल कलेज), श्रीमदनबहादुर खत्री (पाटन कलेज), श्रीपरशुराम भट्टराई (नेशनल कलेज), श्रीराजेन्द्र श्रेष्ठ (धनकुटा कलेज), सुश्रीसुमित्रा वैद्य (कमर्श कलेज), सुश्रीमृदुला थापा (त्रिचन्द्र कलेज), श्रीगोपालप्रसाद उपाध्याय (मोरङ कलेज), श्रीकपिल चित्रकार (त्रिचन्द्र कलेज), श्रीकेशवबहादुर थापा (नेपालगञ्ज कलेज) र टोली नेतामा त्रिभुवन विश्वविद्यालय राजनीतिशास्त्रका प्राध्यापक श्रीबी.सी.मल्ल हुनुहुन्थ्यो । त्यसरी ४ हप्ताको हाम्रो भारत भ्रमण पूर्ण भएको थियो ।

उपर्युक्त अनुसार भारत भ्रमणबाट फर्किएपछि म झन् ध्यान दिएर अध्ययनमा लागेको थिएँ र सबै परीक्षाहरूमा सफलताका साथ म उत्तीर्ण पनि हुँदै गएको थिएँ। साहित्य विषय लिएर उत्तरमध्यमा उत्तीर्ण भएपछि श्रद्धेय प्रधानाचार्य श्रीपद्मप्रसाद भट्टराईज्यूको निर्देशन अनुसार मैले शाङ्करवेदान्त विषय लिएर प्राध्यापक श्रीगोपालनिधि तिवारीज्यूसँग पढ्न थालेको थिएँ। उहाँ अत्यन्त मृदुभाषी, शान्त र करुणाका प्रतिमूर्ति हुनुहुन्थ्यो। त्यसका साथै तीनधारा संस्कृत-छात्रावास, संस्कृतमहाविद्यालय र नेशनल कलेजमा समेत

मैले विद्यार्थीको क्रियाकलापमा पनि नेतृत्व दिने काम जारी नै राखेको थिएँ। म साहित्यप्रतियोगिता, वक्तृत्वकलाप्रतियोगिता र खेलकूदप्रतियोगितामा समेत सक्रियतापूर्वक भाग लिने गर्थें। साहित्यप्रतियोगिता र वक्तृत्वकलाप्रतियोगितामा म धेरैजसो प्रथम र द्वितीय भइरहन्थेँ। कसरी बोल्ने र लेख्ने भन्ने सम्बन्धमा संस्कृतछात्रावासमा आपसमा छलफल भइरहन्थ्यो र अग्रज विद्यार्थीनेताहरूले अनुज विद्यार्थीहरूलाई सिकाउने र प्रशिक्षण दिने गरिन्थ्यो। त्यसैकारणले जस्तोसुकै सामान्य विद्यार्थी पनि संस्कृतछात्रावासमा प्रवेश गरिसकेपछि तीक्ष्ण र सिपालु भइहाल्थ्यो। मैले पनि त्यो सबै सिक्ने मौका पाएको थिएँ। त्यतिमात्र नभएर कसरी पत्रिका पढ्ने, कुन किताब पढ्दा बढी दक्ष होइन्छ, राष्ट्रिय र अन्तर्राष्ट्रिय विषयका समाचारहरू कसरी जान्ने भन्ने सम्बन्धमा पनि तालीम र छलफल चलिरहन्थ्यो। त्यसका लागि छात्रावासभित्रै एउटा पुस्तकालय, वाचनालय र रेडियोको समेत व्यवस्था गरिएको थियो।


लेखकको भारत भ्रमणको बेलाको तस्वीर, २०१६

संस्कृतछात्रावास त्यससमयमा नयाँ भर्ना भएका विद्यार्थीहरूका लागि सबै कुराको तालीम दिने तालीमकेन्द्र नै बनेको थियो। अरू कुराहरूका साथसाथै विभिन्न समूहहरूमा बाँडिएर सैद्धान्तिकरूपमा राजनीतिक प्रशिक्षण पनि हामीहरू लिनेदिने गर्दथ्यौँ।

त्यसबेला संस्कृतजगत्मा नियमितरूपमा संस्कृत भाषामा लेखिएका प्रसिद्ध नाटक र नाटिकाहरूको अनवरतरूपमा मञ्चन गर्ने गरिन्थ्यो। त्यसका अतिरिक्त साहित्यसम्मेलन, वादविवाद प्रतियोगिता र विभिन्न सांस्कृतिक कार्यक्रमहरूसमेत देशव्यापीरूपमा नै आयोजना गर्ने गरिन्थ्यो। म संस्कृत छात्रावासमा भर्ना भएपछि खेलिएको संस्कृतसाहित्यका प्रसिद्ध महाकवि श्रीभासद्वारा लेखिएको स्वप्नवासवदत्तम् भन्ने नाटकमा सर्वप्रथम म सहभागी भएको थिएँ। सो नाटक संवत् २०१६ साल असार १५ गतेका दिन नारायणहिटी राजदरवारमा श्री ५ महेन्द्रलाई देखाइएको थियो। त्यस नाटकमा मैले तापसकुमारको पाठ खेलेको थिएँ। नाटकको पुनर्लेखन प्रा.



नारायणहिटी राजदरबारमा संवत् २०१६ साल आषाढ १५ गते मञ्चन गरिएको स्वप्नवासदत्तम् संस्कृत नाटकको प्रदर्शनपछि श्री ५ महेन्द्रका साथ लिइएको सामूहिक तस्वीर ।

श्रीचूडानाथ भट्टराईले गर्नुभएको थियो र त्यसको निर्देशन पण्डित श्रीतोयनाथ शर्माले गर्नुभएको थियो । सूत्रधारका रूपमा श्रीविश्वनाथ रूपाखेती हुनुहुन्थ्यो भने नायक र नायिकामा क्रमशः श्रीआत्मा शर्मा चापागाईं र कुमारी अम्बिका आचार्य हुनुहुन्थ्यो । त्यस नाटकका विभिन्न पात्रहरूमा संस्कृतछात्रावासका साथीहरू नै धेरैमात्रामा समावेश गरिएका थिए । त्यसमा प्रा. श्रीविद्यानाथ उपाध्यायको विदूषकको भूमिका थियो । श्री ५ महेन्द्रले उक्त नाटक अत्यन्त मनोयोगका साथ हेरेका थिए र अन्त्यमा हामीहरूसँग उनले फोटो पनि खिचाएका थिए, जुन यहाँ प्रस्तुत गरिएको छ । उक्त अवसरमा प्रसिद्ध नाटककार श्रीबालकृष्ण समले आफ्नू रचना नवरस भावपूर्ण अभिनयका साथ प्रस्तुत गर्नुभएको थियो । त्यस अवसरमा राम्राराम्रा लोकगीतहरूका विभिन्न गायकहरूबाट गायन पनि प्रस्तुत गरिएको थियो । त्यस अवसरमा विभिन्न साँस्कृतिक कार्यक्रमहरू पनि प्रस्तुत गरिएका थिए । उक्त कार्यक्रमका सभापति कविशिरोमणि लेखनाथ पौडेल हुनुहुन्थ्यो भने सञ्चालकमा कवि श्रीमाधवप्रसाद घिमिरे हुनुहुन्थ्यो ।

त्यसपछि भने नेपाल संस्कृत छात्रसंघमा र संस्कृत छात्रावासमा समेत गुटबन्दी भएर विभाजन आएपछि त्यस प्रकारका रचनात्मक तथा सिर्जनात्मक कार्यक्रमहरू बन्द भएका थिए । त्यो कुरा संस्कृतजगत्का लागि अभिशापका रूपमा नै देखापरेको थियो । उता नेपाली काङ्ग्रेसको सरकारले पनि

आफ्नू घोषणापत्र अनुसार जनताका लागि अत्यन्त सक्रियताका साथ काम गर्न थालेको थियो । नेपाली काङ्ग्रेसका तत्कालीन नेता तथा महामन्त्री श्रीभद्र शर्मासँग हाम्रो राम्रो सम्बन्ध थियो । उहाँमार्फत् हामीहरू प्रधानमन्त्री श्रीविश्वेश्वरप्रसाद कोइरालालाई बारम्बार भेटिरहन्थ्यौँ र उहाँबाट निर्देशन पनि लिने गर्दथ्यौँ । त्यसबाट हामीहरूलाई अगाडि बढ्न अत्यन्त उत्साह र प्रेरणा प्राप्त हुने गर्दथ्यो । हामीहरू विभिन्न रचनात्मक र बौद्धिक क्रियाकलापहरू पनि सञ्चालन गर्दथ्यौँ । त्यस समयमा नेपाल संस्कृतछात्रसङ्घको राष्ट्रिय सम्मेलन हाम्रो समूहले लालदरबारमा आयोजना गरेको थियो र त्यसै समयमा नै हाम्रा प्रतियोगी अर्का थरी साथीहरूले पनि आफ्ना समूहको नेपाल संस्कृतछात्रसङ्घको भेला विश्वज्योति सिनेमाहलमा गरेका थिए । उपत्यका बाहिरबाट सम्मेलनमा भाग लिन काठमाडौं आउने छात्रप्रतिनिधिहरूलाई स्वागतसत्कार गर्ने र आफ्ना समूहमा तानेर लाने काम दुवै समूहबाट भएको थियो ।

त्यसरी हामीहरूले अर्को समूहको सम्मेलनस्थलबाट तानेर हाम्रो सम्मेलनस्थलमा ल्याइएका व्यक्तिहरूमध्येमा त्यस बेला पोखरा शाखाबाट प्रतिनिधित्व गरेर काठमाडौँ आएका श्रीरामचन्द्र पौडेल पनि हुनुहुन्थ्यो । उहाँ पहिले कम्युनिष्ट समर्थक विद्यार्थीहरूको प्रतिनिधि भएर काठमाडौं आउनुभएको थियो । अहिले उहाँ नेपाली काङ्ग्रेसका वरिष्ठ नेता हुनुहुन्छ । त्यसैगरी तानेर ल्याइएका अरू पनि धेरै छात्रप्रतिनिधिहरू थिए । अहिले उनीहरू सबैको नाम म सम्झन सक्तिन । सम्मेलन सम्पन्न भएर छात्रसङ्घको निर्वाचन पनि सम्पन्न भएको थियो । सभापतिमा श्रीपशुपतिनाथ आचार्य र महासचिवमा श्रीपीताम्बर दाहाल चुनिएका थिए । कार्यसमितिमा म पनि छानिएको थिएँ । त्यसरी हामीहरू विद्यार्थीको नेतृत्व गर्दै अगाडि बढिरहेका थियौँ ।

संवत् २०१७ साल मङ्सिर १५ गतेदेखि तीनधारा छात्रावास–भित्रको सुधार र समष्टिमा संस्कृतजगत्को सुधारका लागि तत्कालीन सरकारसँग हाम्रो विद्यार्थी समूहले विभिन्न मागहरू राखेर हड्ताल गरेको थियो । छात्रावासभित्रको खानापिना बन्द गर्नुका साथै विद्यालयहरूमा अध्ययनअध्यापनको कामसमेत बन्द गराएका थियौँ । छात्रावासभित्र खानापिना

बन्द गराइएकाले हामीहरू छात्रावासभन्दा बाहिर गएर खाना खानेगर्दथ्यौँ । हामीहरूसँग भिन्न विचार राख्ने विद्यार्थीहरूले छात्रसङ्घको कार्यालय लूटेर लगेको दिनदेखि नै छात्रावास छोडेर उनीहरू बाहिर नै बस्न थालेका थिए । त्यसबेला उनीहरू छात्रावास बाहिर बसेर के काम गर्दथे हामीहरूलाई थाहा थिएन । यता हामीहरू भने सम्पूर्ण विद्यार्थीहरूको भलाइका लागि सरकारले दिएको खानासमेत वहिष्कार गरेर सरकारकै विरुद्धमा सङ्घर्षमा उत्रिएका थियौँ । म संस्कृत पढ्ने विद्यार्थीहरूको नेतृत्वका साथै अन्तर्कलेज यूनियनको अध्यक्ष पनि भएर काम गर्दथेँ । त्यस यूनियनमा पब्लिक कमर्सकलेजबाट श्रीमार्शल जुलुम र अरू पनि विभिन्न कलेजका छात्रप्रतिनिधिहरू सम्मिलित थिए । त्यस बेला नेपाल छात्रसङ्घ भन्ने एउटा पुरानो छात्रसङ्घ पनि काठमाडौँमा थियो । त्यो छात्रसङ्घ प्रजातान्त्रिक विचारधाराका विद्यार्थीहरूको सङ्गठन थियो । अर्कोतर्फ कम्युनिष्टविचारधारा राख्ने विद्यार्थीहरूले खोलेको नेपाल स्टुडेण्टफेडरेसन भन्ने सङ्गठन पनि क्रियाशील थियो । नेपाल छात्रसङ्घमा श्रीश्रीरङ्ग पाठक, श्रीसीताराम भण्डारी, श्रीध्रुवराम भण्डारी, श्रीपीताम्बर दाहाल, सुश्री कुन्दन शर्मा, सुश्री गौरी राणा, सुश्री शैलजा आचार्य र मसमेतका विद्यार्थी प्रतिनिधिहरू समाविष्ट थियौँ । हामीहरूले माग राखेर संस्कृत छात्रावासमा हड्ताल गरिरहेका हुँदा त्यसको समर्थनमा अरू शिक्षणसंस्थामा अध्ययन गर्ने विद्यार्थीहरूको र विद्यार्थी सङ्गठनहरूको पनि समर्थन लिएर हामीहरू सरकारलाई दबाब दिन चाहन्थ्यौँ ।

त्यसरी हाम्रो हडताल चलिरहेकै बेला दुर्भाग्यले 'मान्छे ताक्छ मुढो बञ्चरो ताक्छ घुँडो' भन्ने उखान चरितार्थ भएको थियो । हामीहरूले समयको अदृश्य गतिलाई देख्न सकेनछौँ र तुरुन्तै पर्न आउने समयको अनिष्टकारी वज्रपातलाई पनि अनुमान गर्न सकेनछौँ । २०१७ साल पुस १ गते पनि बिहानैदेखि हाम्रो हडतालको कार्यक्रम यथावत् चालू रहेको थियो । त्यसै दिन थापाथलीमा नेपाल तरुणदलको राष्ट्रियसम्मेलनको उद्घाटन प्रधानमन्त्री तथा नेपाली काङ्ग्रेसका नेता श्रीविश्वेश्वरप्रसाद कोइरालाका हातबाट हुने कार्यक्रम थियो । उक्त कार्यक्रममा भाग लिन श्रीपीताम्बर दाहालसहितका केही साथीहरू त्यहाँ गएका थिए । अरू केही साथीहरूलाई विभिन्न दायित्व

दिएर मैले काम लगाएको थिएँ । म सबै व्यवस्था मिलाएर महाविद्यालयतर्फका विद्यार्थीहरूलाई परिचालन गर्न महाविद्यालय पुतलीसडकमा गएको थिएँ । त्यसबेला हामीहरूले पढ्ने संस्कृतमहाविद्यालयको भवन शङ्करदेव क्याम्पस रहेको भवनको पूर्वपट्टि हाल सुपरमार्केट बनेको ठाउँमा राणाजीको पुरान् दरबारमा थियो । म दिनको १२ बजे महाविद्यालयमा पुगेर विद्यार्थीहरूसँग महाविद्यालयको छात्रसङ्घको अध्यक्षको नाताले भेटघाट गरी बैठक बसाएर हाम्रो आन्दोलनलाई समर्थन गर्न सक्रिय गराएर दिनको १ बजेतिर संस्कृत छात्रावास फर्किएको थिएँ । म वागबजार नजिकै आइपुग्दा एक जना मित्रले प्रधानमन्त्री लगायत सम्पूर्ण मन्त्रीहरू र नेपाली काङ्ग्रेसका नेताहरूलाई पनि शाही सेनाले तरुणदलको समारोहस्थलबाटै बिहान ११ बजे समातेर अज्ञात स्थानतर्फ लगेको  अपत्यारिलो खबर अप्रत्याशित सुनाएका थिए ।

मैले त्यसकुरालाई विश्वासै गर्न सकिन र सरासर छात्रावास गएको थिएँ । म छात्रावासमा पुग्दा त्यो अशुभ समाचार छात्रावासका साथीहरूले पनि थाहा पाइसकेका रहेछन् । हामीहरू तीनछक र अलपत्रसमेत परेका थियौँ । जुन कुरा असम्भव लाग्दथ्यो त्यही कुरा भएको थियो । भर्खरै १८ महिनादेखि चलेको नेपाली काङ्ग्रेसको सरकार त्यति चाँडै पतन हुन्छ भन्ने कुरामा सहज विश्वास गर्न सकिँदैनथ्यो । तर राजा महेन्द्रले असम्भव र अपत्यारिलो कुरालाई सम्भव बनाएर देखाएका थिए । साँच्चै भन्ने हो भने उनी आफैँले आफ्ना खुट्टामा बञ्चरो हानेका थिए । तरुणदलमा भाग लिन गएका श्रीपीताम्बर दाहालसमेतका साथीहरू आफ्नू ज्यान जोगाएर साँझपख छात्रावासमा फर्किएपछि उनीहरूले हडतालमा बसेका साथीहरूसमेतलाई भेला गरेर थापाथलीमा घटेको षड्यन्त्रपूर्ण रक्तविहीन सत्तापलटको घटनाको विवरण सुनाएका थिए । हामीहरू किंकर्तव्यविमूढ भएका थियौँ । हामीहरूले चारैतिर अँध्यारो देखेका थियौँ । जुन सरकारसँग माग राखेर हड्ताल र अनसनमा हामीहरू उत्रिएका थियौँ । उही सरकार नरहेपछि हड्ताल र अनसन गर्नुको कुनै अर्थ थिएन । त्यसै हुनाले हामीहरूले तुरुन्तै आफ्ना सबै कार्यक्रमहरू समाप्त गरेका थियौँ ।

उक्त घटना अत्यन्त विषादपूर्ण भएको र कसैले पनि के भएको र किन भएको भन्न नसक्ने हुँदा सो कुरा पत्ता लगाउन हामीहरू साँझपख ४ बजेतिर

छात्रावासबाट निस्किएर टुँडिखेलमा गएका थियौँ। बाटोमा खास मान्छे हिँडिरहेका थिएनन्। सेनाका केही वाहन दौडिरहेका थिए र प्रहरीको केही हलचल देखिन्थ्यो। टुँडिखेलको छेउमा पुग्दा त्यहाँ केही जिज्ञासु मानिसहरू जम्मा भएका थिए। पुसको महिना, जाडोको समय र त्यसमा पनि धुम्मिएको दिन भएको हुँदा चारैतिर अँध्यारो र विरक्त लाग्दो वातावरण थियो। त्यसमा पनि  प्रजातन्त्रको अपहरण भएको समाचार चारैतिर फैलिएपछि सबैको अनुहार मलिन र उदास देखिन्थ्यो। एउटा पसलको छेउमा मानिसहरू जम्मा भएको देखेपछि हामीहरू समाचार सुन्न र कुरा बुझ्न त्यतैतर्फ गएका थियौँ। पसलमा रेडियो खोलेर मानिसहरूले समाचार सुन्न लागेका रहेछन्। रेडियोले केही खबर भनिहाल्छ कि ! भनेर हामीहरू पनि रेडियोको नजिकै गएर उभिएका थियौँ। रेडियोले सो रक्तविहीन सत्ता पलटको खबर दिउँसो साढे १ बजे नै भनिसकेको रहेछ। तर सो कुरा हामीहरूलाई थाहै थिएन। त्यति बेला गएर रेडियो सुन्न हामीहरूले कान दिएका थियौँ। रेडियो नेपालले श्री ५ महेन्द्रको शाही घोषणाको सूचना प्रसारण गरिरहेको थियो। हामीहरू उत्सुकता र विषादका साथ शाही घोषणा सुन्न त्यहीँ बसिरह्यौँ।

केहीबेरपछि दिउँसो प्रसारण भइसकेको शाही घोषणाको टेप पुनः प्रसारित भएको थियो। उक्त घोषणामा रौँ नै ठाडा हुने गरी प्रधानमन्त्री श्रीविश्वेश्वरप्रसाद कोइराला र उनको नेपाली काङ्ग्रेसको सरकारले नेपालको सार्वभौमिकता, राष्ट्रिय अखण्डता र नेपाली जनताका विरुद्ध भयङ्कर अपराध गरेकोले सो सरकारलाई खारेज गरेर प्रधानमन्त्री लगायत राजनेताहरूलाई गिरफ्तार गरिएको भनी अतिरञ्जनापूर्ण गम्भीर आरोपसमेत लगाइएको थियो। सो शाही घोषणाको पूर्ण विवरण निम्न अनुसार छः–

‘आगे प्यारा प्रजा गैह्रके यथोचित

जनताले छानेका प्रतिनिधिहरूले नै देशप्रति ज्यादा जिम्मेवारी महसूस गरी प्रजातन्त्रको जग मजबुत हुने वातावरण पैदा गर्दछन् र देशमा स्थिरता आइ विकास द्रुत गतिले हुन्छ भन्ने विश्वास लिई करीब २ वर्ष अघि देशमा आम चुनाव गराएको सबैमा विदितै छ। फलस्वरूप नेपाली काङ्ग्रेस बहुमतमा आयो र जनताको विश्वास प्राप्त गरेको पार्टीलाई संविधान अनुसार

शासनभार सुम्पी देशप्रतिको जिम्मेवारीको हिस्सेदार बनाउन पाउँदा अत्यन्तै सन्तोष लाग्नुको साथै केही वर्षदेखि देशमा भएको अस्थिरताले हामीमा पैदा गरेको चिन्ता हराउनु पनि स्वाभाविकै कुरा भएको थियो ।

त्यसपछि देशमा घटेको परिस्थितिको अध्ययन गरी हामीबाट समयसमयमा जनप्रतिनिधिहरू र सरकारमा रहेका व्यक्तिहरूलाईसमेत कर्तव्यबाट च्युत नहुने सङ्केत गरेको कुरा पनि सबैले सम्झेकै हुनुपर्छ । प्रजातन्त्रपद्धति अनुसार छानिएका प्रतिनिधिहरूद्वारा जनता र सरकारको बीचमा भएको भ्रमात्मक वातावरण राम्रोसँग सुल्झाइ राष्ट्रको हित र विकास गर्ने पूरा कोशिश हुनेछ भन्ने सबैले आशा एवं विश्वास गरेका थिए, तर ठीक यसको उल्टो प्रजातन्त्रपद्धतिको आडमा राष्ट्र र जनतालाई एकातिर पन्छाइ व्यक्तिगत र दलगत स्वार्थपूर्ति गर्नका लागि अधिकार प्रयोग गरियो ।

ऐनकानूनको मर्यादा नराखी छिटोछरितो र योग्य बनाउने नाममा यो मन्त्रिमण्डल देशको प्रशासनयन्त्र निष्क्रिय र आधारहीन बनाउने चेष्टामा लाग्यो । अधिकारदुरुपयोग हुँदा भ्रष्टाचार बढ्नुका साथै अनेकन भ्रान्ति पैदा गराइ प्रशासन यन्त्रमा पनि शिथिलता उत्पन्न भई देशमा शान्ति सुरक्षा कायम राख्न यो मन्त्रिमण्डल बिलकुल असमर्थ भएकाले र अराष्ट्रिय तत्त्वहरूले धेरैमात्रामा प्रोत्साहन पाइ राष्ट्रिय एकतामासमेत बाधा पुऱ्याउने वातावरण आउन लागेको पनि कसैमा नछिपेको तथा वैज्ञानिक विश्लेषण र वस्तुस्थितिको अध्ययनविना कोरा सिद्धान्तका आधारमा उठाइएका आर्थिक कदमहरूले समाजमा चाहिने परिवर्तनको सट्टा जनतामा अशान्त र दूषित वातावरणमात्र पैदा गरेकाले, राष्ट्रको हित तथा प्रजातन्त्रकै निमित्त पनि देशमा यस्तो स्थिति धेरै समयसम्म रहन दिनु उचित नभएकाले, देशको एकता, राष्ट्रियता र सार्वभौमिकता बचाउन, देशमा अमनचैन कायम राख्ने र देशलाई कुनै कारणबाट पनि बिग्रँदो स्थितिबाट बचाउने अन्तिम जिम्मेवारी पनि हामीमा भएकाले, उपरोक्त वातावरण हटाइ शान्तिसुरक्षा कायम राख्न र देशलाई सङ्क्रमण स्थितिबाट बचाउन बिशेष व्यवस्थाको जरुरत पर्न आएकाले तथा देश र जनताको हितलाईमात्र ध्यानमा राखी संविधानको धारा ५५ को अधिकार प्रयोग गरी यो मन्त्रिमण्डल र संसदका दुवै सदनहरूसमेत हामीबाट आज यो घोषणाद्वारा विघटन गरिबक्सेका

छौँ । कुनै नयाँ व्यवस्था गर्न केही समय लाग्नेहुँदा अर्को व्यवस्था नभएसम्म मुलुकको शासनभार हामीबाटै स्वयं ग्रहण गरिबक्सेका छौँ ।

हाललाई यसै घोषणाद्वारा संविधानका देहायका धाराहरू निलम्बन गरिबक्सेका छौँ । भाग २ का सबै धाराहरू, भाग ३ का सबै धाराहरू, भाग ४ को धारा ११ बाहेक अरू सबै धाराहरू, भाग ५ को धारा ५५ बाहेक अरू सबै धाराहरू, भाग ९ को परिच्छेद ३ तर धारा ७३ बाहेक र भाग १० का सबै धाराहरू ।

यस अवस्थाबाट सरकारी, जङ्गी तथा निजामती कुनै कर्मचारीहरूले आफ्नो जिम्मेवारी कामकर्तव्यबाट विचलित हुनु वा अल्मलिनु पर्दैन र सबैले आ–आफ्ना स्थानबाट आफ्ना कर्तव्य पालन गर्नेछन् र साथै सबै देशवासीहरूको सदिच्छाले नै देशमा सबै कुराको सुव्यवस्था हुनेछ भन्ने हामीलाई पूर्ण विश्वास लागेको छ । परराष्ट्र विषयमा हामीले दृढतापूर्वक आफ्नो तटस्थता अपनाई सबै मित्रराष्ट्रहरूसँग मित्रताको नीति नै कायम राख्नेछौँ र हामी देशमा र विश्वभर शान्ति र मित्रताको कामना गर्दछौँ ।

श्रीपशुपतिनाथले देश र जनताको कल्याण गरुन्, जय नेपाल ।'

उक्त घोषणा सुनेर हामीहरू छक परेका थियौँ । वास्तवमा विश्वासै लागेन तर पनि विश्वास गर्नु बाहेक अरू उपाय पनि थिएन । अत्यन्त उदासीनताका साथ हामीहरू रातमा छात्रावासमा फर्किएका थियौँ । हामीहरू फर्किँदा छात्रावासमा मैनवत्ती बालेर दीपावली गरेको देख्यौँ । त्यसबाट सारै छक परेर हामीहरूले साथीहरूसँग सोधपुछ गरेका थियौँ । सोधपुछ गर्दा त्यो कालरात्रिमा दीपावली गर्ने काम नेपाली काङ्ग्रेसको सरकारको सत्तापलटबाट खुशी भएका हामीहरूसँग भिन्न मत राख्ने अवसरवादी कम्युनिष्ट मित्रहरूको रहेछ । संस्कृतछात्रसङ्घको कार्यालय छात्रावासबाट लूटेर लगेका दिनदेखि गुप्तवास बसेका राजावादी कम्युनिष्ट विद्यार्थीहरू शाही घोषणा सुनेपछि तुरुन्तै छात्रावासभित्र पसेर दीपावली गरेका रहेछन् । वास्तवमा तथाकथित कम्युनिष्टसमर्थक ती विद्यार्थीहरू दरबारले कम्युनिष्टका विरुद्ध प्रयोग गरेका गुप्तचरहरू रहेछन् । हामीहरूलाई त्यस दिनमात्रै आएर त्यो कुरा थाहा भएको थियो । त्यस घटनापछि ती विद्यार्थीहरू बाहिर नाङ्गोरूपमै निस्किएर दरबारले गरेको पुस १ गतेको सत्तापलटको कार्यलाई समर्थन गर्न थालेका

थिए। उनीहरूले कम्युनिष्टको आवरणभित्र दरबारका लागि गुप्तचरी गरिरहेको कुरा छर्लङ्ग देखिएको थियो।

नेपालमा कम्युनिष्ट बढाउने काम मोहन शम्शेरले आफ्नो अन्तिम शासनकालमा काङ्ग्रेसको बढ्दो प्रभावलाई घटाउन आफ्ना सरदार उपेन्द्रपुरुष ढकालको सल्लाहअनुसार २००६ सालदेखि नै गरेका थिए अरे। सङ्गठन गर्न त्यसबेला मनमोहन मिश्रहरूजस्ता केही अवसरवादीहरू खटिएका थिए भन्ने सुनिन्छ। तर मोहन शम्शेरको समय छोटो भएको हुँदा कम्युनिष्टको नेपालमा बीजारोपण भए तापनि त्यसले आफ्नू सङ्गठन बढाउन सकेको थिएन। राणा शासनको पतनपछि देशमा विभिन्न गठजोडका सरकारहरू बन्दै गएका र असफल पनि हुँदै गएका थिए। राजा त्रिभुवनले घोषणा गरेको संविधान सभाको चुनाव पनि हुन सकेको थिएन। त्रिभुवन र महेन्द्रका बीचमा आपसी वैमनस्य बढ्दै गएको थियो। तत्कालीन युवराजाधिराज महेन्द्र अत्यन्त महत्वाकाङ्क्षी भएका कारणले उनले आफ्ना बाबुलाई सहयोग गरेर भारतमा गएका राजालाई फिर्ता ल्याएर नेपालमा पुनःस्थापना गराउने नेपाली काङ्ग्रेसको गुनको बदलामा उसकै विरुद्ध बलियो राजनीतिक सङ्गठन तयार गर्न मोहन शम्शेरले २००६ सालमा बीजारोपण गरेको कम्युनिष्टहरूको सङ्गठनलाई २००९ सालदेखि मलजल गरेर अगाडि बढाउन शुरु गरेका थिए भन्ने त्यस बेलाका राजनीतिक व्यक्तिहरूबाट मैले सुनेको थिएँ।

त्यसैबेलादेखि राजा महेन्द्रले कम्युनिष्टहरूको सङ्गठन दरबारबाटै सहयोग गरेर सञ्चालन गरेका थिए अरे। दरबारले पालनपोषण गरेका तिनैमध्येका केही कम्युनिष्टहरू तीनधारा संस्कृत छात्रावासमा भर्ना गरिएका रहेछन् र कम्युनिष्टको आवरणमा दरबारलाई गुप्तचरी गर्दारहेछन्। त्यसरी राजा महेन्द्रले बढाएका कम्युनिष्टहरूसमेतको सल्लाहमा पुस १ गते जननिर्वाचित सरकारलाई अपदस्थ गरी आफ्नू हातमा शासन लिएको प्रष्ट भएको थियो। तर पनि सो कुरा बाहिर सबैलाई थाहा नभएको र महेन्द्रले नानाथरीका बनावटी दोषारोपणहरू गरी गैरसंवैधानिक कदम चाली प्रजातन्त्रको जरो नै उखेलेका हुँदा देशमा अत्यन्त अन्धकारको वातावरण सिर्जना भएको थियो।

त्यसरी राजा महेन्द्रले त्यसबेलाको अत्यन्त सन्दिग्ध र त्रासदीपूर्ण वातावरणमा

जुन सुकै बेला जसलाई पनि जेसुकै गर्न सक्तछन् भन्ने भय र आशङ्काले गर्दा मानिसहरूले केही पनि बोल्न सकेका थिएनन्। कम्युनिष्टको आवरणभित्र दरबारको गुप्तचरी गरिरहेका मुख्यमुख्य विद्यार्थीहरू दरबारको काममा खटिएर जिल्लातिर गएका थिए। त्यसरी अवसरवादी मानिसहरूले आफ्नू सच्चा अनुहार देखाउने क्रम द्रुततर गतिमा देखापर्न लागेको थियो। अवसरवादी व्यक्तिहरू धमाधम राजाका कदमको समर्थन गर्न तँछाड र मछाड गर्दै अघि सरिरहेका थिए। दिनदिनै सञ्चार माध्यमहरूमा राजाले गरेको गैरप्रजातान्त्रिक तथा दुःसाहपूर्ण कदमको समर्थन गरेर वक्तव्य निकाल्ने व्यक्तिहरूको बाढी चलेको थियो।

राजा महेन्द्रको कदमलाई त्यसरी समर्थन गर्नेहरूमध्ये धेरैजसोले मन्त्री लगायत दौडाहा र अन्य विभिन्न महत्त्वपूर्ण ओहदाहरू प्राप्त गरेका थिए। अर्कातर्फ समातिएका प्रधानमन्त्री लगायतका मन्त्री र नेताहरूको स्थिति बुझ्न सकिएको थिएन। सत्तापलटको सही कारण र उद्देश्य पनि थाहा हुन सकेको थिएन। अत्यन्त धूमिल वातावरणमा हामीहरू परिस्थितिको अध्ययन गरेर बसिरहेका थियौँ। जतिजति दिनहरू बित्दै गएका थिए उतिउति नेपाली काङ्ग्रेसको सरकारलाई लाञ्छना लगाउने र नेताहरूलाई पक्रिने कामलाई अधिराज्यभरि तीव्र गरिएको थियो। दलहरूमाथि प्रतिबन्ध लगाइएको थियो। संविधान खारेज गरिएको थियो र कर्मचारीहरूको जथाभावी पँजनी र खोस्ने काम गरिएको थियो। जिल्लाहरूमा सर्वाधिकारसम्पन्न शाही दौडाहाहरू पठाउने काम शुरु भएको थियो। हामीहरूसँग भिन्न विचार राख्ने तथाकथित कम्युनिष्ट समर्थक दरबारका गुप्तचरहरू महत्त्वपूर्ण गोप्य कामका साथै दरबारमा पनि नियुक्त भएका थिए। त्यसरी दरबारमा जानेहरूमध्येमा एक जना पछि गएर दरबारको प्रमुख सचिवको पदसम्म पनि पुगेका थिए। छात्रावासमा हामीहरूलाई नानाथरीका प्रलोभन देखाएर कम्युनिष्ट बनाउन खोज्ने पनि तिनै व्यक्ति थिए। हामीहरू उनलाई छात्रावासमा माउत्सेतुङ भनेर भन्दथ्यौँ। किनभने उनी अत्यन्त कट्टर सिद्धान्तवादी कम्युनिष्ट देखिन्थे। तर उनी दरबारका गुप्तचरका नाइके भएको कुरा पछि गएरमात्र थाहा भएको थियो। त्यसपछि हामीहरूलाई उनीहरूले असाध्य दुःख दिएका थिए। त्यतिमात्रै

नभएर हामीहरूलाई थुनाउने कामसमेत तिनीहरूले गरेका थिए ।

पुस १ गतेको परिवर्तनपछि हामीहरू पूर्णरूपमा अपाङ्ग भएका थियौँ । विद्यार्थीगतिविधिमा पूर्ण प्रतिबन्ध लगाइएको थियो र हामीहरूलाई पनि पूर्ण निग्रानीमा राखिएको थियो । छात्रावासलाई महिनौँसम्म प्रहरीको घेरामा राखिएको थियो । सरकारलाई सुराक दिने मानिसहरू छात्रावासभित्रै भएकाले हाम्रो गतिविधि बुझ्न सरकारलाई कुनै असजिलो भएको थिएन । प्रजातन्त्रको हत्या भएको हुँदा सम्पूर्ण प्रबुद्ध छात्रजगत् विक्षुब्ध र आन्दोलित थियो । जुनसुकै बेला पनि विष्फोटन हुनसक्ने अवस्था थियो । त्यतातर्फ सरकार सतर्क थियो ।

त्यसै समयमा बेलायतकी महारानी इलिजाबेथ द्वितीयाको नेपालको राजकीय भ्रमणमा काठमाडौं आउने कार्यक्रम थियो । प्रजातन्त्रको हत्या भएको बेला नेपाल नआउन प्रजातन्त्रको जननी बेलायतकी महारानीलाई सम्पूर्ण शैक्षिकजगत्ले आह्वान गरेको थियो । विद्यार्थीहरू त्यस अभियानमा अत्यन्त मुखर भएर निस्किएका थिए । त्यस अभियानमा केही निहित स्वार्थी दीपावली गर्ने विद्यार्थी बाहेक अरू सम्पूर्ण संस्कृतछात्रसङ्घका विद्यार्थीहरूको ऐक्यबद्धता थियो । इलिजाबेथको भ्रमणको विरुद्ध सरकारी गुप्तचरहरूको आँखा छलेर कूटनीतिक नियोग र विदेशी राजदूतावासहरूमा समेत रातारात हामीहरूले पर्चाबाजी गरेका थियौँ । हामीहरूले त्यस बेला कल्पनाप्रेस रहेको नागपोखरीको नेपाली काङ्ग्रेसका नेताहरू बस्ने घरलाई नै मुख्य केन्द्र बनाएका थियौँ । त्यसको सञ्चालन गर्नेहरूमा कोइराला परिवारका रोशा आदि महिला नेतृहरूमात्रै थिए । पुरुष नेताहरू कोही थुनिएका र कोही निर्वासित भइसकेका हुनाले महिला नेतृहरूको काँधमा आन्दोलन चलाउने गुरुतर दायित्व आइपरेको थियो । त्यहीँबाट राजाका विरुद्धका पाम्प्लेट, पर्चा, पोष्टर र कालो झण्डासमेत हामीहरूलाई प्राप्त हुने गर्दथ्यो ।

त्यसरी हामीहरू अत्यन्त सक्रिय भएका थियौँ । विनाडरभर रातदिनै खतरापूर्ण क्रियाकलाप गर्दथ्यौँ । त्यसै सन्दर्भमा एक दिन श्रीपीताम्बर दाहाल र म एउटा गोप्य बैठकमा आमन्त्रित गरिएका थियौँ । उक्त बैठकमा जसरी भए पनि अपहरित प्रजातन्त्रलाई फर्काउनेभन्ने निर्णय

गरिएको थियो । 'देहं वा पातयेयं कार्यं वा साधयेयम्' अर्थात् Do or die को सिद्धान्तअनुसार काम गर्ने भनेर हामीहरूले प्रतिज्ञा गरेका थियौँ । प्रतिज्ञापत्रमा हामीहरूले रगतले सहीछाप गरेका थियौँ । त्यो पहिलो बैठकपछि हामीहरूले फेरि अर्को बैठक बस्न नै पाएनौँ । हाम्रा संयोजक श्रीसीताराम भण्डारीलाई सरकारले तुरुन्तै गिरफ्तार गरेर थुनेको थियो । त्यसै गरी हाम्रा अरू साथीहरू पनि थुनामा परेका थिए र केही साथीहरू भूमिगत पनि भएका थिए । उक्त बैठकमा भाग लिनेमध्येमा निकै सक्रियजस्ता देखिने एक व्यक्ति श्रीभरत शर्मा पनि थिए । ती व्यक्ति को थिए मलाई त्यस बेला थाहा थिएन । तर श्रीभरत शर्मासँग म २०३५ सालमा प्रमुखजिल्ला अधिकारी भएर जनकपुर जाँदा त्यहाँ भेट भएको थियो । उनी ने.गु.वि.को डी. एस्. पी. रहेछन् । हाम्रो गोप्य बैठकमा सक्रिय सदस्य भएर उनैले हाम्रा साथीहरूलाई थुनाएका रहेछन् । त्यति लामू समयपछिमात्र मलाई सो कुराको रहस्य खुलेको थियो ।

त्यसरी विभिन्न राजनीतिक क्रियाकलापमा संलग्न भएका हामीहरूलाई पक्राउ गर्न सरकारले वारेण्ट जारी गरेको कुरा हामीहरूलाई थाहा थियो । त्यसो भए तापनि हामीहरू चुप लागेर त्यसै बसेका थिएनौँ । त्यसै बीचमा फागुन ७ गते प्रजातन्त्रदिवस मनाउने दिन पनि आएको थियो । प्रजातन्त्रको हत्या भइसकेको हुनाले फागुन ७ गतेको प्रजातन्त्र दिवसलाई प्रजातन्त्रको हत्या गरेको विरोध गर्ने अवसरका रूपमा उपयोग गर्ने विचार गरेर उपत्यकाका सम्पूर्ण कलेजका हामी विद्यार्थीहरूले ठूलो सङ्ख्यामा भाग लिने संयुक्त निर्णय गरेका थियौँ । सोही अनुसार फागुन ७ गते ठीक समयमा टुँडिलेख खरीको बोटमा आ–आफ्ना कलेजका ब्यानर र विद्यार्थीहरूका साथमा जुलुस लिएर हामीहरू गएका थियौँ । सबै विद्यार्थीहरूले श्री ५ महेन्द्रलाई आ–आफ्नो कलेजको ब्यानर सहित अभिवादन र जयजयकार गर्नुपर्ने सरकारी निर्देशन थियो । तर त्यसको प्रतिकूल हाम्रो निर्णय भने राजा महेन्द्रका विरुद्धमा नारा लगाउँदै उनलाई कालो झण्डा देखाएर पुस १ गतेको कदमको विरोध गर्ने थियो । सोही अनुसार विद्यार्थीहरूको जुलुस श्री ५ महेन्द्रको अगाडि पुगेपछि विद्यार्थीहरूले विरोधको नारासाथ कालो झण्डा देखाएका थिए । त्यसरी कालो झण्डा देखाएर विरोध प्रदर्शन

गर्नेहरूका अग्रपङ्क्तिमा त्रिचन्द्र कलेजका विद्यार्थीहरू थिए । जसको नेतृत्व सुश्री शैलजा आचार्यले गरेकी थिइन् । उनीसहितका विरोध प्रदर्शन गर्ने विद्यार्थीहरू तुरुन्तै पक्राउमा परेका थिए । भीडमा लाठीचार्ज भएको थियो । पछाडिका पङ्क्तिमा परेका हामीहरू कार्यक्रममा भाग लिएर कालो झण्डा देखाउन नपाउँदै बीचैबाट तितरबितरमा परेका थियौँ । हामी संस्कृतछात्रसङ्घका विद्यार्थीहरूलाई पनि कालो झण्डा काण्डको दोष लागेको थियो । सरकारसँग त्यसको प्रमाण केही नभए तापनि आशङ्कामा हामी केही विद्यार्थीहरूमाथि सरकारले अझ कडा निग्रानी राख्न थालेको थियो ।

त्यसै बीचमा अर्थात् फागुन ९ गते बेलुका छात्रावासमा भात खाने मौका पारेर सैयौँ प्रहरीले छात्रावासलाई घेरा हालेका थिए । त्यस बेला उपत्यका हेर्ने तत्कालीन एस्.पी. नकुल शम्शेर राणा हामीहरूलाई चिन्ने गुप्तचर साथमा लिएर दलबल र हतियार सहित छात्रावास भित्र प्रवेश गरेका थिए । म त्यसबेला भात खाइसकेर म चुठ्तै थिएँ । मैले धोती फेरेको थिएँ र लुगा बदल्न पाएको नै थिइन । मलाई प्रहरीले घेरिहाले । मैले प्रतिरोध गरेको थिएँ, तर प्रहरी एस्.पी. नकुल शम्शेरले तत्कालीन उपत्यकाका कमिस्नर विष्णुमणि आचार्यले भेट्न बोलाएको भनेकाले मैले अरू बल गर्न सकेको थिइन । छात्रावासमा बस्ने विद्यार्थीहरूमध्येमा म, रामप्रसाद भट्टराई, पीताम्बर दाहाल र चेतोनाथ आचार्यसमेत ४ जना विद्यार्थी नेताहरूलाई पक्राउ गर्न छात्रावासभित्र पसेको प्रहरीको हूल मलाई र रामप्रसाद भट्टराईलाईमात्र पक्राउ गर्न सफल भएको थियो । हामीहरू पक्राउ हुनुभन्दा पहिले नै पीताम्बर दाहाललाई छात्रावासको म बस्ने कोठा माथिको खालि बुइँगलमा मैले हतपत चढाएर लुकाइसकेको थिएँ । हामी सबै विद्यार्थी नेताहरू पक्राउ परी जेल गएपछि विद्यार्थीको नेतृत्व गर्ने व्यक्ति बाहिर नहुने देखेर पीताम्बर दाहाललाई मैले नै लुकाएको हुँदा उनी तत्कालै पक्राउ परेका थिएनन् । तर केही समयपछि उनी पनि पक्राउ परेका थिए । उनले लामू समयसम्म जेलमा बस्नु परेको थियो । चेतोनाथ आचार्य भने त्यसबेला आफ्नू कोठामा कपाल पूरै मुण्डन गरेर, धोती फेरेर र आँखासमेत चिम्लिएर ध्यान लगाएर बसेछन् । त्यस्तो अवस्थामा बसेको शुद्ध ब्राह्मणलाई देखेपछि यो पक्रनु पर्ने खालको नेता

रहेनछ, उनबाट कुनै क्रान्तिकारी काम हुनसक्दैन भन्ने ठानी प्रहरीले उनलाई पक्राउ नगरी कोठामा नै छाडिदिएको रहेछ । पक्राउ परेर जानेमा रामप्रसाद भट्टराई र म मात्रै थियौँ । मैले कोठामा प्रहरीको घेराउमै रहेर धोती बदलेर बाहिर जाने कपडा लगाएको थिएँ ।

त्यसपछि प्रहरीको घेरामै छात्रावासबाट बाहिर म निस्किएको थिएँ । राजदरबार अगाडिको सडकमा प्रहरीको जीपसहित प्रहरीको ठूलो हूल थियो । हामीहरू २ जनालाई लगेर प्रहरीका जीपमा बसालिएको थियो । त्यसै बखत छात्रावासका सबै विद्यार्थीहरू छात्रावास बाहिर सडकमा निस्किएर हामीहरूलाई राखेको प्रहरीको जीपलाई घेरेर नारा लगाउन थालेका थिए । प्रहरीले लाठीचार्ज गरेर जीपलाई विद्यार्थीहरूको बीचबाट निकालेर भगाएको थियो । जीपकै पछिपछि लागेर विद्यार्थीहरूको जुलुस विभिन्न नाराहरू लगाउँदै अगाडि बढेको थियो । हामीहरूलाई रत्नपार्कको उत्तरपट्टि रानीपोखरीको छेउमा त्यसबेलाको नगरप्रहरीभित्र लगेर हुलेको थियो । विद्यार्थीहरूको उग्र जुलुसले नगरप्रहरीमा आएर विभिन्न क्रान्तिकारी नारा लगाउँदै ढुङ्गामुढा बर्षाएका थिए । कतिपय साथीहरू हामीहरूलाई नछोडेमा हामीहरूसँगै थुनिन पनि अघि सरेका थिए । तीमध्येमा मधुसूदन रिसाललाई प्रहरीले थुनेको थियो । अरू विद्यार्थी साथीहरूलाई प्रहरीले लाठीचार्ज गरेर लखेटेको थियो । त्यति बेलासम्म रातको ९ बजिसकेको थियो । त्यसपछि प्रहरीले हामीहरूलाई चीसो कोठामा बन्द गरेर राखेको थियो । त्यसपछि अबेरसम्म हामीहरू चिसो बेञ्चमा ठाडै बसेर निदाएका थियौँ ।

त्यसरी जाडोको समयमा प्रहरीको कठघरामा थुनामा परेर निदाइरहेकै बेला प्रहरीले ढोका खोलेर हामीहरूलाई उठाउँदै लौ तपाईंहरू बाहिर निस्किनुहोस् भनेर आदेश दिएको थियो । आदेश अनुसार हामीहरू बाहिर निस्किएका थियौँ । सशस्त्र प्रहरीको एक समूहले हामीहरूलाई घेरेर बीचमा राखी भोटाहिटीतर्फ हिंड्ने निर्देशन दिएको थियो । त्यसबेला रातको १ बजिसकेको थियो । भोटाहिटीबाट पश्चिम हुँदै हामीहरूलाई असनतर्फ लगिएको थियो । कर्फ्यू लागेको फागुन महिनाको रात सुनसान र चकमन्न थियो । शहरवासीहरू सबै मस्त निद्रामा सुतेका थिए । मानिसको अस्तित्व सडकमा कहीं कतै पनि देखिँदैनथ्यो । छाडा गाई र साँढेहरू कहींकहीं भेटिन्थे । त्यो चिसो रातको

चकमन्न नीरवता र मौनतालाई भङ्ग गर्दै कहींकहीं भुस्याहा कुकुरहरू भुकेको सुनिन्थ्यो । हामीहरू दुई जना चुपचाप विनाकुराकानी तर मनमा जिज्ञासा, आशङ्का र त्रास बोकेर सशस्त्र प्रहरीको घेरामा यन्त्रवत् हिंडिरहेका थियौं ।

त्यस सुनसान मध्यरातमा सुटुक्क झुक्याएर भोटाहिटीबाट पश्चिमतर्फ सशस्त्र प्रहरीको घेरामा हामीहरू दुई जनालाई पैदलै लान लाग्दा भाचाखुसी शोभाभगवतीतर्फ अन्तिम संस्कारका लागि प्रहरीले लान लागेको हो कि ? भनेर पनि मैले आशङ्का गरेको थिएँ । तर केही बिराम नगरेको हुँदा त्यति ठूलो डर भने लागेको थिएन । जवानीको जोश र विद्यार्थीको तातो रगत भएको हुँदा त्यस बेला केही कुरामा कसैसँग पनि मलाई डर लाग्दैनथ्यो । रामप्रसाद भट्टराईको भने मानसिक अवस्था त्यस बखत के कस्तो थियो मलाई थाहा थिएन । हामीहरू चुपचाप अज्ञात गन्तव्यतर्फ अगाडि बढिरहेका थियौं । निस्पट्ट अन्धकार भएको हुँदा कसैको मुखाकृतिको अध्ययन गरेर मानसिक अवस्था बुझ्ने स्थिति पनि थिएन । त्यस्तैमा प्रहरीले असन अन्नपूर्णाको मन्दिरमा पुऱ्याएको थियो । त्यहाँबाट मैले आशङ्का गरेको भाचाखुसी शोभाभगवतीतिर नलगी तिलङ्गाभवनको बाटो हुँदै प्रहरीले इन्द्रचोकतर्फ लगेको थियो । त्यताबाट हनुमान्ढोका प्रहरीखोरमा लगेर रातको १.३० बजेतिर हामीहरूलाई हुलिदिएको थियो । ठूलो अनिष्ट हुने आशङ्का टरेकोमा मलाई खुशी लागेको थियो । हामीहरू २ जनालाई खोरभित्र हुलेपछि त्यहाँ रहेका सारा थुनुवाहरूको निद्रा खुलेको थियो । त्यहाँ हल्लाखल्ला भएको थियो र बत्ती बालिएको थियो । त्यहाँ थुनिएका थुनुवाहरू जऱ्याकजुरूक उठेका थिए । थुनिएका धेरै जसो बन्दीहरू विभिन्न कलेजहरूबाट लगिएका विद्यार्थीहरू नै थिए । दुःखी हुँदै खोरभित्र पसेका हामीहरूलाई पहिलेदेखि नै थुनामा परेका साथीहरूले खुशी हुँदै स्वागत गरेका थिए । हाम्रा सम्भ्रम, दुःख र नैराश्य सबै भागेका थिए । त्यो रात हामीहरू साथीहरूसँगै सुतेका थियौं ।

अर्कोदिन सबैसँग चिनाजान भएको थियो । भात खाने बेलामा उनीहरूका घरबाट ल्याएको खाना सबैले बाँडेर खाएका थियौं । काठमाडौं भित्र घर, परिवार र आफन्तहरू भएका थुनुवा साथीहरूको खाने कुरा आइरहन्थ्यो । बिछ्यौनाको बेडिङ र लुगाफाटो पनि ल्याइदिन्थे । आफन्तहरू भेट्न

सहानुभूतिका साथ आइरहन्थे । तर हामीहरू जस्ता काठमाडौँभन्दा बाहिर घर भएका मानिसहरू थुनामा पर्दा कोही पनि भेट्न जाँदैनथ्यो । किनभने काठमाडौँभित्र हाम्रा नातागोता त्यस बेला कोही पनि थिएनन् । छात्रावासका साथीहरू रातीसम्म सँगै थिए । मधुसूदन रिसाल नगरप्रहरीको थुनामा नै थिए । उनलाई पनि थाहा नदिई हामीहरूलाई मध्यरातमा नै खोरमा चलान गरेको हुँदा हामीहरूलाई कहाँ लग्यो र कहाँ राखेको छ भन्ने थाहा नभएर पनि सायद साथीहरू भेट्न नआएका होलान् भन्ने ठानेर हामीले सन्तोष लिएका थियौँ ।

अर्कोदिन बिहानको खाना खाएपछि खोरबाट हामीहरू सबैलाई केन्द्रीय कारागार जगन्नाथदेवलमा सुरक्षा कानून अन्तर्गतको थुनुवा पुर्जी दिएर जेल चलान गरिएको थियो । त्यस खोरबाट चाँडै छुटकारा पाएकोमा हामीहरू सबै खुशी भएका थियौँ । महिलाहरूलाई पनि केन्द्रीय कारागारको महिला जेलमा चलान गरिएको थियो । वास्तवमा त्यो खोर दिसापिसाव र स्नान गर्ने सुविधा नभएको बाख्रा थुन्ने खोरजस्तै थियो । अर्को शब्दमा भन्ने हो भने त्यो खोर साँच्चैको नरक नै थियो । जीवनमा पहिलोपल्ट कारागारमा म प्रवेश गर्दै थिएँ । त्यसै गरी जीवनमा पहिलोपल्ट एक रात म खोरमा पनि बसेको थिएँ । तर भगवान् श्रीकृष्ण जन्मिएको कारागारभित्र सुरक्षा कानून अन्तर्गतको राजबन्दी भएर जानुपर्दा साह्रै दुःख लागेको थिएन । अघिल्लो सुनसान कालो रातमा हनुमान्ढोकाको खोरमा पस्नुपर्दा मलाई कुनै खालको रोमाञ्च भएको थिएन । केन्द्रीय कारागारमा पस्ने बेलामा भने मेरो मानसिक स्थिति परिवर्तन भइसकेको थियो । अघिल्लो रात खोरमा पस्ने बेलाको जस्तो अनिश्चितता थिएन । साथीहरूको सङ्गतले गर्दा मन दरो भइसकेको थियो ।

त्यसरी हनूमान्ढोकाको खोरबाट निस्किएर साथीहरूको हूलसँगै म पनि केन्द्रीय कारागारको मूलढोकाबाट कारागार भित्र छिरेको थिएँ । कारागारभित्र पस्ने बित्तिकै हामीहरूलाई कारागारमा पहिलेदेखि नै थुनामा रहेका राजनेता र अरू कैदीहरूले पनि स्वागत गरेका थिए । कारागारभित्र नयाँ थुनुवा प्रवेश गर्दा त्यहाँ बसिरहेका पुराना थुनुवाहरूलाई उत्सवजस्तो हुँदोरहेछ । कारागारभित्र सीमित मानिसहरूको सङ्गतमा सीमित भएर

बसिरहेका कारागारवासीहरूका निमित्त बाहिरबाट नयाँ मानिसहरू कारागारभित्र आउँदा कारागारको वातावरणमा नवीन उत्साह र उमङ्ग पनि थपिएजस्तो लाग्दो रहेछ । त्यसै भएर होला हाम्रो स्वागत भएको थियो । स्वागत गर्नेहरूमा तत्कालीन नेपाली काङ्ग्रेसका महामन्त्री श्रीभद्र शर्मा पनि थिए । जसले हामी विद्यार्थीहरूलाई धेरै सहयोग गरेका थिए । उनका अतिरिक्त सी.के.प्रसाई, इन्द्रप्रसाद प्रसाई, ध्रुवराम भण्डारीलगायतका अरू पनि धेरै राजनेता र विद्यार्थीनेताहरूसमेत थिए । उनीहरू सुरक्षाकानून अन्तर्गत पुस १ गतेको काण्ड पछि त्यहाँ थुनामा परिसकेका थिए । हामी विद्यार्थी नेताहरूको एक अर्को समूह सुरक्षाकानून अन्तर्गत थुनिन आउँदा हाम्रा अग्रज बन्दीसाथीहरूले अरू बन्दीहरू थपिएकोमा मद्दत पुग्ने देखेर हाम्रो स्वागत र अभिनन्दन गरेका होलान् भन्ने मलाई लागेको थियो ।

त्यसरी कारागारभित्र पसिसकेपछि हामीहरूलाई बस्ने ठाउँ दिइएको थियो । कारागारभित्र केही कोठाहरू सुरक्षाकानून अन्तर्गत परेका राजनेता र विद्यार्थीनेताहरूका लागि छुट्याइएको हुँदोरहेछ भने कुनै कोठा ज्यानमारा र डाका आदिका अभियोगमा परेका कैदीथुनुवाहरूलाई छुट्याइएको हुँदोरहेछ । ठाउँको अभाव हुँदा कुनै कुनै कोठामा छासेमिसे गरेर पनि राखिएको रहेछ ।

पुस १ गतेको काण्डपछि धेरै नेता र विद्यार्थीहरूसमेत ल्याएर कारागारमा थुन्न थालेको हुँदा कारागार भरिभराउ देखिन्थ्यो । कारागारमा चिनेजानेका नेताहरू र विद्यार्थी साथीहरूसमेतलाई भेटेर खुशी नै लागेको थियो । एक किसिमले त्यहाँ पुनर्मिलनजस्तै भएको थियो । कारागारमा हाम्रो नामनामेसी लेखिएपछि हामीले पाउनुपर्ने सिदासुविधा सबै पाएका थियौँ । सुरक्षाकानून अन्तर्गत परेका राजबन्दीहरूले क नम्बरको सिदा पाउने चलन रहेछ । त्यसबेला क नम्बर भनेको मार्सी चामल १ छाकको आधा किलो, आगो बाल्ने दाउरा, तेल र तरकारी आदिका लागि रकम नै दिने चलन रहेछ । रकम के कति दिएका थिए अहिले मलाई सम्झना भएन । तरकारी आदि किन्न पुग्ने रकम दिने चलन रहेछ । यसका साथै सामान्य किसिमको ओड्नेओछ्याउने दिने व्यवस्था पनि रहेछ । कारागारभित्र नयाँ प्रवेश गर्ने बन्दीले नयाँ खबर लिएर आउँछन् भन्ने त्यहाँका पुराना बन्दीहरूले आशा

गर्दारहेछन् । किनभने त्यसबेला कारागारभित्र रेडियो सुन्ने र पत्रपत्रिका पढ्न पाउने सुविधा सरकारले दिएको थिएन । हामीहरू गएपछि जानेबुझेसम्मको खबर उनीहरूलाई सुनाएका थियौँ । कारागारभित्र गएका दिन बेलुकाको खाना कारागार भित्रका पुराना कारागारवासी श्रीभद्र शर्माले आफ्नै भान्सामा तयार गरेर अतिथिसत्कार गरेका थिए । अर्को दिनदेखि आफ्नै छुट्टै भान्सा हामीले तयार गरेर खाने व्यवस्था गरेका थियौँ ।

कारागारभित्र हामीहरू जस्ता सुरक्षाकानून अन्तर्गत थुनामा परेका नेताहरू पछि गएर मन्त्री हुन्छन्, ठूला मान्छे हुन्छन् र विभिन्न ओहदामा पुग्छन् भन्ने धारणाले विभिन्न अपराधमा कारागारभित्र थुनिएका कैदीहरूले उनीहरूको सेवासुश्रूषा गर्दा रहेछन् । हामीहरूलाई पनि त्यही ठानेर होला त्यस कारागारभित्रका कैदीहरूले खूब सेवासुश्रूषा गरेका थिए । खास गरेर भात पकाइदिने, भाँडा माझिदिने, लुगा धोइदिने आदि सबै कामहरूमा हामीहरूलाई सघाएका थिए । त्यतिमात्रै होइन आवश्यक परे जीउमा मालिस गरिदिने र खुट्टा मिचिदिने पनि गर्दथे । कारागार भित्रको वातावरण अत्यन्त सौहार्द, स्नेहयुक्त र सहयोगी हुँदोरहेछ । कारागारभित्र बस्ने स्थान जति सुकै साँघुरो, अस्वस्थकर, घिन लाग्दो र असुविधायुक्त भए पनि त्यहाँभित्र सबैको मन फराकिलो र सहयोगी भएको मैले पाएको थिएँ । म सबैको मित्रवत्, बन्धुवत् र सुहृद्वत् व्यवहारबाट अत्यन्त नै प्रभावित भएको थिएँ । म केही दिन कारागारभित्र बसेपछि बाहिरको कुरा सबै बिर्सिएर कारागारमा नै रमाइसकेको थिएँ । आफूभन्दा जान्ने, बुझ्ने, विद्वान् र वयोवृद्ध अविभावक जस्ता व्यक्तिहरूको सान्निध्य पाएर मलाई तीनधारा संस्कृतछात्रावासभन्दा पनि त्यो कारागार रमाइलो लागेको थियो । म एक किसिमले बाहिरको अस्वस्थकर वातावरणबाट टाढा भएको थिएँ ।

त्यसरी म केन्द्रीय कारागारभित्र रमाइरहेको बेला एक दिन फागुन महिनाको तेस्रो हप्तातिर, अहिले मलाई गते बार थाहा भएन, दिउँसो भात खाएर म आराम गरिरहेको थिएँ, त्यसै समयमा बाहिर टाढै मूलढोकाबाट कारागारको चौकीदारले मेरो र रामप्रसाद भट्टराईको नाम लिएर बोलाएको थियो । कुरा के रहेछ भनेर कान थापेर सुन्दा हामीहरूलाई कारागारबाट

मुक्त गर्नु भन्ने माथिबाट आदेश आएको हुँदा बाहिर बोलाइएको रहेछ। कारागारभित्र कैदीबन्दीहरूलाई कुनै कुराको सूचना गर्नु वा बोलाउनु पऱ्यो भने चौकीदारहरूले मूलढोकादेखि भित्र कोठासम्म सुनिने गरी एकले चिच्याउने र अर्कोले सोही कुरा दोहोऱ्याएर कराउँदै भित्रसम्म सुनाउने चलन रहेछ। भित्रबाट हाम्रो नाम पुकारेको हामीहरूले सुन्यौँ र आफ्ना जे भएका सामानहरू बटुलेर कारागारका साथीहरूसँग हतार हतार बिदा हुँदै हामीहरू कारागारको मूलढोकामा पुगेका थियौँ। मूलढोकामा हामीहरूलाई लिन त्यस बेलाका झ्याली एस्.पी. नकुल शंशेर राणा र जेलरसमेत आएका थिए। जेलरले छोडुवापुर्जी हामीहरूलाई दिएपछि कारागारबाट प्रहरीको जीपमा राखेर एस्.पी.ले नगरप्रहरी कार्यालय रत्नपार्कमा लगेको थियो।

निर्दोष हामीहरूलाई तुरुन्त कारागारबाट मुक्त गर्नु भन्ने माथिबाट आदेश आएकोहुँदा मुक्त गरेको कुरा एस्.पी. राणाले सुनाए र उनले हामीहरूसँग क्षमा याचना पनि गरेका थिए। अब उप्रान्त हामी जस्ता निर्दोष तथा अध्ययनशील विद्यार्थीहरूलाई नथुन्न र अन्याय अत्याचार नगर्न एस्.पी.राणालाई उल्टै भाषण दिएर हामीहरू प्रहरीकै जीपद्वारा ठूलो लडाइँमा विजयी भएर घर फर्किएको विजेताजस्तो भएर हामीहरू छात्रावास भित्र प्रवेश गरेका थियौँ।

त्यसरी हामीहरूलाई थुनेकोमा एस्. पी.राणालाई क्षमा माग्न लगाउनुका साथै भाषणसमेत दिएर पुनः छात्रावासभित्र प्रवेश गर्न पाएकोमा आफू सफल भएको मैले ठानेको थिएँ। छात्रावासका विद्यार्थी साथीहरूले नेताहरूलाई गरेजस्तो हाम्रो अबीर र फूलमालाहरूद्वारा भव्य स्वागत गरेका थिए। स्वागतपछि भेला भएका साथीहरूलाई कारागारभित्रको अनुभव र एस्.पी. राणालाई क्षमा मगाएको कुरासमेत मैले सुनाएको थिएँ। त्यसका साथै कारागारबाट छुटाउन तत्कालीन सरकारलाई दबाब दिएकोमा विद्यार्थी साथीहरूलाई धन्यवाद दिँदै विद्यार्थीहरूले गर्ने भावी रणनीतिको बारेमा पनि मैले प्रकाश पारेको थिएँ।

कारागारबाट छुटेर आएपछि देशको परिस्थिति अनुकूल नभएकाले बाहिरिया गतिविधिबाट आफूलाई भर्सक नियन्त्रण गर्दै पढाइमा मात्र मैले ध्यान दिनथालेको थिएँ। फलस्वरूप २०१८ सालमा शाङ्करवेदान्त विषयमा

शास्त्रीको प्रथम वर्षको परीक्षा र त्यसै वर्ष अङ्ग्रेजीतर्फको प्रवेशिका परीक्षा दिएर म घर गएको थिएँ। घर जाँदा हेमानन्द ढकाल र दामोदर दाहाल पनि मेरा साथ गएका थिए। सुनकोशी र दूधकोशीका गडतीरै गडतीर हामीहरू गएका थियौँ। त्यस वर्ष अनिकाल परेकाले सुनकोशीका गडतीरदेखि नै केही पनि किनेर खान पाइएको थिएन। टोक्सेलघाटमा राती केही नपाएपछि काँचो मेवा खाएर रात काटेका थियौँ। अर्कोदिन सबेरै टोक्सेल घाटबाट दूधकोशी तरेर गडतीरको जङ्गलमा पाइने अमला टिपेर खानुका साथै कोशीको पानी पिएर हामीहरूले पेट भरेका थियौँ। अत्यन्त दुःखका साथ खोक्सेलीबेसी पुगेर एउटा गृहस्थको घरमा अनुनयविनय गरी मकैका च्याँख्लाको काँचो भात, काभ्राको अचार र मोही खाएर हामीहरू हिँडेका थियौँ। महादेवबेसी हुँदै भालुढुङ्गाको डुँडे माझीका घरमा पुगेर माझीलाई साथ लिएर हामीहरू रातारात लाइटको भरमा नकटी वनको उकालो बाटो हुँदै घरतिर गएका थियौँ।

रातको समयमा जङ्गली जनावरको त्रास र अप्ठेरो बाटोसमेतलाई पार गर्दै कष्टकासाथ हामीहरू साउनेपानी हुँदै थर्पु पुगेका थियौँ। डाँडागङ्गाप्रसादको घरनिर पुग्दा खोल्सापारि धूवाँ र आगाको ठूलो मुस्लो देखिएको थियो। हामीहरू अँध्यारो खोल्सोमा हस्याङफस्याङ गर्दै तरेर जेठा सुवेदीका घरनिरको चउरमा पुग्दा अँध्यारामा कपडाको जुत्तालाई पनि छेडेर मेरो खुट्टामा घँगरुको लामू काँडो बिझेको थियो। म मरणासन्न भएको थिएँ। मरणासन्न अवस्थामा भए पनि मधुरो टर्चको सहारामा साथीहरूको हात समाउँदै र खुट्टो खोच्याउँदै म बिस्तारै हिँडेको थिएँ। हीरालाल ढुङ्गेलबाको घर नजिक पुगेर हेर्दा पद्मविनोद भट्टराईको घर आगलागीमा परेको रहेछ। घरभित्र भएको अन्नपानी लगायत सम्पूर्ण श्रीसम्पत्ति र बस्तुभाउ पनि नाश भएको अशुभ समाचार मैले सुन्नुपरेको थियो। मध्यरातमा साथीहरूलाई लिएर म घर पुगेको थिएँ। घरमा सबै सुतिसकेका रहेछन्। म पुगेपछि बाआमासहित सबै घरका परिवारजनहरू उठेका थिए। खाना खाएर अबेर रातमा सबै जना सुतेका थियौँ। लामू बाटाको थकाइ, पीडा र बाटामा खान नपाएको कारणले समेत जीउ साह्रै थाकेको हुँदा भोलिपल्ट अबेरसम्म म सुतेको थिएँ। म अबेर उठेर बाहिर हेर्दा मसँग गएका साथीहरू सबै बाटा लागिसकेका रहेछन्। काठमाडौँबाट मसँगै

गएका साथीहरूमा पूर्व तेह्रथुमका दामोदर दाहाल र बुइँपा छिप्तीका हेमानन्द ढकाल थिए ।

त्यसरी म काठमाडौँमा दुवैतर्फको परीक्षा दिएर घर गएको थिएँ । त्यसबेला मेरो दोहोरो पढाइ भएको हुँदा दुईतीन वर्षको अन्तरालमा मात्रै म घर जाने गर्दथेँ । घरमा पिताजीलाई साथ दिने आमा, कान्छीआमा र बुहारीहरूमात्रै हुन्थे । घरमा काम गर्ने मान्छेको खाँचो पर्दथ्यो । त्यसैकारण र अरू पनि व्यावहारिक कामकुराले गर्दा पिताजीले मेरो दोस्रो विवाह गर्न म काठमाडौँबाट घर पुग्नु अघि नै केटी खोजेर तयार पार्नु भएको रहेछ । म घर पुगेको केही दिनपछि नै केटीका आमाहरू आएर पिताजीका उपस्थितिमा नै मलाई हेरेका थिए । उनीहरूले मलाई मन पराएर सौतामाथि नै भए पनि छोरी दिने भनेर उनीहरू फर्किएपछि पिताजीले मेरो मनसाय सोध्नु भएको थियो । दोस्रो विवाह गर्न उपयुक्त नभएको र एउटीलाई पनि पाल्ने हैसियत ममा भइनसकेको हुनाले सो बारेमा पछि विचार गरौँला भनेर पिताजीको चित्त बुझाएको थिएँ । उहाँले मेरो भनाइलाई स्वीकार गर्नुभएको थियो । मेरी श्रीमती मावल गएर केही ढिलो फर्किएकीहुँदा पिताजीले बुहारीलाई तह लगाउन त्यस्तो प्रस्ताव राख्नुभएको थियोहोला । त्यसपछि पिताजीले मेरो दोस्रो विवाह गर्ने कुरै नउठाउनु भएको हुँदा केवल बुहारीलाई डर देखाउनमात्र त्यस्तो कुरा गर्नुभएको रहेछ भनेर मैले अनुमान गरेको थिएँ । विवाहकै प्रसङ्ग आउँदा म काठमाडौं पढ्न आएपछि विद्यार्थी अवस्थामा र जागिरे भइसकेपछि पनि मसँग विवाह गर्न धेरै पढेलेखेका र सम्भ्रान्त परिवारका कन्याहरूले पनि इच्छा गरेका थिए । त्यतिमात्र होइन ठूलाबडा धनीमानी व्यक्तिहरूले पनि मलाई आफ्ना छोरी र बहिनीहरूसमेत दिने प्रस्ताव राखेका थिए । मैले सबैको प्रस्ताव अस्वीकार गरेर एउटा विवाहदेखि बाहेक दोस्रो विवाह जीवनमा नगर्ने र अरू महिलाहरूसँग संसर्गसमेत नगर्ने भन्ने आफ्नो सिद्धान्तमा म अडिगै रहन सफल भएको थिएँ ।

काठमाडौंबाट घर गएपछि जहिले पनि रावाखार्पाका डिट्ठा भवकृष्णका घरमा म जाने गर्दथेँ । त्यस पटक पनि म डिट्ठा बालाई भेट्न गएको थिएँ । मेरा पिताजी र डिट्ठा भवकृष्ण प्रायजसो सधैँ नै पासा खेल्ने गर्नुहुन्थ्यो । कुनै दिन पासा खेल्दाखेल्दै मेरा पिताजी र डिट्ठा भवकृष्णका बीचमा झगडा

परेर उहाँहरूको भेटघाट बन्द भएको रहेछ । म डिट्ठा भवकृष्णलाई भेट्न खार्पा जाँदा सोही कुराको गुनासो मसँग उहाँले गर्नु भएको थियो । म खार्पाबाट घर फर्किएर आएपछि सो कुरा मैले पिताजीलाई भनेको थिएँ । पिताजीले पनि दुवैथरीको बीचमा पासा खेल्दा झगडा भएर नगएको कुरा स्वीकार गर्नु भएको थियो । मैले सम्झाएपछि पिताजी डिट्ठा भवकृष्णलाई भेट्न जानुभएको थियो र उहाँहरूका बीचमा पासाको खेल फेरि शुरु भएको थियो । त्यसै गरी म छुट्टीमा घर जाँदा दाजुले पढाउने गरेको बुइँपा हाइस्कूलमा पनि जान्थेँ र हप्तौं दिनसम्म आनन्दसँग त्यहाँ बस्नेगर्दथेँ ।

म घरमा हुँदाहुँदै मैले दिएको प्रवेशिका परीक्षाको र शास्त्री प्रथम वर्षको समेत परिणाम काठमाडौंमा प्रकाशित भएको थियो । म दुवै परीक्षाहरूमा द्वितीय श्रेणीमा उत्तीर्ण भएको कुरा थाहा भएपछि घरमा पिताजीले उत्सवै मनाउनु भएको थियो । गाउँका प्रायः सबैजसो व्यक्तिहरू मलाई बधाई दिन मेरा घरमा आएका थिए । वास्तवमा अङ्ग्रेजीतर्फ प्रवेशिका परीक्षा र संस्कृततर्फ शास्त्री परीक्षा उत्तीर्ण गर्ने रावालामीडँडा गाउँमा म नै पहिलो व्यक्ति थिएँ । त्यसै कारणले पनि घरमा र गाउँमा समेत हर्ष बढाइँ भएको थियो । केही दिन घरमा बसेर आफ्नू अध्ययन अगाडि बढाउन म फेरि काठमाडौं नै फर्किएको थिएँ । काठमाडौँ फर्किएपछि मेरो अध्ययन फेरि दुवैतर्फ पूर्ववत् चालू भएको थियो । बाहिरिया क्रियाकलापहरू बन्द भएका हुँदा मेरो दुवैतर्फको पढाइमा प्रगति भएको थियो । २०१९ सालमा आई. ए. पढ्न म नेपाल नेशनल कलेजमा भर्ना भएको थिएँ । शाङ्करवेदान्त विषय लिएर शास्त्रीमा अध्ययन गर्दा मेरा साथीहरू ज्ञानहरि रेग्मी, श्रीभक्त पण्डित र श्यामलाल दाहालसमेत ४ जना थियौँ । हामीहरू साथै पढ्दथ्यौँ । म सबैलाई पाठ लगाइदिने गर्दथेँ । सबै सँगसँगै परीक्षामा उत्तीर्ण हुन्थ्यौँ ।


(बायाँबाट) श्रीज्ञानहरि रेग्मी, लेखक, श्रीश्रीभक्त शर्मा र श्रीश्यामलाल दाहाल

जति पन्छिए पनि विद्यार्थी गतिविधिमा मैले लाग्नैपरेको थियो । संस्कृतमहाविद्यालय र नेशनल कलेजका छात्र समितिहरूमा म जिम्मेवारीपूर्ण पदहरूमा बसेर काम गर्न बाध्य भएको

थिएँ । उता दुवैतर्फको पढाइ पनि मेरो चलिरहेकै थियो । संस्कृत महाविद्यालयका प्रधानाचार्य पद्मप्रसाद भट्टराईज्यू र नेपाल नेशनल कलेजका प्रिन्सिपल शङ्करदेवपन्तज्यूको ममाथि विशेष कृपादृष्टि थियो । बाहिरिया गतिविधिमा नलागेर राम्ररी पढोस् र योग्य विद्वान् बनोस् भन्ने उहाँहरू चाहनु हुन्थ्यो । तर मेरो प्रवृत्ति पढ्नेभन्दा बाहिरिया गतिविधिमा लाग्ने भएकाले पढाइमा पूरा समय मैले दिन सकेको थिइन । छात्रगतिविधिमा सक्रिय हुने र सरकारको कोपभाजन हुने मेरो नियति नै भइसकेको थियो । तर पनि पढाइमा उत्तम हुन नसके तापनि सबै परीक्षाहरूमा सधैँ म द्वितीय श्रेणीमा नै उत्तीर्ण हुने गर्दथेँ । संवत् २०२० सालमा मैले आई. ए. उत्तीर्ण गरेर नेशनल कलेजमा नै बी.ए. पढ्न थालेको थिएँ । त्यसै वर्ष त्रिभुवन विश्वविद्यालयले दीक्षान्त समारोहको आयोजना गरेको थियो र मैले शास्त्रीको प्रमाणपत्र भव्य समारोहका बीच ग्रहण गरेको थिएँ । उता संस्कृततर्फ आचार्य प्रथम खण्डमा म पढ्दैथिएँ । त्यसका अतिरिक्त शास्त्रीबाटै त्रि. वि. वि. मा संस्कृत विषयमा एम्.ए. पढ्न पाइने भएकाले मैले एम्.ए. पनि पढ्न थालेको थिएँ । संस्कृत विषयमा एम्.ए. पढ्दा सिद्धान्तकौमुदी पनि पढ्नु पर्दथ्यो । सिद्धान्तकौमुदी श्रद्धेय गुरु श्रीपद्मप्रसाद भट्टराईज्यूबाट पढ्ने शुभ अवसर मैले पाएको थिएँ । मेरो जीवनको पढाइको सबभन्दा सुनौलो क्षण मैले त्यसै अवधिलाई मानेको छु । संस्कृतसाहित्यको इतिहास श्रीगोकुलचन्द्र शास्त्रीज्यूले पढाउनु हुन्थ्यो । उहाँ पनि मलाई विद्वान् बनाउन चाहनुहुन्थ्यो । तर मेरो भाग्यमा विद्वान् हुन नलेखेकाले उहाँहरू कसैको पनि आशीर्वाद मलाई लाग्न सकेको थिएन ।


शास्त्रिपरीक्षाको दीक्षान्त
समारोहको तस्वीर

संवत् २०२१ सालमा मैले आचार्य प्रथम खण्ड उत्तीर्ण गरेको थिएँ । त्यसै वर्ष मङ्सिर महिनामा अर्थात् डिसेम्बर १० तारिखका दिन मानवअधिकार दिवसको मौका पारेर नेपालका सबै कलेजका विद्यार्थीहरूको वादविवादप्रतियोगिताको आयोजना त्रिभुवनविश्वविद्यालय राजनीतिशास्त्र विभागले गरेको थियो । मैले पनि संस्कृत महाविद्यालयका तर्फबाट

प्रतियोगितामा भाग लिएको थिएँ । सो प्रतियोगितामा प्रथम भएर स्व. श्री ५ वीरेन्द्रका हातबाट मैले प्रथम पुरस्कार प्राप्त गरेको थिएँ । त्योभन्दा पहिलेका प्रतियोगिताहरूमा पनि म प्रायः प्रथम नै हुने गर्दथेँ । त्यसपछि मेरा प्रशंसकहरूको सङ्ख्या बढेको थियो । प्रशंसा गर्नेहरूमा नेपाल नेशनल कलेजका प्रिन्सिपल श्रीशङ्करदेव पन्तज्यू पनि हुनुहुन्थ्यो । उहाँ अङ्ग्रेजी भाषाका प्रकाण्ड विद्वान् हुनुहुन्थ्यो । बी.ए.को कक्षामा अध्ययन गर्दा मेरो अङ्ग्रेजी विषय कमजोर देखेर उहाँले आफ्नो घरमा नै बोलाएर मलाई पढाउनुभएको थियो । उहाँले मलाई नेपाल नेशनल कलेजका लागि उहाँको उत्तराधिकारीका रूपमा छान्नु भएको थियो । एक दिन मलाई उहाँले सरकारी जागिर नखानु, लोभलालचामा नफस्नु, राम्रोसँग पढेर विद्वान् हुनु र पढाइ सकेपछि मेरो नेशनल कलेजको उत्तरदायित्व वहन गरिदिनु भनेर भन्नु भएको थियो । उहाँले त्यसै वर्ष श्री ५ महेन्द्रले दिएको गोरखादक्षिणबाहु विभूषण लिन अस्वीकार गरेर त्यागको उदाहरण देखाउनु भइसकेको थियो । त्यसैको उदाहरण दिएर मलाई पनि त्यसैको अनुसरण गर्न बारम्बार सम्झाइरहनु हुन्थ्यो । मेरो भने शिक्षक वा गुरु हुने इच्छा नभएर राजनीतितर्फ लाग्ने आन्तरिक इच्छा थियो । तर प्रिन्सिपल पन्तज्यूका अगाडि म सो कुरा भन्न सक्तिनथेँ । उहाँको इच्छा र आदर्शका प्रतिकूल मेरो जाने हिम्मत पनि थिएन । मेरो मनको इच्छा मैले कसैलाई पनि भनेको थिइन ।

त्यसबेला नेपालको राजनीतिमा प्रतिबन्ध लागिसकेको हुँदा मेरो राजनीति गर्ने इच्छा पनि समाप्त भइसकेको थियो । एम्.ए. संस्कृत प्रथम वर्ष र बी.ए. अन्तिम वर्षको पूर्ण तयारीमा लागेको बेला संवत् २०२१ सालको अन्त्यतिर नेपाल लोकसेवा आयोगले शाखा अधिकृतको परीक्षाको विज्ञापन गरेको थियो । त्यसबेला पढाइ बाँकी नै रहेकाले लोकसेवा आयोगको फाराम भर्न म त्यति इच्छुक थिइन । तर छात्रावासका अरू साथीहरूले मलाई परीक्षामा फाराम भर्ने प्रेरणा दिएका हुँदा मैले साथीहरूसँगै फाराम भरेर जाँचसमेत दिएको थिएँ र म परीक्षामा उत्तीर्ण पनि भएको थिएँ । ख्यालख्यालमा नै म सरकारको शाखाअधिकृतको पदमा प्रवेश हुन लागेको थिएँ । परीक्षामा उत्तीर्ण भई तालीम लिएर नियुक्तिपत्र पाउँदा पनि मेरो जागिरमा प्रवेश गर्ने आन्तरिक इच्छा चाहिँ थिएन । उदासीन भएर बसेकै

कारण मेरो नियुक्ति रक्षामन्त्रालयको शाखाअधिकृत पदमा भएको थियो ।

त्यसरी मैले जागिर खाएको थाहा पाएपछि नेपाल नेशनल कलेजका प्रिन्सिपल श्रीशङ्करदेव पन्तज्यूले र त्रिभुवन विश्वविद्यालयका प्राध्यापक श्रीगोकुलचन्द्र शास्त्रीज्यूले समेत अत्यन्त चित्त दुःखाउनु भएको थियो । उहाँहरूको सदिच्छा पुऱ्याउन नसकेकोमा मलाई अहिलेसम्म पनि अत्यन्त पश्चात्ताप छ । त्यसरी जागिरमा प्रवेश गर्नुभन्दा अघि मैले अङ्ग्रेजीतर्फ एस्.एल.सी. (प्रवेशिका परीक्षा) २०१८ सालको माघ महिनामा र आई.ए. को परीक्षा सन् १९६५ को डिसेम्बर महिनामा उत्तीर्ण गरेको थिएँ । संस्कृततर्फ पूर्वमध्यमा परीक्षा सन् १९५८ फरवरीमा, उत्तरमध्यमा परीक्षा सन् १९६१ जूनमा, शास्त्री परीक्षा संवत् २०२० साल असारमा र आचार्य प्रथम खण्डको परीक्षा २०२१ साल असारमा उत्तीर्ण गरेको थिएँ । बी.ए. को बाँकी रहेको परीक्षा जागिरमा प्रवेश गरेपछि सन् १९७१ को जुलाईमा, एम्.ए. को परीक्षा संवत् २०२६ साल जेठमा र बी.एल्. को परीक्षा संवत् २०३१ साल असारमा मैले पूरा गरेको थिएँ । त्यसरी जागिर खाएर पनि एक दशकभन्दा बढी समयसम्म मैले पढ्ने काम गरी नै रहेको थिएँ ।

उपर्युक्त अनुसार मैले शुरुमा कुनै लक्ष्य नै नराखीकन पढ्न थालेको थिएँभने पछि गएर जागिर खानेमात्रै दृष्टिकोणले पढेको थिएँ । त्यसबेला मैले विद्वान् हुनेगरी पढेको भए हाल सरकारी सेवाबाट अवकाश प्राप्त गरेपछि पुनः पढ्नुपर्ने थिएन । मैले सरकारी सेवामा प्रवेश गरेर बत्तीस वर्ष दुई महिनासम्म जागिर खाँदा मैले पढेको पनि सबै जागिरसँगै खाइसकेको रहेछु । मैले पढेका अरू विषय त हाल आएर केही काम नलाग्ने भएका छन् । तर मैले संस्कृततर्फ पढेको वेदान्त विषय यसबेला अत्यन्त काम लाग्ने भएको छ । विद्यार्थी अवस्थामा मैले वेदान्त पढ्दा बुझेर पढ्नेतर्फ कुनै कोशिश नै गरेको थिइन । म त्यसबेला जसरी तसरी उत्तीर्ण हुनमात्रै कोशिश गर्दथें ।

त्यसरी पहिले मैले राम्रोसँग पढ्न नसकेको हुँदा नै अहिले आएर सोही वेदान्त विषय गुरुहरूसँग पढ्नु परिरहेको छ । अहिले पढ्दामात्रै त्यसको महत्त्व मैले बुझ्न थालेको छु । सेवाबाट अवकाश लिनुभन्दा केही वर्ष पहिलेदेखि नै विद्वान् गुरुहरूसँग गएर मैले वेदान्त पढ्न थालिसकेको थिएँ । मलाई वेदान्त पढ्ने प्रेरणा दिने र मलाई पढाउने श्रद्धेय गुरुहरूप्रति अहिले म अत्यन्त कृतज्ञ

छु । यदि मैले संस्कृत पढ्दा वेदान्त विषय नलिएको भए अहिले आएर मलाई वेदान्त पढ्न मन नै लाग्नेथिएन । म पनि अवकाश प्राप्त अरू भूतपूर्व सचिवहरू सरह नै अर्थलाभ हुने काममा संलग्न भएर दौडिइरहेको हुने थिएँहोला । 'मेरा बालक कालका दिनहरू बिर्सेर टाढा भएँ । भाषा संस्कृत आङ्ल जे जति पढेँ अत्यल्प जान्ने भएँ ।' भनेर मेरो अल्पज्ञता मैले आफ्नू विविधयात्रा कवितासङ्ग्रह २०५५ मा व्यक्त गरिसकेको छु । अवकाश प्राप्त वर्तमान जीवनमा म सांसारिक कुराहरूबाट भर्सक टाढा भएर वेदान्तको चिन्तन र मनन गर्नेतर्फ म लागिरहेको छु । श्रीमद्भागवतमा *'रायः कलत्रं पशवः सुतादयो गृहा मही कुञ्जरकोशभूतयः । सर्वेऽर्थकामाः क्षणभङ्गुरायुषः कुर्वन्ति मर्त्यस्य कियत् प्रियं चलाः ॥'* भनेर सांसारिक वस्तुको अनित्यताका बारेमा उल्लेख गरिएको छ । विनाज्ञान र विनाचेतना मेरो जीवन समाप्त हुँदै



गएको देखेर मलाई चिन्ता लाग्न थालेको छ । केही वर्षदेखि मेरा घरमा नै श्रीरघुनाथ भण्डारी, श्रीशारदाप्रसाद दाहाल र श्रीविश्वनाथ रूपाखेतीका साथ म अद्वैत वेदान्तको नित्य अध्ययन, मनन र चिन्तन गरिरहेको छु । यसो गर्नुलाई ब्रह्माभ्यास गर्नु भनेर पञ्चदशीमा विद्यारण्य स्वामीले उल्लेख गर्नुभएकोछ–

तच्चिन्तनं तत्कथनं अन्योऽन्यं तत्प्रबोधनम् ।
एतदेकपरत्वञ्च ब्रह्माभ्यासं विदुर्बुधाः ॥

यसरी म आज यस उमेरमा आएर वेदान्तदर्शनका विषयमा केही जान्ने प्रयास गरिरहेको छु । म भक्ति र ज्ञानको दृष्टिकोणले अत्यन्त अल्पज्ञ छु । यो बाँकी रहेको जीवनमा केही बुझ्न सके, केही जान्न सके र केही प्राप्त गर्न सके अर्को जीवनका लागि यसबाट असल संस्कार बन्ने थियो कि ? भन्ने मलाई लागेको छ । गीतामा भगवान् श्रीकृष्णले भन्नुभएको छ । जस्तै –

अन्तकाले च मामेव स्मरन्मुक्त्वा कलेवरम् ।
यःप्रयाति स मद्भावं याति नास्त्यत्र संशयः ॥

यहाँ त्यसैलाई मूलमन्त्रको रूपमा मैले लिएको छु । धेरै वर्ष जागिर खाएर पढेको विद्या, जवानी, उत्साह, जोश, जाँगर, बुद्धि र बलसमेत समाप्त गरेर अहिले म फेरि विद्यार्थी भएको छु । म अहिले अत्यन्त ध्यान दिएर र मिहिनेतका साथ पढिरहेको छु । विद्यार्थी अवस्थामा प्राप्त गर्न नसकेको शिक्षा अहिले यस उमेरमा आएर खास गरेर प्रा.डा. श्रीदीर्घराज घिमिरेज्यू र डा.रामानन्द गिरिज्यूबाटसमेत मैले पाइरहेको छु । यसबाट मलाई अत्यन्त आत्मिक शान्ति प्राप्त भएको छ । मैले विद्यार्थी अवस्थामा अहिलेको जस्तो मन लगाएर पढेको भए सायद मेरो जीवन नै अर्कै बन्ने थियो होला । शास्त्रहरू गहिरिएर पढ्ने र अद्वैत वेदान्तमा चुर्लुम्मै डुब्ने मेरो आकाङ्क्षा अधूरै राखेर म बिस्तारै पूर्णविरामतिर अग्रसर भइरहेको छु । बल, बुद्धि र उमेर छँदै परन्तुमा चाहिने सम्बलको जोहो गर्न सकेको भए सायद मलाई अहिले आएर यसरी पश्चात्ताप हुने थिएन होला । यस सम्बन्धमा कवि भर्तृहरिले आफ्नू वैराग्य शतकमा लेख्नुभएको सदुक्तिलाई अहिले आएर म झलझली सम्झिरहेको छु । जस्तै –

यावत्स्वस्थमिदं शरीरमरुजं यावत्जरादूरतो–
यावच्चेन्द्रिय शक्तिरप्रतिहता यावत्क्षयोनायुषः ।
आत्मश्रेयसि तावदेव विदुषा कार्यः प्रयत्नो माहान्
सन्दिप्ते भवने तु कूपखननं प्रत्युद्यम कीदृशः ।।

जैलेसम्म रहन्छ शक्ति तनमा उत्साह राखी अति ।
सत्कैमा गरिहाल्नु पर्दछ सबै सत्कार्य गर्ने जति ।।
बिस्तारै सकिएर शक्ति तनको उत्साह जाला जब ।
डेगै चल्न सकिन्न हुन्छ पछुतो बेकार होला सब ।।

❀

# सेवामा प्रवेश

छात्रजीवनमै हुन्छ बाँकी जीवन निर्भर ।
यसकै जगमा बन्छ भावी भवन सुन्दर ॥

मैले पढ्ने काम सकेकै थिइन र मेरो शोचाइ पनि अर्कै थियो । त्यसै बीचमा मलाई भाग्यले अर्कै बाटोतर्फ अग्रसर गरायो । युगकवि सिद्धिचरण श्रेष्ठको "भाग्यको लहरमा लहरी लहरी । यस मरुस्थलमा म पुगेँ कसरी ?" भन्ने कविताको सम्झना मलाई आउँछ । मैले सरकारी सेवामा प्रवेश गरेर त्यति लामो समयसम्म जागिर खान्छु भनेर कहिल्यै शोचेको थिइन । मेरो शोचाइ र भोगाइमा अन्तर आएको देखेपछि मान्छेले देखेरमात्र नहुने रहेछ, लेखेकोमा निर्भर गर्नुपर्ने रहेछ भन्ने कुराको मलाई विश्वास भएको छ । त्यसै कारण म भाग्यको साथै कर्ममा समेत विश्वास गर्दछु । मैले भाग्यको कुरा गर्दा मैले शोचेको कुरा र वास्तविक जीवनमा भोगेको कुरामा के फरक पर्‍यो भन्ने सम्बन्धमा यहाँ उल्लेख गर्नु सान्दर्भिक ठान्दछु ।

काठमाडौं पढ्न आएपछि मेरो वास्तविक जीवन शुरु भएको थियो । २०१४ सालदेखि लिएर २०२१ सालसम्मको ८ वर्षको अन्तरालमा मेरो पुरानो शोचाइमा ठूलो परिवर्तन आएको थियो । त्यस बीचको छोटो अवधिभित्र मैले अरू क्रियाकलापहरूका साथै आफ्नो पढाइमा पनि निकै नै प्रगति गरिसकेको थिएँ । त्यसै अन्तरालमा २०१६ साल मङ्सिर महिनामा मेरी ठूली छोरी सरिताको जन्म भएको थियो । छात्रावासका विद्यार्थी साथीहरूले थाहा पाएपछि *'पुत्रीति जाता महतीह चिन्ता'* भनेर मलाई जिस्क्याएका थिए । मलाई उनीहरूले जिस्क्याउँदा लाज लागेको थियो । वास्तवमा त्यसबेला श्रीमती र छोराछोरीको कुरा गर्दा लाज मान्ने चलन सबैको हुन्थ्यो र मलाई पनि लाज लागेको थियो ।

२०२१ सालमा त्रिभुवनविश्वविद्यालयमा संस्कृत विषयमा म एम्.ए. को कक्षामा पढ्दै थिएँ र नेशनल कलेजमा बी.ए. अन्तिम वर्षमा अध्ययनरत

थिएँ । पढाइका अतिरिक्त छात्रगतिविधिमा पनि म सक्रिय थिएँ । साहित्यसम्मेलनमा भाग लिनु, वक्तृत्वकलामा सहभागी हुनुका साथै खेलकूद प्रतियोगिताहरूमासमेत सहभागी हुनु मेरो दिनचर्या नै भइसकेको थियो । त्यही ८ वर्षको अवधिभित्र म भारत सरकारको आमन्त्रणमा भारतको भ्रमणमा गएको थिएँ । जुन कुराको उल्लेख छात्रजीवनको सन्दर्भमा माथि भइसकेको छ । विभिन्न छात्रकार्यसमितिहरूमा सक्रिय भएर काम गर्नुका साथै तीनधारा छात्रावासको छात्रकार्यसमितिकोतर्फबाट २०२१ सालमा प्रकाशन शुरु गरिएको अरुणोदय पत्रिकाको नामकरण गर्ने कामदेखि लिएर त्यसको व्यवस्थापन गर्ने र सम्पादनको कामसमेत मैले गर्नुपरेको थियो । काठमाडौं आएदेखि नै परिस्थितिले त्यस बेलाका सर्वोच्च राजनीतिक व्यक्तित्व श्रीविश्वेश्वरप्रसाद कोइरालाका सान्निध्यमा रहेर केही सिक्ने अवसर पनि मैले पाएको थिएँ । लौहपुरुष श्रीगणेशमानसिंहलाई पनि बेलाबखतमा म भेट्तथेँ । नेपाली काङ्ग्रेसका नेता (जसलाई चाणक्य पनि भनिन्थ्यो) मेरा पिता सरहका श्रीसूर्यप्रसाद उपाध्यायलाई म बारम्बार भेट्ने गर्दथेँ । उहाँबाट म बौद्धिक र आर्थिक सहयोगसमेत प्राप्त गर्दथेँ । तर अन्त्यमा राजनीतिक परिवर्तनको कारणले मैले उहाँलाई भेट्न सकिन । मैले उहाँलाई भेट्नै नपाई उहाँको मृत्यु भएको थियो । मलाई अहिलेसम्म पनि त्यस कुराले पश्चात्ताप गराइरहन्छ । त्यस बेलाका नेपाली काङ्ग्रेसका चारधाम मानिने नेपाली काङ्ग्रेसका चार नेताहरूका घरमा म बारम्बार जानेगर्दथेँ ।

त्यसरी मेरो आवतजावत र सङ्गत त्यस समयका राजनीतिका महान् व्यक्तिहरूसँग भएको हुँदा मैले आफूलाई पनि राजनीतिककर्मीका रूपमा नै गणना गर्न थालेको थिएँ । मेरो विचार भविष्यमा राजनीतितर्फ प्रवेश गर्ने नै थियो । हुन त ममा राजनीतिक परिपक्वता, संस्कार र अनुभव त्यति सबल भइसकेको थिएन तर पनि मलाई राजनीतिक महत्त्वाकाङ्क्षाले छोइसकेको थियो । म सामान्य कुरा शोच्न छोडिसकेको थिएँ । अनुभव र दूरदृष्टिको अभावमा सायद ममा असाध्य दुर्बलताहरू सिर्जना हुनलागेका थिए । मलाई मेरो महत्त्वाकाङ्क्षाले कता लैजानेथियो र मेरो अनुभवशून्य काँचो बुद्धिको परिणति के हुनेथियो त्यस कुराको परीक्षण हुनै नपाइकन २०१७ साल पुस १ गतेको घटना घट्यो र मेरा सपनाहरू सबै चूर्णचूर्ण भएर गएका थिए । त्यसपछि म आफ्नू

वास्तविक धरातलमा ओर्लिएको थिएँ। तै पनि मेरो भित्री अवचेतन मनमा लुकेर बसेको राजनीतिक आकाङ्क्षा र लालसा सायद मरिसकेको थिएन। त्यो लालसा संस्कारका रूपमा अझैसम्म पनि ममा जीवितै छ र यसले मलाई अहिलेसम्म पनि यदाकदा दुःख दिने गरिरहेको छ। अन्तःकरणमा रहेको संस्कारले मौका पाएपछि जहिले पनि सुषुप्त भावनालाई ठाडो पारेर उठाउने काम गर्दोरहेछ। यस सन्दर्भमा मेरा जीवनमा प्रजातन्त्र पुनर्बहाली अघि र पुनर्बहाली पछि पनि थुप्रै घटनाहरू घटेका छन्। ती घटनाहरूमध्ये एउटा घटनामात्रको यहाँ उल्लेख गर्नु पर्याप्त हुने ठान्दछु।

घटना २०२१ सालको हो। २०१७ साल पुस १ गतेको घटना पश्चात् मैले जेलनेल पटक पटक बेहोर्नुपरेको थियो। त्यसबाट दिक्क भएर म पढ्नेतर्फ नै तल्लीन भएर लागेको थिएँ। मैले दिएका सबै परीक्षाहरूमा कहिल्यै पनि म असफल नभईकन नै सरासर अघि बढेको थिएँ। बाहिरीरूपमा त्यसलाई प्रगति गरेको मैले ठानेको थिएँ। तर पनि मलाई चित्त बुझेको थिएन र सन्तोष पनि भएको थिएन। मलाई उकुसमुकुस भइरहन्थ्यो। खुलासँग बोल्न र लेख्नसमेत नपाइने भएकाले त्यस्तो हुनु स्वाभाविकै थियो। जब मानिसले सामान्यरूपमा अघि बढ्ने बाटो भेट्तैन तब ऊ कहिलेकाहीँ गलत बाटो लिएर विध्वंसकारी बन्न सक्तछ अथवा सुबाटो लिएर दार्शनिक पनि बन्न सक्तछ। आफ्नो महत्त्वाकाङ्क्षा पूरा गर्न प्रायः असफल महत्त्वाकाङ्क्षी व्यक्तिहरू वा राजनीतिक व्यक्तिहरू तान्त्रिक, साधुसंन्यासी वा ज्योतिषीको शरणमा आफ्नू भाग्य वा भविष्य जान्न वा सपार्न धाउन थाल्दछन्। मलाई पनि एक पटक त्यस्तै भएको थियो। त्यसै बखत पोखरा बाटुले चौरका एक जना ज्योतिषी छात्रावासमा आएका थिए। मित्र श्रीज्ञानहरि रेग्मी र श्रीकेशव रेग्मीहरूको घर पोखरामा भएको र ज्योतिषीको घर पनि पोखरामा नै थियो। त्यही साइनुले रेग्मीबन्धुहरूलाई भेट्न उनी छात्रावासमा आएका थिए। रेग्मीबन्धुहरू र म एउटै कोठामा बस्तथ्यौँ। उनीसँग मेरो चिनाजान हुनगएको थियो। वास्तवमा ती ज्योतिषीले राजा महेन्द्रको पनि चिना हेरेकारहेछन्। कुरा गर्दैजाँदा जान्नेजस्तो लाग्यो र मैले पनि मेरो चिना देखाएको थिएँ। मेरो चिना हेरेर ती ज्योतिषीजीले मेरा ग्रहहरू उच्च स्थानमा बसेका हुनाले म भविष्यमा प्रधानमन्त्री हुनसक्ने सम्भावना भएको कुरा बताएका थिए। ज्योतिषीजीको भविष्यवाणी सुनेर म विश्वस्त हुन

नसके पनि खुशी चाहिँ भएको थिएँ। छात्रावासका विद्यार्थीहरूमध्ये मेरो चिना राम्रो भएको कुरा उनले बताएका थिए। देशमा राजनीतिक क्रियाकलाप बन्द भएको बेला मैले कुन बाटोबाट कसरी राजनीति गर्ने र प्रधानमन्त्री हुने भन्ने कुरा बुझेको थिइन। तर पनि राम्रो ग्रह भएको कुरा सुनेर मलाई खुशी चाहिँ अवश्य नै लागेको थियो।

उपर्युक्तअनुसार म दोधार र ढुलमुलमा भएको बेलामा नै लोकसेवाआयोगमा परीक्षा खुलेको हुँदा साथीभाइहरूको सल्लाहमा लागेर मन नहुँदा नहुँदै पनि लोकसेवा आयोगको परीक्षाको फाराम भरेर परीक्षामा सम्मिलित पनि भएको थिएँ। त्यो परीक्षामा लोकसेवाआयोगले पहिलो पटक शुरुमा मौखिक परीक्षा लिएर पछिमात्र लिखित परीक्षा लिने नीति लिएको थियो। म पनि अरू साथीहरू सरह नै मौखिक परीक्षामा सम्मिलित भएको थिएँ। लोकसेवाआयोगका अध्यक्ष सहित १५ जनाभन्दा बढी विद्वान् र विशेषज्ञहरूले मौखिक परीक्षा लिएका थिए। स्वदेशी र विदेशी विशेषज्ञहरूसमेत त्यस समूहमा हाम्रो परीक्षा गर्न बसेका थिए। चारैतिरबाट अनेकथरी प्रश्नहरू सोधिएका थिए। विभिन्न विषयमा उमेदवारको ज्ञान, वक्तृत्वकला, धैर्य र तुरुन्तै जबाफ दिनसक्ने क्षमताको समेत परीक्षा गरिएको थियो। म माथि त्यसरी प्रश्नहरू सबैतिरबाट एकै चोटि वैरिन थालेपछि म आत्तिन्छु कि जस्तो मलाई भएको थियो। चक्रव्यूहमा महारथीहरूबाट घेरिएको निरीह अभिमन्युजस्तो म भएको थिएँ। अन्तर्वाता लिनेहरूमध्ये एकजना अमेरिकी विशेषज्ञ जर्ज मिलानसुन पनि थिए। उनले अङ्ग्रेजीमा मलाई अर्थशास्त्रका प्रश्नहरू सोधेका थिए। विनासङ्कोच आफ्नै ढङ्गको अङ्ग्रेजीमा मैले जबाफ दिएको थिएँ। सबै मिलाएर आधा घण्टा जति मेरो अन्तर्वार्ता भएको थियो। मैले राम्रैसँग उत्तर दिएकोजस्तो मलाई लागेको थियो। मलाई जागिर खाने त्यति ठूलो इच्छा नभएकाले परीक्षाको परिणामप्रति त्यति ठूलो जिज्ञासा पनि थिएन। त्यसको सफलता र असफलताबाट सुख वा दुःखको अनुभूति पनि मलाई हुने थिएन। निरपेक्ष र निष्पृह भएर मैले परीक्षा दिएको थिएँ। केही दिनपछि लोकसेवा आयोगले परीक्षाको परिणाम प्रकाशित गरेको थियो। छात्रावासबाट परीक्षा दिने धेरै साथीहरू उत्तीर्ण भएका थियौँ। तर केही मित्रहरू

असफल भएकोमा मलाई दु:ख लागेको थियो । ती असफल हुनेहरूमध्येमा श्रीउमानाथ पोखरेल पनि हुनुहुन्थ्यो ।

त्यसरी लोकसेवा आयोगको परीक्षाबाट उत्तीर्ण भएपछि २०२२ साल जेठमा पूर्वसेवा तालीम (Preservice Training) मा सहभागी हुन केशरमहलको परिसरभित्र रहेको रङ्गमहलमा म गएको थिएँ । त्यस प्रकारको प्रशासनिक तालीम श्री ५ को सरकारको प्रशासनसेवा विभागले पहिलो पटक आयोजना गरेको थियो । उक्त तालीममा प्रशासनसेवातर्फ र न्यायसेवातर्फ गरी हामीहरू जम्मा ७२ जना सहभागीहरू सम्मिलित भएका थियौँ । सबै सहभागी साथीहरूको विवरण तल दिइएको छ । हाम्रो तालीमको उद्घाटन तत्कालीन प्रधानमन्त्री श्रीसूर्यबहादुर थापाले गर्नु भएको थियो । उहाँले निजामती कर्मचारीहरूको अधिकार, कामकर्तव्य र उत्तरदायित्वको बारेमा पञ्चायती शैलीमा विशद व्याख्या गर्नु भएको थियो । अन्त्यमा निजामती कर्मचारीहरूलाई अत्यन्त तिरस्कार गर्ने शैलीमा उहाँले उपदेश र धम्कीसमेत दिनु भएको थियो । उहाँका त्यसप्रकारका उपेक्षापूर्ण धम्कीका वाक्यहरू सुनेपछि सरकारको निजामती कर्मचारीप्रतिको अत्यन्त नकारात्मक भावना देखेर मलाई विरक्त लागेको थियो । विद्यार्थीको जोश र भावना बाँकी नै रहेको हुँदा र जागिरप्रति मलाई कत्ति पनि आकर्षण नै नरहेको हुँदा तालीम नै छोडेर हिंड्न पनि मलाई मन लागेको थियो । तर अरू साथीहरूले मलाई सम्झाएबुझाएका हुँदा आफ्नू अस्मिता र अहंलाई थिचेर मैले तालीममा भाग लिएको थिएँ ।

तालीमका संयोजक तत्कालीन प्रशासनसेवाविभागका सचिव श्रीप्रेमनरसिंह प्रधान हुनुहुन्थ्यो । तालीमका व्यवस्थापक र सञ्चालक तालीम प्रमुख श्रीनन्दलाल जोशी हुनुहुन्थ्यो । रङ्गमहलमा नै आवासको पनि व्यवस्था गरिएको थियो । तालीम र आवास एकै ठाउँमा भएकाले वार्डेनको अनुमतिविना होस्टेल छाडेर बाहिर जान पाइँदैनथ्यो । अत्यन्त कडा नियम राखिएको थियो । हाम्रो होस्टेलको वार्डेन श्रीध्रुववरसिंह थापा हुनुहुन्थ्यो । उहाँ नीतिनियममा अत्यन्त कडा तर व्यक्तिगतरूपमा अत्यन्त मिलनसार, सरल, मृदुभाषी र उदार व्यक्ति हुनुहुन्थ्यो । बस्ने र तालीम लिने दुवै ठाउँ रङ्गमहलभित्रै भएकाले अत्यन्त सुविधा थियो । ठूलाठूला कोठा भएको पुरानू घर हुँदा एउटै

कोठामा लहरै २० जनासम्म पनि सुत्न हुने गरी  व्यवस्था मिलाएको थियो। केशर शम्शेरको नाचगान गर्ने उक्त रङ्गमहल होस्टेलको रूपमा प्रयोग गर्न उपयुक्त घर नभएको भए तापनि तानतुन गरेर मिलाइएको थियो। ७२ जना प्रशिक्षार्थीहरू र व्यवस्थापक समूहका सदस्यहरू (महिला सहभागीहरू बाहेक) समेत रातमा त्यसै रङ्गमहलभित्र सुत्ने हुँदा रातभरि हल्लाखल्ला भई नै रहन्थ्यो। रातमा राम्रोसँग सुत्न पाइँदैनथ्यो। बाक्ला रुखहरूका बीचमा एकान्तमा रहेको उक्त रङ्गमहलमा रातमा यदाकदा तर्साएको, ऐठन भएको र कसैले बोलाएको जस्तो सुनिने भइरहन्थ्यो। प्रायः सुत्न असजिलो भएको सबैले महसूस गरेका थियौँ। तर्साउने कुरामा विश्वास नगर्दा नगर्दै पनि एक रात मैले पनि तर्साएको अनुभव गरेको थिएँ। अलिअलि झकाएर निद्रा लाग्न लागेको बेलामा कुनै अज्ञात हातले घाँटी थिचिदिएको हुँदा सास फेर्न नसकी म कराएर उठेको थिएँ। त्यो रात म रातभरि नै सुत्न सकेको थिइन। त्यसै गरी सबै साथीहरूलाई त्यसै प्रकारको अनुभव हुने गर्दथ्यो। त्यसै गरी रातमा तर्साएको हुँदा म सुत्ने कोठामा नै सुतेका सहभागी श्रीसूर्यबहादुर बिष्ट त्यहाँ बस्न नसकेर घर जानु भएको थियो। उहाँ तालीममा फेरि फर्केर आउनु भएन। पछि बुझ्दा उहाँको मानसिक सन्तुलन नै समाप्त भएको थाहा हुन आएको थियो। त्यहाँ बसुञ्जेल नाना थरीका घटनाहरू बारम्बार भइरहने गर्दथे। त्यहाँ नै बसेर चिनाजान भएपछि दाम्पत्य जीवनमा आबद्ध भएका साथीहरू पनि हुनुहुन्थ्यो।

त्यसरी विभिन्न घटनाहरूका साथ हाम्रो तालीम दशैंसम्म चलेको थियो। दशैं र तिहारको बिदापछि हामीहरूलाई कार्यालयको काम सिकाउन Apprentice का रूपमा विभिन्न मन्त्रालय र विभागहरूमा पठाइएको थियो। मैले उद्योग मन्त्रालयमा उपसचिव श्रीआत्माराम पौडेलका अन्तर्गत रहेर काम सिकेको थिएँ। उहाँ सेवाबाट निवृत्त भएपछि हाल संन्यास लिएर भारततर्फ नै बस्नु भएको छ भन्ने मैले सुनेको छु। हाम्रो तालीम समाप्त भएपछि लिखितपरीक्षा भएको थियो। लिखित परीक्षामा बढी महत्त्वाकाङ्क्षी हुँदा दुई जना सहभागीहरू परीक्षाकेन्द्रबाटै निकालिनु भएको थियो।

त्यसरी हाम्रो तालीम र लिखितपरीक्षासमेत समाप्त भएपछि लोकसेवा आयोगले २०२२ साल माघको पहिलो हप्तामा हाम्रो लिखितपरीक्षाको

परिणाम प्रकाशन गरेको थियो । श्रीउत्तमलाल श्रेष्ठ पहिला हुनुभएको थियो भने ७१ जनाहरूमध्ये एकजना तालीमबाटै बाहिरिनु भएको र २ जना लोकसेवाआयोगको परीक्षाबाट निकालिएपछि त्यस समयमा बाँकी हामी अधिकृतहरू ६८ जनामात्र थियौं । सहभागी साथीहरूले आफ्नै हस्ताक्षरमा दिनु भएको नामावली यस प्रकार छ :–

१. श्रीरमेश खकुरेल, कमलपोखरी, काठमाडौँ ।
२. श्रीढुण्डिराज खनाल, तेह्रथुम ।
३. श्रीखेममान भण्डारी, पोखरा ।
४. श्रीकुलचन्द्र शर्मा पौडेल, तनहूँ ।
५. सुश्री प्रभा नेपाली, काठमाडौँ ।
६. श्रीएस.डी.सरस, राजविराज, सप्तरी ।
७. श्रीमती नारायण देवी, काठमाडौँ ।
८. श्रीरामनारायणप्रसाद, महोत्तरी ।
९. श्रीरामहृदयप्रसाद, महोत्तरी ।
१०. श्रीदिव्यराम भण्डारी, काठमाडौँ ।
११. श्रीठाकुरप्रसाद पाण्डे, सिन्धुपालचोक ।
१२. श्रीपद्मबहादुर थापा, ओखलढुङ्गा ।
१३. श्रीकृष्णगोपाल श्रेष्ठ, सङ्खुवासभा ।
१४. श्रीतारणीप्रसाद भट्टराई, धनकुटा ।
१५. श्रीबोधहरिराज पाण्डे, काठमाडौँ ।
१६. श्रीटेकनाथ भट्टराई, रामेछाप ।
१७. श्रीनारायणराज तिवारी, काठमाडौँ ।
१८. श्रीदुर्गाप्रसाद दुवाडी, काठमाडौँ ।
१९. श्रीडिल्लीप्रसाद आचार्य, काठमाडौँ ।
२०. श्रीयमप्रसाद कोइराला, गोरखा ।
२१. श्रीहेमराज पाण्डे, काठमाडौँ ।
२२. श्रीरामशरण शर्मा, गोरखा ।
२३. श्रीगेहेन्द्रविक्रम शाह, काठमाडौँ ।

२४.श्रीहिरण्यलाल रेग्मी, पाल्पा ।
२५. श्रीदिलीपकुमार पौडेल, नेपालगञ्ज ।
२६. श्रीकुलप्रसाद भण्डारी, स्याङ्जा ।
२७. श्रीकृष्णलाल देव, सप्तरी ।
२८. श्रीचन्द्रशेखर मिश्र, सर्लाही ।
२९. श्रीधनबहादुर मानन्धर, ललितपुर ।
३०. श्रीसुशीलकान्त झा, सप्तरी ।
३१. श्रीजगदीशराम जोशी, ललितपुर ।
३२. श्रीपुरुषोत्तम भट्टराई, काठमाडौँ ।
३३. श्रीसुरेन्द्रबहादुर सिंह, कपिलवस्तु ।
३४. श्रीबलराम सिंह मल्ल, पर्सा ।
३५. श्रीरघुवरमान श्रेष्ठ, ललितपुर ।
३६. श्रीबुद्धबहादुर अधिकारी, तनहूँ ।
३७. श्रीप्रेमबहादुर विष्ट, ललितपुर ।
३८. श्रीआदित्यनाथ भट्टराई, काठमाडौँ ।
३९. श्रीप्रियदर्शन शर्मा, काठमाडौँ ।
४०. श्रीउत्तमलाल श्रेष्ठ, काठमाडौँ ।
४१. श्रीलक्ष्मणलाल श्रेष्ठ, काठमाडौँ ।
४२. श्रीओजराजेन्द्रपुरुष ढकाल, ललितपुर ।
४३. श्रीरामेश्वर प्रधान, काठमाडौँ ।
४४. श्रीकेशवप्रसाद प्रधान, काठमाडौँ ।
४५. श्रीयज्ञबहादुर श्रेष्ठ, ललितपुर ।
४६. श्रीसत्यन्द्रप्यारा, धनुषा ।
४७. श्रीतेजनारायण सिंह, महोत्तरी ।
४८. श्रीनरेन्द्रबहादुर शाह, ललितपुर ।
४९. श्रीकृष्णमुरारि शर्मा अधिकारी, लमजुङ ।
५०. श्रीविभूतिराज पाण्डे, काठमाडौँ ।
५१. श्रीरामाशीष साह, महोत्तरी ।
५२. श्रीपद्मबहादुर रावल, काठमाडौँ ।

५३. श्रीअच्युतनारायण राजभण्डारी, काठमाडौँ ।
५४. श्रीवेदव्यास क्षेत्री, काठमाडौँ ।
५५. श्रीद्वारकाप्रसाद श्रेष्ठ, डोटी ।
५६. श्रीनीरबहादुर जोशी, काठमाडौँ ।
५७. श्रीपुष्करराज रिजाल, काठमाडौँ ।
५८. श्रीगुणेश ठाकुर, महोत्तरी ।
५९. श्रीचक्रवन्धु अर्याल, स्याङ्जा ।
६०. श्रीध्रुवप्रसाद ढुङ्गेल, ललितपुर ।
६१. श्रीअमृतप्रसाद खाँ, रौतहट ।
६२. श्रीनरेन्द्रकुमार बस्न्यात, ललितपुर ।
६३. श्रीमती सरोजलता प्रधान, काठमाडौँ ।
६४. श्रीमती उर्मिला श्रेष्ठ, काठमाडौँ ।
६५. श्रीमती पुण्येश्वरी जोशी, भक्तपुर ।
६६. श्रीअर्जुनबहादुर क्षेत्री, काठमाडौँ ।
६७. श्रीमती सावित्री श्रेष्ठ, काठमाडौँ ।
६८. श्रीशरदकुमार भट्टराई, खोटाङ ।

माथि उल्लेख भए अनुसार लोकसेवाआयोगबाट उत्तीर्ण हुनेहरूमा मेरो क्रमसङ्ख्या १४ औँमा परेको थियो। त्यसपछि अरू साथीहरू राम्रो मन्त्रालय, विभाग र कार्यालयहरूमा नियुक्ति गराउन दौडधूप गरे होलान्, मलाई थाहा भएन। मलाई जागिरतिरको आकर्षण नभएर होला भनसुन गरेर राम्रो मन्त्रालय वा विभागमा पर्न म कहीँ कतै पनि गएको थिइन र म चुप लागेर बसिरहेको थिएँ। अरू साथीहरूको विभिन्न आकर्षक मन्त्रालय र विभागहरूमा पदस्थापन भएको थियो। तर मेरो भने मैले त्यतिबेलासम्म नामै नसुनेको रक्षामन्त्रालयमा पदस्थापन भएको थियो। सिपाहीमन्त्रालयमा पऱ्यो भनेर साथीहरूले मलाई उल्लीबिल्ली पारेका थिए। मेरो विद्यार्थीको स्वभाव र संस्कार त्यस बेलासम्म पनि गइनसकेको हुँदा मलाई रक्षामन्त्रालयमा हाजिर हुन जान मन लागेकै थिएन। एक मनले जागिरतिर नलागेर घर गएर राजनीतितिर लागौँ कि ? भन्ने पनि मैले शोचेको थिएँ। किनभने एक वर्ष अगाडि एक जना

पोखरातिरका ज्योतिषीले तिम्रो प्रधानमन्त्री बन्ने ग्रह परेको छ भनेर राजनीतितर्फको मेरो महत्त्वाकाङ्क्षालाई जागृत गराइदिनु भएको थियो। २०१८ सालमा खोटाङ जिल्लाको ऐसेलुखर्कमा भएको काण्डमा धेरै मान्छे मरेका थिए। त्यसबाट बाँचेकाले पनि दुःख पाइरहेका हुँदा छोरो राजनीतितर्फ नलागेर जागिर खाओस् भन्ने मेरा पिताजीको इच्छा भएको हुँदा सोही इच्छा मैले पूरा गर्नु थियो। त्यसैकारण अन्त्यमा जागिर खाने तर्फ नै म शोच्न बाध्य भएको थिएँ। देशको तत्कालीन राजनीतिक वातावरण, जिल्लाको परिस्थिति, घरको आर्थिक अवस्था र मातापिता दुवै वृद्ध हुँदैजानुभएको कुरालाई समेत मनन गरी भाग्य र कर्मसमेतबाट प्राप्त भएको शाखाअधिकृतजस्तो पद छोड्नु बुद्धिमानी नठहरिने देखेर मैले रक्षामन्त्रालयमा गएर हाजिर हुने निश्चय गरेको थिएँ। त्यसरी निकै दिनको शोचविचार पछि अन्ततोगत्त्वा २०२२ साल माघ २१ गते सोमवारका दिन सिंहदरवारभित्र रहेको रक्षामन्त्रालयमा हाजिर हुन म गएको थिएँ।





श्रीमती इन्दिरा भट्टराईका साथ लेखक, तानसेन, पाल्पा, २०४१

# रक्षामन्त्रालयमा

नेपालको केन्द्रीय सचिवालय रहेको ऐतिहासिक तथा प्रमुख प्रशासनिककेन्द्र सिंहदरबारभित्र रक्षामन्त्रालय थियो। रक्षामन्त्रालयमा सर्वसाधारणको आवतजावत नहुने र काम पनि नपर्ने हुँदा रक्षामन्त्रालय सर्वसाधारणका लागि र मेरा लागि पनि अपरिचित नै थियो। विद्यार्थीको नेता भएर विभिन्न मागहरू लिएर सिंहदरबारभित्र बारम्बार म गइरहने गर्दथेँ। आगो लागेर २०३० साल असारमा नष्ट हुनुभन्दा पहिलेको सिंहदरबारभित्र सबै मन्त्रालय र आयोगहरू अटेका थिए। तर हामी विद्यार्थीहरू काम भएका सम्बन्धित मन्त्रालयमा मात्रै जाने भएकाले रक्षामन्त्रालय कहाँ थियो मलाई थाहै थिएन। लोकसेवाआयोगको कार्यालय पनि त्यस बेला सिंहदरबारभित्रै थियो। त्यहीँबाट परीक्षा उत्तीर्ण गरेर शाखाअधिकृतमा मैले नियुक्ति पाएको थिएँ। तर पनि मलाई रक्षामन्त्रालयका बारेमा थाहा थिएन। जागिर खाने नै निश्चय भएपछि म सोध्दै खोज्दै रक्षामन्त्रालयमा पुगेको थिएँ। रक्षामन्त्रालय सिंहदरबारको तेस्रो चोकको दक्षिणपट्टि परराष्ट्र मन्त्रालयको सोझै मुनिको भुइँतलामा रहेछ। उक्त मन्त्रालय कम्पाउण्डभित्र पनि अर्को कम्पाउण्ड भएको अगाडि दक्षिणपट्टि भुइँघर र बगैँचासमेत भएको एकान्त अनि शान्त ठाउँमा रहेछ। परराष्ट्रमन्त्रालय र रक्षामन्त्रालयसमेत बसेको लङ तत्कालीन श्री ३ जुद्धले आफ्नी मन परेकी कान्छी बडामहारानीका लागि पछि बनाएका हुँदा नयाँ र भव्य पनि रहेछ।

त्यस बेला अधिकृतहरूले मयलपोससुरुवाल लगाएर कार्यालयमा जानुपर्दथ्यो। अहिलेजस्तो आफूखुशी थिएन। त्यसै कारण म पहिलो पटक जीवनमा मयलपोससुरुवाल, कोट र टोपी लगाएर जागिर खान रक्षामन्त्रालयमा गएको थिएँ। म सोझै प्रशासन शाखासमेत हेर्ने उपसचिव श्रीप्रकाशमान प्रधानको कार्यालयमा पुगेको थिएँ। ठूला कोठामा दुई जना मयलपोस सुरुवाल, कोट र सक्कली ढाकाका टोपी लगाएका व्यक्तिहरू बसेका थिएँ। ती दुई जनाहरूमध्ये एक जना दुबला, अधबैँसे र केही बुज्रुक

जस्ता व्यक्ति उपसचिव श्रीप्रकाशमान प्रधान हुनुहुन्थ्यो र अर्का भर्खरका राम्रा, खानदानीजस्ता र जीउडाल मिलेका व्यक्ति शाखा अधिकृत श्रीमुकुन्द शम्शेर थापा हुनुहुन्थ्यो । श्रीमुकुन्द शम्शेर थापा तत्कालीन रक्षासचिव श्रीक्षेत्रविक्रम राणाका पी.ए. हुनुहुन्थ्यो । मैले गएर उहाँहरूलाई आफ्नू परिचय दिनुका साथै आफ्नू नियुक्तिपत्र पनि देखाएको थिएँ । उहाँहरू दुवै जनाले पालो पालो गरेर मलाई अभियुक्तसँग बयान लिएजस्तो गरी मेरो जन्मदेखि त्यस बेलासम्मको विवरण सोध्नुभएको थियो । मैले पनि अन्यमनस्क हुँदै उहाँहरूलाई आफ्ना बारेका सबै कुराहरू भनेको थिएँ । कुराकानीका सन्दर्भमा उपसचिव श्रीप्रकाशमान प्रधानलाई मैले केही हाकिमीपन भएका, घमण्डी, बुज्रुक र अरूप्रति उपेक्षाभाव राख्ने व्यक्तिका रूपमा त्यसबेला बुझेको थिएँ । शाखाअधिकृत श्रीमुकुन्द शम्शेर थापालाई भने अरूका बारेमा केही जिज्ञासा राख्ने उत्सुकता भएका, बाहिरीरूपमा सरल देखिने, सहानुभूतिपूर्ण व्यवहार र कुलीनताको अहंसमेत भएका व्यक्तिका रूपमा उहाँका कुराकानी र व्यवहारबाट मैले पाएको थिएँ । उहाँ श्री ३ चन्द्र शम्शेरका मावली खालका शम्शेर थापा हुनुहुन्थ्यो ।


नेपालको केन्द्रीय सचिवालय, सिंहदरबार

त्यसरी चिनाजानी र कुराकानी गरेपछि मलाई मेरो बस्ने कोठा अर्थात् प्रशासन शाखाको अधिकृत बस्ने शाखा देखाइएको थियो। उपसचिव र सचिवका पी.ए. समेत बसेको ठूलो कोठाको बाहिरपट्टि अत्यन्त साँघुरो कोठामा मेरो कार्यालय रहेछ। मभन्दा पहिले त्यहाँ शाखाअधिकृत भएर बसेका श्रीश्यामबहादुर पाण्डे पनि त्यही कोठामा बस्नुभएको रहेछ। एउटा सानो टेबुल, एउटा सामान्य कुर्सी र अगाडिपट्टि सामान्य दुई मेच राखिएका थिए। मैले त्यस दिनसम्म कहीँ कसैको कार्यालय पनि कस्तो हुन्छ र कस्तो हुँदा राम्रो हुन्छ भनेर विचार गरेकै थिइन। त्यो मेरो उपेक्षित कार्यालय देख्दा पनि मलाई कुनै खालको अनुभूति भएको थिएन। उठ्न, बस्न र सजिलैसँग

घुम्न सक्ने फराक दोहोरो हावा चल्ने कोठा भएको भए राम्रो हुनेथियो भन्ने चाहिँ मलाई लागेको थियो । उपेक्षापूर्णरूपमा गरिएको त्यो व्यवहार हो भन्ने मैले सम्झिएको थिएँ । भर्खरै विद्यार्थी अवस्थाबाट जोश र जाँगर नसेलाउँदै जागिर खान गएको कारणले पनि ममा त्यस प्रकारको भावना आएको हुनसक्छ ।

त्यस रक्षामन्त्रालयमा सबै कुराको व्यवस्था मिलाउने मन्त्रालयका सुपरिटेण्डेण्ट नायव सुब्बा श्रीपूर्णलाल श्रेष्ठ हुनुहुँदोरहेछ । उहाँ पनि मान्छे हेरेर व्यवहार गर्ने रकमी व्यक्तिजस्तो मलाई लागेको थियो । मन नलागी नलागी जागिर खान गएको मान्छे म त्यहाँ गएर हाजिर भएपछि मलाई झन् विरक्त लागेर आएको थियो । मेरा मुनि शाखामा काम गर्ने सहयोगी सहायक कर्मचारीहरू धेरै जसो पुराना विचारधाराका, कम पढेलेखेका र राणाकालदेखि जागिर खाएर जी हजूरीमा विश्वास राख्ने चाप्लुस र चाकडीबाज व्यक्तिहरू नै थिए । मभन्दा माथिका उपसचिव श्रीप्रकाशमान प्रधान अत्यन्त पुरानू विचारधाराका, आई.ए. सम्म पढेका, काठमाडौंभन्दा बाहिर नेपाल नै नदेखेका, विदेशको ज्ञान नभएका, सभ्यताको मुखै नदेखेका र अत्यन्त आत्मकेन्द्रित व्यक्ति हुनुहुन्थ्यो । मसँग उहाँको व्यवहार अत्यन्त उपेक्षापूर्ण भएको शुरुदेखि नै मैले पाएको थिएँ । उहाँ आफूलाई काठमाडौं शहरको कुलीन तथा खान्दानी नेवार परिवारको सम्भ्रान्त र सभ्य व्यक्ति हुँ भन्ने सम्झनुहुन्थ्यो भने मलाई उपत्यकाभन्दा बाहिरको संस्कृत पढेको, केही नजान्ने र पाखे बाहुनका रूपमा लिनुहुन्थ्यो । उहाँले स्पष्टरूपमा व्यक्त नगरे तापनि उहाँको मप्रतिको व्यवहार र हाउभाउसमेतबाट सो कुरा म अनुमान गर्दथेँ । मलाई जागिरप्रति आसक्ति र मोह नभएको हुँदा उहाँको मप्रतिको व्यवहारलाई म त्यति गम्भीरताका साथ लिन्नथेँ पनि ।

त्यस बेला रक्षामन्त्रालयको दरबन्दी अत्यन्त सानो थियो । रक्षा सचिव, दुईजना उपसचिवहरू, तीन जना शाखा अधिकृतहरू, केही राजपत्रअनङ्कित कर्मचारीहरू र केही पाले पिउनहरूको दरबन्दी भएको सानो मन्त्रालय थियो । त्यस बेलाको शाही नेपाली सेनाको प्रधान कार्यालयमा पनि अहिलेजस्तो विशाल दरबन्दी थिएन । प्रधान सेनापतिका मुनि दुई जना मेजर जनरलहरूको दरबन्दी थियो । एउटालाई एड्जुटेण्ट जनरल र

अर्कोलाई क्वार्टर मास्टर जनरल भनिन्थ्यो । छोटकरीमा ए.जी. र क्यू.एम्.जी. भन्ने चलन थियो । ती मुनि चारजना बृगेडियर जनरलहरू थिए । तिनीहरूले नै सारा आर्मी सञ्चालन गरेका थिए । रक्षामन्त्रालयको बनावट पनि त्यस्तै प्रकारको थियो । एक सचिवका मुनि दुई उपसचिवहरूमा एउटाले ए.जी.को काम हेर्दथ्यो र अर्को उपसचिवले क्यू.एम्.जी.को काम हेर्दथ्यो । रक्षामन्त्रालयमा ए.जी.लाई छोटकरीमा ए शाखा र क्यू.एम्.जी. लाई छोटकरीमा क्यू शाखा भनिन्थ्यो । त्यस बेलाको रक्षामन्त्रालय आर्मीहेड्क्वार्टरको आज्ञा पालक महाशाखाजस्तो देखिन्थ्यो । रक्षामन्त्रालयका सचिव पनि आर्मीबाट अवकाश प्राप्त गरेका जनरलहरू नै हुने गर्दथे ।

२०१७ साल पुस १ गतेको रक्तविहीन सत्ता ग्रहणपछि राजा महेन्द्रको पालामा सर्वेसर्वा बनेको आर्मीहेडक्वार्टरको छायामा परेको रक्षामन्त्रालय निरीह भएकोमा कुनै आश्चर्य मान्नु पर्ने थिएन । शुरुशुरुमा मैले रक्षामन्त्रालयको कुनै कुरा बुझ्नै सकेको थिइन । आर्मीहेडक्वार्टरको ए.जी. अन्तर्गतको काम हेर्ने उपसचिव श्रीप्रकाशमान प्रधान अन्तर्गतको ए. शाखामा म शाखाअधिकृत भएको थिएँ । मैले सरुवा र बढुवा लगायतका प्रशासनिक कामकुराहरू र निकासा पुकासाको कामसमेत हेर्नुपर्दथ्यो । मेरा उपसचिव श्रीप्रकाशमान प्रधानले आफूलाई जेसुकै ठान्नु भएको भए तापनि उहाँ कम पढेलेखेका, आफ्नो जमानामा गाईजात्रे नाटक राणाजीका दरबारहरूमा खेलिहिँडेका र दादागिरी देखाउन गौरव मान्ने रोगी र जङ्गली किसिमका व्यक्ति हुनुहुन्थ्यो । आफ्ना जमानामा गरेका गुण्डागर्दी र जवानीमा आफूले गरेका तल्ला तहका अनैतिक क्रियाकलापहरू अत्यन्त गौरवका साथ हामीहरूलाई उहाँ सुनाउने गर्नुहुन्थ्यो । अनैतिक आचरण, गुण्डागर्दी र हुल्याहा कामलाई उहाँ आफ्नू पुरुषार्थ सम्झनु हुन्थ्यो । घरको आर्थिक स्थिति अत्यन्त कमजोर, दुइटी श्रीमतीका सन्तानलाई त्यसै जागिरको आम्दानीबाट भरणपोषण गर्नुपर्ने र आफू पनि राजयक्ष्माको रोगी भएकाले जीवन धान्न उहाँलाई अत्यन्त गाह्रो परेको थाहा हुन्थ्यो । तर पनि उहाँ आडम्बरी व्यक्ति भएकाले ती सबै आफ्ना कमजोरीहरूलाई ढाकछोप गरेर बाहिर आफ्नू धाकरबाफ प्रदर्शन गरिरहनु हुन्थ्यो र बाहिर आफू घरानियाँ भएको कुराको फोस्रो धाक लगाइरहनुहुन्थ्यो । उहाँका अरू जतिसुकै

दुर्गुणहरू भए तापनि कार्यालयको कामकारबाहीमा भने उहाँ अत्यन्त चुस्तदुरुस्त हुनुहुन्थ्यो । उहाँ टिप्पणी लेख्न र प्रस्ताव बनाउन अत्यन्त दक्ष हुनुहुन्थ्यो । चिट्ठीपत्र लेख्दा पनि संस्कृत मिसिएको अत्यन्त शुद्ध र परिमार्जित भाषामा लेख्नेगर्नुहुन्थ्यो । उहाँ तलबाट पेश भएका फाइलहरू केलाएर अत्यन्त सूक्ष्मरूपमा अध्ययन गर्नेगर्नुहुन्थ्यो र नमिलेका कुराहरूलाई मिलेन भनेर आफ्नू टिप्पणीसहित बेलाबेलामा फायल सम्बन्धित शाखाहरूमा फिर्ता पनि पठाउने गर्नुहुन्थ्यो । छिटोछरितो गर्न उहाँ सिपालु हुनुहुन्थ्यो । त्यस अर्थमा म उहाँलाई मेरो प्रशासनिक क्षेत्रको प्रथम गुरु नै मानेर अहिलेसम्म पनि आदर नै गर्दछु ।

रक्षामन्त्रालयको क्यू. शाखा हेर्ने अर्का उपसचिव श्रीगंभीरजङ्ग गुरुङ हुनुहुन्थ्यो । उहाँ बृटिशसमयका भारतीय सेनाका अवकाशप्राप्त सैनिक हुनुहुन्थ्यो । उहाँ अत्यन्त कम पढेलेखेका, सीमित दृष्टि र उद्देश्य भएका अदक्ष व्यक्ति हुनुहुन्थ्यो । उहाँ जहिले पनि बृटिश सेना र आफ्नू जागिरको कुरा गरिरहने दुःखी तथा दरिद्र मानसिकता भएका व्यक्ति हुनुहुन्थ्यो । उहाँ दिनभरि कार्यालयको काम नगरेर व्यर्थका कुराहरू गरेर दिन बिताउनु हुन्थ्यो । भएभरका फाइलहरू आफ्ना टेबुलमा थुपारेर अग्लो चाङ पारेर सधैँ राख्ने र धेरै काम गरेको अरूलाई देखाउने उहाँको स्वभाव थियो । मन्त्रालयबाट अरू शाखाका कर्मचारीहरू उठेर घर हिँडिसकेपछि आफ्ना मातहतका कर्मचारीहरू राखेर रात परेपछि काम गराएर दुःख दिने बानी भएका अत्यन्त असामयिक व्यक्ति उपसचिव श्रीगंभीरजङ्ग गुरुङ हुनुहुन्थ्यो । श्रीशिवप्रसाद कायस्थ उहाँका अन्तर्गतको शाखामा एक पढेलेखेका शिक्षित व्यक्ति शाखा अधिकृत हुनुहुन्थ्यो । म रक्षामन्त्रालयमा गएको केही दिनमा नै उहाँ उपसचिव पदमा बढुवा भएर राष्ट्रिय योजना आयोगमा जानु भएको थियो । त्यस शाखामा धेरै थरीका शाखा अधिकृतहरूको सरुवा चाँडो चाँडो हुने गर्दथ्यो । प्रायःगरेर दुई जना उपसचिवहरूका बीचमा मित्रता भएको मैले कहिल्यै पनि देखिन । उहाँहरू एकले अर्कालाई तल देखाउने तिक्डम गरिरहनु हुन्थ्यो । कर्मचारीहरू पनि दुई भागमा विभाजित थिए । एक किसिमले त्यस बेलाको रक्षामन्त्रालय पुरातत्त्वसङ्ग्रहालयजस्तो मलाई लाग्दथ्यो । त्यस रक्षामन्त्रालयमा अत्यन्त पुरानू काम गर्ने तौरतरिका र

शैली भएका मान्छेहरूको जमघट थियो । त्यस मन्त्रालयमा सबैलाई एकीकरण गरेर राख्न प्रयास गर्ने व्यक्तिमा श्रीमुकुन्द शम्शेर थापामात्र देखिनुहुन्थ्यो । तर पनि कहिलेकाहीँ उहाँ पनि खेलबाडको रूपमा व्यक्तिहरूसँग व्यवहार गर्न चाहनुहुन्थ्यो । सबैलाई आफ्नू बनाउने र परिआउँदा आर्थिक लगायत सबै कुराको सहयोग गर्ने उहाँको बानी थियो । सबैको सुखदु:खमा उहाँ साथ दिने प्रयास गर्नुहुन्थ्यो । त्यस मन्त्रालयमा काम गर्ने सचिवदेखि लिएर पिउनसम्मलाई उहाँले आर्थिक सहयोगदेखि अरू विभिन्न खालका सहयोग गर्नुभएको मैले देखेको थिएँ ।

श्रीमुकुन्द शम्शेर थापा एक कुशल खेलाडी हुनु हुन्थ्यो । उहाँको एउटासँग कुरा गरेर अर्काको बारेमा सूचनाहरू सङ्कलन गर्ने बानी थियो । प्राय: गरेर एउटाको कुरा बुझेर आफू अर्कोसँग त्यही विषयमा कुरा गर्न तयार भएर बस्नुभएको देखिनुहुन्थ्यो । सामान्यरूपमा मानिसले बुझ्दा श्रीथापाले सबैसँग मिलेझैँ गरेर एक अर्काका कुराहरू र कमीकमजोरीसमेत बुझी आपसमा सङ्घर्ष गराउन खोजेजस्तो देखिन्थ्यो । वास्तवमा उहाँको भित्री उद्देश्य त्यो नभएर आफू सबैको साझा मित्र हुने र अरूहरू टाढाटाढा नै भइरहुन्, ती सबैले एक अर्काको कमजोरी आफूलाई सुनाइरहुन् र सबैको कमजोरी आफूलाई थाहा भइरहोस्, तिनै कमजोरीको आधारमा सबैलाई आफ्ना वरिपरि घुमाइरहन सकियोस् भन्ने उहाँको उद्देश्य भएको जस्तो मलाई लागेको थियो । तर समग्रमा उहाँ सबैको भलो चाहने असल मान्छे हुनुहुन्थ्यो । श्रीथापाजीमा मान्छे चिन्नसक्ने क्षमता थियो । मलाई पनि उहाँले धेरै दिनसम्म परीक्षा गर्नुभएको थियो । केही कुरा बाहेक अरू बानी व्यहोरा र चरित्रमा पनि कुरा मिल्न थालेपछि हामीहरू दुई जनामा मित्रता बढेको थियो र हामीहरू घनिष्ट भएका थियौँ ।

त्यसपछि रक्षासचिव श्रीक्षेत्रविक्रम राणाले पनि मलाई अत्यन्त स्नेह र विश्वासका साथ मन्त्रालयको काम लगाउन थाल्नु भएको थियो । त्यस बेला आर्मीको सम्पूर्ण नामनामेसी अङ्ग्रेजीमा भएको र त्यसलाई नेपालीमा अनुवाद गर्ने कामका लागि नै अङ्ग्रेजी, नेपाली र संस्कृत तीनै थरी भाषामा दक्ष भएको शाखा अधिकृत छान्दा म रक्षामन्त्रालयमा परेको रहेछु । काम गर्दै जाँदा र ममाथि विश्वास भएपछि रक्षासचिव श्रीक्षेत्रविक्रम राणाले

मलाई सो कुरा बताउनु भएको थियो। पहिले रक्षामन्त्रालयमा परेकोमा आश्चर्य लागेको थियो। तर मेरो योग्यताको कदर भएको रक्षासचिवकै मुखबाट सुनेपछि मेरो आश्चर्य सुखद आश्चर्यमा परिणत भएको थियो। उहाँले मलाई धेरै कुराहरू सिकाउनु भएको थियो। खास गरेर भूगोल र जिल्लाको तत्कालीन प्रशासनिक गतिविधिमा मलाई धेरै ज्ञान दिनुभएको थियो। श्रीक्षेत्रविक्रम राणा आर्मीको मेजरजनरलबाट रक्षासचिवमा आउनु भएको थियो तापनि उहाँमा प्रशासनिक गुण र कुशलता प्रशस्त विद्यमान भएको मैले पाएको थिएँ। आफूभन्दा मुनिका सबैसँग सहयोग लिएर काम गर्न सक्ने क्षमता उहाँमा थियो। मन्त्रालयको काम गराउन अरू मन्त्रालयमा र आफ्नै मन्त्रालयका विभिन्न शाखाहरूमा समेत आफैँ फायल लिएर जानुहुन्थ्यो र जुनसुकै तहको कर्मचारी भए पनि भेटेर काम गराउनुहुन्थ्यो। म पनि कैयौँ पटक उहाँसँगै फायल बोकेर विभिन्न मन्त्रालय र विभागहरूमा काम गराउन गएको थिएँ। उहाँको त्यो बानी मलाई अत्यन्त मन परेको थियो र त्यो बानी मैले पनि सिक्ने प्रयास गरेको थिएँ।

केही महिनापछि रक्षासचिव श्रीक्षेत्रविक्रम राणाको गृहमन्त्रालयमा सरुवा भएको थियो र रक्षामन्त्रालयको सचिवमा सरदार श्रीविष्णुमणि आचार्यको सरुवा भएको थियो। सरदार श्रीविष्णुमणि आचार्य आएपछि मन्त्रालयको वातावरण नै अर्कै भएको थियो। सरदार बाजे मन्त्रालयको काम प्रायः नहेरेर बाहिरको काम गर्नेगर्नुहुन्थ्यो। राजनीति गर्ने उहाँको सोख थियो र पञ्चायतकालीन ठूलाठूला नेताहरू उहाँलाई भेट्न आउनेगर्दथे। त्यस बेला दरबारमा उहाँको राम्रो पहुँच थियो। श्री ५ महेन्द्रका उहाँ अत्यन्त विश्वासी व्यक्ति हुनुहुन्थ्यो। राष्ट्रिय पञ्चायतमा जिल्लाहरूबाट ल्याउने र राजाबाट मनोनित गराउने काममा पनि उहाँको भूमिका प्रत्यक्ष वा अप्रत्यक्षरूपमा रहन्थ्यो। उहाँका सम्पर्कमा आएका धेरै नेताहरूलाई मन्त्री बनाएको मैले देखेको थिएँ। उहाँहरूमध्ये मैले चिनेका र नाम चलेका व्यक्तिहरूमा श्रीगेहेन्द्रबहादुर राजभण्डारी पनि एक हुनुहुन्थ्यो। राजनीतिका साथै प्रशासनमा सचिव, अञ्चलाधीश, संस्थानका प्रबन्धक, महाप्रबन्धक र निर्देशकहरू बनाउने काममा पनि सरदारबाजेको प्रमुख हात भएको मैले देखेको थिएँ। सरदारबाजे असाध्य विशाल तथा उदार हृदय

भएका मानिस हुनुहुन्थ्यो । उहाँ आँटकाँट भएका, दिन र खान सक्ने व्यक्ति पनि हुनुहुन्थ्यो । उहाँ नेपाल खाद्यसंस्थानको पनि हर्ताकर्ता हुनुहुन्थ्यो । दशैंको उपलक्ष्यमा मन्त्रालयका अधिकृतदेखि लिएर पाले र पिउनसम्मका सबै कर्मचारीहरूलाई रकम, खसी र चामलसमेत उहाँ बाँड्ने गर्नुहुन्थ्यो । सरदारबाजेको उदारताबाट हामी सबै प्रभावित थियौँ । सेनासँग पनि उहाँको राम्रो सम्बन्ध थियो । उहाँ सल्याने राजाका डिठ्ठा भएर दाङसल्यानबाट उहाले आफ्नू जागिरेजीवन शुरु गर्नु भएको हुँदा उहाँ तत्कालीन प्रधानसेनापति श्रीसुरेन्द्रबहादुर शाहसँग पनि अत्यन्त घनिष्ट हुनुहुन्थ्यो । श्रीसुरेन्द्रबहादुर शाह सल्याने राजाका साहिँला छोरा र श्रीकेशर शम्शेर ज.ब.रा.का छोरीज्वाईसमेत हुनुहुन्थ्यो । श्रीसुरेन्द्रबहादुर शाहकी श्रीमतीको नाम नेपालराज्यलक्ष्मी थियो र उहाँ श्री ५ त्रिभुवनकी भाञ्जी भएकी हुँदा उहाँको दरबारमा पनि धाकरबाफ राम्रै थियो । सरदार श्रीविष्णुमणिको एकातर्फ सल्याने राजाको छोराको नाताले आफ्नै मालिक नै प्रधानसेनापति भएकाले काम गर्न सजिलो नै भएको देखिन्थ्यो भने अर्कोतर्फ तत्कालीन श्री ५ बडामहारानी रत्नराज्यलक्ष्मीका बाबु श्रीहरिशम्शेर ज.ब.रा.को पनि सल्याने राजासँग साइनु परेकाले त्यही नाताबाट श्री ५ रत्न मार्फत् श्री ५ महेन्द्रको कृपा र प्रसाद सरदारबाजेलाई प्राप्त भएको कुरा गाइँगुइँ सुनिने गर्दथ्यो । सरदार श्रीविष्णुमणिले रक्षामन्त्रालयमा बसेर मन्त्रालयको कामभन्दा अरू बाहिरिया काम धेरै गर्नुभएको मैले देखेको थिएँ । रक्षामन्त्रालयको कामले उहाँलाई नपुगेर हो कि ? अथवा उहाँको रक्षाको कामप्रति अभिरुचि नभएर हो ? उहाँले खाद्यसंस्थानदेखि लिएर अरू मन्त्रालयहरूले गर्ने कामका साथै जिल्लाका कामहरू पनि गर्नेगर्नुभएको थियो । उहाँ एक विशाल हृदय भएका व्यक्ति हुनुहुन्थ्यो र सबैलाई प्रोत्साहित गरेर काम गराउन उहाँ सिपालु हुनुहुन्थ्यो ।

रक्षामन्त्रालयमा शाखा अधिकृत भएपछि २०२३ सालको बडादशैँमा मातापिताका हातको टीका लगाउन र आफ्नू परिवार काठमाडौंमा लिएर आउन म घर गएको थिएँ । काठमाडौंबाट घर जाँदा सानो हवाइजहाजमा चढेर म रुम्जाटार एयरपोर्टमा उत्रिएको थिएँ । त्यो दिन महा अष्टमीको दिन थियो । मेरा साथमा त्यस बेलाका उदयपुर जिल्लाका तत्कालीन

राष्ट्रिय पञ्चायतका सदस्य श्रीकटकबहादुर कार्की पनि हुनुहुन्थ्यो । उहाँलाई रुम्जाटारबाटै हँलेसीतिर बिदा गरेर म तलुवाको बाटो हुँदै दूधकोशीको रभुवाको पुल तरेर माझीगाउँ पुगेको थिएँ र त्यहाँबाट हाम्रो काम गर्ने हली सिंहवीरे माझीलाई साथमा लिएर अबेर रातमा म घर पुगेको थिएँ । त्यो वर्षको बडा दशैं अत्यन्त रमाइलो वातावरणमा मातापिताको वरद छत्रछायामा रहेर दिदीबहिनी, दाजुभाइ, कुलकुटुम्ब, नातागोता र इष्टमित्रका साथ मैले मनाएको थिएँ । दशैंपछि तिहारको टीका दिदीबहिनीका हातबाट लगाइएको थियो । त्यसपछि हाम्रो त्यसप्रकारको भेला फेरि कहिल्यै पनि हुन सकेन । किनभने हामीहरू सबै रावालामीडाँडा छाडेर यत्रतत्र छरिएका थियौँ । त्यो नै हाम्रो पहाडको घरमा भएको अन्तिम भेटघाट र समागम थियो ।

दशैं र तिहार मानेर काठमाडौँ आउने क्रममा श्रीमती र छोरी सरितालाई लिएर रावालामीडाँडा पात्लेको भले नेवारलाई भरिया बनाएर २०२३ साल मङ्सिर १ गते बिहान सबेरै घरबाट मैल प्रस्थान गरेका थिएँ । रभुवाको माझीगाउँमा झरेर हाम्रो हली सिंहवीर माझीको घरमा हामीहरूले बिहानको भात खाएका थियौँ । त्यहाँबाट हिँडेर हामीहरू चार्खुकी माहिली बहिनी सीताको घरमा गएर एक रात वास बसेका थियौँ । त्यसपछि चार्खु नै घर भएका त्यस बेला नेपाल लोकसेवा आयोगको नयाँ शाखा अधिकृत पदमा नियुक्ति पाएका श्रीरेवतीरमण पोखरेलसमेतका साथ भएर हामीहरू ओखल्ढुङ्गा हुँदै बीच पहाडको बाटो धेरै उकाला र ओरालाहरू पार गर्दै १३ दिन लगाएर काठमाडौं आइपुगेका थियौँ । त्यस बेला मेरो घर रावालामीडाँडा जान र आउनसमेत यातायातको कुनै सुविधा थिएन । विकट पहाडका उकाली र ओरालीहरू काट्तै, दुर्लङ्घ्य तथा उत्तुङ्ग पहाडहरू छिचोल्दै, दुस्तर नदीहरू पार गर्दै र बाटामा आइपर्ने नाना थरीका आपद् विपद्हरू सहँदै पैदलै हिडेर काठमाडौँ आउनु बाहेक हामीहरूसँग अरू कुनै उपाय नै थिएन । ती सबै



लेखक, श्रीमती इन्दिरा भट्टराई र ठूलीछोरी सरिता, २०२६

कष्टहरू बेहोर्दै हामीहरू काठमाडौं आइपुगेका थियौं । हुन त त्यो बाटो हुँदै मैले छात्रजीवनमा घर आउँदा र जाँदा बीसौं पटक झोला र कुम्ला बोकेर ओहोर दोहोर गरिसकेको थिएँ । उमेर थियो, जोश थियो, शरीर पनि स्वस्थ थियो र हिँड्ने कुरामा मलाई कत्ति पनि अल्छी लाग्दैनथ्यो । एक पटक पाँच दिनमा नै काठमाडौँबाट हिँडेर कोशी गड्तीरै गड्तीर म घर पुगेको थिएँ ।

त्यसैगरी घरबाट काठमाडौं आउँदा एक पटक एक दिनमा झाँगाझोली रातमाटेदेखि पैदलै हिँडेर म काठमाडौं आइपुगेको थिएँ । त्यसरी १ दिनमा म १८ कोषसम्म पनि हिँडेको थिएँ । त्यो बाटो हिँड्दा मैले धेरै थरीका दुःख र झणझटहरू भोगेको थिएँ । अनिकाल परेका बेला सुनकोशी र दूधकोशीको गड्तीरको बाटो आउँदा र जाँदा केही खान नपाएर भोकभोकै पनि मैले हिँड्नुपरेको थियो । अहिले हवाइजहाजबाट पूर्वतर्फ आउँदाजाँदा माथिबाट ती मैले दुःख गरेर जवानीका बेलामा हिँडेका बाटाहरू देख्ता मलाई सपना जस्तो लाग्छ । मैले राम राम जप्दै डुङ्गा र जँगारहरूबाट पार गरेका दूधकोशी र सुनकोशीसमेतका नदीहरूबाट धेरै पानी बगेर समुद्रमा समाहित भइसकेको छ । मेरो अमूल्य छात्रजीवनको जवानी समाप्त हुनाका साथै ३२ वर्ष २ महिना लामू जागिरको जीवन पनि समाप्त भइसकेको छ । अहिले म पुराना कुराहरू सम्झेर, लेखेर, आध्यात्मिक विषयमा केही चिन्तन, मनन गरेर आफ्नू अवकाशप्राप्त जीवन बिताइरहेको छु । अहिले आएर मेरा शरीरका प्रत्येक अङ्गका अवयवहरू गल्दै गएका छन् । अब नयाँ कुरा शोच्ने र काम गर्नेतिर मन लागे तापनि मलाई शरीरले साथ दिन छाड्दैगएको छ । यो आफ्नै बारेको अनुस्मृति लेख्ता पनि मेरो जाँगर चलिरहेको छैन । विगत र वर्तमानका सम्झनाहरू अहिले मेरा स्मृतिपटलमा झल्किरहेका छन् तर पनि म अत्यन्त अन्यमनस्क भएर बिस्तारै लेखिरहेको छु । मलाई यसतर्फ चाँडै अघि बढ्ने त्यति ठूलो उत्साह र जाँगर पनि छैन । ए म ता घरबाट काठमाडौं आएको कुरा लेख्ता लेख्तै बीचैमा हराएँछु । अब म फेरि पुरानै प्रसङ्तर्फ कलम चलाउँदछु ।

घरबाट २०२३ साल मङ्सिर १ गते प्रस्थान गरेर २०२३ साल मङ्सिर १३ गते बिहान हामीहरू काठमाडौं आइपुगेका थियौं । त्यसरी काठमाडौं आइपुगेपछि थरीथरीका घरहरूमा डेरा सर्दै हिँड्नु पर्ने अर्को समस्या बेहोर्नु

परेको थियो । परिवार लिन घर जानुभन्दा पहिले २०२३ साल असोजसम्म गृहमन्त्रालयका उपसचिव श्रीशेषराज जोशीका घरमा म बसेको थिएँ । त्यसै वर्ष मसँगै बसेर दाजु श्रीपशुपतिप्रसाद भट्टराईले अङ्ग्रेजीतर्फ प्रवेशिका परीक्षा दिएर उत्तीर्ण गर्नुभएको थियो । म बसेको सो डेरामा केही महिना श्रीहेमानन्द ढकाल, श्रीउमानाथ पोखरेल र श्रीभूप्रसाद पोखरेल पनि बस्नु भएको थियो । केही साँगुरो र फोहोरजस्तो डेरा भए तापनि चारखालको नजिक र ठाउँ पायक परेको हुँदा हामीहरू त्यहाँ बसेका थियौँ । त्यस घरमा ज्ञानी मान्छे भएको हुँदा बस्न रमाइलै भएको थियो । परिवार लिन घर जाँदा जोशीजीको त्यो घर मैले छोडिदिएको थिएँ । घरबाट आउँदा आउँदै डिल्लीबजार, मैतीदेवी फाँटमा श्रीमीनराज पाण्डेका घरमा मैले डेरा लिएर परिवार थन्क्याएको थिएँ । त्यो बेला मङ्सिर महिना भएकाले काठमाडौंमा जाडो शुरु भइसकेको थियो । त्यसका लागि आवश्यक लुगाफाटो, ओड्ने र ओछ्याउनेसमेतको व्यवस्था गर्नु परेको थियो । त्यसरी डेराको व्यवस्था गरिसकेपछि आफ्नो काम सम्हाल्न म मन्त्रालयमा गएको थिएँ । मन्त्रालयमा हाजिर भएर सबैसँग भेटघाट र भलाकुसारी गर्नुका साथै म घर गएको बेलामा काम गर्न त्यसै बाँकी रहेका सबै कामहरू मैले निप्ट्याउनु परेको थियो ।


दाजु श्रीपशुपतिप्रसाद भट्टराई, २०२२ माघ

त्यसरी मैले काम शुरुगरेपछि त्यसै बेलामा रक्षासचिव सरदार श्रीविष्णुमणि आचार्यको वाग्मती अञ्चलाधीशमा सरुवा भएको थियो । त्यस्ता व्यक्ति रक्षामन्त्रालय छोडेर वाग्मती अञ्चलको अञ्चलाधीश भएर जाँदा हामीहरू एक किसिमले टुहुराजस्तै भएका थियौँ । त्यसपछि रक्षामन्त्रालयमा सचिव भएर श्रीचित्रबहादुर के.सी. आउनु भएको थियो । त्यसै समयमा शाखा अधिकृत श्रीमुकुन्द शम्शेर थापाको शाखा अधिकृतपदबाट उपसचिवपदमा बढुवा भएको थियो । उहाँको ए. शाखाबाट त्योभन्दा पहिले

उपसचिव श्रीगम्भीरजङ्ग गुरुङले हेरिरहेको क्यू.शाखामा सरुवा भएको थियो। उपसचिव श्रीगम्भीरजङ्ग गुरुङको गृहमन्त्रालय अन्तर्गत बाहिर जिल्लामा सरुवा भएको थियो। उपसचिव श्रीमुकुन्द शम्शेर थापाको क्यू.शाखामा सरुवा भएपछि मेरो पनि सोही शाखामा सरुवा भएको थियो। म ए.शाखाबाट क्यू.शाखामा सरुवा हुन पाएकोमा उपसचिव श्रीप्रकाशमान प्रधानको बुहार्तनबाट छुटेको जस्तो हलुका अनुभव मलाई भएको थियो। ए.शाखाभन्दा क्यू.शाखामा कामको भार कमै थियो। कामको भार कम भएको हुँदा पूरा गर्न बाँकी रहेका बी.ए. र एम्.ए.का दुवै परीक्षाहरू त्यसै शाखामा बसेको बेला मैले पूरा गरेको थिएँ। ती परीक्षाहरूमा मलाई थापाजीले अत्यन्त सहयोग पुऱ्याउनु भएको थियो। थापाजी उपसचिव हुनुहुन्थ्यो भने उहाँकै अन्तर्गतको म शाखा अधिकृत थिएँ तापनि उहाँले हाकिमीपन देखाएर मसँग अन्यथा व्यवहार गर्नु भएको थिएन। उहाँले मसँग समान तहको साथी या मित्रको रूपमा व्यवहार गर्नुभएको थियो। उहाँको अत्यन्त शालीन, उदार व्यवहार र सहयोगीको भावनाले मेरो व्यक्तित्व विकासमा अत्यन्त सहयोग पुऱ्याएको थियो। उहाँले शेक्सपीयर, शेली, बाइरन, मिल्टन आदि अङ्ग्रेजीका प्रसिद्ध साहित्यकारहरूका साहित्यहरू प्रशस्तरूपमा अध्ययन गर्नुभएको थियो। त्यसका साथै इतिहास, राजनीति र समकालीन विश्वको बारेमा पनि उहाँको गहन अध्ययन भएको हुँदा म यी सबै विषयमा सीमित ज्ञान भएको मान्छेलाई थापाजीको सङ्गतले अत्यन्त ठूलो फाइदा भएको थियो। उहाँबाट नेपालको दरबारिया राजनीति, चालचलन, तौरतरिका र परम्परासमेत मैले नजानेका थुप्रै कुराहरू सिक्ने मौका पाएको थिएँ। थापाजीसँग क्यू.शाखामा बसेर काम गर्दा मैले धेरै कुरा सिकेको थिएँ। त्यहाँ बसेर काम गर्दा तत्कालीन शाही नेपाली सेनाका माथिल्ला तहका पदाधिकारीहरूसँग



श्रीमुकुन्द शम्शेर थापाका साथ लेखक

मेरो परिचय भएको थियो । त्यहाँ बसेको बेला सिकेको कामले मलाई मेरो प्रशासनिक जीवनमा पछिसम्म नै अत्यन्त फाइदा पुऱ्याएको थियो ।

त्यस बेला शाखा अधिकृत पदको तलव अत्यन्त सीमित थियो । त्यही सीमित तलबबाट पढाइ, घरभाडा, खाना, औषधीमूलो आदि सबै कुरा पुऱ्याउनु पर्दथ्यो । त्यस बेला शाखा अधिकृतको शुरु तलब रू. ४००।- हुन्थ्यो । सञ्चयकोष र तेजारत सापटी कटाउँदा रु. ३००।- पनि हात पर्दैनथ्यो । त्यसै रकमबाट बारम्बार आउने आफन्त र इष्टमित्रहरूको पनि सत्कार गर्नु पर्दथ्यो । त्यस समयमा मित्र श्रीमुकुन्द शम्शेर थापाको सौहार्दपूर्ण सहयोग नपाएको भए मैले काठमाडौं छोडेर त्यसै बखत हिंडिसक्नु पर्ने थियो होला ।

२०२३ सालको दशैंतिहार मानेर घरबाट म काठमाडौं आएपछि २०२४ सालमा दाजुले खोटाङ जिल्लाका बुइँपा बसेरी बस्ने श्रीदीनानाथ पोखरेलकी छोरी निर्मलासँग दोस्रो विवाह गर्नुभएको थियो । दाजुको पहिलो विवाह संवत् २००२ सालमा रावाकुभिण्डेका रेग्मीकी छोरीसँग भएको थियो । दाजुको विवाहमा म अबोध बालकै हुँदा जन्त गएको कुरा रिमरिम सम्झन्छु । संवत् २०२४ सालसम्ममा ठूली भाउजूबाट दाजुका ४ भाइ छोरा र एउटी छोरीसमेत जन्मिइसकेका थिए । दाजुको दोस्रो विवाह गर्ने पहिलेदेखिकै रहर त्यस बेलामा आएर उहाँले पूरा गर्नु भएको थियो । विवाह गरेकी नयाँ दुलहीलाई विराटनगरमा थन्क्याएर दाजु २०२४ सालमा काठमाडौं आउनुभएको थियो । त्यस बेला मेरो डेरा ऐतिहासिक विद्वान् श्रीवीरेन्द्रकेशरी अर्यालकी नातिनीबुहारी ठकुर्नीको घर श्रीकृष्ण मन्दिरमा थियो । उक्त घर डिल्लीबजारको गुरुजीको घरअगाडि पर्दथ्यो । उहाँ दोस्रो विवाहबाट आइपर्नसक्ने कानूनी समस्याबाट बच्न काठमाडौं आउनु भएको थियो । केही दिन काठमाडौं बसेर कानूनको हदम्याद समाप्त भएपछि आफ्नू भावी जीवनमा अपनाउनुपर्ने व्यावहारिक कुराहरूसमेत मिलाएर दाजु काठमाडौंबाट विराटनगर फर्कनु भएको थियो । विराटनगर गएपछि दाजुले लोकसेवा आयोगको नायवसुब्बाको परीक्षा उत्तीर्ण गरेर वीरगञ्ज मूल भन्सारमा खालि रहेको नायव सुब्बामा नियुक्त भएर जानु भएको थियो ।

त्यसपछि दाजु आफ्नी नवविवाहिता कान्छी श्रीमती निर्मलालाईसमेत

साथमा लिएर हामीहरूलाई भेट्न काठमाडौँ आउनु भएको थियो। म पहिलेदेखि नै सरकारी जागिर खाएर काठमाडौंमा नै बसोवास गर्दै आएको र पछि दाजुले आफ्नू घरपायकको शिक्षकको जागिर छोडेर दोस्रो विवाह गरी सरकारी जागिर खाएर वीरगञ्ज मूल भन्सारमा गएपछि पिताजीले पनि पहाडको घरबारी सबै बेचेर सुनसरी जिल्लाको इनरुवामा नयाँ घर बनाएर पहाडबाट बसाइँ सर्नु भएको थियो।



पछाडि (बायाँबाट) पशुपति र शरद, अगाडि (बायाँबाट) निर्मला, सरिता र इन्दिरा



दाजु पशुपतिप्रसाद भट्टराई

त्यसरी हाम्रो पुर्ख्यौली पहाडको घर पिताजीको इच्छा नहुँदा नहुँदै पनि छाडेर मधेश झर्नुपरेको थियो। पिताजीको दूरदर्शिता र आँटकाँटका कारण मधेशमा बसाइँ सरेपछि घरको व्यवस्था क्रमशः सुध्रिन सकेको थियो।

म काठमाडौंमा रक्षामन्त्रालयमा बसेर शाखा अधिकृतको जागिर जसरी तसरी खाइरहेको थिएँ भने उता दाजु विभिन्न भन्सारहरूमा सरुवा हुँदै निश्चिन्त भएर कान्छी श्रीमती र साना छोराछोरीलाई साथमा लिएर घुमिरहनुभएको थियो। रक्षामन्त्रालयको क्यू.शाखामा मलाई सीमित काम पर्दथ्यो। त्यसै कारणले म धेरैजसो फुर्सदमै रहन्थेँ। त्यसैबेला मैले नेपालका प्रसिद्ध नाटककार श्रीबालकृष्ण सम र राष्ट्रकवि श्रीमाधवप्रसाद घिमिरेसँग

सम्पर्क राख्न सफल भएको थिएँ। श्रीमुकुन्द शम्शेर थापाको सहयोगबाट श्रीबालकृष्ण समको बारेमा समीक्षात्मक ग्रन्थ लेख्ने इच्छाले उहाँसँग अन्तर्वाता लिने काम पनि मैले शुरु गरेको थिएँ। (तर त्यो अन्तर्वार्ता र लेखनसमेत त्यसै बेला मेरो सरुवा गृहमन्त्रालय अन्तर्गतको गण्डकी अञ्चलाधीश कार्यालय पोखरामा भएको हुँदा त्यसै नै अधुरो रहनगएको थियो। त्यसको केही अंश पाण्डुलिपिकै रूपमा अहिले पनि मसँग सुरक्षित रहेको छ।)


सम, लेखक र घिमिरे

मेरो सरुवा हुनुभन्दा पहिले श्रीविष्णुमणि आचार्य रक्षा–मन्त्रालयको सचिवबाट वाग्मती अञ्चलाधीशमा सरुवा भएर गएपछि रक्षामन्त्रालयमा श्रीचित्रबहादुर के.सी. सचिव भएर आउनुभएको थियो। त्यस परिवर्तनबाट मैले मन्त्रालयमा केही असजिलो महसूस गरेको थिएँ। त्यति हुँदाहुँदै पनि थापाजी र मेरो आफ्नै खालको संसार थियो। हामीहरू पढेर र साहित्यचर्चा गरेर प्रायः दिन बिताउँने गर्दथ्यौँ। सीमित ज्ञान भएका र केही तल्लो तहको विचार राख्ने व्यक्ति भए तापनि शाखा अधिकृत श्रीशिवप्रसाद शर्माले हामीहरूलाई साथ दिनु भएको थियो। नायबसुब्बाहरूमा पूर्णलाल श्रेष्ठ, सन्तबहादुर श्रेष्ठ र दुर्जमान श्रेष्ठहरू थिए। दुर्जमान नाम अनुसारका साँच्चैका दुर्जन व्यक्ति नै थिए।

त्यसै गरेर अर्का नायबसुब्बा पूर्णलाल श्रेष्ठ पुरानू कर्मचारीको साक्षात् नमूना नै थिए। अर्का नायबसुब्बा सन्तबहादुर श्रेष्ठ भने सरल, अनुशासित र कर्तव्यपरायण असल व्यक्ति थिए। सन्तबहादुर श्रेष्ठ मन्त्रालयमा नियमितरूपमा उपस्थित हुन्थे र उनी तोकिएको काम समयभित्रै पूरा गर्दथे। उनी कम बोल्दथे र शान्त भावले सबैसँग व्यवहार गर्दथे। एक शब्दमा भन्ने हो भने उनी हाम्रा सम्पूर्ण क्रियाकलापका मूकदर्शक र साक्षी पनि थिए। त्यसै कारण हामीहरूले उनको नाम चित्रगुप्त राखेका थियौँ। उनकी श्रीमती पहिले नै बितिसकेकी थिइन्। उनी छोरा र बुहारीसँग

बसेर आफ्नू जीवन बिताइरहेकाथिए । उनले बयालीस वर्षको लामू सेवा अवधि पूरा गरेर रक्षामन्त्रालयबाट अवकाश प्राप्त गरेका थिए । अवकाश प्राप्त गरेर हामीहरूसँग बिदा भएर घर गएका भए तापनि उनी पूर्ववत् मन्त्रालयमा सधैं आउने गर्दथे । बयालीस वर्षसम्म लागेको बानी उनले छोड्न सकेका थिएनन् । वास्तवमा उनले जीवनमा जागिरलाई नै सबै थोक ठानेका थिए भन्ने कुरा उनको त्यस बानीबाट थाहा हुन्थ्यो । उनले फुर्सद भएको बेलामा पढ्ने, लेख्ने, धर्मकर्म गर्ने र साधुसन्तको सङ्गत गर्नेगरेका भए जागिरबाट अवकाश प्राप्त गरेपछिको जीवन त्यति असहज हुने थिएनहोला । तर उनको त्यसतर्फ प्रवृत्ति नभएको हुँदा जागिरबाट अवकाश पाएपछि उनलाई आफ्ना दिनहरू बिताउन असाध्य गाह्रो परेको थियो भन्ने हामीहरूले अनुमान गरेका थियौं । अवकाश प्राप्त गरेपछि पनि उनी ५ महिनासम्म लगातार रक्षामन्त्रालयमा आउने गर्दथे ।

त्यसरी नियमितरूपमा मन्त्रालयमा आइरहने व्यक्ति तर एकपटक ७ दिनसम्म मन्त्रालयमा नआएपछि के भएको रहेछ भनेर उनका घरमा बुझ्न मन्त्रालयबाट मानिस पठाउँदा सन्तबहादुर श्रेष्ठ ५ दिन अगाडि नै बितिसकेका रहेछन् । त्यो कुरा सुनेर हामीहरूलाई अत्यन्त दुःख लागेको थियो । हामीहरू उनका छोराछोरीहरूलाई बोलाउन घरमा गएर सांसारिक औपचारिकता हामीहरूले पूरा गरेका थियौं । सन्तबहादुर श्रेष्ठको इहलीला समाप्त भएको थियो तर रक्षामन्त्रालय भने पूर्ववत् चली नै रहेको थियो । बेलाबेलामा हामीहरूलाई उनको सम्झना आउँने गर्दथ्यो तर पनि हामीहरूले क्रमशः उनलाई बिर्सँदै गएका थियौं ।

त्यसै वर्ष अर्थात् २०२५ साल पुस महिनामा मेरी कान्छी छोरी सविताको जन्म इन्द्रराज्यलक्ष्मी प्रसूतीगृह, थापाथलीमा भएको थियो । मैले त्यसपटक छोरो जन्मेको भए परिवार नियोजन गर्ने भन्ने विचार गरेको थिएँ । सानी छोरी सविताको पास्नी काठमाडौंमै गरिएको थियो । त्यस बेला पास्नीमा सम्मिलित हुन इनरुवाबाट आमा काठमाडौं आउनु भएको थियो । त्यस समयमा लिइएका चित्रहरू यहाँ दिइएको छ ।

२०२६ साल असार ९ गते राजकीय प्रज्ञाप्रतिष्ठानको वार्षिक उत्सवको उपलक्ष्यमा आयोजना गरिएको राष्ट्रिय कविसम्मेलनको प्रतियोगितामा

मैले भाग लिएको थिएँ। विषय अधिकार र कर्तव्य थियो। उक्त



सानी छोरी सविताको अन्नप्रासन्नको शुभ अवसरमा आमाका साथमा
छोरा शरद, बुहारी इन्दिरा र काखमा सविता।

प्रतियोगितामा म पहिला भएको थिएँ। मैले राजा महेन्द्रको हातबाट स्वर्णपदक र नगद पुरस्कारसमेत प्राप्त गरेको थिएँ। मेरा दिनहरू आनन्दसँग बितिरहेकै थिए। मैले श्री ५ को सरकारको सेवामा प्रवेश गरेको २०२६ साल माघ २१ गते ४ वर्षको अवधि पूरा भइसकेको थियो।

त्यस अन्तरालमा थापाजी र मेरा बीचमा मित्रता सुदृढ हुँदै गएकोथियो। हाम्रा परिवार र नाताकुटुम्बहरूमा पनि मित्रता कायम भएको थियो। त्यसै बीचमा थापाजीको कान्छो छोरो आलोक र छोरी आरतीको पनि जन्म भइसकेको थियो। त्यसै बेला थापाजीका जेठा दाजु श्रीपीताम्बर थापाको मृत्यु भएको थियो। उहाँ नयाँदिल्लीस्थित नेपाली राजदूतावासमा द्वितीय सचिव हुनुहुन्थ्यो। त्यसपछि उहाँकी आमाको पनि मृत्यु भएको थियो। ती दुवै थरी शोकहरू सहेर थापाजीले आफ्नू घरव्यवहार चलाइरहनुभएको थियो। मेरा अनन्य सहयोगी, शुभचिन्तक र यो अनुस्मृति लेखनका प्रेरक मुकुन्द शंशेर थापा पनि २०६६ साल वैशाख २० गते ब्रह्मलीन हुनु भयो। यसबाट म अत्यन्त मर्माहत भएको छु।



श्री ५ महेन्द्रको हातबाट स्वर्णपदक ग्रहण गर्दै लेखक

२०२६ साल फागुन २६ गते तत्कालीन श्री ५ युवराजाधिराज वीरेन्द्रको विवाह रानी ऐश्वर्यका साथ धूमधामसँग भएको थियो । शाखा अधिकृतसम्मका सबैलाई विवाहमा निम्तो गरिएको थियो । हामीहरू श्री ५ वीरेन्द्रको विवाहमा सामेल भएका थियौँ ।

त्यसै बीचमा रक्षामन्त्रालयका तत्कालीन सचिव श्रीचित्रबहादुर के.सी.को सरुवा भई श्रीढुण्डिराज शर्मा अर्थात् डी.राज शर्मा रक्षामन्त्रालयको सचिव भएर आउनु भएको थियो । उहाँ पहिले नेपाल गुप्तचर विभागका प्रमुख भइसक्नु भएको हुनाले अरूमाथि सङ्कामात्रै गरिरहने र कसैमाथि पनि विश्वास नगर्नेखालको व्यक्ति हुनुहुन्थ्यो । उहाँ मन्त्रालयमा आएपछि मन्त्रालयको वातावरणमा  परिवर्तन आएको थियो ।

मेरो सरुवाको पुर्जी श्री ५ वीरेन्द्रको विवाहको कार्यक्रम सकिने बित्तिकै आएको थियो । त्योभन्दा पहिले पनि प्रशासनमा वृत्तिविकासको कार्यक्रम लागू भएकोले बाहिर जिल्लामा सरुवा भएर जानु पर्छ भनेर बारम्बार त्यस बेलाको प्रशासनसेवा विभागले मलाई घचघच्याइरहने गर्दथ्यो । तर रक्षामन्त्रालयले पठाउन स्वीकृति दिएको थिएन । त्यस पटकभने रक्षामन्त्रालयलाई सोध्दै नसोधी सामान्यप्रशासनको कामसमेत हेर्ने तत्कालीन प्रधानमन्त्री श्रीकीर्तिनिधिविष्टले श्री ५ वीरेन्द्रको विवाहको बिदा परेको दिनमा नै मेरो सरुवाको फाइल सदर गर्नुभएको रहेछ ।





छोरी र बुहारीहरूका साथ श्रीमती इन्दिरा भट्टराई

# सञ्चारमन्त्रालयमा

उपर्युक्त अनुसार मेरो सरुवा सञ्चारमन्त्रालय अन्तर्गत हुलाकसेवा विभाग अन्तर्गतको विराटनगरमा पोष्टमाष्टर जनरलमा भएको थियो । म नियमानुसार पुर्जी बुझेर हुलाकसेवा विभागमा हाजिर हुनगएको थिएँ । मलाई हुलाकमा काम गर्न इच्छा नभएको हुँदा हाजिरमात्रै भएर अनिश्चित कालको लागि बिदा लिएर म घर बिदामा बसेको थिएँ । बिदा सकिएपछि हुलाकमा गएर हाजिर हुनुको साटो सरकारी जागिर छोडेर त्रिभुवन विश्वविद्यालयमा प्राध्यापनको काम गर्ने मैले निश्चय गरेको थिएँ । म बिदामा बस्ताबस्तै २०२७ सालको नयाँ वर्ष लागिसकेको थियो । त्यस बेला म मैतीदेवी फाँटमा रहेको डा. पार्थिवेश्वर तिमल्सिनाको घरबाट सरेर सोही फाँटमा श्रीरामप्रसाद तण्डुकारको घरमा डेरा गरेर बसेको थिएँ । मेरा सबै सञ्चित बिदाहरू समाप्त भएर मैले लिनुपर्ने भइपरी आउने बिदाका तीन दिनमात्र बाँकी रहेका थिए ।

मैले जागिर छोड्दैछु भन्ने कुरा थाहा पाएर त्यस बेलाका गृहसचिव श्रीक्षेत्रविक्रम राणाले मलाई बोलाउन पठाउनु भएको थियो । म उहाँलाई भेट्न गृह मन्त्रालयमा गएको थिएँ । मैले जागिर छोड्न लागेको कुरा सुनेर मलाई सम्झाउन उहाँले बोलाउनु भएको रहेछ । मैले हुलाकमा जागिर नखाने बरु जागिरै छोड्ने निश्चय गरेको कुरा उहाँलाई बताएपछि उहाँले मलाई सरकारी जागिर छाड्नेतिर नलागेर गृहमन्त्रालयमा सरुवा भएर आउन सल्लाह दिनुका साथै सहयोग पनि गर्नुभएको थियो ।



# गृहमन्त्रालयमा
## (गण्डकी  अञ्चलाधीशकार्यालय)

मलाई सञ्चारमन्त्रालयबाट गृहमन्त्रालयमा सरुवा गर्नको लागि गृहसचिव श्रीक्षेत्रविक्रम राणाले तत्कालीन मुख्यसचिव श्रीकृष्णवम मल्ल र तत्कालीन प्रशासनसेवा विभागका सचिव श्रीकृष्णबहादुर देउजालाई समेत आफैँले भनसुन गरेर मलाई गृहमन्त्रालयमा तुरुन्तै सरुवा गराउनु भएको थियो । म गृहमन्त्रालयमा तुरुन्तै हाजिर हुनगएको थिएँ । गृहसचिव श्रीक्षेत्रविक्रम राणाले मलाई रोजाएर रिक्त रहेको गण्डकी अञ्चलाधीशकार्यालय पोखराको शाखाअधिकृतको पदमा पठाउनुभएको थियो। त्यसरी सरुवा भएपछि परिवारसहित पोखरा जान मैले २०२७ साल श्रावण ८ गतेको हवाइजहाजको टिकटसमेत लिइसकेको थिएँ । तर श्रावण ५ गते राती सपनामा सेतो लुगा लगाएका अग्ला राम्रा सेता जुँगादारी भएका सौम्य तथा आकर्षक व्यक्तित्व भएका सिद्ध पुरुष आएर पोखरा श्रावण १३ गतेको मितिपछि गएमा सबै कुरा राम्रो हुने र सो मितिभन्दा पहिले गएमा अनिष्ठ हुने कुरा बताएर अन्तर्धान हुनुभएको थियो । सो कुरा सुन्दा अपत्यारिलो जस्तो भए तापनि गृहसचिव श्रीक्षेत्रविक्रम राणालाई गएर मैले सुनाएको थिएँ । मेरो त्यो कुरा सुनेपछि उहाँले ममाथि सहानुभूति राखेर श्रावण १३ गतेपछि पोखरा जान मलाई स्वीकृति दिनुभएको थियो । म तदनुसार नै आफ्ना परिवार लिएर श्रावण १४ गतेका दिन पोखरा गएको थिएँ ।

त्यसबेला पोखरामा अञ्चलाधीशको पदमा श्रीकृष्णमान श्रेष्ठ र सहायक अञ्चलाधीशको पदमा श्रीसूर्यप्रसाद श्रेष्ठ हुनुहुन्थ्यो । कास्कीका प्रमुखजिल्ला अधिकारी श्रीनानीबाबु भारती र गोरखाका प्रमुखजिल्ला अधिकारी श्रीविष्णुप्रताप शाह हुनुहुन्थ्यो । म पोखरामा पुगेपछि मेरा लागि बस्ने व्यवस्था पार्दीमा रहेको आवासक्षेत्रभित्रै गण्डकी अञ्चलाधीशकार्यालयले गरिदिएको रहेछ । त्यहाँ प्रायःगरेर बाहिरबाट गएका धेरै कर्मचारीहरू बस्ने गर्दथे । सहायक अञ्चलाधीश, प्र.जि.अ., एस्.पी., जनसम्पर्क अधिकारी,

पी.डी.ओ. समेतका अधिकृतहरू सबै त्यसै आवासक्षेत्रमै बस्तथे । त्यसबाट भेटघाट र सरसल्लाह गर्नसमेत अत्यन्त सजिलो हुन्थ्यो । त्यस बेला



गण्डकी अञ्चलाधीश कार्यालय, श्रीमती इन्दिरा दुई छोरीहरू, लेखक, श्रीमती र दुई छारीहरू, दुई छोरीहरू

अञ्चलाधीशको निवासका लागि पोखराको रामकृष्ण टोलमा रहेको श्रीशोभाकान्त अर्यालको घर भाडामा लिइएको थियो । अञ्चलाधीश कार्यालय लगायतका धेरै कार्यालयहरू पार्दीमा नै थिए । बिहानबेलुका सबैसँग सधैँ भेट हुन्थ्यो । कार्यालयका कामकुरा लगायत धेरै कुराहरूमा सहयोग हुन्थ्यो र यदाकदा तानातानको वातावरण पनि हाम्रा बीचमा उत्पन्न हुने गर्दथ्यो । साना साना बच्चाबच्चीहरूका लागि खेल्न, बस्न र घुम्न पनि त्यो आवासक्षेत्र रमाइलो ठाउँ थियो । आवास सबैको एकै ठाउँमा भएको हुँदा महिलाहरूलाई पनि भेटघाट गर्न सजिलो थियो । त्यस बेलासम्म मेरा दुई छोरीहरू सरिता र सवितामात्रै थिए । म श्रावण महिनामा त्यहाँ पुगेको हुँदा बिस्तारै वर्षादको समय समाप्त भएर दशैँको चहलपहलले छुँदै गएको थियो । पार्दीबाट उत्तरतर्फ रहेको हिमशृङ्खला बादलको पर्दालाई पन्साएर बिस्तारै झिलमिलाउनलागेको थियो । माछापुच्छ्रे र अन्नपूर्णाका चुचुराहरू सधैँ बिहान सबेरै फेवातालमा स्नान गरेर माथि डाँडामा गएर घाम तापेर बसेजस्तो मलाई लाग्दथ्यो । पार्दीको वासस्थानबाट बिहानै उठेर उत्तरपट्टि म सधैँ हेर्नेगर्दथेँ । एकाबिहानै आफ्नो स्यूँदोमा सूर्यको किरणरूपी रातो सिन्दूर हालेर मुस्कुराइरहेको जस्तो माछापुच्छ्रे देखिन्थ्यो । मलाई फेवातालभित्र लुकेर लुकामारी खेल्ने र उच्च शिखरमा चढेर सधैँ मुस्कुराइरहने माछापुच्छ्रेले असाध्य मोहनी लगाएको थियो । माछापुच्छ्रे र पोखराका सम्बन्धमा मैले आफ्नू अनुभूति माछापुच्छ्रेभन्ने कवितामा पोखेको थिएँ । सो कविता मेरो सिर्जनाका फूलहरू भन्ने

कवितासङ्ग्रहमा प्रकाशित भइसकेको छ ।

बिस्तारै दशैँको दुर्गापूजा सरकारी र गैह्रसरकारीरूपमा सर्वत्र शुरु भइसकेको थियो । हामीहरू पनि आफ्ना परिवारहरू लिएर कहिले विन्ध्यवासिनीको दर्शन गर्न र कहिले तालवाराहीको पूजा गर्न बराबर जाने गर्दथ्यौँ । तालवाराही फेवातालको बीच भागमा भएको हुँदा डुङ्गा चढेर जानुपर्दथ्यो । मलाई पौडी खेल्न नआउने हुँदा डुङ्गा चढेर वारिपारि गर्न म असाध्य डराउँदथेँ । त्यसै कारण तालवाराही जानेकुरामा म सधैँ पछि हट्तथेँ । २०२७ साल आश्विनमा दशैँको महा अष्टमीको दिन थियो । सहायक अञ्चलाधीश श्रीसूर्यप्रसाद श्रेष्ठको परिवार, प्र.जि.अ. श्रीनानीबाबु भारतीको परिवार, जनसम्पर्क अधिकारीको परिवार र मेरो परिवारसमेत दुइटा डुङ्गालाई एकै ठाउँमा जोडेर हामीहरू सबै जना तालवाराहीको पूजा गर्न गएका थियौँ । तालवाराहीको पूजाअर्चना गरिसकेर फर्केर किनारातर्फ आउँदा पनि पहिले जस्तै गरेर दुइटा डुङ्गाहरूलाई एकै ठाउँमा जोडेर हामीहरू फर्केका थियौँ । फेवातालको बीचमा आइपुगेपछि अचानक हामी चढेको डुङ्गाबाट सहायक अञ्चलाधीशको अङ्गरक्षक खड्गप्रसाद शर्मा अर्को डुङ्गामा फड्केर जानेहुँदा दुइटा डुङ्गाको सन्तुलन बिग्रिँदा एक आपसमा दुई डुङ्गाहरू ठोक्किएर डुङ्गाभित्र पानी पस्न शुरु गरेको थियो । दुइटै डुङ्गाहरू ढलपलाएर डुब्ने जस्तो भएपछि डुङ्गामा सवार भएका महिला केटाकेटी लगायत सबै जना कराउनाका साथै रुवाबासी र हाहाकारसमेत भएको थियो । तर हामी लोग्ने मानिसहरूले तुरुन्तै सतर्क भएर दुवै डुङ्गाहरूलाई बल गरेर समात्यौँ र बडो मुश्किलका साथ दुवै डुङ्गालाई सोझ्याएर पानी पस्नबाट रोकेका थियौँ । भित्र पसेको पानी सबैले फ्याँकेपछि दुवै डुङ्गाहरू आफ्नो सन्तुलनमा आएका थिए । वारिपट्टि किनारामा आएर उत्रिएपछि सबैले पुनर्जीवन पाएको अनुभूति गर्‍यौँ र सबैको ज्यान जोगाइदिएकोमा वाराही भगवतीलाई हृदयदेखि कृतज्ञता ज्ञापन गर्दै हामीहरू आफ्ना आफ्ना वासस्थानमा फर्किएका थियौँ ।

त्यसरी हामीहरू सबै एक भएर बडो रमाइलोका साथ पोखराको बसाइलाई स्मरणीय बनाइरहेका थियौँ । मेरो पोखराको बसाइ असाध्य नै फलदायी भएको थियो । शुरुमा सहायक अञ्चलाधीश श्रीसूर्यप्रसाद श्रेष्ठ र

मेरो बीचमा अति राम्रो सम्बन्ध स्थापित भएको थियो। अञ्चलाधीश श्रीकृष्णमान श्रेष्ठ सधैँजसो बिरामी भएर काठमाडौँमा नै बस्ने भएका हुँदा सहायक अञ्चलाधीशले नै निमित्त अञ्चलाधीश भएर अञ्चलको काम कारबाही चलाउनु हुन्थ्यो। कहिलेकाहीँ सहायक अञ्चलाधीश काठमाडौँतिर हिँडेको बेलामा म पनि निमित्त अञ्चलाधीश हुन्थेँ।

त्यसै अन्तरालमा पोखरामा पञ्चायतप्रशिक्षण केन्द्रको प्रिन्सिपल भएर श्रीधर्मबहादुर थापा जानुभएको थियो। उहाँ र मेरा बीचमा पनि अति राम्रो सम्बन्ध कायम भएको थियो। कहिलेकाहीँ हामीहरू मोटरसाइकलमा चढेर ढुकुर र तित्राको शिकार खेल्न जानेगर्दथ्यौँ। त्यसै गरेर अरू अधिकृत मित्रहरूसँग पनि मेरो असाध्य राम्रो सम्बन्ध थियो। खास गरेर मलाई साथ दिने मित्रहरूमा जनसम्पर्क अधिकारी श्रीचन्द्रध्वज गुरुङ, पञ्चायत निरीक्षण अधिकारी श्रीकुमुदराज पाण्डे, हुलाकनियन्त्रक श्रीप्रेमचन्द्र भण्डारी, प्रहरीनिरीक्षक श्रीजनकपाणि गौतम, लोकसेवा आयोगका अधिकृत श्रीरेवतीरमण पोखरेल र प्र.जि.अ. श्रीनानीबाबु भारतीसमेत हुनुहुन्थ्यो।

त्यसरी आपसमा सुमधुर सम्बन्ध कायम गरेर हामीले आफ्नू आफ्नू कार्यालयको काम गरिरहेका थियौँ। त्यसै बीचमा २०२७ साल माघ महिनामा श्री ५ महेन्द्रको सवारी पोखराको रत्नमन्दिरमा भएको थियो। श्री ५ महेन्द्रका साहित्यिक कृतिहरू उसैको लागि र फेरि उसैको लागिको समीक्षा काठमाडौँमा नै मैले लेखेर प्रकाशित गरेको थिएँ। अञ्चलाधीश श्रीकृष्णमान श्रेष्ठको सल्लाह अनुसार उक्त किताब राजा महेन्द्रलाई रत्नमन्दिरमा भेट्न जाँदा हातमा नै मैले दिएको थिएँ। त्यसबाट खुशी भएर तिमीलाई के इच्छा छ भनेर राजा महेन्द्रले मलाई सोधेका थिए। मैले मागेको भए मलाई उनले सायद मागे अनुसारको सबै कुरा दिने थिए होलान्। तर कसैसँग पनि मागेर नलिने मेरा पिताजीको आदर्श र आज्ञाभएको हुँदा मैले राजा महेन्द्रसँग नमागेर आफ्नू पिताको आदर्श र आज्ञालाई परिपालन गरेको थिएँ। माग भनेर बारम्बार राजा महेन्द्रले कर लाउन थालेपछि केही नलागेर अन्त्यमा नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानमा नेपाली साहित्यको श्रीवृद्धि गर्नेतर्फ राजाको सुदृष्टि परोस् भनेर मैले राजा

महेन्द्रलाई भनेको थिएँ । त्यसरी मौका परेको बेलामा पनि राजासँग नमागेर भूल गर्‍यौ भन्ने धेरै जना थिए । मेरो त्यो आदर्श त्यसबेला मौका पाए देशै लूटेर खानेहरूका लागि अनौठो र अव्यावहारिक आदर्श भएजस्तो लागेको थियो होला । तर मेरो अन्तःकरणको भावना र पिताजीको आदर्शलाई परिपालना गरेर राजासँग पनि मैले मागेको थिइन । त्यस बेलाको वातावरण अनुसार सो कुरा बाहिर व्यक्त गर्न नमिल्ने हुँदा मैले सबैसँग हाँसेरै टारेको थिएँ । खास गरेर श्रीलक्ष्यबहादुर गुरुङ, श्रीसूर्यप्रसाद श्रेष्ठ र श्रीकृष्णमान श्रेष्ठहरूले समेत राजासँग नमागेकोमा भूल गरेको ठानेका थिए । बुझ्ने मानिसहरूले राजाले माग भनेर भन्दा पनि राजासँग केही पनि नमागेर आफ्नू आदर्शलाई जोगाउन सक्ने व्यक्तिको रूपमा मलाई गौरवका साथ लिएका थिए । त्यसै कारणले पनि त्यो अञ्चलमा मेरो राम्रो प्रभाव परेको थियो । पोखरामा हामीहरू कहिले डुम्रे, कहिले दमौली, कहिले स्याङ्जा, कहिले लुम्लेकृषिआयोजना आदि दर्शनीय तथा रमणीय ठाउँहरूमा बारम्बार घुमी नै रहन्थ्यौं ।


सम आफ्नो हस्ताक्षरसहित, घिमिरे र लेखक, पार्दी, पोखरा २०२७ चैत्र

त्यसै वर्षको चैत्र महिनामा पोखरामा कविसम्मेलन भएको थियो । सो कविसम्मेलनमा भाग लिन नाटचसम्राट् श्रीबालकृष्ण सम, कविवर श्रीमाधवप्रसाद घिमिरे लगायतका वरिष्ठ साहित्यकारहरू काठमाडौँबाट पोखरा जानु भएको थियो । मैले पनि त्यस कविसम्मेलनमा भाग लिने मौका पाएको थिएँ ।

त्यसै वर्ष चैत्र महिनाको अन्त्यतिर लमजुङ्ग जिल्लाको सदरमुकाम कुन्छाबाट बेसीशहर सार्ने सरकारी निर्णय अनुसार प्रहरीनिरीक्षक श्रीजनकपाणि गौतमलाई लिएर सशस्त्र प्रहरीका साथ म लमजुङ्ग गएको थिएँ । कुन्छाबाट बेसीशहरमा सदरमुकाम सार्दा कुनै खालको अप्रिय घटना भएको थिएन । बेसीशहर सारै सानू र कुनुसमेत भएको हुँदा जिल्लाको सदरमुकामका लागि उपयुक्त ठाउँ नभएको मैले ठानेको थिएँ तापनि सरकारको निर्णय भएको हुनाले हामीहरूले सदरमुकाम सार्ने काम

गरेका थियौं । बेसीशहर र गाउँशहर गरेर दुइटा ऐतिहासिक स्थान त्यहाँ रहेछन् । राजा श्रीयशोब्रह्म शाह त्यसै ठाउँमा बसेर राज्य गर्दथे । गाउँशरहमा राजा श्रीयशोब्रह्म शाहकी कुलदेवी श्रीकाली भगवतीको मन्दिर रहेछ । त्यहाँ बसेको समयमा मैले त्यहाँका ऐतिहासिक स्थान लगायत खुदीबेनी भन्ने रमणीय स्थानको पनि भ्रमण गरेको थिएँ । त्यस ठाउँमा चिसा खोलाका माछा पाइने हुँदा बेलुका तारेको माछा र चिउरा खाएर हामीहरू बेसीशहर फर्किएका थियौं । मलाई त्यो तारेको माछा र चिउराले रातीदेखि नै पखाला लाग्न शुरु भएको थियो । पूर्वनिर्धारित कार्यक्रम अनुसार बेरामी हुँदाहुँदै पनि अर्को दिन बिहानै फल्याक साँघु, भोटे ओडार, कुन्छा र सोतीपसल हुँदै सिसाघाटतिर हामीहरू हिँडेका थियौं । मलाई अघिल्लै रातदेखि शुरु भएको पखालाको ब्यथाले अत्यन्त सताउँदै लगेर त्यस दिनको साँझसम्ममा निकै सारो पारिसकेको थियो । त्यहाँ पखाला थाम्ने कुनै पनि औषधी नपाइएको हुँदा र लगातार पखाला लागिरहेको हुँदा म हिँड्नै नसक्ने भएर कमजोर भइसकेको थिएँ । बेलुकीपख मेरो त्यस्तो अवस्था देखेपछि अरू केही उपाय नदेखेर प्रहरीनिरीक्षक श्रीजनकपाणि गौतमले पसलबाट पाकेको मालभोग केरा र दही किनेर ल्याएर मलाई खुवाएका थिए । त्यसरी दही र केरा खाएपछि मेरो झाडापखाला थामिन गएको थियो र म अकाल मृत्युबाट बाँच्न सफल भएको थिएँ ।

त्यसै गरेर मलाई मेरा जीवनमा धेरै पटक झाडापखाला र उँधैउँभैसमेत भएको छ । झाडापखाला लाग्दा वास्तै नगर्ने भएकाले धेरै पटक अस्पतालमा सेलाइनपानी लिन म पुगिसकेको छु । एकपटक त उँधैउँभै धेरै पटक हुँदा पनि मैले कुनै औषधी नलिएको हुँदा शरीरको पानी सबै समाप्त भएर मेरो शरीरका नशाहरू सबै सुकिसकेका थिए । अस्पतालमा डाक्टरले सेलाइनपानी चढाउन शरीरमा नशा खोज्दा कहीँ नभेटिएपछि मलाई नबाँच्ने भनेर माया मारेको थियो । तर अन्त्यमा गोडाको गोलीगाँठा नजिकको सानू नशा भेटेपछि त्यसैबाट सेलाइनपानी दिएर म बाँचेको थिएँ । त्यसमा श्रीमान्/श्रीमती  मुकुन्द शम्शेर थापाको ठूलो सहयोग प्राप्त भएको थियो ।

त्यसरी गण्डकी अञ्चलाधीश कार्यालयमा शाखा अधिकृत भएर

रहँदा मेरा विभिन्न क्रियाकलापहरू भइरहन्थे । म कहिले विभिन्न कार्यक्रमहरूमा विभिन्न संस्थाको निमन्त्रणामा समेत विभिन्न ठाउँहरूमा जानेगर्दथेँ । पोखरा पर्यटकीय क्षेत्र भएको हुँदा त्यहाँ घुम्न धेरै मानिसहरू जाने गर्दथे । राजादेखि लिएर सामान्य व्यक्तिको समेत स्वागतसत्कार हामीहरूले गर्नुपर्दथ्यो । त्यस बेलासम्म मेरा परिवारमा हामी दुई जना र दुइटी छोरीहरूमात्रै थियौँ ।

२०२७ साल वैशाख २८ गते सोमबार बुद्धपूर्णिमाका दिन पोखराको बगर भन्ने ठाउँमा रहेको शाइनिङ्ग मिसन अस्पतालमा मेरा एकैचोटि दुइटा छोरा जन्मिएका थिए । उमेर ढल्किँदै गएपछि जन्मिएका छोराहरू भएकाले खुशी लाग्नु स्वाभाविकै थियो । सहायक अञ्चलाधीश, एस्.पी., प्र.जि.अ. लगायतका सबै अधिकृत मित्रहरू र सहयोगी साथीहरू आ–आफ्ना श्रीमतीहरूसहित सहयोग पुऱ्याउन अस्पतालमा नै पुगेका थिए । दुइटा छोराहरू एकैचोटि जन्मिएका भनेपछि सबैले आश्चर्यका साथ हर्ष पनि मनाएका थिए । दुई छोराहरूको जन्म ५ मिनेटको अन्तरमा भएको थियो । पहिले जन्मेको छोरो सानू र कमजोर थियो भने पछि जन्मेको छोरो केही मोटो र स्वस्थसमेत थियो । पहिले जन्मेको छोरो जन्मिने बित्तिकै नरोएको र सास पनि नफेरेको हुँदा डाक्टरले खुट्टामा समातेर



छोराहरू जन्मिएको १२ औँ दिनको तस्वीर | अन्नप्रासनका दिन विन्ध्यवासिनी पोखरामा लिएको तस्वीर | अन्नप्रासनपछि लिएको तस्वीर पार्दी, पोखरा

उँधोमुन्टो पारी पिठिउँमा थपथपाएपछिमात्र रोएको थियो । प्रायःगरेर बच्चा जन्मिदा जन्मिने बित्तिकै नरोएमा सास नचल्ने रहेछ । बच्चा रोएन भने डाक्टरले उँधो मुन्टो पारेर पिठिउँमा थपथपाएर रुवाउँने गर्दारहेछन् । केही दिन अस्पतालमा बसेपछि आफ्नै निवास स्थानमा सुत्केरी र छोराहरूलाई

ल्याइएको थियो । जन्मिएको ११ दिनमा वैदिक विधि अनुसार नामकरण अर्थात् न्वारान पनि गरिएको थियो। जन्मिएको समय अनुसार ठूला छोराको नाम श्रीतुलसीकुमार र साना छोराको श्रीतुलाकुमार नामकरण गरिएको थियो । बोलाउने नाम ठूलो छोराको श्रीसञ्जीवकुमार र सानो छोराको सतीशकुमार राखिएको थियो । मैले काठमाडौंबाट पोखरा हिंड्ने बेलामा सपनामा देखिएका बाबाको विषयमा उल्लेख गरिसकेको छु । तिनै बाबाको शुभाशीर्वाद अनुसार दुइटा छोराको एकैचोटि जन्म भएको भन्ने



परिवारका साथमा, पोखरा     २ वर्षका सतीश र सञ्जीव, काठमाडौं     ३ वर्षका सतीश र सञ्जीव, काठमाडौं

मैले ठानेको छु । ती दुइटा छोरा हुर्काउने क्रममा मेरी श्रीमतीलाई अत्यन्त दुःख भएको थियो । दुइटालाई पालैपालो गरेर दूध खुवाउँदा र सह्यारसुसार गर्दा उनलाई रातदिन नै चुपलागेर बस्ने फुर्सद हुँदैनथ्यो । ती दुवै छोराहरू पालोपालो गरेर रातदिनै आमाको दूध खान खोजिरहन्थे र दिसापिसाब गरिरहन्थे । साँच्चै भन्ने हो भने दुईभाइ छोराहरूलाई नहुर्काउञ्जेल मेरी श्रीमतीले राती सुत्न र दिउँसो आराम गर्नसमेत पाएकी थिइनन् । तिनीहरूलाई हुर्काएर आजको स्थितिमा ल्याइपुऱ्याउनुमा उनको ठूलो त्याग र तपस्या छ । म घरमा नै बसे पनि प्रायः गरेर घरभित्रको काम गर्न जान्दिनथैं । म अत्यन्त अव्यावहारिक मान्छे पहिलेदेखि नै भएको हुँदा मैले छोराछोरीहरू हुर्काउने काममा श्रीमतीलाई कहिल्यै पनि सहयोग गर्न सकेको थिइन । छिमेकीहरू र शुभेच्छुकहरूले अत्यन्त स्नेहका साथ छोराहरूलाई हुर्काउने काममा सहयोग गरेका थिए। छोराहरू ६ महिनाका भएपछि वैदिक विधि अनुसार विन्ध्यवासिनी मन्दिरमा लगेर अन्नप्राशनको काम सम्पन्न गरिएको थियो। उक्त अन्नप्राशन कार्यक्रममा पोखरामा रहेका प्रायः सबै कार्यालयका प्रमुखहरू परिवारसहित र जनप्रतिनिधिहरूलाई पनि बोलाइएको थियो । त्यसरी छोराहरूलाई पालनपोषण गर्ने कामको साथसाथै

कार्यालयमा परिआउने काम पनि अगाडि बढिरहेकै थियो ।

२०२८ साल माघमा श्री ५ महेन्द्रको पोखरा जाने कार्यक्रम थियो । पोखरा जाने क्रममा चितौनको दियालो बङ्गलामा पुगेपछि उनको मृत्यु भएको थियो । त्यसपछि नयाँ राजा श्री ५ वीरेन्द्रको राज्यारोहण भएको थियो । श्री ५ महेन्द्रको मृत्युपश्चात् पनि यो देश यथावत् चली नै रहेको थियो । राजाविना राज्य अड्कँदैन भन्ने पुरानो भनाइ चरितार्थ हुनगएको थियो ।

२०२९ साल मङ्सिरमा म भानुभक्त जन्मेको स्थान चुँदी रम्घा गएको थिएँ । त्यसपछि म गोरखाकी श्रीमनकामना देवीको दर्शन गर्न मुङ्लिनबाट ठाडो उकालो चढेर श्रीधर्मबहादुर थापा, ना.सु. श्रीहरिप्रसाद पोखरेलसमेतका साथीहरूका साथमा गएको थिएँ ।

त्यसपछि त्यसै वर्ष फागुन महिनामा नयाँ राजा श्री ५ वीरेन्द्रको भ्रमण पोखरामा पहिलोपल्ट भएको थियो । नयाँ राजालाई देखाउन प्रिन्सिपल श्रीधर्मबहादुर थापा र म भएर समीक्षालय बनाएका थियौँ । त्यसरी समीक्षालय बनाएर राजालाई देखाउने काम पहिलो पटक भएको थियो । त्योभन्दा पहिले राजा घुम्न जाँदा कहीँ पनि समीक्षालय बनाउने चलन थिएन ।

गण्डकीअञ्चलाधीशकार्यालयका तत्कालीन अञ्चलाधीश श्रीकृष्णमान श्रेष्ठ बर्खास्तमा परेपछि त्यहाँ नयाँ अञ्चलाधीशको रूपमा श्रीदानबहादुर शाक्यको नियुक्ति भएको थियो । उहाँ अञ्चलाधीश भएर गएपछि अञ्चलप्रशासनमा केही असजिलो स्थितिको सृजना भएको थियो । त्यसो हुनुमा श्रीदानबहादुर शाक्य प्रत्यक्ष वा अप्रत्यक्षरूपमा काङ्ग्रेसहरूलाई प्रोत्साहन दिने गर्नुहुन्थ्यो भने सहायक अञ्चलाधीश श्रीसूर्यप्रसाद श्रेष्ठ त्यसको प्रतिवादको रूपमा कम्युनिष्टहरूलाई प्रोत्साहन दिने गर्नुहुन्थ्यो । दुई जनाको बीचमा विस्तार विस्तार भित्रभित्रै मनोमालिन्य बढ्दै गएको थियो । ती दुवैथरीले आफ्नू आफ्नू गुट कर्मचारीदेखि लिएर जनप्रतिनिधिहरूका बीचमा पनि खडा गरेका थिए । वास्तवमा श्रीसूर्यप्रसाद श्रेष्ठ प्रशासनिक काममा दक्ष भए तापनि वामपन्थी विचारधाराका र एकोहोरो स्वभावका भएका हुँदा एउटा कुरामा लागेपछि लागी नै रहनुहुन्थ्यो । उहाँ वामपन्थीका पक्षधर हुनुका साथै भारतविरोधी विचार

पनि राख्नुहुन्थ्यो ।

अञ्चलाधीश र सहायक अञ्चलाधीशका बीचमा तानातान शुरु भएपछि उहाँहरूसँग काम गर्ने खास गरेर जनसम्पर्क अधिकारी र मलाई अप्ठेरो परेको थियो। सहायक अञ्चलाधीशले एस्.पी. श्रीनरेन्द्रध्वज सुनुवार लगायतका कर्मचरीहरू र केही प्रभावशाली जनप्रतिनिधिहरूसमेतलाई अञ्चलाधीशका विरुद्धमा आफ्नातर्फ मिलाउनुभएको थियो। त्यसका अतिरिक्त उहाँले स्वतन्त्रविद्यार्थी-मण्डलका विद्यार्थीहरूसमेतलाई अञ्चलाधीशका विरुद्ध उकासेर काम गर्न नै असजिलो पारिदिनुभएको थियो । उहाँले जुनसुकै अञ्चलमा सहायक अञ्चलाधीश भएर बस्ता पनि आफूभन्दा माथिका हाकिम वा अञ्चलाधीशलाई त्यसै गरेर असहयोग गर्ने गर्नु भएको थियो। उहाँ पहिले पनि अञ्चलाधीश श्रीमनमोहन मिश्र र श्रीभक्ति शम्शेरसँग पनि झगडा गरेर सरुवा हुनु भएको थियो। त्यस बेला श्रीदानबहादुर शाक्यसँग पनि त्यसै गरी झगडा गर्न थालेपछि अञ्चलका सबै कार्यालयहरूमा त्यसको नराम्रो प्रभाव पर्न गएको थियो। ती दुई जनाका बीचको सङ्घर्षले कतै अप्रिय घटना निम्त्याउँछ कि ? भनेर हामीहरू सधैँ सतर्क भइरहन्थ्यौँ । सहायक अञ्चलाधीश श्रीसूर्यप्रसाद श्रेष्ठ र मेरा बीचमा अत्यन्त सुमधुर सम्बन्ध रहेको थियो। उहाँ काम गर्न असाध्य मिहिनेती, दक्ष र मिलनसारसमेत हुनुहुन्थ्यो । तर अञ्चलाधीश र उहाँका बीचमा झगडा शुरु भएपछि म अञ्चलाधीशतर्फ लागेँ भन्ने ठानेर श्रीसूर्यप्रसाद श्रेष्ठ मसँग टाढा हुँदै जानुभएको थियो । हाम्रा बीचको सुमधुर सम्बन्ध बिस्तारै अविश्वासमा परिणत हुँदैगएको थियो। उहाँ अत्यन्त महत्त्वाकाङ्क्षी व्यक्ति भएका हुँदा उहाँ जे गर्न पनि तयार रहनुभएको मैले पाएको थिएँ। दुवै जनाका बीचमा झगडा चरम चुलीमा पुगिसकेपछि गृहमन्त्रालयले सहायक अञ्चलाधीशलाई गृहमन्त्रालयमा सरुवा गरेको थियो। तर उहाँलाई भाग्यले साथ दिद्दयो। उहाँ क्रमशः वाग्मती अञ्चलको सहअञ्चलाधीश, अञ्चलाधीश, गृहसचिव, उद्योगवाणिज्य-सचिव, प्रमुख निर्वाचन आयुक्त र अन्त्यमा बेलायतका लागि शाही नेपाली राजदूतसमेत हुन सफल हुनुभयो । सबै कुरामा आफ्नू चरित्रलेभन्दा पनि भाग्यले नै साथ दिनुपर्ने रहेछ भन्ने श्रीसूर्यप्रसाद श्रेष्ठको उन्नतिबाट मलाई लागेको छ।

किनभने श्रीसूर्यप्रसाद श्रेष्ठ जति सुकै काम गर्न सिपालु भए तापनि आफ्नू पेशाप्रति र आफ्नू कर्तव्यप्रति उहाँ इमान्दार भएको कुरामा मलाई शङ्का लाग्दछ। उहाँ आफ्नू स्वार्थका लागि जे गर्न पनि पछि नहट्ने अत्यन्त स्वार्थी व्यक्ति हुनुहुन्छ। अहिले पनि श्रीसूर्यप्रसाद श्रेष्ठ र मेरा बीचमा भेट हुँदा भलाकुसारी भए तापनि राम्रो सम्बन्ध छैन। तर मैले ती सबै कुरालाई विस्मृतिको अँध्यारो गर्भमा थन्क्याएको छु। उहाँप्रति ममा कुनै कुण्ठा र अन्यथाभाव छैन।

२०२९ सालको बढुवामा गृहमन्त्रालयकै कर्मचारीको बदनियतबाट मेरो उपसचिवमा बढुवा हुन नसकेपछि तत्कालीन गृहसचिव श्रीसुन्दरप्रसाद शाहले साहनुभूतिपूर्वक मलाई गृहमन्त्रालयमै सरुवा गरिदिनु भएको थियो। २०२९ साल साउनमा म हवाइजहाजबाट सपरिवार काठमाडौं आएको थिएँ। डिल्लीबजार श्रीकृष्णमन्दिर अगाडिको घरमा मित्र श्रीमुकुन्द शम्शेर थापाले व्यवस्था गरिदिएको डेरामा आएर म बसेको थिएँ।

त्यसपछि म गृहमन्त्रालयमा हाजिर भएर स्थानीय प्रशासन-शाखामा उपसचिव श्रीमधुसूदन गोरखालीको अन्तर्गतको शाखामा काम गर्न थालेको थिएँ। श्रीमधुसूदन गोर्खाली अत्यन्त सानू चित्तका आँटकाँट नभएका मान्छे भएका हुँदा उहाँका अन्तर्गत बसेर काम गर्न मलाई असाध्य असजिलो भएको थियो। तै पनि सबै कुरा सहेर म काम गर्दै रहेको थिएँ। २०२९ सालमा मेरो बढुवा बिग्रिएको हुँदा अर्को बढुवामा पर्न दोहोरो स्नातकोत्तर सरहको योग्यताको आवश्यकता परेको थियो। मैले एम्.ए. गरिसकेको थिएँ तापनि पुनः अर्को एम्.ए.वा बी.एल्.को योग्यता नभईकन नम्बर नपुग्ने देखेर मैले कानूनको अध्ययन गर्न थालेको थिएँ। त्यसै समयमा मैले बत्तीसपुतलीमा आधा रोपनी जग्गा किनेर सानो घर बनाउन शुरु गरेको थिएँ। एकातर्फ रातीको कानूनको पढाइ र अर्कोतर्फ मन्त्रालयको कामको साथसाथै घर बनाउने काममा पनि लाग्नुपरेको हुँदा मलाई असाध्य मिहिनेत गर्नु परेको थियो। श्रीमतीले ससाना छोराछोरीहरूको सहचारसुसारका साथै घरनिर्माणको रेखदेख पनि गर्नुपरेको थियो। जसरीतसरी घरको तल्लो तलो ढलान गरेर गारोमा प्लास्टरै नगरी हामीहरू नयाँ घरमा बस्न थालेका थियौं। बिजुली, खानेपानी र चर्पीको समेत व्यवस्था हुन सकेको

थिएन । चिसो घरमा सरेको हुनाले म निकै बिरामी भएर अस्पतालसमेत पुगेको थिएँ ।

म तत्कालीन गृहसचिव श्रीशेरबहादुर शाहीको पी.ए. भएर काम गर्दैरहेको थिएँ । त्यसै बेलामा मैले धेरै जिल्लाहरूमा निरीक्षणका लागि जानुपरेको थियो । अञ्चलप्रशासन, जिल्ला–प्रशासन र प्रहरीप्रशासनसमेतका विरुद्ध परेका उजुरीहरूको छानविन गर्न म विभिन्न जिल्लाहरूमा गएको थिएँ । त्यसै सन्दर्भमा म २०३० साल मङ्सिर महिनामा सगरमाथा अञ्चलका तत्कालीन अञ्चलाधीश श्रीज्याउल हकले कोशीटप्पु अर्नाआरक्षण क्षेत्रभित्र पसेर शिकार खेलेको सम्बन्धमा परेको उजुरी उपर छानविन गर्न म सप्तरी र सुनसरी जिल्लामा समेत गएको थिएँ । सुनसरी जिल्लामा गएको बेलामा इनरुवाको घरमा गएर मैले मातापिताको दर्शन गर्ने सुअवसरसमेत पाएको थिएँ ।

मङ्सिर महिना भएकाले खेतमा जताततै धान पाकेर पँहेलपुर देखिन्थ्यो । पिताजीसँग म र श्रीडिल्लीराज पोखरेल भएर हाम्रो घर वरिपरिका सारा खेत घुमेर हेरेका थियौँ । मेरा पिताजी त्यस बेलासम्म अत्यन्त स्वस्थ र फुर्तिलो हुनुहुन्थ्यो । उहाँलाई अरू बढी जग्गाजमीन जोड्ने अत्यन्त इच्छा भएकाले केही दिनसम्म लगाएर हामी बाबुछोरा पहेंलपुर धान पाकेका खेतहरू निरीक्षण गर्दै घुमेका थियौँ । पिताजीको जाँगर र उत्साहलाई अहिले पनि म झलझली सम्झन्छु र मेरो मन भरिएर आउँछ । उहाँको उत्साह र आँटले मलाई आफ्नू क्षमता अनुसार सफलताको चुलीमा पुऱ्याएको थियो । उहाँकै प्रेरणाले म केही लेख्न र पढ्न जान्ने भएको थिएँ । तर पिताजीलाई मैले केही गर्न सकिन । पिताजी मेरो प्रतीक्षा गर्दागर्दै मलाई थाहै नदिई बिदा भएर जानुभएको थियो । बाबुआमालाई अरू थोक गर्न नसके तापनि बूढेसकालमा तीर्थयात्रा गराउनु, अन्तिम अवस्थामा स्याहारसुसार र हेरविचार गर्नु छोराको कर्तव्य हुन आउँथ्यो । तर सरकारको जागिर खाएर बाहिर बस्नुपरेको हुनाले सो कर्तव्य मबाट पूरा हुन सकेन । त्यसो गर्न नपाउनु मेरो भाग्यले नै ठगेको भन्ने मैले ठानेको छु । त्यस बेलामा म केही दिन मातापिताका साथ घरमा बसेको थिएँ र छानविनको काम पूरा गरेर काठमाडौं फर्किएको थिएँ ।

त्यसरी मेरो दीनचर्या र घरव्यवहारसमेत चलिरहेको थियो । छोराछोरीहरू हुर्किँदै थिए । व्यवहार अत्यन्त गुरुतर बन्दै गएको थियो । वास्तवमा त्यस बेला अब अरू सन्तान नजन्माउने भनी सल्लाह गर्दागर्दै अर्को सन्तान गर्भमा आएपछि हामी दुई जनालाई सन्तान हुर्काउने कुरामा चिन्ता परेको थियो । पेटको सन्तान जन्मनुभन्दा ४ महिना अगाडि पहिले जस्तै सपनामा उनै सिद्धबाबा आएर तिमीहरूले अर्को सन्तान हुन्छ भनेर चिन्ता गरेका रहेछौ । केही चिन्ता नगर्नू । तिमीहरूको भाग्यमानी छोरो जन्मिनेछ र छोराको नाम सगुन राख्नु भनेर सिद्धबाबा अन्तर्धान हुनु भएको थियो । साँच्चै नै २०३१ साल श्रावण १३ गते छोरो नै जन्मिएको थियो र सपनामा सिद्धबाबाले भने अनुसार उनको नाम हामीहरूले सगुन नै राखेका थियौँ । उनको न्वारानको नाम श्रीनूतनकुमार हो ।

त्यसरी मेरो जीवन रथको पाङ्ग्रो घुमेझैँ सुख र दुःखको भुमरीमा घुमिरहको थियो । क्रमैले मेरा उत्तरदायित्वका रूपमा ५ सन्तान भइसकेका थिए । म जीवनको सङ्ग्राम लडिरहेको थिएँ । ममाथि आर्थिक, सामाजिक आदि उत्तरदायित्वहरू पनि थपिँदै गएका थिए ।





दायाँबाट पछाडि ठूली छोरी सरिता, सानी छोरी सविता, अगाडि बायाँबाट ठूलो छोरो सञ्जीव, सानो छोरो सतीश र कान्छो छोरो सगुनकुमार भट्टराई, भाइटीका, २०६१ साल ।

# उदयपुर जिल्लामा

गृहमन्त्रालयमा काम गरिरहेकै समयमा गृहमन्त्रालयले प्रमुखजिल्ला अधिकारीहरू रिक्त रहेका जिल्लाहरूमा नयाँ प्रमुखजिल्ला अधिकारीहरू पठाउने निर्णय गरेको थियो । त्यस बेलासम्ममा मैले बी.एल्. पनि उत्तीर्ण गरिसकेको थिएँ । बढुवाका लागि अङ्क पुगिसकेको हुँदा कायममुकायम प्रमुखजिल्ला अधिकारी भएर जिल्लामा जान मलाई कुनै बाधा थिएन । प्र.जि.अ.हरू रिक्त रहेका जिल्लाहरूमध्ये मलाई घरपायक पर्ने उदयपुर जिल्ला मैले रोजेको थिएँ । २०३१ साल श्रावण २४ गते गृहमन्त्रालयको निर्णय अनुसार सानू छोरो श्रीसगुनको न्वारान भएको अर्को दिन नै म उदयपुर जिल्लाको प्रमुखजिल्ला अधिकारी भएर प्रस्थान गरेको थिएँ । श्रावणको महिना थियो । खोटाङ जिल्लामा खटिएका श्रीझुलेन्द्रमान प्रधानका साथ हवाइजहाजद्वारा म राजविराज गएको थिएँ ।

राजविराजमा हामीहरूले अञ्चलाधीश श्रीज्याउल हकलाई भेटेर निर्देशन लिनुका साथै सप्तरी जिल्लाका प्रमुखजिल्ला अधिकारी श्रीहरिप्रसाद पोखरेल र सहायक अञ्चलाधीश श्रीदामोदर उपाध्यायलाई समेत भेटेका थियौँ । दुवै जनाले हाम्रो खूब स्वागत सत्कार गर्नुभएको थियो । त्यो रात राजविराजमा नै बसेर अर्को दिन प्र.जि.अ. श्रीहरिप्रसाद पोखरेलले व्यवस्था गरिदिएको गाडीमा चढेर हामीहरू कञ्चनपुरको फत्तेपुर गएका थियौँ । त्यहाँ पुग्दा दिन ढल्किसकेको थियो । मलाई लिन उदयपुरको सदरमुकाम गाईघाटबाट घोडा र गार्डसमेत गएका थिए । श्रीझुलेन्द्रमान प्रधानलाई त्यहीँबाट खोटाङको सदरमुकाम दिक्तेलतर्फ जान बिदा गरेर म घोडा चढेर गाईघाटतर्फ लागेको थिएँ । साउनको महिना भएकाले पानी परिरहेको थियो र जताततै पानी पानी थियो । म दिनको अपराह्न हुँदा त्रियुगा नदीको तीरैतीर गाईघाटतिर लागेको थिएँ । घोडामा चढेर जाँदाजाँदै जोगीदहमा पुगेपछि झमक्क रात परेको थियो । म पहिलो पटक त्यहाँ गएको हुँदा मलाई भौगोलिकरूपमा कुनै कुराको पनि जानकारी थिएन । त्रियुगाको त्यस फाँटमा थारुका घरहरू

देखिन्थे । गाईघाटको वारिपट्टि पुगेर त्रियुगा नदीको जँघारबाट तर्नुपर्ने थियो । नदीमा बाढी आइरहेको थियो। मलाई लिन गएका सयस र गार्डहरूले त्रियुगा नदीमा बाढीको समयमा जतातत्तै भास हुने हुनाले होस गरेर तर्नुपर्छ भनेर सम्झाएका थिए । त्यो सुनेपछि मैले आफैंले त्रियुगा नदी तर्ने हिम्मत गर्न सकेको थिइन। नदीमा स्थानीय थारुहरू आएर मलाई तारेका थिए। त्रियुगानदी तरेपछि मलाई बिस्तारै प्रहरी र सयसले बाटो देखाउँदै बरुवा खोलो तारेर बरुवाको बगरमा बसेको उदयपुर जिल्लाको सदरमुकाम गाईघाटमा रातको नौ बजे पुऱ्याएका थिए ।

त्यसरी बर्षाकालको बेलामा चारैतिर सर्पको डर हुने समयमा पनि पैदलै हिंडेर विनाडर म अबेररातमा सदरमुकाम गाईघाट पुगेको थिएँ। त्यस बेला प्रमुखजिल्ला अधिकारीको आवास श्रीलोकबहादुर बस्नेतको भाडामा लिएको सानू काठको घरमा थियो । त्यसरी अत्यन्त कष्टका साथ राती आवासमा पुगेर पालेलाई उठाएर वासस्थान खोल्न मैले लगाएको थिएँ। त्यहाँ प्र.जि.अ.का निमित्त ओड्नेओच्छ्याउने लगायत कुनै पनि कुराको व्यवस्था थिएन। अत्यन्त कष्टका साथ मैले रात बिताएको थिएँ। प्रमुखजिल्ला अधिकारी आएको थाहा पाएपछि अर्को दिन जिल्ला प्रशासनकार्यालयका कर्मचारीहरू लगायतका कार्यालय प्रमुखहरू, राजनीतिक नेताहरू र जिल्लाका गण्यमान्य व्यक्तिहरू पनि मलाई भेट्न आएका थिए । त्यस बेला जिल्लामा प्र.जि.अ.को राम्रो प्रभाव र अधिकारसमेत थियो । जिल्लामा प्र.जि.अ लगायतका माथिल्ला तहका अधिकारीहरू पुगेपछि खानापिना लगायतका कोसेलीहरू पठाउने चलन रहेछ। तदनुसार म पुगेको भोलिपल्ट नै चामल र घिउ आदि कोसेली लिएर त्यस जिल्लाका नाम चलेका २०१५ सालका माननीय सांसद श्रीअम्बेबर काजीले श्रीलोकबहादुर बस्नेतलाई पठाउनु भएको थियो। सो देखेपछि मैले ती सबै सामानहरू तुरुन्तै फिर्ता पठाइदिएको थिएँ।

कसैले पनि मलाई त्यस प्रकारको कोसेलीपात पठाएमा कारबाही हुनेछ भनेर सुनाएपछि म उदयपुर जिल्लामा बसुन्जेल कसैले पनि मलाई फेरि कोसेलीपात पठाउने हिम्मत गरेका थिएनन् । त्यस जिल्लामा अम्बेबर काजी लगायतका सामन्ती शोषकहरूले त्यसै प्रकारले कोसेलीपात हाकीमहरूलाई

खुवाएर शोषण गर्ने गरेका रहेछन् । त्यसैको माध्यमबाट जिल्लामा भ्रष्टाचार मौलाउने गरेको रहेछ । मैले त्यसरी जिल्लामा आफूलाई गण्यमान्य हुँ भनेर ठान्ने श्रीअम्बेबर काजीको कोसेलीपातलाई सार्वजनिकरूपमा फिर्ता पठाएर आइन्दा पठाएमा कानूनी कारबाही गर्नेसमेतको सन्देश पठाएपछि जिल्लाका फटाहा र शोषकहरू मदेखि टाढा भएका थिए । त्यसको प्रभाव पछिसम्म सकारात्मक परेको थियो ।

त्यसरी प्रमुखजिल्ला अधिकारी भएर म उदयपुर जिल्लाको सदरमुकाम गाईघाटमा पुगेपछि मलाई आवासको अत्यन्त समस्या परेको थियो । अर्काको कामै नलाग्ने काठको सानो घरमा डेरा गरेर बस्ता मलाई अत्यन्त असुविधा भएको थियो । म त्यहाँ जाँदा एक्लै नै गएको थिएँ । मसँगै बस्न ठूली दिदीका माहिला छोरा श्रीभोला पोखरेल गाईघाटमा आएका थिए । जिल्लाप्रशासनकार्यालय पनि राय भन्ने व्यक्तिको काठको घर भाडामा लिएर राखिएको थियो । त्यहाँ पनि कार्यालय चलाउन अत्यन्त असुविधा थियो । सुरक्षाको दृष्टिकोणले र कार्यालयको काम गोप्य राख्ने दृष्टिकोणले पनि ती काठका घरहरू अत्यन्त असुरक्षित थिए । कार्यालयका लागि र आवासका लागि पनि तीभन्दा केही राम्रो घर भाडामा लिएर मैले कार्यालय र आवास एउटै घरमा सारेको थिएँ । त्यस घरमा पनि असुविधा नै थियो । वर्षाको बेलामा बरुवा खोलाको बाढी पसेर सरकारी कार्यालयहरू र धनजनको समेत क्षति हुने सधैँ डर भइरहन्थ्यो । रात परेपछि सधैँ सतर्क भएर खोलामा बाढी आउँछ कि ? भनेर रातभरि जागै बसिरहनु पर्दथ्यो । केही गरी बाढी सदरमुकामभित्र पसेमा राँको र टर्च बालेर ज्यान जोगाउन बोक्सेतिर भाग्नु पर्दथ्यो ।

त्यसरी मैले वर्षाभरि अत्यन्त कष्टका साथ कार्यालय सञ्चालन गरेको थिएँ । मैले परिवार नलगेको हुँदा खाना खाने व्यवस्था मिलाउन पनि अत्यन्त असुविधा भएको थियो । त्यसैबीचमा न्यायाधीश श्रीकृष्णप्रसाद पोखरेलले उहाँको घरमा बसेको भान्से श्रीगङ्गाप्रसाद रेग्मीलाई पठाइदिनुभएको थियो । तिनै रेग्मीलाई नै जिल्लाप्रशासन-कार्यालयको रिक्त रहेको परिचरको दरबन्दीमा नियुक्त गरेर मैले भान्सेको काम लगाएको थिएँ । त्यसपछिमात्र मेरो खाना खाने समस्यासमाधान भएको थियो । त्यस जिल्लामा कहिले बाढीको समस्या,

कहिले वन फँडानीको समस्या र कहिले जिल्लाका ठूलाठालुहरूबाट हुने थिचोमिचो र शोषणका समस्याहरू पनि आउने गर्दथे। समस्याको रूपमा त्यस जिल्लाका पञ्चायतका नेताहरू नै मुख्यरूपमा देखापरेका थिए।

२०३२ सालमा गाउँफर्क राष्ट्रिय अभियान अन्तर्गतको चुनाव उदयपुर जिल्लामा भएको थियो। जिल्लामा शान्तिसुरक्षा लगायत उमेदवारहरूलाई टिकट बाँढ्ने काम पनि प्रमुखजिल्ला अधिकारीहरूले नै गर्नुपर्ने कानूनी व्यवस्था भएको थियो। त्यस व्यवस्थाले गर्दा शान्तिसुरक्षाका साथै राजनीतिक क्रियाकलापमा पनि प्र.जि.अ.संलग्न हुनुपर्दा अत्यन्त अप्ठेरो स्थिति पैदा भएको थियो।

२०३२ साल जेठ २७ गते मैले राजपत्राङ्कित द्वितीय श्रेणीमा बढुवा भई उदयपुर जिल्लाको का.मु. प्र.जि.अ.बाट प्र.जि.अ.मा पदोन्नति पाएको थिएँ। बढुवा भएपछि पनि मेरो त्यहीँ पदस्थापन गरिएको थियो। मेरो का.मु. हटेर म पूर्णरूपमा द्वितीय श्रेणीको अधिकृत भएको थिएँ तापनि म त्यस जिल्लामा प्र.जि.अ. भएर बस्न इच्छुक थिइन। मैले त्यहाँ बस्न नचाहनुमा विभिन्न कारणहरू थिए। जिल्लाको सदरमुकाम उदयपुर गढीबाट त्रियुगाको बोक्से भन्ने ठाउँमा भवनहरू निर्माण गरी व्यवस्थितरूपमा सार्नु पर्नेमा सो नगरी राजनीतिक निर्णयबाट बलपूर्वक गाईघाटको बरुवाको बगरमा अलपत्रे अवस्थामा सदरमुकाम राखिएको थियो। सरकारी कार्यालयहरू राख्नका लागि राम्रा पक्की घरहरू नपाइने हुँदा काठका कच्ची घरहरूमा राखेर काम चलाउनुपरेको थियो। वर्षा लागेपछि बरुवा खोलाको बाढीको पानी सबैजसो घरहरूमा पसेर क्षति गर्ने र ज्यानै समेत जाने डर भएकाले वर्षा लागेपछि धेरैजसो कर्मचारीहरू जिल्लामा बस्तैनथे। सरकारी कामकाज प्रायः बन्द नै हुने गर्दथ्यो। शान्तिसुरक्षासम्बन्धी निकायका प्र.जि.अ. र प्रहरीनिरीक्षक जस्ता अधिकारीहरूमात्र जिल्लामा बस्नेगर्दथ्यौँ। त्यसैकारण म जिल्ला छोडेर एकरात पनि बाहिर जान पाउँदिनथेँ। सरकारी घरहरू बनाउने भनेर सरकारले छुट्याएको बोक्सेको करीव १०० बिगाहा जग्गा पनि केही स्थानीय पञ्च र ठूलाठालुहरूले बलजफत कब्जा गरेर खाइरहेका थिए। म त्यस जिल्लामा जानुभन्दा अघि कुनै पनि प्रमुखजिल्ला अधिकारीले सो सरकारी जग्गा अधीनमा लिएर सदरमुकामका भवनहरू निर्माण गर्नेतर्फ हिम्मतै गरेका

रहेनछन् ।

त्यसरी सरकारी जग्गा बलजफत कब्जागरेर बस्नेहरूमा श्रीहरिबहादुर बस्नेतका बाबु श्रीअम्बेबर काजी, निजका भाइहरू, आसेपासे, नातागोता र श्रीरणशेर राईसमेतका व्यक्तिहरू नै मुख्यरूपमा थिए । तिनका अधीनबाट उक्त जग्गा छुटाउन खोज्दा केन्द्रमा मन्त्री भएर शक्तिकेन्द्र समातेर बसेका हरिबहादुर बस्नेतको शक्तिले जागिरै पनि जान सक्ने भएकाले त्यतातर्फ त्यस बेलासम्म कसैले पनि हिम्मतै गरेका रहेनछन् । त्रियुगा फाँटमा बस्नेत काजीहरूले प्रशासनबाट आफ्नू पक्षमा जे जस्तो काम पनि गराउन साम, दान, दण्ड र भेदसमेत प्रयोग गर्न पछि पर्दा रहेनछन् । आफ्नू पक्षमा काम नभएमा नानाथरीका निहुँ निकालेर घेराउ गर्ने, जुलुस निकाल्ने र केन्द्रमा उजुर गरेर दुःख दिनेसमेत गर्दारहेछन् । त्यसै कारण नैतिकवान्, स्वाभिमानी र देशका लागि केही गर्छु भन्ने राष्ट्रसेवकहरू त्यस जिल्लामा बस्न इच्छा गर्दा रहेनछन् । ती कटुसत्य कुराहरू त्यस जिल्लामा बस्दै गएपछि बिस्तारै मैले बुझ्दै गएको थिएँ ।

मभन्दा पहिलेका प्र.जि.अ.हरू सदरमुकाम स्थापना गर्नेतर्फ नलागेर जसरी तसरी आफ्नू कार्यकाल समाप्त गरेर हिँड्दा रहेछन् । त्यसै गरी म पनि कुनै विवादमा नफसी त्यस जिल्लाबाट प्रस्थान गर्न चाहन्थेँ । तर मलाई अत्यन्त विश्वास र माया गर्ने तत्कालीन गृहसचिव श्रीशेरबहादुर शाहीले जिल्लाको सदरमुकाम बोक्सेमा निर्माण गरी नसारेसम्म र त्यस जिल्लामा त्यस समयमा विद्यमान भ्रष्टाचार समाप्त नगरेसम्म कुनै पनि हालतमा त्यस जिल्लाबाट अरू जिल्लामा सरुवा नगर्ने भनेर भनेपछि मैले त्यसै जिल्लामा बस्न बाध्य हुनुपरेको थियो ।

त्यसरी जिल्लाका महत्त्वपूर्ण कामहरू सम्पादन गर्न मैले गृहसचिवबाट जिम्मा पाएपछि त्यसै अनुरूपको सबै व्यवस्था मैले मिलाउनुपरेको थियो । त्यसै सालदेखि अधिराज्यभरि नयाँ जिल्लाप्रशासन योजना श्री ५ को सरकारले लागूगरेको थियो । जिल्लाप्रशासन योजनाको कार्यक्रम अनुसार जिल्लाहरूमा खटिएर जाने प्र.जि.अ.हरूलाई सैनिक तालीम लगायतका तालीमहरू सरकारले दिएको थियो । त्यसरी तालीम दिने क्रममा म दोस्रो तालीम कार्यक्रममा परेको थिएँ । उक्त तालीम २०३२ साल कार्तिक ६ गतेदेखि २०३२ साल पुस

६ गतेसम्म त्रिभुवन विश्वविद्यालयको आर्थिक विकास तथा प्रशासन केन्द्रले सञ्चालन गरेको थियो । प्र.जि.अ.हरूको त्यस दोस्रो तालीम समूहमा हामीहरू



प्रमुखजिल्लाअधिकारीहरूको दोस्रो तालीमका सन्दर्भमा तत्कालीन प्रहरीमहानिरीक्षक श्रीखड्गजीत बरालका साथ प्र.जि.अ.हरू, प्रहरीप्रधानकार्यालय, नक्साल,२०३२ साल मङ्सिर ।

जम्मा २४ जना प्र.जि.अ.हरू सम्मिलित भएका थियौं । तालीमको संयोजन गृहमन्त्रालयले गरेको थियो र त्यसको संयोजक गृहमन्त्रालयका तालीम शाखाका तत्कालीन उपसचिव श्रीविक्रमजीत नेपालीले गर्नुभएको थियो । तालीमका विषयहरूमा प्रशासनिक, आर्थिक, सैनिक र प्रहरीसम्बन्धी विषयहरू थिए । हामी सहभागीहरूलाई कीर्तिपुरको डर्मिटोरीमा राखिएको थियो । अत्यन्त अनुशासन र कडाइका साथ सैनिक तालीममा हामीहरूलाई सामेल गराइएको थियो । उक्त सैनिक तालीममा पी.टी., परेड, दौड, बिनेटफाइट, ड्रिल, राइफल तथा पेस्तोल चलाउने अभ्यास, तारो हान्ने, भीडनियन्त्रण, घोडचढी, पौडी खेल्ने, गाडी हाँक्ने र अन्य विविध किसिमका तालीमहरू सैद्धान्तिकरूपमा र क्रियात्मकरूपमा समेत हामीहरूलाई दिइएको थियो । त्यसका अतिरिक्त प्रहरीको सामान्य तालीम, जुडो, कराँते, डोरीमा झुण्डिने, बाधा पार गर्ने र अन्य तालीमहरू पनि हामीहरूले लिएका थियौं । त्यस प्रकारको अत्यन्त कडा तालीममा केही साथीहरू बिरामी भएर तालीमै पनि छोडेर हिंडेका थिए ।



सैनिक तालीमको सन्दर्भमा ठूलो अरबी घोडा चढ्ने तालीम लिँदै लेखक, २०३२ कार्तिक ।

सैनिक तालीममा हामीहरूलाई सेनाका मेजर श्रीअर्जुन विक्रम शाहले सारै दुःख दिएका थिए । नचाहिँदा कामकुराहरू गर्न लगाएर बूढा, पुराना र इज्जतदार सरकारका माथिल्लो तहका नीतिनिर्माण गर्ने निकायमा बसेका निजामती अधिकृतहरूलाई पूर्वाग्रह राखेर विभिन्न निहुँ झिकेर दुःख दिने र बेइज्जत गर्ने काम पनि तालीमको नाममा निज मेजरले गरेका थिए । त्यसपछि भएका तालीमहरूमा त्यसै कारणले पनि धेरै निजामती अधिकृतहरूले सैनिक तालीममा समाविष्ट हुन अनिच्छा देखाएका थिए । अन्त्यमा तालीम दिइएका र पढाइएका सम्पूर्ण विषयहरूको लिखित



प्र.जि.अ.हरूको दोस्रो तालीमको सन्दर्भमा तत्कालीन नेपाल गुप्तचर विभागका प्रमुख श्रीरामप्रसाद श्रेष्ठका साथ हामी प्र.जि.अ.हरू, बरफबाग, सिंहदरबार, २०३२ साल मङ्सिर ।



प्रमुखजिल्लाअधिकारीहरूको दोस्रो तालीमको सन्दर्भमा तत्कालीन गृहसचिव श्रीशेरबहादुर शाहीका साथमा प्र.जि.अ.हरू, त्रिभुवन विश्वविद्यालयको परिसर, कीर्तिपुर, २०३२ साल मङ्सिर ।

तथा क्रियात्मक परीक्षा पनि भएको थियो । परीक्षा दिएर उत्तीर्ण भएपछि म फेरि आफूलाई खटाएको उदयपुर जिल्लामा नै गएको थिएँ । मैले काठमाडौंमा घरको व्यवस्था सबै मिलाएर श्रीमतीलाई पनि उदयपुर जाने व्यवस्था मिलाएको थिएँ । छोराछोरीहरूको पढाइ बिग्रने हुँदा ठूली छोरी सरिता, छोराहरू सञ्जीव र सतीशलाई काठमाडौंमा नै राखिएको थियो । सानी छोरी सविता र सानू छोरा सगुनलाई लिएर श्रीमती

रावालामीडाँडाको बाटो हुँदै फागुन महिनामा हवाइजहाजद्वारा राजविराज उत्रिएकी थिइन् । त्यहाँबाट गाडीमा उदयपुरको गाईघाटसम्म जाने व्यवस्था मैले जिल्लाबाटै गाडी पठाएर मिलाएको थिएँ । त्यसरी उदयपुर जिल्लामा मलाई सुम्पिएका कामहरू पूर्ण गरेर देखाउने क्रममा मैले घरव्यवहारदेखि लिएर सबै व्यवस्था मिलाएको थिएँ ।

उदयपुर जिल्लामा जिल्लास्तरीय निर्वाचन र राष्ट्रिय पञ्चायत सदस्यको निर्वाचनसमेत २०३२ सालको चैत्रदेखि गाउँफर्क राष्ट्रिय अभियान अन्तर्गत शुरु भएको थियो । त्यस चुनावमा प्र.जि.अ.ले नै सम्पूर्ण व्यवस्था मिलाउनुपर्ने भएको थियो । राजनीतिक व्यक्तिहरूमा श्रीजवाहर रोक्का र श्रीकटकबहादुर कार्कीसमेत उक्त कामका लागि खटिएर जानुभएको थियो तापनि सबै कामकुरा मेरै जिम्मामा परेको थियो । मैले क्रमशः गाउँस्तरदेखि राष्ट्रिय पञ्चायतको समेत सिफारिसपत्र बाँड्ने लगायतका कामहरू अत्यन्त कुशलतापूर्वक सम्पादन गरेको थिएँ । राष्ट्रिय पञ्चायतको सदस्यमा पुरानै व्यक्ति श्रीहरिबहादुर बस्नेतले उठ्न खोजेको भए तापनि मैले त्यस पदमा श्रीचक्रबहादुर बस्नेतलाई उठाउन खोजेको थिएँ । श्रीहरिबहादुर बस्नेत पूर्व माननीय र मन्त्रीसमेत भइसकेका अत्यन्त दलाहा र मिचाहा व्यक्ति भएका हुँदा निजलाई जिल्लामा कसैले पनि मन पराउँदैनथे । उनी बाबु श्रीअम्बेबरको भनाइ र लहैलहैमा लागेर आफ्नै परिवारका हितका लागि जेजस्तोसुकै अनैतिक काम गर्न पनि पछि हट्दैनथे । श्रीहरिबहादुर बस्नेत पढेलेखेका शिक्षित व्यक्ति भए तापनि अत्यन्त दलाहा र बलमिचाइँ गर्नेखालका व्यक्ति थिए ।

मैले उपर्युक्त तथ्यहरू खुलाएर तत्कालीन सगरमाथा अञ्चलाधीश श्रीमहेशकुमार उपाध्यायलाई र केन्द्रमा समेत लेखेर पठाएको थिएँ । तर श्रीहरिबहादुर बस्नेतले दरबारमा आफ्नू पहुँच पुऱ्याएर आफ्नै नाम माथिबाटै सिफारिस गराउन सफल भएपछि मैले जति प्रयास गरे तापनि अन्त्यमा बाध्य भएर उनलाई नै सिफारिस दिनुपरेको थियो । मैले नचाहँदा नचाहँदै पनि माथिबाटै हस्तक्षेप गरेर जिल्लाका शोषक तथा सामन्ती व्यक्तिलाई सिफारिस पत्र दिनुपरेको थियो । त्यसरी दरबारले श्रीहरिबहादुरजस्ता शोषक तथा सामन्ती व्यक्तिहरूलाई प्रोत्साहन दिनेगरेको हुँदा नै त्यस बेला प्रशासनमा काम गर्ने प्रशासकहरूलाई अत्यन्त अप्ठ्यारो पर्ने गर्दथ्यो ।

त्यसबाट प्रशासनिक, राजनीतिक र आर्थिक क्षेत्रमा समेत अत्यन्त विकृति पैदा भएको थियो ।

उपर्युक्त अनुसार श्रीहरिबहादुर बस्नेतलाई नै राष्ट्रिय पञ्चायतको सदस्यमा पठाएपछि गाउँफर्क राष्ट्रिय अभियानको समयमा भएको विकृतिपूर्ण निर्वाचन पनि समाप्त भएको थियो । त्यसपछि मलाई तत्कालीन गृहसचिव श्रीशेरबहादुर शाहीले सुम्पिनु भएका कामहरू मैले अत्यन्त सक्रियताका साथ शुरु गरेको थिएँ। भ्रष्टाचार निवारणको सन्दर्भमा भागलपुरको जमीनबाट प्र.जि.अ.को नाममा पनि रकम उठाएर खाएको भन्ने अभियोगमा तत्कालीन मालपोत हाकिमसमेतका कर्मचारीहरूलाई निलम्बनमा राखेर सगरमाथा अञ्चलाधीशले कारबाही चलाउनुभएको थियो ।

राष्ट्रिय पञ्चायतको निर्वाचनमा तथाकथित सफलता प्राप्त गरेर राष्ट्रिय पञ्चायतमा पुगेका श्रीहरिबहादुर बस्नेत मन्त्री पनि हुन सफल भएका थिए । उनी मन्त्री भएकै बेलामा जिल्लामा भ्रष्टाचार र ठगीसमेत गरी हिंडेको अभियोगमा उनका बाबु भ्रष्ट प्रधानपञ्च श्रीअम्बेबर काजी र निजका छोराहरूलाई समेत सबुदप्रमाणहरूसहित पक्राउ गरी मैले कारबाही गरेको थिएँ । निजहरूले भ्रष्टाचार गरी कमाएको नगदी र जिन्सीसमेत सम्बन्धित पीडित व्यक्तिहरूलाई निजहरूबाट फर्काइदिन म सफल भएको थिएँ । अभियानकै रूपमा चलाइएको भ्रष्टाचारनिवारणको अभियानको प्रभाव जिल्लाभरि नै राम्रो परेको थियो ।

उदयपुर जिल्लामा धेरै वर्षदेखि आफ्नू प्रभाव जमाएर बसेका श्रीअम्बेबर काजी र उनका छोराहरूलाई श्रीअम्बेबर काजीको जेठो छोरो श्रीहरिबहादुर बस्नेत मन्त्री भएर झण्डा हल्लाएर हिंडिरहेकै बखतमा कानूनी करबाही गरी भ्रष्टाचार गरेको रकम तथा जिन्सीसमेत फिर्ता गराउनु भनेको एउटा दुस्साहसपूर्ण काम भएको सबैले ठानेका थिए । तर मैले सो काम अत्यन्त दृढताका साथ गरेर सफल भएको थिएँ। उदयपुर जिल्लाका जनताले भ्रष्टाचारनिवारण गर्ने काममा अत्यन्त उत्साहका साथ प्रशासनलाई साथ दिएका थिए । भ्रष्टाचार हुने कार्यालयहरूका कर्मचारीहरू र जिल्लाका अन्य भ्रष्ट पञ्चहरू उपर पनि मैले एकैचोटि कारबाही शुरु गरेको थिएँ । जिल्लाका विभिन्न विद्यालयहरूमा पढाउने शिक्षकहरूले कीर्ते र चोरीका

प्रमाणपत्रहरू विभिन्न ठाउँहरूबाट किनेर ल्याई जागिर खाइरहेको थाहा पाएपछि भ्रष्टाचार निवारण ऐन अन्तर्गत तिनीहरूमाथि पनि मैले कारबाही चलाएको थिएँ । त्यस सन्दर्भमा कैयौँ शिक्षकहरू खोसुवामा परेका थिए र कतिपय शिक्षकहरू जागिरै छाडेर जिल्लाबाट भागेका पनि थिए ।

उपर्युक्त अनुसार गृहसचिवले मलाई सुम्पिएका कामहरूमध्ये एउटा कामको सकारात्मक परिणाम प्राप्त भएपछि मैले दोस्रो बोक्सेमा सदरमुकाम निर्माण गर्ने काम पनि शुरु गरेको थिएँ । बोक्सेमा सदरमुकाम बसाल्नका लागि सर्वप्रथम बोक्सेमा रहेको अनुमानित एक सय बिगाहा जति सरकारी जग्गा मैले खोज्ने अभियान चलाउनुपरेको थियो । बोक्सेमा सदरमुकामका लागि काम शुरु गर्नु अघि स्थानीय जनताको सहयोग लिएर बरुवा खोलामा बाँध बाँधेर गाईघाटलाई सुरक्षित गर्नु पहिलो आवश्यकता भएको महसूस गरेर मैले गैह्रसरकारी क्षेत्रबाट सो कामको अभियान शुरु गराएको थिएँ । त्यस कामका लागि भू.पु सभापति चक्रबहादुर बस्नेतको संयोजकत्वमा गाईघाट असारी बस्ने श्रीकेशवराज पोखरेलसहितका स्थानीय गणयमान्य व्यक्तिहरूसमेतलाई समावेश गराइएको थियो । जनसहयोगबाट ढुङ्गाहरू फलामे जालीमा हाली बाँध बाँध्ने काम अत्यन्त सक्रियताका साथ चाँडै सम्पन्न भएको थियो ।

उपर्युक्त काममा जनताको सक्रिय सहयोग मैले पाएपछि बोक्सेमा सदरमुकाम निर्माणको काम पनि शुरु गर्न मलाई उत्साह प्राप्त भएको थियो । मैले बोक्सेमा रहेको सरकारी जग्गा जिल्लाका शोषक श्रीअम्बेबर काजी लगायतका व्यक्तिहरूका कब्जाबाट छुटाएर सरकारी भवनहरू बनाउने कामका लागि सहयोगार्थ पूर्वाञ्चल क्षेत्रीय बसोवास कार्यालयका अधिकारी आर्.डी. प्रभासलाई दलबलसहित उदयपुरमा मैले झिकाएको थिएँ । उक्त कार्यालयको सहयोग लिएर उदयपुर जिल्लामा रहेको अव्यवस्थित बसोवास र वनफँडानीसमेतलाई व्यवस्थित गर्ने कामको सन्दर्भ मिलाएर मैले बोक्से क्षेत्रमा सरकारी भवनहरू बनाएर जिल्लाको सदरमुकाम व्यवस्थित गर्न उक्त सरकारी जग्गा शोषकहरूको अधीनबाट झिकेर सरकारको नाममा दर्ता गराउँन सफल भएको थिएँ ।

त्यसरी मैले अत्यन्त सक्रियताका साथ सरकारी जग्गा छुट्याएर

बालमन्दिर, जिल्लाप्रशासन कार्यालय, अस्पताल, कारागार लगायतका विभिन्न भवनहरू सरकारसँग रकम निकासा गराएर बनाउन शुरु गरेको थिएँ । जिल्लामा भ्रष्टाचार निवारण र विकासनिर्माणको लहर चलिरहेकै बेला २०३३ साल चैत्र महिनामा श्री ५ वीरेन्द्रको पूर्वाञ्चल सवारीको क्रममा धनकुटामा सवारी भएको थियो । तर मैले चलाएका ती अभियानहरूबाट मारमा परेका मन्त्री श्रीहरिबहादुरका बाबु श्रीअम्बेबर काजीको नेतृत्वमा मेरा विरुद्धमा गृहमन्त्रालयमा जिल्लाका फटाहाहरूको प्रतिनिधिमण्डल गएको थियो । मेरो कामबाट असन्तुष्ट भएका तत्कालीन मन्त्री श्रीहरिबहादुर बस्नेतले ती भ्रष्ट व्यक्तिहरूलाई गृहमन्त्रालयमा लिएर गएका थिए । मेरो विरुद्धमा उजुरी परेपछि छानविन गर्न भू.पू. मन्त्री श्रीहोमबहादुर श्रेष्ठको अध्यक्षतामा आयोग गठन गरेर उदयपुर जिल्लाको सदरमुकाम गाईघाटमा पठाइएको थियो । त्यस बेलाका वनमन्त्री श्रीभोलानाथ झा त्योभन्दा अगाडि नै उदयपुर जिल्लामा गएर मैले गरेका क्रान्तिकारी कार्यहरूबाट प्रभावित भएर उहाँले मलाई साथ दिनुभएको थियो । सो कुराको जानकारी सवारीक्याम्प धनकुटामा पनि उहाँले दिइसक्नु भएको रहेछ । जिल्लामा गरेको राम्रो कामको कदरस्वरूप सवारीकै समयमा गोरखादक्षिणबाहु विभूषण मैले पाएको थिएँ । मेरा विरुद्धमा लागेका मन्त्री श्रीहरिबहादुर बस्नेत लगायतका शोषकहरूले त्यसबाट नराम्रो जबाफ पाएका थिए । तै पनि उनीहरू मेरा विरुद्ध लागि नै रहेका थिए । त्यसै बेला म बेलायतमा जनप्रशासन सम्बन्धी विषयमा अध्ययन गर्न १ वर्षका लागि प्रस्थान गर्ने तरखरमा लागेको थिएँ ।

उपर्युक्त अनुसार अध्ययनका लागि बेलायततर्फ प्रस्थान गर्ने सुरसारमा लागेकै बेलामा अञ्चलाधीशसमेतलाई लिएर होमबहादुर श्रेष्ठ गाईघाट पुग्नुभएको थियो । श्रीहोमबहादुर श्रेष्ठले जिल्लामा पुगेर सबैसँग सत्यतथ्य बुझ्ने काम गर्नु भएको थियो । सबै कुरा बुझिसकेपछि अन्त्यमा मसँग जिल्लाको वस्तुस्थिति बारेमा र मैले गरेका काम कुराहरूका सम्बन्धमा पनि विस्तृत छलफल भएको थियो । मेरो कार्यकालको छोटो अवधिमा मैले जिल्लामा चलाएका भ्रष्टाचार विरोधी अभियान, सदरमुकाम निर्माण गर्ने कार्यक्रम, बरुवा बाँधको काम र शोषक र सामन्तीहरूका विरुद्धमा

निडर भएर चलाइएका कार्यक्रमहरूबाट होमबहादुर श्रेष्ठ अत्यन्त प्रभावित हुनु भएको थियो । उहाँले मन्त्री श्रीहरिबहादुर बस्नेतले चाहे अनुसारको मलाई कारबाही गर्नुको सट्टा झूटो उजुर गरेर इमान्दार तथा योग्य प्रशासकलाई दुःख दिन खोजेकोमा उल्टै उनीहरूलाई कारबाही गर्ने आदेश दिएर मेरो कामको प्रशंसा गर्दै उहाँ जिल्लाबाट प्रस्थान गर्नु भएको थियो ।

म उदयपुर जिल्लामा प्रमुखजिल्ला अधिकारी भएर शुरुमा जाँदा सगरमाथा अञ्चलको अञ्चलाधीश श्रीज्याउल हक हुनुहुन्थ्यो । उहाँ शिकार खेल्न अत्यन्त सौखिन भएको हुँदा बारम्बार उदयपुर जिल्लामा गइरहनु हुन्थ्यो । जाडोका समयमा खुला ठाउँमा आगो बालेर बस्ने उहाँको सोख थियो । मभन्दा पहिलेका उदयपुर जिल्लाका प्रमुखजिल्ला अधिकारी श्रीरघुवरमान श्रेष्ठसँग उहाँको त्यति राम्रो सम्बन्ध थिएन भन्ने मैले सुनेको थिएँ, तर मेरो सम्बन्ध भने राम्रो थियो । मलाई पनि अञ्चलाधीशसँगको छोटो सङ्गतले पोखरामा हुँदा श्रीधर्मबहादुर थापासँग मिलेर शिकार खेल्न सिकेको कुसंस्कारलाई त्यहाँ फेरि जगाइदिएको थियो । त्यो कुसंस्कार उदयपुर जिल्लाबाट सरुवा भएर धनुषा, दाङ, बर्दिया, झापा र पाल्पा जिल्लामा पुगुन्जेलसम्म पनि ममा रहिरहेको थियो । अञ्चलाधीश श्रीज्याउल हकपछि सगरमाथा अञ्चलको अञ्चलाधीशमा श्रीमहेशकुमार उपाध्याय जानुभएको थियो । उहाँ अत्यन्त सरल र सहयोगी व्यक्ति भएको हुँदा निर्वाचनको समय र राजाको सवारीका समयमा पनि काम गर्न मलाई अत्यन्त सहयोग पुगेको थियो ।

उपर्युक्त अनुसार उदयपुर जिल्लामा प्रमुखजिल्लाअधिकारी भएर बसेको अवधिमा श्रीज्ञानेन्द्रप्रसाद ढुङ्गाना, श्रीखिलराज निरौला र श्रीभक्तबहादुर मल्ल ठकुरीसमेत उदयपुर जिल्ला पञ्चायतका सभापतिमा क्रमशः छानिनुभएको थियो । उहाँहरू सबैसँग मेरो राम्रो सम्बन्ध थियो । उपसभापति श्रीनारायणभक्त रेग्मीले मलाई जिल्लामा विशेष सहयोग गर्नुभएको थियो । मैले उदयपुर जिल्लामा गर्नुपर्ने सदरमुकामको व्यवस्था, भ्रष्टाचार निवारण, जिल्लाका जालीशोषकहरूका विरुद्धको कारबाही र जिल्लामा गर्नुपर्ने निर्माण र विकासका कामहरू पनि सफलतापूर्वक परिचालन गरेको थिएँ । फलस्वरूप राजाको पूर्वाञ्चल भ्रमणमा मैले विभूषण पनि पाएको थिएँ ।

त्यसरी मैले सङ्घर्षपूर्ण तरिकाले काम गर्दागर्दै बेलायत अध्ययनका लागि जानुपरेपछि मैले गर्न बाँकी रहेका केही कामहरू प्रशासकीय अधिकृतले गर्नेगरी निजलाई प्र.जि.अ.को कायममुकायमसमेत दिएर २०३४ साल जेठ महिनाको अन्तिम हप्तामा म परिवारसहित जिल्लाका सरकारी कर्मचारीहरू र जनप्रतिनिधिहरूसमेतबाट भावपूर्ण भव्य बिदाइ पाएर काठमाडौँतर्फ प्रस्थान गरेको थिएँ ।



उदयपुर जिल्लाबाट बेलायतमा अध्ययनका लागि प्रस्थानगर्ने समयमा विदाइको सन्दर्भमा जिल्लाप्रशासनकार्यालयको भवन अगाडि लिइएको संयुक्त तस्वीर, २०३४ जेठ ।

उदयपुर जिल्लाबाट बिदावारी भएर काठमाडौँ आउने क्रममा इनरुवाको घरमा गएर मातापितासँग बिदा भएर विराटनगरहुँदै हजाइजहाजबाट म परिवारसहित काठमाडौँ आएको थिएँ । काठमाडौँ आएपछि गृहमन्त्रालयबाट लेखापढी गराएर काठमाडौँस्थित बृटिश दूतावासबाट लिनुपर्ने भिसा आदि आवश्यक सबै कागजपत्रहरू मैले लिएको थिएँ । बृटिश काउन्सिलकै छात्रवृत्तिमा बेलायतमा पढ्न जाने भएको हुँदा काठमाडौँस्थित बृटिश काउन्सिलबाट लिनुपर्ने आवश्यक जानकारीसमेत मैले लिएको थिएँ । घरव्यवहारमा एक वर्षका लागि मिलाउनुपर्ने सबै व्यवस्था मिलाएर म बेलायततर्फ प्रस्थान गर्नका लागि तयार भएको थिएँ । ❁



दायाँबाट क्रमशः कान्छो छोरो सगुनकुमार भट्टराई, कान्छी बुहारी पूजा भट्टराई, सानी बुहारी सुष्मिता भट्टराई, सानो छोरो सतीशकुमार भट्टराई, आमा इन्दीरा भट्टराई, पिता शरदकुमार भट्टराई, जेठो छोरो सन्जीवकुमार भट्टराई र जेठी बुहारी सुषमा भट्टराई ।

# बेलायतमा

संवत् २०३४ साल असार १५ गते तदनुसार सन् १९७७ जूनको १ तारिखका दिन अपराह्न नेपाली जेटमा चढेर त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलबाट म नयाँ दिल्लीतर्फ उडेको थिएँ। काठमाडौंबाट उड्दा म्यान्चेष्टर युनिभर्सिटीमा पढ्न जाने म एक्लै विद्यार्थी त्यस जेटभित्र चढेको थिएँ भने साँझपख नयाँ दिल्ली पुगेर पालम अन्तर्राष्ट्रिय हवाइ–अड्डामा उत्रिँदा बेलायत पढ्न जाने श्रीप्रेमप्रसाद ज्ञवाली लगायतका केही मित्रहरू पनि त्यसै जेटमा गएका रहेछन्। त्यहाँबाट हामीहरू सबैसँगै भएर नयाँ दिल्लीमा बृटिश काउन्सिलले नै व्यवस्था गरिदिएको होटेलमा गएर साथै बसेका थियौँ।

अर्को दिन अपराह्न बृटिश ओभरसिज एयरलाइन्स कर्पोरेसनको डी.सी. १० हवाइजहाजबाट हामीहरू बेलायततर्फ प्रस्थान गर्न लाग्दा त्यसै बेला मध्यपूर्वको इरानमा हवाइजहाजको अपहरण भएको खबर आएपछि हाम्रो उडानको समय केही पर सरेर साँझपखमात्रै हामीहरू नयाँ दिल्लीको अन्तर्राष्ट्रिय पालम हवाइअड्डाबाट उडेका थियौँ। मेरो जीवनमा प्रथम पटक ठूलो जेट चढेर सात समुद्रपार जान लागेको हुँदा मलाई सबै कुरामा उत्सुकता थियो। जेटमा चढेर अनन्त आकाशको उचाइमा पुगेर झ्यालबाट पृथ्वीतिर हेर्दा पृथ्वीमा बनेका घरहरू र मान्छेहरूसमेत अत्यन्त साना देखिन्थे। अझै माथि ४५००० को फीटमा पुगेर जेटको झ्यालबाट तल पृथ्वीमा हेर्दा मैले कतै हरियालीपूर्ण सौन्दर्य, कतै मरुभूमि, कतै समुद्र, कतै हिउँले ढाकिएका आल्पस् जस्ता विशाल पर्वतशृङ्खलाहरू पनि देखेको थिएँ। म पृथ्वीका ती नाना प्रकारका विचित्र दृश्यहरू हेर्दै जेटभित्र उपलब्ध गराइएका खाद्य र पेयपदार्थहरू खाँदै रमाइरहेको थिएँ। मेरो त्यस प्रकारको पहिलो अनुभव भएको हुँदा आनन्द लाग्नु स्वाभाविकै थियो। त्यसै गरी अरू साथीहरू पनि खानापिनामा मस्त भएर रमाइरहेका थिए। नयाँ दिल्लीबाट उड्दा दिनको ४ बजिसकेको थियो र घाम पश्चिम दिशातिर पुगिसकेका थिए। तर हामीहरू उडेर जति

पश्चिमतिर जान्थ्यौँ उति नै घाम झलमल्ल देखिन्थे। घाम कहिल्यै पनि अस्ताउँदैनन् कि जस्तो मलाई भान भएको थियो। हामीहरू चढेको जेट केही समयका लागि दुबईमा उत्रिएको थियो र त्यहाँ इन्धन भर्नुका साथै त्यहाँ उत्रने हामीसँगै गएका यात्रुहरूलाई उतारेर अरू नयाँ यात्रीहरूलाई जेटमा चढाएर सो जेट लन्डनको हिथ्रो अन्तर्राष्ट्रिय विमानघाटतर्फ सोझै उडेको थियो।

दुबईबाट जेट उडेपछि हामीहरूलाई रातीको खाना जेटभित्र खुवाइएको थियो। जेटको झ्यालबाट बाहिर हेर्दा त्यतिबेलासम्म पनि घाम नअस्ताएर रिमरिम घामको ज्योति देखा परी नै रहेको थियो। लामू उडानपछि हामीहरू बेलायतको स्थानीय समय अनुसार रातको १० बजे हिथ्रो अन्तर्राष्ट्रिय हवाइअड्डामा उत्रिएका थियौँ। त्यहाँ अबेरसम्म घाम लाग्ने जूनको महिना भएको हुँदा त्यतिबेलासम्म पनि घामको रातो प्रकाश देखा परिरहेको थियो।

त्यसरी लामू उडानपछि जेटबाट उत्रिएर अध्यागमन कार्यालय-समेतमा पुऱ्याउनु पर्ने सबै विधि पुऱ्याएर म विमानस्थलबाट बाहिर निस्कँदा मलाई लिन त्यहाँ बृटिश काउन्सिलका स्थानीय पदाधिकारीहरू आएका थिए। मेरा साथै मसँग गएका साथीहरूसमेतलाई उनीहरूले स्वागत गरेर आफ्नै वाहनमा चढाएर बीचमा पर्ने एयरटर्मिनल भवनसम्म लगेका थिए। त्यहाँ पुगेपछि हामीहरूले पढ्न जाने विश्वविद्यालयहरू विभिन्न ठाउँमा भएका हुँदा मलाई बृटिश काउन्सिलबाट गएका पदाधिकारीहरूले बाटाखर्चका लागि ४० पाउण्ड र लण्डनबाट म्यान्चेष्टर शहरसम्म पुग्न ट्रेनको टिकटसमेत दिएका थिए। मसँग गएका अरू साथीहरूलाई स्वागत गर्न र अरू व्यवस्था मिलाउन बृटिश काउन्सिलबाट त्यहाँ कोही नआएका हुँदा उनीहरू अलपत्र परेर त्यसै भवनमा बस्नुपर्ने परिस्थिति उत्पन्न भएको थियो। उनीहरूसँग तत्कालै खर्च गर्नका लागि बेलायती मुद्रा (स्टर्लिङ पाउण्ड) नभएको हुँदा मैले पाएको ४० पाउण्ड सबै साथीहरूलाई खर्चका लागि दिएर म बृटिश काउन्सिलका पदाधिकारीहरूसँग मध्यरातमा होटेलमा बस्न गएको थिएँ। मलाई होटेलमा बस्ने व्यवस्था मिलाएर बृटिश काउन्सिलका पदाधिकारीहरू फर्किएका थिए। मेरो विदेशमा गएर होटेलमा बसेको पहिलो अनुभव भएको र नेपाल र बेलायतको समयमा समेत ठूलो अन्तर परेको हुँदा म

रातभरि निदाउनसकेको थिइन। अर्को दिन सबेरै उठेर आफ्नू नित्य कर्म समाप्त गरेर बिहानको हल्का खानापछि म म्यान्चेष्टर विश्वविद्यालयतर्फ जान होटेलबाट एउटा ट्याक्सी भाडामा लिएर रेल्वेस्टेसनतर्फ गएको थिएँ।

म स्टेशनमा पुग्दा एक्लै थिएँ र मैले चिनेका कोही व्यक्ति पनि मेरा साथमा थिएनन्। विदेशको पहिलो यात्रा भएको हुँदा अङ्ग्रेजी बोलेर साथी बनाउन पनि ममा दक्षता पैदा भइसकेको थिएन। साँच्चै भन्ने हो भने नेपाली तरिकाको अङ्ग्रेजी बोल्न पनि मलाई लाज लागेर आउँथ्यो। जसरी तसरी काम चलाउँदै म ट्रेनमा चढेको थिएँ। ट्रेनमा चढेपछि ट्रेनबाट चारैतिरको सुन्दर दृश्य हेर्दै मध्य दिनमा म म्यान्चेष्टर शहरभित्रै रहेको रेल्वेस्टेसनमा पुगेको थिएँ। त्यहाँ पुगेपछि मलाई लिन त्यहाँका स्थानीय बृटिश काउन्सिलका पदाधिकारीहरू रेल्वेस्टेशनमै पुगेका थिए। मलाई रेल्वेस्टेशनबाट तिनीहरूले विदेशी विद्यार्थीहरू राखिने एउटा होटेलमा लगेर राखिदिएका थिए। त्यस होटेलमा मसँगै पढ्न बेलायत पुगेका विभिन्न देशका विद्यार्थीहरू बसेका रहेछन्। त्यहाँ पुगेपछि सबै विदेशी विद्यार्थीहरूसँग मैले चिनाजान गरेको थिएँ। खास गरेर अफगानिस्तानबाट गएका विद्यार्थीहरू मसँग अत्यन्त नजिक भएका थिए। मध्याह्नको खाना सबै विद्यार्थीहरूसँग त्यही होटेलमा मैले खाएको थिएँ।

त्यसरी खाना खाएर होटलमै आराम गर्न लागेको समयमा त्यस बेला गृहमन्त्रालयबाटै म्यान्चेष्टर विश्वविद्यालयमा गएर पढिरहेका उपसचिव श्रीजनकबहादुर थापा मलाई लिन त्यस होटेलमा पुग्नुभएको थियो। उहाँले मलाई त्यस होटेलबाट आफू बसिरहेको म्यान्चेष्टर शहरभित्र पर्ने लिन्टन हाउस भन्ने छात्रावासमा लिएर जानुभएको थियो। उहाँले म्यान्चेष्टर विश्वविद्यालयमा जनप्रशासन सम्बन्धी विषय पढ्न गृहमन्त्रालय नेपालबाट म आउँदै छु भन्ने थाहा पाएर मेरा लागि त्यही लिन्टन हाउस छात्रावासमा कोठाको समेत व्यवस्था गरिदिइसक्नुभएको रहेछ। आनन्दसँग उहाँकै भान्सामा उहाँले नै तयार गरेका नानाथरीका परिकारहरू खाएर केही दिनसम्म म उहाँसँगै बसेको थिएँ। तर उहाँको पढाइको समय समाप्त भएर नेपाल फर्किएपछि म लिन्टन हाउसमा केही दिन एक्लैपरेको थिएँ।

त्यस बेला मैले अङ्गेजीको कक्षामा अङ्ग्रेजी पढ्नुपर्दथ्यो । त्यसैका लागि ३ महिना अघि बेलायतमा अङ्ग्रेजी पढ्ने भनेर मलाई बृटिश काउन्सिलले बेलायत पठाएको थियो । तदनुसार नै म अङ्ग्रेजी भाषामा दक्षता प्राप्त गर्न अङ्ग्रेजी विषयका शिक्षकहरूसँग विश्वविद्यालयमै गएर पढ्ने गर्दथैं । अङ्ग्रेजी भाषा पढाउने शिक्षकहरूमा काउवार्ड अत्यन्त रमाइला थिए । अर्का शिक्षक श्रीरबर्ट जोर्डन नेपालमा बृटिश-काउन्सिलको प्रमुख भएर बसिसकेका हुँदा नेपाली विद्यार्थीहरूलाई अत्यन्त स्नेह गर्दथे । उनको अङ्ग्रेजी बोल्ने तरिका अत्यन्त राम्रो थियो । मैले केही महिना अङ्ग्रेजी भाषा पढिसकेपछि नेपालबाट म्यान्चेष्टर विश्वविद्यालयमै जनप्रशासन पढ्न छानिएका शिक्षामन्त्रालयका अधिकृत श्रीशारदाप्रसाद दाहाल र उद्योगमन्त्रालयका अधिकृत श्रीचिरञ्जीवी पौडेलसमेत पुग्नुभएको थियो । उहाँहरू पनि अङ्गेजी कक्षामा समाविष्ट भएपछि हाम्रो चिनाजान भएको थियो ।



म्यानचेस्टर विश्वविद्यालयभित्र अङ्गेजी भाषा पढाउने भवन, सन् १९७७ अगष्ट १५

त्यसपछिमात्रै हामीहरू लेभेन्जोम भन्ने ठाउँमा एउटा पूरै घर भाडामा लिएर साथै बसेका थियौं । श्रीचिरञ्जीवी पौडेल चाहिँ हामीहरूसँग नबसेर अर्कै घरमा बस्न जानुभएको थियो भने हाम्रा साथमा फर्मासुटिकल विषय पढ्न बेलायत गएका एस्. के. जोशी बस्नुभएको थियो । हामीहरू अङ्ग्रेजी भाषा पढ्दापढ्दै त्यसै बीचमा समय निकालेर वेल्स राज्यको एउटा सुन्दर पहाडी भूभागमा गएका थियौं । त्यहाँ हाम्रो नेपालमा जस्तै हाट लाग्ने चलन रहेछ । हाम्रा साथमा उपसचिव श्रीजनक थापा पनि जानुभएको थियो ।



भिक्टोरिया म्यानचेस्टर विश्वविद्यालयको मुख्य भवन र मैले पढेको प्रेसिड्क्ट्सेन्टरको भवन

त्यसरी तीन महिनासम्म अङ्ग्रेजी भाषा सिक्ने काम समाप्त भएपछि हाम्रो जनप्रशासनसम्बन्धी पढाइ म्यान्चेष्टर विश्वविद्यालयको परिसरभित्र

रहेको विदेशी विद्यार्थीहरूका लागि जनप्रशासन पढाउन छुट्याइएको प्रेसिङ्क्ट् सेन्टर (Precinct Centre) मा रहेको विभागमा हामीहरू गएका थियौँ। उक्त विभागका निर्देशक डेभिड विण्डर हुनुहुन्थ्यो। हाम्रो पढाइ शुरुभएपछि उहाँ नेपाल आएर भ्रमण गरेर बेलायत फर्किनु भएको थियो। त्यस बेला उहाँले काठमाडौँमा मेरो घरमा आएर मेरा परिवारलाई भेटेर तस्वीरसमेत खिचेर लैजानु भएको थियो। त्यहाँ हामीहरूलाई पढाउन जनप्रशासनसम्बन्धी विषयका विभिन्न विद्वान् प्राध्यापकहरू खटिनु भएको थियो। हामीहरू बिहान ९ बजेदेखि अपराह्न ४ बजेसम्म पढ्दथ्यौँ। अत्यन्त मिहिनेतका साथ पढ्नुपर्ने र मेरो पढ्ने बानी छुटिसकेको हुँदा मलाई अत्यन्त मुश्किल परेको थियो। मसँगै पढ्ने केही विदेशी विद्यार्थीहरू घरको सम्झनाले आफ्नू पढाइ बीचमै छोडेर आ-आफ्ना घर फर्किएका थिए। मलाई पनि केही महिनासम्म घरको सम्झनाले अत्यन्त सताएको थियो।


निर्देशक डेभिड विण्डरले काठमाडौँमा आएर खिचेर लगेको मेरा परिवारको तस्वीर, २०३४

म नेपालबाट जाँदा ग्रीष्म ऋतुमा बेलायत पुगेको थिएँ भने विस्तारै शिशिर ऋतुको समय पनि आएको थियो। बेलायतमा ग्रीष्म ऋतुमा केही गर्मी हुने र अत्यन्त लामा दिन पनि हुने, जाडाका समयमा अत्यन्त छोटा दिन हुने र जाडोसमेत हुने गर्दछ। म जस्तो बेलायतको हावापानी नपचेको मान्छेलाई त्यहाँ दिन बिताउन अत्यन्त मुश्किल परेको थियो। जाडोमा जति लुगा लगाए तापनि जाडोले लुगलुग कमाउँदथ्यो। हिउँद वर्षा सधैँ पानी परिरहने हुँदा बेलायतको मौसमलाई विश्वास गर्न सकिँदैन भन्ने उखान प्रसिद्धै छ। प्रायः गरेर बेलायतमा बिर्बिरे पानी र कहिलेकाहीँ हिउँ पनि पर्नेगर्दथ्यो। त्यसोहुँदा म सधैँ वर्षादी र छाता साथमा लिएर हिंड्नेगर्दथेँ। हामीहरूलाई सेप्टेम्बरदेखि नोभेम्बरसम्म प्रथम चरणको पढाइ सकेर डिसेम्बर महिनामा दुई हप्ताका लागि क्षेत्रीय भ्रमणका सन्दर्भमा लण्डन घुमाउन लगिएको थियो। हामीहरू लण्डनमा हाइटपार्कको नजिकै केसिङ्टन

प्यालेसको समीपमा रहेको नेपाली राजदूतावासको नजिकै एउटा होटेलमा बसेका थियौं । लन्डनमा रहँदा बेलायतकी महारानी बस्ने बकिङ्घम प्यालेसको पनि हामीहरूले भ्रमण गरेका थियौं । अङ्ग्रेजी वास्तुशैलीको उक्त दरबार अत्यन्त सुन्दर देखिन्छ । बेलायतमा राजसंस्थालाई लामू समयसम्मको सङ्घर्षपछि संवैधानिक बनाइएको थियो । बेलायतमा राजतन्त्र संवैधानिक भएपछि राजगद्दीमा बस्ने राजा वा रानीलाई बेलायतका जनताहरू अत्यन्त आदरका साथ सम्मान गर्नेगर्दछन् ।



बकिङ्घम राजदरबार अगाडि लेखक, १९७७ डिसेम्बर २

त्यसपछि हामीहरू बृटिश पार्लियामेण्टभित्र बैठक चलिरहेको बेला गएका थियौं । त्यस बेला संसदको अधिवेशन चलिरहेको थियो । हामीहरूले तल्लो सदनका साथै माथिलो सदनको कार्यविधि पनि हेरेका थियौं । तल्लो सदनको कामकारबाही नेपालको संसदमा जस्तै अत्यन्त होहल्लाको बीच सञ्चालन हुँदोरहेछ । विरोधी पक्ष र सत्ता पक्षका बीचमा अत्यन्त उग्ररूपमा भनाभन र टेबुल ठोकाठोक भएको पनि त्यहाँ हामीहरूले देखेका थियौं । संसदीय प्रजातन्त्रकी जननी मानिने बेलायतको संसदलाई संसारभरिमा आदर्शको रूपमा लिने गरिन्छ । त्यस संसदीय परिपाटीले संसारभरिका धेरै प्रजातान्त्रिक मुलुकहरूका राजनीतिक परिपाटीहरूलाई प्रभावित पारेको छ । हाम्रो देशले पनि त्यही संसदीय परिपाटीलाई नै आदर्शका रूपमा लिएर २०१५ सालमा निर्वाचन गरेको थियोभने त्यसपछि पनि बेलायतको संसदीय परिपाटीलाई नै आदर्शको रूपमा हामीहरूले मान्दै आएका छौं । विद्यार्थी अवस्थादेखि नै बेलायतको संसदलाई अधिवेशन चलिरहेकै समयमा पुगेर हेर्ने मेरो इच्छा मैले त्यहाँ



बृटिश पार्लियामेण्टको भवनमा रहेको विशाल घडी (Big Bang) अगाडि लेखक १९७७।१२।३

गएर पूर्ण गरेको थिएँ। बृटिशसंसदमा हामीहरूलाई त्यहाँका सांसद र पदाधिकारीहरूले समेत स्वागत गरेका थिए।

त्यसपछि हामीहरू केही शिक्षणसंस्थाहरूका साथै ठूलो लण्डन काउन्सिल (GLC) मा पनि गएका थियौँ। त्यहाँका स्थानीय जनप्रतिनिधिहरूले हाम्रो आदरभाउ गरेका थिए। हामीहरूले बातचितका क्रममा बेलायतको स्थानीय सरकारको बारेमा विस्तृतरूपमा जानकारी लिएका थियौँ। बेलायतको स्थानीय सरकार अधिकार सम्पन्न रहेछ। त्यस स्थानीय सरकारका विभिन्न निकायहरूलाई काउन्सिल, काउण्टी, बोरो र पेरिसका रूपमा विभाजन गरिएको रहेछ। लण्डनको भ्रमणका क्रममा हामीहरू लण्डनको प्रसिद्ध चिडियाघर र प्लानेटोरियममा पनि गएका थियौँ। लण्डनको बृटिश लाइब्रेरीको पनि हामीहरूले अवलोकन गरेका थियौँ। उक्त लाइब्रेरी संसारका विशालतम पुस्तकालयहरूमध्ये एकमा पर्दोरहेछ। त्यहाँ संसारभरिकै अमूल्य ग्रन्थहरू, कागजपत्रहरू र अन्य सामग्रीहरूसमेतको सङ्ग्रह गरेर राखिएका रहेछन्। त्यो पुस्तकालय अत्यन्त विशाल भएको हुँदा हामीहरूले दिनभरिजसो घुम्दा पनि पुस्तकालयको सबै भाग हेर्न सकेका थिएनौँ।

नेपालमा प्रधानमन्त्री श्रीभीमसेन थापाको समयमा बेलायत सरकारको तर्फबाट राजदूत भएर काठमाडौँमा बसेका हड्सन भन्ने व्यक्तिले बेलायत लगेका धेरै महत्त्वपूर्ण ऐतिहासिक ग्रन्थ र सामग्रीहरू त्यस पुस्तकालयमा सुरक्षित छन् भन्ने मैले सुनेको थिएँ। नेपाल र बृटिशभारतका बीचमा भएको सन् १८७०/०७१ को युद्धका बेला पश्चिम नेपालका तत्कालीन युद्धमोर्चाका नायक जनरल श्रीअमरसिंह थापाले तत्कालीन नेपालका राजा श्री ५ गीर्वाणलाई लेखेको युद्धसम्बन्धी महत्त्वपूर्ण पत्र पनि त्यही पुस्तकालयमा सुरक्षित राखिएको रहेछ। त्यहीँबाट प्राप्त भएको उक्त चिट्ठीको प्रतिलिपिका आधारमा मैले अमरसिंहको चिट्ठी भन्ने खण्डकाव्य २०५३ सालमा तयार गरेको थिएँ। नेपालबाट त्यहाँ लगेर राखिएका ग्रन्थ र ऐतिहासिक सामग्रीहरूको अनुसन्धान गर्न हाल नेपालबाट गएर डा. रमेशकुमार ढुङ्गेल त्यहाँ काम गरिरहनु भएको छ।

अर्को दिन हामीहरू रिजेन्सीपार्कको भ्रमणपछि हाइटपार्कमा रहेको स्पिकर्स कर्नरमा पनि गएका थियौँ। त्यहाँ वक्ताहरू आफूलाई मनमा

लागेका कुराहरू बोलिरहेका थिए । त्यहाँ जसले जे सुकै कुरा बोले तापनि कानून नलाग्ने हुँदा अन्यत्र बोल्न नपाइने र बोल्न नसकिने कुराहरू त्यस ठाउँमा गएर बेलायतका मानिसहरू बोल्दा रहेछन् । हामीहरू दोस्रो दिन बी.बी.सी. रेडियो नेपाली सेवाको अवलोकन गर्न गएका थियौँ । त्यसपछि सोही दिन हामीहरू बेलायतको प्रसिद्ध टेम्सनदीको किनारामा रहेको ऐतिहासिक लन्डनटावरमा पनि गएका थियौँ । त्यहाँ रहेका ऐतिहासिक भवनहरूको सुरक्षा गोरखाली सैनिकहरूले गर्दा रहेछन् । हामीहरू टेम्सनदीमा जहाजमा चढेर घुमेका थियौँ ।

त्यसपछि हामीहरू लन्डनभ्रमणका सन्दर्भमा त्यहाँ बसेका नेपालीहरूलाई भेट्न पनि गएका थियौँ । सोही क्रममा त्यहाँ होटेल सञ्चालन गर्नुका साथै यतीनामक साहित्यिक पत्रिका प्रकाशन गरेर बसेका श्रीईश्वर मानन्धरले हामीहरूलाई आफ्नै होटेलमा बोलाएर स्वागतसत्कार गरेका थिए । मैले यती पत्रिकामा प्रकाशन गर्न बेलायतमा बस्ता मैले लेखेका 'वसन्त बेलायतमा' र 'मेरो सगरमाथा बेलायतबाट हेर्दा' भन्ने कविताहरू श्रीईश्वर मानन्धरलाई दिएको थिएँ । ती कविताहरू हाल मेरो 'सिर्जनाका फूलहरू' नामक कवितासङ्ग्रहमा प्रकाशित भइसकेका छन् । लन्डन भ्रमणकै क्रममा हामीहरूलाई नेपाली राजदूतावासले आमन्त्रण गरेर स्वागतसत्कार गरेको थियो । त्यस बेला त्यहाँ श्रीझरेन्द्र शम्शेर राणा राजदूत हुनुहुन्थ्यो । हामीहरूले लन्डन घुम्ने क्रममा त्यहाँका दर्शनीय स्थानहरू अक्सफोर्ड स्ट्रिट्, पिकाडिली सर्कस् र लन्डनको प्रसिद्ध भूमिगत ट्रेन (Tube) को पनि अवलोकन र यात्रासमेत गरेका थियौँ । प्रायः हामीहरू कहीँ पनि जानु र आउनु पर्दा त्यही भूमिगत ट्रेनबाटै आउने जाने गर्दथ्यौँ । लन्डनभ्रमणको अन्त्यमा हामीहरूले प्रसिद्ध लन्डन स्कूल अफ इकोनोमिक्स्को पनि भ्रमण गरेका थियौँ ।

उपर्युक्त अनुसार लन्डनको भ्रमण सिध्याएपछि म्यान्चेस्टर विश्वविद्यालयमा फर्किएर हामीहरूले विश्वविद्यालयमा पढेको सिद्धान्त र लन्डनको क्षेत्रीय भ्रमणका सन्दर्भमा गरेको अनुभवको आधारमा आफ्ना कार्यपत्रहरू तयार गरेर पेश गरेका थियौँ । त्यसपछि त्यहाँ क्रिस्मसको बिदा शुरुभएको थियो । बेलायतमा क्रिस्मस हाम्रो बडादशैँ जस्तै अत्यन्त

धूमधामका साथ मनाउने चलन रहेछ । त्यस बेला सरकारी कार्यालयहरू, स्थानीय संस्थाहरू र शिक्षण संस्थाहरूसमेत बिदा हुँदारहेछन् । हामीहरूले त्यस बिदालाई अत्यन्त रमाइलोका साथ सदुपयोग गरेका थियौँ ।

म बेलायत गएदेखि नै म्यान्चेस्टरका एक गृहस्थजोडी श्रीरन हेनेम र श्रीमती मार्जरी हेनेमहरूले आफ्ना घरमा सप्ताहान्तमा बोलाएर मलाई पाहुनाका रूपमा खाना खुवाउनेगर्दथे । उनीहरूले क्रिस्मसको समयमा पनि मलाई लगेर भव्य बेलायती खाना खुवाएका थिए । मलाई उनीहरूले आफ्नू चर्च पनि देखाएका थिए । उनीहरूका दुइटी छोरीहरू थिए र ती दुवैको विवाह भइसकेको थियो । श्रीमान् र श्रीमती दुई जनामात्रै आफ्ना घरमा बसेका थिए । दुवै जना शिक्षक र शिक्षिका भएका हुँदा उनीहरूको जीवन सुखमय देखिन्थ्यो । उनीहरू बृटिश परम्परा अनुसारको वरिपरि कम्पाउण्ड र बगैंचासमेत भएको सानू चिटिक्क परेको घरमा बसेका थिए । उनीहरू अत्यन्त फरासिला र रमाइला थिए । म परदेशमा भएको बेला उनीहरूले घरको सम्झना नै बिर्साउने गरी मलाई माया र स्नेह दिएका थिए । आफ्नै हातले खाना पकाएर अत्यन्त स्नेहका साथ मलाई खुवाउनेगर्दथे । उनीहरूको त्यो न्यानो मायालाई म कहिल्यै पनि बिर्सिन सक्तिन । म बेलायतबाट नेपाल फर्किएको केही समयपछि हवाइजहाज दुर्घटनामा परेर श्रीहेनेमको मृत्यु भएको र श्रीमती मार्जरी हेनेम्ले पनि यस संसारबाट हाल बिदा लिइसकिन् भन्ने सुन्दा मलाई अत्यन्त दुःख लागेको छ । उनीहरूको स्वर्गीय आत्माको चिर शान्तिका लागि म सधैँ भगवान्सँग प्रार्थना गर्दछु ।



कालो नेपाली टोपी लगाएका श्रीहेनेम र बीचमा उभिएकी श्रीमती मार्जरी हेनेमका साथ लेखक, सन् १९७७ डिसेम्बर १५, म्यानचेष्टर, बेलायत ।

क्रिस्मसको बिदा पछि फेरि विश्वविद्यालयको पढाइमा हामीहरू संलग्न भएका थियौँ । केही दिन पढिसकेपछि इस्टरको बिदा पनि शुरु भएको

थियो। सोही बिदाको मौका पारेर म इङ्ग्लिश च्यानल पानी जहाजद्वारा पार गरेर हल्यान्डको एउटा सुन्दर स्थानमा गएको थिएँ। केही समय त्यहाँ बिताएर फेरि म सोही पानीजहाजद्वारा बेलायत फर्किएको थिएँ। विश्वविद्यालयको दोस्रो सत्रको पढाइ मार्चको शुरुमा नै समाप्त भएको




शेक्सपियरको कुर्सीमा लेखक, १९७८।३।११




शेक्सपियरका नाटक घरको भित्री दृश्य।



शेक्सपियरको नाटकघरको बाहिरी दृश्य



शेक्सपियर जन्मिएको शय्यासहित कक्षको दृश्य



शेक्सपियरकी पत्नी Anne को घरको दृश्य



शेक्सपियरकी आमा Marry को घरको दृश्य

थियो । त्यसपछि हामीहरूले समय मिलाएर क्षेत्रीय भ्रमणका साथै अन्तिम परीक्षाको तयारी पनि गरेका थियौँ । क्षेत्रीय भ्रमणकै सन्दर्भमा हामीहरू अङ्ग्रेजी साहित्यका प्रसिद्ध नाटककार श्रीविलियम शेक्सपीयरको जन्म तथा कर्मथलो Stratford Upon Avon मा गएका थियौँ । त्यहाँ शेक्सपीयरको घर र उनी जन्मेको स्थानका साथै उनको नाटक खेल्ने नाटक घर, उनकी आमा (Mary Arden) र उनकी श्रीमती (Anne Hathaway) को घरको समेत हामीहरूले अवलोकन गरेका थियौँ । त्यहाँको भ्रमण समाप्त गरेर विश्वविद्यालयमा फर्केर हामीहरूले केही दिन लेख्ने र पढ्ने काम गरेका थियौँ ।

त्यसपछि हाम्रा विभागीय निर्देशक डेभिड विण्डरले हामीहरूलाई घुमाउन लेकडिस्ट्रिक्ट भन्ने प्रसिद्ध ठाउँमा लैजानुभएको थियो । सो स्थान सानासाना सुन्दर पहाडहरू र तलाउहरूसमेत भएको अत्यन्त रमणीय पहाडी भूभाग रहेछ । त्यो ठाउँ अङ्ग्रेजी साहित्यका प्रसिद्ध कवि विलियम वर्डस्वर्थको जन्मथलो रहेछ । हामीहरूलाई विभिन्न ठाउँमा घुमाउँदै अन्त्यमा कवि वर्डस्वर्थको निजी निवासमा समेत लगिएको थियो । त्यही ठाउँमा बसेर कविले 'लुसी ग्रे', सोलिटरी रिपियर आदि सुन्दर प्रकृतिसम्बन्धी कविताहरू लेख्नुभएको रहेछ । हामीहरू श्रीविलियम वर्डस्वर्थ जन्मेको र बसेको घरमा पनि गएका थियौँ । तिनका साथै उहाँ सुत्ने कोठामा समेत हामीहरू गएका थियौँ । कविले आफ्नू काव्यरचना गर्दा प्रयोग गरेका साधनहरू र उहाँले प्रयोग गरेका अरू विभिन्न प्रकारका सामानहरू पनि जस्ताको तस्तै सजाएर त्यहाँ राखिएका रहेछन् । त्यहाँ भ्रमण गर्ने साहित्यप्रेमी र अरू पर्यटकहरूले पनि कविको जन्म भएको स्थान र बसोवास गरेको ठाउँसमेत जस्ताको तस्तै अवलोकन गर्न पाउने गरी अत्यन्त सुव्यवस्थित गरेर राखिएका रहेछन् । त्यस ठाउँमा पुग्दा कवि विलियम वर्डस्वर्थ त्यतै कतै प्रकृतिको सुन्दर काखमा बसेर कविता लेखिरहनु भएको छ कि ? जस्तो मलाई लागेको थियो ।

त्यसरी लेकडिस्ट्रिक्टको भ्रमणको कार्यक्रम समाप्त गरेपछि हामीहरू म्यानचेस्टर फर्किएका थियौँ । त्यसपछि क्षेत्रीय भ्रमणको सन्दर्भमा फेरि हामीहरू स्कटल्यान्डतर्फ लागेका थियौँ । स्कटल्यान्ड जाने बाटो हाम्रो नेपालको

जस्तै पहाडी बाटो भएको हुँदा पहाडका अनकन्टार ठाउँहरूबाट टेढोमेढो हुँदै जाँदोरहेछ । त्यस बाटोमा गाडी चलाउँदा जतिसुकै तीव्र गतिमा हाँक्न खोजे



लेकडिस्ट्रिक्टको तलाउ छेउमा डेविड विण्डरका सानू छोराका साथ लेखक, १९७८ मे ७



लेकडिस्ट्रिक्टमा डेविड विण्डरका साथ लेखक, १९७८ मे ७

तापनि आफैं सीमित गतिमा गाडी चल्ने गरी नयाँ प्रविधि प्रयोग गरेर बनाएको त्यो बाटो रहेछ । त्यहाँ जाने क्रममा हामीहरू एडेन्बरा भन्ने सुन्दर पहाडी भूभागमा बनेको रमणीय शहरको एउटा होटेलमा गएर बसेका थियौं । त्यहाँबाट हामीहरू स्कट्ल्याण्ड राज्यको राजधानी ग्लास्गो भन्ने पुरानू शहरमा गएका थियौं । त्यहाँका प्राचीन ऐतिहासिक स्थानहरूका साथै हाल भग्नावशेष भएका पुराना औद्योगिक स्थानहरूको पनि हामीहरूले अवलोकन गरेका थियौं । त्यही सन्दर्भमा सर्वप्रथम रेलका इञ्जिनको आविष्कारक जेम्स्वाटको गृहनगर र उनको सुन्दर मूर्ति रहेको जेम्स्क्वायर भन्ने ठाउँमा पनि हामीहरू गएका थियौं । त्यहाँको भ्रमण समाप्त गरेर एडेन्बराका सुन्दर स्थलहरूको हामीहरूले भ्रमण गरेका थियौं । त्यो ठाउँ ऐतिहासिक दृष्टिकोणले अत्यन्त महत्त्वपूर्ण रहेछ । त्यसै क्रममा हामीहरू सुन्दर न्यू टाउन भन्ने नयाँ शहरमा पनि गएका थियौं ।



कवि वर्डस्वर्थको शयनकक्षमा लेखक, १९७८ मे ७

कवि वर्डस्वर्थको घरको बाहिरी दृश्य

त्यसरी स्कट्ल्यान्ड राज्यका विभिन्न ऐतिहासिक र औद्योगिक महत्त्वका स्थानहरूको समेत भ्रमण गर्दै पुरातात्त्विक र पर्यटकीय दृष्टिकोणले समुद्रका बीचमा रहेका महत्त्वपूर्ण टापुहरूको समेत भ्रमण समाप्त गरेर हामीहरू सन् १९७८ मे १८ तारिखका दिन म्यान्चेष्टर विश्वविद्यालयमा फर्केका थियौं ।

म्यान्चेष्टर विश्वविद्यालयमा फर्केर हामीहरूले हाम्रो अध्ययनको अन्तिम प्रतिवेदन बुझाएपछि हाम्रो परीक्षाको परिणाम प्रकाशित भएको थियो । त्यसमा मैले क्रेडिट पाएको थिएँ । हामीहरूलाई विश्वविद्यालयले भव्य बिदाइ


जेम्सवाटको मूर्ति अगाडि लेखक, सन् १९७८ मे १५


प्रिन्सेज स्ट्रिट गार्डेन अगाडी लेखक, सन् १९७८ मे १८


म्यानचेस्टरविश्वविद्यालयको मुख्य भवनको अगाडि लेखक,१९७८ मे १९

दिएको थियो । उक्त बिदाइसमारोहमा विश्वविद्यालयका हामीहरूलाई पढाउने प्राध्यापकहरूका साथै पदाधिकारीहरूको पनि उपस्थिति थियो ।

हामीहरू म्यान्चेस्टर विश्वविद्यालयमा अध्ययन गर्न बसेका बेला त्यहाँ इण्डियन कुजिन भन्ने रेष्टुराँ चलाएर बसेका नेपाली गोपाल डङ्गोल र उनका सहयोगीहरूले हामीहरूलाई एक वर्षसम्म अत्यन्त


बेलायतमा अध्ययन भ्रमणको समयमा रोमनसाम्राज्यले बेलायतमा बनाएको किल्लाको निरीक्षण गर्दै अरू विदेशी विद्यार्थीहरूका साथ लेखक

स्वागतसत्कार गरेका थिए । धेरै पटक उनीहरूले आफ्नू रेष्टुराँमा बोलाएर



The victoria University of Manchester को जनप्रशासन विभागले त्यहाँ अध्ययन गरेर सफल भएका हामी विद्यार्थीहरूको दीक्षान्तसमारोहपछि हाम्रा सम्मानमा दिइएको बिदाइ रात्रिभोजको समयमा लिइएको प्राध्यापकहरूसहितको संयुक्त तस्वीर, सन् १९७८ मे २४

हामीहरूलाई स्वादिष्ट परिकारहरू खुवाएका थिए । म तिनीहरूको न्यानो माया सधैँ सम्झिइरहन्छु ।

त्यसरी बेलायतको एक वर्षको अध्ययन समाप्त गरेर म नेपाल आउनका लागि म्यान्चेस्टरबाट ट्रेनद्वारा लन्डन गएको थिएँ । त्यहाँबाट सन् १९७८ जून ३० तारिखका दिन हिथ्रो अन्तर्राष्ट्रिय हवाइमैदानबाट साथीहरू शारदाप्रसाद दाहाल र चिरञ्जीवी पौडेलका साथ म नयाँदिल्ली तर्फ उडेको थिएँ । नयाँदिल्ली आइपुगेपछि त्यहाँबाट सन् १९७८ जून १ तारिख तदनुसार संवत् २०३५ साल असार १५ गतेका दिन हवाइजहाजद्वारा काठमाडौंको अन्तर्राष्ट्रिय त्रिभुवनविमानस्थलमा उत्रिएको थिएँ । त्यसरी मेरो बेलायतको अध्ययन पूर्ण भएको थियो । 



THE VICTORIA UNIVERSITY OF MANCHESTER

Sharad Kumar Bhattarai

Public Administration

बेलायतको The Victoria University of Manchester बाट लेखकलाई प्रदान गरिएको Certificate, १९७८ जुन २

# धनुषा जिल्लामा

एकवर्षको अध्ययन समाप्त गरेर म बेलायतबाट काठमाडौं फर्किएको थिएँ। म फर्कनु अघिनै मेरो सरुवा उदयपुर जिल्लाबाट धनुषा जिल्लाको प्रमुखजिल्ला अधिकारीमा भएको रहेछ। सो कुराको जानकारी म गृहसचिव श्रीशेरबहादुर शाहीलाई भेट्न उहाँको निवासस्थानमा जाँदा मलाई भएको थियो। मैले बेलायत जाने बेलामा गृहसचिव शाहीलाई भेटेर उदयपुर जिल्लाबाट सरुवा गर्दा दुर्गम क्षेत्र मुस्ताङ जिल्लामा सरुवा गरिदिन अनुरोध गरेर गएको थिएँ। तर गृहसचिवले मलाई मुस्ताङ जिल्लामा सरुवा गर्न खोज्दा तत्कालीन श्री ५ का प्रमुख निजी सचिव श्रीनारायणप्रसाद श्रेष्ठले उहाँका बहिने ज्वाईं श्रीमान् श्रेष्ठलाई मुस्ताङ जिल्लाको प्रमुखजिल्ला अधिकारीमा सरुवा गराउनु भएछ। मेरो सरुवा उदयपुर जिल्लाबाट जनकपुरमा भएको रहेछ। त्यस बेला दुर्गम जिल्लामा प्रमुखजिल्ला अधिकारी भएर जान पनि शक्तिशाली व्यक्तिहरूको शुभाशीर्वाद चाहिन्थ्यो।

म बेलायतबाट फर्किएपछि धनुषा जिल्लाको जिल्लाप्रशासन कार्यालयमा हाजिर हुन तुरुन्त नै गएको थिएँ। म असारको तेस्रो हप्तामा धनुषा जिल्लाको सदरमुकाम जनकपुरधाममा पुग्दा अत्यन्त गर्मी थियो। त्यस समयमा धनुषा जिल्लाका गाउँहरूमा बनीको कुरालाई लिएर जिल्लाभरि हडताल भएको थियो। धानको रोपाइँका बेलामा मजदुरहरूले हडताल गरिदिएका हुँदा किसानहरूलाई अत्यन्त समस्या परेको थियो। जिल्लाप्रशासन कार्यालयमा आएर किसानहरूले सहयोगको माग गरेका थिए। मैले किसानप्रतिनिधि र जनप्रतिनिधि–समेतलाई बोलाएर छलफल गराएर समस्या समाधान गर्नेतर्फ प्रयास गरेको थिएँ। वास्तवमा त्यो मजुरीको समस्या नभएर राजनीतिक समस्या थियो। त्यो समस्या सजिलैसँग मिलाउन सकिएको थिएन। गाउँगाउँमा किसान र मजदुरहरूका बीचमा सङ्घर्ष पनि हुनथालेको थियो। म सशस्त्र प्रहरीहरू साथमा लिएर गाउँगाउँमा पुगेर समस्या समाधान गर्न अत्यन्त क्रियाशील भएको थिएँ। जति गरे पनि

समस्या समाधान हुन सकेको थिएन ।

त्यस बेला जनकपुर अञ्चलका अञ्चलाधीश श्रीशङ्करराज पाठक हुनुहुन्थ्यो । उहाँ प्रशासनिक कामकारबाहीमा भन्दा पनि नचाहिँदो तर्कवितर्क गरेर समस्यालाई अरूको टाउकामा हालेर आफू सुरक्षित हुन अत्यन्त सिपालु हुनुहुन्थ्यो । भर्सक उहाँ समस्याहरूबाट जोगिएर आफ्नू जागिर जोगाउन चाहनुहुन्थ्यो ।

त्यसरी जिल्लामा चलिरहेको बनी समस्या अत्यन्त चर्कँदै गएको बेला म पेट दुःख्ने रोगबाट बिरामी भएको थिएँ । बेलायत जस्तो चिसो ठाउँबाट फर्किने बित्तिकै जनकपुर जस्तो अत्यन्त तातो ठाउँमा जानुपरेको हुँदा म बिरामी भएको थिएँ । स्थानीय अस्पतालमा देखाउँदा रोगको निदान हुन नसकेपछि म औषधोपचार गर्न काठमाडौं आएको थिएँ । वीरअस्पतालको क्याबिनमा एक महिनासम्म भर्ना भएर डा. मोहिन शाहलाई जँचाउँदा पनि मेरो रोग पत्ता लाग्न सकेको थिएन । रोगको टुङ्गो नै नलागीकन अस्पतालबाट म निस्किएको थिएँ । मेरो रोगभने घट्नुको साटो बढी नै रहेको थियो । नेपालमा रोगको निदान नै हुन नसकेको हुँदा औषधोपचार गर्ने कुरै थिएन । म औषधोपचारका लागि अलइण्डिया मेडिकल इन्स्टिच्यूट दिल्ली जान लागेको बेला मेरा छिमेकी श्रीडम्बर तिमल्सिनाले डा. सुन्दरमणि आचार्य दीक्षितलाई जँचाउने सल्लाह दिएका थिए । डा. दीक्षितले मलाई राम्रोसँग जाँचेपछि मेरो रोग कोलाइटिस भएको कुरा पत्ता लागेको थियो । उनको औषधीबाट मलाई सञ्चो भएको थियो ।

त्यसपछि म धनुषा जिल्लामा फर्किएर गएको थिएँ । धनुषा जिल्लामा धानको रोपाइँ गर्ने बेलामा देखिएको किसान र मजदुर बीचको समस्या मङ्सिर महिनामा धान काट्ने समयमा पनि फेरि देखापरेको थियो । त्यो समस्या धनुषा जिल्लाकै तारापट्टि सिर्सिया गाउँमा अत्यन्त उग्ररूपमा देखापरेको थियो । त्यहाँ कम्युनिष्टहरूले किसानहरूलाई भड्काइरहेका छन् र त्यहाँ कुनै पनि बेला अप्रिय घटना हुनसक्छ भनेर सुराकीको प्रतिवेदन आएको थियो । त्यसका अतिरिक्त स्थानीय र जिल्लाका पञ्चनेताहरूले पनि तारापट्टि सिर्सियामा उग्रवादीहरूको सङ्गठन बढ्दैगएकाले तुरुन्तै आवश्यक करबाही गर्नुपर्छ भनेर प्रशासनलाई बारम्बार दवाव दिइरहेका थिए । मैले

भर्सक बल प्रयोग गर्नु नपरोस् भनेर पञ्चनेताहरूको प्रतिनिधिमण्डल उक्त गाउँमा पठाएर सम्झौता गराउने प्रयास गरेको थिएँ । पञ्चनेताहरू तारापट्टि सिर्सिया गाउँमा सम्झाइबुझाइ गर्न जाँदा त्यहाँका उग्रवादीहरूले नेताहरूमाथि उल्टै जाइलागेपछि स्थिति झन् उग्र हुँदैगएको थियो । त्यसपछि कस्तो कारबाही गर्ने भन्ने सम्बन्धमा अञ्चलाधीश श्रीशङ्करराज पाठकलाई भेटेर अञ्चलसुरक्षासमितिको बैठक बोलाएर प्रशासनिक कारबाही गर्ने निर्णयसमेत मैले गराएको थिएँ । भर्सक प्रशासन र प्रहरीका तर्फबाट कुनै समस्या नआओस् भन्ने म चाहन्थेँ । अञ्चलाधीश पाठक पनि त्यही चाहनुहुन्थ्यो । ती उग्रवादी आतङ्ककारीहरूलाई पक्राउ गरेर ल्याउन लिखित आदेश दिएर उक्त समस्याग्रस्त गाउँ तारापट्टि सिर्सियामा हतियारसहितको प्रहरी टोली मैले पठाएको थिएँ ।अञ्चलाधीश पाठकले त्यस दिन बिहान पनि गोली नचलोस् र कुनै प्रकारको अप्रिय घटना हुन नपाओस् भनेर मलाई टेलिफोनबाट भन्नुभएको थियो । म पनि त्यस्तै चाहन्थेँ । खटिएको प्रहरीटोलीलाई पनि कम बल प्रयोग गर्न मैले निर्देशन दिएको थिएँ । प्रहरीलाई बिहानै खटाएर उक्त स्थानमा पठाएपछि कुनै अप्रिय घटना भइहाल्छ कि ? भन्ने आशङ्काले बिहानैदेखि म कार्यालय खोलेर बसेको थिएँ । म त्यसतर्फ अत्यन्त सशङ्कित नै थिएँ ।

दुर्भाग्यवश त्यसै दिन दिनको ४ बजेतिर एक जना बर्दीधारी प्रहरीले दौडिँदै मेरो कार्यालयभित्र पसेर तारापट्टि सिर्सियामा गोली चलेको कुरा मलाई सुनाएको थियो । शोचेभन्दा परिस्थिति भिन्नै भएकाले मैले तुरुन्तै अञ्चलाधीश पाठकलाई जलेश्वरमा टेलीफोन गरेर सबै कुरा बताइदिएको थिएँ । त्यसपछि एस्.पी. श्रीरणबहादुर चन्द र केही सशस्त्र प्रहरीहरू साथमा लिएर म घटनास्थल तारापट्टि सिर्सिया गएको थिएँ । म गाउँमा पुग्दा प्रहरीहरू गोली लागेर मरेको भोला साहुतेलीको लाशलाई लिएर त्यहाँबाट जनकपुरतिर हिँडिसकेका रहेछन् । घटनास्थलमा पुग्दा गाउँ सारा सुनसान भएको र गाउँमा भएकाले पनि केही बताउन नचाहेकाले घटना भएको स्थलमा सुरक्षाको व्यवस्था मिलाएर एस्.पी.लाई साथमा लिएर म जनकपुर फर्किएको थिएँ । सो घटनापछि जिल्लाको राजनीति तातेको थियो । त्यस कारबाहीबाट पञ्चनेताहरू खुशी भएका थिए ।

शुरुमा कारबाही गर्न जतिसुकै पछि हट्नु भएको भए तापनि त्यो घटना भइसकेपछि अञ्चलाधीश पाठक पनि अत्यन्त सक्रिय हुनुभएको थियो। त्यसै रातदेखि नै उग्रवादी वामपन्थी नेताहरूको गिरफ्तारी शुरु भएको थियो। श्रीमहावीर सिंह र अरू वामपन्थी नेताहरू पनि पक्राउ परेका थिए। पक्राउ गर्ने काम सामान्य प्रहरीबाटमात्र नहुने भएकोले एस्.पी. श्रीरणबहादुर चन्दलाई साथमा लिएर म आफैँ नै नेताहरू लुकेको ठाउँमा पुगेर पक्राउ गर्नेगर्दथेँ।

त्यसरी उक्त समस्याले क्रमशः उग्ररूप लिँदै गएको थियो। जिल्लामा र केन्द्रमा समेत तारापट्टि सिर्सियामा भएको गोलीकाण्डलाई लिएर पत्रिकाहरूमा अतिरञ्जनापूर्णतरिकाले प्रचार गरिएको थियो। त्यसका साथै पत्रकार, वकिल, शिक्षक, विद्यार्थी र मजदुरनेताहरूले पनि त्यसलाई बहाना बनाएर सरकारका विरुद्धमा र खास गरी जनकपुरका अञ्चलप्रशासक र धनुषा जिल्लाका प्रशासकका विरुद्धमा अभियान चलाएका थिए। बिस्तारै विरोध बढ्दै जाँदा अञ्चलाधीश पाठक विरोधको केन्द्रबिन्दु बन्न पुग्नुभएको थियो।

त्यसरी सरकारको विरोध भइरहेकै समयमा जनकपुरको कलबलगुढी पञ्चायतप्रशिक्षणकेन्द्रमा जनकपुर अञ्चलका अञ्चलस्तरीय गाउँफर्कका पदाधिकारीहरूको तीन दिने राजनीतिक भेलाको आयोजना भएको थियो। उक्त भेलामा भाग लिन तत्कालीन गृहमन्त्री श्रीखड्गबहादुर सिंह र गाउँफर्क राष्ट्रिय अभियानका केन्द्रीय अध्यक्ष श्रीकमलराज रेग्मी पनि त्यहाँ पुग्नुभएको थियो। उहाँहरू दुवै जनाले अञ्चलप्रशासक र जिल्लाप्रशासकका विरुद्धमा उग्र वामपन्थीहरूको कुरा सुनेर प्रशासकका विरुद्धमा जानुभएको थियो। गोलीकाण्डको आवश्यक छानविन गर्न उहाँहरू दुवै जना तारापट्टि सिर्सियामा जान तयार हुनुभएको थियो। त्यसरी तारापट्टि सिर्सियाको समस्याको आगोमा घिउ थप्ने काम उहाँहरूबाट हुने भएको देखेपछि प्रशासनले गरेको कामकारबाही ठीक भएको ठान्ने वरिष्ठ पञ्चनेताहरू गृहमन्त्री श्रीखड्गबहादुर सिंह र गाउँफर्कका केन्द्रीय अध्यक्ष श्रीकमलराज रेग्मीसमेतलाई घटनास्थलमा जान नदिन बाटो नै छेकेर बसेका थिए। त्यसप्रकारको सशक्त विरोध भएपछि उहाँहरू तारापट्टि सिर्सिया जान नसकेर त्यहीँबाट काठमाडौं फर्कनु

भएको थियो । वामपन्थी विचारधाराबाट प्रेरित र सञ्चालित पूर्वकम्युनिष्ट नेता श्रीकमलराज रेग्मी निर्दलीय पञ्चायती व्यवस्थाको उच्च राजनैतिक परिचालन गर्ने निकायको अध्यक्ष भएर बस्नुभएको भए तापनि आफ्नू पुरानू वामपन्थी रङ्ग र विचार बोकेर वामपन्थीहरूलाई प्रोत्साहन दिने काम त्यस बेला अधिराज्यभरि नै गर्दै हिँड्नुभएको थियो । प्रशासनले प्रशंसनीय काम गर्दागर्दै पनि वामपन्थीहरूको कुरा सुनेर केन्द्रमा गृहमन्त्रीसमेतलाई भ्रान्त गराएर प्रशासकको मनोबल गिराउने काम श्रीकमलराज रेग्मीबाट भएको थियो । श्रीकमलराज रेग्मीले एकातर्फ दरबारको विश्वासपात्र भएर फाइदा उठाउने, ठूला ठूला ओहोदाहरूमा बस्ने र राजसभाको सम्माननीय सदस्य पनि बन्ने तर जिल्लाहरूमा गएर कम्युनिष्टको प्रचार गर्ने काम उहाँले पछिसम्म पनि गर्नुभएको थियो । सो कुरा पाल्पा जिल्लाको प्रसङ्गमा पनि उल्लेख गरिनेछ ।

श्रीखड्गबहादुर सिंह र श्रीकमलराज रेग्मी जनकपुरबाट काठमाडौं फर्केपछि त्यसको प्रतिक्रियास्वरूप तारापट्टि सिर्सियाकाण्डको जाँच गर्न एक आयोग बनाएर पठाउने निर्णय तत्कालीन गृहमन्त्री श्रीखड्गबहादुर सिंहले गर्नु भएको कुरा थाहा पाएपछि मैले तुरुन्तै गृहसचिव श्रीशेरबहादुर शाहीलाई ट्रङ्कल गरेर त्यसप्रकारको आयोग जिल्लामा पठाउँदा प्रशासनलाई काम गर्न अप्ठेरो पर्ने र त्यसको सर्वत्र नराम्रो प्रभाव पर्नेसमेतको कुरा सम्झाएको थिएँ । त्यसपछि गृहसचिवले त्यो गठन भइसकेको आयोगलाई त्यस बेला जिल्लामा नपठाउने भनेर रोकिदिनु भएको थियो ।

बिस्तारै समय बित्तै गएको थियो । २०३५ सालको मङ्सिर महिनामा तारापट्टि सिर्सियामा घटेको घटनाको प्रभाव जिल्लामा सेलाउन नपाउँदै २०३५ सालको चैत्र महिनामा काठमाडौंमा शुरु भएको विद्यार्थी आन्दोलनको लहर अरू जिल्लाहरू सरह धनुषा जिल्लामा पनि पुगेको थियो । बिस्तारै विद्यार्थीहरूको आन्दोलन राजनीतिकरूपमा परिणत हुँदैगएर जनकपुर अञ्चलका धनुषा, महोत्तरी, सर्लाही, सिन्धुली लगायतका जिल्लाहरू उग्ररूपमा फैलिन पुगेको थियो । जनकपुर नगरभित्र ठूलाठूला जुलुसहरू निस्कन थालेका थिए । पञ्चायती व्यवस्थाको शुरुदेखि नै जुलुस, नारा, हड्ताल र विरोधसमेत कहिल्यै नदेखेको म जस्तो प्रशासकले ती सबै खाले विरोधहरू

एकै पटक देख्नु पर्दा र तिनीहरूसँग जुध्नु पर्दा मलाई अत्यन्त कठिनाइको अनुभव हुनगएको थियो। प्रहरीलाई सबैतिर एकैचोटि शान्तिसुरक्षाका लागि पठाउनु पर्दा प्रहरीबल अत्यन्त कम भएको थियो। थप सहयोगका लागि काठमाडौँबाट प्रहरीबल झिकाइएको थियो।

काठमाडौँबाट हवाइजहाज चार्टर गरेर डी.एस्.पी. श्रीप्रदीप बोहराको कमाण्डमा शसस्त्र प्रहरीको एक गुल्म जनकपुर पुगेको थियो। आन्दोलनकारीहरूले जनकपुर नगरमा आवतजावत गर्ने बाटाहरूमा मुढा र ढुङ्गाहरूसमेत राखेर यातायात पूरै बन्द गरिदिएका थिए। आन्दोलनकारीहरूले जनकपुर नगरबाट जलेश्वर र ढल्केबरतिर पनि आवतजावत गर्न नसकिने गरी ठाउँठाउँमा पूरै राजमार्गसमेत बन्द गरिदिएका थिए। दिनदिनै जनकपुर नगरभरि जुलुसहरू निस्किइ रहन्थे। जुलुसले बिस्तारै उग्ररूप लिँदै गएको थियो। जुन सुकै समयमा जहाँ पनि प्रशासन र प्रहरीमाथि आन्दोलनकारीहरूबाट आक्रमण हुनसक्ने भयावह स्थिति पैदा भएको थियो। सरकारी र सार्वजनिक सम्पत्ति, प्रहरीको ज्यान र हतियारको समेत सुरक्षाका लागि भीडनियन्त्रण गर्न आवश्यक परे बलसमेत प्रयोग गर्ने भनी प्रहरीलाई जिल्लाप्रशासनले लिखित आदेश दिनुपरेको थियो।

त्यस आन्दोलनले धनुषाजिल्ला बाहेक जनकपुर अञ्चलभरि नै उग्ररूप लिँदैगएको थियो। त्यस आन्दोलनलाई कसरी नियन्त्रण गर्ने भन्ने सम्बन्धमा छलफल गर्न एस्.पी. श्रीरणबहादुर चन्दको कार्यकक्षमा अञ्चलाधीश, एस्.पी., धनुषाका प्रमुखजिल्ला अधिकारी, महोत्तरीका प्रमुखजिल्ला अधिकारी र सुरक्षासँग सम्बन्धित अन्य अधिकारीहरूको बैठक नियमितरूपमा बस्नेगर्दथ्यो। हामीहरू नियमितरूपमा सधैँ बैठक बसेर शान्तिसुरक्षा कायम गर्न जो गर्नु पर्ने आवश्यक निर्णय, सरसल्लाह र कारबाहीसमेत गर्ने गराउने गर्दथ्यौँ।

त्यसै क्रममा जेठको दोस्रो हप्ताको एक दिन अपराह्न ४ बजे धनुषा, महोत्तरी र सर्लाहीमा समेत एकैचोटि ठूलो आन्दोलन फैलिएको र प्रहरीमाथि नै हमला हुन थालेको भन्ने खबर आएपछि हामीहरूले थप प्रहरी पठाउन आदेश दिएका थियौँ। डी.एस्.पी. श्रीप्रदीप बोहराको नेतृत्त्वमा एक ट्रक प्रहरीलाई सर्लाहीतर्फ पठाइएको थियो। प्रहरीको थप माग भएर आएका अरू ठाउँहरूमा पनि विभिन्न प्रहरी अधिकृतहरूको कमाण्डमा प्रहरी टोलीहरू

पठाइएका थिए । काठमाडौंबाट धनुषामा मद्दतका लागि गएका प्रहरीबलका १ जना प्रहरीनिरीक्षक श्रीसाम्राज्यबहादुर पाण्डे बेरामी भएर हामीहरूसँगै नियन्त्रण कक्षमा नै बसेका थिए। आन्दोलन भएका ठाउँहरूमा उनी प्रहरीको थप मद्दत लिएर जान चाहन्थे। तर उनी बेरामी भएका हुँदा पठाइएको थिएन। बेलुकाको समयमा हावाहुरी चलेर बिजुली बत्ती निभेर हामीहरू बस्ने एस्.पी.को कार्यकक्ष अँध्यारो भएको थियो। चारैतिर अँध्यारो भएको हुँदा केही देखिँदैनथ्यो। त्यसै समयमा हामीहरू बसेको कार्यकक्ष बाहिर पटका पड्के जस्तो आवाज सुनिएको थियो। आन्दोलनकारीहरूले अँध्याराको मौका छोपेर गोली पनि हानेको हुन सक्ने शङ्का गरेर मैले मसँगै बसिरहेका अञ्चलाधीश पाठकलाई झ्यालको सोझै नबसेर भित्ताको आड लागेर बस्न सल्लाह दिएको थिएँ। बाहिरबाट गोली चल्न थाल्यो भने जमीनमा सुत्नु अथवा भित्ताको आड लिएर बस्नु भन्ने सैनिकतालीम लिँदाखेरि मैले सिकेको थिएँ। मैले त्यही तालीमको आधारमा अञ्चलाधीशलाई त्यस्तो सल्लाह दिएको थिएँ। वास्तवमा प्रहरीनिरीक्षक श्रीसाम्राज्यबहादुर पाण्डेले हामीहरू बसेको कोठाबाट बाहिर निस्किएर आफूले भिरेको पेस्तोल झिकेर आफ्नै कन्चटमा गोली प्रहार गरेर आत्महत्या गरेका रहेछन्। हामीहरूले त्यसैको आवाज सुनेका रहेछौं।

त्यसरी निज प्रहरीनिरीक्षक पाण्डे आफैंले गोली प्रहार गरेर लडिसकेपछि पनि अँध्यारो भएको हुँदा हामीहरूले थाहा पाएका थिएनौं। त्यसै बेला एस्.पी. श्रीरणबहादुर चन्द आत्तिँदै भित्र पसेर प्रहरीनिरीक्षक पाण्डेले आफैंले आफैंलाई गोली हानेर आत्महत्या गरेको कुरा हामीहरूलाई सुनाएका थिए। तुरुन्तै टर्च लाइटको सहाराले बाहिर निस्किएर प्रहरीनिरीक्षकले आत्माहत्या गरेको ठाउँमा हामीहरू पुगेका थियौं। पाण्डे लडिसकेका थिए। उनको दायाँ कन्चटबाट रगत बगिरहेको थियो। उनको दाहिने हातमा उनले पड्काएको पेस्तोल थियो। हतार हतार पाण्डेलाई ट्रकमा राखेर हामीहरूले जनकपुर अञ्चल अस्पतालमा पुऱ्याएका थियौं। डाक्टरले पाण्डेको शरीरलाई जाँचेपछि मृत घोषित गरिदिएका थिए। जनकपुर अञ्चलभरि उग्र आन्दोलन चलिरहेको अवस्थामा प्रशासनलाई सहयोग गर्न काठमाडौंबाट जनकपुर आएको प्रहरीनिरीक्षकले अचानक त्यसरी आत्महत्या

गरेर मरेपछि हामीहरूलाई अप्ठेरो परेको थियो । त्यो कुरा बाहिर प्रचार हुँदा आन्दोलनकारीहरूलाई प्रोत्साहन हुने र आन्दोलनकारीहरूसँग लडिरहेका प्रहरीहरूको मनोबलसमेतमा प्रभाव पर्ने हुँदा सो कुरा गोप्य राखेर गृहमन्त्रालयमा जाहेर गरेर भोलिपल्टै लाशलाई हवाइजहाजद्वारा हामीहरूले काठमाडौँ पठाएका थियौँ ।

उक्त अप्रिय घटनापछि पनि अशान्ति मच्चाउने तत्त्वसँग दृढताका साथ हामी लडिरहेकै थियौँ । कार्यालयबाट निस्किएर बाहिर कतै पनि हिँड्न सक्ने अवस्था थिएन । त्यस प्रकारको आन्दोलन काठमाडौँ उपत्यका, हेटौँडा, चितवन लगायतका धेरै ठाउँहरूमा चलिरहेको थियो ।

उक्त आन्दोलनकै क्रममा जनकपुरधामको आर्.आर्. क्याम्पसमा एक दिन आन्दोलनकारी विद्यार्थीहरू र स्वतन्त्र विद्यार्थी मण्डलका विद्यार्थीहरूका बीचमा भयङ्कर झगडा भएको थियो । सरकारले पालेका मण्डलेहरूले आन्दोलनकारी विद्यार्थीमाथि खुकुरी नै चलाएछन् । त्यो खबर सुनेपछि म एस्.पी.लाई साथमा लिएर आर्.आर्. क्याम्पसमा पुगेको थिएँ । क्याम्पसमा पुग्दा त्यहाँभित्र युद्धमैदानजस्तो बीभत्सरूप मैले देखेको थिएँ । खुकुरीको प्रहारमा परेका विद्यार्थीहरू यत्रतत्र लडेका थिए । हामीहरू त्यहाँ पुगेपछि खुकुरी प्रहार गर्ने सबै मण्डले विद्यार्थीहरूलाई आफ्नू नियन्त्रणमा हामीले लिएका थियौँ । त्यसपछि घाइते विद्यार्थीहरूलाई आफ्नै गाडीमा राखेर जनकपुर अञ्चल अस्पतालमा पुऱ्याएर मैले उपचारको व्यवस्था मिलाएको थिएँ । जिल्लाका अरू ठाउँहरूबाट पनि घाइते र मरेका लाशहरू अस्पतालमा ल्याउने क्रम जारी थियो । त्यस समयमा सम्पूर्ण जनकपुर क्षेत्र युद्धमैदानजस्तो भएको थियो ।

त्यसरी अत्यन्त तनाव र अशान्तिको बीचमा काम गरिरहनु परेको अवस्थामा तारापट्टि सिर्सियामा भएको गोलीकाण्डको जाँच गर्न गृहमन्त्री श्रीखड्गबहादुर सिंहले गठन गरेको आयोग अचानक जनकपुरमा पुगेको थियो । पहिले तत्कालीन गृहसचिव श्रीशेरबहादुर शाहीले रोकेर राखेको तथाकथित आयोग उहाँ गृहमन्त्रालयको सचिवबाट हटेपछि जिल्लामा गएको थियो । जिल्लामा भयङ्कर आन्दोलन चलिरहेको हुँदा सो आयोगले छानविन गर्नका लागि तारापट्टि सिर्सियामा जान आँट गर्न सकेको थिएन । मेरै

विरुद्धमा छानविन गर्न गएको आयोगलाई मैले नै गाडी र आवश्यक सुरक्षाको व्यवस्था मिलाएर आयोगका अध्यक्ष र सदस्यहरूलाई तारापट्टि सिर्सिया पठाइदिएको थिएँ । छानविन गर्न गएको आयोगमाथि नै तारापट्टि सिर्सियाका आन्दोलनकारीहरूले आक्रमण गरेका थिए । सो आयोग छानविन गर्न नसकी तारापट्टिबाट जनकपुर फर्केको थियो । त्यस आयोगले प्रशासनले तारापट्टिमा गरेको कारबाही उपयुक्त भएको प्रमाणित गर्नुका साथै प्रशासनको पूर्ण समर्थन र प्रशंसासमेत गरेर आयोग काठमाडौं फर्केएको थियो । सो आयोगका अध्यक्ष पाँचथर जिल्ला पञ्चायतका तत्कालीन जिल्लासभापति श्रीऐन्द्रविक्रम थामसुहाङ हुनुहुन्थ्यो ।

अर्कोतिर देशको राजधानी काठमाडौं लगायत अधिराज्यका विभिन्न जिल्लाहरूमा आन्दोलन चलिरहेकै बेला तत्कालीन अञ्चलाधीश श्रीशङ्करराज पाठक खोसुवामा पर्नु भएको थियो । जनकपुर अञ्चलाधीशमा श्रीधर्मबहादुर थापा नयाँ नियुक्त भएर जानुभएको थियो । त्यस बेलाका प्रधानमन्त्री श्रीकीर्तिनिधि विष्टसँगको पारिवारिक वैमनस्यका कारण तारापट्टि सिर्सियामा घटेको घटनालाई निहुँ बनाएर पाठकको जागिर खोसिएको हुनसक्ने अड्कल गरिएको थियो । आन्दोलनको बीचमा नै पुराना अञ्चलाधीश हटेर श्रीधर्मबहादुर थापा नयाँ अञ्चलाधीश भएर जानु भएको हुँदा हामीहरूलाई काम गर्न अप्ठ्यारो परेको थियो । श्रीधर्मबहादुर थापा पनि पुरानू अञ्चलाधीश पाठकजस्तै कुनै पनि खतरा नउठाउने र अरूबाटै काम गराएर आफू जोगिन खोज्ने खालका मान्छे हुनुहुन्थ्यो ।

त्यसै बेला जेठको अन्त्यतिर श्री ५ वीरेन्द्रले जनमतसङ्ग्रह गर्ने घोषणा गरेपछि अधिराज्यभरि नै आन्दोलन थामिएको थियो । आन्दोलनका बेलामा मुद्दा चलेका र थुनामा परेका सबैलाई आममाफी भएपछि जिल्लामा उच्छृङ्खलता बढेको थियो । नाराजुलुस र घेराउ आदि उच्छृङ्खलकार्यहरू जिल्लामा सामान्य दिनचर्याका कामसरह भइसकेका थिए । त्यसै बीचमा आन्दोलनका समयमा भएका प्रशासनिक ज्यादतीको जाँचबुझ गर्न केन्द्रमा उच्चस्तरीय शाही आयोगको गठन भइसकेको थियो । छानविन गर्ने क्रममा सो आयोग जनकपुरमा पनि गएको थियो । जिल्लामा उच्छृङ्खल तत्त्वहरू झन् प्रोत्साहित भएका थिए । आयोगले प्रशासन र प्रहरीमा काम गर्ने मुख्य मुख्य व्यक्तिहरूलाई

खुला इजलास तयार गरेर बयान गराएको थियो। त्यसरी खुलारूपमा प्रशासनको विरुद्धमा छानविन गरिएको भए तापनि कोही कसैले पनि खास उजुरी भने गरेका थिएनन्। धेरै दिन लगाएर आयोगले छानविन गरेको थियो। आयोगले भर्सक प्रशासकहरूको कमीकमजोरी पत्ता लगाउन हुनेसम्म प्रयास गरेको थियो। प्रशासकका विरुद्धमा बोल्न र उजुरी गर्न आयोगले पीडित पक्ष र जनसाधारणलाई समेत प्रोत्साहन दिएको थियो। त्यति गर्दागर्दै पनि प्रशासक खास गरेर प्रमुखजिल्ला अधिकारीका विरुद्धमा जिल्लावासी कसैको पनि कुनै प्रकारको गुनासो नभएपछि आयोगका व्यक्तिहरू सारै प्रभावित भएका थिए। आयोगले जनकपुरधामबाट प्रस्थान गर्ने बेलामा मलाई धन्यवाद दिनुका साथै मेरो इच्छा पनि सोधेको थियो। मैले आफ्नू कुनै ठूलो इच्छा प्रकट नगरेर केवल धनुषा जिल्लाबाट केन्द्रमा सरुवाका लागि सिफारिस गरिदिन आग्रह गरेको थिएँ। शाही आयोगका अध्यक्ष सर्वोच्च अदालतका न्यायाधीश श्रीईश्वरीप्रसाद मिश्र हुनुहुन्थ्यो भने सदस्यमा श्रीसुरेन्द्रबहादुर बस्नेत हुनुहुन्थ्यो। सहयोगी न्यायाधीशहरूमा श्रीदीपेन्द्र शर्मा र श्रीजीतबहादुर कार्कीसमेत हुनुहुन्थ्यो।

त्यसरी प्रशासन र प्रहरीको हुर्मत लिएर शाही आयोग काठमाडौं फर्केपछि जिल्लामा बसेर काम गर्न अत्यन्त गाह्रो भएको थियो। अर्कोतर्फ सुधारिएको पञ्चायती व्यवस्था वा बहुदलमध्ये कुनचाहिँ रोज्ने भन्ने सम्बन्धमा जनमतसङ्ग्रह गर्नका लागि शाही घोषाणा भएपछि बहुदल पक्षका नेताहरू, पत्रकारहरू र वकिलहरूसमेतले चारैतिरबाट जिल्लामा प्रवेश गरेका थिए। तिनका अतिरिक्त कहिले पनि अनुहार नदेखिएका डरलाग्दा बाहिरतिरका मानिसहरूको भीड पनि दिनदिनै जनकपुर नगरमा र बाह्रबिगाहामा समेत देखिन थालेको थियो। शान्तिसुरक्षा कायम गर्न प्रशासन र प्रहरीलाई अत्यन्त मुश्किल परेको थियो। प्रशासन र प्रहरीको उत्साह र हिम्मतसमेत समाप्त हुँदैगएको बेला अर्कोतर्फ बहुदलवादीहरूको उत्साह र हिम्मत भने अत्यन्त बढेको कारण जिल्लामा सन्तुलन कायम गर्न प्रशासनलाई साह्रै मुश्किल परेको थियो।

त्यसै मौकामा बहुदलवादी नेता श्रीमनमोहन अधिकारी जनकपुर धामको बाह्रबिगाहा मैदानमा भाषण गर्न पुग्नुभएको थियो। बहुदलवादी

नेताहरूको त्यो पहिलो सभा भएको हुँदा वामपन्थी नेता र कार्यकर्ता लगायतका धेरै मानिसहरू नेताको भाषण सुन्न बाह्रबिगाहामा जम्मा भएका थिए। अधिकारीको अत्यन्त उत्तेजक र आपत्तिजनक भाषणका कारण जनता अत्यन्त उत्तेजित भएका थिए। उक्त उत्तेजित भीडलाई शान्त गराएर नगरबाट बाहिर पठाउन प्रशासन र प्रहरीलाई अत्यन्त मुश्किल परेको थियो। स्थानीय रामा होटेलमा श्रीमनमोहन अधिकारी बस्नु भएको थियो। एकातर्फ उहाँलाई घेरेर उहाँका समर्थकहरू होटेलमा बसेका थिए भने अर्कातर्फ एउटा ठूलो जनसमूह जनकपुर नगरभरि नै फैलिएको थियो। दिउँसो जम्मा भएको उक्त भीड अबेर रातीसम्म पनि जनकपुर नगरभित्र बसी नै रहेको थियो। त्यस भीडबाट कुनै अप्रिय घटना नहओस् भनेर हामी सुरक्षासँग सम्बन्धित सबै अधिकारीहरू एस्.पी.कार्यालयमा नियन्त्रण कक्ष बनाएर बसेका थियौँ। जसमा अञ्चलाधीश, एस्.पी., डी.एस्.पी. अञ्चलका सरकारी वकिल लगायतका सम्बन्धित हामीहरू अबेर रातसम्म शान्तिसुरक्षाको स्थितिको मूल्याङ्कन गर्दै बसिरहेका थियौँ।

दिउँसोको सभामा श्रीमनमोहन अधिकारीले तत्कालीन प्रचलित कानूनको विपरीत आपत्तिजनक कुरा बोलेर जनतामा उत्तेजना फैलाएका हुँदा अधिकारीलाई प्रचलित कानून अनुसार राजकाजविरुद्ध सम्बन्धी मुद्दा चलाउने भनेर अञ्चल सुरक्षासमितिले त्यहीँ तत्कालै निर्णय गरेको थियो। त्यसका लागि उहाँले गरेको भाषणको टेपसहितका आवश्यक सबुद प्रमाणहरू हामीहरूले सङ्कलन गरिसकेका थियौँ। राजकाजबिरुद्धको मुद्दा अञ्चलाधीशले बयान लिएर चलाउनुपर्ने कानूनी प्रावधान थियो। तर अञ्चलाधीश श्रीधर्मबहादुर थापा अत्यन्त छट्टु र काँतर खालका व्यक्ति भएका हुनाले आफूले सो काम नगरी बयान लिने लगायतका सम्पूर्ण कामकारबाही प्रमुखजिल्ला अधिकारीले गर्ने भनी मेरो टाउकामा हालेर राती नै उहाँ जलेश्वर फर्किनुभएको थियो। अधिकारीको भाषण सुन्न दिनमा जम्मा भएका वामपन्थी कार्यकर्ताहरू आ–आफ्ना गन्तव्यतर्फ लागिसकेपछि राती १० बजेतिर अधिकारीलाई प्रहरीले रामा होटेलबाट जिल्ला प्रशासनकार्यालयमा ल्याएको थियो।

त्यसपछि नियन्त्रणकक्षबाट प्रहरीनिरीक्षक श्रीमदनविक्रम शाह र

अञ्चलका सरकारी वकिल श्रीकृष्णप्रसाद शर्मालाई साथमा लिएर अधिकारीको बयान गराउन म आफ्नू कार्यालयमा गएको थिएँ। राती १०.३० बजेतिर म कार्यालयमा पुग्दा अधिकारीजी मेरो कार्यालयमा बसिरहनुभएको थियो। म पुग्ने बित्तिकै अधिकारीले सामान्य कर्मचारीले जस्तै जुरुक्क उठेर म माथि आदरभाव प्रदर्शन गर्नुभएको थियो। उहाँको त्यो शालीन तथा सरल व्यवहारबाट म अत्यन्त प्रभावित भएको थिएँ। मैले अधिकारीको नाममात्र सुनेको थिएँ तर प्रत्यक्षरूपमा मैले उहाँलाई भेटेको थिइन। उहाँको विगत सुन्दा झक्की, खरांट र उद्दण्ड स्वभावका अरू वामपन्थी नेताहरू जस्तै अधिकारी पनि हुनुहोला भन्ने मैले सम्झेको थिएँ। बयान गराउँदा पहिले निकै मुश्किल पर्लाजस्तो मलाई लागेको थियो। तर बयान गराउन दलबलसहित कार्यालयमा पुग्दा त्यस्तो सरल तथा अनुशासित क्रान्तिकारी अधिकारीलाई देखेर मलाई सुखद आश्चर्य लागेको थियो। मैले उहाँको बयान सजिलैसँग लिएको थिएँ। मैले सोधेका सबै कुरामा उहाँको स्वीकारोक्ति रहेको थियो र त्यस बेलाको प्रचलित कानून बमोजिम दण्डसजाय सहन उहाँ राजीसमेत हुनु भएको थियो। त्यसरी उहाँको विनाअडानको स्वीकारोक्तिबाट के थाहा भयो भने अधिकारी प्रायः गरेर आमसभामा धेरै मानिसहरूको उपस्थिति देखेपछि उत्तेजित भएर जे पनि बोल्नु हुँदो रहेछ, तर पछि कारबाही हुने देखेपछि गल्ती भयो भनेर आफूले भनेको कुराबाट पछि हट्ने उहाँको बानी रहेछ। उहाँले अरू ठाउँमा पनि त्यसै गर्नुभएको रहेछ। उहाँमा एक किसिमको मासम्यानिया (Mass Mania) नै रहेछ। मैले उहाँलाई बयान गराइसकेपछि एक रात प्रहरीहिरासतमा राखेर अर्को दिन अञ्चलाधीशकार्यालय जलेश्वरमा पठाइदिएको थिएँ। अञ्चलाधीशले पनि उहाँको बयान गराएर तारिखमा छोडिदिनु भएको थियो।

त्यसपछि पनि जनकपुरमा बहुदलवादीहरूको आमसभा, जुलुस र हड्ताल अनवरत चली नै रहेको थियो। म २ वर्ष त्यस धनुषा जिल्लामा प्रमुखजिल्ला अधिकारी भएर बस्ता मैले कुनै दिन पनि आरामसँग बस्न पाएको थिइन। त्यो जिल्ला नेता, डाका, तस्कर र भारतीय २ नम्बरका व्यक्तिहरूको केन्द्र नै भएकोले सधैँ समस्याहरू परी नै रहन्थे। मैले त्यस

जिल्लामा बसेर अत्यन्त दुःख पाएको थिएँ । म त्यस जिल्लाबाट चाँडै सरुवा हुन चाहन्थेँ । धनुषा जिल्लाका सबै गाउँहरूमा अत्यन्त उत्तेजक नेताहरू बसेका हुँदा जनकपुर नगरजस्तै अरू गाउँहरू पनि समस्याग्रस्त नै थिए । जनकपुरधाम जिल्लाको सदरमुकाम र जानकी मन्दिर लगायतका थुप्रै मन्दिरहरू भएको कारण पनि आउने जाने मानिसहरूको त्यहाँ सधैँ नै भीड भइरहन्थ्यो । वास्तविक समस्या र बनावटी समस्या समेत लिएर रातदिनै जिल्लाप्रशासनकार्यालयलाई मानिसहरूले घेरिरहन्थे । झन् २०३६ सालको अन्त्यमा भएको आन्दोलन र त्यसपछि भएको जनमत सङ्ग्रहको घोषणाले ता झन् जनकपुर जिल्ला तातेर जुरुक्कै उठेको थियो ।

त्यस्तो उग्र जिल्लाबाट जतिसक्यो चाँडो म सरुवा हुन चाहन्थेँ । सरुवाको प्रतीक्षा गर्दागर्दै दशैँ र तिहारका चाडपर्वहरू पनि आएका थिए ।



मातापिताका साथ लिइएको सामूहिक तस्वीर, इनरुवा, सुनसरी, २०३६ साल विजयादशमी

म विजयादशमीका दिन बिहानै जनकपुरधामबाट मातापिताका हातको विजया दशमीको टीकाप्रसाद लिन सुनसरी जिल्लाको सदरमुकाममा रहेको इनरुवाको घरमा परिवारसहित गएको थिएँ । टीका लगाएर हामीहरू उसै दिन जनकपुर फर्किएका थियौँ । त्यस वर्षको तिहारमा भाइटीका लगाइदिन दिदी रमा पोखरेल जनकपुर आउनुभएको थियो ।

त्यसरी दशैं र तिहार समाप्त भएपछि गृहमन्त्रालयले क्रमशः प्रशासन र प्रहरीमा समेत सरुवा गरेको थियो। त्यस बेला मेरो सरुवा गृहमन्त्रालयबाट अतिरिक्त समूह सामान्य प्रशासन मन्त्रालयमा भएको थियो। म २०३६ साल मङ्सिरको पहिलो हप्तामा जनकपुरबाट बिदा भएर काठमाडौं आएको थिएँ। मेरो ठाउँमा धनुषा जिल्लाको प्रमुखजिल्ला अधिकारी भएर श्रीरामहरि भट्टराई जानुभएको थियो। म धनुषा जिल्लामा प्रमुखजिल्ला अधिकारी भएर बसेको बेला त्यस जिल्लामा धेरै थरी पञ्चायती नेताहरू हुनुहुन्थ्यो। ती नेताहरूमध्ये तत्कालीन कृषिमन्त्री श्रीहेमबहादुर मल्ल अत्यन्त अहम् भएका दलाहा व्यक्ति हुनुहुन्थ्यो। पूर्वमन्त्री श्रीमकेश्वर सिंह जातीयभावना भएका रजपूतस्वभावका नेता हुनुहुन्थ्यो। पूर्वमन्त्री श्रीभोलानाथ झा सहयोगी र मिलनसार नेता हुनुहुन्थ्यो भने तत्कालीन धनुषा जिल्ला पञ्चायतका सभापति श्रीबद्रीबहादुर कार्की पनि सरल र असल मान्छे हुनुहुन्थ्यो। गाउँफर्क राष्ट्रिय अभियान जिल्लासमितिका अध्यक्ष श्रीदेवनारायण यादवभने स्वार्थी र धूर्त किसिमका व्यक्ति हुनुहुन्थ्यो। जनकपुर नगरपालिकाका तत्कालीन प्रधानपञ्च श्रीदामोदर उपाध्याय चाहिँ समय हेरेर रङ्ग बदल्न जान्ने अत्यन्त बाठो नेता हुनुहुन्थ्यो।

त्यसरी धनुषा जिल्लामा करिब दुई वर्ष प्रमुख जिल्ला अधिकारी भएर काम गरेपछि मेरो सरुवा सामान्य प्रशासन मन्त्रालयको अतिरिक्त समूहमा भएको थियो। मलाई बिदा गर्न जिल्लाका राष्ट्रसेवक कर्मचारीहरू र



धनुषा जिल्लाबाट बिदा हुँदाका समयको सामूहिक तस्वीर, २०३६ मङ्सिर

पञ्चनेताहरूको समेत ठूलो भीड लागेको थियो । मैले त्यस जिल्लामा प्रमुख जिल्ला अधिकारी भएर काम गर्दा कानून बमोजिमका प्रिय र अप्रिय दुबैखालका कामहरू गरेको थिएँ । त्यसबाट मलाई व्यक्तिगतरूपमा कुनै पश्चात्ताप वा आत्मगौरवको अनुभूतिभने भएको थिएन । किन भने मैले ती कामहरू गर्दा आफ्नू अहम्बाट माथि उठेर गरेको थिएँ । ती कामहरूबाट म सर्वथा असम्पृक्त थिएँ । त्यसैकारण मलाई ती कामहरूबाट कुनै खालको सुख वा दुःखको अनुभूति हुन गएको थिएन । जनकपुरधाम राजर्षिजनकको साधनास्थली र माता जानकीको जन्मस्थान भएको हुँदा पनि त्यसप्रकारको अनासक्तभावनाको संस्कार मेरो अन्तःकरणमा त्यस बेला उत्पन्न भएको थियो होला भन्ने मैले सम्झेको छु ।





ठूली छोरी सरिताको २०२५ सालमा काठमाडौंमा लिइएको तस्वीर

# अतिरिक्त समूहमा

जिल्लाप्रशासनकार्यालय धनुषाबाट मेरो सरुवा सामान्यप्रशासन मन्त्रालयको अतिरिक्त समूहमा भएको थियो। धनुषा जिल्लामा जनआन्दोलनका समयमा भएको ज्यादतीको छानविन गर्न गएको अधिकारसम्पन्न शाही आयोगले मैले गरेको कामबाट प्रभावित भएर मलाई पुरस्कारको समेत सिफारिस गरेको थियो भन्ने मैले सुनेको थिएँ। तर त्यसको प्रतिकूल मलाई अतिरिक्त समूहमा पठाएको देख्ता म छक्क परेको थिएँ। तत्कालीन गृहमन्त्री श्रीजोगमेहर श्रेष्ठ अत्यन्त साम्प्रदायिक र विवेकहीन व्यक्ति हुनुहुन्थ्यो। त्यस बेलाका गृहमन्त्रालयका सचिव श्रीकर्णध्वज अधिकारी गृहमन्त्रालयको प्रशासनिक अनुभव नभएका शक्तिका पूजारी एकजना प्राविधिक व्यक्ति हुनुहुन्थ्यो। ती दुवैजना हृदयशून्य र विवेकहीन व्यक्तिहरूबाट मानवीय संवेदनाको आशा गर्नु व्यर्थ हुने ठानेर मैले सन्तोष लिएको थिएँ। केही महिनासम्म आनन्दसँग म अतिरिक्त समूहमा हाजिर भएर बसेको थिएँ।





जानकीमन्दिर, जनकपुरधाम, २०३६ साल मङ्सिर

# गृहमन्त्रालयमा
## (राप्तीअञ्चलाधीशकार्यालय
## तुलसीपुर दाङ)

सामान्यप्रशासन मन्त्रालयको अतिरिक्त समूहमा हाजिर भइरहेकै समयमा केही महिनापछि नै मलाई फेरि गृहमन्त्रालयमा सरुवा गरिएको थियो। गृहसचिव श्रीकर्णध्वज अधिकारीले एक बिहान आफ्नू आवासमा नै बोलाएर मलाई राप्ती अञ्चलाधीश कार्यालय दाङ तुलसीपुरमा सहायक अञ्चलाधीश भएर ३ महिनाका लागि काजमा जान आग्रह गर्नुभएको थियो। त्यस बेला दाङ जिल्लामा नेत्रलाल अभागी लगायतका आतङ्ककारीहरूले लूटपाट मच्चाइरहेका थिए। त्यसबाट जिल्लाभरि नै व्यापक अशान्ति फैलिएको हुँदा २०३७ साल वैशाख महिनामा हुने जनमतसङ्ग्रह नै हुन नसक्ने भएपछि दाङ जिल्लामा प्रशासनिक कारबाही गरी स्थिति नियन्त्रण गर्ने काममा मलाई खटाउन खोजिएको थियो।

मैले धनुषा जिल्लामा प्र.जि.अ. भएको समयमा गरेको २०३६ सालको आन्दोलनको नियन्त्रणसम्बन्धी कामको प्रशंसा भएर पनि मलाई सरकारले अन्याय गरेको हुँदा जिल्लामा नजाने भनेर मैले सचिवलाई जबाफ दिएको थिएँ। धेरै लामू कुरा भएको थियो। अन्याय भएको महसूस गर्दै उहाँले भविष्यमा त्यस्तो अन्याय नहुने कुराको आश्वासन मलाई दिनुभएको थियो। तै पनि मैले कुनै हालतमा पनि दाङ नजाने भनेर अडान लिएपछि अधिकारीले 'शरदकुमार भट्टराईलाई नै दाङमा गरिने प्रशासनिक कारबाहीका लागि पठाउनू, उनलाई धनुषाजिल्लामा गरेको प्रशासनिक कारबाहीको अनुभव छ र उनीमा क्षमतासमेत छ भनेर दरबारबाट निर्देशन आएको हुँदा मैले तपाईलाई भनेको हुँ। दरबारको निर्देशन मान्ने नमान्ने आफैं विचार गर्नुहोस्' भनेर महाअस्त्रको प्रयोग अधिकारीले ममाथि गर्नु भएको थियो। त्यसपछि अरू कुनै उपाय नदेखेर मैले मेरो आफ्नू जागिर जोगाउन अडान

छोडेर दाङको तुलसीपुर रापतीअञ्चलाधीश कार्यालयमा ३ महिनाका लागि काजमा जान म सहमत भएको थिएँ ।

त्यसपछि २०३६ साल फागुन महिनामा म हाजिर हुन अञ्चलाधीश कार्यालय तुलसीपुर, दाङ गएको थिएँ। त्यस बेला त्यहाँ अञ्चलाधीशको पदमा श्रीकेशवचन्द्र गौतम हुनुहुन्थ्यो । उहाँ पहिले राज्यमन्त्री पनि भइसकेका व्यक्ति भएकाहुँदा नामबाट राजनीतिकरूपमा गौतम परिचितै व्यक्ति भए तापनि सशरीर मैले भने उहाँलाई पहिलो पटक त्यहीँ दाङ तुलसीपुरमा गएरमात्रै परिचय गर्ने मौका पाएको थिएँ। उहाँ अत्यन्त सरल, सज्जन र दार्शनिक किसिमका उदारमना व्यक्ति भएका हुँदा तत्कालीन समयको प्रशासनमा सायद उहाँ उपयुक्त हुन सक्नुभएको थिएन। म गएपछि धेरै दिनदेखि खालि रहेको सहायक अञ्चलाधीशको पदपूर्ति भएर अञ्चलाधीशलाई प्रशासनिक काममा सहयोग पुग्न गएको थियो ।

सरदार श्रीविष्णुमणि आचार्य सल्याने राजाको समयमा डिठ्ठा हुँदा उहाँलाई सल्याने राजाले बस्नदिएको थोत्रो जीर्ण घर मलाई आवासको रूपमा दिइएको थियो। पातु खोलाको छेउमा रहेको उक्त जीर्ण घर अत्यन्त एकान्त स्थानमा थियो । मेरो त्यहाँ बस्ने टुङ्गो नभएको हुँदा मैले परिवार लगेको थिइन । एक जना पिउन मसँग साथमा बस्तथ्यो । अहिले जस्तो आतङ्कको स्थिति भएको भए मलाई त्यहाँ बस्न अत्यन्त असुरक्षित हुने थियो। त्यस समयमा गाउँगाउँमा जतिसुकै आतङ्क फैलिएको भए तापनि दाङको तुलसीपुर क्षेत्रमा भने कुनै त्यस्तो असुरक्षाको वातावरण थिएन । त्यसैहुँदा म विनाअङ्गरक्षक पनि एउटा पिउनको भरमा आफूलाई सुरक्षित भएको संझेर बस्तथेँ। म धेरैजसो अञ्चलाधीशको भवनमा नै काम गरेर समय बिताउँदथेँ। अञ्चलाधीश पनि धेरैजसो परिवारविना नै बस्ने हुँदा दुवै जना कुराकानी र छलफल गरेर नै आफ्नू समय बिताउँदथ्यौँ। प्रायः गरेर बेलुकाको खाना पनि म अञ्चलाधीशकै निवासमा खाने गर्दथेँ। रातमा पनि अबेरमात्रै म निवासमा फर्कन्थेँ। त्यस बखत अञ्चलका एस्.पी.मा श्रीअखण्डप्रकाश रायमाझी, जनसम्पर्क अधिकृतमा श्रीहरिबाबु चौधरी र अञ्चलाधीश कार्यालयको शाखा अधिकृतमा श्रीधर्मानन्द भट्ट कार्यरत हुनुहुन्थ्यो ।

त्यस बखत दाङ जिल्लाभरि नै आतङ्ककारी कम्युनिष्ट श्रीनेत्रलाल अभागीसमेतका भूमिगत गिरोहले लूटपाट मच्चाएर अत्यन्त त्रास फैलाइरहेको थियो । अञ्चलाधीश अत्यन्त सरल व्यक्ति हुनु भएको हुँदा प्रशासन राम्रो सञ्चालन हुनसकेको थिएन । जिल्लाप्रशासन र अञ्चलप्रशासनसमेत प्रायः पङ्गु भएका थिए । अञ्चलका एस्.पी. श्रीअखण्डप्रकाश रायमाझी अत्यन्त निष्क्रिय, पलायनवादी र अनुशासनहीन व्यक्ति भएका हुँदा प्रहरीप्रशासन नै निकम्बा र पङ्गु भइसकेको थियो । जिल्लाप्रशासन र जिल्लाको प्रहरीबल पनि अत्यन्त उत्तरदायित्वविहीन र काम नलाग्ने भइसकेका थिए । १ हप्तासम्म रातदिनै  घटना भएका ठाउँहरूमा मैले भ्रमण गरेको थिएँ । स्थानीय पञ्चनेता र अञ्चलाधीशसँग पनि सल्लाह गरेर प्रशासनिक कारबाहीका लागि कार्ययोजनासमेत बनाएर मैले गृहमन्त्रालयमा लेखिपठाएको थिएँ । मेरो प्रतिवेदन गृहमन्त्रालयमा पुगेपछि गृहमन्त्रालयले पनि माग भए अनुसारका साधनहरूका साथै पश्चिमाञ्चल क्षेत्रका तत्कालीन डी.आई.जी.पी. श्रीहेमबहादुर सिंहलाई प्रशासनिक कारबाहीमा सहयोग पुऱ्याउन दाङमा खटाएर पठाएको थियो । डी.आई.जी.पी. पुगेपछि हामीहरूले सङ्गठितरूपमा सशक्त कारबाही शुरु गरेका थियौं । आतङ्ककारीहरूलाई भौतिकरूपमा क्षति नपुऱ्याउने र पक्राउ गरी थुनामा राख्ने भन्ने केन्द्रीय निर्देशन बमोजिम तदनुरूप प्रशासनिक कारबाही गरेर एक महिनाभित्रमा नै हामीहरू दाङ जिल्लामा फैलिएको आतङ्कलाई शान्त पार्न सफल भएका थियौं । करिब ५०० जना जति विद्रोही आतङ्ककारीहरूलाई पक्राउ गरेर अञ्चलकारागार तुलसीपुरमा राखिएको थियो । त्यसरी पक्राउ पर्नेहरूमा सरकारी कर्मचारीहरू पनि थिए ।

म सहायक अञ्चलाधीश भएर त्यहाँ गएदेखि नै अञ्चलाधीशले आफ्नू सम्पूर्ण अधिकार मलाई नै प्रत्यायोजन गर्नु भएको थियो । त्यस समयमा रापती अञ्चल प्रशासनिक दृष्टिकोणले प्रशासन गर्न अत्यन्त सजिलो अञ्चल थियो । त्यस बखत दाङ जिल्लामा फैलिएको आतङ्कलाई नियन्त्रण गर्न सफल भएपछि त्यस जिल्लामा पनि जनमत सङ्ग्रहको कार्य सजिलैसँग सञ्चालन हुने वातावरण बनेको थियो । त्यसपछि बहुदल पक्षको र निर्दल पक्षको प्रचार गर्न दुवैतर्फका नेता र कार्यकर्ताहरू दाङ

जिल्लामा जानथालेका थिए । त्यसरी जाने नेताहरूमा नेपाली कांग्रेसका सर्वोच्च नेतामा श्रीविश्वेश्वरप्रसाद कोइराला र श्रीगणेशमान सिंह पनि हुनुहुन्थ्यो । श्रीविश्वेश्वरप्रसाद कोइराला अत्यन्त शालीन र बौद्धिक भाषण गरेर फर्किनु भएको थियो भने श्रीगणेशमान सिंहले अत्यन्त उत्तेजक र जथाभावी बोलेर तत्काल प्रचलित कानूनको उल्लङ्घन गर्नु भएको हुँदा उहाँलाई पक्राउ गरेर प्रहरीले बयानसमेत लिएर छाडिदिएको थियो । मैले दाङ जिल्लामात्रै नभएर अञ्चलका सबै जिल्लाहरूको भ्रमण गरेर जनमतसङ्ग्रहका लागि प्रशासनिक व्यवस्था मिलाएको थिएँ । जनमतसङ्ग्रहमा आवश्यक पर्ने शान्तिसुरक्षाको व्यवस्था पनि राम्रोसँग मिलाइएको थियो ।

त्यसरी रापती अञ्चल अन्तर्गतको आतङ्कग्रस्त दाङ जिल्लामा र अरू पनि सबै जिल्लाहरूमा शान्तिसुरक्षाको व्यवस्था राम्रोसँग मिलाइसकेपछि त्यसको निरीक्षण गर्न केन्द्रबाट तत्कालीन शिक्षामन्त्री श्रीमरीचमान सिंह दाङ जानुभएको थियो । छोटो समयभित्र नै दाङ जिल्लालगायत रापती अञ्चलभरिका जिल्लाहरूमा शान्तिसुरक्षाको सन्तोषजनक वातावरण सिर्जना भएको देखेर श्रीमरीचमान सिंह अत्यन्त प्रभावित हुनुभएको थियो । त्यस बेलाका अञ्चलाधीश श्रीकेशवचन्द्र गौतम प्रशासनिक काममा अनभिज्ञ र राजनीति परिचालन गर्न पनि असमर्थ भएका भनी उहाँसँग स्थानीय नेताहरू र दरबारसमेत असन्तुष्ट भएपछि अञ्चलाधीशलाई हटाएर त्यस ठाउँमा मलाई का.मु. अञ्चलाधीश दिने दरबारको आशय भएको कुरा श्रीमरीचमान सिंहले मसँग गर्नुभएको थियो र मेरो स्वीकृतिसमेत उहाँले खोज्नुभएको थियो । तर त्यस प्रकारको कायममुकायम अञ्चलाधीशमा नियुक्त हुन म तयार भइन । किनभने श्रीकेशवचन्द्र गौतमलाई राजनीतिक व्यक्तिहरूले र दरबारले समेत जेसुकै भने तापनि उहाँ अत्यन्त भद्र, सहनशील र सज्जन व्यक्ति हुनुभएको हुनाले उहाँलाई हटाएर म उहाँको ठाउँमा कायम मुकायम अञ्चलाधीश हुन मेरो अन्तःकरणले नमानेको हुँदा मैले सो कुरा अस्वीकार गरेको थिएँ । अञ्चलाधीश श्रीकेशवचन्द्र गौतमले ठीक काम गरिरहनुभएको छ, उहाँका अन्तर्गत रहेर काम गर्न मलाई कुनै आपत्ति छैन र जे जस्तो काम गर्नु परे पनि म सहायक अञ्चलाधीशको हैसियतले गर्न तयार छु भनेर मैले श्रीमरीचमान सिंहलाई वचन दिएको

थिएँ । त्यसपछि अञ्चलाधीश श्रीकेशवचन्द्र गौतमलाई हटाउने कुरा त्यसै सेलाएर गएको थियो ।

उपर्युक्त अनुसार सम्पूर्ण कुरा मिलिसकेपछि जनमतसङ्ग्रहका लागि हामीहरू तयार भएका थियौं । जनमतसङ्ग्रहको पूर्वतयारीको निरीक्षण गर्न केन्द्रबाट सहसचिव श्रीसूर्यनाथ उपाध्याय सुवेदी र उपसचिव श्रीठाकुरप्रसाद पाण्डेसमेत दाङ जानुभएको थियो । उहाँहरू मेरा चिरपरिचित मित्रहरू भएका हुँदा म बसेकै आवासस्थानमा उहाँहरूलाई बस्ने व्यवस्था मैले मिलाएको थिएँ । निरीक्षणकै क्रममा उहाँहरूले प्यूठान जिल्ला पनि जाने इच्छा व्यक्त गर्नु भएको हुँदा अञ्चलाधीशको गाडीमा उहाँहरूलाई लिएर म प्यूठान गएको थिएँ । त्यस बेला प्यूठान जिल्लाका प्र.जि.अ. श्रीमुकुन्दप्रसाद घिमिरे हुनुहुन्थ्यो । त्यस जिल्लामा वामपन्थीहरूको प्रभाव भए तापनि धेरैजसो वामपन्थीहरू निर्दलीय पञ्चायततर्फ नै लागेका थिए । शान्तिसुरक्षाका लागि जिल्लासुरक्षासमितिको बैठक गराएर हामीहरू फर्केका थियौं ।

प्यूठान जिल्लाको सदरमुकाम खलङ्गाको भ्रमण समाप्त गरेर दाङतिर फर्किने क्रममा प्यूठान जिल्लाको सदरमुकाम खलङ्गाबाट भृङ्गी भन्ने ठाउँमा पुगेर हामीहरूले चढेको गाडी भृङ्गीको प्रहरी चौकीमा थन्क्याएर हामीहरू त्यस जिल्लाको दर्शनीय स्थान स्वर्गद्वारी डाँडामा चढेका थियौं । ठाडो उकालो बाटो र त्यसमा पनि सल्लाको सल्लीपिर झरेर झन् चिप्लो भएको हुँदा चार पाँच घण्टा लगाएर अत्यन्त मुश्किलका साथ हामीहरू बिस्तारै उकालो उक्लेर बेलुकीपख स्वर्गद्वारी मन्दिरमा पुगेका थियौं । करिब ६००० फीटको उचाइमा अवस्थित स्वर्गद्वारी साँच्चैको स्वर्गजस्तो नै मलाई लागेको थियो ।

स्वर्गद्वारी आश्रमका संस्थापक श्री १००८ स्वामी हंसानन्द गिरि ( महाप्रभु बालतपसी) आबाल ब्रह्मचारी बाबाले १९५१ मा स्थापना गर्नु भएको स्वर्गद्वारी आश्रममा अखण्ड यज्ञ चलिरहने र वेदपाठ गर्ने व्यवस्था पनि मिलाइएको रहेछ । ब्राह्मणवटुहरूद्वारा समवेत स्वरमा उच्चारण गरिने वेदध्वनिबाट सम्पूर्ण वातावरण नै पवित्र भएको मैले अनुभूति गरेको थिएँ । वातावरण अत्यन्त सुशान्त र प्रदूषण मुक्त भएको त्यस स्वर्गद्वारीमा एक रात बस्ने र बेलुकाको आरतीमा सम्मिलित हुने पनि मैले शुभ अवसर

पाएको थिएँ। त्यसै गरी अर्को दिन बिहानको पूजापाठमा पनि म सम्मिलित भएको थिएँ। गएका पाहुनाहरूलाई एक दुई छाक पाहुनाका रूपमा खाना खुवाउने त्यहाँको चलन रहेछ। सुकाएर राखेको रायोको साग र भात मलाई अत्यन्त मीठो लागेको थियो। यथाशक्य भेटीघाटी चढाएर र कवितात्मक उद्गार आगन्तुक पुस्तिकामा लेखेर त्यसै दिन बिहानको खानासमेत खाएपछि ठाडै ओरालो भृङ्गी प्रहरी चौकीमा झरेर त्यहाँबाट गाडी चढेर सरासरी दाङको तुलसीपुर हामीहरू फर्केका थियौँ।

त्यसपछि जनमतसङ्ग्रहको काममा केन्द्रबाट खटिएका थुप्रै मतदान अधिकृतहरू तुलसीपुर पुगेका थिए। काठमाडौंमा विद्रोह गरेर दाङको तुलसीपुर पुगेका अधिकृतहरूलाई सन्तुष्ट पार्न मलाई अत्यन्त मुश्किल परेको थियो। मैले चिनेजानेका धेरैजसो अधिकृतहरू भएका हुँदा मैले व्यक्तिगतरूपमा सम्झाइबुझाइ थामथुम पारेको थिएँ। उनीहरूका लागि आवास र खानाको समेत व्यवस्था मैले नै गर्नुपरेको थियो। तिनीहरूलाई खटिएका जिल्लाहरूमा पुऱ्याउन हेलिकोप्टर र गाडीसमेतको व्यवस्था मैले मिलाएको थिएँ। रोल्पा जिल्लामा ती मतदान अधिकृतहरूलाई साथमा लिएर हेलिकोप्टरमा म आफैँ गएको थिएँ। अरू जिल्लाहरूमा पनि जाने इच्छा थियो तर प्रशासनिक कामकुराले गर्दा मैले जाने फुर्सदै पाइन।

त्यसरी जनमतसङ्ग्रहको काम समाप्त भएको थियो। जनमत सङ्ग्रहपछि मेरो ३ महिनाको काज पनि पूरा भएको थियो। त्यस पछि म काठमाडौं फर्किएको थिएँ। म काठमाडौं फर्केपछि मातापिताको दर्शन गर्न म इनरुवा सुनसरी गएको थिएँ। घर गएको बेला भाण्टाबारी छोटी भन्सारमा त्यस समयमा काम गरिरहनु भएका दाजुलाई पनि मैले भेटेको थिएँ। केही दिन इनरुवा, विराटनगर र झापाजिल्लासमेतको भ्रमण गरेर म काठमाडौं फर्केको थिएँ। काज फिर्ता हुनुको साटो उल्टै रापती अञ्चलाधीश कार्यालयको दरबन्दीमा नै मेरो सरुवा भएको थियो।

त्यसरी मेरो त्यही कार्यालयमा नै पदस्थापन भएपछि म फेरि तुलसीपुर, दाङमा नै फर्केर पूर्ववत् काम गर्दैरहेको थिएँ। वर्षाको समय शुरुभएको थियो। टाढा घुम्न जान पनि सम्भव थिएन। अञ्चलाधीश कार्यालयमा खास काम पर्दैनथ्यो। हामीहरू यताउताका कुरा गरेरै दिन बिताउँदथ्यौँ।

अञ्चलाधीश श्रीकेशवचन्द्र गौतम प्रसिद्ध विद्वान् पण्डित श्रीकुलचन्द्र गौतमका नाति भएका हुँदा उहाँमा पितापुर्खाको असल संस्कार विद्यमान थियो । उहाँ शास्त्रका गहिरा कुराहरू जान्नुहुन्थ्यो र एक पटक राज्यमन्त्रीसम्म पनि भइसक्नु भएको हुनाले उहाँमा राजनीतिक संस्कार पनि थियो । समय मिलेको बेला म उहाँबाट शास्त्रीय कुराहरू र राजनीतिक अनुभवहरूसमेत सुनेर आफ्नू समय बिताउँनेगर्दथें । वर्षाको बेलामा धेरैजसो रातभरि पानी परी नै रहन्थ्यो । सुनसान र चकमन्न वातावरण भएको एकान्तको ठाउँमा म एक्लै सुतेर शोचिरहन्थें । चारैतिर मकै र रुखविरुवाहरूका पातमा आकाशबाट परेको पानी बजिरहन्थ्यो । सुनसान एकान्त त्यस ठाउँले कहिले मलाई आनन्द दिन्थ्यो भने कहिले विरक्त बनाउँथ्यो । रातभरि चारैतिर स्याल कराइरहन्थे । दाङका स्यालहरू मकैका बोट बढेपछि कुखुराका चल्ला खान घरघरै आउने गर्दथे । कहिलेकाहीँ मेरो थोत्रो पुरातात्त्विक आवासमा करेत सर्प र बिच्छीहरू देखा पर्दथे । त्यसरी निस्कने सर्प र विच्छीहरूलाई बाहिर फ्याँकेर म सधैँ सशङ्कित र सतर्क भएर आफ्ना दिनहरू बिताउन बाध्य भएको थिएँ ।

त्यसरी मेरा दिनहरू बितिरहेका थिए । म समय पाएको बेला त्यही एकान्त थोत्रो आवासमा बसेर केही पढ्ने र लेख्ने कामसमेत गर्दथें । कहिले कविता लेखेर र कहिले आफ्नू विगतको सम्झनामा हराएर आफ्ना अमूल्य क्षणहरू म बिताउने गर्दथें । एक दिन विरक्त भएर आवासमा एक्लै बसेको बेला २०३७ साल असार २८ गतेका दिन आफ्नू जन्मभूमि रावालामीडाँडालाई सम्झिएर मैले *'फर्किएर हेर्दा'* भन्ने कविता लेखेको थिएँ । त्यो कविता मेरो पहिलो कवितासङ्ग्रह *'सिर्जनाका फूलहरू २०५१'* मा प्रकाशित भइसकेको छ । मैले एकान्त स्थलमा बसेर अत्यन्त भावुक भएर लेखेको उक्त कवितालाई यक्षले आफू निर्वासित भएर पञ्चवटीमा एक्लो जीवन बिताइरहेको बेला मेघलाई दूत बनाएर आफ्नी प्रियतमालाई पठाएको सन्देशका रूपमा मैले त्यस कवितालाई लिएको थिएँ । त्यस बेला म पनि गृहमन्त्रालयबाट दाङको तुलसीपुरस्थित पातु खोलाको किनारको एकान्त स्थानमा निर्वासितजस्तो भएर विनाकाम एक्लो जीवन बिताइरहेको थिएँ । जन्मभूमि सम्झिएर कालिदासले मेघदूतमा मन्दाक्रान्ता छन्द प्रयोग गरेर

विप्रलम्भशृङ्गार रसले आप्लवित काव्य लेखेझैँ गरेर मन्दाक्रान्ता छन्दमै मैले पनि उक्त कविता लेखेको थिएँ। कालिदासका यक्षले एक वर्षको निर्वासित जीवन बिताउन वाध्य हुनुपरेको थियोभने मैले पनि झण्डै एक वर्षकै निर्वासित जीवन दाङको तुलसीपुरमा बसेर बिताएको थिएँ। *'फर्किएर हेर्दा'* बाहेक अरू पनि कविताहरू मैले त्यहाँ बसेर लेखेको थिएँ। ती कविताहरूमध्येमा गुरुमाता बालकुमारीलाई सम्झिएर लेखेको *'तिनको सम्झनामा'* कविता पनि मेरो *'सिर्जनाका फूलहरू २०५१'* मा प्रकाशित भइसकेको छ।

मेरो तुलसीपुरको बसाइको दिनचर्या अत्यन्त सीमित थियो। मलाई अत्यन्त फुर्सद भएर पनि चेतना र असल संस्कारको कमीले गर्दा खास आध्यात्मिक चिन्तनतर्फ मैले ध्यान दिन नसकेको कुरा अहिले आएर मलाई महसूस भइरहेको छ। केवल अञ्चलाधीश, एस्.पी., जनसम्पर्क अधिकारीहरूसमेतका कर्मचारीहरूसँग बसेर कार्यालयको काम गर्नु र ग्राम्य वार्ता गर्नु बाहेक अरू खास सिर्जनात्मक काम मबाट केही हुन सकेको थिएन। कहिलेकाहीँ अरू जिल्लाबाट अञ्चलाधीश कार्यालयमा काम विशेषले आउने प्र.जि.अ.हरू श्रीकेशवराज राजभण्डारी, श्रीशारदाप्रसाद दाहाल, श्रीभगवान् सिंह र श्रीमुकुन्दप्रसाद घिमिरेसँग भेटघाट र छलफल गर्ने सामान्य काममात्र मबाट हुने गर्दथे। फुर्सद भएको समयमा तिनै मित्रहरूसँग बसेर तास खेल्ने, गफगाफ गर्ने, खानापिना गर्ने र शिकार खेल्न जाने जस्ता तल्ला तहका काम गरेर मैले आफ्नू अमूल्य समय बिताएको थिएँ।

त्यस बेला मलाई शक्तिको घमण्ड र अहंले अन्धो बनाएको थियो। तुलसीपुर लगायतका जुनसुकै ठाउँमा बस्ता पनि म फुर्सद निकाल्न सक्दथेँ। फुर्सद निकालेर मैले धार्मिक कृत्य, तीर्थाटन र वेदान्तको अध्ययन गरेर आफ्नू अमूल्य समय बिताउन सक्तथेँ। विद्यार्थी अवस्थामा संस्कृत पढ्दा अद्वैतवेदान्त विषय नै लिएर मैले आचार्यसम्म पढेको थिएँ। घरमा हुँदा मलाई असल संस्कार प्राप्त भएको थियो र मैले श्रीकविप्रसाद गौतमको हरिनाम–सङ्कीर्तनमण्डलीमा सम्मिलित भएर भजनकीर्तन गरेको पनि थिएँ। तर प्रशासनमा प्रवेश गरेपछि म ती सबै असल संस्कारहरू बिर्सेर कुमार्गतर्फ लागेको थिएँ। मैले सरकारी सेवाबाट अवकाश लिनु केही अघिएसम्म कुनै

खालको धार्मिक अनुष्ठान र वेदान्तचिन्तन गर्नेतर्फ शोच्नै सकेको थिइन । ती कुरा सम्झँदा अहिले मलाई अत्यन्त पश्चात्ताप लागेरआउँछ ।



मातापिताका हातबाट २०३७ साल विजयादशमीको टीका लगाउँदै लेखक

दाङ जिल्लाको तुलसीपुरमा बसेको समयमा मातापिताको हातबाट २०३७ सालको दशैंको टीका लगाउन म सुनसरी जिल्लाको इनरुवाको घरमा गएको थिएँ । केही दिन मातापिताका साथमा घरबसेर म काठमाडौं फर्केको थिएँ । दाङमा बस्ने इच्छा नभएर गृहमन्त्रालयमा नै सरुवा गरिदिन तत्कालीन



मातापिताको तस्वीर २०३७ विजयादशमीका दिन इनरुवा, सुनसरीको घरमा लिइएको

गृहसचिव श्रीकर्णध्वज अधिकारीलाई मैले धेरै पटक अनुरोध गरेको थिएँ । तर उहाँले मेरो कुरालाई कत्ति पनि नसुनेर मलाई दाङभन्दा पनि अझ पश्चिमतर्फ पर्ने बर्दिया जिल्लाको प्रमुखजिल्लाअधिकारी बनाएर पठाउनु भएको थियो । बर्दिया जिल्लामा नजानका लागि भनसुन गर्ने दृष्टिकोणले त्यस बेलाका गृहमन्त्री श्रीनवराज सुवेदीलाई भेट्न म गएको थिएँ । तर उहाँले मलाई नाना थरीका झूठा आश्वासनहरू दिएर र चिप्ला कुरा गरेर त्यसै टार्नुभएको थियो । भनसुन गर्दागर्दै २०३७ सालको मङ्सिर महिना पनि लागिसकेको थियो ।





धार्मिक कार्यमा परिवारसहित लेखक

# बर्दिया जिल्लामा

बर्दिया जिल्लाको प्रमुखजिल्लाअधिकारी भएर जानका लागि सानू छोरो सगुनलाई साथमा लिएर म र मेरी श्रीमती बर्दिया जानेक्रममा बिदाबारी हुन हवाइजहाजद्वारा अञ्चलाधीश कार्यालय, दाङ जिल्लाको तुलसीपुर गएका थियौँ । दुइटा छोरा सञ्जीव र सतीशलाई आनन्दकुटी विद्यापीठको छात्रावासमा भर्ना गरिएको थियो र दुइटी छोरीहरूलाई काठमाडौंको घरमा नै बस्ने व्यवस्था मिलाइएको थियो । अञ्चलाधीश कार्यालय दाङमा गएर कार्यालयको मैले बुझाउनु पर्ने नगदी र जिन्सी सबै बुझाएर रवानापत्रसमेत लिएर हामीहरू बर्दिया जिल्ला जान तुलसीपुरबाट हवाइजहाजद्वारा नेपालगञ्ज गएका थियौँ । नेपालगञ्जमा गएर सर्वप्रथम तत्कालीन अञ्चलाधीश श्रीमेहबुब शाहलाई मैले भेटेको थिएँ । श्रीमेहबुब शाह काठमाडौं क्षेत्रपाटीका जुत्तापसले मुसलमान भएको र उहाँ श्रीदामोदरशम्शेर राणाका आशीर्वादबाट अञ्चलाधीश हुनुभएको थियो । उहाँ मण्डले प्रवृत्तिका अशिक्षित तथा उद्दण्ड खालका व्यक्ति हुनुहुन्थ्यो । व्यक्तिगतरूपमा त्योभन्दा अघि उहाँलाई मैले चिनेको थिइन । बर्दिया प्रस्थान गर्नुभन्दा अघि गृहमन्त्रालयले उहाँका बारेमा मलाई सबै जानकारी दिइसकेको थियो । उहाँले मभन्दा पहिले बर्दिया जिल्लामा काम गर्ने प्रमुखजिल्ला अधिकारीहरू श्रीकृष्णप्रसाद अधिकारी र श्रीवागीश्वरीदत्त चटौतसमेतलाई बर्दिया जिल्लाको राजापुरमा अस्थायी बसोवास गरेर बसेका मुसलमानसमेतका भारतीयहरूलाई नेपाली नागरिकता दिने लगायतका अरू गैह्रकानूनी कामकुराहरू गर्न दबाब दिनुभएको रहेछ । त्यो कुरा मैले पहिले नै थाहा पाइसकेको थिएँ । त्यसै कारण त्यस्ता व्यक्तिसँग कसरी व्यवहार गर्नु पर्छ ? र कसरी जोगिएर काम गर्नुपर्छ ? भन्ने सम्बन्धमा म पहिलेदेखि नै तयार भएर गएको थिएँ । अञ्चलाधीश बस्ने घरकै तल्लो तलामा कार्यालय राखिएको रहेछ । म अञ्चलाधीशलाई भेट्न जाँदा कार्यालय उठिसकेको थियो । उहाँले मलाई आफ्नै निवासको बैठकमा भेट्नु भएको थियो । मैले उहाँलाई भेटेर आफ्नो परिचय दिएको थिएँ । सामान्य

औपचारिकता पूरा गरिसकेपछि उहाँले मलाई बर्दिया जिल्लाका समस्याहरू र तिनका समाधानका बारेमा आफूले जानेसम्मका कुराहरू बताउनुभएको थियो। मुख्य गरेर राजापुरको नागरिकताको समस्याका बारेमा पहिलेका प्रमुखजिल्ला अधिकारीहरूलाई बताए सरह मलाई पनि बताउनुभएको थियो। जबाफमा प्रचलित कानूनका प्रावधान अन्तर्गत रहेर जिल्लाका नागरिकता लगायतका सबै समस्या समाधान गर्न प्रयास गर्ने आफ्नू विचार मैले व्यक्त गरेको थिएँ। मेरो विचारबाट अञ्चलाधीश सन्तुष्ट भएको जस्तो देखिनुहुन्थ्यो। हामीहरू त्यो रात नेपालगञ्जमै बस्यौं र डी.आई.जी.पी. श्रीहेमबहादुर सिंहसँग भेटगर्न गएका थियौं। त्यस रातको खाना हामीहरूले उहाँकै निवासमा खाएका थियौं।

त्यसरी नेपालगञ्जमा भेटघाट गर्ने काम सिध्याएर अञ्चलाधीशले उपलब्ध गराएको सरकारी जीप लिएर परिवार सहित म बर्दिया गएको थिएँ। भेरीअञ्चलमा म पहिलोपल्ट गएको हुँदा मेरालागि त्यो क्षेत्र नयाँ थियो। मङ्सिर महिना भएकाले चारैतिरको सम्पूर्ण फाँट धान पाकेर पँहेलपुर देखिन्थ्यो। चारैतिरका जङ्गल र हराभरा फाँटहरू अत्यन्त सुन्दर देखिन्थे। हामीहरू माननदी तरेर मैनापोखर हुँदै भादा नदीमा पुगेका थियौं। भादा नदीमा गाडी डुङ्गाबाट तारेर साँझपख बर्दियाको सदरमुकाम गुलरिया हामीहरू पुगेका थियौं। हामीहरू सोझै जिल्लाकार्यालयको भवनमा गएका थियौं। त्यसै भवनमा कार्यालयका साथै प्र.जि.अ.को आवास पनि रहेछ। त्यो ठाउँ चारैतिर खुला र हरियालीयुक्त भएको हुँदा अत्यन्त रमाइलो देखिन्थ्यो। चारैतिर तोरी फुलेको र धान झुलेको हुँदा वातावरण अत्यन्त रमणीय थियो। गुलरिया बजार वरपर पनि पातलो वस्ती र कम जनसङ्ख्या भएको हुँदा वातावरण अत्यन्त स्वच्छ थियो। हामीहरू साँझमा गएर पहिलेदेखि नै सबै थोक व्यवस्थित गरेर राखिएको वासस्थानमा भित्रिएका थियौं। साँझको खाना जिल्लाप्रशासनकार्यालयका लेखापाल श्रीमाधव श्रेष्ठले खुवाएका थिए।

त्यसरी बर्दिया जिल्लाको सदरमुकाम गुलरियामा पुगेपछि अर्को दिनदेखि आफ्नै निवासस्थानमा नै खाने व्यवस्था गरिएको थियो। म जिल्लामा पुगेपछि कतिपय व्यक्तिहरू औपचारिकताको कारण, कतिपय व्यक्तिहरू स्वार्थका कारण र कतिपय व्यक्तिहरू नयाँ प्र.जि.अ.सँग चिनाजान गर्ने

उद्देश्यले पनि मलाई भेट्न आएका थिए । आफ्नै कार्यालयका कर्मचारीहरू, कार्यालयका प्रमुखहरू, राजनीतिक नेताहरू र सर्वसाधारण व्यक्तिहरू पनि मसँग चिनाजान गर्न आएका थिए । त्यसरी भेटघाट गर्न र जिल्लाको समस्या बुझ्न व्यस्त रहेकै बेला म गएको तीन दिनपछि नै नेपालगञ्जबाट अञ्चलाधीश श्रीमेहबुब शाह मलाई भेट्न बर्दिया पुग्नुभएको थियो । त्यहाँ गएको बेला उहाँले कार्यालयको निरीक्षण पनि गर्नु भएको थियो । बर्दिया जिल्लाप्रशासनकार्यालको गाडी थोत्रो भएर काम नलाग्ने भएको थियो । त्यो देखेपछि अञ्चलाधीशले काठमाडौं गएको बेला गाडी निकासा गराइदिने वचन मलाई दिनुभएको थियो । त्यस बेला बर्दिया जिल्लामा वामपन्थी कम्युनिष्टहरूको क्रियाकलाप अत्यन्त उग्ररूपमा बढेको थियो । सो सम्बन्धमा पनि अञ्चलाधीशले मलाई आफ्नू अनुभव सुनाउनुभएको थियो ।

त्यसरी बर्दिया जिल्लाको भ्रमण समाप्त गरेर अञ्चलाधीश मेहबुब शाह नेपालगञ्ज फर्किएको केही दिनभित्रै काठमाडौं जानुभएको थियो । अञ्चलाधीश काठमाडौं गएपछि म जिल्लाको वस्तुस्थिति बुझ्न गाउँ पञ्चायतहरूमा घुमेको थिएँ । गाउँगाउँमा पुगेर अध्ययन गर्दा धेरैजसो विद्यालयहरूमा अवैध राजनीतिक गतिविधि भएको मैले पाएको थिएँ । उक्त अवैध राजनीतिक क्रियाकलापलाई रोक्न मैले सशक्त प्रशासनिक कारबाही शुरुगरेको थिएँ । त्यसरी कारबाही गर्दा कैयौँ शिक्षकशिक्षिकाहरू थुनामा परेका थिए र कैयौँको जागिर खोसिएको थियो । काठमाडौं गएका अञ्चलाधीश श्रीमेहबुब शाहको काठमाडौंमा बस्ताबस्तै खोसुवा भएको थियो ।

त्यसपछि भेरीअञ्चलाधीशको पदमा अत्यन्त बदनाम श्रीमनमोहन मिश्रको लुम्बिनी अञ्चलबाट सरुवा भएको थियो । त्यो खबर रेडियोबाट सुनेपछि म अत्यन्त निरुत्साहित भएको थिएँ । श्रीमनमोहन मिश्र साह्रै तल्ला तहका खराब र षड्यन्त्रकारी व्यक्ति भएको कुरा पोखरामा बस्ता नै मलाई श्रीसूर्यप्रसाद श्रेष्ठले भनिसक्नु भएको थियो । उहाँका दुर्गुणहरूका बारेमा धेरै कुरा सुनिसकेको हुँदा उहाँका मातहतमा बसेर काम गर्नबाट म जोगिन चाहन्थेँ । २०३६ सालमा धनुषाको प्र.जि.अ.बाट पाल्पाको प्र.जि.अ.मा मेरो सरुवा भएको थियो । त्यस बेला श्रीमनमोहन मिश्र लुम्बिनी अञ्चलमा अञ्चलाधीश भएका हुँदा निजबाट जोगिन मैले तत्कालीन गृहसचिवसँग

अनुरोध गरेर पाल्पाको प्र.जि.अ.बाट आफ्नू नाम हटाउन लगाएको थिएँ। तर दुर्भाग्यले त्यस पटक भने उहाँकै मातहतमा रहेर मैले काम गर्नुपर्नेभएको थियो। अञ्चलाधीश मिश्र नेपालगञ्ज पुग्नुभन्दा पहिलेदेखि नै त्यस्ता गोमन सापजस्ता व्यक्तिबाट कसरी जोगिनु पर्छ भनेर म तयार भएर बसिसकेको थिएँ। आफू दरो भएर काम गर्नका लागि जिल्लामा काम गर्ने कर्मचारीहरू, कार्यालयप्रमुखहरू र अड्डाप्रमुखहरूको समेत सहयोगको अत्यन्त आवश्यकता मैले महसूस गरेको थिएँ। त्यसका लागि सङ्गठितरूपमा कर्मचारीहरूलाई राख्न धनुषाजिल्ला र दाङजिल्लामा सरह त्यहाँ पनि कर्मचारीमिलनकेन्द्रको तत्कालै मैले स्थापना गराएको थिएँ। प्रमुखजिल्ला अधिकारीको नाताले म पदेन अध्यक्ष भएको थिएँ भने सचिवमा मालपोत कार्यालयका हाकिम श्रीमहेन्द्रप्रसाद श्रेष्ठलाई राखिएको थियो। सम्पूर्ण कार्यालयप्रमुख र अड्डाप्रमुखहरूसमेत मिलनकेन्द्रका पदेन सदस्य भएका थिए। त्यसरी कर्मचारीहरूलाई सङ्गठित गरिसकेपछि मैले राजनीतिक नेताहरूसँग पनि राम्रो सम्बन्ध स्थापित गरेको थिएँ। खासगरेर तत्कालीन जिल्ला पञ्चायतका सभापति श्रीदमनध्वज चन्दसँग मेरो राम्रो सम्बन्ध स्थापित भएको थियो। उहाँ मार्फत् नै मैले जिल्लाभरिका सबै राजनीतिक नेताहरूसँग सामञ्जस्य स्थापित गरेको थिएँ। त्यस जिल्लामा कर्मचारी र नेताहरूका बीचमा सामञ्जस्य र सद्भाव कायम गर्न समय समयमा संयुक्त बैठक र भेटघाटको कार्यक्रमसमेत मिलाउने गरिन्थ्यो। सोही सन्दर्भमा वनभोजको आयोजनासमेत गर्नेगरिन्थ्यो।

अञ्चलाधीश श्रीमनमोहन मिश्र नेपालगञ्ज पुग्नुभन्दा पहिले नै जिल्लामा त्यस प्रकारको वातावरणको सिर्जना मैले गरिसकेको थिएँ। जिल्लाका प्रशासक र नेताहरूका बीचमा त्यस प्रकारको सुमधुर सम्बन्ध स्थापना भएकोमा सम्पूर्ण जिल्लावासीले प्रशंसा गरेका थिए। त्यसबाट अवैध राजनीतिक गतिविधिका विरुद्ध प्रशासनले सञ्चालन गरेको अभियानलाई समेत सहयोग पुगेको थियो। जिल्लामा सञ्चालन गरिने विकासनिर्माणका काममा समेत व्यापक एकता र समझदारी उत्पन्न भएको थियो।

त्यसरी अत्यन्त सहज र अनुकूल वातावरण तयार गरेर बर्दियाजिल्लाजस्तो प्रत्येक दृष्टिकोणले भाँडिएको जिल्लामा मैले काम

थालेको समयमा नै लुम्बिनी अञ्चलबाट भेरी अञ्चलमा सरुवा हुनु भएका अञ्चलाधीश श्रीमनमोहन मिश्रले नेपालगञ्जमा पाइला टेकेको खबर बर्दिया जिल्लामा पुगेको थियो ।

जिल्लामा शान्तिसुरक्षा कायम राख्ने लगायतका प्रशासनिक कामकुराहरू अत्यन्त सक्रियताका साथ मैले गरिरहेकै बेला अञ्चलाधीश श्रीमनमोहन मिश्र नेपालगञ्ज पुग्नु भएको हो । त्यो खबर सुनेपछि मेरो शरीर सिरिङ्ग भएको थियो । भविष्यमा मैले निज अञ्चलाधीशबाट भोग्नुपर्ने दुःखहरूका लागि म तयार भएको थिएँ । उहाँलाई भेट्न म नेपालगञ्ज तुरुन्तै नगएर थाहा पाएर पनि थाहा नपाएजस्तो गरेर बसेको थिएँ । अनुकूल समयको प्रतीक्षा गरेर आफ्नू अभियानलाई सक्रियरूपमा म सञ्चालन गर्दैरहेको थिएँ । त्यसै मौकामा नेपालगञ्जमा तत्कालीन शिक्षामन्त्री श्रीमरीचमान सिंह पुग्नु भएको र उहाँले मलाई नेपालगञ्जमा भेट्न बोलाउनुभएको थियो । त्यही मौका पारेर शिक्षामन्त्री र नव आगन्तुक अञ्चलाधीश मिश्रसमेतलाई भेट्न म नेपालगञ्ज गएको थिएँ । त्योभन्दा अघि अत्यन्त दुर्नाम भएको कारण श्रीमनमोहन मिश्रको नाम मैले सुनेको थिएँ । तर उहाँलाई प्रत्यक्षरूपमा भने मैले देखेको थिइन । मैले पहिले नदेखेको हुँदा उहाँलाई म चिन्दिनथेँ । त्यसरी शिक्षामन्त्रीसँग भेट्न नेपालगञ्ज जाँदा अञ्चलाधीशलाई भेट्न अञ्चलाधीश कार्यालयमा नगएर म सोभ्कै शिक्षामन्त्रीलाई भेट्न अतिथिगृहमा गएको थिएँ । अतिथिगृहमा शिक्षामन्त्रीका वरिपरि १०, १५ जना मानिसहरू बसेका थिए । मैले शिक्षामन्त्रीलाई नमस्कार गरेको थिएँ तर नचिनेको हुँदा अञ्चलाधीशलाई मैले नमस्कार गर्ने कुरै थिएन । म शिक्षामन्त्रीले देखाएको आसनमा बसेपछि अञ्चलाधीश मिश्रले मेरो परिचय सोध्नुभएको थियो । शिक्षामन्त्रीले मसँग चिनाजान नभएकोमा आश्चर्य व्यक्त गर्दै मेरो परिचय उहाँले गराउनु भएको थियो । अहिलेसम्म शरदकुमार भट्टराईजस्तो सफल प्रमुखजिल्ला अधिकारीलाई तपाईंले चिन्नु भएको छैन ? भनेर अञ्चलाधीशलाई नै उहाँले प्रतिप्रश्न गर्नु भएको थियो ।

त्यही मौकाको फाइदा उठाएर धूर्त मिश्रले 'ए ! उहाँ नै हो बर्दिया जिल्लाको प्रमुखजिल्ला अधिकारी ? चिने, मैले बल्ल चिने, किनभने उहाँले अहिले बर्दिया जिल्लामा मानिसहरू थुनेर तहल्का मच्चाउनुभएको छ । म

उहाँकै भरमा यस अञ्चलमा दरो प्रशासन चलाउन सक्तछु । मलाई उहाँकै पूर्ण भरोसा छ' भन्ने आदि वाक्यहरूसहित व्यङ्ग्यात्मकरूपमा अञ्चलाधीश मिश्रले मेरो प्रशंसा गर्नुभएको थियो । श्रीमरीचमान सिंहले मिश्रको धूर्ततापूर्ण बानीव्यहोराबाट अपरिचित भएरै होला उहाँको कुरालाई समर्थन गर्दै त्योभन्दा पहिले धनुषा र दाङ जिल्लामा समेत गरेको मेरो कामको प्रशंसा गर्नु भएको थियो । बर्दिया जिल्लामा त्यस बेला बढिरहेको उच्छृङ्खल क्रियाकलापलाई तह लगाउन सरकारले उहाँलाई बर्दिया जिल्लामा पठाएको हो भनेर पनि अञ्चलाधीशलाई शिक्षामन्त्रीले भन्नुभएको थियो । त्यसैकारण उहाँसँग भेटघाट गर्न आज मैले यहाँ बोलाएको हुँ भनेर पनि अञ्चलाधीशलाई शिक्षामन्त्रीले भन्नुभएको थियो । त्यसरी मेरो प्रशंसा गरेको सुनेपछि अञ्चलाधीश मिश्रको अनुहार अत्यन्त विकृत भएको थियो । तै पनि बनावटी हाँसो हाँसेर मेरो प्रशंसा गर्दै म चाँडै बर्दिया आउँछु भनेर मलाई अञ्चलाधीशले बिदा गर्नु भएको थियो । अञ्चलाधीशको त्यस प्रकारको कुरा सुनेपछि म अझै उहाँबाट सतर्क भएको थिएँ । उहाँले कसैको प्रशंसा गरेर हाँस्नु भयो वा पिठिउँमा ढ्याप मार्नु भयोभने त्यसको सर्वनाश हुन्छ भन्ने मैले सुनेको थिएँ । श्रीमरीचमानका साथसाथै लागेर उहाँले मेरो प्रशंसा गर्नु भएको हुँदा मेरो भविष्य खतरापूर्ण भएको सङ्केत मैले त्यसै बेला पाएको थिएँ । भविष्यमा मिश्रले फैलाउन सक्ने जुनसुकै जाल र चल्न सक्ने चालमा नफस्ने गरी सतर्कता अपनाउने अठोट गर्दै म नेपालगञ्जबाट बर्दिया फर्किएको थिएँ ।

त्यसरी नेपालगञ्जबाट भेटघाट गरेर बर्दिया फर्केपछि अञ्चलाधीश मिश्रबाट मलाई प्रशासनमा सहयोग पुग्नुको साटो अञ्चलाधीश नै मेरो समस्या हुने मैले देखेको थिएँ । अञ्चलाधीशबाट आइलाग्नसक्ने समस्याहरूबाट जोगिन र आत्मरक्षाका लागिसमेत निजका विरुद्ध समयदेखि नै अपनाउनु पर्ने रणनीति तयार गर्नेतर्फ म शोच्न बाध्य भएको थिएँ । त्यस प्रकारको तनावपूर्ण वातावरणमा मेरा दिनहरू बित्तैगएका थिए । आफूले गर्नु पर्ने प्रशासनिक कामकुराहरूमा म अत्यन्त सचेत र सतर्क भएर काम गरिरहेको थिएँ । त्यस्तैमा एक दिन पूर्वसूचना दिएरै दलबलसहित अञ्चलाधीश गुलरिया पुग्नुभएको थियो । उहाँको स्वागत र अतिथिसत्कारसमेतको

व्यवस्था मैले अतिथिगृहमा मिलाएको थिएँ। उहाँ निर्धारित समयमा नेपालगञ्जबाट श्रीललित चन्द र केही पत्रकारहरूका साथ गुलरिया पुग्नुभएको थियो। उहाँको बर्दियाको प्रथम भ्रमण भएको हुँदा मैले गर्नुपर्ने औपचारिकता सबै पूरा गरेको थिएँ। सबैका सामुन्ने के कस्ता कुराहरू आफ्ना मातहतका जिम्मेवार अधिकारी, त्यसमा पनि जिल्लाका शान्तिसुरक्षा लगायतका संवेदनशील कामहरू गर्ने प्रमुखजिल्ला अधिकारी जस्ता व्यक्तिसँग गर्नु पर्छ भन्ने कुराको सामान्य ज्ञानसम्म पनि नभएका अञ्चलाधीश मिश्रले शुरुमा नै मसँग व्यङ्ग्यात्मक शैलीमा कुरा गर्न थाल्नु भएको थियो। उहाँले त्यस जिल्लामा मैले गरेका कारबाहीहरूको खुलारूपमा नै सबैका सामुन्ने आलोचना गर्नुभएको पनि थियो।

मैले उग्रवादी वामपन्थीहरूलाई थुनेकोमा काङ्ग्रेस समर्थकको दोषारोपण पनि खुलारूपमा म उपर उहाँले गर्नुभएको थियो। मलाई गृहमन्त्रालयको के कस्तो निर्देशन थियो र मैले गरेको कामको जाहेरी कहाँसम्म पुगेको थियो भन्नेतर्फ अञ्चलाधीशजस्तो जिम्मेवार पदमा बसेका व्यक्तिले कुनै विचारै नगरी दोषारोपण गरेको सुन्दा मलाई अञ्चलाधीशमाथि दया लागेर आएको थियो। अञ्चलाधीशको भनाइबाट कत्ति पनि उत्तेजित नभएर सौम्य तरिकाले 'वामपन्थी उग्रवादीहरूलाई कारबाही गर्दा अबुझ मानिसहरूले मलाई काङ्ग्रेस भन्दछन् र काङ्ग्रेस समर्थकहरूलाई कारबाही गर्दा मलाई कम्युनिष्ट भन्दछन्। त्यस्तै दुवै थरीलाई कारबाही गर्दा मलाई मण्डले भन्दछन् र केही पनि नगरी बसे कामै नलाग्ने प्रशासक भन्दछन्। मैले यी सबै कुरा बुझेको छु। त्यस सम्बन्धमा मैले त्यस्ता अबुझ व्यक्तिहरूलाई केही भन्नुछैन। तर मैले प्रचलित ऐनकानून र गृहमन्त्रालयको निर्देशन अनुसार कारबाही गरेको हुँ। त्यसको परिणाम जे भोग्नुपर्छ म तयार छु' भनेर मैले अञ्चलाधीशलाई सौम्य तरिकाले जबाफ दिएको थिएँ। त्यसपछि अञ्चलाधीशले लाज पचाउँदै 'ए यार ! मैले त ठट्टा पो गरेको हुँ' भनेर मलाई जबाफ दिएका थिए। मैले प्रचलित ऐनकानून, गृहमन्त्रालयको निर्देशन र अञ्चलाधीशको निर्देशनलाई समेत पालना गर्दागर्दै पनि निज अञ्चलाधीशले मेरा विरुद्धमा नाना थरीका षड्यन्त्रहरू गरेर मलाई दुःख दिन थालेपछि उहाँ र मेरो बीचको सम्बन्ध उहाँकै कारण बिग्रिन गएको थियो। मैले आफूलाई सुरक्षित गर्न जिल्लामा

सोही अनुसारको संयन्त्र तयार गर्दैगएको थिएँ । त्यसपछि निज अञ्चलाधीश मलाई कुनै जानकारी नै नदिई बराबर बर्दिया धाउन थाल्नुभएको थियो ।

त्यसरी मलाई थाहा नै नदिई अञ्चलाधीश बर्दिया जिल्लामा बारम्बार आएर कर्मचारी र राजनीतिक नेताहरूलाई पनि मेरा विरुद्धमा उकास्न थाल्नु भएको थियो । मेरा विरुद्ध अञ्चलाधीशले कर्मचारी र नेताहरूलाई समेत उकास्नुको मुख्य उद्देश्य उहाँले बर्दिया जिल्लामा भ्रष्टाचार गरी आर्थिक लाभ गर्न नै थियो भन्ने उहाँका क्रियाकलापहरूबाट मलाई थाहा भइसकेको थियो । उहाँको र मेरो सम्बन्ध बिग्रनुभन्दा पहिले अप्रत्यक्षरूपमा त्यसको सङ्केत उहाँले मलाई गरिसक्नु भएको थियो । तर म जुन जिल्लामा गए पनि भ्रष्टाचारको विरुद्धमा कार्बाही गर्ने खालको प्रमुखजिल्ला अधिकारी भएको हुँदा भ्रष्ट अञ्चलाधीशको कुरा मैले सुनेर पनि नसुनेझैँ गरेर त्यसै टारिदिएको थिएँ । केही दिनसम्म उहाँले मेरो प्रतीक्षा गर्नुभएको थियोहोला । तर मबाट भ्रष्टाचार गरेर उहाँलाई आर्थिक लाभ पुऱ्याउने काम नहुने देखेपछि मेरा विरुद्ध बर्दिया जिल्लामा आफ्नू भ्रष्ट गिरोह अञ्चलाधीशले तयार गर्नुभएको थियो । त्यतिमात्रै नभएर डाँकाको नाइके श्रीसुरेन्द्र चन्द ठकुरीका डाँकाहरूका साथै मेरै अङ्गरक्षक प्रहरीलाईसमेत प्रयोग गरेर मेरो ज्यानै लिने पनि निज अञ्चलाधीशले दुष्प्रयास गर्नु भएको थियो । मेरो सुझबुझ र दूरदर्शिताले गर्दामात्रै म बाँच्न सफल भएको थिएँ । यस सम्बन्धका केही अरू विवरणहरू यहाँ दिनु सान्दर्भिक ठान्दछु ।

अञ्चलाधीश मिश्र र मेरा बीचमा वैमनस्य बढ्दैगएपछि उहाँले सर्वप्रथम मलाई समाप्त गर्न बर्दिया जिल्लाको अनैतिक, बदनाम तथा डाँकाहरू आफ्नै घरमा पालेर बस्ने सुरेन्द्र चन्द ठकुरीलाई निज अञ्चलाधीशले प्रयोग गर्नुभएको थियो । २०३८ साल चैत्र महिनामा बर्दिया जिल्लाको वनको आरक्षक्षेत्र ठाकुरद्वारामा श्री ५ वीरेन्द्र शिकारमा जानेभएपछि मैले सम्पूर्ण व्यवस्था मिलाउनुपरेको थियो । सवारीको व्यवस्था मिलाउने सन्दर्भमा म एक दिन अञ्चलाधीशको अध्यक्षतामा हुने शान्तिसुरक्षासम्बन्धी बैठकमा भाग लिन अञ्चलाधीशले बोलाए अनुसार नेपालगञ्ज गएको थिएँ । शान्तिसुरक्षाको बैठक साँझपख शुरु भएर अबेर रातसम्म चलेको थियो । बैठक सकिएपछि त्यो रात म नेपालगञ्जमै बस्न चाहन्थेँ । तर

अञ्चलाधीशको पूर्व सुनियोजित षड्यन्त्र अनुसार मलाई तुरुन्तै राती नै बर्दिया फर्कने उहाँले आदेश दिनु भएको थियो। अञ्चलाधीशको फर्कने आदेश भइसकेपछि मैले नेपालगञ्जमा बस्नु उपयुक्त नहुने भएकाले म राती नै नेपालगञ्जबाट बर्दियातिर हिंडेको थिएँ। मेरो गाडी चलाउने चालक नयाँ भएकोले रातमा गाडी हाँक्न सक्तिन भनेर निजले भनेपछि मैले आफैँ गाडी चलाएको थिएँ। गाडी टोयोटाको नयाँ जीप भएको हुँदा चलाउन कुनै अप्ठ्यारो थिएन। मैले आफैँ गाडी चलाउनुपरेपछि मैले साथमा लिएर हिंड्ने गरेको एउटा हतियार निज चालकलाई समाउन दिएको थिएँ र अर्को अङ्गरक्षकले लिएको थियो। रातबिरात हिँड्नुपर्दा पनि मैले आफ्नू अङ्गरक्षकबाहेक अरू धेरै प्रहरी लिएर हिँड्नेगरेको थिइन।

त्यसरी राती नै आफ्नू जिल्लामा फर्किएर जानु भनेर अञ्चलाधीशले भनेपछि मलाई निजको व्यवहारप्रति केही शङ्का लागेको थियो। त्यसै कारण बाटामा आइपर्ने खतराहरूप्रति म अत्यन्त सतर्क भएर गाडी चलाइरहेको थिएँ। बाँके जिल्ला र बर्दिया जिल्लाको सीमानामा पर्ने मान नदी तर्न लाग्दा मान नदीको बगरमा बसिरहेका दुइटा गाडीहरू मेरो गाडीका पछि लागेका थिए। त्यसरी मध्यरातमा दुइटा गाडीहरूले बीच जङ्गलमा मेरो गाडीको पिछा गरेपछि मैले मेरो अङ्गरक्षकलाई बन्दुकमा गोली भरेर तयार रहन आदेश दिएको थिएँ। त्यस्तैमा बर्दिया जिल्लाको मैनापोखरको कच्ची बाटोमा पश्चिमतिरको हावा चलेर मैले चलाएको गाडीले भयङ्करसँग धूलो उडाएको हुँदा मेरा पछि लागेका श्रीसुरेन्द्र चन्दका साथमा भएका डाँकाहरूका गाडीले मेरो गाडीलाई भेट्न सकेका थिएनन्। कच्ची तथा धूले बाटो भए तापनि आफ्नू ज्यान जोगाउन अत्यन्त तीव्र गतिमा मैले गाडी चलाएको थिएँ। हावा पश्चिमबाट चलिरहेकै थियो र पूर्वबाट पश्चिम जाने गाडीहरूलाई पश्चिमबाट पूर्वतर्फ हावासँग बगेको धूलोले बाधा पुऱ्याइरहेको थियो। त्यसै कारणले डाँकाहरूका गाडीहरूले मेरो गाडीलाई भेट्न सकेका थिएनन्। मलाई त्यस बेला चलेको हावाले आफ्नू ज्यान जोगाउन अत्यन्त सहयोग गरेको थियो। त्यसरी हावा चलेर मेरो गाडीबाट उडेको धूलोलाई पूर्वतर्फ तीव्र गतिमा नउडाएको भए सायद ती डाँकाहरूले मलाई भेटेर समाप्त गर्नेथिएहोलान्।

त्यस बेला मेरो भाग्यले मलाई जोगाएको थियो भन्ने मैले ठानेको थिएँ ।

त्यसरी गाडी हाँक्तै हतारहतार मैनापोखरमा पुगेर त्यहाँ रहेको प्रहरी चौकीभित्र गाडी हुलेर त्यहाँ रहेका प्रहरीहरूको सहयोग लिने प्रयास मैले गरेको थिएँ । तर प्रहरीचौकीमा कोही पनि प्रहरी नभएर प्रहरी चौकी रित्तै थियो । मैले त्यही रित्तो प्रहरीचौकीको आड लिएर मसँग भएको .२२ बोरे बन्दुक लिएर डाँकाका विरुद्ध लड्न तयार भएको थिएँ र मेरो अङ्गरक्षकलाई पनि पेस्तोल लिएर गोली चलाउन तयार हुन मैले आदेश दिएको थिएँ । त्यसरी मेरा विरुद्ध आइलागेका डाँकाहरूले प्रहरी चौकीभित्रबाट लड्न तयार भएको मलाई देखेपछि मैनापोखरको बगैँचासम्म पुगेर ती डाँकाहरू त्यहीँबाट नेपालगञ्जतर्फै फर्किएर गएका थिए । केही समय प्रहरी चौकीमै बसेर कुनै खतरा छैन भन्ने निश्चय भएपछि म आफैँले गाडी चलाएर गुलरिया गएको थिएँ ।

अञ्चलाधीश श्रीमनमोहन मिश्रबाट रचिएको त्यस प्रकारको एउटा षड्यन्त्र असफल गराउन म सफल भएपछि पनि फेरि उहाँले मेरा विरुद्ध अर्को षड्यन्त्र गर्नु भएको थियो । त्यस बेला प्रमुखजिल्ला अधिकारीका लागि अङ्गरक्षकको छुट्टै दरबन्दी नभएर जिल्लाको प्रहरीनिरीक्षकको निगाहमा अङ्गरक्षकको व्यवस्था गरिने चलन थियो । अञ्चलाधीश मिश्रले नै जिल्लाका तत्कालीन प्रहरी निरीक्षक श्रीअशोक श्रेष्ठलाई मेरा विरुद्धमा गराएपछि निज प्रहरीनिरीक्षक र मेरो बीचको सम्बन्ध बिग्रिएको थियो । अञ्चलाधीशको निर्देशन अनुसार निज प्रहरीनिरीक्षक मेरा विरुद्धमा नाना थरीका कामहरू गरिरहन्थे । मैले दिएका निर्देशनका विरुद्ध उनी खुलेआम काम गर्ने गर्दथे । उनीबाट काम नचल्ने देखेपछि मैले डी.एफ्.ओ. श्रीलीलाधर शर्मासँग सल्लाह गरेर उहाँ अन्तर्गत रहेको वनसुरक्षाबलको सहयोग लिएर जिल्लामा काम गर्नेगरेको थिएँ । त्यसबेला वनसुरक्षाबलका प्रमुख कर्नेल थिए । डी.एफ्.ओ. श्रीलीलाधर शर्मा र मेरा बीचमा अत्यन्त राम्रो सम्बन्ध भएको हुनाले उहाँले मलाई सहयोग गर्नुभएको थियो । जिल्लामा गर्नु पर्ने शान्तिसुरक्षा लगायतका सबै काममा वनसुरक्षाबलले मलाई सहयोग गरेको थियो । त्यसरी जिल्लामा कुनै प्रकारको शान्ति सुरक्षामा खलल आउन नदिईकन मैले काम गरेको देखेपछि अञ्चलाधीशलाई अत्यन्त डाहा भएको थियो । जिल्लाका प्रहरी निरीक्षक श्रीअशोक श्रेष्ठ, जिल्लाप्रशासन

कार्यालयका प्रशासकीय अधिकृत श्रीबुद्धिसागर त्रिपाठी, भूमिसुधार अधिकारी श्रीभरतराज ज्ञवाली र ने.गु.वि.को बर्दिया जिल्लामा रहेको अधिकृत श्रीमोहन शर्मासमेतलाई अञ्चलाधीशले आर्थिक प्रलोभन देखाएर मेरा विरुद्ध गराउनुभएको थियो ।

त्यसरी अञ्चलाधीशले जति दुःख दिन खोजे तापनि  जिल्लाका अरू कर्मचारीहरू र वनको सुरक्षाबलबाट मैले काम चलाएको देखेपछि मलाई जसरी पनि समाप्त गर्ने अर्को जघन्य कुकृत्य निज अञ्चलाधीशले गर्नुभएको थियो । म बारम्बार जिल्ला भ्रमणमा आफ्ना सहयोगीहरूका साथ हिँड्ने गर्दथेँ । जिल्ला भ्रमणका सन्दर्भमा एक पटक म बर्दियाको पश्चिमपट्टि कर्णाली नदीको बीच टापुमा रहेको व्यापारिक क्षेत्र राजापुरको भ्रमणमा आफ्ना सहयोगीहरूका साथ गएको थिएँ । राजापुर बजारबाट उत्तरतर्फको भित्री गाउँमा भ्रमण गर्दै गएपछि त्यहीँ रात परेको हुँदा हामीहरू एउटा थारु चौधरीको घरमा वास बसेका थियौँ । रातीको खाना खाएपछि हामीहरू सबै आराम गरेर सुतेका थियौँ । मसँग गएको प्रहरीनिरीक्षक श्रीअशोक श्रेष्ठले पठाएको मिश्र थरको नयाँ अङ्गरक्षक थियो । धेरै जसो अङ्गरक्षकहरू निज प्रहरीनिरीक्षकका इच्छा अनुसार बारम्बार बदलिइरहन्थे । मैले माथि उल्लेख गरे अनुसार जिल्लाको प्रहरी निरीक्षकको निगाहमा अङ्गरक्षक लिनुपर्ने प्र.जि.अ.को बाध्यता थियो । प्र.जि.अ.ले भनेको मान्ने असल चालचलनको अङ्गरक्षक भयो भने निज प्रहरी निरीक्षकले तुरुन्तै बदलेर सबैभन्दा नराम्रो र खराब चालचलन भएको अङ्गरक्षक मलाई पठाउने गर्दथे । त्यस भ्रमणमा जाँदा पनि निजले अञ्चलाधीश मिश्रको निर्देशनअनुसार निजको साइनु पर्ने मिश्र थर भएको अङ्गरक्षक पठाएका थिए । जुन सुकै अङ्गरक्षक पठाए पनि म त्यति वास्ता गर्दिनथेँ । किनभने मैले जे भन्यो त्यसको उल्टो व्यवहार गर्ने भएको हुँदा मैले प्रहरीनिरीक्षक श्रीअशोक श्रेष्ठलाई कुनै पनि काम अह्राउन छोडिदिएको थिएँ । राजापुर भ्रमणमा जाने बेलामा नयाँ अङ्गरक्षक पठाएकोमा पनि मैले कुनै प्रतिक्रिया व्यक्त गरेको थिइन ।

त्यस्तो सन्दिग्ध वातावरणमा जिल्लाभ्रमणको सन्दर्भमा राजापुर हिँड्नलागेको बेलामा मेरी श्रीमतीलाई त्यस अङ्गरक्षकमाथि शङ्का लागेर राम्रोसँग साहेबको हेरचाह गर्नु भनेर अह्राएकी रहिछन् तर मलाई सो कुरा

थाहा थिएन । राजापुर गाउँको चौधरीको घरमा रातीको खाना खाँदाखेरि मैले मेरो अङ्गरक्षक मिश्रलाई खाना खुवाउन खोजेको थिएँ तर निज त्यहाँबाट बाहिर गइसकेको थियो । निजले बाहिर गएर रक्सी खाएर हामीहरू सुतिसकेपछि मध्यरातमा परबाट कराउँदै आएको मैले सुनेको थिएँ । ए के रहेछ ? भनेर म सतर्क भएर ओछ्यानबाट उठेर बसेको थिएँ । मसँग गएका अरू मित्रहरू भने मस्त निदाइसकेका थिए । त्यसै बीचमा निज अङ्गरक्षकले उसको साथमा रहेको पेस्तोलमा पूरै गोली भरेर प्रमुखजिल्ला अधिकारीको शत्रुलाई मार्छु भन्दै मेरो छातीमा निजले पेस्तोल तेर्छ्याएको थियो । मैले जति सम्झाउँदा पनि निजले मैतर्फ पेस्तोल सोझ्याएपछि मलाई नै समाप्त गर्न अञ्चलाधीश मिश्रले निर्देशन दिएको होला भनेर मैले शङ्का गरेको थिएँ । छोटो नाल भएको हतियार आफूतिर शत्रुले तेर्स्याएमा कसरी त्यसबाट जोगिनुपर्छ भन्ने सम्बन्धमा सैनिक तालीम लिँदा मैले सिकिसकेको थिएँ । त्यही तालिमको शिक्षाले मलाई त्यस बेला काम दिएको थियो । निज अङ्गरक्षकले मेरो छातीमा सोझ्याएको छोटो नाल भएको पेस्तोललाई आकाशतिर फर्काएर निजको हातबाट पेस्तोल छुटाउन खोज्दा निज अङ्गरक्षकले पेस्तोलको डोरी पूरै आफ्ना हातमा बाँधेको रहेछ । त्यो पेस्तोल मेरो छातीबाट हटाउन निज अङ्गरक्षक र मेरा बीचमा निकै बेरसम्म सङ्घर्ष चलेको थियो ।

त्यसरी सङ्घर्ष भइरहँदा सुतिरहेका अरू मसँग गएका जिल्ला पञ्चायतका सदस्य श्रीधर्मसिंह कुँवर, सार्वजनिक निर्माणशाखाका इञ्जिनीयर र अरू अधिकृतहरूलाई पनि सहयोगको लागि मैले बोलाएको थिएँ । गोली भरेको पेस्तोल हातमा लिएको अङ्गरक्षक र मेरा बीचमा सङ्घर्ष चलिरहेको देखेपछि केही व्यक्तिहरू सुतेको ठाउँबाट उठेर डरले बाहिर भागेका थिए भने केही व्यक्तिहरू मलाई सहयोग गर्न म कुस्ती खेलिरहेको ठाउँमा पुगेका थिए । हामी सबै जना भएर उसको हातबाट गोली भरेको पेस्तोल छुटाउन खोज्दा नसकेपछि निजलाई भुइँमा लडाएर थिचेपछिमात्र सो गोली भरेको पेस्तोल निजबाट खोस्न सकिएको थियो । हामीहरू रातभरि उसलाई कुरेर बसेका थियौँ । भोलिपल्ट बिहान गाडीमा राखेर राजापुर प्रहरीथानामा लगेर निजलाई बुझाएपछि मेरो ज्यान सुरक्षित भएको थियो ।

उपर्युक्त अनुसारको मेरा विरुद्धमा अञ्चलाधीश श्रीमनमोहन मिश्र र

जिल्लाका प्रहरीनिरीक्षक श्रीअशोक श्रेष्ठबाट भएको जघन्य षड्यन्त्रलाई असफल पार्न म सफल भएको थिएँ। उक्त सम्बन्धमा मैले अञ्चलाधीश श्रीमनमोहन मिश्र र प्रहरीनिरीक्षक श्रीअशोक श्रेष्ठलाईसमेत मेरातर्फबाट औपचारिकरूपमा कुनै प्रकारको जानकारी दिएको थिइन। किनभने उनीहरूले नै रचेको षड्यन्त्र असफल भएको कुरा उनीहरूलाई नै जानकारी दिनु आफ्नै लागि श्रेयस्कर नहुने देखेर म उनीहरूसँग केही पनि नभए जस्तो गरी चुप लागेर बसेको थिएँ। त्यस कुराको पूर्ण विवरण मैले गृहमन्त्रालयमा पठाएको थिएँ। त्यस बेला गृहमन्त्रालयका सचिव श्रीविष्णुप्रताप शाह हुनुहुन्थ्यो। उहाँसँग मेरो सम्बन्ध अत्यन्त राम्रो थियो। त्यस घटनापछि मैले प्रहरीको अङ्गरक्षक नलिएर आफ्नै कार्यालयमा रहेको फरेष्टरको दरबन्दीमा एकजना भारतीय सेनाको अवकाश प्राप्त नेपाली नागरिक सुबेदार गुरुङलाई नियुक्ति दिएर अङ्गरक्षकको काम चलाएको थिएँ। निज सुबेदार गुरुङसँग भारत र नेपालसमेत दुवैतर्फको इजाजतपत्र भएको राइफल थियो। त्यही राइफलको सहाराले म बर्दिया जिल्लामा र भारतको लखनौसम्म पनि यात्रा गर्ने गर्दथेँ।

२०३८ साल चैत्र महिनामा श्री ५ वीरेन्द्रको सपरिवार बर्दियाको ठाकुरद्वारा आरक्षक्षेत्रमा शिकारका लागि सवारी भएको थियो। माथि उल्लेख भएका ज्यानै समाप्त गर्ने किसिमका दुईओटा जघन्य षड्यन्त्रहरू असफल भएपछि राजाको सवारीको मौका छोपेर मेरो जागिर समाप्त गर्ने गरी अञ्चलाधीश श्रीमनमोहन मिश्रले अत्यन्त सुनियोजितपूर्ण ढङ्गको अर्को षड्यन्त्र गर्नु भएको थियो। राजा शिकारका लागि आरक्षभित्रको क्याम्पमा आउने दुई दिन अगाडि हामी जिल्लाका सबै अधिकृतहरू अञ्चलाधीशको आदेशानुसार ठाकुरद्वारा सवारीक्याम्पमा गएका थियौँ। त्योभन्दा पहिले सवारीका लागि मैले गर्नु पर्ने सबै व्यवस्था अञ्चलाधीशको असहयोग हुँदाहुँदै पनि मिलाइसकेको थिएँ। सवारीमा चाहिने आवश्यक रासनपानी, खसी, शिकारका लागि बाघलाई चाहिने राँगा र अन्य सबै कुराको मैले जिल्लाका अड्डा प्रमुखहरूको सहयोग लिएर व्यवस्था गरेको थिएँ। अञ्चलाधीशले मैले गरेको व्यवस्था बिगार्न नाना थरीका चाल चल्नुभएको थियो तापनि उहाँ सफल हुन सक्नु भएको थिएन।

अञ्चलाधीश श्रीमनमोहन मिश्रले जिल्लाका काङ्ग्रेसी र कम्युनिष्ट

नेताहरूको सहयोग लिएर मेरा विरुद्धमा फेरि अर्को षड्यन्त्र गरेको मैले ठाकुरद्वारा गएपछिमात्रै थाहा पाएको थिएँ। राजा सवारी हुने क्याम्पको अगाडि रहेको जङ्गलमा निज अञ्चलाधीशले बर्दिया जिल्लाका सुकुमवासीहरू उठाएर रातारात झुप्राहरू बनाएर बसाल्न लगाउनु भएको रहेछ। सो कुरा काठमाडौंबाट प्रधानमन्त्री श्रीसूर्यबहादुर थापा सवारीको एक दिन अगाडि सवारीक्याम्पमा पुगेपछिमात्रै मलाई थाहा हुन आएको थियो। अञ्चलाधीश मिश्रले त्यसैलाई निहुँ बनाएर मलाई अप्ठेरोमा पार्न खोज्नुभएको थियो। मैले डी.एफ्.ओ. र वनसुरक्षाबलका कर्नेलसमेतको सहयोग लिएर राजा त्यहाँ पुग्नुभन्दा अघिल्लो रातमा नै तथाकथित सुकुमवासीहरूलाई उठाएर उक्त स्थानबाट धपाउन सफल भएको थिएँ। सो षड्यन्त्र पनि असफल भएपछि निज अञ्चलाधीशले सवारीमा खटिएका तत्कालीन शाही नेपाली सेनाका सहायकरथी तथा सवारीक्याम्पका मुख्यअधिकृत श्रीनरबहादुर बूढाथोकीलाई हातमा लिएर मलाई एक्लो पार्ने दुष्प्रयास गर्नुभएको थियो। उहाँले सवारीमा खटिएका सहायकरथी श्रीनरबहादुर बूढाथोकीसँग मिलेर राजा बस्ने क्याम्पमा मलाई बस्न नदिएर क्याम्पभन्दा बाहिर नै राख्नुभएको थियो। राजा क्याम्पमा भित्रिइसकेपछि पनि मलाई अञ्चलाधीशले सवारीमा गएका सबैका अगाडि नाना थरीका दोषहरू लगाएर अप्ठेरोमा पार्ने असफल प्रयास गर्नुभएको थियो। म क्याम्पभन्दा बाहिरै बसेको भए तापनि सवारीसचिव तथा तत्कालीन गृहसचिव श्रीविष्णुप्रताप शाह मेरा पक्षमा भएका हुँदा निज अञ्चलाधीशले मेरा विरुद्धमा राजालाई खास केही भन्ने मौका पाउनुभएको रहेनछ।

त्यसरी सवारीकै समयमा अञ्चलाधीश र मेरा बीचमा तानातान चलिरहेकै बेला गृहसचिव श्रीविष्णुप्रताप शाह र मेरा बीचमा जिल्लाको वस्तुस्थिति र अञ्चलाधीशको विषयसमेतलाई लिएर लामू कुराकानी भएको थियो। शाहले मलाई कुनै कुराको चिन्ता नलिन आश्वासन दिनुभएको थियो। त्यसो भए तापनि अञ्चलाधीश मिश्रले बारम्बार मेरा विरुद्धमा चल्नसक्ने चालहरूप्रति म अत्यन्त सतर्क नै थिएँ। आफ्नू सुरक्षाका लागि राजालाई कसरी भेट्ने भनेर मैले शोचिरहेकै बेलामा मेरा कार्यालयका लेखापाल श्रीमाधव श्रेष्ठले मलाई राजा भेट्ने सम्बन्धमा एउटा युक्ति बताएका थिए। उनैको सल्लाह अनुसार मैले राजालाई जिल्लाको वस्तुस्थिति

लेखेर सोझै राजाकै हातमा पुग्ने गरी जाहेरी पठाएको थिएँ। उक्त जाहेरी पुग्ने बित्तिकै राजाबाट मलाई भेट्न तुरुन्तै बोलाइएको थियो। अञ्चलाधीश मिश्रले अञ्चलको वस्तुस्थिति जाहेर गर्नुभन्दा पहिले नै राजा वीरेन्द्रलाई भेटेर मैले जिल्लाको वस्तुस्थिति बताएको थिएँ। त्यसरी सोझाको दैव सहारा भने जस्तो गरेर मैले राजालाई भेटेपछि अञ्चलाधीशको मनोबल घटेरगएको थियो। हुन त अञ्चलाधीशसँग जतिसुकै मेरो वैमनस्य रहेको भए तापनि राजालाई मैले भेटेको बेलामा राजाबाट नियुक्त अञ्चलाधीशका विरुद्ध राजालाई नै कुरा लगाउनु उपयुक्त नहुने देखेर मैले राजालाई कुनै कुरा पनि भनेको थिइन। राजासँग भेट हुँदा कुनै पनि व्यक्तिका सम्बन्धमा कुरा नगरेर केवल जिल्लाको वस्तुस्थितिमात्रै मैले बताएको थिएँ। तैपनि अञ्चलाधीश



बर्दिया जिल्लाको ठाकुरद्वारास्थित आरक्षक्षेत्रभित्रको सवारीक्याम्पमा परिवारसहित लेखक, २०३८

मिश्रलाई भने मैले राजालाई उहाँका विरुद्ध पोल लगाएँ भनेर शङ्का परेको थियो। केही दिन पछि शिकार समाप्त गरेर राजाको सवारी काठमाडौं फर्किएको थियो। राजाको सवारी फर्किएपछि पनि अञ्चलाधीश र मेरा बीचमा राम्रो सम्बन्ध कायम भएको थिएन।

म बर्दिया जिल्लामा झण्डै २ वर्ष प्रमुखजिल्लाअधिकारी भएर बसेको थिएँ। मेरो त्यही कार्यकालमा अर्थात् २०३८ सालमा राष्ट्रिय पञ्चायतका सदस्यको लागि निर्वाचन भएको थियो। उक्त निर्वाचनलाई प्रतिबन्धित नेपाली काङ्ग्रेसले बहिष्कार गर्न अभियान नै चलाएको हुँदा काङ्ग्रेसी नेताहरूलाई केही दिन थुनामा राखेर निर्वाचन समाप्त भएपछि मैले छोडिदिएको थिएँ। थुनामा परेका काङ्ग्रेसी नेताहरूमध्ये श्रीवासुदेव शर्मालाई अञ्चलाधीश

मिश्रले जमानत बसेर छुटाउन खोज्दा अघिल्लो वर्ष कम्युनिष्टहरू थुनामा राख्दा मलाई काङ्ग्रेसको लाञ्छना उहाँले नै लगाएको हुँदा मैले छोड्न नमानेर अञ्चलाधीशलाई खालि हात नेपालगञ्ज फिर्ता पठाइदिएको थिएँ ।

बर्दिया जिल्लामा भएको राष्ट्रिय पञ्चायतको निर्वाचनमा अञ्चलाधीश मिश्रले गलत मानिसलाई जिताएर पठाएका हुँदा उहाँको अत्यन्त बदनाम भएको थियो । जिल्ला पञ्चायतको चुनाव भएको थिएन । श्रीशालिग्राम चौधरीलाई जिल्ला पञ्चायतको तदर्थसमितिमा राखेर काम चलाइएको थियो । अञ्चलाधीश मिश्रले मेरा विरुद्ध षड्यन्त्र गर्ने सन्दर्भमा जिल्ला पञ्चायतका सभापति श्रीशालिग्राम चौधरीसमेतका अरू सदस्यहरूलाई पनि आश र त्राससमेत देखाएर मेरा विरुद्धमा जिल्ला पञ्चायतको बैठकमा खेदको प्रस्ताव पारित गराउने दुष्प्रयास गर्नुभएको थियो । सो कुरा थाहा पाएर मैले सभापति श्रीशालिग्राम चौधरी लगायत सबै सदस्यहरूलाई जिल्लाप्रशासनकार्यालयमा बोलाएर सम्झाएपछि उनीहरूले अञ्चलाधीशले पठाएको मेरा विरुद्धको खेदको प्रस्ताव पारित नगरेर त्यसै फर्काइदिएका थिए । मैले पनि अञ्चलाधीशले मेरा विरुद्धमा पञ्चनेताहरूलाई उठाएर खेदको प्रस्ताव जिल्लापञ्चायतबाट पारित गराउने असफल कोशिश गरेको जबाफमा बर्दिया जिल्लाका ३५ ओटै सबै गाउँ पञ्चायतहरूमा एकै दिन अञ्चलाधीशका विरुद्ध खेदको प्रस्ताव पारित गर्न लगाएर म काठमाडौं काजमा आएको थिएँ । मलाई सो काम गर्न श्रीदमनध्वज चन्दले सहयोग गरेका थिए ।

म काठमाडौंबाट फर्केर जिल्लामा गएपछि सो सम्बन्धमा अञ्चलाधीश मिश्रले मसँग जिज्ञासा राख्नु भएको थियो । म काठमाडौं गएको बेलामा तपाईंकै कारणले गाउँपञ्चायतहरूले तपाईंको विरुद्धमा खेदप्रस्ताव पारित गरेका होलान् । मलाई केही थाहा छैन । म जिल्लामा भएको भए त्यस्तो हुन दिने थिइन भनेर मैले जबाफ दिएपछि उहाँ नाजबाफ हुनु भएको थियो ।

त्यसरी मेरा विरुद्धका उहाँका षड्यन्त्रहरू सबै नै असफल भएर त्यसको जबाफ मबाट उहाँले प्रत्येक पटक सशक्तरूपमा पाउनुभएको थियो । त्यस पछि २०३९ साल जेठमा जिल्लापञ्चायतको चुनाव भएको थियो । त्यसमा मैले माथि उल्लेख गरेको अत्यन्त अनैतिक र डाँकाको नाइके मानिने श्रीसुरेन्द्र

चन्दले अञ्चलाधीश मिश्रको सहयोगमा जिल्लापञ्चायतको सभापतिमा निर्वाचन जितेका थिए। जिल्लामा सभापति भएपछि उनले विभिन्न अपराधका साथै भ्रष्टाचार पनि बढाएको हुँदा निजलाई मैले वारण्ट जारी गरेर जिल्लाबाट खेदेको थिएँ। म बर्दिया जिल्लामा बसुन्जेल उनी जिल्लामा फर्किएर जानसकेका थिएनन्। मेरो कार्यकालमा शान्तिसुरक्षा कायम गर्ने कामको सहयोगी प्रहरीनिरीक्षक लगायतका कर्मचारीहरूलाई अञ्चलाधीशले मेरो विपरीतमा गराएको भए तापनि मैले माथि उल्लेख गरे अनुसारका डी.एफ्.ओ. श्रीलीलाधर शर्मा र वनतर्फका कर्णेलको सहयोग लिएर जिल्लामा शान्तिसुरक्षा कायम गर्न सफल भएको कुरा माथि उल्लेख गरिसकेकै छु। अञ्चलाधीशले बर्दिया जिल्लाका विभिन्न क्षेत्रमा वन फँडानी गराएर बसोवास गर्न प्रोत्साहित गराइएका तथाकथित सुकुमवासीहरूलाई पनि डी.एफ्.ओ. श्रीलीलाधर शर्मा र वनतर्फका सुरक्षा अधिकारीहरूको सहयोग लिएर वनक्षेत्रबाट हटाउन म सफल भएको थिएँ।

त्यसरी २ वर्षको अन्तरालमा बर्दिया जिल्लामा प्रमुख जिल्लाअधिकारी भएर काम गर्दा मैले ज्यानको बाजी लगाएर राजाबाट नियुक्त भएका खलनायक अञ्चलाधीशसँग बारम्बार सङ्घर्ष गरेर जिल्लामा शान्तिसुरक्षा कायम गर्नुपरेको थियो।

त्यसरी आफ्ना मातहतका प्रहरी लगायतका कर्मचारीहरूले सहयोग नगर्दा नगर्दै पनि मैले सङ्घर्ष गरेर काम गर्नु परेको परिस्थिति संझँदा अहिले पनि मलाई सपनाजस्तो लागेर आउँछ। बर्दिया जिल्लामा मलाई सफल बनाउन सहयोग गर्नेहरूमा बर्दिया जिल्लाका तत्कालीन मालका हाकिम श्रीमहेन्द्रप्रसाद श्रेष्ठ, डी.एफ्.ओ. श्रीलीलाधर शर्मा, जिल्लाप्रशासनकार्यालयका लेखापाल श्रीमाधव श्रेष्ठ र पञ्च नेतामा श्रीदमनध्वज चन्दलाई म कहिल्यै पनि बिर्सिनसक्तिन।



हात्तीमा लेखक र इन्दिरा बर्दिया

बर्दिया जिल्लाबाट झापा जिल्लामा सरुवा हुनुभन्दा पहिले २०३९ सालको आषाढ मसान्तको सालतमामीसमेत गरेर म काठमाडौं काजमा

आएको थिएँ । बर्दिया जिल्लामा प्रमुखजिल्लाअधिकारी भएर बस्दा बारम्बार अञ्चलाधीश श्रीमनमोहन मिश्रसँग सङ्घर्ष गर्नु परेको हुँदा बर्दिया जिल्लाबाट अरू जिल्लामा सरुवा नभईकन वा अञ्चलाधीश मिश्र भेरी अञ्चलबाट अन्यत्र सरुवा नभईकन बर्दिया जिल्लामा फर्कन्न भन्ने अडान लिएर गृहमन्त्रालयमै हाजिर भएर म बसेको थिएँ । त्यसरी म अडान लिएर बसिरहेकै बेलामा अधिराज्यभरिका प्रमुखजिल्लाअधिकारीहरूको सरुवा हुन्छ भन्ने थाहा पाएपछि म झन् आफ्नो अडान लिएर सरुवा भएपछिमात्रै जाने भनेर दशैँसम्म नै गृहमन्त्रालयमा हाजिर भएर काठमाडौँमा बसेको थिएँ । मेरो सरुवाका सम्बन्धमा तत्कालीन गृहसचिव श्रीविष्णुप्रताप शाहसँग कुरा गर्दा उहाँले मलाई अनुकूल पर्ने सुगम जिल्लामा सरुवा गर्ने आशय व्यक्त नगरेपछि मैले तत्कालीन गृहमन्त्री श्रीनयनबहादुर स्वाँरलाई भेटेर आफ्नू इच्छा व्यक्त गरेको थिएँ ।

तत्कालीन गृहमन्त्री स्वाँर एक पटक बर्दिया जिल्लाको भ्रमणमा जानुभएको थियो । त्यस समयमा उहाँले आफ्ना नाता, कुटुम्ब र कार्यकर्ताहरूलाई मेरा अगाडि नै ‘मेरो नाम लिएर मेरा सम्बन्धित व्यक्तिहरू कोही काम गराउन आएभने नगरिदिनु’ भनेर मलाई निर्देशन दिनुभएको थियो । त्यस बेलाका पञ्चायतकालीन अरू मन्त्रीहरूभन्दा भिन्नै स्वभावका स्वाँरलाई मैले देखेर म उहाँसँग अत्यन्त प्रभावित भएको थिएँ । त्यसैगरेर उहाँ पनि मेरो काम देखेर मसँग प्रभावित हुनु भएको कुरा मैले सरुवाका सम्बन्धमा उहाँसँग कुरा गर्दा मलाई उहाँले बताउनु भएको थियो । प्रमुखजिल्ला अधिकारीहरूको सरुवाका लागि गृहसचिवले टिप्पणी गृहमन्त्रीसमक्ष पेश गर्दा मलाई गृहसचिव शाहले दुर्गम जिल्लामा सरुवा गर्ने गरी प्रस्ताव पेश गर्नुभएको रहेछ । तर गृहमन्त्री स्वाँरले त्यसबेला रिक्त रहेको झापा जिल्लाको प्रमुखजिल्लाअधिकारीमा मेरो नाम राखेर सदर गर्नुभएपछि गृहसचिव श्रीविष्णुप्रताप शाह मसँग टेढिनुभएको थियो ।



# झापा जिल्लामा

त्यसरी मेरो सरुवा बर्दिया जिल्लाबाट झापा जिल्लाको प्रमुखजिल्ला अधिकारीमा भएको थियो। मेरो सरुवाको साथसाथै अञ्चलाधीश श्रीमनमोहन मिश्र पनि खोसुवामा पर्नुभएको थियो। मेरो सरुवा भएपछि बर्दिया जिल्ला गएर म बिदा हुन चाहन्थेँ। मलाई ठूलो सङ्कट परेको बेला हरतरहले सहयोग पुऱ्याउने राष्ट्रसेवककहरूका साथै राजनीतिक नेता श्रीदमनध्वज चन्द लगायतका सहयोगी मित्रहरूलाई म धन्यवाद दिन चाहन्थेँ। तर सोझै गृहमन्त्रालयबाटै रवानापत्र लिएर झापा जिल्लाप्रशासन कार्यालयमा हाजिर हुन जानु भन्ने गृहमन्त्रालयको आदेश भएकाले म बर्दिया जिल्लामा बिदा हुन जान सकेको थिइन। अहिलेसम्म पनि मलाई त्यसको पश्चात्ताप लागिरहेको छ। बर्दियाजिल्लामा प्रमुखजिल्ला अधिकारी भएर काम गर्दा धेरै मित्र र केही शत्रु पनि मैले कमाएको थिएँ। त्यस जिल्लामा प्रमुखजिल्ला अधिकारी भएर काम गर्दा मेरो प्रशासनिक जीवनको अत्यन्त क्रियाशील तथा ऊर्जावान् अवस्था थियो। मलाई रातदिन काम गर्दा पनि थकाइ र आलस्यसमेत लाग्दैनथ्यो।

अञ्चलाधीश मिश्रले विभिन्न षड्यन्त्र गरेर मेरो ज्यानै लिने दुष्प्रयास गर्दा पनि कत्ति केही आफ्नू कर्तव्यबाट विचलित नभई मैले काम गरेको थिएँ। धेरैथरी सुख र दुःखका अनुभवहरू भएको जिल्लाबाट सरुवा हुँदा मैले बिदा हुन जानु अत्यन्त आवश्यक थियो। जे होस्, म त्यस जिल्लामा बिदा हुन जान नपाए तापनि मसँग त्यस जिल्लामा काम गरेका सहयोगी राष्ट्रसेवक र राजनीतिक नेताहरूको स्नेह मैले अहिलेसम्म पनि पाइरहेकै छु। म यसैलाई आफ्नू ठूलो उपलब्धि सम्झन्छु।

त्यसरी बर्दिया जिल्लामा ज्यानको बाजी नै लगाएर ठूलो सङ्घर्षका साथ काम गरेर सफल भएपछि झापा जिल्लामा प्रमुखजिल्ला अधिकारी भएर जान पाउँदा मलाई ठूलो सन्तोष भएको थियो। बर्दिया जिल्लामा दुई बर्षसम्म भोग्नु परेको मानसिक पीडा र शारीरिक थकान हटेर गएको मैले अनुभूति गरेको थिएँ।

झापा जिल्लाप्रशासन कार्यालयमा २०३९ साल असोजको पहिलो साताामा परिवारसहित गएर म हाजिर भएको थिएँ। म झापा जिल्लाप्रशासनकार्यालयमा हाजिर हुन जाँदा बर्दिया जिल्लाप्रशासन कार्यालयमा जस्तै झापा जिल्लाप्रशासन कार्यालयमा पनि गाडी रहेनछ। म कार्यालयमा हाजिर भएर काम गर्न थालेको तीन दिन पछि नयाँ अञ्चलाधीश डा. नरेन्द्र थापा पनि अञ्चलाधीश कार्यालय झापामा पुग्नुभएको थियो। साबिक अञ्चलाधीश श्रीमदन गिरी र साबिक प्रमुखजिल्ला अधिकारी श्रीबाबुराम पौडेलका बीचमा ठूलो सङ्घर्ष भएका कारण श्रीबाबुराम पौडेललाई झापा जिल्लाबाट पाल्पा जिल्लाको प्रमुखजिल्ला-अधिकारीमा सरुवा गरिएको थियो। श्रीमदन गिरी अत्यन्त अनैतिक र दुराचारी व्यक्ति भएका हुँदा निजको अञ्चलाधीश पदबाट खोसुवा नै भएको थियो। त्यसरी साबिक अञ्चलाधीश खोसिनुका साथै प्रमुखजिल्लाअधिकारीको सरुवा भएपछि हामीहरू दुवै जना झापा जिल्लामा गएका थियौँ। अञ्चलाधीशले मेची अञ्चलको सदरमुकाम इलाममा नै बस्नु पर्दथ्यो तापनि धेरै अघिदेखि अञ्चलाधीशहरू झापा जिल्लाको सदरमुकाम चन्द्रगढीमा नै टुरमुकाम भनेर बस्नेगरेका थिए। हामी दुवैजना त्यस क्षेत्रमा नयाँ थियौँ। म पुरानू प्रशासक र अञ्चलाधीश नयाँ भए तापनि काम गर्न कुनै असजिलो परेको थिएन।

वास्तवमा झापा जिल्ला प्रशासनिकरूपमा शान्त जिल्ला थियो तापनि राजनीतिकरूपमा अत्यन्त संवेदनशील जिल्ला भएको हुँदा विचार पुऱ्याएरमात्रै काम गर्नुपर्दथ्यो। त्यस जिल्लामा अरू धेरै समस्याहरू नभए तापनि बर्दिया जिल्लामा जस्तै सुकुमवासीको समस्या भने त्यहाँ पनि थियो। भारतसँग पूर्व र दक्षिणमा  सीमा जोडिएको हुँदा सीमापारबाट हुने अपराध लगायतका पशुचोरी, तस्करी, विदेशी सामानको अबैध पैठारी, डाँका आदि विविध समस्याहरू पनि त्यस जिल्लामा विद्यमान थिए। काँकरभिटा सीमादेखि मोरङ जिल्लाको सीमा उरलाबारीसम्म पूर्वपश्चिमराजमार्गको भाग पर्ने हुँदा पनि विभिन्न बहाना बनाएर राजमार्गमा सञ्चालन हुने यातायातका साधनको बारम्बार हड्ताल भइरहने परम्परा रहेछ। म जिल्लामा पुगेको अर्को दिनदेखि नै चारआलीमा बसबिसौनीको माग राखेर मजदुरसङ्गठनका

प्रतिनिधिहरूले मलाई सताउन शुरुगरेका थिए ।

त्यसबेला झापा जिल्लामा मजदुरप्रतिनिधिका रूपमा कार्यालयहरूमा दुःख दिइहिंड्ने र मौका परे धम्कीसमेत दिनेहरूमा श्रीदेवराज रिजाल र श्रीहेमराज गिरी भन्ने कुख्यात दुई जना मण्डले व्यक्तिहरू थिए । उनीहरूको जीउ पाल्ने तरिका नै त्यही थियो । तिनै दुई जना तथाकथित मजदुरनेताहरू मेरा कार्यालयमा आएर चारआलीमा बसबिसौनी तुरुन्तै राख्ने व्यवस्था नभएमा राजमार्गमा यातायात चल्न नदिने भनेर धम्की दिएका थिए । मैले सबै कुरा बुझ्निनसकेकोले कुरा बुझ्रेरमात्र त्यस सम्बन्धमा केही गर्न सक्ने जबाफ दिएर तिनीहरूलाई फिर्ता पठाइदिएको थिएँ । मैले त्यस सम्बन्धमा अध्ययन र छानविन गर्न नपाउँदै अर्को दिन बिहानैदेखि तिनीहरूले चारआली पूर्वपश्चिम राजमार्गमा तगारो तेर्स्याएर यातायात चल्न नदिएर हड्ताल शुरुगरेको खबर एकाबिहानै चन्द्रगढीमा मलाई आएको थियो । सो कुरा सुनेपछि अञ्चलाधीश आत्तिनु भएको थियो । मैले सबै कुरा ठीक गर्ने आडभरोसा अञ्चलाधीशलाई दिएर आफ्नू गाडी नभएकाले अञ्चलाधीशको नै गाडी लिएर प्रहरीकासाथ म चारआली गएको थिएँ । राजमार्गमा पूर्णरूपमा आवतजावत बन्द भएको थियो । म पुगेपछि तिनै मजदुरनेता श्रीदेवराज र श्रीहेमराज सहितका उच्छृङ्खल व्यक्तिहरूको हुलले मलाई घेराउ गरेको थियो । म चढेर गएको अञ्चलाधीशको गाडीलाई हुल्याहा व्यक्तिहरूले तोडफोड गरेका थिए र गाडीमा लगाएको राष्ट्रिय झण्डासमेत च्यात्ने काम गरेका थिए । उद्दण्ड जमातले विभिन्न नाराहरूकासाथ ढुङ्गा बर्षाउन शुरुगरेपछि केही व्यक्तिहरू घाइते पनि भएका थिए ।

त्यो सबैकुरा देखेपछि मेरा साथमा गएका प्रहरी निरीक्षक श्रीशेरसिंह गुरुङले गोली चलाउने आदेश मसँग मागेका थिए । त्यहाँ गोली चलाउँदा सैनिक क्षेत्र भएकाले अत्यन्त खतरा उत्पन्न हुनसक्ने देखेर मैले गोली चलाउने अनुमति दिएको थिइँन । बरू सम्झाइबुझाइ गरेर भीडलाई शान्त पारेर अगाडिको कारबाहीका लागि अञ्चलाधीशसँग सरसल्लाह गर्न म चन्द्रगढी फर्किएको थिएँ । अञ्चलाधीशसँग सरसल्लाह गरेर डी.एस्.पी. श्रीकृष्णमोहन श्रेष्ठसहितको थप सशस्त्र प्रहरीको मद्दत लिएर फेरि म घटनास्थल चारआली पुगेको थिएँ । समस्या समाधानका लागि सहयोग

गर्न मैले जिल्ला पञ्चायतका सभापति श्रीकेशवकुमार बूढाथोकी, किसान सङ्गठनका सभापति श्रीत्रैलोक्यनाथ ओली लगायतका नेताहरूलाई पनि अनुरोध गरेको थिएँ । बसयातायातकम्पनीका प्रतिनिधिहरू, मजदुरप्रतिनिधिहरू र स्थानीय नेताहरूसमेतलाई राखेर कुराकानी गर्दा बसबिसौनी राख्ने सहमति भएको थियो । त्यसपछि रोकिएको यातायात फेरि सञ्चालन गराएर म राती चन्द्रगढी फर्किएको थिएँ ।

त्यसरी म झापामा प्र.जि.अ. भएर गएको लगत्तैदेखि नै समस्याको प्रारम्भ भएको हुँदा मलाई झापा जिल्लामा काम गर्न निकै अप्ठ्यारो हुन्छ कि जस्तो लागेको थियो । पहिलो पटक परेको समस्यालाई सफलतापूर्वक समाधान गर्न म सफल भएको हुँदा पछि परिआउने अरू समस्याहरूलाई पनि सजिलैसँग पार लगाउन सक्ने कुरामा म विश्वस्त भएको थिएँ । अञ्चलाधीश डा. थापा प्रशासन नजानेका सोझा व्यक्ति हुनुहुन्थ्यो । एस्.पी. श्रीपद्मकुमार नेपाली आँट नभएका व्यक्तित्वविहीन अञ्चलका प्रहरीप्रमुख हुनुहुन्थ्यो । सहायकअञ्चलाधीश श्रीपरशुराम पोखरेल पनि सोझा र असल मानिस भएका हुँदा काम गर्न मलाई सजिलै थियो । जिल्लाप्रहरीको डी.एस्.पी. पदमा कोही पनि नियुक्त भएर नगएको हुँदा मलाई काम लगाउन केही अप्ठ्यारो परेको थियो । त्यस बेला प्रहरीनिरीक्षक श्रीअरुणविक्रम राणाले जिल्लाप्रहरीको प्रमुख भएर काम गरिरहेका थिए । उनी असाध्य चलाख र काम गर्न सक्षम भएकाले उनैबाट मैले काम चलाएको थिएँ ।

त्यस बेला श्रीकृष्णमोहन श्रेष्ठ एस्.पी. कार्यालयका डी.एस्.पी. थिए । प्रहरीप्रधानकार्यालयमा लेखापढी गरेर जिल्लाका डि.एस्.पी.मा श्रीकृष्णमोहन श्रेष्ठको सरुवा गराएपछि मलाई काम गर्न असाध्य सजिलो भएको थियो । उनी अत्यन्त मिलनसार, आज्ञाकारी, अनुशासित र निजामती अधिकारीहरूलाई सम्मान गर्ने व्यक्ति थिए । अन्यथा प्रहरीअधिकृतहरू सामान्यतया बाहिर सम्मान गरेझैं गर्ने तर अप्रत्यक्ष वा कहिलेकाहीँ प्रत्यक्षरूपमा नै प्र.जि.अ.को कुरा नमान्ने, अपमान गर्ने र प्र.जि.अ.का विरुद्धमा गुट नै तयार गरेर हिँड्ने गरेको पनि मैले भोगेको थिएँ । ती कुराहरूको अपवादको रूपमा राम्रो प्रहरीअधिकृत श्रीकृष्णमोहन श्रेष्ठलाई मैले पाएको थिएँ ।

हामीहरूको अञ्चल र जिल्लामा पनि राम्रो काम गर्ने टीम मिलेको थियो ।

जिल्लाका नाकाहरूबाट हुने तस्करी खास गरेर गाईगोरु, धानचामल र काठसमेतलाई सशक्तरूपमा रोक्ने व्यवस्था मिलाइएको थियो । झापा जिल्लाको पूर्वीभाग धूलाबारी, काँकरभीटा, बाहुनडाँगी, नकलबन्दा र ज्यामिरेगढीतिरबाट ज्यादाजसो विदेशी सामान अवैधरूपमा त्यस बेला भारततर्फ तस्करी भएर जाने गर्दथ्यो । त्यसमा तल्लो तहका प्रहरीदेखि लिएर माथिसम्मका अधिकारीहरूसम्मको मिलोमतो हुने गर्दथ्यो । पुराना अञ्चलाधीश श्रीमदन गिरी अत्यन्त भ्रष्ट, सुरा र सुन्दरीमा लम्पट व्यक्ति भएका हुँदा सारा तस्कर उहाँले सञ्चालन गरेर चारैतर्फबाट रकम सङ्कलन गर्नुहुन्थ्यो भन्ने कुरा मैले सुनेको थिएँ ।

म त्यस जिल्लामा जानुभन्दा अगाडि अञ्चलाधीश र प्र.जि.अ.का बीचमा बिभिन्न कारणले वैमनस्य बढेर आपसमा झगडा भएको रहेछ । उहाँहरूका बीचमा झगडा भएपछि कर्मचारीहरू र पञ्चहरू पनि दुईतर्फ विभाजित भएका रहेछन् । त्यसबाट जिल्लाको सम्पूर्ण वातावरण नै विषाक्त भएको रहेछ । हाम्रो नयाँ प्रशासनिक टीम गएपछि त्यस प्रकारको पुरानू दूषित वातावरणमा सुधार आउन थालेको थियो र सुधार आउनु परम आवश्यक पनि थियो । जिल्लाका समस्याहरू समाधान गर्ने सन्दर्भमा सर्वप्रथम जिल्लाबाट भारततर्फ अवैध किसिमले निकासी हुने सबैजसो नाका बन्द गरिएका थिए । त्यसबाट विदेशी सामानको तस्करी प्राय बन्द भएको थियो । प्रहरीको नेतृत्व तह पनि व्यक्तिगत स्वार्थ छोडेर प्रशासनसँग नै सहमत भएको थियो । तस्करीका सम्पूर्ण नाकाहरू प्रहरीले बन्द गरिदिएको थियो । त्यसरी विदेशी सामानको तस्करी बन्द भएपछि त्यसमा संलग्न नेता, व्यापारी, स्थानीय प्रहरी र भन्सारका कर्मचरीहरूलाईसमेत असर पर्न गएको देखिन्थ्यो ।

प्रशासनको उक्त कारबाहीबाट नेताहरूमा जिल्लास्तरका ठूलै नेताहरू र केन्द्रसम्मका नेताहरूलाई पनि ठूलै असर परेपछि अञ्चलाधीश र मलाईसमेत चारैतिरबाट दबाब पर्न थालेको थियो । दिनदिनै अनेक बहाना बनाएर स्थानीय नेताहरूको प्रतिनिधि मण्डलले दुःख दिनथालेको थियो । भू.पू. बडाहाकिम श्रीलीलाराज आङ्देम्बे धूलाबारीमा नै बसोवास गरेर त्यही

ठाउँमा दुईनम्बरी धन्दा गर्दारहेछन् । कारोबार रोकिएपछि उनले पनि सधैँ आएर दुःख दिनथालेका थिए । ती सबै थरी दबाब र प्रभावसमेतलाई निस्तेज पार्दै हामीहरूले दृढताकासाथ दुईनम्बरी धन्दालाई बन्द गराएरै छाड्ने निश्चय गरेका थियौँ । बिस्तारै हामीहरूले चलाएको तस्करी विरुद्धको अभियानमा बाधाअड्चन आउन सक्ने कुलक्षणहरू देखा पर्नथालेका थिए ।

त्यसै समयमा २०३९ साल माघ महिनामा मेरा दुई छोराहरू श्रीसञ्जीवकुमार भट्टराई र श्रीसतीशकुमार भट्टराईको व्रतबन्ध अर्थात् उपनयन संस्कार एकैदिन झापा जिल्लाको कनकाईमाईका किनारामा गरिएको थियो । उक्त समारोहमा मेरा मातापिता लगायत सबै मान्यजन र आफन्तहरू वटुहरूलाई भिक्षा र शुभाशीर्वाद दिन त्यहाँ जानुभएको थियो । त्यो अत्यन्त पावन भेला र बेला पनि थियो । त्यसपछि झापा जिल्लामा नै २०४० साल वैशाखमा मेरी ठूली छोरी सरिताको खोटाङ जिल्लाको खोक्सेली निवासी श्रीचण्डीप्रसाद



ठूलीछोरी सरिता र ज्वाई श्रीचण्डीप्रसाद दाहालको स्वयम्वरको तस्वीर, झापा, २०४०

दाहालसँग विवाह हुने भएको थियो। काठमाडौंमा विवाह गर्ने निश्चय भएकोमा पछि दुलहापक्षको अनुरोध अनुसार झापामा नै विवाह सम्पन्न भएको थियो । उक्त विवाहको सुव्यवस्था मिलाउन अञ्चलाधीश डा. नरेन्द्र थापा संयोजक र एस्.पी. श्रीपद्मकुमार नेपाली, सेनाका मेजर श्रीटेकबहादुर

बूढाथोकी र डी.एस्.पी. श्रीकृष्णमोहन श्रेष्ठसमेत सदस्य रहेको एउटा समिति बनेको थियो । त्यस विवाहमा मेरा सबै शुभेच्छुकहरूको सक्रिय सहयोग मैले पाएको थिएँ । स्थानीय समाजसेवी व्यक्तिहरूमा मलाई विवाहमा सबभन्दा बढी दौडधूप गरेर सहयोग गर्ने श्रीपुण्यप्रसाद दाहाल र श्रीबुद्धिनाथ चापागाई हुनुहुन्थ्यो । सबै दृष्टिकोणले मलाई डी.एस्.पी. श्रीकृष्णमोहन श्रेष्ठले सहयोग पुऱ्याएका थिए । उनको त्यो सहयोग म कहिल्यै पनि बिर्सिनसक्तिन । छोरीको विवाह निर्विघ्न समाप्त भएको थियो । मेरो एउटा सामाजिक उत्तरदायित्व जेठी छोरीको विवाह गरेर मैले पूरा गरेको थिएँ । व्यवहारिक उत्तरदायित्व चाहिँ मेरो बढेको थियो ।

त्यसपछि म आफ्नू काममा दत्तचित्त भएर लागेको थिएँ । जिल्लामा समष्टिरूपमा हाम्रो युद्ध जारी थियो । लावती गृहमन्त्री भएपछि मेची अञ्चलभरिका उहाँका पिछलग्गूहरूले प्रशासनलाई दुःख दिनथालेका थिए । त्यसका अतिरिक्त उहाँको नाम लिएर गाडी माग्ने, आर्थिक सहायता माग्ने र गैरकानूनी काम गर्न दबाब दिनसमेत थालेका थिए । जिल्लाका अपराधी व्यक्तिहरूले लावतीको आडमा प्रशासनलाई धम्क्याउन पनि थालेपछि काम गर्न असाध्य नै गाह्रोपरेको थियो । मलाई र अञ्चलाधीशसमेतलाई गृहमन्त्री आफैँले जिल्लामा गएर गैरकानूनी काम गर्न आदेश दिन र आफ्नू गुटलाई खुला छुट दिएर गैरकानूनी काम गर्न प्रोत्साहित गर्नथालेपछि हामीहरूलाई अत्यन्त असह्य भएको थियो । त्यसबाट सरकारको अस्मिता, प्रशासनको छवि र अस्तित्त्वलाई पनि गृहमन्त्री लावतीको गृद्धदृष्टिबाट बचाउन केही उपाय गर्नु जरुरी भइसकेको थियो ।

एकातिर लावतीको त्यसप्रकारको ताण्डवनृत्य चलिरहेको थियो भने अर्कोतर्फ दुईनम्बरको धन्दा रोकिएबाट खाइपाइ आएको आम्दानी रोकिएको कारण तत्कालीन आई.जी.पी. श्रीडी.बी.लामा अञ्चलाधीश र मेरा विरुद्धमासमेत खुलेर लागेका थिए । सायद लावतीको पनि आम्दानीको त्यही स्रोत बन्द भएर रिसाएका थिए कि ? थाहा हुनसकेको थिएन । प्रशासनलाई साथ दिएर जिल्लामा अपराध र दुईनम्बरी धन्दा बन्द गर्न सक्रियरूपमा सहयोग पुऱ्याउने डी.एस्.पी. श्रीकृष्णमोहन श्रेष्ठ आइ.जी.पी. श्रीडी.बी.लामाको कोपभाजन भएका थिए । आई.जी.पी. श्रीडी.बी.लामाले

डी.एस्.पी. श्रीकृष्णमोहन श्रेष्ठलाई झापा जिल्लामा प्रशासनसँग मिलेर तस्करी रोक्ने लगायतका राम्रा काम गरेका हुनाले उनलाई प्रहरीप्रधान–कार्यालयमा सरुवा गरेर जगेडामा राखेका थिए । डी.एस्.पी. श्रीकृष्णमोहनका ठाउँमा श्रीडी.बी.लामाका आज्ञाकारी बर्माबाट नेपाल आएका प्रवासी नेपाली डी.एस्.पी श्रीबाबुजन प्रधानलाई झापा जिल्लामा पठाइएको थियो । श्रीडी.बी. लामाले श्रीबाबुजन प्रधानलाई मुख्यरूपमा दुई तीन कुराको निर्देशन दिएर पठाएका थिए । पहिलो कुरा प्रशासनलाई असहयोग गर्ने, दोस्रो कुरा प्रशासनले भनेको उल्टो गर्ने र तेस्रो कुरा प्रशासनले रोकेको दुईनम्बरी धन्दा फेरि चालू गर्ने ।

त्यसरी आई.जी.पी.को निर्देशन पाएर गएका डी.एस्.पी. श्रीबाबुजन प्रधानले प्रशासनलाई ठाडै चुनौती दिँदै प्रशासनको विपरीत खुलेआम गएपछि काम गर्न असाध्य मुश्किल परेको थियो । श्रीबाबुजन प्रधान अनुशासन र शालीनता नभएका हौडे खालका मान्छे थिए । नेपाललाई आफ्नू देश नठान्ने र जसरी भए पनि पैसा कमाउनु पर्छ भन्ने उनको दृष्टिकोण भएको बुझिन्थ्यो । उनले झापा जिल्लामा पुग्ने बित्तिकै बन्द गरिएका तस्करीका नाका आफैँ गएर सबै खोली दिएर आफैँ बसेर दुईनम्बरी धन्दा चलाउन थालेका थिए । आई.जी.पी. श्रीडी.बी. लामाले त्यसै गर्न पठाएको भन्दै उनले खुलारूपमा नङ्गानाच शुरुगरेका थिए । अञ्चलाधीश र म हतप्रभ भएर उनको गतिविधि अध्ययन गर्नथालेका थियौँ । गृहमन्त्री लावती र आई.जी.पी. लामासमेत मिलेर अञ्चलप्रशासन र जिल्लाप्रशासनलाई पङ्गु बनाएर लूट मच्चाउन पठाएको डी.एस्.पी.का विरुद्ध दरबार बाहेक अन्यत्र भन्ने ठाउँ पनि थिएन । तत्कालीन प्रधानमन्त्री चन्दलाई भन्नु अरण्यरोदनमात्र हुने सम्झेर हामीहरू धैर्य गरेर प्रशासन सञ्चालन गर्दैरहेका थियौं ।

त्यसरी डी.एस्.पी.ले ताण्डवनृत्य गरिरहेकै बेलामा अञ्चलका एस्.पी. श्रीपद्मकुमार नेपालीको सरुवा भएको थियो । उनी कुनै कारबाही र निर्णय पनि गर्न नसक्ने निष्क्रिय, दीर्घसूत्री र व्यक्तित्त्वविहीन मान्छे थिए । प्रशासनलाई उनको कत्ति पनि भर थिएन । उनी हिम्मत नभएका मान्छे भएकाले प्रशासनसँग टक्कर लिन नसकेको कारण उनलाई पनि सरुवा गरेर त्यस ठाउँमा एस्.पी. श्रीपञ्चवीर राईलाई आई.जी.पी. श्रीडी.बी.लामाले

पठाएका थिए। उनी डी.एस्.पी. श्रीबाबुजन प्रधानजस्ता भालुभुत्ते व्यक्ति नभएर सरल र सहयोगी व्यक्ति भएका हुँदा हामीहरूलाई उनीबाट सहयोगै मिलेको थियो।

त्यस बेला मेची अञ्चल र विशेष गरेर झापा जिल्ला समग्ररूपमा गृहमन्त्री लावतीको बिर्ताजस्तो भएको थियो। प्रत्येक हप्तामा भ्रमण गर्न साथमा सिञ्चाधुञ्चा र नन्दीभृङ्गीहरूसमेत लिएर उनी झापा जिल्लामा पुग्दथे। उनलाई र उनका साथमा गएका लस्करहरूलाई उनले भने बमोजिमको खानापिनाको व्यवस्था मिलाउनुसमेतका कामहरू प्र.जि.अ.को दायित्त्वभित्र परेको उनले सम्झिएका थिए। जिल्ला र अञ्चल भ्रमण गर्न गाडीहरूको व्यवस्था पनि प्र.जि.अ.ले नै गर्नु पर्दथ्यो। लावतीका समर्थक भएपछि चोर र डाँकाहरूसमेत जो भए तापनि पञ्चैखत माफगर्नुपर्ने उनको स्थायी आदेश थियो। अर्कोतर्फ उनका विरोधीहरू दूधले नुहाएका साधु सन्त भए तापनि थुनामा राखेर कारबाही गर्नै पर्ने लावतीको जङ्गबहादुरे प्रमाङ्गी भएको थियो। उनले भनेको अक्षरशः कार्यान्वयन नभएमा सार्वजनिकरूपमा नै उनी प्रशासनको बेइज्जती गर्दथे। लावतीको त्यो ज्यादती शुरु शुरुमा त धैर्य राखेर मैले सहेको थिएँ। तर जब लावतीको ज्यादतीले सीमा नाघेको थियो त्यसपछि अञ्चलाधीशसँग सल्लाह गरेर गृहमन्त्री लावतीको तानाशाही हुकुमलाई कसरी तह लगाउने भनेर जुक्तिबुद्धि मैले निकालेको थिएँ। सोही कुरालाई लिएर मेची अञ्चलभरिका प्रमुखजिल्ला अधिकारीहरूको बैठक झापाको चन्द्रगढीमा अञ्चलाधीशले बोलाउनु भएको थियो। प्र.जि.अ.हरूको बैठकमा जसरी पनि लावतीलाई गैरकानूनी कामबाट दुरुत्साहित गर्ने निर्णय भएको थियो। त्यस निर्णयलाई नीतिका रूपमा स्वीकार गरेर लावतीका गैरकानूनी तथा व्यक्तिगत स्वार्थबाट प्रेरित आदेशहरू नमान्ने सम्बन्धमा पनि निर्णय गरिएको थियो। पाँचथर जिल्लाका तत्कालीन प्र.जि.अ. श्रीटीकादत्त निरौलाले भने उक्त निर्णयलाई नमानेर लावतीको ताबेदार भएर कामगरेका थिए। त्यसको फलस्वरूप उनले लावतीबाट धेरै थरीका फाइदाहरू उठाउनुका साथै तक्मासमेत पाएका थिए। अरू ३ जिल्लाका हामी प्र.जि.अ.हरूले निर्णय भए अनुसार लावतीको गैरकानूनी तथा निहित स्वार्थले प्रेरित भएको आदेशलाई अवज्ञा गरेर कामगरेका थियौँ। त्यस बेला ताप्लेजुङ जिल्लामा श्रीकुलचन्द्र

श्रेष्ठ र इलाम जिल्लामा श्रीनारायणप्रसाद ओझा प्र.जि.अ. थिए ।

त्यसरी सङ्गठितरूपमा काम गर्न थालेपछि गृहमन्त्री लावतीको दबाब घटेरगएको थियो । लावती र अञ्चलाधीशका बीचको सम्बन्ध पनि लावतीको ज्यादा दबाबको कारण बिग्रिन गएको थियो । दुवैका बीचमा एक किसिमले आवतजावत र बोलचालसमेत बन्द भएको थियो । गृहमन्त्री र अञ्चलाधीशको बीचमा सम्बन्ध बिग्रँदा साधारणतया अरू ठाउँमा समन्वय र सन्तुलनको अभावमा काम गर्न गाह्रो हुन्थ्यो । तर त्यहाँ भने त्यसको प्रतिकूल हामीहरू तीन जिल्लाका प्र.जि.अ.हरूलाई काम गर्न अत्यन्त सजिलो भएको थियो । लावतीले कुनै पनि गलत काम गर्न आदेश वा दबाब दिएमा अञ्चलाधीशको अनुमतिविना गर्न नसकिने भनेर हामीहरूले जबाफ दिने गरेका थियौँ । लावती अञ्चलाधीशलाई आदेश दिन सक्तैनथे । त्यसै कारणले गर्दा हामीहरूलाई काम गर्न सजिलो भएको थियो ।

त्यसरी झापा जिल्लामा प्र.जि.अ. भएर प्रशासन गर्दा नाना थरीका बाधा, व्यवधान र झणझटहरूको सामना गर्दै काम गर्नु परेको थियो तापनि कर्मचारीहरूको टीम मिलेको हुँदा काम गर्न सकिएको थियो । अञ्चलाधीश डा. श्रीनरेन्द्रबहादुर थापा सरल र असल मान्छे भएका हुनाले सबैलाई समेटेर काम गर्न मलाई सजिलो भएको थियो ।

त्यस बेला झापाजिल्ला पञ्चायतका सभापति श्रीकेशवकुमार बूढाथोकी थिए । उनी आफैं जान्ने हुने, अरूलाई आदेश गरेर काम गराउन खोज्ने र ऐननियमभन्दा आफ्नै आदेश ठूलो मान्ने एकोहोरो खालका अहंवादी व्यक्ति थिए । लावतीले जिल्ला सभापति बूढाथोकीलाई भू.पू. प्रधानमन्त्री श्रीसूर्यबहादुर थापाको मानिस भनेर श्रीसूर्यबहादुर थापा प्रधानमन्त्री भएदेखि नै दुःख दिएका रहेछन् । दुई जनाका बीचमा पहिलेदेखि नै झगडा चलिरहेको रहेछ । त्यसै बीचमा श्रीसूर्यबहादुर थापा प्रधानमन्त्रीको पदबाट हटेर नयाँ प्रधानमन्त्रीमा श्रीलोकेन्द्रबहादुर चन्द आएका थिए । त्यसबेला श्रीलोकेन्द्रबहादुर चन्दलाई दरबारको मानिस भनिन्थ्यो । श्रीलोकेन्द्रबहादुर चन्द प्रधानमन्त्री भएपछि नै श्रीनयनबहादुर स्वाँरको ठाउँमा लावती गृहमन्त्री हुनपुगेका थिए । उनी तत्कालीन प्रधानमन्त्री चन्दका शक्तिशाली व्यक्ति र दायाँ हातसमेत मानिन्थे । त्यस बेला लावतीले महत्त्वपूर्ण गृहमन्त्रालय र सामान्यप्रशासन मन्त्रालयसमेत

पाएका थिए । ती दुवैथरी शक्तिशाली मन्त्रालयहरू पाएपछि लावतीले कर्मचारीहरूलाई जेसुकै पनि गर्न सक्छु भन्ने धारणा राखेका थिए । त्यसै कारण अधिराज्यभरिका कर्मचारीहरूलाई उनी हप्काउँदै हिंड्ने गर्दथे । लावतीको ताबेदारी नगर्ने कर्मचारीहरूलाई श्रीसूर्यबहादुर थापाको मानिस भनेर दोषारोपण गरेर जागिरबाटै हटाउने धम्की दिन पनि उनी पछि पर्दैनथे । लावतीले मलाई पनि धेरै पटक थापापक्षको मान्छे भनेर दोषारोपण गरेका थिए । वास्तवमा त्यस बेलासम्म म श्रीसूर्यबहादुर थापालाई चिन्दा पनि चिन्दिनथें । त्यसको प्रतिवादमा 'म कुनै लावती अथवा थापाको कृपापात्र मान्छे नभएर आफ्नै योग्यता र क्षमताले लोकसेवा आयोगमा लडेर सरकारको सेवामा प्रवेश गरेको स्वाभिमानी राष्ट्रसेवक हुँ' भनेर मैले लावतीलाई ठाडै जबाफ दिने गरेको थिएँ ।

उपर्युक्त अनुसार त्यस बेला प्रधानमन्त्री चन्दपक्षले कुनै पनि व्यक्तिलाई श्रीसूर्यबहादुर थापाको मान्छे भनेर भनेमा २०१७–०१८ सालतिर अराष्ट्रिय तत्त्व भनेर दोषारोपण गरेजस्तो सम्झिइन्थ्यो । त्यस खालको धारणा पूर्वका धेरैजसो जिल्लाहरूमा त्यस बखत व्याप्त थियो ।

तत्कालीन झापा जिल्लाका जिल्लापञ्चायतका सभापति श्रीकेशवकुमार बूढाथोकीको बानी व्यहोराका सम्बन्धमा मैले माथि केही उल्लेख गरिसकेको छु । त्यसको पुष्टिका लागि उनकै सम्बन्धको एउटा घटनाको उल्लेख गर्नु यहाँ प्रासङ्गिक हुने ठान्दछु । श्रीकेशवकुमार बूढाथोकी झापा जिल्लाका हुनेखानेका छोरा भएका हुँदा उनले दार्जिलिङ्गमा पढ्ने मौका पाएका रहेछन् । त्यस बेला श्री ५ वीरेन्द्र पनि दार्जिलिङ्गमै पढ्नेहुँदा उनीहरूका बीचमा चिनाजान भएको हुनुपर्दछ । श्रीकेशवकुमार बूढाथोकी नेपाल फर्किएपछि नेपाली काङ्ग्रेसमा आबद्ध भएर काम गर्न थालेका रहेछन् । मौका पर्दा श्रीकेशवकुमार बूढाथोकी स्थानीय युवाहरूको नेतृत्त्व गरेर जिल्ला थर्काएर हिंड्ने काम पनि गर्दारहेछन् । दार्जिलिङ्मा बसेर अङ्ग्रेजी बोर्डिङ स्कूलमा पढेका हुँदा उनी आफूलाई निकै शिक्षित ठान्दारहेछन् । त्यस बेला उनले जिल्लामा टाइँफाइँ गरेर आफ्नू निकै प्रभाव पनि पारेका रहेछन् । त्यसै अवस्थामा २०३९ सालमा भएको जिल्लापञ्चायतको निर्वाचनमा उनले श्रीसूर्यबहादुर थापाको पक्षमा लागेर जिल्लापञ्चायतको सभापतिमा

विजय प्राप्त गरेका रहेछन्। सभापतिको निर्वाचनमा मभन्दा पहिलेका प्र.जि.अ. श्रीबाबुराम पौडेलले नेपाली काङ्ग्रेसका समर्थक भनेर श्रीकेशवकुमार बूढाथोकीलाई हराउन र राजासमर्थक श्रीभूपालमान सिंह कार्कीका छोरा श्रीलोकबन्धु कार्कीलाई जिताउनका लागि सकेसम्म साम, दान, दण्ड र भेदसमेतका सबै उपायहरू प्रयोग गरेका रहेछन्। तर श्रीकेशवकुमार बूढाथोकीले नै जिल्लापञ्चायतको सभापतिमा जितेपछि प्र.जि.अ. श्रीबाबुराम पौडेल र जिल्लापञ्चायतका सभापति श्रीकेशवकुमार बूढाथोकीका बीचमा खुला सङ्घर्ष नै भएको रहेछ।

त्यसपछि तत्कालै तत्कालीन अञ्चलाधीश श्रीमदन गिरी खोसुवामा परेका र प्र.जि.अ. श्रीबाबुराम पौडेलको सरुवा भएको हुँदा दुवै जनालाई झापा जिल्लाबाट भगाउन सफल भएको भन्ने भ्रम श्रीकेशवकुमार बूढाथोकीलाई परेको रहेछ। त्यसरी दुवैजना जिल्लाबाट हिँडिसकेपछि सभापति श्रीकेशवकुमार बूढाथोकीले जिल्लाका अरू कर्मचारीहरूमाथि पनि पूर्वाग्रह राखेर व्यवहार गर्नथालेका रहेछन्। त्यसैकारण कर्मचारीहरू पनि उनीसँग टाढिने गरेका रहेछन्। तत्कालीन जिल्लापञ्चायतका सभापति श्रीकेशवकुमार बूढाथोकी एकातर्फ तत्कालीन राजा श्री ५ वीरेन्द्रका प्रमुख सैनिकसचिव जर्नेल श्रीऋषिकुमार पाण्डेका आफ्नै साला थिए भने अर्कोतर्फ भू.पू. माननीय तथा इलाम जिल्लाका तत्कालीन सभापति श्रीकृष्णबहादुर भट्टराईका उनी भानिज थिए। त्यसरी आफ्नू पक्ष दरो भएको ठानेर उनी बढी घमण्डी भएका देखिन्थे।

त्यसै समयमा म झापा जिल्लामा प्रमुखजिल्लाअधिकारी भएर पुगेको थिएँ। जिल्लाका प्रमुख व्यक्तिहरूको जानकारी प्राप्त गर्ने सम्बन्धमा मैले सो कुरा जिल्लामा जानेबित्तिकै थाहा पाएको थिएँ। जिल्ला पञ्चायतका सभापतिसँग जिल्लाप्रशासन कार्यालयको सधैँ काम परिरहने हुँदा उनीसँग सम्बन्ध राम्रो बनाइराख्नु अत्यन्त आवश्यक थियो। सम्बन्ध राम्रो बनाउने नाममा उनीबाट हेपिएर प्रशासकले बस्न पनि नहुने हुँदा मैले समदूरीको सम्बन्ध राख्ने विचार गरेको थिएँ। म झापा जिल्लामा पुग्ने बित्तिकै चारआलीमा भएको घटनामा अल्मलिनुपरेको हुँदा कसैसँग पनि खास भेटघाट र जनसम्पर्क गर्न मलाई फुर्सदै भएको थिएन। केही दिनसम्म

सभापति श्रीकेशवकुमार बूढाथोकीले पनि सम्मान खोजेर होला मसँग भेट्ने चासो देखाएका थिएनन् । सायद उनी पनि मेरा बारेमा अध्ययन गरेर बसेका थिए होलान् । मेरो बानी भने कुनै पनि नयाँ व्यक्तिसँग परिचय र सम्पर्क गर्दा अत्यन्त होसियारीका साथ केही दिन प्रतीक्षा गरेरमात्र गर्ने भएको हुँदा मैले पनि सभापतिसँग तुरुन्तै सम्पर्क राखेको थिइन ।

त्यसरी हाम्रो औपचारिकरूपमा भेटघाट नभएकै अवस्थामा सभापति श्रीकेशवकुमार बूढाथोकी झापा जिल्लाका जलथल गाउँपञ्चायतको प्रधानपञ्च श्रीमानप्रसाद लिङ्देनलाई साथमा लिएर दलबलका साथ मेरो कार्यालयमा आएका थिए । उनले आफ्नै तालमा आफ्नो बडप्पन देखाउँदै आफ्नू परिचय दिएका थिए । श्रीकृष्णबहादुर भट्टराईका उनी भानिज भएका र म पनि भट्टराई नै भएको हुँदा पहिलो भेटमा नै भट्टराईका नाताले मलाई उनले मामाको सम्बन्ध जोडेर सम्बोधन गरेका थिए । त्यसरी पहिलो भेटमा नै नाता जोडेर चाप्लुसीपूर्ण व्यवहार मसँग गर्न खोजेपछि म उनीप्रति झन् सतर्क हुन पुगेको थिएँ । कुराको सन्दर्भमा श्रीमानप्रसाद लिङ्देनको जलथल गाउँपञ्चायतमा दशैंको बेलामा रमाइलो मेला लगाउने स्वीकृतिका लागि सभापतिसमेत मिलेर प्रतिनिधि मण्डलको रूपमा आएका भनेर मलाई भनिएको थियो । झापा जिल्लामा जहाँ मेला लागे पनि प्राय: गरेर जुवा र तास पैसा राखेर खुलारूपमा खेलिनेरहेछ । जिल्लाप्रशासनबाट स्वीकृति लिएपछि स्थानीय प्रहरीले केही नगर्ने हुँदा प्रहरीकै सल्लाह अनुसार जिल्लाप्रशासनकार्यालयको स्वीकृति लिन त्यो प्रतिनिधिमण्डल आएको रहेछ । दुवैथरीको मिलोमतोबाट मेला चलाएपछि दुवै थरीलाई आर्थिक लाभ हुने झापा जिल्लाको पुरानू प्रचलन भएको मैले बुझिसकेको हुँदा स्वीकृति दिंदा जुवातास नखेलाउने गरी मैले स्वीकृति दिएको थिएँ । त्यसको अनुगमन गर्न जिल्लाका प्रहरी निरीक्षक श्रीअरुणविक्रम राणालाई तुरुन्तै खटाएको थिएँ । नभन्दै रमाइलो मेला खुलेकै दिनदेखि नै जुवा र तास पनि शुरु भएछ । जुवा र तास शुरु हुने बित्तिकै मेरो आदेश अनुसार प्रहरी निरीक्षक श्रीअरुणविक्रम राणाले बन्द गरिदिएछन् । मैले सो कुरा प्रहरीबाट नै थाहा पाइसकेको थिएँ । त्यसरी प्रहरीले तुरुन्तै जिल्लाप्रशासनकार्यालयको आदेश पालना गरेको हुँदा मलाई खुशी पनि लागेको थियो ।

त्यसरी गैरकानूनीरूपमा सञ्चालन गर्नखोजिएको उक्त मेला बन्द भएपछि जिल्लाका सबै प्रधानपञ्चहरू र सभापतिसमेत जिल्लापञ्चायतको सभाकक्षमा भेला भएर प्रशासनको विरोध गर्ने अरे भन्ने हल्ला मैले सुनेर पनि विश्वासभने गरेको थिइन । तैपनि मेरा विरुद्धमा के कस्तो क्रियाकलाप हुँदो रहेछ भनेर म उत्सुकता र सतर्कताका साथ हेरेर बसिरहेको थिएँ । प्रायः गरेर झापा जिल्लापञ्चायतमा त्यस बेला प्रत्येक महिनामा पञ्चहरूको बैठक हुने गर्दथ्यो । त्यसरी बैठक हुने मौका छोपेर जिल्लापञ्चायतका सभापति श्रीकेशवकुमार बूढाथोकीले जिल्लापञ्चायतका तर्फबाट नवआगन्तुक प्रमुखजिल्ला अधिकारीको स्वागत गर्ने भनेर मलाई जिल्लापञ्चायतको सभाकक्षमा बोलाएका थिए । जिल्लामा नयाँ आएका प्र.जि.अ.लाई स्वागत गर्ने अरू जिल्लाहरूमा पनि प्रचलन भएको हुँदा झापा जिल्लामा पनि सोही अनुसार मेरो स्वागत गर्न बोलाइएको होला भन्ने ठानेर दिनको ११ बजे म जिल्लापञ्चायतको सभाकक्षमा गएको थिएँ । म त्यहाँ पुग्दा जिल्लापञ्चायतको सभाकक्षमा जिल्लाका सबै गाउँपञ्चायतका प्रधानपञ्च, उपप्रधानपञ्च, अड्डाप्रमुखहरूलगायत सभापति, उपसभापति र सम्पूर्ण जिल्ला पञ्चायतका सदस्यहरूसमेतको विशाल उपस्थिति भएको रहेछ । त्यत्रा जनप्रतिनिधिहरू र अड्डाप्रमुखहरूसमेतको समुपस्थितिमा मेरो स्वागत हुन लागेको देख्ता सम्मानप्रेमी मजस्तो संसारी मान्छेलाई खुशीलाग्नु स्वाभाविकै थियो ।

उक्त सभामा सर्वप्रथम परिचय लिनेदिने काम समाप्त भएपछि स्वागतको कार्यक्रम शुरु भएको थियो । त्यहाँको वातावरणभने त्यति सहज र स्वाभाविक मलाई लागिरहेको थिएन । सभापतिको हाउभाउ बढी नाटकीय र कुटिलतापूर्ण मैले देखिरहेको थिएँ । त्यस्तैमा बोल्ने कार्यक्रम शुरु भएको थियो । बोल्नेक्रममा जलथल गाउँपञ्चायतका प्रधानपञ्च श्रीमानप्रसाद लिङ्देनले मैले मेला बन्द गरेको विरोधमा बोल्न थालेका थिए । उक्त विरोधलाई सभापतिले रोक्नुको साटो हाँसेर समर्थन गरिरहेका थिए । लिङ्देनले निकै चर्को स्वरमा जिल्लाप्रशासन, प्रहरी र कर्मचारीहरूकोसमेत विरोध गरेर बोल्दा अरू पञ्चहरूले पनि ताली लगाएर समर्थन गर्न थालेपछि मैले चुप लागेर त्यस प्रकारको स्वागतलाई स्वीकार गर्ने कुरै थिएन । मैले बीचैमा उठेर सभापतिसँग दुई शब्द बोल्ने अनुमति मागेर

प्रधानपञ्च लिङ्देनको भनाइको सशक्त प्रतिवाद गरेको थिएँ। त्यस प्रकारको कुटिलतापूर्ण मेरो स्वागत भएकोमा सभापतिलाई व्यङ्ग्यात्मकरूपमा धन्यवाद पनि दिएको थिएँ। अन्त्यमा स्वागतको नाममा अपमान गर्न बोलाइएकोमा अब उप्रान्त जिल्लापञ्चायतको कार्यक्रममा आफू सहभागी नहुने र अरू राष्ट्रसेवक मित्रहरूलाई पनि भाग नलिन सल्लाह दिँदै सभा चलिरहेकै बेला सभालाई बहिष्कार गर्दै सभापतिको विनाअनुमति म बाहिर निस्किएको थिएँ।

म उठेर हिँडेपछि अड्डाप्रमुख र कार्यालय प्रमुखहरू पनि सबै उठेर हिँडेका थिए। त्यो सभा त्यहीँ समाप्त भएको थियो। मेरा पछिपछि सभापति मलाई फर्काउन जिल्लाप्रशासन कार्यालयसम्म आएका थिए। जानीजानी स्वागत गर्ने बहानाले जुवातास खेल्न नदिएकोमा मेरो विरोध गर्न बोलाएको सभामा कुनै हालतमा पनि फेरि मैले फर्कन नमानेपछि सभापति र मेरा बीचको सम्बन्ध बिग्रिएको थियो। त्यसपछि उत्ताउला सभापति श्रीकेशवकुमार बूढाथोकीले मेरो र प्रशासनसमेतको विरोध गर्न शुरुगरेका थिए। मभन्दा पहिलेका प्र.जि.अ. श्रीबाबुराम पौडेलको विरोध गरेर जनप्रिय भएको हुँ भनेर सम्झने बूढाथोकीले मेरो पनि विरोध गरेर सफल हुन्छु भन्ने ठानेर नै विरोध शुरुगरेको देखेपछि मैले त्यसको प्रतिकार गर्नु जरुरी भएको थियो।

त्यसरी जिल्लापञ्चायतका सभापति र मेरा बीचमा खुला सङ्घर्ष शुरुभएपछि विगत समयको जस्तै जिल्लामा गुटबन्दी हुनसक्ने देखेर मैले बीचको बाटो लिनुपर्ने देखेको थिएँ। त्यसका लागि सर्वप्रथम अञ्चलाधीशसँग सरसल्लाह गरेर मैले सभापतिलाई तह लगाउने उपायहरू निकालेको थिएँ। ती उपायहरूमध्ये- झापा जिल्लामा रहेका सबै सरकारी कार्यालयहरूले जि.पं.सभापति श्रीकेशवकुमार बूढाथोकीले लेखेर अथवा मौखिक अनुरोध गरेका कुनै कामहरू पनि नगर्ने, उनले बोलाएका बैठक आदि कुनै ठाउँमा पनि सहभागी नहुने र उनले गरेको गल्ती सुधार गरेर माफी नमागेसम्म उनलाई पूर्णरूपमा बहिष्कार गर्ने। सो कुरा अड्डा प्रमुख तथा कार्यालय प्रमुखहरूको बैठक बोलाएर सर्वसम्मतिबाट निर्णय गरेर कार्यान्वयन शुरु गरिएको थियो। तत्कालीन झापा जिल्लापञ्चायतका

उच्छृङ्खल सभापति श्रीकेशवकुमार बूढाथोकीलाई तह लगाउन झापा जिल्लामा रहेका सम्पूर्ण सरकारी कार्यालयहरूले उपर्युक्त अनुसारको संयुक्त प्रतिरोधको कार्यक्रम शुरुगरेपछि केही दिन फूर्ति गर्दै हिंडे तापनि अन्ततोगत्वा प्रशासनसँग उनले झुक्नैपरेको थियो। उनले त्यसपछि अभद्र व्यवहार र जिल्ला पञ्चायतमा गरेजस्तो कुटिल काम गर्दिन भनेर विश्वास दिलाएर माफ मागेपछिमात्र हामीहरूले गरेको बहिष्कारलाई फुकाइदिएका थियौं।

उनले मसँग एक दिन एकान्तमा आएर "तपाईंलाई पनि श्रीबाबुराम पौडेलजस्तै सम्झेर तर्साउन खोजेको थिएँ। तर तपाईंको काम गर्ने तरिका अनौठो देखेर म कायल भएँ। मैले मान्छे चिन्न सकिन। भविष्यमा अब तपाईंका विरुद्धमा जान्न। तपाईंलाई मामा नै ठानेर सम्मान र सहयोग गर्नेछु" भनेर कायलनामा गरेका थिए। त्यसपछि म झापा जिल्लामा प्र.जि.अ. भएर बसुञ्जेल उनले मेरो कहिल्यै पनि विरोध गरेनन् र मलाई पूर्णरूपमा सहयोग गरिनै रहे।

त्यसरी मेरो र उनको बीचमा समझदारी कायम भएपछि जिल्लामा धेरैथरी रचनात्मक कामहरू गर्न सजिलो भएको थियो। विद्यार्थी समस्या, सीमामा हुने चोरी निकासी र पैठारीको समस्या, जिल्लामा परिआउने झैझगडा र अपराध नियन्त्रणमा समेत प्रशासनले सभापति बूढाथोकीबाट सहयोग पाएको थियो। त्यसका साथै जिल्लामा निर्माणविकासका कामहरू पनि आपसी सहयोगबाट सञ्चालन गर्न सफलता प्राप्त भएको थियो। यसका अतिरिक्त झापाजिल्लामा करिब दुई वर्ष प्र.जि.अ. भएर काम गर्दा अञ्चलाधीश डा.नरेन्द्र थापासँग राम्रो समझदारी भएको कारण पनि प्रशासन राम्रो चलेको थियो।

गृहमन्त्री लावतीले बारम्बार जिल्लामा गएर दुःख दिइरहने, वामपन्थी शिक्षकहरूले नाना थरीका अवरोधहरू खडा गरी प्रशासनलाई समस्या सिर्जना गरिरहनुका साथै तथाकथित सुकुमवासीहरूसमेतले समस्या खडा गरिरहने हुँदा मैले सधैं क्रियाशील भइरहनुपर्दथ्यो। पूर्वपश्चिम राजमार्गमा बारम्बार दुर्घटना भइरहने र त्यसबाट यातायात हड्ताल भइरहने हुँदा पनि समस्याहरू परिरहन्थे। तत्कालीन गृहमन्त्री लावतीको बलमिच्याइँ र प्रशासनमाथि उनले दिने गैरकानूनी दबाबका सम्बन्धमा केही घटना यहाँ

उल्लेख गर्नु प्रासङ्गिक नै हुने ठान्दछु । एउटा घटना ज्यानमारालाई छुटाउने सम्बन्धमा गृहमन्त्री लावतीले मलाई दिएको दबाबका सम्बन्धको छ । जो यसप्रकार छ – झापा जिल्लाको एउटा विद्यालयमा पढाउने एकजना वामपन्थी शिक्षकले आफ्ना विद्यालयमा नै बोलाएर राती एक जना मानिसलाई मारेको अभियोगको मुद्दा प्रहरी र सरकारी वकिलले सबुदप्रमाणसहित अदालतमा चलाएका थिए । सरकारवादी मुद्दाको विषयमा प्र.जि.अ.लाई थाहा नहुने र त्यसको सम्बन्ध पनि नहुने हुँदा मलाई त्यस विषयमा केही पनि थाहा थिएन । गृहमन्त्रीलेभने बारम्बार मलाई निज अभियुक्तलाई छोडिदिन दबाब दिनेगर्दथे । शालीन तथा सभ्य भाषामा प्र.जि.अ.को अधिकारक्षेत्रभित्र सरकारवादी मुद्दा नपर्ने भनी बारम्बार सम्झाउँदा पनि कुरा नबुझेपछि एकदिन लावतीलाई उनले बुझ्ने खालको अत्यन्त झर्रो भाषामा जङ्गबहादुर राणाले दिए जस्तो उनको गैरकानूनी हुकुमको कार्यान्वयन हुन नसक्ने कुरा मैले भन्नुपरेको थियो । त्यसपछि पनि उनी लाज पचाएर आफ्ना पिछलग्गूहरूको भनाइमा त्यस्ता गैरकानूनी आदेशहरू बारम्बार दिएर दुःख दिइरहने गर्दथे । श्रीद्रोणाचार्य क्षेत्रीका नाममा पत्रिका दर्ता गरिदिने भनेर उनले त्यसै प्रकारको अर्को गैरकानूनी मौखिक आदेश दिएका थिए ।

त्यसरी मन्त्री लावतीले प्रत्येक पटक झापा जिल्लामा गएका बखत अबैध काम गर्ने आदेश दिइरहन्थे । मैले उनको गैरकानूनी आदेश नमानेमा मेरो जागिर खोस्नेसमेतको धम्की उनी बारम्बार मलाई दिनेगर्दथे । उनको बन्द र घुर्कीबाट कत्ति पनि विचलित नभईकन कानूनको परिधिभित्र रहेर म काम गर्नेगर्दथेँ । त्यसै बेला २०४१ साल माघ महिनामा झापा जिल्लाको दमकमा रहेको लावतीको मौजामा काठमाडौंबाट गएर उनले भेट्ने भनेर मलाई चन्द्रगढीबाट दमक बोलाएका थिए । आफ्नै मन्त्रालयका मन्त्री भएका हुँदा म उनलाई भेट्न दमक गएको थिएँ । लावतीले एकान्तमा राखेर मलाई उनको पक्षमा लागेर उनको भनाइ अनुसार काम गरेमा प्रथमश्रेणीमा बढुवा दिएर झापामा नै राख्ने प्रस्ताव उनले राखेका थिए । यदि उनको भनाइ मैले नमानेमा मेरो जागिर खोस्ने भनेर फेरि पनि लावतीले मलाई धम्की दिएका थिए । त्यो कुरा सुनेपछि मेरो भित्री अहं

भयङ्‌करत्रूपमा जागेर उठेको थियो । त्यस बेला मैले आँखा नै देखेको थिइन । तैपनि आफूलाई अत्यन्त संयममा राखेर 'जे जे गर्नसक्नुहुन्छ गर्नुहोस् । मलाई बढुवा पनि चाहिँदैन । झापा जिल्लामा पनि मैले बस्नु छैन र तपाईको गैरकानूनी आदेश पनि म मान्दिन' भनेर उनको निवासबाट निस्किएर म हिंडेको थिएँ ।

त्यसरी त्यस बेलाका शक्तिशाली गृहमन्त्री श्रीपद्‌मसुन्दर लावतीसँग त्यति भनाभन भएपछि आफ्नू गुण्टा बाँधेर म खोसुवा अथवा सरुवाको पुर्जीको प्रतीक्षा गरेर बस्न थालेको थिएँ । लावतीसँग त्यति भनाभन भएपछि मलाई कोशी अञ्चलका तत्कालीन अञ्चलाधीश श्रीधर्मबहादुर थापाले मोरङ जिल्लामा कायममुकायम प्रथम श्रेणीको प्र.जि.अ.मा लैजाने प्रस्ताव राख्नु भएको थियो । कायममुकायम भएर कहीँ पनि नजाने मेरो धारणा अनुसार मैले उनको भनाइलाई अस्वीकार गरेको थिएँ । लावती काठमाडौँ गएपछि नभन्दै फागुन ७ गतेको प्रजातन्त्रदिवस मनाएर रवाना हुने गरी मेरो सरुवा पाल्पा जिल्लाको प्र.जि.अ.मा भएको सरुवापत्र माघको अन्तिम हप्तमा मैले गृहमन्त्रालयबाट पाएको थिएँ । लावतीसँग भनाभन भएपछि म मानसिक र शारीरिकरूपमा पनि झापा जिल्लाबाट हिंड्न तयार भइसकेको थिएँ । झापा जिल्लामा प्र.जि.अ. भएर बस्ता इनरुवामा गएर म मेरा वृद्ध मातापिताहरूलाई बारम्बार भेट्न पाउँथे र सञ्चोबिसन्चोमा हेरचाह गर्ने पनि म सौभाग्य पाउँथेँ । पाल्पा जिल्लामा सरुवा भएपछि भने मातापिताको दृष्टिबाट टाढा हुनुपर्छ भनेर मलाई अत्यन्त दुःख लागेको थियो । त्यही एउटा कुराको चिन्ता बोकेर मातापिता र अन्य आफन्तहरूसँग पनि बिदा भएर म २०४१ साल फागुन ७ गते प्रजातन्त्र दिवस मनाएर फागुन ११ गते झापाजिल्लाबाट पाल्पाजिल्ला जानका लागि बिदा भएर हिंड्ने समयमा अञ्चलाधीश लगायत सम्पूर्ण अड्डा प्रमुख र नेताहरूले मेरो स्नेहाभिषिक्त तथा अविस्मरणीय बिदाइ गरेका थिए । त्यही बिदाइको सम्झना मेरो स्मृतिपटलमा आजसम्म पनि ताजै भएर रहेको छ ।


जि.प्र.का. झापा    अनुस्मृतिकार



# पाल्पा जिल्लामा

झापा जिल्लाबाट बिदा भएर हामीहरू विराटनगर आएका थियौँ। विराटनगरको शङ्करपुर सोमबारेमा रहेको दाजुको घरमा त्यस बेला आमा हुनुहुन्थ्यो। त्यहाँ निस्केर आमासँग भेटघाट गरी बिदा भएर हामीहरू हवाइजहाजद्वारा काठमाडौँको घरमा उसै दिन आइपुगेका थियौँ। काठमाडौँ आएपछि घरमा केही दिन बसेर सानी छोरी सविता र सानु छोरा सगुनलाई साथमा लिएर २०४१ साल फागुन २१ गते हामी श्रीमान् र श्रीमती पाल्पा जान हवाइजहाजद्वारा भैरहवा गएका थियौँ। भैरहवाबाट बुटवल गएर अञ्चलाधीशसँग भेटघाट गरी त्यसै दिन बेलुका ५ बजे हामीहरू पाल्पा जिल्लाको सदरमुकाम तानसेन पुगेका थियौँ। जिल्लाप्रशासन कार्यालय तानसेनलाई पूर्व जानकारी भएको हुँदा सबै कुराको व्यवस्था मिलाएको रहेछ।


तानसेनदरबार, २०४१

पाल्पाजिल्लाको सदरमुकाम व्यवस्थितरूपमा तानसेन बजारको बीचमा रहेको पुरानू दरबारसहितका सरकारी घरहरूमा र नपुग कार्यालयहरूका लागि तानसेन बजारका व्यक्तिगत घरहरू भाडामा समेत लिएर व्यवस्था मिलाइएको रहेछ। २०२७ सालमा गण्डकी अञ्चलाधीशकार्यालय पोखरामा शाखाअधिकृत पदमा कार्यरत छँदा पी.डी.ओ. श्रीहिरण्यलाल रेग्मी र सरकारी अञ्चलवकिल श्रीरामहरि तिमल्सिनाका साथमा भैरहवा र गोरखपुरतिर घुम्न जाँदा म पाल्पाहुँदै गएको थिएँ। उताबाट फर्केर आउँदा तानसेनबजार घुमेर हामीहरू साँझमा


दरबार अगाडि परिवारसहित लेखक, २०४१

पोखराथोक श्रीहिरण्यलाल रेग्मीको घरमा गएर बसेका थियौं। अर्को दिन बिहानको खाना खाएर हामीहरू पोखराथोकबाट यात्रीबसमा चढेर पोखरातर्फ प्रस्थान गरेका थियौं। आर्यभञ्ज्याङबाट ओरालो लाग्ने बित्तिकै बाटोमा बगेको पानीमा चिप्लिएर हामीहरू चढेको बस झण्डैझण्डै भीरबाट तल खोलामा झरेको थियो। ठूलो भाग्यले हामीहरू जोगिएका थियौं र राम राम जप्दै पोखरा पुगेका थियौं। त्यो पुरानू कुरा मैले बिर्सिसकेको थिएँ। त्यस दिन तानसेनमा पुग्दा मलाई त्यस घटनाको सम्झना अप्रत्याशितरूपमा भएको थियो।

तानसेन पुगेर दरबारको माथिल्लो तलामा रहेको निवासस्थानमा हामीहरू चढेका थियौं। भुइँको तलामा र पहिलो तलामा जिल्ला प्रशासनकार्यालय लगायत विभिन्न सरकारी कार्यालयहरू रहेका रहेछन्। सबैभन्दा माथिल्लो तलामा प्र.जि.अ.को आवास रहेछ। केही क्षण थकाइ मारेपछि दरबारको बुर्जामा चढेर तानसेन बजार र श्रीनगर डाँडाको दृश्य हेर्न म गएको थिएँ। बुर्जाबाट हेर्दा दरबार अगाडिको एउटा भव्य घरमा बिजुली बत्तीले झकिझकाउ पारेर ब्याण्ड बाजासहितको विवाहको दृश्य मैले अनायास देखेको थिएँ। त्यस बेला फजुल खर्च रोक्ने उद्देश्यले सामाजिक विधिव्यवहारसम्बन्धी कानूनलाई कडाइकासाथ लागू गर्न गृह मन्त्रालयले निर्देशन जारिगरेको थियो। गृहमन्त्री लावतीले त्यसतर्फ खूब ध्यान दिएर अनुगमन पनि गर्नुभएको थियो। त्यस्तो अवस्थामा प्रशासनकै अगाडि त्यस प्रकारको धूमधामले विवाह गर्नु प्रशासनलाई हेपेको हो भन्ने मलाई लागेको थियो। तुरुन्तै प्रहरीलाई बोलाएर मैले त्यस प्रकारको गैरकानूनी विवाह गर्ने गराउने सबैलाई कारबाही गर्न आदेश दिएको थिएँ। बत्ती, ब्याण्डबाजा र अरू तामझाम सबै तुरुन्तै बन्द गर्न प्रहरीलाई आदेश दिएर मैले आफ्नू शक्तिको पूर्णरूपमा प्रदर्शन गरेको थिएँ। त्यो विवाह धनीमानी प्यूठाने साहुकी छोरीको थियो।


दरबारको गद्दीबैठकमा राखिएको पृथ्वीनारायण शाहको तरवार हातमा लिएका लेखक

उक्त विवाह बन्द नगरिदिन तत्कालीन नगरपञ्चायतका प्रधानपञ्च श्रीगणेशमान महर्जन, श्रीदशरथमान शाक्य, श्रीचकोरमान शाक्य लगायतका गण्यमान्य स्थानीय व्यक्तिहरू मलाई भन्न आएका थिए। शक्ति र मदले अन्धो भएको मैले उनीहरूको भनाइलाई नमानेर त्यो विवाहको भव्यतालाई बिगारिदिएको थिएँ र सामान्य विवाह गर्न निर्देशन दिएर मैले आफ्नू अहं पूरा गर्न उनीहरूलाई बाध्य बनाएको थिएँ। त्यतिमात्रै होइन त्यस प्रकारको विवाह गरेकोमा प्यूठाने साहुलाई मैले सामाजिक विधिव्यवहारसम्बन्धी कानूनको उल्लङ्घन गरेर विवाह गरेकोमा सरकारवादी मुद्दा पनि चलाएको थिएँ।


फूलपातीको बढाइँमा भगवतीलाई सलामी दिँदै गरेका सेना र प्रहरीका बीचमा लेखक

प्र.जि.अ. भएको जोशमा कडा कारबाही गरेर त्यस बेला म आफूलाई कडा प्रशासक भएको सबैका अगाडि प्रमाणित गर्न चाहन्थेँ। प्यूठाने साहुको त्यो मुद्दा धेरै समयपछिमात्र मैले टुङ्ग्याइदिएको थिएँ। पाल्पा जिल्लामा प्र.जि.अ. भएर गएपछि मैले गरेको त्यो पहिलो कारबाही थियो। म पाल्पाजिल्लामा प्र.जि.अ. भएर बसुञ्जेल त्यस प्रकारका ठूला बिहाबारीहरू र सामाजिक कार्यहरू गर्न कसैले पनि हिम्मत गरेका थिएनन्। एकप्रकारले त्यो राम्रै शुरुवात भएको भए तापनि जाने बित्तिकै त्यति कडा कारबाही नगरेको भए पनि हुन्थ्यो भन्ने अहिले यस अवस्थामा आएर मैले ठानेकोछु।

पाल्पाजिल्ला सामान्यतया शान्त जिल्लाहरूमध्येमा पर्दछ। तानसेनवासीहरू सभ्य र परिष्कृत मानिसहरू भएकाले प्रशासनलाई विनाकारण कुनै झण्झट दिँदैनथे। अतिथिसत्कार गर्न, खानाका परिकारहरू तयार गरेर खुवाउन र मानमनितो गर्नमा तानसेनवासीहरू, खासगरेर नेवार समुदायका व्यक्तिहरू, अत्यन्त सिपालु भएको मैले पाएको थिएँ। तानसेन बजारको माझमा सदरमुकाम रहेको र सरकारी कर्मचारीहरूको अरू खास काम केही नभएकाले साँझ परेपछि टी.भी. हेर्ने नाममा बजारका साहुहरूका घरमा जाने प्रचलन रहेछ।


दरबारको फूलबारीमा श्रीमतीसहित लेखक, २०४२ साल कार्तिक २२ गते

साँझ परेपछि खोज्दा कर्मचारीहरू कसैलाई पनि आवासमा भेट्न मुश्किल पर्दथ्यो । केही दिन त्यस कुराको अध्ययन गरेपछि कर्मचारीहरूलाई साँझ परेपछि बजारियाका घरहरूमा जानबाट रोक्नु अति आवश्यक भएको मैले



श्री ५ वीरेन्द्रका शुभजन्मोत्सवका अवसरमा पूर्वमन्त्री श्रीरुद्रप्रसाद गिरीका साथ पाल्पाजिल्लामा रहेका सरकारी कार्यालयहरूका अधिकृतहरूका साथ लेखक, तानसेनको टुँडिखेलमा, २०४२ साल पौष १४ गते

संझेको थिएँ । पहिलो कुरा काम परेर कर्मचारी खोज्नु पऱ्यो भने कुन बजारियाका घरमा कुन कर्मचारी गएको छ भनेर पत्तो लगाउन गाह्रो पर्दथ्यो र अर्को कुरा सधैँ कर्मचारीहरू अरूका घरमा गएर बस्ता कुनै अप्रिय घटना हुनसक्ने वा कार्यालयको गोप्य कामकुरा खुल्न जाने पनि सम्भावना थियो । विनाकारण कसैको व्यक्तिगत स्वतन्त्रतामा प्रतिबन्ध लगाउन पनि नसकिने भएको हुँदा कुनै रचनात्मक काम गरेर कर्मचारीहरूलाई अरूका घरहरूमा जानबाट रोक्नेतर्फ मैले शोचेको थिएँ ।

त्यसै कुरालाई दृष्टिगत गरेर एक दिन मैले सबै अड्डा प्रमुखहरूलाई बैठकका लागि जिल्लाप्रशासन कार्यालयमा बोलाएको थिएँ । उक्त बैठकमा अड्डाप्रमुख, कार्यालय प्रमुख र सबै इच्छुक कर्मचारीहरूको साझा संस्थाका रूपमा कर्मचारीमिलनकेन्द्र स्थापना गर्ने निर्णय भएको थियो । मिलनकेन्द्रको गठन भएपछि मिलनकेन्द्रको कार्यालय तानसेन दरबारमै राख्ने र उक्त कार्यालयमा टी.भी.राख्ने, नियमितिरूपमा भेला हुन ठूलो बैठकको व्यवस्था गर्ने र मनोरञ्जनका लागि खेलकूदका सामानहरूसमेत जुटाउने पनि निर्णय भएको थियो । त्यसकासाथै मिलनकेन्द्रको मुखपत्रको रूपमा "दीपशिखा" नामक पत्रिका पनि निकाल्ने निर्णय गरिएको थियो । मिलनकेन्द्रको अध्यक्षमा

प्र.जि.अ., अरू पदमा विभिन्न अधिकृतहरू र अन्य कर्मचारीहरू पनि राख्ने व्यवस्था विधानद्वारा गरिएको थियो । मनोरञ्जनका साधनहरू जुटाउनलाई सबै अड्डाप्रमुखहरूले आ–आफ्ना तर्फबाट आर्थिक योगदान गरेका थिए । त्यसका अतिरिक्त लुम्बिनीअञ्चलका तत्कालीन अञ्चलाधीश श्रीकाजीमान कन्दङ्वाले पनि आर्थिक सहयोग गर्नु भएको थियो ।

त्यसरी मिलनकेन्द्र स्थापना गरिसकेपछि मिलनकेन्द्रको मुखपत्रको रूपमा "दीपशिखा" नामक पत्रिकाको प्रकाशन पनि शुरु गरिएको थियो । सम्पादकमा योग्य व्यक्तिहरू छानिएका थिए र संरक्षकमा म रहेको थिएँ । मिलनकेन्द्रका माध्यमबाट कर्मचारीका बीचमा सुसम्बन्ध कायम गर्न सजिलो भएको थियो र कार्यालयका कामकारबाहीमा पनि समन्वय आएको थियो । मिलनकेन्द्रको कार्यालय तानसेन दरबारको पूर्वपट्टिको भुइँतलाको ठूलो कोठामा राखिएको थियो । मिलनकेन्द्रमा दुई थरी विशेष कार्यक्रमहरू थालिएका थिए । पप्लु खेल्नलाई दुरुत्साहन गर्न ब्रिजको खेल शुरु गरिएको थियो । त्यसका लागि पोखराका तत्कालीन क्षेत्रीय अदालका मुख्य न्यायाधीश श्रीअनील अरू न्यायाधीशहरूलाई साथमा लिएर ब्रिज खेल्न रातै बस्ने गरी पाल्पा–जिल्लाको तानसेन जाने गर्नुहुन्थ्यो । उहाँले हामीहरू सबैलाई ब्रिज खेल्न पनि सिकउनु भएको थियो । त्यसका अतिरिक्त मिलनकेन्द्रले योग सम्बन्धी कक्षा पनि सञ्चालन गरेको थियो। त्यसको प्रभाव सर्वत्र सकारात्मक नै परेको थियो। पाल्पाको कर्मचारीमिलनकेन्द्रले पारेको सकारात्मक र रचनात्मक प्रभाव श्री ५ वीरेन्द्रको पश्चिमाञ्चल सवारीका बेलामा पाल्पाको जस्तै कर्मचारी मिलनकेन्द्रहरू अधिराज्यका अरू जिल्लाहरूमा पनि खोल्नेसम्बन्धमा सवारीक्याम्प पोखराबाट पचहत्तरै जिल्लाप्रशासन कार्यालयहरूमा परिपत्रसमेत भएको थियो ।


तानसेनदरबारमा पृथ्वीनारायणको तरवार हातमा लिएर सलामी लिँदै लेखक

त्यसरी पाल्पा जिल्लामा प्रमुखजिल्ला अधिकारी भएर बसेको बेला आफ्ना निर्धारित काम कर्तव्यहरूका अतिरिक्त फुर्सत पाएको बेलामा

विभिन्न रचनात्मक कामहरू पनि मैले गर्नेगरेको कुरा माथि उल्लेख गरिसकियो । त्यस समयमा केही कविताहरू पनि मैले लेखेको थिएँ । प्रथमश्रेणीमा बढुवाका लागि नम्बर बढाउने उद्देश्यले मैले "ऋतु मन्थन" नामक समीक्षात्मक ग्रन्थ पनि तयार गरेर प्रकाशित गरेको थिएँ । जसमा कविशिरोमणि श्रीलेखनाथ पौडेलको ऋतुविचार र कवि श्रीमोहन कोइरालाको ऋतुनिमन्त्रणको तुलनात्मक विवेचना गरिएको छ । त्यस ग्रन्थबाट मैले राजपत्राङ्कित प्रथमश्रेणीको पदमा बढुवा हुँदा लोकसेवा आयोगबाट मूल्याङ्कन भएर नम्बर पनि पाएको थिएँ । त्यसै गरेर त्योभन्दा पहिले प्रकाशित भएको मेरो उसैका लागि र फेरि उसैका लागिको एक अध्ययन भन्ने ग्रन्थबाट पनि मैले लोकसेवा आयोगबाट मूल्याङ्कन भएर उपसचिवमा बढुवा हुँदा अङ्क पाएको थिएँ ।

रचनात्मक कामहरूकै सन्दर्भमा मिलनकेन्द्रको तत्त्वावधानमा बेलाबेलामा साहित्यसम्मेलन पनि हामीहरू गर्ने गर्दथ्यौँ । त्यसरी हामीहरूले मिलनकेन्द्र स्थापना गर्नुभन्दा केहीसमय अगाडि अर्थात् म त्यहाँ पुग्नेबित्तिकै २०४१ सालमा राजकीयप्रज्ञाप्रतिष्ठानका तर्फबाट प्राज्ञ श्रीभूपी शेरचनको नेतृत्त्वमा तानसेनमा कविसम्मेलन गर्न पुगेको कविहरूको मण्डलीलाई तानसेन दरबारको ऐतिहासिक गद्दीबैठकमा भेला गराएर मैले कविसम्मेलन गराएको थिएँ । २०२७ साल आषाढदेखि २०२९ साल आषाढ महिनासम्म म गण्डकी अञ्चलाधीश कार्यालय पोखरामा शाखा अधिकृत भएर कार्यरत छँदा कर्मचारी कवि हुनसक्तैन भनेर मलाई उपेक्षा गर्नुभएको थियो । तर प्राज्ञ श्रीभूपी शेरचनले तानसेन दरबारको गद्दीबैठकमा भएको कवि सम्मेलनमा मेरो मुक्त कण्ठले प्रशंसा गरेर आफ्नू पुरानू पूर्वाग्रही धारणालाई परिमार्जन गर्नुभएको थियो । उहाँले मेरो प्रशंसा गर्दागर्दै प्र.जि.अ.को साटो प्र.जि.क. अर्थात् प्रमुख जीवन्त कवि भनेर मैले थाम्नै नसक्ने उपाधि पनि उहाँले मलाई दिनुभएको थियो ।



तानसेनदरबारको गद्दीबैठकमा आयोजना गरिएको राष्ट्रिय कवितागोष्ठीका अवसरमा कवि भूपी शेरचनका साथ लेखक, २०४१ साल चैत्र

त्यसरी नानाथरीका सिर्जनात्मक कामहरू गर्दागर्दै मेरा दिनहरू पनि

आनन्दैसँग पाल्पाको तानसेनमा बितिरहेका थिए । पाल्पाजिल्ला ऐतिहासिक, सांस्कृतिक र धार्मिक दृष्टिकोणले पनि समृद्ध जिल्ला भएको हुँदा म विभिन्न देवीदेवताहरूको दर्शन गर्न परिवारसहित यात्रा गर्ने गर्दथेँ । सदरमुकाम तानसेनमा त्यस बेलाका त्यस जिल्लाका शासक जनरल श्रीअमरसिंह थापाले स्थापना गरेका श्रीअमरनारायण, भगवती श्रीअमरेश्वरी लगायतका विभिन्न देवीदेवताहरूका प्राचीन मन्दिरहरू विद्यमान छन् । त्यसैगरी तानसेनबाट पश्चिमतर्फको देउराली डाँडामा संसारमा सबैभन्दा ठूलो मानिएको विशाल त्रिशूल स्थापना गरिएको भगवान् श्रीभैरवको मन्दिर छ। त्यसै गरी कालीगण्डकीको किनारा रिडीमा भगवान् श्रीहृषीकेशको मन्दिरसमेत छ। ती सबै देवीदेवताहरूको पूजाआजा सञ्चालन गर्न प्रशस्तमात्रामा गुठीको नाममा जग्गाजमीनसमेत राखिएको थियो। तर हाल आएर ती गुठीका जग्गाजमीनहरू हिनामिना भइसकेका हुँदा दैनिक पूजाआजा चलाउनसमेत अत्यन्त अप्ठेरो परेको मैले देखेको थिएँ। भ्रमणका सन्दर्भमा म एक पटक २०४३ सालमा गुल्मीजिल्लाको सदरमुकाम तम्घास पुगेको थिएँ। त्यसै सन्दर्भमा परिवारसहित गएर भगवान हृषीकेशको दर्शन गर्ने मैले शुभअवसर पाएको थिएँ।


पाल्पाजिल्लाको देउरालीमा रहेको भैरवस्थानमा परिवारसहित लेखक



भगवान् श्रीहृषीकेशको मन्दिर अगाडि श्रीमती इन्दिरा सानो छोरा सगुन र सानी छोरी सविता, २०४१।१२।११

उपर्युक्त अनुसार एकातर्फ मेरा दिनहरू सिर्जनात्मक काम गरेर बितिरहेका थिए भने अर्कातर्फ तुलनात्मकरूपमा शान्त मानिने पाल्पा जिल्लामा पनि प्रत्यक्ष र अप्रत्यक्षरूपमा चर्को राजनीति हुने गर्दथ्यो। पञ्चायती राजनीति माननीय श्रीहरिबहादुर थापा, माननीय श्रीयादव सिंह रायमाझी, श्रीकालुराम राना र श्रीगम्भीरजङ्ग कार्कीहरूले गर्नुहुन्थ्यो

भने काङ्ग्रेस र कम्युनिष्टहरूको राजनीति भने भूमिगत नेताहरूका निर्देशनमा विभिन्न विद्यालयहरूमा कार्यरत शिक्षकहरूबाट हुनेगर्दथ्यो । समय समयमा विभिन्न मागहरू राखेर शिक्षक सङ्गठनले जिल्लाभरिका विद्यालयहरू हड्ताल गर्ने, जुलुस निकाल्ने र नारा लगाउदै हिंड्ने कामसमेत नियमितरूपमा हुनेगर्दथ्यो । त्यस्तो बेलामा बाध्य भएर शिक्षकहरूलाई पक्राउ गरेर मैले थुनामा राख्नुपरेको थियो । त्यसका अतिरिक्त श्रीकुलप्रसाद नेपाल, श्रीदयाराज बस्यालसमेतका शिक्षकहरूलाई सेवाबाटै अवकाश पनि दिइएको थियो । वामपन्थी शिक्षकहरू र कार्यकर्ताहरूलाईसमेत बोकेर संरक्षण गर्नेमा दुई जना वरिष्ठ पञ्चनेताहरू हुनुहुन्थ्यो । उहाँहरूका सम्बन्धमा मबाट भएको व्यवहार सङ्क्षिप्तरूपमा यहाँ उल्लेख गर्नु सान्दर्भिक ठान्दछु ।

म प्रमुखजिल्लाअधिकारी भएर पाल्पामा जाँदा दुई जना माननीय श्रीयादवसिंह रायमाझी र श्रीहरिबहादुर थापामगर हुनुहुन्थ्यो । २०४३ सालमा निर्वाचन हुँदा फेरि श्रीहरिबहादुर थापाले राष्ट्रियपञ्चायतको सदस्यमा जित्नुभएको थियो । तर श्रीयादवसिंह रायमाझीले चुनाव हारेर त्यस ठाउँमा श्रीगम्भीरजङ्ग कार्कीले चुनाव जित्नुभएको थियो । श्रीहरिबहादुर थापाले शुरुदेखि नै कम्युनिष्ट समर्थक शिक्षकहरू र कार्यकर्ताहरूको पक्ष लिँदै हिंड्नु भएको थियो । केही समस्या पर्‍यो कि त कम्युनिष्ट पक्षको भएर श्रीहरिबहादुर थापा जिल्लाप्रशासन कार्यालयमा प्रतिनिधि लिएर आउने गर्नुहुन्थ्यो । मैले त्यसो नगर्न बारम्बा सम्झाउँदा पनि नमानेपछि उहाँलाई सरकारी कार्यालयहरूबाट बहिष्कार गरिएको थियो । त्यसपछि वामपन्थीहरूलाई सहयोग गर्ने काम श्रीकमलराज रेग्मीले गर्नु भएको थियो । उहाँलाई पनि त्यसो नगर्न प्रशासनले अनुरोध गरेपछि उहाँहरू दुवैजना काठमाडौं गएर मलाई कङ्ग्रेस भएको आरोप लगाएर जागिरै खोस्ने सम्बन्धमा दरबारमा जाहेर गर्नु भएको थियो । सो कुराको छानविन गर्न त्यस बेलाका स्थानीय विकासमन्त्री श्रीपशुपति शम्शेर राण पाल्पा जिल्लामा जानुभएको थियो । उहाँसँग जिल्लाको वस्तुस्थिति र माननीय हरिबहादुरको क्रियाकलापसमेतमा व्यापक छलफल भएको थियो । त्यसबाट मन्त्री श्रीपशुपति शम्शेरले माननीय हरिबहादुर थापालाई गैरकानूनी काम नगर्न निर्देशन दिएर फर्किनु भएपछि श्रीहरिबहादुर थापालाई सरकारी

कार्यालयहरूमा प्रवेश दिइएको थियो। श्रीकमलराज रेग्मीभने मैले कम्युनिष्टहरूलाई सहयोग नगरेको हुँदा मेरा विरुद्धमा पछिसम्म नै लागिरहनु भएको थियो।

पाल्पाजिल्लामा बसेर मैले काम गर्दा जिल्लाको वस्तुस्थिति बुझ्न धेरैपटक पश्चिममा अर्घाखाँचीजिल्लाको बल्ढ्याङगढीदेखि लिएर पूर्वमा रामपुर बाँकामलाङसम्मको यात्रा गरेको थिएँ। त्यसरी यात्रा गर्दा पाल्पाजिल्लाको बारेमा मलाई धेरै कुराको ज्ञान भएको थियो। भ्रमणको शिलशिलामा नै २०४३ साल बैशाख ७ गते हावाहुरीबाट उडाएको श्रीखड्ग शम्शेरको पालामा बनेको रानीघाट दरबारको निरीक्षण गर्न म गएको थिएँ। सो दरबार मर्मत सम्भारको अभावमा ढल्ने अवस्थामा पुगिसकेको थियो।


रानीघाटमा रहेका जीर्ण दरबारका अगाडि महेन्द्र श्रेष्ठका साथ लेखक

त्यसैगरेर म पाल्पा जिल्लामै बसेको समयमा नै मिति २०४३ साल जेष्ठ ५ गते मेरा कान्छा छोरा श्रीसगुन भट्टराईको व्रतबन्ध तानसेन दरबारको परिसरभित्र नै भएको थियो। मैले पाल्पाजिल्लामा बसेकै समयमा भगवान् बुद्धको जन्मस्थान लुम्बिनीको पनि भ्रमण गरेको थिएँ। त्यस समयमा कालीगण्डकीको प्रसिद्ध राम्दीघाटमा योगी श्रीनरहरिनाथबाट शुरु गरिएको मन्दिरनिर्माणका लागि सहयोग पनि पुऱ्याएको थिएँ।


सानो छोरा सगुनकुमार भट्टराईको व्रतबन्धमा भिक्षादान गर्दै आमा इन्दिरा

त्यसरी पाल्पाजिल्लामा प्र.जि.अ. भएर २०४१ साल फागुनदेखि २०४४ साल असारसम्म काम गर्दा मैले नाना थरीका प्रशासनिक र अरू अनुभवहरू पनि बटुल्न पाएको थिएँ। थरीथरीका अञ्चलाधीशहरूको निर्देशन र शासनमा रहेर मैले काम गर्नु परेको थियो। पाल्पाजिल्लाका दुर्गम क्षेत्रहरूमा पनि समस्या परेको बेला पश्चिम अर्घाखाँचीको सीमा बल्ढ्याङगढीदेखि पूर्वमा रामपुरसम्म म पुगेको थिएँ। एकपटक जिल्लाभ्रमणको सन्दर्भमा अञ्चलाधीश काजीमान कन्दङ्वासँग रामपुर गएको थिएँ। अघिपछि सामान्य भए पनि जिल्लामा निर्वाचन भएका बेलामा

प्रशासनलाई विभिन्न समस्याहरू आइपर्ने गर्दथे । एकातर्फ चुनाव गराउन झन्झट पर्दथ्यो भने अर्कोतर्फ शान्तिसुरक्षाको उत्तरदायित्त्व पनि स्वतः प्र.जि.अ.लाई पर्नेगर्दथ्यो ।



भगवान् श्रीबुद्धको जन्मस्थल लुम्बिनीमा
अशोकस्तम्भका अगाडि र बोधिवृक्षमुनि लेखक

पञ्चायतकालमा जिल्लापञ्चायतका चुनावमा र राष्ट्रियपञ्चायत सदस्यका चुनावसमेतमा सधैंजसो अमुक व्यक्तिलाई जिताउने र अमुक व्यक्तिलाई हराउने भनेर सम्बन्धित अञ्चलाधीशको निर्देशन जिल्लामा जाने गर्दथ्यो । अञ्चलाधीशलाई सायद दरबारबाट निर्देशन जानेगर्दथ्यो होला । त्यो कुराभने प्र.जि.अ.हरूलाई स्पष्ट थाहा हुँदैनथ्यो । पञ्चायतकालीन प्रशासनमा अञ्चलाधीशहरूलाई दरबारका प्रतिनिधि र प्र.जि.अ.हरूलाई सरकारका प्रतिनिधि भन्ने चलन थियो । वास्तवमा प्र.जि.अ.हरू सौताका छोराजस्ता ठानिन्थे । दरबारबाट केही निर्देशन जानुपर्‍यो भने सर्वप्रथम अञ्चलाधीशलाई गोप्यरूपले जाने गर्दथ्यो र अञ्चलाधीशहरूले अड्कली अड्कली विश्वास गरे अनुसार प्र.जि.अ.हरूलाई भन्ने गर्दथे । अप्ठ्यारा र खतरायुक्त काम प्र.जि.अ.हरूबाट गराइने तर प्र.जि.अ.हरूलाई विश्वासभने नगर्ने पञ्चायती-व्यवस्थाको विशेषता थियो । अञ्चलाधीश र सरकारको चेपुवामा परेर धेरै प्र.जि.अ.हरूको अन्यायपूर्वक जागिर पनि खोसिएको थियो ।

त्यसरी पञ्चायतीकालमा राजाबाहेक अन्यत्र कहीँ पनि उजुरी सुनिने ठाउँ थिएन । राजा र राजदरबारलाई पनि धेरैजसो निहित स्वार्थ भएका व्यक्तिहरूले घेरेर बस्ने भएका हुँदा सामान्यरूपमा आवाज पुर्‍याउन गाह्रो पर्दथ्यो । पाल्पाजिल्लामा त्यति लामू अवधि बस्ता पनि मैले खास गरेर कुनै चर्को समस्यामा फस्नु परेको थिएन । त्यस समयमा पहाडी जिल्लाहरूमा प्रायः गरेर प्रहरी निरीक्षकहरूको दरबन्दी हुन्थ्यो । प्रहरी निरीक्षकमा कि त बूढापाका श्रीनरबहादुर शेरचन (माहिला दाइ) जस्ता कामै नलाग्ने मान्छे हुन्थे, कि त श्रीअरुण गुरुङ, श्रीशिव कार्की, श्रीचन्द्रबहादुर कार्की, श्रीअशोक श्रेष्ठ र श्रीशारदा पराजुली जस्ता आलाकाँचा, व्यसनी, उत्तरदायित्त्वविहीन, अनुशासनशून्य र प्रशासनका विरुद्ध गएर काम गर्‍यो भने नाम चल्छ भन्ने

शोचाइ राख्ने उरण्ठेउला व्यक्तिहरूमात्र हुन्थे । त्यस्ता प्रहरी निरीक्षकहरूसँग काम गर्नु पर्दा साह्रै दुःख पाइन्थ्यो । श्रीअरुण विक्रम राणा र श्रीमदन विक्रम शाह जस्ता सक्षम र अनुशासित प्रहरी निरीक्षकहरू पाउन गाह्रो हुन्थ्यो ।

पाल्पाजिल्ला भौगोलिक दृष्टिले पहाडी जिल्ला भए तापनि शक्ति र शिक्षाको दृष्टिले अत्यन्त सक्षम जिल्ला मानिन्थ्यो। त्यस बेला राष्ट्रिय योजनाआयोगका उपाध्यक्ष लगायतका राजदरबार र सरकारमासमेत गरी थुप्रै व्यक्तिहरू विशिष्ट श्रेणीका पदमा कार्यरत थिए। राजाका प्रमुख निजीसचिव, सचिव, शाही हेलिकोप्टर चालकसम्म पनि तानसेनवासी भएका हुँदा पाल्पाजिल्ला त्यस बेला शक्तिशाली थियो । माथि उल्लेख गरिएका धेरै शक्तिशाली व्यक्तिहरू तानसेनमा भएर पनि स्थानीय प्रशासनलाई कुनै खालको झन्झट नलगाउनु त्यहाँका शक्तिशाली मानिसहरूको विशेषता भएको मैले पाएको थिएँ ।

पाल्पाजिल्लामा प्र.जि.अ. भएर काम गर्दा मसँग पञ्चहरूको चाहिँ त्यति राम्रो सम्बन्ध रहनसकेको थिएन। कम्युनिष्टसमर्थकहरूसँग त शुरुदेखि नै मेरो सम्बन्ध बिग्रिएको थियो भने काङ्ग्रेससमर्थकहरूसँग पनि २०४२ सालको सत्याग्रहदेखि सम्बन्ध बिग्रेएको थियो । दुवै थरीका समर्थकहरूले पाल्पाजिल्लाका विभिन्न निकायहरूमा छिरेर आफूलाई लुकाएर दलहरूका लागि काम गरिरहेका थिए । तिनीहरूमध्ये केही कर्मचारी भएर काम गर्दथे भने केही शिक्षक भएर काम गर्दथे । वास्तवमा तिनीहरू संस्थाप्रति कर्तव्यबुद्धिले काम नगरेर र उत्तरदायीसमेत नभएर संस्थाहरूलाई धोका दिने गर्दथे। त्यस प्रकारको धोका दिने कामको म जहिले पनि विरोधी थिएँ र पाल्पा जिल्लामा गएर पनि त्यस प्रकारका दोग्ला काम गर्नेहरूको विरोधमा नै म रहेको थिएँ । त्यसै कारण अनैतिक काम गरिरहेका दुवैथरीसँग मेरो विरोध परेको हो । त्यसै गरी दोग्ला काम गर्ने श्रीकमलराज रेग्मीसँग र माननीय श्रीहरिबहादुर थापासँग पनि मेरो विरोध परेको थियो ।

मैले अरू जिल्लाहरूमा जस्तै त्यस जिल्लामा प्र.जि.अ. भएर काम गर्दा पनि तत्कालीन जिल्लापञ्चायतका सभापति र त्यस जिल्लाबाट राष्ट्रिय पञ्चायतमा निर्वाचित भएर गएका राष्ट्रिय पञ्चायतका सदस्यहरूसँग पनि मेलमिलाप राखेर काम गर्ने कोशिश गरेको थिएँ। पाल्पाजिल्लामा त्यस

बेला शुरुमा जिल्लापञ्चायतका सभापति श्रीकालुराम राना र उपसभापति श्रीगम्भीरजङ्ग कार्की हुनुहुन्थ्यो। दुवै जना पञ्चायतभित्र प्रवेश गरेर काम गरिहेका भए तापनि नेपाली काङ्ग्रेसका समर्थक भएका हुँदा प्रशासनको विरोध गर्ने उहाँहरूको नीति रहेको थियो। प्र.जि.अ.ले जतिसुकै समन्वय राख्न खोजे तापनि उहाँहरूबाट प्रशासनले सहयोग पाउन सक्दैनथ्यो। उहाँहरूसँगको सम्बन्ध शुरुशुरुमा मेरो सामान्य नै थियो तापनि पछि गएर दुवै जनासँग मेरो सम्बन्ध त्यति सुमधुर हुन सकेको थिएन। त्यसै गरी अरू राजावादी पञ्चहरूसँगको सम्बन्ध पनि मेरो सामान्य नै थियो। सामान्य जनता र समाजसेवीहरूसँग भने मेरो अत्यन्त राम्रो सम्बन्ध रहेको थियो।

पाल्पाजिल्लाको सदरमुकाम तानसेनमा काठमाडौँमा भएजस्तै वर्षभरि नै विभिन्न प्रकारका धार्मिक उत्सवहरू भइरहने गर्दथे। दशैंको नवरात्रीको बेलामा विभिन्न पीठहरूमा बलि लगायत पूजाआजाका सामानहरू प्र.जि.अ.ले पठाउनु पर्दथ्यो। प्र.जि.अ.ले बडादशैंको फूलपातीको बढाइँमा पृथ्वीनारायण शाहको गद्दीबैठकमा रहेको तरबार हातमा लिएर प्रहरी र सेनासमेतको सलामी लिनु पर्दथ्यो। उक्त अवसरमा लहरे बन्दुक पड्काएर उत्सव पनि गरिन्थ्यो। विजयाको शुभसाइतमा प्र.जि.अ.का हातबाट टीका ग्रहण गर्न नगरवासीहरू, स्थानीय जनता र कर्मचारीहरूसमेत आउने चलन त्यस जिल्लामा विशेषरूपमा थियो। पाल्पाजिल्लाको सदरमुकाममा तानसेनलाई राणाकालभन्दा पहिलेदेखि नै पश्चिमी गौँडाका रूपमा विशेष महत्त्व दिइएको हुँदा त्यस



श्रीनगरको डाँडाबाट पाल्पा जिल्लाको सदरमुकाम तानसेन दरबारसहित तानसेनबजारको एक दृश्य, २०४३।६।२४

जिल्लाको महत्त्व अहिलेसम्म पनि केही न केहीरूपमा रहेकै देखिन्छ । राणाकाल र सोभन्दा पनि पहिले त्यहाँ बडाहाकिम खटाउँदा विशिष्ट खालका व्यक्तिहरूलाई नै खटाउने गरेको पाइन्छ । राणाकालमा श्री ३ को रोलक्रममा रहेका श्रीखड्ग शम्शेरलाई रोलक्रमबाट निकालेर उनकै भाइ श्री ३ चन्द्र शम्शेरले त्यहाँ बडाहाकिम बनाएर पठाएका थिए । त्यसै गरेर राणा शासनको अन्तिम समयमा पनि श्रीरुद्र शम्शेर जस्ता विशिष्ट व्यक्तिलाई नै त्यहाँ बडाहाकिम बनाएर पठाइएको थियो ।

त्यसरी ऐतिहासिक दृष्टिले पनि पाल्पाजिल्लाको महत्त्व अहिलेसम्म पनि अवशेष रहेको पाइन्छ । जनयुद्धको क्रममा विद्रोही माओवादीको तथाकथित जनसैन्यले अत्यन्त गौरवशाली इतिहास बोकेको पाल्पाजिल्लाको सदरमुकाम तानसेनमा रहेको ऐतिहासिक दरबारमा आगो लगाउँदा पाल्पाजिल्लाको गहना र जिउँदो इतिहास नै समाप्त हुनगएको छ । त्यो दरबार त्यसै रूपमा फेरि निर्माण हुन असम्भव छ र केही गरी निर्माण भइगए तापनि त्यसको गर्भमा रहेको इतिहास पाउन अत्यन्त गाह्रो छ । मैले आफ्ना जीवनका केही महत्त्वपूण वर्षहरू आफ्नै घर जस्तो गरेर बिताएको त्यो तानसेन दरबार अहिले भौतिकरूपमा जीवित नरहे तापनि मेरो स्मृतिपटलबाट भने कहिल्यै हराउने छैन । म त्यहाँ बसुन्जेल मसमेत मेरा समस्त परिवारलाई स्वादिष्ठ तथा स्वच्छ खाना बनाएर खुवाउने जिल्लाप्रशासन कार्यालय पाल्पाका बफादार राष्ट्रसेवक श्रीबोधराज ज्ञवालीको इहलीला माओवादीले तानसेनदरबार आगो लगाउँदा त्यसैभित्र जलेर त्यहीँ समाप्त भएको थियो । म उनको स्वर्गीय आत्माको चिरशान्तिका लागि भगवान्सँग हार्दिक प्रार्थना गर्दछु ।






बायाँबाट सञ्जीवकुमार भट्टराई र सुषमा भट्टराई, सतीशकुमार भट्टराई र सुष्मिता भट्टराई,
पूजा भट्टराई र सगुनकुमार भट्टराई

# गृहमन्त्रालयमा

उपर्युक्त अनुसार पाल्पाजिल्लामा मैले ४ वर्षदेखि प्रमुखजिल्ला अधिकारी भएर काम गरिरहेकै बेलामा मिति २०४४ साल वैशाख २८ गते मेरो राजपत्राङ्कित प्रथमश्रेणी अर्थात् सहसचिवको पदमा बढुवा भएको थियो । मैले सरकारी सेवामा प्रवेश गरेको मितिबाट २१ वर्ष ३ महिना ७ दिनमा मेरो प्रथमश्रेणीमा बढुवा भएको थियो । जुनसुकै जिल्लामा रहँदा पनि मैले अत्यन्त सक्रियताका साथ काम गरेको थिएँ । व्यक्तिगत स्वार्थभन्दा माथि रहेर काम गर्दा जिल्लामा भ्रष्टाचारी कर्मचारीहरूसँग मेरो प्रायः सङ्घर्ष पर्ने गर्दथ्यो । मूल्य र मान्यताको संरक्षण गर्न खोज्दा सङ्घर्ष पर्नु स्वाभाविकै थियो । पञ्चायतीकालमा अञ्चलाधीशदेखि लिएर केही तल्लो तहका कर्मचारीहरूसम्ममा पनि कमाउने प्रवृत्ति अत्यन्त व्याप्त थियो । त्यस चक्रव्यूहलाई तोड्न खोज्दा मैले सबै भ्रष्टहरूसँग अत्यन्त सङ्घर्ष गर्नु परेको थियो । मैले आफ्नू नैतिकता, अस्मिता र संवेदनालाई तिलाञ्जलि दिएको भए सबै निहित स्वार्थीहरूको प्रिय बन्ने थिएँ होला, काम गर्न सजिलो हुने थियो होला र म पनि अरू सरह सम्पन्न बन्ने थिएँ होला । तर मैले आत्मा मारेर, नैतिकता, मूल्य र मान्यतालाई बेचेर त्यसो गर्न चाहिन । जहिले पनि अनैतिकता र भ्रष्टाचारका विरुद्ध एक्लै भए पनि लडिरहनु नै मैले आफ्नू विजय ठानेको थिएँ । त्यसैबाट मैले आफ्नू सन्तुष्टि लिएको थिएँ र गौरवान्वित भएको पनि मैले संझएको थिएँ ।

त्यसरी पाल्पाजिल्लाबाट हार्दिकताका साथ बिदाबादी भएपछि म गृहमन्त्रालयको सहसचिवको पदमा हाजिर हुन आएको थिएँ । मन्त्रालयमा हाजिर भएपछि पद खालि भएर पनि झन्डै एक वर्षसम्म मलाई कुनै पनि महाशाखामा नियुक्ति नगरेर ठाडो हाजिर गराएर राखिएको थियो । त्यस बेला गृहमन्त्रालयमा कार्यरत सचिव श्रीवीरबहादुर शाही अत्यन्त चिसा र संवेदनाहीन मान्छे हुनुहुन्थ्यो । त्यस बेलाका गृहमन्त्रालयको कर्मचारीप्रशासन महाशाखाका सहसचिव आफ्ना सीमित व्यक्तिहरूलाईमात्रै सहयोग गर्ने र

आत्मरतिले युक्त व्यक्ति हुनुहुन्थ्यो । उहाँलाई मैले पहिलेदेखि नै चिनेको थिएँ र उहाँकै हातमा अधिकार भएर पनि मलाई त्यस प्रकारले उपेक्षा गरेर गृहमन्त्रालयमा लामू समयसम्म ठाडो हाजिर गराएर उहाँले राखेको सम्झँदा अहिलेसम्म पनि मलाई दुःख लागेरआउँछ । त्यतिमात्रै नभएर पहिलो कुरा कार्यसम्पादनमूल्याङ्कन फाराम भर्दा पनि मेरो बढुवा नै नहुने गरेर उहाँले मलाई अङ्क दिनुभएको थियो । दोस्रो कुरा उहाँले उपेक्षा गर्दागर्दै पनि आफ्नै सामर्थ्यले बढुवा भएर गृहमन्त्रालयमा आइसकेपछि पनि मलाई रिक्त रहेको सहसचिवको पदमा नियुक्ति नगरेर त्यसै हल्लाएर उहाँले राख्नुभएको थियो । ती कुराहरूले उहाँको मप्रति दुराग्रह र कलुषित भावना रहेको थियो भन्ने कुरा प्रष्ट नै देखिन्थ्यो । उहाँको मप्रतिको नकारात्मक भावनाको कारणले गर्दा नै मैले राजपत्राङ्कित प्रथमश्रेणीमा बढुवा हुनका लागि धेरै ठूलो सङ्घर्ष र प्रयास गर्नु परेको थियो । मेरो बढुवाका लागि सामान्यप्रशासन मन्त्रालयका तत्कालीन उपसचिव श्रीतीर्थप्रसाद लिगलले मलाई ठूलो सहयोग गर्नुभएको थियो । म उहाँले लगाउनु भएको गुन कहिलै पनि बिर्सिनसक्तिन । मलाई त्यसरी गृहमन्त्रालयको अतिरिक्त समूहमा हाजिर गराएर राखिएको बेला यातायातको साधनको सुविधासमेत दिइएको थिएन ।

त्यसरी मैले शारीरिक र मानसिक कष्टसमेत भोग्नुपरेको कारणले नै होला म निकै बेरामी भएको थिएँ । मलाई निकै लामू समयसम्म निद्रा नलाग्ने रोगले सताएको थियो । म काठमाडौंमा बेरामी थिएँ भने उता सुनसरी जिल्ला इनरुवाको घरमा धेरै लामू समयदेखि आमा बेरामी हुनुहुन्थ्यो । आमाको औषधोपचार गर्न र हेर्न म आफू बेरामी भए पनि बारम्बार इनरुवा जाने गर्दथैं । निद्रा नलाग्ने र उच्च रक्तचापसमेतको कारणले हवाइजहाज र गाडीमा समेत यात्रा गर्न मलाई त्यस बेला अत्यन्त गाह्रो पर्दथ्यो । तर पनि जसरी तसरी म हवाइजहाज चढेर विराटनगर हुँदै इनरुवा जाने आउने गर्दथैं । आमाको जीर्ण रोग थियो । कहिलेकाहीँ आराम हुने र कहिले निकै साह्रो हुने गर्दथ्यो । विराटनगरमा दाजुको घर भएको हुँदा सारोगाह्रो पर्दा त्यहीं राखेर औषधोपचार गर्ने गरिएको थियो । धेरैजसो इनरुवाकै घरमा नै आमा बस्नुहुन्थ्यो र त्यहाँ हुँदा छोराछोरी र इष्टमित्र सबैको दृष्टि पुग्दथ्यो । म लामू समयसम्म इनरुवाको घरमा गएर

बस्नलाई मन्त्रालयको कामले भ्याउँदिनथेँ ।

दुर्भाग्यवश, म काठमाडौं आएकै बेला २०४५ साल भदौ ५ गते पूर्वी नेपालमा ठूलो भूकम्प गएका दिन अर्थात् श्रावण शुक्ल पुत्रदा एकादशी तिथिमा आमाको निधन इनरुवाको घरमा भएको थियो । म १० बजे गृहमन्त्रालयमा हाजिर हुन पुग्दा आमा नरहनु भएको खबर मैले पाएको थिएँ । मेरो हृदयमा वज्रपात भएको थियो र मैले संसारै शून्य देखेको थिएँ । म केही समयसम्म बेहोस जस्तो भएको थिएँ । आमा यस संसारबाट जानुभएको समाचारलाई मैले पत्याउन सकेको थिइन । आमा हामीहरूलाई टुहुरो पारेर यस संसारबाट जानुहुन्छ भनेर मैले कहिल्यै पनि शोचेकै थिइन । तर मैले नशोचेको कुरा भएको थियो र ममाथि दैवको लाठी बज्रिएको थियो । म मन्त्रालयबाट तुरुन्तै घरमा आएर आमा जानु भएको खबर परिवारलाई सुनाएर तुरुन्तै हवाइजहाजद्वारा म अपराह्न विराटनगर पुगेको थिएँ । विराटनगरबाट इनरुवा पुग्दा दिनको २ बजेको थियो । त्यस बेलासम्म आमाको मृतशरीरलाई दाहसंस्कार गरेर दाजु र अरू मलामीहरू घर आइसक्नु भएको रहेछ । म काठमाडौंबाट छिटो साधनद्वारा इनरुवा पुग्दा पनि मेरो प्रतीक्षा नै नगरेर आमालाई घाट लगेर दाहसंस्कार गरेर आमाको अन्तिम मुख हेर्ने सौभाग्यसम्म पनि नदिएकोमा मलाई अत्यन्त दुःख लागेको थियो । १३ दिनसम्मको और्ध्वदैहिक काम सकेर म काठमाडौं फर्किएको थिएँ ।

आमा गएपछि ममा ठूलो विरक्ति र पश्चात्ताप उत्पन्न भएको थियो । “श्रद्धाञ्जलि शोककाव्य २०५२” मा मैले मेरो भावना व्यक्त गरिसकेको छु । आमा गएपछि पिताजी अत्यन्त मर्माहत भएर अर्धविक्षिप्तजस्तो हुनुभएको थियो । अर्को वर्ष श्रावणशुक्ल पुत्रदा एकादशीका दिन आमाको वार्षिक श्राद्ध गर्न हामीहरू इनरुवामा जम्मा भएका थियौँ । आमा गएपछि निकै लामू औषधोपचारपछि मेरो स्वास्थ्य ठीक भएको थियो ।

धेरै लामू प्रतीक्षापछि २०४५ सालको अन्त्यमा गृहमन्त्रालयले मलाई शान्तिसुरक्षा “ख” महाशाखामा खटाएको थियो भने “क” महाशाखाका सहसचिव श्रीरामानन्द वैद्य हुनुहुन्थ्यो । त्यसै बीचमा साविक गृहमन्त्री श्रीप्रकाशबहादुर सिंह गृहमन्त्रालयबाट हट्नुभएको थियो । त्यसपछि

गृहमन्त्रालयमा श्रीनिरञ्जन थापा राज्यमन्त्री भएर आउनुभएको थियो। उहाँसँग पहिलेदेखि नै मेरो परिचय भएको हुँदा सम्बन्ध राम्रै होला भन्ने मैले शुरुमा ठानेको थिएँ। तर गृहमन्त्रालयमा राज्यमन्त्री भएर आएकै दिन उहाँले गृहमन्त्रालयको वास्तविक कुरा नै नबुझीकन मलाई मेरो प्रकृति र स्वभावविपरीतको काम लगाउने चेष्टा गर्नु भएको थियो। मैले उहाँले अह्राएको काम गर्न अस्वीकार गरेपछि उहाँको र मेरो बीचको सम्बन्ध बिग्रिएको थियो। त्यतिमात्रै नभएर उहाँ र मेरा बीचमा आवतजावत नै बन्द भएको थियो।

त्यसरी राज्यमन्त्री थापासँग मेरो सम्बन्ध चिसिँदै गएपछि उहाँले मेरा साथै हामी गृहका पुराना सबै अधिकृतहरूसँग विश्वास गर्न छोड्नुभएको थियो। त्यसपछि उहाँले आफ्नो विश्वास लाग्दो मान्छे स्थानीय विकासमन्त्रालयबाट उहाँको आफ्नो साइनो पर्ने सहसचिव श्रीशिवप्रसाद आचार्यलाई गृहमन्त्रालयमा सरुवा गराएर ल्याउनुका साथै गृहमन्त्रालयका महत्त्वपूर्ण कामहरू राज्यमन्त्री थापाले उहाँबाटै गराउन थाल्नुभएको थियो। त्यसबाट गृहमन्त्रालयका हामी अरू अधिकृतहरू तटस्थ बसेर रमिता हेर्न थालेका थियौँ।

गृहमन्त्रालयमा उपर्युक्त अनुसारको वातावरण भइरहेको बेलामा नै राज्यमन्त्रीले गृहमन्त्रालयका कर्मचारीप्रशासन महाशाखाका सहसचिव र गृहसचिवसँग मन्त्रणा गरेर मेरो सरुवा गृहमन्त्रालयबाट अरू मन्त्रालयमा गराउन मन्त्रिपरिषद्मा प्रस्ताव पठाउनुभएको रहेछ। त्यस बेला सो कुरा मलाई थाह हुनसकेको थिएन। मेरो सरुवा अरू मन्त्रालयमा नभएर गृहमन्त्रालयको सहसचिवमा नै राख्ने गरी मन्त्रिपरिषद्बाट निर्णय भएर आएपछि राज्यमन्त्री थापाले आफ्नू लाज पचाएर अनभिज्ञता प्रकट गर्नु भएको थियो।

त्यसरी गृहमन्त्रालयको सहसचिवमा नै मेरो थमौती भएर मन्त्रिपरिषद्बाट आएपछिमात्र मैले सो कुरा थाहा पाएको थिएँ। पञ्चायत कालका शक्तिशाली गृहमन्त्रीले हटाउन खोज्दा पनि नसकेर गृहमन्त्रालयमा नै मलाई कुन शक्तिले थमौती गरेर राखेको थियो ? त्यस कुराको रहस्य अहिलेसम्म पनि मैले बुझ्न सकेको छैन। त्यस बेला मैले गृहमन्त्रालयमा नै थामिनका

लागि कुनै पनि शक्तिकेन्द्रमा भनसुन गरेको थिइन । त्यो कुरा सम्झँदा अहिलेसम्म पनि मलाई आश्चर्य लागेरआउँछ । गृहमन्त्रालयबाट अरू मन्त्रालयमा मेरो सरुवा गर्न नसकेपछि राज्यमन्त्री थापा बाध्य भएर मसँग सम्झौता गर्न पुग्नुभएको थियो । त्यसपछि मलाई सधैँ बोलाएर शान्तिसुरक्षासम्बन्धी काममा सल्लाह लिनुका साथै आफ्ना व्यक्तिगत कुराहरू पनि मसँग उहाँले गर्न थाल्नुभएको थियो । उहाँले शान्तिसुरक्षाका कामका साथै गरीबीनिवारणको विशेष कामसमेत मलाई लगाउनुभएको थियो । त्यस बेला नेपालमा नेपालका नागरिकहरूको जीवनस्तर एशियालीमापदण्ड अनुसार हुनुपर्छ भन्ने अभियान नै चलेको थियो । सो कुरा राजादेखि लिएर सर्वत्र पढेलेखेका मानिसहरूका बीचमा चर्चाको विषय नै बनेको थियो । राष्ट्रिय योजना आयोगदेखि लिएर सबै मन्त्रालयहरू त्यसको अध्ययन र अनुसन्धान गर्न व्यस्त देखिन्थे । त्यस कामका लागि सबै मन्त्रालयहरूमा भिन्नै शाखाहरू र कार्यदलहरूसमेत गठन गरिएका थिए । राज्यमन्त्री थापा मण्डले प्रवृत्तिका चापलुस, चलाख र समयको हावालाई बुझ्न सक्ने व्यक्ति भएका हुँदा उहाँले गृहमन्त्रालयमा पनि शाखा गठन गर्नुका साथै कार्यदल गठन गरेर बारम्बार बैठकसमेत बोलाउन थाल्नुभएको थियो ।

गृहराज्यमन्त्री श्रीनिरन्जन थापा मौका हेरेर अगाडि बढ्न र पछाडि सर्नसमेत खूबै जान्नुहुन्थ्यो । झण्डै ६ महिनासम्म आवतजावत बन्द भएको मलाई सबैभन्दा नजिक पारेर उहाँले काम लगाउन थाल्नुभएको थियो । गरीबीनिवारण कार्यदलको संयोजकको साथै अरू काममा पनि मलाई खटाइएको थियो ।

राज्यमन्त्री थापा त्यस समयमा राजदरबारको आर्.आई.बी.को डी.एस्.पी. भएको कुरा गाइँगुइँ सुन्नमा आउँथ्यो । राजदरबारका तत्कालीन प्रमुख सैनिक सचिव श्रीताराबहादुर थापाको चाकडीबाट उहाँ गृहमन्त्रालयमा राज्यमन्त्री हुनु भएपछि पनि सधैँ उहाँ श्रीताराबहादुरकै चाकडीमा जानुहुन्थ्यो भन्ने सुनिन्थ्यो । जर्नेल श्रीताराबहादुर थापाको इशारामा तत्कालीन गृहमन्त्रालय चलेको थियो ।

गृहराज्यमन्त्री थापा जतिसुकै दरबारको भरपर्दो व्यक्ति भए तापनि तत्कालीन गृहसचिव श्रीवीरबहादुर शाही उहाँलाई टेर्नुहुन्नथ्यो । उहाँहरूको

बीचमा सम्बन्ध राम्रो नभएको कारण हामीहरूलाई काम गर्न अप्ठेरो परेको थियो । त्यसै समयमा गृहमन्त्रालय पुरान् भवनबाट संसदसचिवालय नजिकको नयाँ भवनमा सरेको थियो । हामीहरू सबै नयाँ भवनमा सरेर गए पनि गृहसचिव श्रीवीरबहादुर शाही भने राज्यमन्त्रीसँगको मनोमालिन्यको कारण सर्नुभएको थिएन । गृहसचिवसँग सम्बन्ध राम्रो नभए तापनि गृहराज्यमन्त्री श्रीनिरञ्जन थापाले नाना थरीका नाटकहरू गरेर गृहमन्त्रालय सञ्चालन गर्नुभएको थियो ।

त्यसै समयमा गृहमन्त्रालयको नयाँ संरचना लामू गृहकार्यपछि स्वीकृत भएको थियो । त्यसपछि म स्थानीयप्रशासन महाशाखाको सहसचिवमा खटिएको थिएँ । गृहराज्यमन्त्री श्रीनिरञ्जन थापासँग बोलचाल बन्द भएकै बेला तत्कालीन गृहसचिव श्रीवीरबहादुर शाही उमेरको कारण अवकाश पाएर घर बस्नुभएको थियो । त्यसपछि गृहमन्त्रालयको सचिवमा श्रीभक्तबहादुर कोइराला का.मु. भएर आउनुभएको थियो । उहाँ गृहमन्त्रालयकै पुराना अधिकृत भएका हुँदा हामीहरू सबैले उहाँबाट राम्रो काम र व्यवहारको अपेक्षा गरेका थियौँ । त्यस बेलासम्म गृहमन्त्रालयमा काम गर्न जतिसुकै अप्ठेरो भएको भए तापनि सबै कुरा सहेर म काम गर्दैआएको थिएँ ।

त्यसै समयमा तत्कालीन प्रधानमन्त्रीको आदेशानुसार केन्द्रीय सेवा विभागको पुनः संरचना गर्न मलाई महानिर्देशक बनाएर उक्त विभागमा पठाइएको थियो । मैले थोरै समयमा नै केन्द्रीय सेवा विभागको सुधारका लागि पुनः संरचना लगायतका धेरै कामहरू गरेको थिएँ । त्यसै बेला मैले तुरुन्तै अन्तर्राष्ट्रिय सम्मेलनमा भाग लिन थाइल्यान्डको राजधानी बैङ्कक जानु पर्ने भएको हुँदा म फेरि गृहमन्त्रालयमा नै फर्किएको थिएँ ।



# थाइल्यान्डमा

उपर्युक्त अनुसार केन्द्रीयसेवाविभागबाट गृहमन्त्रालयमा फर्किएपछि सरकारको प्रतिनिधि भएर संयुक्तराष्ट्रसङ्घको ESCAP ले आयोजना गरेको अपराधनियन्त्रणसम्बन्धी सम्मेलनमा भाग लिन २०४६ साल चैत्र २७ गते तदनुसार सन् १९८९ एप्रिल ९ तारिखका दिन थाइल्यान्डको राजधानी बैङ्कक म गएको थिएँ। म त्योभन्दा पहिले थाइल्यान्ड गएको थिइन। २०३५ साल असारमा बेलायतबाट फर्किएको १० वर्ष पछि म फेरि विदेशको नाममा थाइल्याण्डको राजधानी बैङ्कक गएको थिएँ। मैले उक्त सम्मेलनमा पाँच दिनसम्म भाग लिएको थिएँ। त्यस बेला वैशाख १ गते परेको थियो। बैङ्ककमा हाम्रो नयाँ वर्षको वैशाख १ गतेलाई सङ्क्राम भनेर पानी छ्यापाछ्याप गरेर उत्सव मनाउँदा रहेछन्। मलाई त्यो उत्सव अत्यन्त रमाइलो लागेको थियो। त्यस समयमा त्यहाँ अत्यन्त गर्मी हुने भएको हुँदा त्यसरी पानी छ्यापाछ्याप गरेर खेल्ने गरेको होला भन्ने मैले ठानेको थिएँ।



बैङ्ककमा रहेको स्क्यापको भवन



सम्मेलनका सहभागी भुटानी र अरू मित्रहरूका साथ लेखक

उक्त सम्मेलनमा विभिन्न देशहरूबाट आएका सहभागीहरूसँग मेरो भेटघाट र चिनापर्चीसमेत भएको थियो। त्यसमा खास गरेर जापानी श्रीमिनोरु सातो र युनाफेका निर्देशक श्रीहिरोयासु सुगिहारासमेतसँग मेरो राम्रो सम्बन्ध स्थापित भएको थियो। त्यस सम्मेलनमा युनाफेका उपनिर्देशक श्रीहोरीउचीसँगको विशेष चिनापर्चीले मलाई पछिसम्म पनि काम दिएको थियो। त्यहाँ भएको मित्रताले पछि जापान जाँदा मलाई अत्यन्त सजिलो भएको थियो। त्यसका अतिरिक्त भारतीय, श्रीलङ्कन, फिजीयन र भुटानी मित्रहरूसँग पनि मेरो राम्रो सम्बन्ध स्थापित भएको थियो।

बैङ्ककयात्राको सन्दर्भमा पहिलो दिन काठमाडौंबाट बैङ्कक पुगेपछि बगलम्पुको भ्याङ्टाई भन्ने होटेलमा १ रात बसेर अर्को दिन म त्यहाँबाट गोल्डेन हर्ष होटेलमा सरेको थिएँ । त्यहाँ भुटानी र अरू सहभागीहरू पनि बसेका थिए । तीमध्ये भुटानीसँग भाषा र जातिको आधारमा पनि मेरो मित्रता हुनगएको थियो । त्यस बेला साना घरेलु उद्योगका तर्फबाट बैङ्ककमा रहेर काम गर्ने श्रीगोकर्ण बिष्टले मलाई खूब सहयोग गर्नुभएको थियो । थाइल्यान्डका राजाको निवासस्थान ललितादरबार आदि दर्शनीय स्थलहरूमा मलाई घुमाउनुका साथै आफ्नू निवासमा बोलाएर अतिथि-सत्कारसमेत विष्टजीले गर्नुभएको थियो । मैले त्यससमयमा संयुक्त-राष्ट्रसङ्घ अन्तर्गतका विभिन्न निकायमा काम गर्ने उच्चस्तरीय व्यक्तिहरूसँग पनि चिनाजानी गर्ने मौका पाएको थिएँ । सम्मेलनमा भाग लिएरबैङ्ककबाट २०४६ साल वैशाख ५ गते तदनुसार सन् १९८९ एप्रिल १७ तारिखका दिन म काठमाडौं फर्किएको थिएँ ।



बैङ्ककस्थित स्क्यापको सम्मेलनकक्षमा भाग लिँदै ।


बैङ्ककमा भएको सम्मेलनका सहभागीहरूका साथमा लेखक

उपर्युक्त अनुसार बैङ्ककमा भएको अन्तर्राष्ट्रिय सम्मेलनमा भाग लिएर काठमाडौं फर्किएपछि म फेरि आफ्नै महाशाखाको काममा अत्यन्त व्यस्त भएर लागेको थिएँ। धेरैजसो विभिन्न मन्त्रालयहरूले आयोजना गरेका बैठकहरूमा मैले भाग लिन जानुपर्दथ्यो । समस्या परेका जिल्लाहरूमा समस्या समाधान गर्न अधिराज्यका विभिन्न जिल्लाहरूमा मैले बारम्बार भ्रमण गरिरहनुपर्दथ्यो । त्यस क्रममा म बागलुङ आदि धेरै जिल्लाहरूमा गएको थिएँ। मैले नियमितरूपमा गर्नुपर्ने महाशाखाको कामदेखि बाहेक अरू परिआउने विशेष काम पनि गर्नुपर्दथ्यो ।

त्यसरी बेलामौकामा परिआउने विशेष कामहरूमा २०४६ साल श्रावण महिनामा RAW को अभियोग लगाएर कारागारमा थुनामा परेका

राजनीतिक कार्यकर्ता श्रीप्रदीप गिरी, पत्रकार श्रीचन्द्रलाल झा र श्रीविचित्रकुमार देवकोटासमेतको छानविन गरी प्रतिवेदन पेश गर्न मेरो संयोजकत्त्वमा तत्कालीन प्रधानमन्त्री श्रीमरीचमान सिंहले एउटा कार्यदल गठन गर्नुभएको थियो। त्यस समितिका अरू सदस्यहरूमा ने.गु.वि.का एस्.पी. श्रीगोविन्द बहादुर कार्की र प्रहरीप्रधान कार्यालयका एस्.पी. श्रीचन्द्रवीर राईसमेत हुनुहुन्थ्यो। हामीहरूले सर्वप्रथम केद्रीयकारागार जगन्नाथदेवलमा थुनामा रहेका श्रीविचित्रकुमार देवकोटालाई भेटेका थियौँ। उहाँले विनाकसुर रिसाएर तत्कालीन प्रधानमन्त्री श्रीमरीचमान सिंहले थुनेर शत्रुसाधना गरेको कुरा बताउनु भएको थियो। उहाँसँग प्रत्यक्षरूपमा RAW सम्बन्धी कुरा हामीले गरेका थिएनौँ र कुराकानीकै सन्दर्भमा हामीहरूले सो कुरा भने बुझ्ने प्रयास गरेका थियौँ। त्यसपछि त्यसै केन्द्रीयकारागारमा थुनामा रहेका श्रीप्रदीप गिरीलाई हामीहरूले भेटेका थियौँ। हामीहरूले गएर सामान्य कुरा गर्ने बित्तिकै गिरीले हामीहरू खटिएर गएको कामको बारेमा आफैँले प्रष्ट मुखै फोरेर भन्नुभएको थियो। वास्तवमा हाम्रो आशय र काम उहाँले कसरी बुझेर त्यस खालको जबाफ दिनुभयो मलाई आश्चर्य लागेको थियो। श्रीप्रदीप गिरी अत्यन्त चलाख र अध्ययनशील व्यक्ति भएका हुँदा मैले उहाँसँगको प्रथम भेटमा नै थाहा पाएको थिएँ।

हुन त श्रीप्रदीप गिरी म उदयपुरजिल्लाको प्र.जि.अ. भएर बस्ता अराष्ट्रिय तत्त्व भनेर नाम चलिसकेका व्यक्ति हुनुहुन्थ्यो। त्यस बेला उहाँ गुप्तरूपमा आफ्नू जिल्ला सिराहा र उदयपुरसमेतमा घुम्नेगर्नुहुन्थ्यो भन्ने मलाई जानकारी थियो। त्योभन्दा पहिले मैले प्रत्यक्षरूपमा उहाँलाई भेटेको थिइन। कुराको सन्दर्भमा RAW को अभियोग लगाएर तत्कालीन प्र.म. श्रीमरीचमान सिंहले थुनाएको र सोही कुराको छानविन गर्न तपाईंहरू आएको भनेर हामीहरूलाई प्रष्टै उहाँले भन्नुभएको थियो। उहाँको भनाइ अनुसार उहाँ RAW को एजेन्ट नभएको र बरू उहाँले नेपालमा त्यस बेला RAW का एजेन्टहरू को को थिए ? भनेर हामीहरूलाई बताउनु भएको थियो। कुराको सन्दर्भमा गिरीले राजनीतिक, आर्थिक र विदेशनीति सम्बन्धका धेरै कुराहरू हामीहरूलाई बताउनु भएको थियो। कुराकानी

गरेपछि उहाँसँग हामीहरू अत्यन्त प्रभावित भएका थियौँ। हिंड्ने बेलामा हामीहरूले उहाँको इच्छा सोधेका थियौँ। उहाँको इच्छा त्यस बेला कारागारबाट छुट्ने नभएर केवल केन्द्रीयकारागारबाट नक्खुकारागारमा सारिदिने मागमात्रै हामीसँग उहाँले राख्नुभएको थियो। त्यसपछि हामीहरू पत्रकार श्रीचन्द्रलाल झालाई भेट्न केन्द्रीय कारागारबाट नक्खुकारागारमा गएका थियौँ। झाले आफू पनि प्रधानमन्त्री सिंह रिसाएका कारण विनाअपराध थुनिएको कुरा बताउनु भएको थियो। उहाँसँग धेरै लामू कुरा हामीहरूले गरेनौँ। अन्त्यमा स्वास्थ्य खराब भएको हुँदा कारागारबाट छोडिदिने आग्रह उहाँले हामीहरूसँग गर्नुभएको थियो। कारागारबाट छुटकारा हुन नसके काठमाडौं शहरको नजिक हुने गरी केन्द्रीयकारागार जगन्नाथदेवलमा सरुवा गरिदिने आग्रह हामीहरूसँग उहाँले गर्नुभएको थियो।

त्यसरी थुनामा परेका तीनै जना व्यक्तिहरूसँग भेटेर हामीहरूलाई तोकिएको काम पूरा गरेर सुझावसहितको प्रतिवेदन तत्कालीन प्रधानमन्त्री र गृहमन्त्रीलाई समेत हामीहरूले दिएका थियौँ। प्रतिवेदनमा उल्लेख भए अनुसार अरू कुरा तत्कालीन समयमा तुरुन्तै पूरा गर्न नसकिएको भए तापनि श्रीप्रदीप गिरीलाई केन्द्रीयकारागारबाट नक्खुकारागारमा र श्रीचन्द्रलाल झालाई नक्खुकारागारबाट केन्द्रीयकारागार जगन्नाथदेवलमा सार्न भने हामीहरू सफल भएका थियौँ।

त्यसरी स्थानीयप्रशासन महाशाखामा सहसचिव भएर काम गरिरहेका बेला मन्त्रालयमा भईपरी आउने कामका साथै मैले नेपाल अधिराज्यका विभिन्न जिल्लाहरूको भ्रमण गरेर त्यहाँ देखापरेका समस्याहरूलाई समाधान गर्ने काम पनि गरेको थिएँ। त्यसका अतिरिक्त बेलामौकामा विभिन्न देशहरूको भ्रमण गर्ने मौका पनि मैले पाएको थिएँ।



# जापानमा

गृहमन्त्रालयमा धेरै वर्षदेखि काम गरेर बस्ता अरू देशहरूका साथै एशियाको समृद्ध देश जापानको पनि भ्रमण गर्ने मलाई अत्यन्त इच्छा थियो। गृहमन्त्रालयबाट जापानमा अध्ययन गर्न र तालीम लिनका लागिसमेत अरू नै अधिकृतहरू जानुहुन्थ्योभने मैले कहिल्यै पनि जाने मौका पाएको थिइन। जापानमा हुने तीन महिनाको तालीमका लागि जापान सरकारले गृहमन्त्रालयको एक उच्च अधिकृतलाई पठाइदिने भनेर २०४६ साल असार महिनामा निमन्त्रणा पठाएको थियो। त्यस पटक भने सरकारको निर्णय अनुसार जापानको टोकियोको फुचु भन्ने ठाउँमा रहेको युनाफे तालीमकेन्द्रमा सञ्चालन हुने अपराधनियन्त्रणसम्बन्धी तालीममा भाग लिन म जानेभएको थिएँ।

त्यसरी जापान जाने क्रममा मिति २०४६ साल भाद्र ११ गते तदनुसार सन् १९८९ अगष्ट २८ तारिखका दिन काठमाडौंबाट थाइएयरलाइन्सको जहाजबाट प्रस्थान गरेर थाइल्याण्डको राजधानी ब्यैङ्कक एयरपोर्टमा दिनको अपराह्नमा म उत्रिएको थिएँ। बैङ्कक्को एयरटर्मिनलभित्रको लाउन्जमा जापान जाने जहाजको प्रतीक्षामा धेरै लामू समय बसेपछि राती ११ बजे जापानी एयरलाइन्सको ठूलो जम्बो जेटमा चढेर म जापानतिर उडेको थिएँ। जहाजमा जापानी खानापिनाका साथै सत्कार पनि अत्यन्त भव्यरूपमा गरिएको थियो। रातभरि जहाजमा उड्दा म सुत्न सकेको थिइन। अगष्ट २९ तारिखका दिन बिहान ७ बजे जापानको नारिता इन्टरनेशनल एयरपोर्टमा गएर म चढेको जहाज उत्रिएको थियो। विमान घाटमा उत्रिएपछि त्यहाँका सबै औपचारिकताहरू पूरा गरेर म जाइका जापानबाट मलाई लिन आएका मित्रहरूका साथ गाडीमा चढेर टोकियोको हाथागाया भन्ने ठाउँमा रहेको Tokyo International Centre (TIC) मा गएको थिएँ।

Room No. 220 ( '89 8/29 )
Name (NEPAL)
MR.SHARAD KUMAR
BHATTARAI
Signature SK Bhattarai
TIC
東京国際研修

TIC मा प्रवेश गर्ने प्रवेशपत्र, सन् १९८९।८।२९

जापानको राजधानी टोकियोमा पुगेपछि मलाई उक्त सेन्टरमा लगेर ५ दिनसम्म २२० नं. को कोठामा राखिएको थियो। त्यस केन्द्रमा अरू विभिन्न देशका सहभागीहरू पनि बसेका थिए। TIC मा बसेको दोस्रो दिन हामीहरूलाई जापानको परिचय विभिन्न व्यक्तिहरूले दिनुभएको थियो। त्यसै दिन हामीहरूलाई जापानमा बसुन्जेल आवश्यक पर्ने रकम ३८३८८८ यान र बैङ्कको कार्डसमेत उपलब्ध गराइएको थियो। त्यसै साँझ दक्षिण एशियाका देशहरूबाट गएका हामी सहभागीहरूको भिन्नै सम्मेलन भएको थियो। अर्को दिन पनि जापानी समाज, जापानको इतिहास र जापानको आर्थिक व्यवस्थासमेतका बारेमा हामीहरूलाई जानकारी दिइएको थियो। सन् १९८९ सेप्टेम्बर ४ तारिखदेखि युनाफेमा हुने हाम्रो तीन महिने तालीमको विस्तृत कार्यक्रम पनि हामीहरूलाई उपलब्ध गराइएको थियो। सेप्टेम्बर १ तारिखका दिन कक्षामा जानकारी लिने काम सकेपछि साँझ ५ बजे त्यहीँ नजिकै रहेको शिन्जुकु भन्ने टोकियोको आधुनिक शहरको अवलोकन गर्न हामीहरू आफूखुशी गएका थियौँ। सेप्टेम्बर २ तारिखका दिन हामीहरूलाई टोकियो शहरको भ्रमण गराउने क्रममा ऐतिहासिक मेजी श्राइन, न्याशनल स्टेडियम, आकाशाका प्यालेस, इम्पेरियल प्यालेस, गिन्जा, शिन्जुकु र अरू राम्रा शहरहरूमा पनि लगिएको थियो। शिन्जुकु भन्ने शहरमा २४० मिटर अग्ला घरहरू पनि हामीहरूलाई देखाइएका थिए। सेप्टेम्बर ३ तारिखका दिन आकियाबारा भन्ने प्रसिद्ध जापानी Electronics town मा म गएको थिएँ। सेप्टेम्बर ४ तारिखका दिन TIC बाट युनाफेको तालीमकेन्द्रमा हामीहरू बसबाट गएका थियौँ। केन्द्रमा पुगेपछि हाम्रो भव्य स्वागत भएको थियो र हामीहरूलाई तीन महिनासम्म युनाफेको छात्रावासमै बस्ने अत्यन्त राम्रो व्यवस्था गरिएको थियो। सेप्टेम्बर ५ तारिखका दिनदेखि हाम्रो तालीम औपचारिकरूपमा शुरुभएको थियो। सर्वप्रथम त्यस तालीमकेन्द्रका निर्देशक श्रीहिरोयासु



टोकियो शिन्जुकुका अग्ला घरहरू



फुचुमा रहेको युनाफेको प्रशिक्षणकेन्द्र अगाडी लेखक, १९८९।९।१३

सुगिहाराले उक्त तालीमकेन्द्रको क्रियाकलापका बारेमा हामीहरूलाई जानकारी दिनु भएको थियो । त्यसपछि मैले प्राप्त गरेको रकममध्ये २३२२७९ यान मैले त्यस प्रशिक्षणकेन्द्रमा बस्ता लाग्ने खाना र आवासको लागि बुझाएको थिएँ । सेप्टेम्बर ६ तारिखका दिन तालीमका क्रममा त्यस केन्द्रका उपनिर्देशक श्रीहोरी उची र अर्का प्राध्यापक श्रीनिसिमुरासमेतले विभिन्न विषयका कार्यपत्रहरू प्रस्तुत गर्नुभएको थियो । कक्षाको पढाइ सकिएपछि हामीहरू खाना खाएर फुचु बजार घुम्न गएका थियौँ । सेप्टेम्बर ७ तारिखका दिन हामीहरूलाई विभिन्न प्राध्यापकहरूले कक्षामा पढाउनुभएको थियो । सेप्टेम्बर ८ तारिखका दिन बिहानै ब्रेकफाष्टपछि हामीहरू माउण्ट टकाओ सान भन्ने रमणीय ६०० मिटर अग्लो पहाडमा केबुलकारद्वारा गएका थियौँ । त्यहाँको एउटा मन्दिरमा श्रीगणेशको मूर्ति पनि राखिएको छ भन्ने मैले सुनेको थिएँ, तर देख्न भने पाइएन । जापानका धेरैजसो मन्दिरहरूमा हिन्दूदेवीदेवता गणेश, विष्णु, सरस्वती, लक्ष्मी, नवग्रह र दिक्पाल आदिका मूर्तिहरू पनि प्रतिष्ठापित गरेर पूजा गर्ने चलन रहेछ । त्यहाँबाट हामीहरू बेलुका केन्द्रमा फर्किएका थियौँ । त्यसपछि त्यहाँको नियमित कार्यक्रम अनुसार मैले विभिन्न खेलकूदमा भाग लिएको थिएँ । सर्वप्रथम मैले त्यसदिन लनटेनिस खेल पनि खेलेको थिएँ । त्यो नै मेरो जीवनको पहिलो लनटेनिसको खेल थियो ।


युनाफेका निर्देशक श्रीसुगिहारा


केबुलकारमा माउण्ट टकाओ सान गएको दृश्य, सन् १९८९।९।८


युनाफेमा लनटेनिस खेल्दै, सन् १९८९।९।८

केही दिनसम्म प्राध्यापकहरूबाट कक्षामा पढाउने र तालीम दिने काम भएपछि सेप्टेम्बर १२ तारिखदेखि विभिन्न देशहरूबाट गएका सहभागीहरूले आआफ्ना देशका Country Papers हरू प्रस्तुत गर्ने कार्यक्रम शुरुभएको थियो । मैले सेप्टेम्बर १३ तारिखका दिन नेपालको Country Paper प्रस्तुत गरेको थिएँ । त्यस बेला नेपालमा नेपालको प्रहरीले अपराध नियन्त्रणको


कार्यपत्र प्रस्तुत गर्दै लेखक, १९८९।९।१३

क्रियाकलाप र अपराधका तथ्याङ्कहरू सहीरूपमा राख्ने गरेको थिएन। त्यस बेला नेपालका प्रहरीले आफ्नू काम चुस्त र दुरुस्त देखाउनका लागि भएका अपराधहरूलाई पनि लुकाएर कृत्रिम तथ्याङ्कहरू तयार गर्नेगरेको थियो। मैले नेपालको प्रहरीबाटै प्राप्त तिनै तथ्याङ्कहरूका आधारमा त्यहाँ आफ्नू कार्यपत्र प्रस्तुत गरेको थिएँ। त्यसै कारण मैले सहभागीहरूद्वारा सोधिएका नेपालको अपराधसम्बन्धी तथ्याङ्कको तार्किक जबाफ दिन सकेको थिइन।


कार्यपत्र प्रस्तुतीकरणको समयमा लिइएको कक्षाकोठाको एक विहङ्गम दृश्य, सन् १९८९ सेप्टेम्वर १३

सेप्टेम्बर १४ तारिखका दिन हामीहरू बिहानै ब्रेकफाष्टपछि जापानको सर्वोच्च अदालको भ्रमणमा गएका थियौँ। सर्वोच्च अदालतको अवलोकनपछि हामीहरू कानून तथा न्याय मन्त्रालयमा गएका थियौँ। दिनको खाना हामीहरूले त्यही मन्त्रालयमा खाएका थियौँ। दिनको ४ बजे हामीहरूले माननीय न्याय तथा कानूनमन्त्री श्रीमासाओ गोतोसँग सद्भावभेट गरेका थियौँ। उहाँले हामीहरूलाई उपहारस्वरूप ओहाता पर्ल जडेको टाइपिन र सहायक कानूनमन्त्रीले हामीहरूलाई रातको भोज दिनु भएको थियो।



जापानी सर्वोच्चअदालतको प्राङ्गणमा लेखक, १९८९।९।१४

सेप्टेम्बर १५ तारिखको दिनलाई जापानमा वृद्धहरूको सम्मान गर्ने दिवसका रूपमा मनाइँदोरहेछ। सोही दिन बिहानको हल्का खानापछि ११ बजे हामीहरूलाई आशाकुशा भन्ने प्रसिद्ध धार्मिक तथा व्यापारिक केन्द्रमा बसबाट लगिएको थियो। त्यो धार्मिक दृष्टिकोणले भगवान् बुद्धको प्राचीन मन्दिर र मूर्तिहरूसमेत रहेको प्रसिद्ध ठाउँ थियो। त्यहाँका मन्दिर-हरूमा हिन्दूहरूका विभिन्न देवीदेवताका मूर्तिहरू पनि



जापानको आशाकुशामा रहेको बुद्धमन्दिर र बुद्धका मूर्तिहरू अगाडि साथीहरूका साथ लेखक, १९८९।९।१५

राखिएका रहेछन् । त्यस क्षेत्रलाई शोतेनचो अर्थात् गणपतिनगर भनेर भगवान् श्रीगणेशका नामबाट नामकरण गरेको रहेछ । त्यहाँ दिनभरि आनन्दसँग भ्रमण गरेर साँझमा हामीहरू युनाफे फर्किएका थियौँ ।

सेप्टेम्बर १७ तारिखका दिन भारतीय सहभागी डी.आई.जी. श्रीवरप्रसादका साथ जापानको प्रसिद्ध शहर गिन्जा म घुम्न गएको थिएँ । सेप्टेम्बर १८ तारिखका दिन हाम्रो नियमित प्रशिक्षण कार्यक्रमका साथसाथै त्यस दिनबाट साँझमा जापानी भाषाको कक्षा पनि शुरु भएको थियो । १९ तारिखका दिन हामीहरू फुचुशहरमा रहेको कारागार हेर्न गएका थियौँ । त्यहाँका कारागारहरूका कैदीहरूलाई नुहाउनका लागि तातो र चिसो पानी, खानका लागि विशेष व्यवस्थाको साथै टेलिभिजन आदि हेर्ने पनि राम्रो व्यवस्था रहेछ । मैले त्यस कारागारलाई नेपालको सामान्य होटेलसँग तुलना गरेको थिएँ ।

सेप्टेम्बर २० तारिखका दिन हामीहरू बिहानै योकोहामा भन्ने पानीजहाजको बन्दरगाहमा गएका थियौँ । त्यहाँ पानीजहाजको कसरी सुरक्षा गरिन्छ भन्ने कुराको जानकारी हामीहरूलाई दिइएको थियो । योकोहामामा रहेको चाइनिज शहर घुमेर साँझमा हामी Unafei फर्किएका थियौँ । सेप्टेम्बर २२ तारिखका दिन नियमित कार्यक्रमका साथै दिनको खानापछि अतिथि वक्ता Mr.Minoru Shikita ले United nation's activities in criminal justice field भन्ने विषयमा हामीहरूलाई जानकारी दिनुभएको थियो ।



जापानको योकोहामामा रहेको बन्दरगाहमा पानीजहाजको अगाडि लेखक, सन् १९८९।९।२०

सेप्टेम्बर २६ तारिखका दिन श्रीआत्सुशी नागाशिमाले जापानको फौजदारी अपराधका बारेमा हामीहरूलाई प्रवचन दिनुभएको थियो । उहाँ मेरो अत्यन्त हितचिन्तक हुनुहुन्थ्यो । उहाँले नै मलाई ACPF को International Director मा नियुक्ति गरेर प्रोत्साहित गर्नुभएको थियो । ACPF को Chairman मा Mr.Minoru Shikita आएपछि नेपालको कानून तथा न्याय मन्त्रालयका उपसचिव श्रीकेदारप्रसाद पौडेलको भनाइमा लागेर मजस्तो

संस्थापक अन्तर्राष्ट्रिय निर्देशक (Founder International director) लाई एक वचनसम्म पनि नसोधीकन श्रीसिकिताले पौडेललाई नियुक्ति गरेर अन्तर्राष्ट्रिय प्रचलन र मर्यादाको ठाडै उल्लङ्घन गर्नुभएको थियो ।

सेप्टेम्बर २७ तारिखका दिन विश्वको प्रसिद्ध माउण्ट फुजीको अवलोकनभ्रमण गर्नका लागि Unafei बाट त्यसतर्फ हामीहरू बसबाट गएका थियौँ । हामीहरू बसबाट जापानका विभिन्न शहरहरू र नगरहरूको अवलोकन गर्दै माउण्ट फुजीको फेदीमा रहेको न्यासनल चुओ युथ सेन्टरमा पुगेका थियौँ । त्यस सेन्टरमा हाम्रो स्वागत सत्कार गरिएको थियो । जापानभरि त्यस संस्थाका शाखाहरू फैलिएका रहेछन् । तिनका क्रियाकलापहरूको बारेमा हामीहरूलाई जानकारी दिइएको थियो । दिनको खाना त्यहीँ खाएपछि त्यस संस्थालाई सबैका तर्फबाट धन्यवाद दिने काम मैले गरेको थिएँ । त्यहाँको कार्यक्रम समाप्त गरेपछि माउण्ट फुजीको माथिल्लो स्टेशनमा हामीहरू बसबाट चढेका थियौँ । अत्यन्त सुन्दर तरिकाले सुरक्षित गरेर सजाइएका माउण्ट फुजीका सम्पूर्ण भागहरू अत्यन्त आकर्षक र मनोहरसमेत देखिन्छन् । विश्वमै प्रसिद्ध माउण्ट फुजी नेपाली हिमालहरूको तुलनामा अग्लो नभए तापनि जापानमा भने त्यो सबैभन्दा अग्लोमा गनिदो रहेछ । पर्यटकहरूका लागि सुविधाहरू प्रशस्तमात्रामा उपलब्ध हुनेहुँदा जापानभ्रमणमा जाने सबैजसो पर्यटकहरू त्यहाँ जाने गर्दारहेछन् । त्यसको आकर्षण सबै दृष्टिकोणले महनीय भएको मैले पाएको थिएँ ।



माउण्ट फुजीको भ्रमणको सन्दर्भमा धन्यवाद ज्ञापन गर्दै लेखक, सन् १९८९।९।२७

सेप्टेम्बर २९ तारिखका दिन हामीहरूलाई हाम्रो सेमिनार कक्षमा जापानी न्याय तथा कानून मन्त्रालयका सहायक मन्त्री श्रीसिन इचिरो तोगोले जापानको तत्कालीन समयमा अपराधका क्षेत्रमा देखिएका समस्याहरू र जापानी न्यायसम्पादनका बारेमा प्रवचन दिनुभएको थियो । अक्टोबर २ तारिखका दिन जर्मनबाट आउनु भएका प्राध्यापक डक्टर हान्स जोन्चिम

स्नाइदरले अपराध नियन्त्रणका बारेमा हामीहरूलाई समूह समूहमा राखेर छलफल गराउनुभएको थियो । अक्टोबर ३ तारिखका दिन हामीहरूलाई त्यसै गरेर लागूऔषधको समस्याको बारेमा छलफल गराइएको थियो ।

अक्टोबर ५ तारिखका दिन हामीहरू २ दिने क्षेत्रीय भ्रमणका लागि युनाफेबाट बिहान ८.३० बजे बसद्वारा प्रस्थान गरेका थियौँ । बिहानको खाना बीचमा पर्ने एउटा रेष्टुराँमा खाएर दिनको २ बजे हामीहरू Kitsuregawa branch prison office मा पुगेका थियौँ । त्यहाँ खुला ठाउँमा ५९ जना कैदीहरूलाई राखिएको रहेछ । उनीहरूका सुरक्षाका लागि त्यहाँ सुरक्षा गार्ड र बन्दुकसमेत हामीहरूले देखेका थिएनौँ । उनीहरू गाडी चलाउने, मेसिन चलाउने र विभिन्न औद्योगिक काम गर्नका लागि सीप सिकेर खुला कारागारमा बस्तारहेछन् । मैले त्यो खुला कारागारलाई विद्यार्थीहरू बस्ने छात्रावास जस्तो देखेको थिएँ । त्यहाँबाट हामीहरू प्रस्थान गरेर Utsunomiya भन्ने शहरमा गएर Washington Hotel मा बसेका थियौँ । त्यस होटेलमा Blue Film र Pornography को प्रदर्शन गरिँदोरहेछ । त्यो देखेर मलाई अत्यन्त घृणा लागेको थियो । त्यस शहरमा जाँदा हामीहरूले बसबाट अत्यन्त सम्पन्न गाउँहरू र हरियालीपूर्ण संरक्षित वनजङ्गलहरू पनि देखेका थियौँ । बाटामा चारैतिर पँहेलपुर धानका खेतहरू देखेर मलाई मेरो रावा खोलाका फाँटिला खेतहरूका गराहरूमा मङ्सिर महिनामा पँहेलपुर भएर झुलेको धानको सम्झना भएको थियो । अक्टोबर ६ तारिखका दिन Washington Hotel बाट हामीहरू बिहान सबेरै बसद्वारा Nikko Toshogu Shrine मा गएका थियौँ । त्यो ऐतिहासिक Sinto Shrine रहेछ । त्यो मन्दिर श्री Tokugawa भन्ने शासकको समयमा बनेको रहेछ । नेपालका मन्दिरहरू जस्तै पगोडा शैलीमा बनेको त्यो ५ तले मन्दिर रहेछ । त्यसपछि हामीहरू सुन्दर Lake Chuzengi को किनारामा गएका थियौँ । त्यही सुन्दर तलाउको किनारामा बसेर


Lake Chuzengi मा हाँसरूपी डुँगा हेर्दै लेखक,१९८९।१०।६


Kegan Falls मा लेखक, सन् १९८९।१०।६

हामीहरूले बिहानको खाना खाएका थियौँ । त्यो तलाउ १६० मिटर गहिरो रहेछ । त्यसपछि हामीहरू त्यही पोखरीबाट निस्किएको पानीबाट बनेको प्राकृतिक छाँगो Kegan Falls मा गएका थियौँ । त्यहाँ जानका लागि सुन्दर सुरुङ निर्माण गरेर बिजुलीबाट चल्ने भऱ्याङबाट झरनाका छेउसम्म सजिलैसँग पुग्ने व्यवस्था मिलाइएको रहेछ । त्यहाँ घुम्न जाने पर्यटकहरूका सुविधाका लागि सरकारले अरू पनि प्रशस्त भौतिक संरचनाहरू रचेका रहेछन् । त्यहाँको अत्यन्त सुन्दर प्राकृतिक छटाको अवलोकनका लागि बिहानदेखि बेलुकासम्म सधैँ नै विदेशी र स्वदेशी पर्यटकहरूको घुइँचो लागिरहँदो रहेछ । त्यसै दिन बेलुका हामीहरू बसद्वारा Unafei फर्किएका थियौँ ।

सन् १९८९ अक्टोबर ७ तारिखका दिन कक्षामा पढाइ समाप्त गरेर अपराह्न ३ बजे जापानी परिवारसँग भेटघाट गर्ने कार्यक्रम अन्तर्गत भारतीय सहभागी श्रीवरप्रसादलाई साथमा लिएर म जापानी दम्पती Aitoshi Oshima का घरमा जानका लागि युनाफेबाट प्रस्थान गरेको थिएँ । हामीहरूलाई फुचु रेलवे स्टेशनमा लिनका लागि Asian Club की एउटी महिला आएकी थिइन् । उनकै साथ लागेर Nagoyama Station सम्म हामीहरू गएका थियौँ । घरमा पुगेपछि उनीहरूले हाम्रो भव्य स्वागत गरेका थिए । उनीहरूको जम्मा तीनजनाको परिवार रहेछ । जसमा आमा, बाबु र १३ वर्षकी माया






(बायाँपट्टि) जापानी परिवारका साथ सामूहिक र (दायाँपट्टि) जापानी दम्पतीका साथ लेखक, सन् १९८९।१०।७

भन्ने छोरी रहिछन् । सानू सुखी संसारमा पुगेपछि हामीहरूले जापानी परिवारको एउटा नमुना त्यहाँ  देखेका थियौँ । आफ्ना छिमेकीहरूसमेत बोलाएर हामीहरूसँग चिनाजान उनीहरूले गराएका थिए । त्यसपछि हामीहरूलाई

अत्यन्त आत्मीयताका साथ जापानी परिकार आफ्नै हातले तयार पारेर उनीहरूले खुवाएका थिए । अत्यन्त सौहार्द तथा न्यानो वातावरणमा केही घण्टा त्यहाँ बसेपछि उनीहरूले आफ्नै गाडीमा आफैँले हाँकेर हामीहरूलाई हाम्रो वासस्थान युनाफेमा ल्याएर छोडिदिएका थिए । मेरा लागि त्यो स्मृति अत्यन्त स्पृहणीय र अविस्मरणीय रहेको छ ।

अक्टोबर ९ तारिखका दिन कक्षाको काम सकेर दिनको खाना पछि हामीहरूलाई मनोरञ्जनको कार्यक्रम भनेर युनाफेको ओलम्पिकको कार्यक्रममा





खेलमा सहभागी हुँदै बायाँपट्टि साउदीअरेबीयन मित्र र दायाँपट्टि अरू मित्रहरूका साथ लेखक, सन् १९८९।१०।९

लगिएको थियो । त्यसमा मैले त्यस उमेरमा पुगेर पनि सामान्य विद्यार्थीजस्तो भएर विभिन्न खेलहरूमा सहभागी भएको थिएँ । ती खेलहरूमा Tug of war, Hungry race, Relay race र Ball throwing आदि विभिन्न खेलहरू थिए । ती खेलहरूमा मेरा उमेरका मानिसहरू कमै भए तापनि मैले हुनेसम्म बल लगाएर खेल खेलेको थिएँ र त्यस खेलमा मैले पनि अरू प्रतियोगी सरह पुरस्कार पाएको थिएँ । खेल समाप्त भएपछि हामीहरू छात्रावासमा फर्किएर खानापिना पछि आराम गरेर बसेका थियौँ ।

सन् १९८९ अक्टोबर १० तारिख तदनुसार २०४६ साल असोज २४ गतेका दिन हाम्रो बडादशैंको विजया दशमी परेको थियो । मलाई घरको सम्झनाले बिहानैदेखि सताइरहेको थियो । त्यस दिन जापानमा पनि National Sports Holiday परेको हुँदा हामीहरूलाई छुट्टी नै थियो । बिहानको खानापछि म अन्यमनस्क भएर आफ्नै कोठामा TV हेरेर बसिरहेको थिएँ । त्यसपछि अपराह्न नजिकैको बजार फुचुमा गएर मैले केही किनमेल पनि गरेको थिएँ । त्यस दिन जापानको टोकियोमा नेपाली राजदूतावासले विजयादशमीको उपलक्ष्यमा जापानमा बसेका नेपालीहरूलाई बोलाउने

परम्परा अनुसार मलाई पनि बोलाएको थियो । म त्योभन्दा पहिले दूतावास नगएको हुँदा मैले दूतावास जाने बाटो देखेको थिइन । त्यस बेला विद्यार्थीको रूपमा राष्ट्रिय खेलकूदपरिषद्बाट गएर अध्ययन गरिरहेका श्रीऋषि ओझाले मलाई लिएर त्यहाँ गएका थिए । उनी तत्कालीन नेपालका प्रधानमन्त्री श्रीमरीचमान सिंहको छोरा श्रीसञ्जयका अभिभावक भएर जापानमा बसेका थिए । हामीहरूसँग श्रीसञ्जय पनि साथै गएका थिए । राजदूतावास म बसेको फुचुबाट धेरै नै टाढा थियो । ट्रेनको लामू यात्रा गरेर साँझ ६.१५






राजदूत नारायणप्रसाद र उहाँका परिवारका साथ लेखक, राजदूत नारायणप्रसाद र लेखक,१९८९।१०।१०

बजेमात्रै हामीहरू दूतावास पुगेका थियौँ । त्यस बेला जापानमा नेपालका राजदूत श्रीनारायणप्रसाद अर्याल हुनुहुन्थ्यो । उहाँ र उहाँका परिवारले हामीहरूको हार्दिक स्वागत गर्नुभएको थियो । त्यस बेला विभिन्न कामका लागि जापानमा बसेका नेपालीहरूमध्ये जम्मा ३० जना नेपालीहरूलाईमात्रै त्यहाँ बोलाइएको थियो । राजदूतावासमा जम्मा भएका नेपालीहरूका बीचमा आपसमा चिनाजान र भलाकुसारीसमेत भएको थियो । रात्रिभोज पछि म राजदूतावासबाट ११:३० बजे युनाफे फर्किएको थिएँ ।

अक्टोबर ११ तारिखका दिन कक्षाको काम सकिएपछि अपराह्न ४.३० मा जापानको प्रसिद्ध Koto Concert, UNAFEI को सभाकक्षमा भएको





युनाफेमा आयोजित प्रसिद्ध जापानी सङ्गीत Koto Concert को एक दृश्य, सन् १९८९ अक्टोवर १३

थियो । त्यो वाद्यवृन्द जापानको प्राचीनतम वाद्यवृन्दमा पर्दो रहेछ । त्यस उपलक्ष्यमा फिलिपिनो सहभागी श्रीमती Concepcion ले फूलको गुच्छा प्रदान गरेकिथिइन्भने मैले धन्यवाद ज्ञापन गरेको थिएँ ।

अक्टोबर १२ तारिखका दिन हामीहरूलाई बिहान ७.३० बजे नै ब्रेकफाष्ट गराएर Tokyo Metropolitan Police Department मा लगिएको थियो । बिहान १० बजे त्यहाँ पुगेर हामीहरूले Traffic Control System को निरीक्षण गरेका थियौँ । त्यहाँको सम्पूर्ण Traffic, Computer बाट सञ्चालित CC Camera हरूबाट नियन्त्रण गरिँदो रहेछ । त्यसका अतिरिक्त Traffic Control को लागि Helicopter को पनि प्रयोग गरिँदोरहेछ । कहीँ कसैले Traffic Rule को उल्लङ्घन गरेमा तुरुन्तै समातेर कारबाही गर्ने अत्यन्त छिटो र छरितो परिपाटी त्यहाँ अपनाइँदोरहेछ । अन्यथा संसारमा सबभन्दा बढी जनसङ्ख्या र सडकमा गाडीहरू चल्ने जापानको टोकियो जस्तो शहरमा यातायातका साधनहरू सुचारुरूपमा सञ्चालन गर्न अत्यन्त मुश्किल पर्नेथियो होला । त्यहाँको Museum लगायत सम्पूर्ण Traffic गतिविधिहरू हेरेर त्यसपछि हामी सहभागीहरू ३ समूहमा बाँडिएर Nakano मा रहेको Probation सम्बन्धी Half way home हेर्न गएका थियौँ । २ बजे त्यहाँ पुगेर त्यहाँको सम्पूर्ण गतिविधिको निरीक्षण गरेर हामीहरूले जानकारी लिएका थियौँ । अपराधीहरूलाई सुधार गर्ने त्यस प्रकारको उच्च व्यवस्था हाम्रो देशमा नभएको हुँदा मलाई आफैँमा कुण्ठा उत्पन्न भएको थियो ।

अक्टोबर १४ तारिखका दिन बिदा परेको हुँदा बिहानको खाना खाएर गृहमन्त्रालय नेपालबाट जानु भएका सहसचिव श्रीशिवप्रसाद आचार्यलाई भेट्न म Ichigaya को TIC मा गएको थिएँ ।

अक्टोबर १५ का दिन दिनमा आफ्नू कक्षाको काम समाप्त गरेर बेलुका ६ बजे युनाफेबाट Hachiogi शहरका नजिक MountTakao San को काखमा रहेको Japanese Style को Ukaitoriyama भन्ने Restaurent मा हामीहरूलाई लगिएको थियो । उक्त Resaturant मा World Society of Victimology का तर्फबाट Mr. Koichi Miyazawa ले हामीहरूलाई उक्त रात्रिभोज दिनु भएको थियो । त्यस Restaurant मा भुइँमा चकटीमा बसेर खाने चलन रहेछ । अत्यन्त रमाइलो वातावरणमा रात्रिभोज सम्पन्न

भएको थियो । हामीहरू राती अबेर युनाफे फर्किएका थियौं ।

अक्टोबर १६ तारिखका दिन युनाफेकै सभाकक्षमा नियमित समयमा हाम्रो International Workshop on Victimology and Victim's Rights भन्ने विषयमा Workshop भएको थियो । उक्त Workshop




फिलिपिनो सहभागी श्रीमती कन्सेप्सियन र लेखक, कक्षामा सञ्चालित छलफलमा भाग लिँदै, १९८९।१०।१६

जर्मनीबाट आउनु भएका डा. स्नाइदरले सञ्चालन गर्नुभएको थियो । उहाँले लेख्नु भएको Victimology and Victim's Rights भन्ने महत्त्वपूर्ण किताब पनि हामी सहभागीहरूलाई उहाँले दिनुभएको थियो । सो विषय मेरा लागि नयाँ भएको हुँदा अत्यन्त चाख लिएर मैले भाग लिएको थिएँ । Workshop पछि रात्रिभोजको कार्यक्रम भएको थियो र हाम्रो ठूलो बैठकको कार्यक्रम सकिएपछि सधैँझैँ सानू बैठकमा राती अबेरसम्म हाम्रो कार्यक्रम चलेको थियो ।

अक्टोबर १७ तारिखका दिन Victimology and Victim's Right भन्ने विषयमा विभिन्न वक्ताहरूले बोल्नुभएको थियो । विभिन्न समूहमा सहभागीहरूलाई बाँडेर दिनभरि नै त्यसै बिषयमा छलफल र त्यसको निचोड निकाल्ने काम पनि भएको थियो । अपराह्न ४.३० बजे Closing Ceremony भएर Victimology and Victim's Right's को Workshop समाप्त भएको थियो ।

अक्टोबर १८ तारिखका दिन हाम्रो कक्षामा Indonesia बाट आउनु भएका Indonesia का सर्वोच्च अदालतका Deputy Chief Justice Mr. H.Adi Andojo Soet Gipto ले अपराध नियन्त्रण सम्बन्धी विषयमा हामीहरूलाई पढाउनुभएको थियो । उहाँले आफ्नू कार्यपत्रमा Reincarnation

of criminals भनेर नयाँ दृष्टिकोण दिन खोज्नुभएको थियो । त्यसै विषयलाई लिएर हाम्रा कक्षाका सहभागी मित्रहरूले धेरै थरीका नचाहिने प्रश्नहरू पनि गरेर उहाँलाई दुःख दिएका थिए । खाना पछि हाम्रो Group Workshop चलेको थियो । त्यसपछि हाम्रो त्यस दिनको सम्पूर्ण कार्यक्रम बन्दभएको थियो ।

अक्टोबर १९ तारिखका दिन बिहान ७.३० बजे Break Fast पछि Kita Fuchu बाट Train चढेर हामीहरू Ueno Station मा गएका थियौं । त्यहाँबाट Hitachi Super Express Train चढेर बिहान १०.४० बजे Tomebo Station मा हामीहरू उत्रिएका थियौं । त्यहाँबाट बसद्वारा Saifu Juvenile Training School मा गएका थियौं । त्यहाँ अपराधीहरूलाई सुधार्नका लागि तालीम दिने गरिँदोरहेछ । अत्यन्त संवेदनयुक्त भएर त्यहाँ काम गरेको देखेर मलाई अत्यन्त खुशिलागेको थियो । दिनको खानापछि हामीहरू त्यहाँबाट Mito Juvenile Classification Home मा गएका थियौं । बालअपराधिहरूलाई Family Court बाट त्यहाँ ल्याएर सुधार गर्ने काम गरिँदोरहेछ । त्यहाँ ४ हप्ता राखेर तिनीहरूलाई सुधार गरेपछि आ–आफ्ना घरमा ती बालअपराधीहरूलाई फिर्ता पठाउने अत्यन्त राम्रो व्यवस्था रहेछ । हामीहरू त्यहाँको काम सिध्याएर दिउँसो ४.३० बजे Mito Hotel मा गएर बसेका थियौं ।



Saifu Juvenile Training School मा प्राध्यापकहरूका साथ लेखक, १९८९।१०।१९

अक्टोबर २० तारिखका दिन हामीहरू Mito Hotel बाट बिहान ९.३० बजे प्रशान्त महासागरको तटमा रहेको माछा बजारमा गएका थियौं । जीवनमा पहिलो पटक प्रशान्त महासागरमा पुगेर त्यसको जलले मैले सेचन गरेको थिएँ । हामीहरू फेरि सोही Juvenile Classification Home मा फर्किएर त्यहाँका उपनिर्देशकलाई भेटेर उहाँसँग त्यस संस्थाका बारेमा हामीहरूले जानकारी लिएका थियौं । हामीहरू त्यहीं खाना खाएर राती ९.३० बजे युनाफे फर्किएका थियौं ।

अक्टोबर २१ तारिखका दिन युनाफेमा जापानीहरूले फूल सजाउने तरिका Ikebana को प्रदर्शन गरेका थिए । कसरी फूलहरू सजाउन सकिन्छ भनेर हामीहरूलाई सिकाइएको थियो ।

अक्टोबर २३ तारिखका दिन हामीहरूले युनाफेकै सभाकक्षमा UN Survey सम्बन्धी Workshop मा भाग लिएका थियौं । उक्त Survey को प्रस्तुतीकरण Australia बाट आउनु भएका Dr. S.K. Mukhargee ले गर्नु भएको थियो । उक्त Workshop, October 24 तारिखका दिनमा पनि चलेको थियो । त्यस दिनको रात्रिभोज युनाफेका निर्देशक Mr. Hyroyasu Sugihara ले आफ्नै घरमा दिनु भएको थियो । अत्यन्त पारिवारिक वातावरणमा सो रात्रिभोज सम्पन्न भएको थियो । उक्त UN Survey सम्बन्धी Workshop अक्टोबर २५ तारिखसम्म चलेको थियो ।


नेपाली टोपीमा Zambia का मित्र Kabwiku कासाथ युनाफेको मूलद्वारमा लेखक, १९८९।१०।२३

अक्टोबर २७ तारिखका दिन बिहान हामीहरू बिहानको स्वल्पाहारपछि जापानको संसद अर्थात् Diet मा गएका थियौं । हामीहरूलाई त्यहाँ संसदका पदाधिकारीहरूले स्वागत गरेका थिए र त्यहाँ संसदको काम कारबाही कसरी चल्दछ भन्ने सम्बन्धमा पनि जानकारी दिइएको थियो । दिनको खाना हामीहरूले संसदभवनको भोजनालयमा नै खाएका थियौं । त्यसपछि Sunshine City मा रहेको Sunshine 60 Building हेर्न हामीहरू गएका थियौं । त्यो ६० तला भएको अग्लो गगनचुम्बी घरको नामबाट नै त्यस शहरको पनि नाम रहेको रहेछ । घरको माथिल्लो तलाबाट हेर्दा सम्पूर्ण Tokyo शहर देखिँदो रहेछ । Asia Crime Prevention Foundation को केन्द्रीय कार्यालय पनि त्यसै भवनमा राखिएको रहेछ । हामीहरूलाई रात्रिभोजमा त्यस संस्थाका अध्यक्ष Mr. Atshushi Nagashima ले आमन्त्रण गर्नु भएको थियो ।


संसदभवन अगाडि, लेखक


Sunshine 60 अगाडि लेखक

त्यस अवसरमा अत्यन्त स्वागतसत्कारका साथ हामीहरूलाई स्वादिष्ट खाना खुवाउनका साथै उपहारसमेत प्रदान गरिएको थियो ।

अक्टोबर ३० तारिखका दिन Group Workshop को पहिलो सत्र र दोस्रो सत्र पछि त्यस दिनको कार्यक्रम समाप्त भएको थियो । Workshop पछि त्यस विषयमा छलफल भएको थियो । खास गरेर त्यस छलफलमा जापानका ४० जना सरकारी वकिलहरूले भाग लिएका थिए । उक्त छलफलको कार्यक्रमले न्यायसम्पादनका क्षेत्रमा मलाई नयाँ दृष्टिकोण दिएको थियो ।

अक्टोबर ३१ तारिखका दिन जापानका National Police Agency का प्रमुख Mr. Masa Kumi ले जापानको Boryo Kudan को गतिविधिका बारेमा विस्तृतरूपमा जानकारी दिनुभएको थियो । त्यस आतङ्ककारी समूहलाई जापानमा Yakuza को नामबाट पनि सम्बोधन गरिँदोरहेछ । उक्त समूहले त्यस समयमा जापानमा अत्यन्त आतङ्क मच्चाइरहेको थियो । त्यसै दिन साँझमा मेरो जापानी भाषाको अन्तिम १७ औँ कक्षा थियो । जापानी भाषाप्रशिक्षणमा सहभागी भएका हामीहरू पढाइको साथसाथै त्यसबारेमा छलफल पनि गर्दथ्यौं । भाषाविज्ञानको ज्ञान भएका मित्रहरूले त्यसमा भाग लिने गर्दथे । म भाषाविज्ञानको विद्यार्थी भएको नाताले जापानी भाषाको उत्पत्ति र विकासका बारेमा विशेष जिज्ञासा राख्ने गर्दथेँ । जापानी भाषा चाइनिज भाषाको समेत सम्मिश्रणबाट उत्पत्तिभएको रहेछ । तर चाइनिज भाषा जस्तो दुरूह र धेरैथरी Character नभएर जापानी भाषालाई सरल र सरससमेत बनाइएको रहेछ । जापानी भाषा सिक्न मलाई कठिनाइको अनुभव भएको थिएन । त्यति छोटो अवधिमा पनि राम्रोसँग जापानी भाषा सिकेर अन्तिम समापन समारोहमा जापानी भाषामा नै मैले आफ्नू प्रवचन दिएको थिएँ ।

नोभेम्बर १ तारिखका दिन युनाफेको प्रवचन कक्षमा UN Guidelines भन्ने विषयमा सुडानबाट आउनु भएका Dr. Abdel Azij Abdalla Siddo ले प्रवचन दिनुभएको थियो । त्यसपछि हाम्रो कक्षाको कार्यक्रम अपराह्न ४ बजे सकिएको थियो । त्यसपछि हामीहरू युनाफेबाट बसद्वारा प्रस्थान गरेर Roppongi भन्ने शहरमा विशेष रात्रिभोजका लागि साँझ ६.३० बजे

पुगेका थियौं । उक्त रात्रिभोजको आयोजना Japan Solidarity Committee for Asian Alumnai ले गरेको थियो । त्यहाँ आफूले चाहे अनुसारको परिकार आफैंले बनाएर खाने व्यवस्था रहेछ । त्यहाँ धेरै जना साथीहरूले गँगटाको मासु तातो ढुङ्गामा सेकाएर खाएका थिए । मैले कहिल्यै पनि गँगटाको मासु नखाएको हुँदा अरू साथीहरूले खाए पनि मैले खान सकेको थिइन । विभिन्न जीवजन्तुहरूको काँचो मासु तातेको ढुङ्गामा सेकाएर विशेष प्रकारको रसमा चोबेर खानुपर्ने त्यस रेष्टुराँको चलन रहेछ । एकैपटक थरीथरीका मासुका टुक्राहरू तातो ढुङ्गामा सेकाउँदा त्यसबाट निस्किएको दुर्गन्धित धूँवाले बस्न नसकेर म रेष्टुराँबाट बाहिर निस्किएको थिएँ । सामान्य खाना खाएर रातमा म युनाफे फर्किएको थिएँ ।

नोभेम्बर २ तारिखका दिन हामीहरू युनाफेबाट Tama Juvenile Trainning School मा गएका थियौं । सो विद्यालय चलाउन प्रत्येक वर्ष ४८० Million Yan लाग्ने कुरा हामीहरूलाई बताइएको थियो । त्यस विद्यालयमा १७६ कैदीबन्दीहरूलाई तालीम दिइँदो रहेछ । हामीहरू त्यहाँबाट दिनको ११ बजे प्रस्थान गरेर १२ बजे Hachi Oji शहरमा पुगेका थियौं । दिनको खाना त्यही शहरमा खाएर त्यहाँबाट १ बजे प्रस्थान गरेर २.३० बजे Toshiba Co. Ohme को कारखानामा हामीहरू पुगेका थियौं । त्यहाँ पुगेर हामीहरूले कारखानाका सम्पूर्ण गतिविधिको निरीक्षण गरेका थियौं । उक्त कारखाना पूर्णरूपमा स्वचालित भएर पनि ४००० कामदारहरूले काम गर्दा रहेछन् । त्यहाँ कम्प्युटर लगायत धेरै थरीका सामानहरू बन्दारहेछन् ।



Toshiba Co. Ohme कारखानमा सहभागीहरूका साथ लेखक

नोभेम्बर ३ तारिखका दिन बिहान १० बजे फुचुमा सञ्चालित मेला हेर्न हामीहरू गएका थियौं । त्यहाँ सञ्चालित मेला नेपालमा लाग्ने हाटबजार जस्तै थियो । हामीहरूले दिनको खाना त्यहीं खाएका थियौं । त्यसपछि हामीहरू त्यहाँबाट बसमा चढेर Tokyo Tower हेर्न गएका थियौं । विश्वप्रसिद्ध


Tokyo Tower जापान

Tokyo Tower को उचाइ ३३३ फीट रहेछ । सम्पूर्ण संरचना तलदेखि माथिसम्म फलामै फलामले बनेको हुँदा अत्यन्त मजबूत र आश्चर्य लाग्दोरहेछ । हामीहरू लिफ्टमा चढेर त्यसको माथिल्लो भागसम्म गएका थियौँ । त्यहाँबाट चारैतिर घुमेर हेर्दा Tokyo शहर अत्यन्त रमणीय देखिँदो रहेछ । साँझपख हामीहरू युनाफे फर्किएका थियौँ ।

November ४ तारिखका दिन दिनको खानापछि हामीहरू घोडाको दौड हेर्न Tokyo Race Course मा गएका थियौँ । त्यहाँ हामीहरूलाई अत्यन्त भव्यताका साथ स्वागतसत्कार गरिएको थियो । त्यहाँ जाने दर्शकहरूले घोडाको दौडमा बाजी लगाउने गर्दा रहेछन् । जित्नेले थुप्रै जित्ने र हार्नेले केहीमात्र हार्दारहेछन् । मैले पनि २०० यान बाजी लगाएको थिएँ तर मैले भने जित्न सकिन । सन् १९७७ मा बेलायतमा अध्ययन गर्नबस्दा मैले लण्डन शहरमा घोडाको दौड हेरेको थिएँ । त्यसपछि दोस्रोपटक जापानमा गएर मैले घोडाको दौड हेर्ने सौभाग्य पाएको थिएँ ।

नोभेम्बर ६ तारिखका दिन हामीहरू युनाफेबाट बसमा चढेर Saitama Prefecture मा पर्ने Kawagoe Juvenile Prison मा गएर हामीहरूले कारागारको निरीक्षण गरेका थियौँ । त्यस कारागारमा ९९० कैदीबन्दीहरूलाई राखेर कारागारभित्रका  कारखानाहरूमा विभिन्न किसिमका सीपहरू सिकाइँदो रहेछ । हामीले दिनको खाना त्यहीँ खाएर त्यसपछि हामीहरू विश्वप्रसिद्ध Bridgestone भन्ने Tyre को कारखाना हेर्न गएका थियौँ । उक्त कारखाना अत्यन्त विशाल रहेछ । कारखानाभित्र पस्ता रबडको गन्ध आएर मैले सास फेर्न सकेको थिइन ।

नोभेम्बर ७ तारिखका दिन Dr. Siddo ले Norms and Regulation of United Nations का सम्बन्धमा Workshop सञ्चालन गर्नुभएको थियो । उक्त Workshop २ समूहमा बाँडेर हामीहरूले सम्पन्न गरेका थियौँ । साँझमा हामीहरूले जापानी भाषाप्रशिक्षणको दीक्षान्त समारोहमा भाग लिएका थियौँ । त्यसै समयमा


जापानी भाषाकी प्राध्यापिकाबाट प्रमाणपत्र ग्रहण गर्दै लेखक

जापानी भाषा सिकेको प्रमाणपत्र पनि मैले प्राप्त गरेको थिएँ। त्यसपछि जापानी सङ्गीतसम्मेलन भएको थियो र रातको खानापछि हामीहरूले आराम गरेका थियौँ।

नोभेम्बर ८ तारिखका दिन नियमित कक्षाको काम सम्पन्न भएपछि त्यसै बर्षको फागुन महिनामा नेपालमा आयोजना गरिने भएको अपराधनियन्त्रणसम्बन्धी Joint Seminar का बारेमा Professor Fumio Saito सँग मेरो छलफल भएको थियो। त्यसबारेमा तत्कालीन का.मु. गृहसचिव श्रीभक्तबहादुर कोइरालासँग ट्रङ्कलद्वारा नै काठमाडौंमा सम्पर्क राखेर छलफल गरी मैले सबै व्यवस्था मिलाएको थिएँ।

नोभेम्बर ९ तारिखका दिन हामीहरू बिहान ७ बजे नै बसद्वारा Tokyo Disney Land गएका थियौँ। त्यहाँ गएर सर्वप्रथम भारतीय सहभागी श्रीवरप्रसादलाई साथमा लिएर म Star Tours को कक्षमा गएको थिएँ। त्यहाँ हामीहरूलाई कुर्सीमा राखेर पेटी बाँध्न लगाइएको थियो। त्यसपछि हामीहरू बसेको सम्पूर्ण घर नै हावामा उडेजस्तो मलाई भान भएको थियो। आकाशमा उड्दा उड्दै मेरै टाउकामाथि विभिन्न तारा र ग्रहहरू आएर ठोक्किएलान्जस्तो मलाई भान भएको थियो। अत्यन्त डराएर म आँखा चिम्लिएर बसेको थिएँ। तर भारतीय मित्रभने सो खप्न नसकेर बेहोसै हुनु भएको थियो। त्यस यात्रामा उच्च रक्तचाप हुने र मुटुको बिरामीले जानुहुने रहेनछ, तर सो कुरा थाहा नभएको हुँदा मलाई पनि अप्ठेरो भएको थियो। अन्तरिक्षको भयङ्कर यात्राबाट निस्किएर हामीहरू केबुल कारद्वारा It's Small world भन्ने संसार हेर्न गएका थियौँ। त्यो केटाकेटीका लागि साह्रै आकर्षक संसार रहेछ। मलाई अत्यन्त राम्रो लागेको थियो। त्यसपछि हामीहरू क्रमशः The Mickey Mouse, Sindrilla Castle, Mistry Tour, Hounted mansion, Adventure Land, West land, Country Bear



Tokyo Disney Landमा मित्रहरूका साथ लेखक, सन् १९८९।११।९

Theater, Pirates of the Caribbean का साथै हामीहरूले थरीथरीका अनौठा तथा डरलाग्दा दृश्यहरू Tokyo Disney Land भित्र हेर्न पाएका थियौँ । सो Disney Land खास गरेर साना साना बच्चाबच्ची र युवायुवतीहरूले भ्रमण गर्ने साहसिक खालको आकर्षक स्थान रहेछ । उमेर पुगेका पाकाहरूका लागि त्यो साहसिक यात्रा खतरापूर्ण हुने मैले देखेको थिएँ ।

उपर्युक्त अनुसार हामीहरू कक्षाको पढाइ र बाहिरको भ्रमणसमेत नियमितरूपमा गर्नेगर्दथ्यौँ । धेरैजसो कक्षामा पढाइ हुन्थ्योभने सप्ताहान्त र लामू बिदाको मौका पारेर हामीहरूलाई क्षेत्रीय भ्रमण र दर्शनीय स्थानहरूको अवलोकनका लागि लाने गरिन्थ्यो ।

नोभेम्बर १० तारिखका दिन हामीहरूलाई Austria बाट आउनु भएका Dr. Helmut Gonza ले Some common basic ideas of the prison administration of the member states of the council of Europe भन्ने विषय पढाउनुभएको थियो । उक्त विषय अत्यन्त रोचक र जान्नु पर्ने खालको थियो । दिनको खानापछि हामीहरू २:३० बजे फुचु शहरभित्र रहेको Sonturi Factory हेर्न गएका थियौँ । उक्त कारखाना अत्यन्त विशाल र व्यवस्थितरूपमा सञ्चालन गरिएको रहेछ । त्यहाँ रातको खानापीनासहितले हाम्रो स्वागत सत्कार गरिएको थियो ।

नोभेम्बर ११ तारिखका दिन हामीहरू सबेरै युनाफेबाट बसमा चढेर Yokohama meritime safety agency को निरीक्षण गर्न गएका थियौँ । त्यहाँ जापानमा रहेको सबभन्दा ठूलो पानीजहाज र त्यसको सुरक्षाको बारेमा हामीहरूलाई त्यहाँका व्यवस्थापकहरूले बताएका थिए । हामीहरूलाई जहाजमा राखेर समुद्रको बीचमा लगेर Rescue Operation को अभ्यास समेत देखाइएको थियो । जीवनमा पहिलोपटक देखेको त्यो रोमाञ्चकारी अभ्यासले मलाई अत्यन्त आनन्द दिएको थियो । दिनभरि त्यहाँको अनौठो प्रदर्शन हेरेर राती हामीहरू युनाफे फर्किएका थियौँ ।



Meritime safety agency मा गरिएको Rescue Operationको निरीक्षण

नोभेम्बर १२ तारिखका दिन छुट्टीको दिन परेको हुँदा कक्षा सञ्चालित

थिएन। दिनको खानापछि त्यसै वर्षको फागुन महिनामा नेपालमा हुने सेमिनारका सम्बन्धमा फेरि Prof. Saito सँग छलफल भएको थियो। नोभेम्बर २३ तारिखका दिन Prof. Mazakazu Nishikawa ले Counter measures against narcotic drug Problems in Asian भन्ने विषयमा कार्यपत्र प्रस्तुत गर्नुभएको थियो। लामू प्रश्नोत्तर पछि पहिलो सत्रको हाम्रो कार्यक्रम समाप्त भएको थियो। दोस्रो सत्रमा Dr. Siddo को UN Survey on norms and guidelines का बारेमा भएको Workshop को Final Report प्रस्तुत गरिएको थियो। दिनको खानापछि हामीहरूलाई स्वाध्यायका लागि बिदा दिइएको थियो।

## Kansai भ्रमण

धेरै दिनको प्रतीक्षापछि नोभेम्बर १४ तारिखका दिन बिहानै Kansai क्षेत्रको भ्रमणका लागि युनाफेबाट बसमा चढेर हामीहरू Tokyo Station गएका थियौँ। त्यहाँबाट बिहान ठीक १० बजे Bullet Train (Shinkanshen) को Hikari No. 5 मा चढेर हामीहरू Hiroshima तर्फ प्रस्थान गरेका थियौँ। जापानको अत्याधुनिक प्रविधिले युक्त उक्त ट्रेन बढीमा प्रतिघण्टा ५०० किलोमिटरसम्म दौडन सक्छ भनेर त्यहाँका अधिकारीहरूले हामीहरूलाई बताएका थिए भने  त्यस बेला ३०० किलोमिटरको गतिमा त्यो बुलेट ट्रेन हामीहरूलाई लिएर दौडिरहेको थियो। भित्रबाट हेर्दा सम्पूर्ण सुविधा जम्बोजेटको जस्तै र गति पनि विनाअवरोध भएको हुँदा मैले हवाइजहाजमै चढेर उडिरहेको जस्तो अनुभव गरेको थिएँ। हामीहरूलाई त्यस ट्रेनभित्र राम्रो खानापिनाको व्यवस्थाका साथै अन्य सम्पूर्ण सुविधाहरू प्राप्त गराइएको हुनाले त्यो यात्रा मेरो जीवनको सबभन्दा सुखदयात्रा भएको अनुभव मैले गरेको थिएँ। यात्राका बीचमा पर्ने Nagoya, Kyoto, Okayama र Oshaka आदि जापानका ठूला तथा रमणीय शहरहरू पार गर्दै उक्त यान हिरोशिमातर्फ अगाडिबढेको थियो।

हामीहरू दिनको ठीक २:३० बजे ऐतिहासिक हिरोशिमा शहरमा पुगेका थियौँ। हामीहरूलाई Station बाट बसमा चढाएर Hiroshima Garden Palace भन्ने अत्याधुनिक होटेलमा लगेर राखिएको थियो। मैले जीवनमा

सर्वप्रथम कम्प्युटराइज्ड् कार्डबाट कोठाको साँचो उघारेको थिएँ । होटेलमा केही समय आराम गरेपछि दोस्रो विश्वयुद्धको समयमा सन् १९४५ को अगष्ट महिनाको ६ तारिखका बिहान ८ बजे संयुक्तराज्य अमेरिकाले त्यस हिरोशिमा शहरको मध्य भागमा पड्काएको अणुबमद्वारा भएको क्षति र त्यसको अवशेषसमेत हामीहरू हेर्न गएका थियौँ। निरीक्षण गर्ने क्रममा सर्वप्रथम बमबाट क्षति भएको Bomb Dome हामीलाई देखाइएको थियो । बमबाट डढेका घरहरू हालसम्म पनि जस्ताका तस्तै सुरक्षित राखिएका रहेछन् । त्यसपछि हामीहरूलाई Peace Memorial Museum को निरीक्षण गराइएको थियो । जुन Museum मा त्यस बेला बमद्वारा क्षति भएका सम्पूर्ण मानवीय तथा भौतिक अवशेषहरूको नमुना र तथ्याङ्कसमेत जस्ताको तस्तै राखिएको रहेछ। त्यहाँ निरीक्षण गर्दा अमेरिकाको अणुबमबाट त्यहाँका लाखौं मानिसहरूको मृत्यु भएको, अपाङ्ग भएको र अहिलेसम्म पनि विभिन्न रोगले ग्रस्त भएको हृदयविदारक कुरा थाहा भएको थियो । अणुबमको प्रहारबाट त्यो हिरोशिमा शहर त्यस बेला पूर्णरूपमा खरानीमा नै परिणत भएको रहेछ। त्यसबाट जापानले अरबौं अरब डलरको क्षति व्यहोर्नु परेको रहेछ। दोस्रो विश्वयुद्ध समाप्त भएपछि जापानले क्रमशः फेरि आफ्नू आर्थिक उन्नति गर्दै लगेर त्यो नष्ट भएको हिरोशिमा शहरलाई फेरि पहिलेको भन्दा पनि अत्यन्त आधुनिक तरिकाले निर्माण गरिसकेको रहेछ। सारांशमा भन्ने हो भने अणुबमको प्रहारबाट कति ठूलो भौतिक तथा मानवीय क्षति हुँदोरहेछ भन्ने कुराको नमुना हिरोशिमा शहरलाई हेरेर बुझ्न सकिन्छ । हामीहरूले साँझ अबेरसम्म बमबाट भएको क्षति प्रष्ट देखिने गरी सुव्यवस्थित तरिकाले राखिएको अर्को प्रदर्शन कक्षमा पनि गएर हेरेका थियौँ। सो प्रदर्शन कक्ष हेर्दा बम लागेर चीत्कार गरिरहेका मानिसहरूको आवाज र बमको ज्वालामा परेर डढेका मानिसहरूको दुर्गन्धको समेत अनुभूति गर्नसकिन्थ्यो। त्यो हृदयविदारक दृश्य हेरिसक्नु थिएन । मलाई त्यस घृणित युद्धमा संलग्न सबै पक्षप्रति अत्यन्त घृणा उत्पन्न भएको थियो। त्यस दृश्यबाट अत्यन्त क्षुब्ध बन्दै हामीहरू राती ७ बजे





Bomb Dome र Peace Memorial, Hiroshima

होटेलमा फर्किएका थियौं ।

नोभेम्बर १५ तारिखका दिन उक्त होटेलबाट बिदा भएर हामीहरू हिरोशिमास्टेशन गएका थियौं । त्यहाँबाट बिहान ८:३० बजे बुलेट ट्रेनको हिकारी नं. ९० मा चढेर Okayama भन्ने स्टेशनमा हामीहरू पुगेका थियौं । त्यहाँबाट यात्रिबसमा चढेर हामीहरू पुल ९ किलोमिटर लामू र दुईतले Seto Ohashi Bridge को माथिल्लो तलाबाट हामीहरू गएका थियौं । यसबाट बस, कार आदि चल्दा रहेछन् र तल्लो तलामा ट्रेन चल्दो रहेछ । त्यसको उचाइ ठाउँ ठाउँमा ८० मिटरसम्म पनि रहेछ । त्यो पुल संसारको सबैभन्दा लामू पुलमा गनिँदोरहेछ । अत्यन्त आधुनिक प्रविधिबाट बनेको उक्त पुल देखेर मलाई आश्चर्य लागेको थियो । त्यताबाट हामीहरू Marugame Shoujyo Prefecture स्थित Marugame Girls Juvenile Training School मा गएका थियौं । त्यहाँ कैदमा परेका युवतीहरूलाई राखेर उपचार गर्ने र विभिन्न सीपको तालीमसमेत दिइँदोरहेछ । त्यसलाई विद्यालय भनिए तापनि वास्तवमा त्यो सुधार गर्ने कारागार नै रहेछ । दिनको खाना त्यहीं खाएर हामीहरू अपराह्न २:३० बजे Okayama Station मै फर्किएर Bullet Train द्वारा जापानको पुरानू राजधानी Kyoto तर्फ प्रस्थान गरेका थियौं । हामीहरू साँझमा जापानको Kyoto मा पुगेर Hotel Keihan मा बसेका थियौं ।


Seto Ohashi Bridge, Okayaama

नोभेम्बर १६ तारिखका दिन बिहान ८:३० बजे होटेलबाट बसद्वारा प्रस्थान गरेर हामीहरू Kyoto Probational Office मा गएका थियौं । त्यहाँ हामीहरूले सम्पूर्ण क्रियाकलापहरूको निरीक्षण गरेर त्यस पछि Kyoto मा नै रहेको Kinkakugi Temple हेर्नगएका थियौं । उक्त बुद्धको मन्दिर सुनौलो रङ्ग लगाएर पगोडा शैलीमा निर्माण भएको रहेछ । झट्ट परबाट हेर्दा त्यो मन्दिर हाम्रो पशुपतिनाथको मन्दिरजस्तै देखिन्थ्यो । त्यहाँको अवलोकनपछि हामीहरू Arashiyama City गएका थियौं । त्यहाँ जाँदा बीचमा पर्ने नदीमा नौकाविहार गर्दै नदीको किनारामा नै रहेको प्राचीन

बुद्धमन्दिरमा हामीहरू गएका थियौँ। त्यहाँ जता हेरे पनि मन्दिरैमन्दिरहरू देखिन्थे। मन्दिरको अवलोकन समाप्त गरेर त्यहाँबाट हामीहरू Bamboo tunnel पार गरेर बसपार्कमा पुगेका थियौँ। दिनको खानापछि हामीहरू त्यहाँको प्रसिद्ध दरबार Nizyo Castle हेर्न पनि गएका थियौँ। सो दरबार २०० वर्ष अगाडि जापानी इतिहासका शक्तिशाली प्रधानसेनापति Tokugawa Shogun ले बनाएका रहेछन्। त्यस दरबारका वरिपरि अग्लो सुन्दर कम्पाउण्ड र दरबारको अगाडि सुन्दर विशाल चउरसमेत रहेछ। उक्त





जापानका तत्कालीन प्रधानसेनापतिका वासस्थान अगाडि लेखक, Oshaka शहरमा लेखक, सन् १९८९।११।१६

दरबार काठैकाठले बनेको र जापानी कलाकौशलले परिपूर्ण देखिन्थ्यो। हामीहरू त्यहाँको कार्यक्रम सिध्याएर होटेलमा फर्किएका थियौँ।

Kyoto भ्रमणका सन्दर्भमा समय निकालेर दिनको अपराह्नमा हामीहरू त्यहाँबाट जापानको दोस्रो ठूलो तथा औद्योगिक शहर ओशाकाको भ्रमण गर्न ट्रेनबाट गएका थियौँ। मलाई जापानभ्रमणको सन्दर्भमा ओशाका शहर घुम्ने अत्यन्त ठूलो इच्छा थियो, त्यो कुरा पनि त्यसपटक मैले पूरा गर्नपाएको थिएँ। मैले नोभेम्बर १ तारिखका दिन Roppongi शहरमा दिइएको भोजमा गँगटाको मासु घीन लागेर खाएको थिइन तर ओशाकामा भने सबै सहभागी मित्रहरूले कर लगाएको हुँदा मैले उसिनेको गँगटाको मासु दिगमिग लाग्लालाग्दै पनि खाएको थिएँ। रातको खाना ओशाकामै खाएर राती ११ बजे हामीहरू होटेल फर्किएका थियौँ।

नोभेम्बर १७ तारिखका दिन होटेलबाट Kyoto को पुरानू Imperial Palace को अवलोकनका लागि ट्याक्सीबाट हामीहरू गएका थियौँ। जापानका सम्राट्को उक्त पुरानू दरबार अत्यन्त विशाल र जस्ताको तस्तै सजाएर राखिएको रहेछ। दरबारको क्षेत्रफल अत्यन्त विशाल भएको हुँदा

धेरै बेरसम्म हामीहरूले घुमेर त्यहाँको अवलोकन गरेका थियौं । हामीहरूले Kyoto शहरमा बसेका बेला त्यहाँको Tea Ceremony पनि हेरेका थियौं । जापानी Green tea तयार गरेर अतिथितहरूको सत्कार गर्ने जापानीहरूको त्यो विशिष्ट संस्कृति रहेछ । त्यसका साथै Kyoto को पुरानू सङ्गीत Koto को श्रवणको साथै हामीहरूले त्यहाँको साँस्कृतिक कार्यक्रम पनि हेरेका थियौं । Kyoto शहर जापानको प्राचीन इतिहासको दृष्टिकोण र साँस्कृतिक सौन्दर्यको दृष्टिकोणले पनि अत्यन्त समृद्ध रहेछ । शहरमा जता गए पनि पुराना आकर्षक भवनहरू र मन्दिरहरू देखिन्थे । त्यहाँका मानिसहरू अत्यन्त सभ्य, अनुशासित र अतिथिसत्कार गर्न अत्यन्त सिपालु रहेछन् ।


Imperial Palace, Kyoto


Tea Ceremony Japan

उपर्युक्त अनुसार Kyoto को दुई दिनको कार्यक्रम समाप्त गरेर हामीहरू १७ तारिखका दिन १:३० बजे Hotel Keihan बाट विदा भएर बुलेट ट्रेनको Hikari No. ९२ चढेर Kyoto बाट Tokyo फर्किएका थियौं । चिरप्रतीक्षीत Kansai क्षेत्रको मेरो भ्रमण कहिल्यै नबिर्सिने सम्झना छोडेर समाप्त भएको थियो ।

नोभेम्बर २० तारिखका दिन हामीहरूलाई हाम्रो पढ्ने कक्षामा पहिलो सत्रमा फिलिपिन्सका Reynaldo ZD Cuaderno ले The National strategy of the Phillippines to reduce crime in 1980's भन्ने कार्यपत्र


निर्देशक सुगीहाराका साथ रात्रिभोजमा लेखक


भान्सामा कामगर्ने कामदारहरूका साथ लेखक, सन् १९८९।११।२०

प्रस्तुत गर्नु भएको थियो । त्यसपछि हाम्रो दोस्रो सत्रमा दक्षिण कोरियाका Jae-in-yoo ले Legal Education and Judical system in the Republic of Korea भन्ने कार्यपत्र प्रस्तुत गर्नुभएको थियो । त्यसै दिन साँझ हामीहरूले सहभागीहरूका तर्फबाट युनाफेको ठूलो बैठकमा रात्रिभोजको आयोजना गरेका थियौँ । उक्त रात्रिभोज हाम्रो तालीमका सहभागीहरूले दिएको बिदाइ भोज थियो । अबेर रातीसम्म त्यो रात्रिभोज चलेको थियो । बिदाइको मनस्थितिमा रहेका सहभागीहरू र युनाफेका परिवारका बीचमा सौहार्दपूर्ण वातावरणमा उक्त रात्रिभोजको सञ्चालन भएको थियो ।

नोभेम्बर २१ तारिखका दिन हाम्रो पढाइ र तालीमको कार्यक्रमसमेत समाप्त भएको हुँदा Training को Evaluation को कार्यक्रम राखिएको थियो । दिनको खानापछि हामीहरूले युनाफेका निर्देशकसँग भिन्नाभिन्नै भेटेर तालीमको सन्दर्भमा अनुभव गरिएका आ-आफ्ना विचारहरू राखेका थियौँ ।

नोभेम्बर २२ तारिखका दिन हाम्रो तालीम र पढाइको कार्यक्रम सकिएको हुँदा म दिनभरि आफूखुशी फुचु शहर घुमेको थिएँ । त्यसै बेला घर आउँदा परिवारजनका लागि लिएर आउने उपहारसमेत मैले किनेको थिएँ । साँझ ४:३० बजे युनाफेका तर्फबाट समापन समारोहको आयोजना गरिएको थियो । उक्त समारोहमा संस्थाका निर्देशक श्रीसुगिहाराले हामी सहभागीहरूलाई तालीमको प्रमाणपत्र प्रदान गर्नुभएको थियो । त्यसै दिन हामीहरूलाई संस्थाका तर्फबाट भव्य बिदाइभोजसमेत दिइएको थियो ।

नोभेम्बर २४ तारिखका दिन बिहान सबेरै उठेर हामीहरूले युनाफेको भान्सामा अन्तिम ब्रेकफाष्ट खाएका थियौँ । त्यहाँबाट प्रस्थान गर्नुभन्दा पहिले मैले काठमाडौंबाट लगेका विभिन्न नेपाली उपहारहरू सम्झनाका रूपमा संस्थाका निर्देशक श्रीसुगिहारा, उपनिर्देशक श्रीहोरिउची, प्राध्यापकहरू र युनाफेका कर्मचारीहरू समेतलाई दिएको थिएँ । त्यस प्रशिक्षण केन्द्रमा बसेको अवधिभर मलाई अत्यन्त स्नेहले नेपाली खानासमेत बनाएर खुवाउने त्यहाँका Head Cook श्रीआसानो र उनका सहयोगीहरूसमेतलाई मैले यथासक्दो उपहार दिएको थिएँ ।

माथि उल्लेख भएको कार्यक्रम अनुसार तीन महिनासम्मको अत्यन्त उपयोगी प्रशिक्षण समाप्त गरेर हामीहरू युनाफेबाट प्रस्थान गर्ने बेलामा त्यहाँका निर्देशक लगायत प्रशिक्षणकेन्द्रका सम्पूर्ण परिवारले हातमा फूल र



Unafei परिवार, अतिथि वक्ता र सहभागी मित्रहरूका साथ बिदाइको समयको तस्वीर, सन् १९८९।१२।२४

आँखामा आँशु लिएर हाम्रो बिदाइ गरेका थिए । त्यसै गरी मलाई त्यहाँ बसुन्जेल घरै बिर्साउने गरेर स्वादिष्ट खाना खुवाउने श्रीआशानो पनि डाकै छोडेर रोएका थिए । त्यो बिदाइको समयको अत्यन्त भावपूर्ण क्षणमा मैले पनि आफूलाई थाम्नसकेको थिइन । मैले अरू धेरै देशहरूमा घुमेर अध्ययन गर्ने र तालीमसमेत लिने काम गरेको छु । तर जापानमा जस्तो अत्यन्त स्नेहपूर्ण बिदाइ र आत्मीयता भने मैले अरू देशमा पाउन सकेको थिइन । हामी सहभागीहरू हृदयभरि सम्झना र आँखाभरि आँशु लिएर दिनको ११:३० बजे युनाफेबाट प्रस्थान गरेर १२:३० बजे Hathagaya मा रहेको Tokyo International Centre मा पुगेका थियौँ । हामीहरूले त्यहाँ एक रात बिताएर आ–आफ्ना देशतिर प्रस्थानगर्नु थियो । त्यही केन्द्रमा शुरुमा हामीहरूलाई बैङ्कको खाता खोलिदिएको थियो भने त्यहींबाट Miss Igiroshi ले हाम्रो बैङ्कको खाता बन्द पनि गरिदिएकी थिइन् । त्यो रात हामीहरूलाई TIC मा भव्य बिदाइभोज दिइएको थियो । त्यसै केन्द्रमा नै शुरुमा हामी विभिन्न देशका सहभागीहरूको भेटघाट भएको थियोभने त्यसै केन्द्रमा फर्किएर हामीहरू सबै एक अर्कासँग बिदा भएका थियौँ । भेटिएपछि छुट्टिनुपर्ने शाश्वत नियम त्यहाँ पनि लागूभएको थियो । त्यही रात्रीभोजमा

म सबै साथीहरूसँग सधैंका लागि बिदा भएको थिएँ ।

नोभेम्बर २५ तारिखका दिन बिहान ६ बजे जापानी सहयोगीहरूका साथ TIC बाट Narita Airport तर्फ मैले प्रस्थान गरेको थिएँ । बिहान ८ बजे हवाइअड्डामा पुगेर त्यहाँ पूरा गर्नुपर्ने कानूनी औपचारिकताहरू सबै पूरा गरेपछि १०:१५ बजे म Narita Airport बाट Hongkong को लागि जापानी एयरलाइन्सको जम्बोजेटमा चढेर उडेको थिएँ । उक्त उडान दिनको समयमा भएको हुँदा जापानदेखि हङ्कङसम्मको लामू उडाइमा जलथल सबैतिरको दृश्य राम्रोसँग माथिबाट मैले हेर्नपाएको थिएँ । जापान जाँदा रातको समयमा ब्याङ्ककबाट उड्नु परेको थियो र अर्को दिन  बिहानमात्रै जापानको नारिता एयरपोर्टमा पुगेको हुँदा मैले त्यस समयमा जहाजबाट तलको दृश्य केही पनि हेर्न पाएको थिइन । त्यस पटक भने मैले धोको पुऱ्याएर नै माथि हवाइजहाजबाट पृथ्वीको सम्पूर्ण दृश्य हेर्ने मौका पाएको थिएँ । धेरै लामू उडानपछि हङ्कङको स्थानीय समय अनुसार १.५५ मा म हङ्कङको हवाइमैदानमा उत्रिएको थिएँ । जापानको टोकियो जस्तो सफा तथा सुन्दर शहरबाट हङ्कङ पुग्दा मैले त्यो हङ्कङ शहर सम्पूर्ण अँध्यारो र फोहोर देखेको थिएँ । हङ्कङको त्यो मेरो पहिलो यात्रा भएको हुँदा मलाई त्यहाँ सबै कुरा अपरिचित नै थिए । त्यस बेला नेपाली सेनाका सम्पर्क अधिकृतका रूपमा त्यहाँ रहेका कर्णेल श्रीकृष्णबहादुर गुरुङ मलाई लिन विमानस्थलमा थिए । उनले मलाई Chungkingmention को होटेलमा लगेर छोडिदिएका थिए ।

नोभेम्बर २६ तारिखका दिन बिहानै नेपाली सेनाका सम्पर्क अधिकृतले मलाई आफ्नू निवासस्थानमा बिहानको खाना खान बोलाएका थिए । त्यस अवसरमा त्यहाँ नेपालका पूर्व गृहसचिव सुन्दरप्रसाद शाह र उहाँकी श्रीमतीसमेत आमन्त्रित गरिनु भएको रहेछ । उहाँहरूसँग केही बेर भलाकुसारी गरेपछि हामीहरूले सँगै खाना खाएका थियौँ । त्यसपछि म उहाँहरूसँग बिदा भएर हङ्कङको प्रसिद्ध Ocean theatere आदि समेतका दर्शनीय स्थानहरूको अवलोकन गरेर बेलुका होटेल फर्किएको थिएँ । बेलुकाको खाना त्यहीँ रहेको नेपाली थकालीको होटेलमा मैले खाएको थिएँ । त्यस दिन बिदाको दिन परेको हुँदा मैले खास केही किनमेल गर्न पाएको थिइन । भोलिपल्ट २७ तारिखका दिन बिहानैदेखि मैले आफूलाई चाहिने र घरमा ल्याउनु पर्ने

आवश्यक सामानहरू किनमेल गरेर अपराह्न होटेलबाट हङ्कङ हवाइमैदानतर्फ ट्याक्सीद्वारा गएको थिएँ । साँझ ६ बजे RNAC को बोइङ्ग जहाजमा चढेर म काठमाडौँतर्फ प्रस्थान गरेको थिएँ । त्यस उडानमा विमानचालक क्याप्टेन रिजाल पर्नु भएको हुँदा उहाँले मलाई ककपिटमै लगेर हवाइजहाजसञ्चालनको सामान्य प्रविधि बताउनु भएको थियो ।



修　了　証　書

バッタライ　殿

あなたは国際協力事業団東京国際研修センターが平成元年 9 月 12 日から平成元年 11 月 7 日まで開催した日本語集中講習を修了したことを証明します。

Certificate

This is to certify that Mr. Sharad Kumar Bhattarai of NEPAL has successfully completed the Intensive Japanese Language Course from SEPTEMBER 12 1989 to NOVEMBER 7 1989 conducted by Tokyo International Centre, Japan International Cooperation Agency.

TEIZO SUGIYAMA
Director
Tokyo International Centre
Japan International Cooperation Agency

Date: NOVEMBER 7, 1989



Certificate

This is to certify that Mr. Sharad Kumar Bhattarai has successfully completed a course of Group Training in the field of Crime Prevention (The Administration of Criminal Justice) - Crime Prevention and Criminal Justice in the Context of Development - at United Nations Asia and Far East Institute for the Prevention of Crime and the Treatment of Offenders (UNAFEI) from August 31, 1989 to November 22, 1989 organized by Japan International Cooperation Agency under the International Cooperation Programme of the Government of Japan.

President
Japan International Cooperation Agency
JAPAN

Date: November 22, 1989



This Is To Certify That

Sharad Kumar Bhattarai

was selected to attend the International Training Course on the Prevention of Crime and the Treatment of Offenders held at this Institute from 4 September, 1989 to 24 November, 1989 and that he has successfully fulfilled all the requirements of the course.

United Nations
and Far East Institute
for
Prevention of Crime
and
reatment of Offenders
Tokyo, Japan.

Director

जापानमा भएको प्रशिक्षणका क्रममा प्राप्त विभिन्न प्रमाणपत्रहरू

त्यसरी जापानको तीन महिने प्रशिक्षण पूरा गरेर २०४६ साल मङ्सिर १२ गते तदनुसार सन् १९८९ नोभेम्बर २७ तारिखका दिन राती १० बजे काठमाडौंको त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थमा म उत्रिएको थिएँ। उक्त तालीममा हामी विभिन्न देशका १७ सहभागीहरू सम्मिलित भएका थियौँ। सहभागीहरूको नामावली निम्न अनुसार छ :– १.कोष्टारिकाबाट श्रीइरिक अल्फ्रेडो चिरिनो सान्चेज, २.फिजीबाट श्रीसदानन्द, ३.भारतबाट श्रीपर्वतानेनी साइ वरप्रसाद, ४.इण्डोनेशियाबाट श्रीहेनरी बिस्मार्क हुताद्जुलु, ५.केनियाबाट श्रीडेभिड किपकोच अराप किमेतो, ६.दक्षिण कोरियाबाट श्रीयु सुङ्गसू,

७.मलेशियाबाट श्रीआर्थर एड्मोण्डस्, ८.नेपालबाट श्रीशरदकुमार भट्टराई, ९.फिलिपिन्सबाट श्रीमती एन्जेलिता बोण्डोक कन्सेप्सियन र १०.श्रीजुलेटो पी रोहास, ११.साउदी अरेबियाबाट श्रीसहमी बिनफोइज, १२.सिङ्गापुरबाट श्रीसेन चेङ्ग कुआङ्ग फ्रान्सिस, १३.सुडानबाट श्रीअजहर खलिल मोहमद, १४.तान्जानियाँबाट श्रीजोहन्सन पाउलो माथियास म्वनिका, १५.थाइल्याण्डबाट श्रीनात्ताचाक पत्तामासिंह ना अयुथाया र १६.श्रीग्रिट्सिन कानोकनार्क, १७.जाम्बियाबाट श्रीविन्टर आर्चिभ न्यामाविता काबविकु ।

त्यसरी जापानमा भएको उक्त तालीम मैले सफलताका साथ सम्पन्न गरेको थिएँ । तालीमका विषयहरू अत्यन्त आधुनिक सिद्धान्तमा आधारित थिए । जापानमा पुगेर मैले साँच्चैको विकसित राष्ट्रको नमुना देखेको थिएँ । त्योभन्दा अघि मैले बेलायतको र थाइल्याण्डको मात्र भ्रमण गरेको थिएँ । एक दशक पछि मैले जापानको भ्रमण गरेको थिएँ र जापानीहरूले गरेको आफ्नू देशको विकास देखेर म अत्यन्त प्रभावित भएको थिएँ । जापानीहरूले गर्ने अतिथिसत्कार, शिष्टाचार र उनीहरूको अनुशासन अत्यन्त अनुकरणीय मैले पाएको थिएँ । जापानले भौतिक विकासका साथसाथै साँस्कृतिक, आर्थिक, सामाजिक, शैक्षिक र चारित्रिक विकास पनि गरेको रहेछ । यातायातका साधनहरूको अत्यन्त सुविधा भएको त्यस देशमा बुलेट ट्रेनको आरोहणको अनुभव मलाई अत्यन्त रोमाञ्चकारी भएको थियो । त्यस ट्रेनमा चढेर यात्रा गर्दा आधुनिक जेट हवाइजहाज चढेर यात्रा गरेको जस्तो अनुभव भएको कुरा मैले माथि नै उल्लेख गरिसकेको छु ।

म जापानबाट फर्किएपछि पनि स्थानीय प्रशासनमहाशाखामा नै बसेर मैले काम गरेको थिएँ । तत्कालीन गृहराज्यमन्त्री श्रीनिरञ्जन थापासँग विगतमा जेजस्तो सम्बन्ध मेरो थियो तापनि त्यस बेलाभने मसँग उहाँको राम्रो सम्बन्ध कायम भइसकेको थियो । उहाँ स्वदेशको भ्रमण गर्दा र विदेशको भ्रमण गर्दा पनि सहसचिव श्रीशिवप्रसाद आचार्यलाई नै साथमा लिएर जाने गर्नुहुन्थ्यो । म जापानबाट फर्किएर आएपछि श्री ५ वीरेन्द्रको पश्चिमाञ्चल क्षेत्रीय भ्रमण शुरुभएको थियो । उक्त सवारीमा सवारीसचिव गृहसचिव श्रीभक्तबहादुर कोइराला हुनु भएको थियो भने सहसचिवमा श्रीरामानन्द बैद्यको साटो सहसचिव श्रीशिवप्रसाद आचार्यलाई खटाइएको

थियो । त्यस बेला गृहमन्त्रालयका अतिरिक्त सचिवहरूमा श्रीरामचन्द्र शर्मा पौडेल र श्रीनारायणप्रसाद राजभण्डारी (चित्तरञ्जन नेपाली) समेत २ जना हुनुहुन्थ्यो । त्यसै बेला २०४६ को प्रजातान्त्रिक आन्दोलनको प्रारम्भ हुन लागेको थियो । त्यसका लागि नेपाली काङ्ग्रेस र वामपन्थीहरूका बीचमा मोर्चा बनिसकेको थियो । वक्तव्य र पत्रपत्रिकाहरूमा समेत आन्दोलनको गर्मी चढिसकेको थियो ।

त्यसरी प्रजातान्त्रिक आन्दोलन चर्किंदै जानेसन्दर्भमा २०४६ साल माघ ५ गते श्रीगणेशमान सिंहको घर चाक्सीबारीमा बहुदलवादीहरूको संयुक्त बैठक बसेको थियो । उक्त बैठकमा भारतका समाजवादी नेता श्रीचन्द्रशेखर लगायतका अरू नेताहरूले पनि भाग लिनुभएको थियो । त्यस बैठकले २०४६ साल फागुन महिनादेखि प्रजातान्त्रिक आन्दोलन शुरु गर्ने भनेर औपचारिकरूपमा नै घोषणा गरेको थियो । त्यस घोषणापछि जनआन्दोलन विभिन्न चरणमा गरेर विभिन्न क्षेत्रबाट बिस्तारै फैलनथालेको थियो । त्यस आन्दोलनलाई निन्दा गर्न र दबाउन तत्कालीन गृहराज्यमन्त्री श्रीनिरञ्जन थापाले विभिन्न वक्तव्यहरू दिनथाल्नु भएको थियो । त्यसरी वक्तव्य दिने क्रममा अत्यन्त कडा लिखित वक्तव्य तयार गर्न मलाई बोलाएर उहाँले अह्राउनुभएको थियो । त्यस बेलाको आन्दोलन विगत वर्षहरूको आन्दोल जस्तो सामान्य नभएर जनसाधारणसमेतमा पुगिसकेको हुँदा आन्दोलनलाई दबाउने भन्दा बहुदलवादी नेताहरूसँग सम्झौता गर्नुपर्ने कुराको सुझाव राज्यमन्त्रीलाई मैले दिएको थिएँ । मैले त्यसरी दूरदर्शी सल्लाह दिंदा उहाँले मलाई बहुदलवादीको समर्थक भनेर आक्षेप पनि लगाउनुभएको थियो ।

२०१७ सालदेखि लिएर २०४६ सालसम्ममा वाग्मतीको पुलमुनिबाट धेरै पानी बगिसकेको अनुमान राज्यमन्त्री श्रीनिरञ्जन थापाले गर्नसक्नुभएको थिएन । त्यति हुँदाहुँदै पनि उहाँले मलाई वक्तव्य लेख्न असाध्य दबाब दिनुभएको थियो । केही नचलेपछि मैले वक्तव्य सामन्यरूपको नरम भाषामा लेखेर उहाँलाई दिएको थिएँ । तर त्यो मेरो लेखाइलाई उहाँले स्वीकार गर्नुभएको थिएन । त्यसपछि विगत वर्षहरूमा पञ्चायतका मन्त्रीहरूले दिएजस्तो अराष्ट्रिय तत्त्व, पञ्चमाङ्गी तत्त्व, विदेशी दलाल, मुट्ठीभरिका अवाञ्छनीय व्यक्तिहरू भन्ने आदि नकारात्मक शब्दहरू राखेर

बहुदलवादीहरूलाई भर्त्सना गरेको वक्तव्य लेख्न मलाई उहाँले अह्राउनु भएको थियो । तर मैले त्यस्तो वक्तव्य लेख्न आफ्नू असमर्थता देखाएपछि उहाँले गृहमन्त्रालयका त्यस बेलाका अतिरिक्त सचिवहरू श्रीनारायणप्रसाद राजभण्डारी र श्रीरामचन्द्र शर्मा पौडेललाई अह्राउनु भएको थियो । राज्यमन्त्री थापाको इच्छा अनुसारकै वक्तव्य तयार गरेर उहाँहरूले राज्यमन्त्रीलाई पेश गरेपछि सो बक्तव्य देखाउन मलाई उहाँले बोलाउनुभएको थियो । उक्त वक्तव्य पढेपछि त्यस वक्तव्यले समस्याको समाधान नभएर आगोमा घिउ थपेजस्तो हुन्छ भनेर प्रष्टै आफ्नो दृष्टिकोण मैले व्यक्त गरेको थिएँ । उहाँले मेरो कुरालाई स्वीकार नगरेर सरकारी सञ्चार माध्यमहरूबाट उक्त वक्तव्य प्रचारप्रसार गराउनुभएको थियो । उहाँको अत्यन्त आक्रोशपूर्ण वक्तव्य प्रसारण भएपछि आन्दोलनले झन् उग्ररूप लिएको थियो ।

फलस्वरूप २०४६ साल फागुन ७ गते प्रजातन्त्र दिवसका दिन त्यसको उग्ररूप देखा परेको थियो । विगत वर्षहरूजस्तै त्यस वर्ष पनि काठमाडौंको टुँडिखेलको शाही नेपाली सैनिकमञ्चमा आयोजना गरिएको समारोहमा भाग लिन परम्परा अनुसार तत्कालीन प्रधानमन्त्री श्रीमरीचमान सिंहको नेतृत्वमा निस्किएको जुलुसमा म पनि सम्मिलित थिएँ । त्यस जुलुसमा सबै राष्ट्रसेवकहरूले अनिवार्यरूपमा उपस्थित हुनुपर्ने परिपत्र गृहमन्त्रालयले गरेको थियो । जुलुसले नगरको परिक्रमा गरेर टुँडिखेलमा पुगेपछि राष्ट्रसेवक हामीहरू सबैले हाजिरी पुस्तिकामा उपस्थिति जनाउन हस्ताक्षर गर्नुपर्दथ्यो । गृहमन्त्रालयको परिपत्र अनुसार हामी सरकारी कर्मचारीहरू प्रधानमन्त्रीले नेतृत्व गरेको जुलुसमा सामेल हुन दिनको १२ बजे त्रिपुरेश्वर स्थित स्वर्गीय श्री ५ त्रिभुवनको सालिक भएको स्थानमा पुगेका थियौं । त्यहाँबाट १२ बजे नगर परिक्रमा गर्न प्रधानमन्त्रीको पछि लागेर नयाँ सडकको मूलढोकामा पुग्दा जुलुसमाथि इँटा र ढुङ्गाहरू बर्सिरहेका र जुलुसमा सामेल भएका मानिसहरू यत्रतत्र भागेका हामीहरूले देखेका थियौं । हामीहरूभन्दा अगाडि गएका प्रधानमन्त्रीसमेतका मन्त्री र अरू उच्च ओहदाका पदाधिकारीहरू पनि आन्दोलनकारीहरूले बर्साएका इँटा र ढुङ्गाका डरले धेरै अगाडि दौडिइसकेका रहेछन् । हामीहरू धेरै पछाडि परेका थियौं । हामी केहीपछि

जाँदा नयाँसडकको मूल ढोकादेखि जुद्ध शम्शेरको सालिकसम्म आन्दोलनकारीहरूले हानेका ढुङ्गा र इँटा बग्रेल्तै देखिन्थे। आन्दोलनकारीहरूलाई तितरबितर गर्न प्रहरीले पड्काएको अश्रुग्यासको धूवाँ सर्वत्र व्याप्त थियो। त्यसरी जुलुसको क्रम टुटिसकेकोले हामीहरू अगाडि जाने अथवा पछाडि सर्ने दोधारमा परेका थियौँ। उक्त जुलुसमा तत्कालीन रक्षासचिव श्रीमुकुन्दशम्शेर थापा पनि हुनुहुन्थ्यो। के गर्ने भनेर हामीहरू छक परेर एक छिन रोकिएका थियौँ।

त्यसरी रोकिनु राम्रो नहुने देखेर प्रधानमन्त्री गएकै बाटो हामीहरू पनि गएका थियौँ। हामीहरू जाँदा नयाँसडक, जुद्धशम्शेरको सालिक वरिपरि, इन्द्रचोक र सम्पूर्ण शहरभरि नै इँटाका टुक्राहरू र अश्रुग्याँस व्याप्त भएको पाएका थियौँ। चारैतर्फ मानिसहरू यताउता दौडिरहेका थिए र थुप्रै लाठीधारी प्रहरीहरू हामी हिँडेको बाटोभरि छ्याप्छ्याप्ती थिए। युद्धमैदानको बीचबाट हिँडेझैँ गरेर हामीहरू छिटो छिटो दौडिएर केलटोल, असन र भोटाहिटी हुँदै रत्नपार्क अगाडि पुगेका थियौँ। त्यहाँसम्म पुग्दा पनि हामीहरूमाथि गोली अथवा ढुङ्गा के बर्सिने हो टुङ्गो थिएन। अत्यन्त भयावह वातावरणका बीचमा रत्नपार्कबाट बिजुली अड्डा हुँदै पूर्वतिरको ढोकाबाट हामीहरू शाही नेपाली सैनिक मञ्चभित्र प्रवेश गरेका थियौँ। हामीहरू मञ्चभित्र छिर्दा पनि बिजुली अड्डाको वारपारै जम्मा भएका आन्दोलनकारीहरूले पञ्चायती व्यवस्था विरुद्धमा नारा लगाइरहेका थिए। वातावरण अत्यन्त भयावह भएको हुँदा सबैको अनुहार मलिन देखिन्थ्यो।

उपर्युक्त अनुसारको डरलाग्दो वातावरणमा पनि समारोहका तत्कालीन अध्यक्ष गृहराज्यमन्त्री श्रीनिरञ्जन थापाले अत्यन्त आपत्तिजनक तथा पूर्वाग्रहपीडित लिखित भाषण लगलग कामेको र त्रसित आवाजमा पढेर सुनएका थिए। उक्त समारोह अत्यन्त उत्साहहीन वातावरणमा हतारहतार समाप्त भएको थियो।

फागुन ७ गतेको उक्त घटनापछि नेपालको राजनीतिक वातावरणमा नाटकीयरूपले अत्यन्त चाँडोचाँडो परिवर्तन आउन थालेको थियो। श्री ५ वीरेन्द्र क्षेत्रीय भ्रमणको सन्दर्भमा पोखरामा नै भएकाले फागुन ७ गते काठमाडौंमा भएको उक्त समारोहमा राजपरिवारका सदस्यहरूको उपस्थिति

थिएन । फागुन ८ गते म गृहमन्त्रालयमा पुग्दा मन्त्रालयको वातावरणमा ठूलो परिवर्तन आएको मैले पाएको थिएँ । गृहराज्यमन्त्री थापाले मलाई बोलाएर अघिल्लो दिनको घटनाको सन्दर्भमा प्रतिक्रिया लिनुभएको थियो । मैले बहुदलवादीहरूका विरुद्ध कडा भाषण नगर्न दिएको सुझावलाई त्यस बेला उहाँले सम्झिनुभएको थियो । त्यसै कारण मैले भनेका कुराहरूमा त्यस दिनदेखि उहाँले विश्वास गर्नथाल्नुभएको थियो । त्यसपछि उहाँले अत्यन्त सतर्क भएर भविष्यमा लिइने नीतिका सम्बन्धमा मसँग बोक्रे सल्लाह पनि लिनथाल्नुभएको थियो । भित्रीरूपमा भने उहाँका मण्डले प्रवृत्तिका व्यक्तिहरू नै सल्लाहकारहरू थिए । त्यस प्रकार प्रजातान्त्रिक आन्दोलन क्रमशः जिल्लाहरूमासमेत व्यापकरूपमा फैलिँदैगएको थियो ।

मैले जापानमै छँदा The Prevention of Crime and the Treatment of Offenders भन्ने विषयमा नेपाल र जापानका बीचमा JICA को सहयोगमा Joint Seminar गर्ने भन्ने तय गरेर आएको थिएँ । सो कुरा सरकारका तर्फबाट म जापानबाट नेपाल फर्किएर आएपछि मैले निर्णय गराएको थिएँ । नेपालको तर्फबाट सो कामको जिम्मा गृहमन्त्रालयको सहसचिवको नाताले मैले पाएको थिएँ र जापानको तर्फबाट सो कामको जिम्मा युनाफेका तत्कालीन Deputy Director Kunihiro Horiuchi ले पाउनु भएको थियो । निर्णय भए अनुसार उक्त सेमिनार २०४६ साल फागुन ६ गते देखि १० गते तदनुसार सन् १९९० मार्च १९ तारिखदेखि २३ तारिखसम्म काठमाडौंको सोल्टी होटेलमा सञ्चालन भएको थियो । उक्त सेमिनारमा जापानको तर्फबाट भाग लिन युनाफेका Deputy Director Mr. Director Kunihiro Horiuchi को नेतृत्वमा एक दल नेपाल आएको थियो भने नेपालका तर्फबाट सर्वोच्च अदालतका न्यायाधीशहरू, क्षेत्रीय अदालतका न्यायाधीशहरू, जिल्ला अदालतका न्यायाधीशहरू, सरकारी वकिलहरू, प्रहरीका उच्च अधिकारीहरू, गृहमन्त्रालय र अन्तर्गतका उच्चस्तरका अधिकृतहरू र कारागारका अधिकारीहरूसमेतको सहभागिता थियो । उक्त सेमिनारमा सर्वोच्च अदालतका प्रधान न्यायाधीश, महान्यायाधिवक्ता, कानून तथा न्याय मन्त्री, गृहराज्यमन्त्री, अन्य मन्त्रीहरूका साथै अन्य उच्चस्तरीय गण्यमान्य व्यक्तिहरूले पनि भाग लिनुभएको थियो । उक्त सेमिनार अत्यन्त उत्साहजनक

वातावरणमा ४ दिनसम्म चलेको थियो । उक्त सेमिनारमा जापानबाट भाग लिन जापानका त्यस बेलाका क्षेत्रीय महान्यायाधिवक्ताको रूपमा काम गर्ने



गृ.रा.म. थापा भाषण गर्दै, उपनिर्देशक होरिउची भाषण गर्दै, गृ.सचिव कोइराला लेखकलाई प्रमाणपत्र दिँदै

Mr. Minoru Shikita का साथै अरू सहभागीहरू पनि नेपाल आएका थिए । मलाई त्यो सेमिनार सञ्चालन गर्न सहयोग गर्नेहरूमा गृहमन्त्रालयका उपसचिव श्रीमुराररिराज शर्मा  र अरू अधिकृतहरू पनि थिए । मुख्यरूपमा मुरारिराज शर्माले Joint Seminar सञ्चालन गर्न सचिवालयको प्रमुख भएर सफलतापूर्वक सञ्चालन गरिदिनुभएको थियो । नेपाली र अङ्ग्रेजी दुवै


This is to certify that

Mr. Sharad Bhattarai

attended the Joint Seminar on the Prevention of Crime and the Treatment of Offenders organized and conducted jointly by the Ministry of Home of His Majesty's Government of Nepal and the United Nations Asia and Far East Institute for the Prevention of Crime and the Treatment of Offenders (UNAFEI), under the Auspices of the Japan International Cooperation Agency (JICA) in Nepal from 19th to 23rd March, 1990.

Narayan Prasad Rajbhandari
Additional Secretary
Ministry of Home
His Majesty's
Government of Nepal

K. Horiuchi
Kunihiro Horiuchi
Deputy Director
UNAFEI
Japan

Hidekazu Kumano
Resident Representative
JICA Nepal Office

लेखक, मुरारिराज, नारायणप्रसाद र होरिउची, शिकिताका साथ कुरा गर्दै लेखक र लेखकले पाएको प्रमाणपत्र

भाषामा कुशलतापूर्वक कलम चल्ने हुँदा उहाँले नेपालको तर्फबाट सेमिनारमा प्रस्तुत गरिने सबै कार्यपत्रहरू तयार गर्नुभएको थियो । म त्यस सहयोगका लागि अहिलेसम्म पनि उहाँलाई सम्झिरहन्छु । त्यस बेला नेपालमा आन्दोलन चलिरहेको हुँदा हामीहरूलाई काम गर्न त्यति सजिलो भएको थिएन ।

रूपन्देही जिल्लामा २०३० सालतिर कर्तव्यमा पारेर मारिएका तत्कालीन जिल्लापञ्चायतका सभापति यादवको मृत्युका सम्बन्धमा छानविन गरी पोखरा सवारी क्याम्पमा प्रतिवेदन जाहेर गर्न भनी त्यसै बेलामा मलाई छानविन टोलीको प्रमुख बनाएर गृहमन्त्रालयले भैरहवा खटाएको थियो । म पनि आफ्ना सहयोगीका साथ गाडीद्वारा भैरहवा पुगेको थिएँ । त्यस

बेला लुम्बिनी अञ्चलको एस्.पी.मा श्रीरामकाजी बान्तवा र जिल्लास्तरीय डी.एस्.पी.मा श्रीराजेन्द्रबहादुर सिंह थिए । २०३० सालतिर श्रीरामकाजी बान्तवाले रूपन्देही जिल्लाको प्रहरीप्रमुख भएर काम गरेको बेलामा सभापति यादवको मृत्यु भएको रहेछ । त्यस बेला प्रहरीले राम्रो छानविन नगरेर उक्त मुद्दाको मिसिल त्यसै थन्क्याएर राखेको हुँदा श्रीरामकाजी बान्तवाका विरुद्धमा सवारीशिविर पोखरामा उजुर परेको रहेछ ।

भैरहवा पुगेर सबैसँग भेटघाट गरेर पुरानो मिसिल मैले खोज्न लगाएको थिएँ । मुद्दाको मिसिल भेटिएपछि छानविनको काम समाप्त गरेर म पूर्वपश्चिम राजमार्ग हुँदै चितवनको भरतपुर पुगेको थिएँ । जनआन्दोलनको कारण त्यहाँ पनि शान्तिसुरक्षासम्बन्धी समस्या उत्पन्न भएको थियो । प्रहरीले चलाएको गोली लागेर मानिसको मृत्यु भएको हुँदा त्यसको छानविन गर्न म जिल्ला प्रशासन कार्यालय भरतपुरमा गएको थिएँ । आन्दोलन चर्काएको अभियोगमा तत्कालीन राष्ट्रियपञ्चायतका सदस्यहरू श्रीजागृतप्रसाद भेटवाल र श्रीभीमबहादुर श्रेष्ठसमेतलाई स्थानीय प्रशासनले थुनामा राखेको थियो । म चितवन पुगेको दिन भरतपुरमा चारैतिर जुलुस निस्किरहेको थियो । त्यहाँ पुगेर प्रशासन र प्रहरीका प्रमुखहरूलाई भेटेर माननीयहरूलाई थुन्नु पर्ने कारणको सम्बन्धमा मैले जानकारी लिएको थिएँ । सम्बन्धित अधिकारीहरूसँग जो बुझ्नु पर्ने तथ्य बुझिसकेपछि थुनामा परेका माननीयहरूलाई मैले भेटेको थिएँ । त्यो रात भरतपुरमा नै बसेर भोलिपल्टै म काठमाडौं फर्किएको थिएँ ।

त्यसपछि क्रमशः देशको स्थिति झन् झन् गम्भीर हुँदै गएको थियो । अधिराज्यका केही जिल्लाहरूमा प्रजातान्त्रिक आन्दोलनले चर्को रूप लिँदैगएको थियो भने काठमाडौं उपत्यकाका तीनै जिल्लाहरूमा आन्दोलनको स्वरूप अत्यन्त चुलीमा पुगिसकेको थियो । आन्दोलनकारीहरूलाई पक्राउ गर्ने काममा प्रशासनले तीव्रता ल्याएको थियो । पक्राउ परेका आन्दोलनकारीहरूलाई महेन्द्रप्रहरीक्लब र ट्राफिक प्रहरीकार्यालय बग्गीखानामासमेत थुनामा राखिएको थियो । दिनमा जुलुस र रातमा पनि राँकेजुलुस नियमितरूपमा निस्कन थालेपछि शान्तिसुरक्षाको स्थिति अत्यन्त गम्भीर हुँदै गएको थियो । त्यसै कुरालाई महसूस गरेर आन्दोलनलाई रोक्न तत्कालीन प्रधानमन्त्री श्रीमरीचमान

सिंहले विभिन्न मन्त्रालयका मन्त्रीहरू, सचिवहरू र शान्तिसुरक्षासँग सम्बन्धित पदाधिकारीहरूसमेत सम्मिलित भएको प्रतिकारसमिति गठन गर्नुभएको थियो। प्रतिकारसमितिले गरेको निर्णय कार्यान्वयन गर्न र गोप्य सूचनाहरू सङ्कलनसमेत गरी प्रधानमन्त्री श्रीमरीचमान सिंहलाई जानकारी गराउन श्रीमरीचमान सिंहको प्रत्यक्ष मातहतमा रहने गरी एउटा शक्तिशाली कार्यदल गठन गरिएको थियो। त्यस कार्यदलको प्रमुखमा गृहमन्त्रालयका तत्कालीन अतिरिक्त सचिव श्रीरामचन्द्र शर्मा पौडेल हुनुहुन्थ्यो भने गृहमन्त्रालयका तत्कालीन सहसचिव श्रीडम्मरुवल्लभ भट्टराई उहाँका सहायकमा खटिएका थिए। सो कार्यदलका मातहतमा प्रथम र द्वितीय श्रेणीका धेरै अधिकृतहरू खटिएका थिए। काठमाडौं उपत्यकाका तीनै जिल्लाहरूमा घुमेर शान्तिसुरक्षासम्बन्धी यथार्थ स्थितिको दैनिक प्रतिवेदन उक्त टोलीले कार्यदलका संयोजक मार्फत् प्रधानमन्त्रीलाई पेश गर्नु पर्ने व्यवस्था गरिएको थियो। त्यसरी घुम्ने अधिकृतहरूलाई यातायातका साधनका साथै भइपरीआउने रकमसमेतको व्यवस्था गरिएको थियो। उनीहरूले अत्यन्त सक्रियताका साथ काम गरेका थिए। जनआन्दोलनलाई दबाउने काममा प्रशासन र प्रहरी लागेको थियो। जति सुकै गरे तापनि आन्दोलन झन् उग्ररूपमा चर्कँदै गएर थाम्नै नसक्ने अवस्थामा पुगेको थियो। देशभरि नै शान्तिसुरक्षाको स्थिति अत्यन्त गम्भीर भइसक्ता पनि राजहठ देखाएर राजा वीरेन्द्र पोखरामै बसेर रमिता हेरिरहेका थिए। त्यसै बीचमा देशको स्थिति अत्यन्त गम्भीर बन्दै गएपछि फागुनको अन्तिम हप्तामा राजा वीरेन्द्र पोखराबाट काठमाडौं फर्किएका थिए।

चैत्र महिना लागेपछि ललितपुर नगरलाई आन्दोलनकारीहरूले स्वतन्त्र क्षेत्र घोषणा गरेर स्थितिलाई झन् चर्काएका थिए। स्थानीय प्रशासनले स्थितिलाई थाम्न सक्ने अवस्था थिएन। आन्दोलनले चर्को रूप लिँदै गएपछि ललितपुर जिल्लाको नगरपालिकाभित्र आन्दोलनकारीहरूमाथि प्रहरीले गोली चलाएको थियो। मानिसहरूको मृत्यु भएपछि ललितपुर जिल्ला एक किसिमले युद्धक्षेत्रजस्तो भएको थियो। ललितपुर जिल्लाको नगरक्षेत्रभित्र यातायात र सञ्चारसमेत सबै बन्द भएपछि त्यहाँ के भइरहेको थियो, सिंहदरबारलाई थाहा हुन सकेको थिएन।

त्यसरी अत्यन्त अन्योलको स्थिति ललितपुरको नगरक्षेत्रभित्र उत्पन्न

भएपछि गृहराज्यमन्त्री र गृहसचिवसमेतका शान्तिसुरक्षा हेर्ने उच्चस्तरका अधिकृतहरू हेलिकोप्टरद्वारा स्थितिको अध्ययन गर्न ललितपुर जिल्लाको नगरक्षेत्रमाथिको आकाशमा उडेकोमा सरकारले नगरपालिकाभित्र बम खसाल्यो भनेर आन्दोलनकारीहरूले हल्ला मच्चाएका थिए। वास्तवमा त्यो निरीक्षणमात्र थियो। स्थलमार्गबाट ललितपुरको नगरक्षेत्रभित्र प्रवेश गर्न नसकेपछि हेलिकोप्टरबाट नगरक्षेत्रको निरीक्षण गर्ने कार्यक्रम गृहमन्त्रालयले बनाएको थियो।

त्यसपछि गृहमन्त्रालयमा काम गर्ने हामीहरूलाई गाडीमा चढेर आवतजावत गर्नसमेत अत्यन्त खतरा उत्पन्न भएको थियो। आन्दोलनकारीहरूले रातमा बिजुली बत्ती निभाउन थालेपछि परिस्थितिले झन् गम्भीररूप लिएको थियो। आन्दोलनकारीहरूलाई थुन्ने काम यथावत् चलेकै थियो। थुनुवा राख्ने स्थानको अभाव भएको हुँदा तिनीहरूलाई छानविन गरेर छोड्न गृहमन्त्रालयले मेरो संयोजकत्वमा एक छानविन टोली गठन गरेको थियो। उक्त टोलीमा उपसचिव श्रीशम्भु खनाल र काठमाडौं जिल्लाका तत्कालीन प्रमुखजिल्ला अधिकारी श्रीकेशवराज राजभण्डारी पनि सम्मिलित थिए। उक्त टोलीले थुनुवाहरूको अन्तर्वार्ता लिएर उनीहरूको कागजसमेत गराएर धेरै जसोलाई थुनाबाट छोडिदिएको थियो। श्रीजगदीश्वर के.सी. र श्रीपुष्कर ओझा जस्ता केही आन्दोलनकारी युवकहरूले मात्र कागज गरेर छुट्न नमानेकाले तिनीहरूलाई कारागार चलान गरिएको थियो।

त्यसरी जनआन्दोलन बिस्तारै चर्किंदै गएपछि घरबाट मन्त्रालय आउन र मन्त्रालयबाट घर जानसमेत हामीहरूलाई अत्यन्त मुश्किल परेको थियो। मयलपोससुरुवाल लगाएर आउँदा जाँदा जनआन्दोलनकारीहरूले चिन्ने डर भएको हुँदा हामीहरू मयलपोससुरुवाल मन्त्रालयमै राखेर सामान्य लुगा लगाएर आउने जाने गर्दथ्यौँ। त्यस समयमा मयलपोससुरुवाल, कोट र टोपी लगाएर हिंड्ने मानिसहरूमाथि मण्डले भनेर आन्दोलनकारीहरू जाइलाग्दथे। सडकमा सरकारी गाडी पनि हिंडाउन नहुने भएको थियो। सेता प्लेट भएका गाडीहरू देखेमा आन्दोलनकारीहरूले तोडफोड र आगोसमेत लगाइदिने गर्दथे। शान्तिसुरक्षाको स्थिति अत्यन्त कमजोर हुँदै गएपछि तत्कालीन गृहराज्यमन्त्री श्रीनिरञ्जन थापा सरकारी गाडीमा मन्त्रालय आवतजावत गर्न नसकेर

प्रहरीको गाडीमा आवतजावत गर्नुहुन्थ्यो। गृहमन्त्रालयमा आउँदा जाँदा पनि उहाँ मूल बाटोबाट नहिँडेर भित्री चोर बाटोबाट आउने जाने गर्नुहुन्थ्यो।

त्यसरी आन्दोलनले उग्ररूप लिइरहेकै बेला एशिया वाच भन्ने अन्तर्राष्ट्रिय संस्थाबाट एउटी महिला नेपालमा चलेको जनआन्दोलनको स्थिति, शान्तिसुरक्षा र मानव अधिकारको अवस्थासमेत बुझ्न काठमाडौं आएकी थिइन्। उनले तत्कालीन गृहराज्यमन्त्रीलाई भेट्न खोजेकी हुँदा उहाँ डराउँदै डराउँदै चोर बाटोबाट छिरेर गृहमन्त्रालयमा आउनु भएपछि उहाँले मलाई गृहमन्त्रालयमा बोलाउनुभएको थियो। राज्यमन्त्री थापा जनआन्दोलनको कारण सातो हराएर केही पनि बोल्न नसक्ने अवस्थामा पुग्नुभएको थियो। त्यस बेलाको देशको यथार्थ स्थिति मैले ती महिलालाई सम्झाएको थिएँ र उनलाई अन्नपूर्णा होटेलसम्म सुरक्षित पुऱ्याएको पनि थिएँ।

गृहमन्त्रालयको स्थानीयप्रशासन महाशाखा हेरेको भए तापनि जनआन्दोलनका समयमा अधिराज्यभरिको शान्तिसुरक्षाको स्थितिको सुपरीवेक्षण, तथ्याङ्कसङ्कलन, अधिराज्यभरिका अञ्चलाधीशहरू र प्रमुख जिल्ला अधिकारीहरूसमेतसँग दैनिकरूपमा सम्पर्क राखेर त्यसको जानकारी गृहसचिवलाई दिनुपर्ने उत्तरदायित्वसमेत मैले पाएको थिएँ। स्थिति झन् उग्र हुँदै गएपछि तत्कालीन गृहराज्यमन्त्री थापा गृहमन्त्रालयमा आउन छोडिसक्नु भएको थियो। शान्तिसुरक्षाको काममा सहसचिव श्रीरामानन्द वैद्य र श्रीशिवप्रसाद आचार्यहरू खटिनुभएको थियो। उनीहरूका अतिरिक्त त्यस बेला मलाई पनि शान्तिसुरक्षाको काम हेर्न खटाइएको थियो। काठमाडौं उपत्यका बाहिरका जिल्लाहरूमा पनि जनआन्दोलन चर्कँदै गएर शान्तिसुरक्षाको अवस्था सबैतिर बिग्रिसकेको थियो।

चैत्र महिनाको तेस्रो हप्तादेखि काठमाडौं उपत्यकाको शान्तिसुरक्षाको स्थिति सम्हाल्नै नसक्ने गरेर लथालिङ्ग भएको थियो। दिनदिनै आन्दोलनकारीहरूमाथि प्रहरीले गोली र अश्रुग्याँससमेत हान्ने गर्दथ्यो। हताहत हुने व्यक्तिहरूको सङ्ख्या बढ्दैगएको थियो। जनआन्दोलनले तल्लो स्तरका जनताहरूसमेतलाई छोइसकेको हुँदा स्थिति नियन्त्रणभन्दा बाहिर गइसकेको थियो। दिनमा आन्दोलनकारीहरूका ठूलाठूला जुलुसहरू निस्कने र रातपरेपछि घरघरै बत्ती निभाउँदै हिंड्ने गरेको हुँदा सम्पूर्ण नगरवासीहरू

त्रस्त भइसकेका थिए । राती बत्ती ननिभाएमा आन्दोलनकारीहरूले घरमा ढुङ्गा वर्षाएर तोडफोड नै गरिदिन थालेका थिए । हामीहरू घरमा बत्ती निभाएर अन्धकारमा बस्नेगरेका थियौँ ।

त्यसरी चैत्र महिनाको २० गतेदेखि उपत्यका भित्रका तीनै जिल्लाहरूमा घरघरैबाट मानिसहरू निस्किएर जुलुसमा सामेल हुन थालेका थिए । त्यसरी शहरका सम्पूर्ण बाटाहरू ढाकेर उत्तेजित जुलुस दरबारतर्फ बढ्न थालेपछि त्यस भीडलाई तितरबितर पार्न प्रहरीले गोली चलाउन बाध्य हुनुपरेको थियो । त्यसरी गोली चलाउँदा केही अन्दोलनकारीहरू हताहतसमेत भएका थिए । बाटाहरूमा गाडीहरूको आवतजावत बन्द भएको थियो । राज्यमन्त्री थापाले गृहमन्त्रालय जान छोडिसकेका हुँदा उहाँले एक दिन मलाई आफ्ना निवासमा बोलाएर अब कसरी शान्तिसुरक्षा कायम गर्ने भनेर आत्तिँदै सोध्नुभएको थियो । घरैमा लुकेर बसिरहे तापनि उहाँलाई टेलिफोनबाटै आन्दोलनकारीहरूले घरमै आएर उनको हत्या गर्ने धम्की दिएको कुरा मलाई उहाँले सुनाउनुभएको थियो । उहाँ असाध्य आत्तिएको देखेपछि कसैले केही गर्दैन, डरमात्र देखाएको हो, शान्त भएर बस्नुहोस् भनेर मैले उहाँलाई सम्झाएको थिएँ ।

चैत्र २४ गते गृहमन्त्रालयबाट ५ बजेपछि म घर जान सिंहदरबार पछाडिको चोरबाटोबाट पैदलै हिंडेर डिल्लीबजारको श्रीशरच्चन्द्र शाहको घरनिरको बाटोमा पुगेको थिएँ । म त्यहाँ पुग्दा श्रीशरच्चन्द्र शाहको घरलाई घेरेर आन्दोलनकारीहरूले तोडफोड गर्न लागेका थिए । म हतार हतार त्यहाँबाट मैतीदेवीमन्दिरहुँदै भित्री बाटोबाट धोबीखोला तरेर लुक्तै लुक्तै घर पुगेको थिएँ । घरमा पुगेर छानामा चढेर हेर्दा श्रीशरच्चन्द्र शाहका घरमा आन्दोलनकारीहरूले आगो लगाइसकेका रहेछन् । घरमा आगो सल्किएर धूवाँ निस्किइरहेको मैले देखेको थिएँ ।

त्यसरी आन्दोलनले उग्ररूप लिएर थाम्नै नसक्ने भएपछि त्यसै रात तत्कालीन प्रधानमन्त्री श्रीमरीचमान सिंहलाई बर्खास्त गरेर श्रीलोकेन्द्रबहादुर चन्दलाई नयाँ प्रधानमन्त्रीमा राजाले नियुक्ति गरेका थिए । गृहमन्त्रीमा श्रीनयनबहादुर स्वाँर नियुक्त भएर मन्त्रालयमा हाजिर हुनुभएको थियो । नयाँ मन्त्रीमण्डल गठन गरे तापनि २०४६ साल चैत्र २५ गतेदेखि

जनआन्दोलनले झन् उग्ररूप लिएको थियो। नयाँ नियुक्त प्रधानमन्त्री श्रीलोकेन्द्रबहादुर चन्दले स्थितिलाई सम्हाल्न जति सुकै प्रयास गर्नु भएको भए तापनि उहाँ सफल हुनसक्नुभएको थिएन।

चैत्र २६ गते बिहानैदेखि म मन्त्रालयमा काम गर्न पुगेको थिएँ। गृहसचिव श्रीभक्तबहादुर कोइरालाको कार्यकक्षमा हाम्रो आपत्कालीन बैठक बसेर अब के गर्ने भन्ने विषयमा छलफल भएको थियो। जिल्लाहरूको स्थिति तुरुन्तै बुझ्ने भन्ने भएपछि त्यस दिन पनि मैले अधिराज्यभरिका सुरक्षा अधिकारीहरूसँग टेलिफोन गरेर कुरा बुझ्दा चैत्र २७ गते धेरै जसो जिल्लाहरूमा तत्कालीन पञ्चायती संविधान डढाउनाका साथै जिल्ला प्रशासन–कार्यालयहरू र अञ्चलाधीश कार्यालयहरूसमेत डढाउने हल्ला चलेको कुरा मलाई सुनाएका थिए। त्यस दिन काठमाडौं उपत्यकाभित्र सबैभन्दा ठूलो जुलुस निस्किएर उपद्रो मच्चाएको थियो। सडकका बारहरू सबै भाँचिएका थिए। राजदरबार र सिंहदरबारतिर बढ्न लागेको अनियन्त्रित भीडलाई रोक्न प्रहरीले अन्धाधुन्द गोली प्रहार गर्दा केही आन्दोलनकारीहरू हताहत भएका थिए। राजदरबार अगाडि रहेको महेन्द्रको सालिक तोडफोड गर्न खोज्ने आन्दोलनकारीहरूमाथि पनि प्रहरीले गोली चलाएको थियो। त्यहाँ पनि आन्दोलनकारीहरू मारिएका थिए।

त्यसरी शान्तिसुरक्षाको स्थिति अत्यन्त भयावह हुँदै गएपछि तत्कालीन गृहसचिवले आपतकालीन बैठक बोलाउनुभएको थियो। मैले उपत्यकाभन्दा बाहिर जिल्लाहरूको वस्तुस्थिति र काठमाडौं उपत्यकाको वस्तुस्थितिसमेत यथार्थरूपमा बैठकमा प्रस्तुत गरेको थिएँ। चैत्र २६ गते रातीसम्ममा बहुदलका नेताहरूलाई नजरबन्दबाट बाहिर निकालेर संवाद नथालिएमा चैत्र २७ गते अधिराज्यभरिका अञ्चलाधीश कार्यालयहरू, जिल्लाप्रशासन कार्यालयहरू र अरू सरकारी कार्यालयहरू पनि तत्कालीन पञ्चायती संविधानसँगै डढ्ने भएको कुरा मैले प्रष्टैसँग भनेको थिएँ। सो कुरा दरबारमा राजालाई तुरुन्तै जाहेर गर्न पनि मैले गृहसचिव श्रीभक्तबहादुर कोइरालालाई सल्लाह दिएको थिएँ। श्रीभक्तबहादुर कोइराला बाहिर हेर्दा बहादुर जस्ता देखिए तापनि भित्रीरूपमा भने अत्यन्त काँतर व्यक्ति भएका हुँदा उहाँले सो कुरा दरबारमा राजालाई जाहेर गर्ने हिम्मत गर्नसक्नुभएको थिएन। बरु उल्टै मलाई नै जाहेर

गर्न अह्राउनु भएको थियो। मैले मेरो स्तरबाट दरबारमा सोझै जाहेर गर्नमिल्दैनथ्यो। त्यसै कारण दरबारमा जाहेर गर्न उपयुक्त व्यक्ति रक्षामन्त्रालयका तत्कालीन सचिव श्रीमुकुन्द शम्शेर थापालाई मैले अनुरोध गरेको थिएँ। मेरा कुरा सुनेपछि रक्षासचिव थापाले तुरुन्तै दरबारमा राजालाई जाहेर गर्ने वचन मलाई दिनु भएको थियो।

त्यसरी दिनभरि भयङ्कर तनावमा रहेर म ५ बजेपछि घर आएको थिएँ। बेलुका ६ बजे रक्षासचिव श्रीमुकुन्द शम्शेर थापाले दरबारमा मैले भनेका सबै कुरा जाहेर गरिसक्नु भएको र तदनुसार बहुदलवादी नेताहरूसँग राती नै राजाले भेटेर संवाद गर्ने कुराको सङ्केत मलाई टेलिफोनबाट दिनुभएको थियो। त्यसका साथै नेपाल टेलिभिजन खोलेर बसिरहन पनि मलाई उहाँले सल्लाह दिनु भएको थियो। त्यसरी तुरुन्तै बहुदलवादी नेताहरूसँग राजाले कुरा गरेर जनआन्दोलनलाई रोक्न उनी सफल हुनेछन् भन्ने कुरामा मलाई कत्ति पनि विश्वास लागेको थिएन। तैपनि टेलिभिजन खोलेर म बसेको थिएँ। नभन्दै रक्षासचिव श्रीमुकुन्द शम्शेर थापाले भने अनुसारको राजा र बहुदलवादी नेताहरूका बीचमा संवाद हुने कुराको सूचना नेपाल टेलिभिजनले राती ८ बजेदेखि प्रसारण शुरु गरेको थियो। प्रतीक्षा गर्दागर्दै राती अबेर राजा र बहुदलवादीहरूका बीचमा सम्झौतासम्पन्न भएको थियो। सम्झौता अनुसार दलहरूमाथिको प्रतिबन्ध फुकुवा हुनाका साथै तत्कालीन पञ्चायती संविधानका धेरै धाराहरू निलम्बित भएका थिए। राष्ट्रिय पञ्चायत र पञ्चायत जाँचबुझ समितिसमेत विघटन गरिएका थिए।

त्यसरी प्रजातन्त्रको पुनर्बहाली भएको घोषणा भएपछि काठमाडौं उपत्यकामा धेरै दिनदेखि लागेको कफर्यूसमेतलाई बिचारै नगरी आन्दोलनकारीहरू खुशियाली मनाउन नगरका बाटाहरूमा जुलुस साथ निस्किएका थिए। दुर्भाग्यवश कफर्यू हटिनसकेको हुँदा नयाँसडकमा जुद्ध शम्शेरको सालिक नजिक सुरक्षाकर्मीले गोली चलाउँदा विजयोत्सव मनाइरहेका उत्साही केही व्यक्तिहरूको मृत्यु भएको थियो। रातभरिजसो नै विजयोल्लास मनाउँदै नगरभरि जुलुस निस्किने क्रम जारी रहेको थियो। त्यसै गरेर प्रजातन्त्रको पुनर्बहाली भएको घोषणा हुने बित्तिकै अधिराज्यभरिका सबै जसो जिल्लाका सदरमुकामहरूमा पनि विजयजुलुसहरू निस्किएका थिए। धेरै

दिनदेखि भूमिगत भएर बसेका नामै नसुनेका नेताहरूले पनि सडक सडकमा निस्किएर आफ्ना समर्थकहरूलाई सम्बोधन गर्नथालेका थिए । त्यसरी नामै नसुनेका नेताहरूमा श्रीमदन भण्डारी, श्रीझलनाथ खनाल, श्रीमाधव नेपाल, श्रीप्रदीप नेपाल र श्रीवामदेव गौतमसमेत थिए ।

चैत्र २६ गते राती दरबारमा भएको संझौता अनुसार प्रजातन्त्र पुनर्बहाली भएपछि त्यसलाई तुरून्तै कार्यरूप दिन तत्कालीन नवनियुक्त प्रधानमन्त्री श्रीलोकेन्द्रबहादुर चन्दले सबै दलका प्रतिनिधिहरूलाई बैठकका लागि नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानको भवन कमलादीमा बोलाउनु भएको थियो । बैठक हुँदाहुँदै जम्मा भएको उत्तेजित भीडले नाना थरीका नारा लगाउँदै प्रधानमन्त्री चढेको झण्डावाल मर्सिडिज बेञ्चकार लगायतका गाडीहरू तोडफोड गरिदिएको थियो । २०४७ साल वैशाख ६ गते श्रीलोकेन्द्रबहादुर चन्दको मन्त्रिपरिषद्लाई विघटन गरेर श्रीकृष्णप्रसाद भट्टराईको नेतृत्वमा ११ सदस्यीय मन्त्रिपरिषद्को गठन श्री ५ वीरेन्द्रले गरेका थिए । प्रधानमन्त्री लगायत ५ जना नेपाली काङ्ग्रेसका तर्फबाट, ५ जना वाममोर्चाका तर्फबाट र २ जना मन्त्री राजाका तर्फबाटसमेत नियुक्त गरिएका थिए । त्यस मन्त्रिमण्डलको मुख्य काम शान्तिसुरक्षा कायम गर्नु, संविधानको निर्माण गर्नु र संसदको निर्वाचन गराउनु थियो । मन्त्रिमण्डलमा प्रधानमन्त्री श्रीकृष्णप्रसाद भट्टराईका साथै श्रीयोगप्रसाद उपाध्याय गृहमन्त्रीमा र अर्थमन्त्रीमा श्रीदेवेन्द्रराज पाण्डे नियुक्त हुनुभएको थियो । मन्त्रिमण्डल बनिसकेर पनि राम्रोसँग शान्तिसुरक्षा कायम हुनसकेको थिएन । राजनीतिक नेता, कार्यकर्ता र कर्मचारीहरूमा पनि सन्तुष्टि आएको थिएन ।

मन्त्रिमण्डललाई काम गर्न असाध्य अप्ठेरो परेको थियो । उच्छृङ्खलता वर्तमान समयको जस्तै जताततै देखिन्थ्यो । मानिसहरूको महत्त्वाकाङ्क्षा बढेको थियो र अनुशासनहीनता व्यापकरूपमा देखिन्थ्यो । त्यस प्रकारको सन्दिग्ध वातावरण व्याप्त भएको मौकामा २०४७ साल वैशाख १० गतेका दिन कीर्तिपुरतर्फबाट आएको उच्छृङ्खल भीडले टेकुमा शान्तिसुरक्षाका लागि खटिएका ९ जना प्रहरीहरूलाई नृशंस तथा बीभत्स तरिकाले हत्या गरेको थियो । त्यस घटनापछि उत्तेजित भीडलाई सम्झाउन जानुभएका गृहमन्त्री श्रीयोगप्रसाद उपाध्याय र आई.जी.पी. श्रीहेमबहादुर सिंहसमेतलाई

भीडले घेरामा पारेर झण्डै समाप्त गरिदिएको थियो। त्यस बेला उहाँहरूलाई जोगाउनेमा कीर्तिपुरवासी श्रीवासुपासा पनि हुनुहुन्थ्यो। अन्यायपूर्वक निरपराध प्रहरीको नृशंस हत्या भएपछि प्रहरीभित्र असन्तोष फैलिएको थियो। प्रहरीभित्र विद्रोहको हल्ला पनि चलेको थियो। त्यस बेलाको गृहप्रशासनले अत्यन्त सुझबुझ र संयम अपनाएर त्यस प्रकारको विष्फोटक स्थितिलाई सम्हालेको थियो। मैले गृहमन्त्रालयको स्थानीय प्रशासनमहाशाखामा बसेर त्यस बेलाको प्रजातान्त्रिक जनआन्दोलनलाई सम्हाल्ने काममा महत्त्वपूर्ण योगदान दिएको थिएँ। शान्तिसुरक्षासम्बन्धी धेरैजसो काममा मेरो सहभागिता रहन्थ्यो।

उपर्युक्त अनुसार शान्तिसुरक्षाको दृष्टिकोणले देश राम्रोसँग सम्हालिनै नपाएको बेलामा दुर्भाग्यवश २०४७ साल जेठ १४ गते अक्षयतृतीयाका दिन ८८ वर्षको उमेरमा मेरा पिताजीको निधन इनरुवाको घरमा भएको थियो। मेरा पिताजी चरित्रवान्, निरोगी, कर्मठ र सशक्त व्यक्ति हुनुहुन्थ्यो। २०४५ साल भाद्र ५ गते आमाको निधन भएपछि उहाँ अत्यन्त कमजोर हुनुभएको थियो। उहाँ कसैसँग पनि भेट्न चाहनुहुन्नथ्यो र उहाँमा असाध्य विरक्ति बढेर आएको थियो। मैले पहाडको घरमा सानै छँदादेखि नै पिताजी विरक्त भएर घर छोडेर हिंड्न धेरै पटक खोज्नुभएको र एकपटक भने हिंडेको पनि मैले देखेको थिएँ। पहाडबाट सुनसरी जिल्लाको इनरुवामा सरेपछि पनि पिताजी एकान्तवास गर्ने इच्छाले सुनसरी जिल्लामा नै रहेको सप्तकोशी र कोकाहाको पवित्र सङ्गमस्थल बाराहाक्षेत्रमा गएर बस्नु भएको थियो। दाजु कान्छी श्रीमती लिएर आफ्नू जागिरमा गएर बस्नथालेपछि दाजुका जेठी श्रीमती पट्टिका नावालक सन्तानहरूको पालनपोषाण, शिक्षादीक्षा, व्रतबन्ध र विवाह आदि गर्नुपर्ने कामको सम्पूर्ण अभिभारा पिताजीका काँधमा नै आइपरेपछि उहाँ बाराहाक्षेत्रबाट फेरि घरमा नै फर्किएर आउनुभएको थियो। वृद्धावस्थामा त्यस प्रकारको अविभारा लिएर घरमा बस्नुपर्दा उहालाई अत्यन्त दिक्क लागेको थियो। म घर गएको बेला पिताजी मलाई सबै कुरा सुनाउनु हुन्थ्यो। त्यतिमात्र नभएर पहाडमा नै छँदा २०१८ सालमा पिताजीले मेरो दोस्रो विवाह गरिदिन खोज्दा मैले अत्यन्त व्यावहारिक र तार्किक उत्तर दिएर दोस्रो विवाह गर्न नमानेको मेरो बुद्धिमत्तापूर्ण निर्णयको पिताजी सधैँ प्रशंसा

गरिरहनुहुन्थ्यो। पिताजी मलाई बारम्बार अर्तिउपदेश र शुभाशीर्वाद दिइरहनुहुन्थ्यो। उहाँले आफ्नू अन्तिम अवस्थासम्म पनि आशीर्वादले भरिएका गद्य र पद्यमा लेखिएका स्नेहयुक्त पत्रहरू मलाई पठाइरहनु हुन्थ्यो।

त्यसैगरेर आमाले पनि हामीहरूलाई बारम्बार कवितात्मक आशीर्वाद दिइरहनुहुन्थ्यो। एकपटक आमा बिरामी भएर औषधोपचारका लागि विराटनगरको दाजुको घरमा उहाँलाई राखेका बेला हामी छोराछोरीका बीचमा बसेर आमाले व्यक्त गर्नु भएको अमूल्य कवितात्मक भावना संझँदा अहिले पनि मेरो छाती भरिएर आउँछ। त्यसलाई मैले टेप गरेर अहिलेसम्म पनि सुरक्षितै राखेको छु। आमाको सम्झना आएर साह्रै बिरह चल्दा त्यही टेप सुनेर म आफ्नू हृदयको ज्वाला शान्त गर्नेगर्दछु। मातापिताका यसै प्रकारका अमूल्य स्मृतिहरू मेरा स्मृतिपटलमा अझै केही सुरक्षित छन् भने केही भने समयको विकराल प्रवाहमा बगेर विलीन भइसकेका छन्। पिताजी आफ्नू उमेरको अन्तिम अवस्थातिर पुग्दा अत्यन्त विरक्त भएर कवितामा नै मलाई लेख्नेगर्नुहुन्थ्यो। ती पत्रहरू अहिलेसम्म पनि मैले आफ्नू अमूल्य निधिकारूपमा सुरक्षित गरेर राखेको छु। तीमध्ये दुईओटा पत्रहरू मैले अनुसूची दुईमा दिएको छु। म समय समयमा पिताजीलाई भेट्न काठमाडौंबाट इनरुवा जाने गर्दथेँ। उहाँ मसँग पनि कुराकानी धेरै गर्नु हुन्नथ्यो। एकान्तमा गएर बस्ने उहाँको स्वभाव भइसकेको थियो। अन्त्यमा मैले भेट्ने मौका नपाइकन नै उहाँहरू हाम्रा बीचबाट कहिल्यै नफर्किने गरेर जानुभएको थियो। आमा र पिताजीको समेत अकल्पनीय देहावसान हुँदा पनि मैले अन्त्य समयमा उहाँहरू दुवैजनाको मुख हेर्न पाएको थिइन।

समयको प्रवाहले मेरा मातापितालाई कहिल्यै नफर्किने गरेर बगाएर लगिसकेको थियो। भारतका महान् योगी परमहंस योगानन्दले आफ्नू आत्मकथामा "मेरा जीवनमा सधैँ यस्तो भएको छ कि आफ्नू प्रियजनको मृत्यु हुँदा ईश्वरले कृपा गरेर ती करुण दृश्यबाट मलाई टाढै राखेका छन्" भनेर उल्लेख गर्नु भएको छ। सोही कुरा ममा पनि पर्न आएको थियो। म त्यही सम्झिएर आफ्नू चित्तलाई सधैँ सान्त्वना दिने गर्दछु। मलाई जन्मदिने मेरा मातापितालाई संसारबाट बिदा गरेर म टक्क टुहुरो भएको छु। मातापिताको शीतल छहारीमा बसेर बिताएका मेरा सुखद दिनहरू

समाप्त भएका छन् । ती दिनहरू फेरि खोजेर म पाउन सक्तिन । दशैं र तिहारका महान् पर्वहरूमा हामीहरू जहाँसुकैबाट पनि भर्सक घर पुग्ने प्रयास गर्दथ्यौँ र हामीहरू मातापितालाई चारैतिरबाट घेरेर बस्तथ्यौँ । हामीहरूलाई साथमा पाएर उहाँहरू अत्यन्त प्रफुल्लित हुनुहुन्थ्यो । आफ्ना हृदयमा चिरसञ्चित वात्सल्यले आप्लावित शुभाशिर्वादहरू शुभविजयाको टीका लगाइदिँदा भित्रै हृदयदेखि हामीहरूमाथि मातापिताहरू वर्षाइदिनुहुन्थ्यो । स्नेहाश्रुसहित हाम्रा निधारमा टीका र शिरमा जमरा पनि लगाइदिनुहुन्थ्यो । हाम्रा शिरमा आमाका र पिताजीका वात्सल्यसहितका शुभाशिर्वादहरू वर्षन्थे । त्यसैगरेर अरू चाडबाड र पर्वहरूमा पनि हामीहरू पहाडको घरमा हुँदा र मधेशमा सरिसकेपछि पनि जम्मा हुने गर्दथ्यौँ । त्यसबेला हामीहरू अत्यन्न आनन्दित हुन्थ्यौँ । त्यही भावना नै शोककाव्य “श्रद्धाञ्जलि २०५२” मा यसरी व्यक्त गरेर मेरो सन्तप्त मनलाई मैले सान्त्वना दिने प्रयास गरेको छु । जस्तै–

टीकाटाला शुभविजयका चाड द्यौसीतिहार ।
घुम्दै फिर्दै शुभदिनहरू आउँथे बारबार ।।
कैले पर्थे परिणयहरू धर्मकर्मादि कार्य ।
कैले पर्थे उपनयन वा देवपूजा सुकार्य ।।
जान्थ्यौँ हामी घुमफिर गरी सम्झिई बाबुआमा ।
बन्थ्यो सारा घर झिलिमिली बाबुआमाहुँदामा ।।
भेला हुथ्यौँ तनयतनया पूर्ण उत्साहसाथ ।
हामी हुन्थ्यौँ अतिशय खुशी उच्च पारेर माथ ।।

उपर्युक्त अनुसारको स्वर्गीय वातावरणमा दिन बिताइरहेको मैले मातापिता दुवै जनालाई बिदा गरिसकेपछि उहाँहरूको अमर आत्मालाई शान्ति मिलोस् र उहाँहरूको मुक्ति हओस् भन्ने कामनाले विभिन्न धार्मिक कृत्यहरू गरेको थिएँ । मातापिताहरू जीवित रहेको बेलामा मैले छोराको नाताले गर्नुपर्ने कर्तव्यहरू पूरा गर्न सकेको थिइन । मैले उहाँहरूलाई तीर्थहरूमा लिएर घुमाउन


पिता श्रीधर्मदत्त र माता रन्धता भट्टराई

सकेको थिइन । वृद्ध अवस्थामा र बिरामी भएका बेलामा सह्यार, सुसार र सेवा पनि मैले गर्न सकेको थिइन । सरकारी जागिरमा नै म हिरिक्क भएर लागेको हुँदा मैले मातापिताको शुश्रूषा गर्ने समय निकाल्न सकेको थिइन । उहाँहरू यस संसारबाट बिदा भइसकेपछि पनि मैले उहाँहरूको काजक्रिया गर्दा राम्रो विधि पुऱ्याएर गर्न सकेको थिइन र आफ्नू शक्ति अनुसार दानदक्षिणा र शय्यादान पनि गर्न सकेको थिइन । त्यतिमात्र नभएर सरकारी कामले देश विदेश हिंडिरहनु परेको हुँदा उहाँहरूको निधनमा वर्षदिनभरि नियमपूर्वक बरखी बार्नुपर्नेमा सो पनि मैले गर्न नसकेर आफ्नू कर्तव्यबाट म च्युत भएको थिएँ ।

यी कुराहरूले मलाई सधैं सताइरहन्थे । मैले सकेका धार्मिक कृत्यहरू गरेर मातृपितृऋणबाट म उऋण हुन चाहन्थें । मातापिता र समस्त पितृहरूको मुक्तिका लागि पत्नीसहित दुई पटक गयामा, काशीको मणिकर्णिका घाटमा र गोकर्णमा समेत मैले श्राद्ध र पिण्डदानसमेत गरेको थिएँ । म




मातापिताको देहावसान भएको इनरुवाको घरमा पुराण लगाउँदा गरिएको धार्मिक कृत्यको दृश्य

जुन तीर्थमा गए पनि भर्सक श्राद्ध नै गर्दथें र श्राद्ध गर्न अनुकूल नमिलेमा तर्पण अर्पण गरेर म मातापिताको मुक्तिको कामना गर्दथें । अन्त्यमा पितृमुक्तिका लागि मैले श्रीकेदारनाथमा गएर रेतकुण्डमा र श्रीबद्रीनाथमा गएर अलकनन्दाका तटमा रहेको ब्रह्मकपालमा श्राद्ध तथा पिण्डदान गरेको थिएँ । त्यसका अतिरिक्त पितृमुक्तिका लागि मातापिताको देहावसान भएको स्थान इनरुवाको घरमा २०५१ सालमा गएर पण्डितहरूद्वारा श्रीमद्भागवतमहापुराण वाचन गराएर



प्रा.डा. दीर्घराज घिमिरे

यथाशक्ति दानदक्षिणा पनि गरेको थिएँ । मलाई त्यतिले पनि मानसिक सन्तुष्ठि भएको थिएन । त्यस पछि २०६१ साल जेठ ११ गतेदेखि १८ गतेसम्म काठमाडौँकै घरमा मातापिता, गुरुमाता र अरू पनि सम्पूर्ण पितृहरूका मुक्तिका लागि सत्पात्रविद्वान्, पण्डित, मलाई वेदान्त पढाउने मेरा गुरु प्रा.डा.श्रीदीर्घराज घिमिरेज्यू मुख्यवाचक र श्रीरघुनाथ भण्डारीज्यूलाई उपवाचकका रूपमा वरण गरेर जानेसम्म पूर्ण विधिविधानका साथ श्रीमद्भागवतमहापुराण सप्ताह महायज्ञ लगाइएको थियो ।


रघुनाथ भण्डारी

साङ्गेका दिन पुराणका मुख्यवाचक व्यासस्वरूप प्रा.डा. श्रीदीर्घराज घिमिरेज्यू र उहाँकी धर्मपत्नीलाई श्रीविष्णुलक्ष्मीका रूपमा पूजा गरेर शय्यादानसमेत गरिएको थियो । त्यस अवसरमा पहिले गर्न छुटेका विधिहरू र दानदक्षिणा पनि यथाशक्ति र यथामति गर्ने प्रयास गरिएको थियो । त्यस बेला गर्न छुटेको भूमिदान २०६६ साल माघ ३ गते घरमा लघुरुद्री लगाएर दान गरिएको थियो ।

पिताजीको क्रियापछि घाँटी दुख्ने रोग लागेर म घरविदामा बसेको थिएँ । म बिदा लिएर घरमै आराम गरेर चुपचाप बसेको मौका छोपेर गृहमन्त्रालयले मलाई गृहमन्त्रालयको सहसचिवबाट काठमाडौं जिल्लाको प्रमुखजिल्ला अधिकारीमा सरुवा गरेको थियो । घाँटीको बिरामी भएर बोल्नसमेत नहुने अवस्थामा काठमाडौं जिल्लाको प्रमुखजिल्ला अधिकारी भएर काम गर्न सम्भव नभएको हुँदा मैले तत्कालीन गृहमन्त्री र गृहसचिवसमेतलाई आफ्नो असमर्थता दर्शाएको थिएँ । उहाँहरूले मलाई सक्षम व्यक्ति ठानेर पठाएका हौँ भनेर मेरो चित्त बुझाउन खोज्नु भएको थियो । म कुनै पनि हालतमा गृहमन्त्रालय छोडेर काठमाडौं जिल्लाको प्रमुखजिल्ला अधिकारी भएर जान नसक्ने भनेर मैले अडान लिएर बसेपछि ६ महिनासम्म काठमाडौं जिल्लाप्रशासनकार्यालय प्रमुखजिल्ला अधिकारीविहीन नै भएर रहेको थियो । गृहमन्त्रीले बोलाएर मलाई हाजिर हुन जान बारम्बार प्रेरणा गर्दा पनि म हाजिर हुन नगएपछि गृहमन्त्री र मेरा बीचमा मजस्तै अर्को सक्षम व्यक्ति काठमाडौं जिल्लाको प्रमुखजिल्ला अधिकारीमा मैले खोजेर पठाउने सहमति भएको थियो । सोही सहमति अनुसार व्यक्ति खोज्ने क्रममा त्यस बेला बाहिरी

जिल्लामा खटिनुभएका श्रीशारदाप्रसाद दाहाललाई मैले छानेको थिएँ। श्रीशारदाप्रसाद दाहाललाई साथमा लिएर गृहमन्त्री र गृहसचिवसँग कुराकानी गरेपछि मेरो थमौती गृहमन्त्रालयकै सहसचिवमा हुने र श्रीशारदाप्रसाद दाहाल काठमाडौं जिल्लाको प्रमुखजिल्ला अधिकारीमा जाने निर्णय भएको थियो।

त्यसरी काठमाडौं जिल्लाप्रशासन कार्यालयको प्रमुखजिल्ला अधिकारी भएर जाने झन्झटबाट मैले मुक्ति पाएको थिएँ। त्यसरी मेरो सरुवा मिलाउँदा मिलाउँदै त्यसै अन्तरालमा गृहमन्त्रालयको सहसचिवमा मेरो ठाउँमा सरुवा भएर आएका श्रीइन्द्रकुमार श्रेष्ठले मलाई अत्यन्त दुःख दिएका थिए। उनी एक दिन मेरो सरुवा मिलिनसक्तै मेरो ठाउँमा हाजिर हुन गृहमन्त्रालयमा आएपछि मैले विकरालरूप लिएर उनलाई हटाउनुपरेको थियो।

तत्कालीन गृहमन्त्री श्रीयोगप्रसाद उपाध्याय आफ्नू कुरामात्रै गर्ने एकसुरे खालका आत्मप्रशंसक व्यक्ति हुनुहुन्थ्यो भने तत्कालीन गृहसचिव भक्तबहादुर कोइराला बाहिरीरूपमा हेर्दा निकै बहादुरजस्तो देखिए तापनि मन्त्रीको अगाडि आज्ञाकारी बालकजस्ता हुनुहुन्थ्यो। आफूले गर्ने काम पनि मन्त्रीलाई रिझाउनका लागि मन्त्रीकहाँ पेश गरेर उहाँले सदर गराउन थाल्नुभएको थियो। त्यसरी तत्कालीन गृहसचिवले आफ्नू जागिर जोगाउन मन्त्रीसमक्ष आत्मसमर्पण गरेपछि तत्कालीन गृहमन्त्रीको स्वेच्छाचारिता बढ्दैगएको थियो। तत्कालीन प्रधानमन्त्रीको सल्लाहकार र दाहिने हात हुँ भन्ने ठानेर उहाँ आफूलाई अत्यन्त शक्तिशाली जुद्ध शम्शेर नै भएको ठान्न थाल्नुभएको थियो। तत्कालीन गृहमन्त्री श्रीयोगप्रसाद उपाध्याय जो भेट्न गए पनि र जोसँग पनि आफ्नै कुरा सुनाएर पाण्डित्य प्रदर्शन गर्नुहुन्थ्यो। प्रायः अरूको कुरा सुन्ने उहाँको बानी नै थिएन। अन्तरिमकालका मन्त्रीहरू संसदको अधिकारसमेतले सम्पन्न भएका हुँदा उहाँहरूमा निकै अहम् चढेको थियो। हामीहरू जे पनि गर्न सक्तछौँ भन्ने कुरा उहाँहरूले शोच्नुभएको थियो। हामीहरूजस्ता पुराना सरकारी अधिकृतहरूलाई उहाँहरू अत्यन्त निकृष्ट दृष्टिले हेर्नेगर्नुहुन्थ्यो। त्यसै कारणले पनि गृहमन्त्रालयको प्रशासन आफ्नू पुरानो अवस्थामा आउन सकेको थिएन। त्यस बेला गृहमन्त्रीको निजीसचिवमा उहाँकै छोरीज्वाईं श्रीसुभाष पोखरेल र अधिकृतमा श्रीभरत सुवेदी नियुक्त भएका थिए। सुवेदी अरू नै मन्त्रालयबाट काजमा आएर

गृहमन्त्रीको दाहिने हात भएका थिए। उनी अत्यन्त उच्छृङ्खल र अनुशासनविहीन व्यक्ति थिए।

मेरो महाशाखा अन्तर्गतमा काम गर्ने सहायकसचिव श्रीसुवीर खनाल जनआन्दोलन समाप्त भएपछि पहिले शान्त र अनुशासित देखिने व्यक्ति एकाएक कर्मचारीको नेता र अनुशासनविहीन भएर निस्किएका थिए। गृहमन्त्रीको निजी सचिवका सहायक श्रीभरत सुवेदीसमेतसँग मिलोमतो गरेर गृहमन्त्रीलाई गलत बाटो देखाएर आफ्नू व्यक्तिगत स्वार्थसिद्ध गर्ने काममा लागेको देखेपछि मैले निज खनाललाई त्यसो नगर्न सम्झाउने प्रयास गरेको थिएँ। निज खनाललाई मैले दिएको अर्ती गोमन सर्पलाई दूध खुवाएजस्तो भएको थियो। पहिले आफूभन्दा माथिका अधिकृतहरूलाई अत्यन्त आदर गर्ने निज खनाल त्यस बेला गएर उल्टै अर्तीउपदेश गर्ने भएका थिए। तिनै खनाल पछि गएर तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाको निजीसचिव हुन सफल भएका थिए। निजीसचिव भएर बसेको मौकामा उनले भ्रष्टाचार गरी अकुत सम्पत्ति कमाएका थिए। मैले समय समयमा उनलाई बढी नहुन सम्झाएको हुँदा मेरो जागिरैसमेत खोस्ने कुराको धम्की उनले मलाई तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाको निजीसचिव भएर सर्वेसर्वा भएको मौकामा दिएका थिए। मैले पनि सकेदेखि मेरो जागिर खोसेर हेर भनेर धम्कीको जबाफ दिएको थिएँ। मेरो जागिर खोस्नु त परै जाओस् तत्कालीन प्रधानमन्त्रीको दायाँ हात भएर मनपरी गरेको कारण उनी उपसचिवमा पनि बढुवा हुन नसकेर जागिरबाटै उनले हात धुनुपरेको थियो। मैले गृहमन्त्रालयको कुरा लेख्तालेख्तै बीचमा तत्कालीन सहायकसचिव श्रीसुवीर खनालको प्रसङ्ग उल्लेख गर्न पुगेँछु। अब म फेरि गृहमन्त्रालयकै प्रसङ्गलाई अगाडि बढाउँछु।

गृहमन्त्रालयले नेपाल अधिराज्यभरि शान्तिसुरक्षा कायम गर्ने काममा बिस्तारै सुधार्दैलगेको थियो। जिल्लाका प्रमुखजिल्ला–अधिकारी र प्रहरीप्रमुखहरूमा समेत भर्सक राम्रा राम्रा व्यक्तिहरू छानेर गृहमन्त्रालयले पठाएको थियो। त्यो सङ्क्रमण कालको समय भएको हुँदा केन्द्रमा र जिल्लाहरूमा समेत काम गर्न प्रशासनलाई असाध्य अप्ठेरो परेको थियो। निजामती कर्मचारीहरू पञ्चायतकालदेखि नै विभिन्न राजनीतिक दलहरूका कार्यकर्ताकारूपमा गोप्यरूपमा

काम गर्ने गर्दथे। जनआन्दोलनका समयमा तिनै कर्मचारीहरू राजनीतिक नेताहरूको प्रोत्साहनमा खुलेरै बाहिर आएका थिए।

त्यसै समयमा कर्मचारीको सङ्गठन अत्यन्त सक्रिय भएको थियो। गृहमन्त्रालयका सहायकसचिव सुवीर खनाल र खरिदार श्याम दाहालसमेत सरकारी काम छाडेर कर्मचारीहरूको नेतृत्व गर्न उच्छृङ्खलरूपमा सक्रिय भएका थिए। श्याम दाहाल भन्ने कर्मचारी खरिदार स्तरका भएका र गृहमन्त्रालयमा धेरैवर्षदेखि काम गरिरहेका अत्यन्त चलाख व्यक्ति थिए। उनी गृहसचिव वीरबहादुर शाहीकै पालादेखि नै गृहसचिवको निजीसचिवालयमा गृहसचिवका भित्रिया र अत्यन्त विश्वासी व्यक्तिका रूपमा काम गर्दैआएका थिए। उनी ने.क.पा. एमालेका माथिल्ला तहका कार्यकर्ता भएको कुरा २०४६ सालको जनआन्दोलनको बेलामा थाहा हुनआएको थियो। त्योभन्दा अघि नै खरिदार श्याम दाहालले गृहमन्त्रालयका गोप्य सूचनाहरू प्रायः सबै नै ने.क.पा. एमालेको केन्द्रीय कार्यालयलाई प्रमाणसहित दिइसकेका रहेछन्। गृहसचिवको विश्वासी भित्रिया मान्छे भएर सरकारी मोटरसाइकल, विशेष सुराकी रकम र अन्य सरकारी सुविधासमेत उनले पाइरहेका थिए। त्यसरी सम्पूर्ण सरकारी सुविधा पाएर उनले गृहमन्त्रालयका साथसाथै अन्यत्र पनि ने.क.पा. एमालेको सङ्गठनलाई दरो पार्ने काम गरेका रहेछन्। वास्तवमा पञ्चायती कालमा माथिल्लो राजनीतिक नियुक्तिदेखि लिएर तल्लो तहका कर्मचारीहरूसम्ममा पनि वामपन्थी विचारधारा राख्नेहरूलाई राजदरबारदेखि सिंहदरबारसम्ममा पनि जानाजान प्रवेश गराएर नेपाली काङ्ग्रेसका विरुद्धमा प्रोत्साहन दिएको हुनाले पनि जताततै वामपन्थीहरूको वर्चस्व बढ्नगएको थियो। त्यसरी सरकारी सुविधा पाएर आफ्नू सङ्गठन बढाउन पाउँदा वामपन्थीहरूले आफ्नू ठूलो सौभाग्य सम्झिएका थिए। वास्तवमा इण्डोनेशियामाजस्तै गरेर अदितफर्मूला अपनाएर वामपन्थीहरू दरबारदेखि सिंहदरबारसम्म, विभिन्न स्थानीय संगठन र पञ्चायतदेखि गाउँफर्क राष्ट्रिय अभियान जस्तो राजनीति परिचालन गर्ने माथिल्लो निकायसम्ममा पनि घुस्न सफल भएका थिए। त्यसैको फलस्वरूप आज नेपाल  विभिन्न थरीका कम्युनिष्टहरूले व्याप्त भएको छ।

त्यसरी नेपालमा कम्युनिष्टसङ्गठन बढाउनेहरूमा राजा महेन्द्रदेखि लिएर

र ज्ञानेन्द्रसम्म पनि पर्नआउँछन् । आज आएर तिनै कम्युनिष्टहरूले राजसंस्थालाई समाप्त गरेर देशलाई गणतन्त्र बनाउन सफल भएका छन् । राजा महेन्द्रले २००९ सालदेखि काङ्ग्रेसका विरुद्धमा रोपेको कम्युनिष्टको बीउले अन्ततोगत्वा बीउ रोप्ने राजसंस्थालाई नै समाप्त गरेर छोड्यो । नेपालको इतिहास यस कुराको ज्वलन्त साक्षी छ । गृहमन्त्रालयका खरिदार श्याम दाहालले गरेको कम्युनिष्टक्रियाकलापको सामान्य उल्लेख मैले यहाँ गरेको हुँ । यो एउटा उदाहरणमात्रै हो । त्यस्ता श्यामहरू त्यस बेला सरकारका प्रत्येक निकायमा कार्यरत थिए । त्यसैगरी प्रत्येक गाउँपञ्चायतदेखि राष्ट्रियपञ्चायतसम्ममा पनि वामपन्थीहरू सक्रिय थिए । २०४६ सालको जनआन्दोलनभन्दा अगाडि भूमिगत भएर नामसमेत लुकाएर अञ्चलाधीश र प्रमुखजिल्ला अधिकारीको गोप्य कोषबाट महिनावारी तलब खाएर काम गर्ने व्यक्तिहरू नै २०४६ सालको परिवर्तनपछि नेपालकम्युनिष्ट पार्टीका राष्ट्रिय स्तरका ठूलाठूला नेताहरू भएर बाहिर निस्किएका थिए । ती व्यक्तिहरू पञ्चायती कालका हर्ताकर्ता दरबारिया नेताहरूले खान दिएर पालेका पाल्तु व्यक्तिहरू नै थिए । तिनै नेताहरूको छायाकारूपमा मन्त्रालयहरूमा हुर्किएका कम्युनिष्ट कार्यकर्ता खरिदार श्याम दाहालहरूको त्यस प्रकारको अस्तित्व हुनु कुनै आश्चर्यको कुरा




तत्कालीन गृहमन्त्री श्रीयोगप्रसाद उपाध्यायबाट दैवीप्रकोप पदक ग्रहण गर्दै लेखक

थिएन । पञ्चायतीशासन त्यतिसम्म निकम्मा भइसकेको कुरा त्यहीँ बसेर जीवन बिताउँदा पनि मैले थाहा पाउन सकेको थिइन ।

अन्तरिम सरकारलाई तोकिएका तीनओटा उत्तरदायित्वहरूमध्ये शान्तिसुरक्षाको स्थिति बिस्तारै केही ठीक भएको थियो । संविधान निर्माणका सम्बन्धमा शुरु शुरुमा केही सन्दिग्धता देखिएको भए तापनि २०४७ साल जेठ १६ गते सर्वोच्च अदालतका न्यायाधीश श्रीविश्वनाथ उपाध्यायको अध्यक्षतामा दोस्रो पटक गठन भएको संविधाननिर्माण आयोगले निर्धारित समयभन्दा ढिलै भए तापनि आफ्नू काम पूरा गरी २०४७ साल कार्तिक २३ गतेका दिन संविधानको मस्यौदा तयार गरी श्री ५ वीरेन्द्रका समक्ष पेश गरेको थियो ।

त्यसरी दोस्रो जिम्मेवारी संविधान निर्माण गर्ने काम पनि तत्कालीन अन्तरिम सरकारले पूरा गरेको थियो । त्यसपछि २०४८ साल वैशाखमा हुने गरी प्रजातन्त्रको पुनः स्थापनापछिको पहिलो निर्वाचनको मिति तोकिएको थियो । अन्तरिम सरकारले आफूलाई तोकिएको तेस्रो कार्य पनि सम्पादन गर्ने अवस्थामा पुगेको थियो । उक्त निर्वाचनमा भाग लिन नाना थरीका कहिल्यै नामै नसुनेका दलहरूले पनि निर्वाचन आयोगमा दल दर्ता गराएका थिए । काठमाडौं १ नं.को निर्वाचन क्षेत्रबाट तत्कालीन अन्तरिम सरकारका सफलतम मानिनुभएका प्रधानमन्त्री श्रीकृष्णप्रसाद भट्टराई उठ्नुभएको थियो । त्यस्तो विषम अवस्थामा पनि सरकारलाई तोकिएका कामहरू समयमै पूरा गर्न सफल भएको कारण श्रीकृष्णप्रसाद भट्टराई जनप्रियताको शिखरमा पुग्नुभएको थियो । उहाँजस्तो सफल नेताले काठमाडौंको नं. १ चुनाव क्षेत्रबाट चुनाव जित्ने कुरामा सबै विश्वस्त थिए । निर्वाचनको सल्लाहकारमा एशियाका स्वयंघोषित सफलतम गृहमन्त्री श्रीयोगप्रसाद उपाध्याय हुनुहुन्थ्यो । मेरो घर पनि काठमाडौंको १ नं. निर्वाचन क्षेत्रभित्र नै परेको हुँदा हामी टोलवासीहरू सबै भट्टराईलाई चुनाव जिताउनेमा सक्रिय थियौँ । मेरा छोराहरू लगायत सबै इष्टमित्रहरू पनि चुनावप्रचारमा लागेका थिए । उहाँको चुनावअभियान सुनियोजितरूपमा चलिरहेको थिएन । उहाँको स्वभावजस्तै उहाँको चुनावप्रचार पनि विनायोजनाको भताभुङ्गे खालको थियो । मैले गृहमन्त्रालयको सहसचिवको नाताले तत्कालीन गृहमन्त्री श्रीयोगप्रसाद उपाध्यायलाई चुनाव प्रचारको कमजोरीको बारेमा सम्झाएको थिएँ । अरूको कुरा सुन्दै नसुन्ने उहाँको

बानी भएको हुँदा मेरो कुरा पनि उहाँले सुन्नुभएको थिएन ।

काठमाडौंको १ नं. क्षेत्रबाट नै भट्टराईका विरुद्धमा भूमिगत जीवनबाट त्यसै बेला बाहिर निस्किनु भएका ने.क.पा. एमालेका तर्फबाट उमेदवार भएर श्रीमदन भण्डारीले पनि चुनाव लड्नुभएको थियो। श्रीमदन भण्डारीले छोटै समयमा नै आफ्नू प्रखर तथा उत्तेजक वक्तृत्वकलाद्वारा मतदाताहरूलाई आफूतर्फ आकर्षित गर्न सफल हुनुभएको थियो । म सैद्धान्तिक रूपमा उहाँसँग सहमत थिइन तापनि उहाँको भाषण सुन्न उहाँका आमसभाहरूमा म जानेगर्दथें। प्रायः आफ्नू चुनाव प्रचारका आमसभाहरूमा तालीमप्राप्त आफ्ना नवयुवक कार्यकर्ताहरूको घेरामा तालीको गड्गडाहटको बीचमा अत्यन्त उत्तेजक धाराप्रवाह भाषण गर्न उहाँ कुशल हुनुहुन्थ्यो। सपनाका महलहरू बाँडेर मतदाताहरूलाई उहाँले आफूतिर आकर्षित गर्नुभएको थियो । उहाँ क्षणिकरूपमै भए पनि मतदाताहरूलाई आफूतिर तान्न पूर्णरूपमा सफल हुनुभएको थियो । ने.क.पा. एमालेले त्यस्ता सभाहरू प्रत्येक चुनावक्षेत्रमा व्यापकरूपमा आकर्षक नारा, ब्यानर र पोष्टरहरूसहित गरेको थियो ।

अर्कोतर्फ नेपाली काङ्ग्रेसले भने अत्यन्त हलुकासँग सबै कुरा लिएको देखिन्थ्यो । तत्कालीन प्रधानमन्त्री कार्यक्रम निश्चित गरेको ठाउँमा कहिल्यै पनि पुग्नुहुन्नथ्यो । केही गरी पुगिहाल्नु भयो भने पनि मतदाताहरूसँग उहाँ राम्रोसँग कुराकानी गर्नुहुन्नथ्यो । त्यतिमात्रै होइन उहाँ म सोझै जितिहाल्छु, कसैले केही गर्नुपर्दैन भनेर खुलै भनी हिँड्नेगर्नुहुन्थ्यो । त्यस बेला भट्टराईमा अत्यन्त अहङ्कार चढेको थियो। नेपाली काङ्ग्रेसले घरदैलो कार्यक्रम लगायतका सबै कार्यक्रमहरू राम्रोसँग सञ्चालन गर्नसकेको थिएन। खास गरेर त्यस बेलाका गृहमन्त्री श्रीयोगप्रसाद उपाध्याय नै चुनाव प्रचारप्रसारको संयोजक हुनु भएको हुनाले पनि कार्यक्रम राम्रोसँग संयोजन हुनसकेको थिएन । श्रीकृष्णप्रसाद भट्टराई आफैँ पनि राम्रोसँग कुनै कार्यक्रम सञ्चालन गर्न सक्नुहुन्नथ्योभने उहाँका सल्लाहाकार श्रीयोगप्रसाद उपाध्याय साह्रै अहंवादी र अमिल्दा व्यक्ति हुनुभएको हुँदा नेपाली काङ्ग्रेसका मतदाताहरू पनि उदासीन भएर तटस्थ बसेका थिए। नेपालको राजनीति, नेपाली जनता, नेपाली मतदाताको मनोभावना र नेपालको प्रशासनसमेत केही नबुझेका तर नेपालको प्रशासनिक निकायको पुरानो सचिव र हालको

सफलतम गृहमन्त्री हुँ भनेर अनुभव विहीन फोस्रो घमण्ड बोकेर हिंड्ने श्रीयोगप्रसाद उपाध्यायको उपेक्षापूर्ण व्यवहार र बोलीले गर्दा पनि मतदाताहरूमा नकारात्मक प्रभाव पर्नगएको थियो । जसले जेसुकै भने तापनि अन्तिम बेलासम्म पनि नेपाली काङ्ग्रेसको प्रचारप्रसार राम्रो हुन सकेको थिएन । अन्तरिमकालका प्रधानमन्त्री श्रीकृष्णप्रसाद भट्टराई जतिसुकै जनप्रिय ठहरिए तापनि चुनावका बेलाको असमर्थ, असङ्गठित चुनावसंयोजन र प्रचारप्रसारमा समेत अत्यन्त कमी भएको हुँदा उहाँले निर्वाचनमा हारको मुख देख्नुपरेको थियो ।

अर्कोतर्फ प्रतिपक्षी एमालेका उमेदवार श्रीमदन भण्डारी आफैं सक्षम चुनाव सञ्चालक हुनुहुन्थ्यो र प्रचारप्रसार पनि राम्रो भएको हुँदा निर्वाचनमा उहाँलाई सफलता मिलेको थियो । नेपाली काङ्ग्रेस र ए.मा.ले.का कार्यकर्ताहरूमा पनि आकाश जमीनको भिन्नता थियो । नेपाली काङ्ग्रेसका कार्यकर्ता र चुनाव प्रचारकहरू समर्पित भएर लागेका थिएनन् भने ए.मा.ले.का कार्यकर्ता र चुनाव प्रचारकहरू अत्यन्त समर्पित र क्रियाशील देखिन्थे । काङ्ग्रेसका कार्यकताहरू खानपिउनमा नै मस्तरहन्थेभने एमालेका कार्यकर्ताहरू नखाइकनै पनि समर्पित भएर दलको निर्देशन अनुसार आफ्नू काम फत्ते गरेर नै छोड्दथे । यी भिन्नताहरूले गर्दा नै नेपालको राजनीतिमा जनआन्दोलनभन्दा पहिले नामै नसुनिएका उनाउ व्यक्ति श्रीमदन भण्डारीले चुनाव जित्नुभएको थियो । ए.मा.ले.ले निर्वाचन जित्नका लागि साम, दान, दण्ड र भेद सबै नीतिहरू अपनाएको थियोभने नेपाली काङ्ग्रेसले आफ्ना कार्यकर्ता र मतदाताहरूलाई पनि परिचालन गर्नसकेको थिएन । त्यसका अतिरिक्त चुनाव प्रचारका समयमा र चुनावका दिनमा समेत भूतपूर्व पञ्चहरूको दल राष्ट्रियप्रजातन्त्रपार्टीका कार्यकर्ताहरूले आफ्नो उमेदवारलाई मत नमागेर ए.मा.ले.का उमेदवार श्रीमदन भण्डारीलाई मत मागिहिंडेको देखिएको थियो । त्यसका साथै चुनावका दिन किसुनजीका केही मतदाताहरू घरमा छुट्टी मनाएर तास खेलेर बसेका र मतदान गर्नसमेत नगएको थाहा हुन आएको थियो । नेपाली काङ्ग्रेसका अर्का थरी भलाद्मी मतदाताहरू यातायातको साधनविना हिंडेर मतदान गर्न गएका थिएनन् भने अर्काथरी मतदाताहरू मतदानकेन्द्रमा अबेर गएका हुदा तिनीहरूको मत एमालेका कार्यकर्ताहरूले

धाँधली गरेर पहिले नै खसालिसकेका थिए । त्यतिमात्रै होइन नेपाली काङ्ग्रेसका नेताहरू अत्यन्त असावधान र लापर्बाहसमेत भएका हुँदा पनि किसुनजीले चुनाव हार्नुभएको थियो। त्योभन्दा पनि आश्चर्यको कुरा किसुनजीका चुनावका संयोजक तत्कालीन गृहमन्त्री योगप्रसाद उपाध्यायको नाम मतदाता नामावलीमै थिएन । मतदान केन्द्रमा मत खसाल्न जाँदा उहाँले त्यसै फर्किनुपरेको थियो। त्योभन्दा असावधानी र लाज लाग्ने कुरा के हुनसक्तछ ? त्यस्ता सल्लाहकार र कार्यकर्ताहरूबाट किसुनजीले कसरी चुनाव जित्न सक्तथे ? तै पनि उहाँले ७०० को झिनु अन्तरले मात्र चुनाव हार्नुभएको थियो ।

त्यसरी किसुनजीले चुनाव हारेपछि नेपाली काङ्ग्रेसका कार्यकर्ताहरूमा निराशा आएको थियो। काठमाडौंको १ नं क्षेत्रबाट किसुनजीले चुनाव हारे तापनि अधिराज्यभरिका २०५ निर्वाचन क्षेत्रहरूमध्ये नेपाली काङ्ग्रेसले ११२ निर्वाचन क्षेत्रहरूबाट प्रतिनिधिसभाका लागि आफ्ना उमेदवारहरू सफल गराएर सजिलै बहुमत प्राप्त गरेको थियो । उपत्यका भित्रका केवल २ क्षेत्रहरूबाट मात्र नेपाली काङ्ग्रेसले जितेको थियो । नेपाली काङ्ग्रेसका तत्कालीन महामन्त्री श्रीगरिजाप्रसाद कोइरालाले तराईका दुई क्षेत्रहरूबाट निर्वाचन जित्नुभएको थियो ।

त्यसरी प्रतिनिधिसभाको निर्वाचन सम्पन्न भएपछि श्रीगिरिजाप्रसाद कोइराला नेपाली काङ्ग्रेसको संसदीय दलको नेतामा छानिनुभएको थियो । श्रीगिरिजाप्रसाद कोइरालाको प्रधानमन्त्रित्वमा २०४८ साल जेठ १५ गते प्रजातान्त्रिक सरकारको गठन भएको थियो। गृहमन्त्रीमा श्रीशेरबहादुर देउवा र अर्थमन्त्रीमा श्रीमहेश आचार्य मनोनित हुनुभएको थियो । श्रीशेरबहादुर देउवा गृहमन्त्री भएपछि सुदूर पश्चिमाञ्चल क्षेत्रका कर्मचारीहरूको चुरीफुरी बढेको थियो । खास गरेर गृहमन्त्रालयका सचिव र प्रहरी प्रमुखमा उहाँले आफ्ना मान्छेहरू नै ल्याउनुभएको थियो । श्रीशेरबहादुर देउवाको चरित्र अत्यन्त कमजोर थियो । त्यही कमजोरीको फाइदा उठाएर मोतीलाल बोहरा लगायतका प्रहरीहरूले उहाँबाट धेरै नाजायज फाइदा उठाएका थिए। खानापिना र रङ्गरउसमा अत्यन्त रसिक कमजोर चरित्र भएका देउवाले गृहमन्त्रालयको तत्कालीन प्रशासन प्रहरीको जिम्मा लगाइदिनुभएको थियो । त्यस बेलासम्म अविवाहित रहनु

भएका श्रीशेरबहादुर देउवाको चरित्रका बारेमा त्यस बेलाका सबैलाई थाहा नै भएको हुँदा यहाँ धेरै कुरा उल्लेख गर्नु आवश्यक म देख्तिन। बौद्धिक क्षमता अत्यन्त कमजोर भएका देउवा आफूभन्दा मुनिका सहयोगीहरूलाई  अत्यन्त विश्वास गर्नुहुन्थ्यो। तलबाट जसले जे पेश गरे पनि आँखै चिम्लिएर सही गरिदिने उहाँको बानी भएको कारणले पनि गृहमन्त्रालयमा धेरै गलत निर्णयहरू भएका थिए।

तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाको स्वभाव पनि त्यस्तै खालको सरल भएकोहुँदा गैह्रकानूनी कामहरू गराएर सहायकहरूले नाजायज फाइदा उठाएको चर्चा त्यस बेला चलेको थियो। पञ्चायतकालमा नेपालीहरूलाई क्रिश्चियन धर्ममा धर्मान्तरित गराएको अपराधमा थुनामा परेका विदेशी अपराधीहरू, सुनतस्करहरू, लागूऔषधव्यापार गर्ने अपराधीहरू र खुङ्खार ज्यानमाराहरूसमेतलाई राजनीतिक व्यक्ति भन्दै अन्तरिम कालका प्रधानमन्त्री श्रीकृष्णप्रसाद भट्टराई र तत्कालीन गृहमन्त्री श्रीयोगप्रसाद उपाध्यायसमेत मिलेर उदारताका नाउँमा छोडिएका थिए। त्यस बेला ती अपराधी छोड्दा पनि पैसाको खेल भएको गाईंगुईं सुनिन आएको थियो। त्यसैगरी श्रीगिरिजाप्रसाद कोइराला प्रधानमन्त्री भइसकेपछि बचेखुचेका अपराधीहरू पनि छुटेका थिए। त्यस बेला कति अपराधीहरू त गृहमन्त्रालयलाई थाहासम्म पनि नदिएर प्रधानमन्त्रीका तत्कालीन स्वकीयसचिव श्रीनिशीथ उपाध्यायको सिफारिसमा सोझै मन्त्रिपरिषद्बाट निर्णय भएर छुटेरगएका थिए। तत्कालीन अन्तरिम कालका प्रधानमन्त्रीको र पछि निर्वाचित प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाको समयमा समेत पनि धेरै ठूलाठूला जघन्य अपराधीहरू कारागारबाट छुट्नु नेपालको इतिहासमा एउटा कालो कालखण्ड नै ठहरिने छ।

२०१७ साल पुस १ गते राजा महेन्द्रले प्रजातन्त्रका विरुद्धमा गरेको रक्तविहीन सत्तापलटपछि तीन दशकसम्म कतिपय प्रजातान्त्रिक नेताहरू कारागारभित्र थुनिएका थिए र केही देश बाहिर निर्वासित भएररहेका थिए। त्यसै बीचमा कैयौं प्रजातन्त्रका योद्धाहरू यो संसारबाटै बिदा पनि भएका थिए। ती नेताहरूले ३० बर्षभन्दा पनि लामृ समयसम्म गरेको त्याग, तपस्या र बलिदान २०४६ सालपछि पुनःस्थापित प्रजातन्त्रको शुरुमा

नै शासनमा पुग्ने बित्तिकै अन्तरिम कालमा र आम निर्वाचनपछि पनि जुन प्रकारको नग्न चरित्र प्रदर्शन गरेका थिए त्यसले गर्दा जनताको उनीहरूप्रति भएको श्रद्धा बिस्तारै समाप्त हुन गएको थियो । २०४७ सालदेखि २०५९ सालसम्म प्रजातन्त्रको नाउँमा जे जस्ता अनैतिक तथा आपराधिक कामहरू प्रजातन्त्रवादी लगायतका नेताहरूबाट भए त्यसैको दुष्परिणाम आज हामीहरूले भोगिरहेका छौं ।

२०४८ सालमा भएको आम निर्वाचनपछि सरकारलाई सही बाटो देखाएर अघि बढाउनुपर्नेमा अनुभवविहीन मन्त्रीहरूलाई सम्बन्धित दलकै नेताहरू, कार्यकर्ताहरू र मन्त्रीहरूका सल्लाहकारहरूसमेतले गलत मार्गतर्फ अग्रसर गराएर पथभ्रष्ट बनाएका थिए । एकातर्फ निहितस्वार्थ भएका प्रधानमन्त्री र मन्त्रीका आसेपासे सल्लाहकारहरूले उहाँहरूलाई सही मार्गमा अग्रसर हुन बाधा दिएका थिए अर्कातर्फ त्यस बेलाका प्रमुख विपक्षी दल ने.क.पा. ए.मा.ले.का समर्थक कर्मचारीहरूले विभिन्न मागहरू राखेर अधिराज्यभरिका सरकारी कार्यालयहरूमा काम ठप्प गर्ने अभियान चलाएर सरकारलाई दु:ख दिएका थिए । ए.मा.ले. समर्थक निजामती कर्मचारीहरूको हडतालका अतिरिक्त ए.मा.ले.ले नाना थरीका विरोधका कार्यक्रमहरू सञ्चालन गरेर नवनिर्वाचित नेपाली काङ्ग्रेसको सरकारलाई असफल गराएर त्यस बेला नै नेपालमा प्रजातन्त्रलाई समाप्त पार्ने दुष्प्रयास गरेको थियो । केन्द्रमा गृहमन्त्रालय लगायतका सबै मन्त्रालय र विभागहरूका दैनिक काम कारबाही ठप्प पार्न ए.मा.ले.का समर्थक निजामती कर्मचारीहरूले काम बन्द गराएका थिए । त्यसै सन्दर्भमा गृहमन्त्रालयका ए.मा.ले. समर्थक कर्मचारीहरूले पनि शान्तिसुरक्षाको काममा नै बाधा पर्नेगरी हडताल गरेका थिए । उच्छृङ्खल तथा अनुशासनहीन कर्मचारीहरूले गृहमन्त्रालयका सचिव लगायत माथिल्लो तहका अधिकृतहरूलाई मन्त्रालयभित्र छिर्नै नदिएपछि ती हडताली कर्मचारीहरूलाई गिरफ्तार गरी थुनामा राख्न गृहमन्त्रालयले अप्रिय आदेशसमेत दिनुपरेको थियो । गृहमन्त्रालयले आफ्नै हडताली कर्मचारीहरूलाई थुनेपछि अरू मन्त्रालयहरूमा पनि त्यसको सकारात्मक प्रभाव परेको थियो । त्यसै कारण पहिलो दिन कर्मचारीहरूको हडताल सफल हुन सकेको थिएन ।

गृहमन्त्रालयमा त्यस बेला श्रीरामचन्द्र शर्मा पौडेलजस्ता निष्क्रिय तथा पलायनवादी सचिव भएका हुँदा दिउँसो थुनामा परेका हडताली कर्मचारीहरूलाई तत्कालीन गृहमन्त्री श्रीशेरबहादुर देउवासँग सल्लाह गरेर राती नै उहाँले थुनाबाट छोडिदिनु भएको थियो। त्यसरी थुनामा परेका हडताली कर्मचारीहरू छुटेपछि दोस्रो दिन ती उद्दण्ड कर्मचारीहरूले गृहमन्त्रालयमा पुगेर १० बजेदेखि नै पुनः हडताल शुरु गरेका थिए। म घरबाट १० बजे गृहमन्त्रालयमा पुग्दा आन्दोलनकारी निजामती कर्मचारीहरूले अघिल्लो दिनकोभन्दा अझ व्यापकरूपमा सङ्गठित भएर गृहमन्त्रालयमा नाराबाजीका साथ हडताल गरेका थिए। सरकारको विरोधमा ब्यानर, कालो झण्डा र विभिन्न नाराहरू लेखेका तखता बोकेका ती उच्छृङ्खल कर्मचारीहरूले पाखुरामा कालो पट्टीसमेत बाँधेका थिए। म मन्त्रालयमा पुग्ने बित्तिकै उक्त समूहले मेरा विरुद्धमा पनि उग्र नाराहरू लगाउँदै मेरो विरोध गर्नुका साथै मलाई मन्त्रालयभित्र प्रवेश गर्नसमेतबाट रोक्ने दुष्प्रयास गरेको थियो। तर म तिनको अवरोधलाई पन्छाउँदै मन्त्रालयभित्र पसेको थिएँ। मेरो त्यसरी विरोध गर्नुको कारण अघिल्लो दिन ती आन्दोलनकारी उद्दण्ड कर्मचारीहरूलाई थुनामा राख्न मैले नै अप्रिय आदेश दिएको थिएँ। मेरै कारण थुनामा पर्नुपरेको हुँदा तिनीहरूले मेरो विरोध गरेका थिए। तर तिनीहरूलाई गृहमन्त्री र गृहसचिवले थुनाबाट मलाई एक वचन पनि नसोधी छोडेको कारण नै अर्को दिनको उनीहरूको कार्यक्रम सशक्त र उग्रसमेत भएको थियो।

म आफ्नो कार्यकक्षमा पस्नेबित्तिकै ती सारा हडताली कर्मचारीहरूले मलाई मेरो कार्यकक्षमा नै घेर्न पुगेका थिए। मैले प्रहरी बोलाएर मेरो कार्यकक्षबाट तिनलाई बाहिर निकालेको थिएँ। त्यसपछि ती हडताली कर्मचारीहरूले गृहमन्त्रालयको पिउनको नेतृत्वमा गृहसचिव श्रीरामचन्द्र शर्मा पौडेलको कार्यकक्षमै पसेर हडताली कर्मचारीहरूको नेता भएर गएको पिउनले उहाँको नाकसम्म औँलो पुऱ्याएर विरोध गरेको थियो। नानाथरीका अपशब्दहरू बोल्दै विरोध गरे तापनि अकर्मण्य सचिव श्रीरामचन्द्र शर्मा पौडेलले एक शब्द पनि बोल्न सक्नुभएको थिएन। सचिवको सानो कार्यकक्षमा मन्त्रालयका भएजति आन्दोलनकारी कर्मचारीहरू ठेलमठेल गर्दै पस्नथालेपछि

आत्तिएर उहाँले सहयोगका लागि मलाई बोलाउनुभएको थियो। मैले पनि हडताली कर्मचारीको घेराबाट उहाँलाई उद्धार गर्न तुरुन्तै प्रहरी बोलाएर ती उच्छृङ्ख कर्मचारीहरूलाई थुन्न आदेश दिएको थिएँ। अघिल्लो दिन पनि मैले नै ती हडताली कर्मचारीहरूलाई थुन्न पठाएको थिएँ। त्यसरी हडताली कर्मचारीहरूलाई थुन्ने र छोड्ने काम केही दिन चलेको थियो। ए.मा.ले. समर्थक निजामती कर्मचारीहरूले काठमाडौं लगायत देशका विभिन्न कार्यालयहरूमा हडताल गरेर सरकारलाई असफल गराउने प्रयास गरेपछि तत्कालीन नेपाली काङ्ग्रेको सरकारले पनि केही शोच्नुपर्ने बाध्यता आइपरेको थियो। किनभने निजामती कर्मचारीहरूको हडताललाई समर्थन गर्न संसदको अधिवेशनसमेत छोडेर ए.मा.ले.का सांसदहरू सडकमा निस्किएर जुलुसको नेतृत्व गर्नथालेका थिए। निजामती कर्मचारीहरूको हडतालमा ए.मा.ले.का अरू कार्यकर्ताहरूसमेत मिसिएर आन्दोलनलाई उग्ररूप दिने प्रयास गरेका थिए। हडताल तोड्न खोज्ने कर्मचारीहरूलाई पनि एमालेका नेताहरूले बाध्य पारेर हडताल गर्न लगाएका थिए। राजनीतिकरूपमा एमालेसँग प्रतिबद्ध भएका हडताली कर्मचारीहरू थुनाबाट छोडिएका थिएनन्भने अरू लहैलहैमा लागेका कर्मचारीहरू भने छुटेका थिए।

त्यसरी निजामती कर्मचारीहरूको विरोधको कार्यक्रम लामै समयसम्म जारी नै रहेको थियो। हडताल भइरहे तापनि सरकारी कामकाजभने रोकिएको थिएन। त्यसरी नेपालको प्रशासनिक इतिहासमा दलकै भ्रातृसङ्गठनका रूपमा निजामती कर्मचारीहरू सरकारको विरोधमा उत्रिएको पहिलो घटना थियो। उक्त अनुशासनहीन निजामती कर्मचारीहरूको हडताललाई सरकारले रोक्नु अत्यन्त आवश्यक थियो। त्यस कुरालाई महसूस गरेर तत्कालीन सरकारले सामान्यप्रशासन सचिव श्रीविमलराज बस्नेतको संयोजकत्वमा विभिन्न मन्त्रालयहरूका प्रतिनिधिहरू समावेश भएको एक कार्यदल गठन गरेको थियो। उक्त कार्यदलमा आन्दोलनकारी कर्मचारीहरूका प्रतिनिधिहरूसमेत राखिएका थिए। उक्त कार्यदलमा गृहमन्त्रालयका तर्फबाट सहसचिवको नाताले म खटिएको थिएँ भने अर्थ मन्त्रालयका तर्फबाट सहसचिव श्रीशम्भुशरणप्रसाद कायस्थ खटिनु भएको थियो। त्यसैगरेर कानून तथा न्यायमन्त्रलायका तर्फबाट सहसचिव श्रीसुरेशमान श्रेष्ठ खटिनु भएको थियो।

हडताली कर्मचारीहरूका तर्फबाट गृहमन्त्रालयकै खरिदार श्रीश्यामबाबु दाहाल लगायतका केही तल्लो तहका कर्मचारीहरू समाविष्ट भएका थिए ।

उक्त कार्यदल गठन भएपछि गृहमन्त्रालयको बैठककक्षमा एक महिनासम्म बैठक चलेको थियो । आन्दोलनकारी कर्मचारीहरूले प्रस्तुत गरेका धेरैजसो मागहरू अव्यावहारिक र पूरा गर्न नसकिने देखिएका हुँदा हामी सरकारी प्रतिनिधिहरूले पूरा गर्न सम्भव हुने मागहरूमात्र प्रस्तुत गर्न भनेका थियौँ । एमालेको राजनीतिबाट प्रेरित तथा पूर्वाग्रहपीडित हडताली कर्मचारीका प्रतिनिधिहरूले आफ्ना अव्यावहारिक मागहरू सबै पूरा हुनुपर्छ भन्ने अडान लिएपछि वार्तामा प्रगति हुन नसकी एक महिनासम्म बैठक चलेको थियो । कर्मचारीहरूका ३६ ओटा मागहरू थिए । तीमध्येमा एक नं. बुँदाको मागको सम्बन्धमा छलफल गर्दागर्दै हामीहरूले २६ ओटा बैठक गरेका थियौँ । जति सम्झाए पनि नसम्झिने भएपछि कुनै पनि मागको बारेमा सम्झौता नै हुन नसकी हाम्रो बैठक विनानिर्णय र विनानिष्कर्ष समाप्त हुनगएको थियो । तत्कालीन निजामतीसेवाऐन र नियमावलीका प्रावधान विपरीत काम गर्ने आन्दोलनकारी कर्मचारीहरूलाई कानून बमोजिम कारबाही गर्ने भन्ने सरकारको निर्णय भएपछि हामीहरूले बैठक गरिरहनु आवश्यक पनि देखेनौँ । सरकारको निर्णयपछि अनुशासनहीन केही हडताली कर्मचारीहरू सेवाबाट हटाइएका थिए । केही कर्मचारीहरूको तलब वृद्धि रोक्का भएको थियो र केहीको बढुवा रोक्का भएको थियो । त्यसरी हडताली कर्मचारीहरूको कसूरको मात्रा हेरी सरकारले विभिन्न कारबाही गरेको थियो ।

उपर्युक्त अनुसार निजामती कर्मचारीले सरकारलाई नै असफल गराउने गरी हडताल गरेपछि तत्कालीन नेपाली काङ्ग्रेसको सरकारले आफ्ना समर्थक कर्मचारीहरूको संस्था कर्मचारीसङ्घको स्थापना गरेको थियो । सरकारलाई स्थायीरूपमा सञ्चालन गर्न स्थापित भएको निजामती कर्मचारीको संयन्त्रलाई संसारमा जहाँसुकै पनि स्थायी सरकार भनेर संज्ञा दिइएको पाइन्छ । तर त्यही स्थायी सरकार कुनै दलमा नलागी तटस्थ रहेर काम गर्नु पर्नेमा विभिन्न राजनीतिक दलहरूका पुच्छर भएर भ्रातृसङ्गठनकारूपमा काम गर्नथालेपछि नेपालको निजामती कर्मचारीतन्त्रमा भयङ्कर विकृति आएको थियो । त्यतिमात्रै नभएर त्यसपछि त प्रत्येक राजनीतिक दलका

भ्रातृ तथा भगिनी सङ्गठनहरू भएर कर्मचारीहरू पूर्णरूपमा राजनीतिक कार्यकर्ताका रूपमा परिणत भएका थिए। त्यस बेला जुनसुकै सरकार शक्तिमा गए पनि विभाजित कर्मचारीहरूबाट सरकारले पूर्ण सहयोग प्राप्त गर्नसक्ने अवस्था देखिएको थिएन। त्यस प्रकारको थोत्रो र बिकम्मा कर्मचारीतन्त्रबाट जुनसुकै सरकार सत्तामा आए पनि राष्ट्रसञ्चालन हुनसक्ने देखिँदैनथ्यो। अझ माओवादीको रक्तरञ्जित जनयुद्धबाट क्षतविक्षत भएका राष्ट्रका सम्पूर्ण अङ्गहरूसरह कर्मचारीतन्त्र पनि हाल आएर झन् क्षतविक्षत भइसकेको छ। राष्ट्र नै पङ्गु भइसकेको अवस्थामा कर्मचारीतन्त्रबाट बढी आशा गर्नु विडम्बनामात्रै ठहरिनेछ।

सरकारले २०४८ साल आश्विनमा दशैँको केही दिन अगाडिमात्र निजामतीसेवा नियमावली संशोधन गरेको थियो। उक्त संशोधित नियमावली अनुसार ३० र २० वर्ष सेवाको अवधि पुगेका केही उच्चस्तरीय अधिकृतहरूलाई सेवा अवकाश दिइएको थियो। त्यसकासाथै केही सहसचिवहरूलाई अतिरिक्त सचिव र सचिवमासमेत बढुवा गरेको थियो। त्यसरी बढुवा गर्दा सरकारले राम्रो मूल्याङ्कन नै नगरी गलत सहसचिवहरूलाई पनि बढुवा गरेको थियो भने सेवाबाट अवकाश दिंदा पनि कुनै मूल्याङ्कन नै नगरी माथिल्ला तहका राम्रा तथा सक्षम अधिकृतहरूलाई पनि हचुवाका भरमा पाँडेपजनी गरी सेवाबाट अवकाश दिएको थियो। बढुवाको आशा गरेर बस्नेमध्ये म पनि एक व्यक्ति थिएँ। मभन्दा असमर्थ र अनैतिक व्यक्तिले बढुवा पाएपछि ममा असन्तुष्टि आउनु स्वाभाविकै थियो। मैले तत्कालीन गृहमन्त्री श्रीशेरबहादुर देउवासँग बढुवाको बारेमा आफ्नू विचार व्यक्त गरेको थिएँ। उहाँले पनि बढुवा गर्दा गल्ती नै भएको महसूस गर्नुभएको थियो। त्यसपछि म स्थानीय प्रशासनमहाशाखामा नै यथावत् सरकारले तोकेको काम गर्दैरहेको थिएँ।



# दोस्रोपटक जापानमा

२०४८ साल आश्विन २७ गते जापान सरकारको निमन्त्रणामा नेपाल सरकारका तर्फबाट उच्च प्रशासकको बैठकमा भाग लिन रुपन्देही जिल्लाका तत्कालीन प्र.जि.अ. श्रीखेमराज रेग्मीलाई साथमा लिएर म जापान गएको थिएँ । त्यो मेरो दोस्रो पटकको जापान यात्रा थियो । हामीहरू काठमाडौंबाट २०४८ साल असोज २७ गते तदनुसार सन् १९९१ अक्टोबर १४ तारिखका दिन थाई एयरलाइन्सको जेट चढेर अपराह्ण २ बजे ब्याङ्ककतर्फ प्रस्थान गरेका थियौँ । ब्याङ्ककमा साँझपख पुगेर हामीहरूले जापान जाने हवाइजहाजका लागि केही घण्टा एयरपोर्टको टर्मिनलभित्र नै प्रतीक्षा गरेर बिताएका थियौँ । त्यहाँबाट मध्यरातमा जापानी एयरलाइन्सको बोइङ्ग जेट चढेर हामीहरूले जापानको नारिता एयरपोर्टतर्फ प्रस्थान गरेका थियौँ । अर्को दिन बिहान सात बजे जापानको नारिता एयरपोर्टमा जहाजबाट उत्रिएपछि त्यहाँ हाम्रो स्वागत गर्न जापानी मित्रहरू आएका थिए । हामीहरू त्यहाँबाट जापानी मित्रहरूका साथ टोकियो पुगेर त्यहाँको प्रसिद्ध आकासाका प्रिन्स होटेलमा बसेका थियौँ ।

विश्वका विभिन्न राष्ट्रबाट सहभागीका रूपमा त्यहाँ पुगेका उच्च प्रशासकहरूलाई त्यसै पाँचतारे होटेलमा बस्ने व्यवस्था जापान सरकारले गरेको थियो । जापान सरकारको गृहमन्त्रालयले आयोजना गरेको प्रशासकहरूको उच्चस्तरीय सम्मेलनको अत्यन्त भव्यताका साथ अक्टोबर १६ तारिखका दिन जापानका गृहमन्त्रीले सोही होटेलको भव्य सभाकक्षमा उद्घाटन गर्नु भएको थियो । उद्घाटन कार्यक्रम समाप्त भएपछि हाम्रो ३ दिने बैठक त्यसै होटेलको सभाकक्षमा सञ्चालन भएको थियो । सहभागीहरूका बीचमा अत्यन्त सौहार्दताका साथ छलफल हुनुका साथै अन्त्यमा







टोकियोको आकाशाकाप्रिन्सहोटलमा आयोजित उच्च प्रशासकहरूको बैठकमा वक्तव्य दिँदै, लेखक

निर्णयसमेत गरेर सभा विसर्जन भएको थियो । बैठकमा भारत, भुटान, फिजी, मङ्गोलिया र अरू विभिन्न देशका सहभागीहरूले आ–आफ्नू देशको



जापानीगृहमन्त्रीका साथ लेखक र सहभागिहरू


उच्चप्रशासकको बैठकमा छलफल गर्दै लेखक ।

प्रशासनिक संरचना र समस्याका सम्बन्धमा पनि प्रकाश पारेका थिए । उक्त बैठकमा नेपालको प्रशासनका सम्बन्धमा मैले बोलेको थिएँ । मेरो वक्तव्यमा नेपालको प्रशासनिक इतिहासका साथै तत्कालीन प्रशासनिक संरचना र त्यसमा देखिएका कमीकमजोरीहरूका बारेमा पनि मैले अत्यन्त समीक्षात्मकरूपमा प्रकाश पारेको थिएँ । त्यसका अतिरिक्त नेपालमा त्यस समयमा देखापरेको भुटानी शरणार्थीहरूको कारण उत्पन्न प्रशासनिक समस्याका बारेमा पनि मैले बोलेको थिएँ । बैठकको अन्त्यमा जापानी गृहमन्त्रीका तर्फबाट दिइएको रात्रीभोजपछि उक्त भेला समाप्त भएको थियो ।



उच्च प्रशासकहरूको बैठकको समाप्तिका अवसरमा लिइएको

त्यसपछि हामीहरूलाई जापान सरकारले जापानका विभिन्न दर्शनीय स्थल र बौद्धमन्दिरहरूसमेतको भ्रमण गराएको थियो । हामीहरू जापानको प्रसिद्ध बुलेट ट्रेनमा चढेर जापानको उत्तरी भागमा पर्ने सान्दाई शहरको भ्रमण गर्नगएका थियौँ । हामीहरू सान्दाईमा पुगेपछि


टोकियोमा रहेको बौद्ध मन्दिरमा खेमराज रेग्मीका साथ लेखक


जापानको उत्तरमा पर्ने सान्दाई नगरले आयोजना गरेको स्वागतसमारोहमा सहभागिहरूका साथ लेखक

त्यहाँको नगरपालिकाले हाम्रो भव्यरूपमा स्वागत गर्नुका साथै विशेष प्रकारको जापानी खाना र साँस्कृतिक कार्यक्रमको समेत व्यवस्था गरेको थियो ।

त्यसरी नगरपालिकाको कार्यक्रम समाप्त भएपछि हामीहरूलाई त्यहाँको एउटा भव्य होटेलमा लगेर राखिएको थियो । अर्को दिन हामीहरूलाई होकाइडो नजिकै पर्ने ग्रामीण क्षेत्रको भ्रमण गराइएको थियो भने जापानको उत्तरी समुद्रमा हामीहरूलाई पानीजहाजमा चढाएर घुमाइएको पनि थियो । त्यहाँको ग्रामीण क्षेत्र अत्यन्त स्वच्छ र सम्पन्न हुनुका साथै जापानी गाउँमा बस्ने नागरिकहरू अत्यन्त अनुशासित र अतिथिसत्कारमा दत्तचित्त भएका मैले पाएको थिएँ । त्यहाँ हरियालीयुक्त वातावरण थियो र चारैतिर बगैँचाहरूमा रङ्गीविरङ्गी फूलहरू फुलिरहेका थिए । सो क्षेत्र मलाई अत्यन्त मन परेको थियो ।

त्यसरी सान्दाई क्षेत्रको छोटो र रमाइलो भ्रमण समाप्त गरेर हामीहरू फेरि टोकियोको आकासाका प्रिन्स होटेलमा नै फर्किएका थियौँ । अर्को दिन हामीहरूलाई त्यहाँबाट जापानी मित्रहरूले बिदा गरेर नेपाल प्रस्थान गर्नका लागि नारिता एयरपोर्टतर्फ लगेका थिए । सो दिन राती हामीहरूले नारिता एयरपोर्ट भित्र रहेको होटेलमा बसेर रात बिताएका थियौँ । अर्को दिन सबेरै हामीहरू नारिता एयरपोर्टबाट जापानी एयरलाइन्सको जम्बोजेट चढेर हङ्कङतर्फ प्रस्थान गरेका थियौँ । हङ्कङ पुगेर दुई दिन चुङ्किङम्यान्सन भन्ने ठाउँमा बसेर त्यहाँबाट हामीहरू ब्याङ्कक गएका थियौँ । ब्याङ्ककमा मैले मेरो स्वास्थ्योपचार गराउनु पर्ने थियो । ब्याङ्ककमा गोल्डेन हर्सहोटेलमा दुई रात बसेर मैले आफ्नू स्वास्थ्यपरीक्षण गराएको थिएँ । त्यहाँका दर्शनीय स्थानहरूमा घुम्नुका साथै केही सामानहरू किनमेलसमेत गरेर हामीहरू २०४८ साल कार्तिक १३ गते तदनुसार सन् १९९१ अक्टोबर ३० तारिखका दिन थाईएयरलाइन्सको जेट चढेर काठमाडौँ फर्किएका थियौँ ।

त्यसरी मेरो जापानको दोस्रो पटकको भ्रमण पनि अत्यन्त सौहार्दका साथ सम्पन्न भएको थियो । नेपालमा त्यस बेला निर्वाचनबाट बहुमत प्राप्त गरी सरकार बनाउन सफल भएको नेपाली काङ्ग्रेसको सरकारले खास राम्रो काम गर्नसकेको थिएन । उक्त सरकारले पञ्चायती कालका कर्मचारीहरू र पञ्चायत कालमा बनेका कानूनले नै काम चलाउनु परेको थियो । पञ्चायत कालमा

सिर्जना भएको अञ्चलाधीशको सशक्त प्रशासनिक निकायलाई खारेज गरेर तत्कालीन सरकारले ठूलो गल्ती गरेको थियो। अञ्चलप्रशासनको अभावमा केन्द्र र जिल्लाका बीचमा सोझै सम्बन्ध राख्नुपर्ने भएकोहुँदा सम्पर्क गर्न अत्यन्त कठिनाइ उत्पन्न भएको थियो। अञ्चलप्रशासनको निकाय सरकारले खारेज गरेपछि जिल्लाहरूमा रहेका सम्पूर्ण प्र.जि.अ.हरूले प्रहरीका क्षेत्रीय अधिकृत र अञ्चल अधिकृतहरूका निर्देशनमा चल्नु परेको थियो। अञ्चल वा क्षेत्रमा कुनै पनि प्रशासनिक समस्या आएमा सल्लाह र निर्देशन दिने उपयुक्त निकायको अभावमा समन्वयको खाँचो भएर गृहप्रशासन बिस्तारै बिस्तारै पङ्गु हुँदै गएको थियो। २०५२ साल फागुनदेखि माओवादीको जनयुद्ध शुरु भएपछि सो बिस्तारै नेपाल अधिराज्यभरि नै फैलिँदै गएको थियो। माओवादीको जनयुद्ध क्रमैसँग झन् उग्ररूपमा बढ्दैगएपछि नेपाली सेनासमेत बिकम्मा ठहरिएको थियो। त्यसैको परिणामस्वरूप २०६२ सालको मङ्सिर महिनामा संसदवादी ७ दल र माओवादीका बीचमा १२ बुँदे सम्झौता भएर राजाको शासन र अस्तित्वसमेत समाप्त भएको थियो। २०४८ सालमा नेपाली काङ्ग्रेसको सरकारले कुनै बिचारै नगरी संस्थापित अञ्चलप्रशासनलाई खारेज गरेको र क्षेत्रीय र जिल्ला प्रशासनसमेत निष्क्रिय र पङ्गु बनाउँदैलगेको हुनाले पनि त्यस प्रकारको असहज परिस्थिति उत्पन्न हुनगएको थियो। यदि सरकारले प्रशासनिक संरचनालाई पुनर्विचार गरी सशक्त नबनाएमा यसप्रकारको प्रशासनिक रिक्तता भविष्यमा पनि रहिरहने सम्भावना देखिन्छ।

२०४८ साल फागुनमा म प्रहरीका केही अधिकृतहरूलाई लिएर बाग्लुङ जिल्लामा घटेको ज्यानसम्बन्धी विषयमा गृहमन्त्रालयबाट छानविन गर्न त्यसतर्फ गएको थिएँ। २०४८ सालकै अन्त्यतिर भुटानबाट नेपाली मूलका शरणार्थीहरू नेपालको पूर्वी जिल्ला झापामा आउनथालेका थिए। तिनलाई आवास र खानापिनाको समेत व्यवस्था मिलाउने काममा नेपाल सरकारको तर्फबाट मलाई खटाइएको थियो। मैले राष्ट्रसङ्घीय शरणार्थीसम्बन्धी आयोगसँग लेखापढी गरेर झापा जिल्लाका विभिन्न स्थानहरूमा र मोरङ जिल्लाको कानेपोखरीमासमेत शरणार्थीहरूको अस्थायी बसोवासको व्यवस्था मिलाएको थिएँ। भुटानी शरणार्थीहरूको आउने क्रम रोकिएको थिएन र शिविर बारम्बार थप्नुपरिरहेको थियो।

२०४९ साल असोजमा थाईल्याण्डबाट काठमाडौं आएको विमान नुवाकोट जिल्लाको घोप्टेभीर भन्ने ठाउँमा दुर्घटनाग्रस्त भएर विमानमा चढेका सबै यात्रीहरूको मृत्यु भएको थियो। उक्त दुर्घटनामा परेका यात्रुहरूका शवहरूको उद्धार गर्दागर्दै त्यसै बेला नै पाकिस्तानबाट काठमाडौं आएको अर्को पाकिस्तानी विमान पनि ललितपुर जिल्लाको भट्टेडाँडामा दुर्घटनामा परेको थियो। उक्त विमानमा चढेका सबै यात्रीहरूको पनि मृत्यु भएको थियो। ती दुवै दुर्घटनामा परेका यात्रीहरूका शवहरूको उद्धार गर्ने काममा गृहमन्त्रालयका तर्फबाट म खटिएको थिएँ। ती दुवै जहाजहरूका दुर्घटनामा परेका स्वदेशी र विदेशी नागरिकहरूका परिवारजनहरूको चित्त बुझाउन अत्यन्त मुश्किल परेको थियो। ती दुवै जहाजको दुर्घटना हुँदा आगो लागेको हुनाले दुवै जहाजका यात्रीहरूका शवहरू डढेका थिए। लाश फेला परे पनि डढेर र क्षतविक्षत भएर चिन्नैनसकिने भएका हुँदा तिनीहरूका आफन्त र परिवारजनलाई लाश चिनेर बुझाउन अत्यन्त कठिनाइ उत्पन्न भएको थियो। मृतक यात्रुहरूका शोकसन्तप्त परिवार र आफन्तहरू अत्यन्त निराश र आक्रोशितसमेत भएका थिए। उनीहरूलाई उनका आफन्तहरूका लाशहरू बुझाउन र तार्किकरूपमा उनीहरूको चित्तबुझाउन मैले अत्यन्त संयमताका साथ व्यवहार गरेको थिएँ। त्यसरी उद्धारको काम गर्दागर्दै २०४९ सालको बडादशैं पनि समाप्त भएको थियो।

मातापिताको देहान्त भएको स्थान सुनसरी जिल्लाको इनरुवाको घरमा गएर श्रीमद्भागवतमहापुराणको पारायण गराउने विचार गरेर बडादशैंपछि म परिवारसहित इनरुवा जान तयार भएको थिएँ। जुन कुरा २०५१ सालमा गएर सम्पन्न भएको थियो। त्यस बारेमा माथि उल्लेख भइसकेको छ। त्यसै बेला अर्थात् २०४९ साल कार्तिक २१ गतेका दिन तत्कालीन निजामती सेवानियमावली संशोधन गरेर ३० वर्ष सेवा अवधि पुगेका धेरै निजामती कर्मचारीहरूलाई सरकारले अवकाश दिएको थियो। त्यसो गर्दा सरकारका मुख्यसचिव लगायत विशिष्ट श्रेणीका धेरै सचिवहरूले अवकाश पाउनुभएको थियो। त्यसरी अवकाश पाएर रिक्त रहेका विशिष्टश्रेणीका पदहरूमा १३ जना ५ वर्ष सहसचिवको पदावधि पुगेका व्यक्तिहरूलाई विभिन्न मन्त्रालयहरूमा कायममुकायम सचिव दिएर सरकारले नियुक्ति गरेको थियो। त्यसपछि ३० वर्षको सेवा अवधि पुगेर अवकाश पाएका केही सहसचिवहरू र विशिष्ट श्रेणीस्तरका केही व्यक्तिहरूलाई

पनि २ वर्ष करार सेवामा सरकारले विशिष्ट श्रेणीको पदमा नियुक्त गरेको थियो। २ वर्ष करारमा नियुक्त हुनेहरूमा मुख्यसचिवसमेत पर्नुभएको थियो। मुख्य सचिवजस्तो गरिमामय पदमा ३० वर्ष सेवा अवधि पुगी अवकाश पाएका श्रीमधुसूदन गोरखालीलाई नियुक्त गरिएको थियो।

त्यसरी तत्कालीन सरकारले कर्मचारीतन्त्रमा हँचुवाको भरमा पाँडेपँजनी गरेर विशिष्टश्रेणीको सचिव पदमा र मुख्यसचिवजस्तो गरिमामय पदमा पनि करारमा नियुक्ति गरेर पदको अवमूल्यन गरेको थियो। मलाई मेरो दुई दशकभन्दा बढीको गृहमन्त्रालयको अनुभवलाई र त्यहाँ गरेको विशिष्ट प्रकारको सेवालाईसमेत सरकारले कुनै मूल्याङ्कन नै नगरी कायममुकायम सचिवमा नियुक्त गरेर भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा पठाएको थियो। सेवाको शुरुदेखि नै गृहमन्त्रालयको कत्ति पनि अनुभव नभएका व्यक्तिलाई आफ्नू साइनुपर्नेहुँदा तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाले गृहमन्त्रालयको कायममुकायम सचिवमा पठाउनुभएको थियो।

मैले २०२२ साल माघ महिनामा पञ्चायतकालको शुरुमा नै शाखाअधिकृतको पदबाट सरकारी सेवामा प्रवेश गरेर विभिन्न मन्त्रालय र कार्यालयहरूमासमेत काम गर्दैआएको थिएँ। मैले कुन परिस्थितिमा कसरी सरकारी सेवामा प्रवेश गरेर काम गरेको थिएँ भन्ने सम्बन्धमा यसप्रकरणको शुरुमा नै उल्लेख गरिसकेको छु। शाखाअधिकृत पदबाटै आफ्नू जागिरे जीवन शुरुगरेको भए तापनि २०४६ सालको जनआन्दोलनबाट पञ्चायती व्यवस्था नहटेको भए म सहसचिवभन्दा माथि पुग्ने सम्भावना नै थिएन। तत्कालीन परिवर्तित अवस्थामा आफ्नू अस्तित्व र परिवारको संरक्षणका लागि नै सरकारी सेवामा म प्रवेश गरेको थिएँ। २०४६ सालको जनआन्दोलनबाट पञ्चायती व्यवस्थाको अन्त्य भएर प्रजातन्त्रको पुनर्बहाली भएपछि मेरो बढुवा हुने सम्भावनाको पहिलो ढोका खुलेको थियो भने २०४९ साल कार्तिक २१ गते भएको निजामतीसेवा नियमावलीको संशोधनबाट सरकारको विशिष्ट श्रेणीको सचिव पदमा बढुवा हुने मेरो दोस्रो ढोका पनि खुलेको थियो।


लेखक



# भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा

२०४९ साल कार्तिक २१ गतेको सरकारको निर्णय अनुसार भूमिसुधार तथा व्यवस्था मन्त्रालयको कायममुकायम सचिवमा म नियुक्त भएको थिएँ । मभन्दा माथिका तत्कालीन वरिष्ठ सहसचिव र सचिवहरू निजामती सेवानियमावलीको संशोधनबाट धेरैजसोले अवकाश प्राप्त गरेर सेवाबाट हटेपछिमात्रै मैले बढुवा पाएको थिएँ । ती अग्रजहरूले काम गर्ने उमेर र जाँगर छँदाछँदै अवकाश पाएका हुँदा मेरो चित्त दुःखेको थियो । उनीहरू मभन्दा धेरै दक्ष र योग्य पनि थिए । त्यसै कारण म अरूभन्दा अत्यन्त योग्य भएर विशिष्टश्रेणीको सचिव पदमा पुग्न सफल भएको नभई मौका र परिस्थितिले गर्दा पुगेको थिएँ

सचिवमा बढुवा भएकोमा हर्ष र जीवनमा कहिल्यै पनि अनुभव नै नगरेको भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा जानुपर्दा मलाई विषाद लागेको थियो । दुईदशकभन्दा बढी अवधि गृहमन्त्रालय र अन्तर्गतका विभिन्न महत्त्वपूर्ण निकायहरूमा बसेर काम गरेको मलाई अनुभव नभएको मन्त्रालयमा पठाएर गृहमन्त्रालयमा भने गृहको कत्ति पनि अनुभव नभएको आफ्नू नाता पर्ने व्यक्तिलाई गृहमन्त्रालयको सचिव बनाएर प्रधानमन्त्रीले पाँडेपजनी गर्नुभएको थियो । तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइराला आफ्नू विवेक र बुद्धिबाट काम नगरी आफ्ना स्वार्थी परिवार र सल्लाहकारहरूका सल्लाहमा काम गर्नुहुन्थ्यो भन्ने कुरा उहाँको उक्त निर्णयबाटै थाहा भइसकेको थियो । त्यसबाट श्रीगिरिजाप्रसाद कोइरालाको सरकारले गर्ने भावी क्रियाकलापहरूको पनि सङ्केत पाइएको थियो ।

त्यसरी मैले नचाहेको स्रेस्ता केलाउनुपर्ने मन्त्रालयमा मलाई कायममुकायम सचिव बनाएर पठाउने गरी सरकारले बढुवा तथा सरुवा गरेपछि मेरो अरू केही पनि उपाय नभएको हुँदा २०४९ साल कार्तिक २२ गते भूमिसुधार तथा

व्यवस्थामन्त्रालयमा हाजिर हुन म गएको थिएँ। भूमिसुधार तथा व्यवस्थामन्त्रालयका तत्कालीन सचिव श्रीसूर्यनाथ उपाध्याय सुवेदी लगायतका धेरै अधिकृतहरू परिवर्तित कानूनी प्रावधान अनुसार अवकाश पाएर घर बसिसकेका थिए।

मन्त्रालयमा हाजिर हुन जानुभन्दा पहिले तत्कालीन भूमिसुधार तथा व्यवस्थामन्त्री श्रीजगन्नाथ आचार्यसँग भेटघाट गरेर चिनाजान गर्नु उपयुक्त हुने ठानेर गृहमन्त्रालयकै तत्कालीन उपसचिव श्रीतुलसीप्रसाद भट्टराईलाई साथमा लिएर मन्त्रिनिवास पुलचोकमा म गएको थिएँ। म मन्त्रिनिवासमा पुग्दा मन्त्रीको बैठकमा मन्त्रीलाई भेट्न गएका थुप्रै मानिसहरूका बीचमा घेरिएर मन्त्री श्रीजगन्नाथ आचार्य बस्नु भएको रहेछ। मन्त्रीसँगको पहिलो भेट भएको हुँदा त्यही बैठकमा म पनि पसेर मन्त्रीलाई गर्नुपर्ने शिष्टाचारका साथै आफ्नू परिचय पनि मैले दिएको थिएँ। भेटघाट गर्न गएका अरू व्यक्तिहरूबाट घेरिएर बसेका मन्त्रीले मेरो उपस्थितिलाई वास्तै नगरेर अरूहरूसँगै कुराकानी गरेर धेरै समय बिताउनु भएको थियो। धेरै बेरपछि मन्त्रीले श्रीतुलसीप्रसाद भट्टराईतर्फ फर्किएर मेरो परिचय सोध्नुभएको थियो। श्रीतुलसीप्रसाद भट्टराईले मेरो बारेमा सबै कुरा बताइसकेपछि प्रथम भेटमा नै मेरो तेजोवध गर्ने दृष्टिकोणले उपेक्षापूर्ण व्यवहार उहाँले मसँग गर्नु भएको थियो।

त्यसप्रकारको व्यवहार पुराना सामन्ती शोषकहरूले सामान्य मानिसहरूसँग गर्नेगर्दथे। उहाँको भनाइ अनुसार उहाँले भूमिसुधार तथा व्यवस्थामन्त्रालयको सचिवका लागि श्रीभोलानाथ चालिसे अथवा भूमिसुधार तथा व्यवस्थामन्त्रालयकै तत्कालीन सहसचिव श्रीहेममेहर श्रेष्ठलाई सिफारिस गर्नुभएको रहेछ। तर तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाबाट मेरो नाम प्रस्तावित भएपछि मन्त्री श्रीजगन्नाथ आचार्यको इच्छा नहुँदा नहुँदै पनि म भूमिसुधार तथा व्यवस्थामन्त्रालयमा सचिव हुन पुगेको कुरा उहाँले व्यक्त गर्नुभएको थियो। उहाँसँग बिदा भएर हिंड्ने बेलामा उहाँले ‘म खरो स्वभाव भएको क्रान्तिकारी नेता भएको र तपाईं पनि खरो स्वभावको पुरानू क्रान्तिकारी विद्यार्थीको पृष्ठभूमि भएको व्यक्ति भएको हुँदा मसँग काम गर्दा होस गरेर गर्नुहोला’ भनेर मलाई सचेत गराएर बिदा गर्नुभएको थियो। मैले पनि हिंड्ने

बेलामा 'मन्त्रीजीलाई राम्ररी नै चिनेको छु र हुनेसम्म होस पुऱ्याएर नै काम गर्नेछु' भनेर जबाफ दिएको थिएँ ।

त्यसरी पहिलो भेटमा नै मन्त्री श्रीजगन्नाथ आचार्यले मसँग गरेको उपेक्षापूर्ण व्यवहारबाट उहाँसँग भविष्यमा कस्तो व्यवहार गर्ने हो ? भन्ने सम्बन्धमा शोच्न म बाध्य भएको थिएँ । मैले भर्सक मन्त्रीको भनाइलाई सहज तथा सामान्यरूपमा नै लिने प्रयास गरेको थिएँ । प्रथम भेटघाटमा नै मन्त्रीले मसँग गरेको नकारात्मक व्यवहारले हामी दुई जनाका बीचमा त्यसको नराम्रो प्रभाव पछिसम्म नै पर्नगएको थियो । त्यसबाट श्रीजगन्नाथ आचार्यलाई त ठूलो क्षति भयो भने मलाई पनि त्यसको प्रभाव सरकारी सेवामा रहुन्जेल नकारात्मकरूपमा नै पर्नगएको थियो । अर्को दिन म भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा हाजिर भएको थिएँ । त्यस बेला उक्त मन्त्रालय श्री ३ जुद्ध शंशेरले आफ्नू मनोरञ्जनका लागि बनाएको पुतलीबगैंचामा पछि निर्माण गरेका टहराहरूमा बसेको थियो । म हाजिर हुन गएकै दिन त्यस मन्त्रालयको भौतिक अवस्था देखेर मलाई अत्यन्त विरक्त लागेको थियो । त्यस दिन मन्त्री श्रीजगन्नाथ आचार्य मन्त्रालयमा आइसक्नु भएको थिएन । त्यसै कारण म सहायकमन्त्री श्रीसिद्धराज ओझालाई भेट्न उहाँको कार्यकक्षमा गएको थिएँ । म विद्यार्थीनेता हुँदा मेरा अनुयायी भएर हिंडेका श्रीसिद्धराज ओझा बौद्धिक तथा शैक्षिक दृष्टिकोणले अत्यन्त कमजोर हुनुहुन्थ्यो । म उहाँको कार्यकक्षमा उहाँलाई भेट्न जाँदा उहाँले उठेर मेरो अभिवादन र स्वागत गर्नु भएको थियो । सहायक मन्त्रीको कार्यकक्ष अत्यन्त सामान्य थियो । उक्त मन्त्रालय सानू थियो र कर्मचारीहरूको दरबन्दी पनि अत्यन्त कम थियो । उक्त मन्त्रालय अन्तर्गत मालपोतविभाग, भूमिसुधारविभाग र नापीविभागसमेत थिए । मन्त्रालयमा एकजना सहसचिवको दरबन्दी थियो । त्यस पदमा मैले माथि नाम उल्लेख गरिसकेका श्रीहेममेहर श्रेष्ठ काम गर्दथे । उनकी श्रीमतीको पहिले नै देहान्त भइसकेको थियो । उनले नाबालख छोराछोरीहरूलाई आफैंले लालनपालन र रेखदेखसमेत गर्नुपरेको हुँदा उनी अत्यन्त दुःखी र तनावग्रस्तसमेत देखिन्थे । जेसुकै भए तापनि शिष्ट तथा शान्त खालका व्यक्ति भएका हुँदा उनी मन्त्रालयको काममा यथाशक्य इमान्दार देखिन्थे । उपसचिव हुँदासम्म अर्थमन्त्रालय अन्तर्गतका कर, भन्सार

र अन्तःशुल्क लगायतका विभिन्न कार्यालयहरूमा बसेर उनी सुविधाभोगी भइसकेका व्यक्ति थिए । त्यसै कारण उनलाई त्यस मन्त्रालयमा बसेर काम गर्ने कुनै खालको पनि आकर्षण नभएको देखिन्थ्यो ।

मालपोतविभागको महानिर्देशक पदमा द्वितीय श्रेणीको अधिकृत श्रीमुकुन्दप्रसाद आचार्यलाई मन्त्री श्रीजगन्नाथ आचार्यले कायममुकायम दिएर काम लगाउनुभएको रहेछ। त्यसै कारण उनी मन्त्रीप्रति अत्यन्त कृतज्ञ देखिन्थे र मन्त्रीको वरिपरि सधैँ मडारिइरहने गर्दथे । अत्यन्त चाप्लुस, कुरौटे र आर्थिक विषयमा अत्यन्त कमजोर चरित्रका व्यक्ति भएकाले उनको व्यवहार मसँग अत्यन्त नाटकीय र बनावटी भएको मैले महसूस गरेको थिएँ । भूमिसुधारविभागमा त्यसै विभागका द्वितीय श्रेणीका अधिकृत श्रीशम्भु श्रेष्ठलाई कायममुकायम महानिर्देशक दिएर श्रीजगन्नाथ आचार्यले काम लगाउनुभएको रहेछ । उनी पनि मन्त्रीका कृपापात्र व्यक्ति भएका हुँदा कसैले छोइसक्ना थिएनन्। श्रीशम्भु श्रेष्ठ भूमिसम्बन्धी कुराका ज्ञाता र त्यसैबाट अकुत सम्पत्ति कमाएर नवधनाढ्य भएका व्यक्ति रहेछन्। नापीविभागको महानिर्देशकमा श्रीरामनरेश सिंह नियुक्त भएका रहेछन्। उनलाई पनि श्रीजगन्नाथ आचार्यको निगाहबाट महानिर्देशक भएको भन्ने विश्वास पारिएको रहेछ । त्यसै कारण मन्त्रीको इच्छा विपरीत कुनै पनि काम गर्न सक्ने हिम्मत उनमा पनि थिएन। एक प्रकारले भूमिसुधार तथा व्यवस्था मन्त्रालय र अन्तर्गतका विभागहरूका कर्मचारीहरू मन्त्री आचार्यका जिमिन्दारीका कारिन्दाहरूजस्तै देखिन्थे । मन्त्रीको शुभाशीर्वाद प्राप्त गरेका ती कर्मचारीहरूले जे गरे पनि हुने पञ्चै खतबाट माफै पाएर बसेका जस्ता देखिन्थे। केही दिनको सामान्य अध्ययनपछि मैले भूमिसुधार मन्त्रालयको वास्तविक स्वरूप उपर्युक्त अनुसारको देखेको थिएँ ।

म त्यस मन्त्रालयमा हाजिर हुन जानुभन्दा अगाडिसम्म मन्त्रालय र अन्तर्गतका माथिदेखि तल्लो तहसम्मका सबै कर्मचारीहरूलाई मन्त्री श्रीजगन्नाथ डर, त्रास र आशासमेत देखाएर आफ्नू वशमा पारेर आफ्ना इशारामा नचाउन सफल हुनुभएको रहेछ । त्यतिमात्र नभएर मन्त्रीले मन्त्रालय अन्तर्गतका विभाग र कार्यालयहरूमासमेत अनियमित काम नहओस् भनेर बाहिरी देखौवारूपमा मनिटरिङ्ग सेल खडा गरेर निरीक्षण र नियन्त्रणसमेत गर्ने

व्यवस्था मिलाउनु भएको रहेछ। आफ्नू निजी सचिवमा भर्ना गरिएका आफ्नै छोरीज्वाईं श्रीरामप्रसाद भण्डारीलाई उक्त मनिटरिङ्ग सेलको सर्वेसर्वा बनाएर मन्त्रीले राख्नुभएको रहेछ। उक्त सेलमा भूमिसुधार तथा व्यवस्था मन्त्रालयका उपसचिव श्रीयोरजङ्ग कार्की, नापी अधिकृत श्रीकृष्णप्रसाद अधिकारी र मन्त्रालयका केही कर्मचारीहरूसमेतलाई समावेश गरिएको रहेछ। ती सबै व्यक्तिहरू मन्त्री श्रीजगन्नाथका भित्रिया, विश्वासपात्र र जे जस्तो काम गर्न पनि तयार रहने खुङ्खार भ्रष्ट व्यक्तिहरू रहेछन्। तिनीहरूले मन्त्रालयका तत्कालीन सचिव र सहसचिव लगायतका सम्पूर्ण राष्ट्रसेवकका साथै विभागहरूका महानिर्देशकहरूलाई पनि तर्साएर आफ्नू इशारामा नाच्ने बनाएका रहेछन्। आफूले भनेको गैरकानूनी कुरा नमान्ने भूमिसुधार तथा व्यवस्थामन्त्रालय अन्तर्गतका धेरै राष्ट्रसेवकहरूलाई तत्कालै ३० वर्षे सेवाको हद लगाएर सेवाबाट हटाउन मन्त्री श्रीजगन्नाथ सफल हुनुभएको रहेछ। सोही त्रासले गर्दा मन्त्री र मन्त्रीका आसेपासेहरूले दिएको गैरकानूनी आदेश विरुद्ध कुनै पनि कर्मचारी बोल्न नसक्नेभएका रहेछन्। त्यही मौका छोपेर उक्त तथाकथित मनिटरिङ्ग सेलले अत्यन्त फाइदा उठाएको रहेछ।

मन्त्री श्रीजगन्नाथ मुखले नैतिकता र भ्रष्टाचार निवारणको कुरा गर्ने तर भित्रीरूपमा तिनै मनिटरिङ्ग सेलका खुङ्खार भ्रष्ट व्यक्तिहरूलाई विभाग र कार्यालयहरूमा पठाएर सरकारी तथा सार्वजनिक जग्गा आफू र आफ्ना परिवारजनका नाउँमा दर्ता गराउनुका साथै मोटो रकम पनि कर्मचारीहरूबाट असूल गर्ने गर्दारहेछन्। उपर्युक्त अनुसारको वातावरण भएको अवसरमा म भूमिसुधार तथा व्यवस्थामन्त्रालयमा सचिव भएर पुगेको थिएँ। उक्त मन्त्रालयमा जग्गाजमीनको स्रेस्ता केलाउनु पर्ने हुँदा काम गर्न अत्यन्त अप्ठ्यारो खालको मन्त्रालय थियो। मेरो शुरुदेखिको जागिरे जीवन रक्षामन्त्रालयमा र गृहमन्त्रालय जस्तो प्रशासनिक काम गर्नु पर्ने मन्त्रालयमा बितेको हुँदा मुद्दा र जग्गाजमीन सम्बन्धी कामकुरामा मेरो अनुभव र दक्षतासमेत थिएन। शुरुशुरुमा गलत फाइलमा तलका कर्मचारीहरूले फसाउँछन् कि भनेर म अत्यन्तै सतर्क भएर काम गर्नेगर्दथेँ। बिस्तारै काम सिक्तै गएँ र मन्त्री, मन्त्रीका व्यक्तिहरू र मन्त्रालयसमेतका कर्मचारीहरूको बारेमासमेत म अध्ययन गर्दै रहेको थिएँ।



# तेस्रोपटक जापानमा

भूमिसुधार तथा व्यवस्थामन्त्रालयमा सचिव भएर काम गर्न थालेपछि त्यसै बेला Asia Crime Prevention Foundation को बैठकमा भाग लिन अन्तर्राष्ट्रिय निर्देशकको हैसियतले मैले तेस्रो पटक जापान जानुपरेको थियो । मैले जापानको तेस्रो भ्रमणको सन्दर्भमा २०४९ साल फागुन २० गते तदनुसार सन् १९९२ मार्च ४ तारिखका दिन काठमाडौंबाट थाईएयरलाइन्सको विमानमा चढेर ब्याङ्ककतर्फ प्रस्थान गरेको थिएँ । म उक्त संस्थाको अन्तर्राष्ट्रिय निर्देशकसमेत भएको हुँदा केही दिन पहिले नै जापानको राजधानी टोकियो पुगेर मैले निर्देशकहरूको बैठकमा भाग लिनुपर्नेभएको




जापानको टोकियोमा भएको Asia Crime Prevention Foundation को प्रथम बैठकमा लेखक

थियो । म उक्त संस्थाको संस्थापक निर्देशकहरूमध्येमा पर्दथेँ । टोकियो पुगेर उक्त अन्तर्राष्ट्रिय बैठकमा मैले भाग लिन पाउनु मेरोलागि एउटा गौरवको विषय थियो । मलाई त्यहाँ संस्थाका जापानी पदाधिकारीहरूले अत्यन्त मर्यादाका साथ स्वागत गरेका थिए । मैले पनि उक्त सम्मेलनमा अत्यन्त उत्साहका साथ भाग लिएको थिएँ । उक्त सम्मेलन टोकियोको फुचु भन्ने ठाउँमा भएको थियो ।

२०४६ सालमा पनि युनाफेको तत्त्वावधानमा त्यही फुचु भन्ने ठाउँमा तीन महिना बसेर अपराध नियन्त्रण सम्बन्धमा मैले विशेष अध्ययन गरेको थिएँ । त्यसै कारण त्यो ठाउँमा फेरि पुग्दा मलाई आफ्नै सुपरिचित घरमा

पुगेको जस्तो अनुभव भएको थियो । मलाई त्यहाँ पुराना जापानी मित्रहरूले स्वागत गरेका थिए र पुराना मित्रहरूलाई भेटेर म पनि आनन्दित भएको थिएँ । उक्त सम्मेलनमा विश्वभरिकै प्रतिष्ठित विद्वान्हरूको जमघट थियो । बैठक ठूलो पाँचतारे होटेलमा सञ्चालन भएको थियो । अत्यन्त भव्यताका साथ उद्घाटन समारोहका साथै हाम्रा बैठकहरू पनि सञ्चालित भएका थिए । बैठक समाप्त भएपछि हामीहरूलाई जापानी मित्रहरूले जापानका सुन्दर विभिन्न स्थानहरूमा भ्रमण गराएका थिए । त्यसपटक पनि म टोकियो टावरमा गएको थिएँ । हामीहरूलाई भ्रमण गराउने सिलसिलामा अतामी हाकुने भन्ने सुन्दर पर्यटकीय क्षेत्रमा घुमाउनलगिएको थियो । हामीहरू टोकियोभन्दा बाहिरपट्टि रहेको सुन्दर प्राकृतिक स्थलमा गएका थियौँ । भ्रमणको सिलसिलामा हामीहरूलाई किसानहरूले लगाएका सुन्दर फलफूल बारीहरूमा पनि लगिएको थियो । हामीहरूले बोटमै लटरम्म पाकेका रसिला फलहरू टिपेरखाएका थियौँ । जसमा रसिला स्ट्रबेरीहरू पनि थिए । मलाई अहिलेसम्म तिनको झलझली सम्झनाआइरहेको छ । त्यसै भ्रमणको सिलसिलामा अतामी हाकुँने नगरमा रहेको भव्य होटेलमा हामीहरूलाई राखिएको थियो । त्यस होटेलको सबभन्दा तल्लो भूमिगत कक्षमा प्राकृतिक तातोपानीले नुहाउने व्यवस्थारहेछ । मलाई त्यहाँ प्राकृतिकरूपमा आफैँ तातो भएका पोखरीहरूमा नुहाउने पहिलो अनुभव प्राप्त भएको थियो । केही दिन जापानका ग्रामीण क्षेत्रका डाँडाकाँढा र पाखाहरूको समेत भ्रमण गरेर हामीहरू पुनः फुचु नै फर्किएका थियौँ । त्यसपछि त्यहाँको सम्पूर्ण काम सिध्याएर जापानी मित्रहरू र सम्मेलनमा भाग लिन भेला भएका विश्वका अरू मित्रहरूसँगसमेत बिदा भएर २०४९



टोकियोमा भएको Asia Crime Prevention Foundation को बैठकमा सहभागीहरूका साथ लेखक




जापानको टोकियोमा भएको ACPF को प्रथम बैठकमा लेखकको सहभागिता थियो । त्यसको एकदृश्य

साल फागुन ३० गते टोकियोबाट थाईल्याण्डको ब्याङ्ककतर्फ जहाजबाट म हिँडेको थिएँ। मध्यरातमा ब्याङ्कक एयरपोर्टमा जहाजबाट उत्रिएपछि मैले एयरपोर्टको प्रतीक्षालयमै बसेर दुःखका साथ रात बिताउनुपरेको थियो। २०४९ साल चैत्र १ गते बिहान नेपालको जहाजमा चढेर म विशिष्ट खालको बैठकमा भाग लिएर ब्याङ्ककबाट काठमाडौं फर्किएको थिएँ।

उपर्युक्त अनुसार जापानको तेस्रोपटक भ्रमण गरेर काठमाडौं फर्किएपछि मैले भूमिसुधार तथा व्यवस्थामन्त्रालयमा गएर फेरि मन्त्री श्रीजगन्नाथ आचार्यसँगै तनावपूर्ण परिस्थितिमा काम गर्नुपरेको थियो। शुरुशुरुमा मन्त्री श्रीजगन्नाथले मसँग सामान्य समदूरीको व्यवहार गर्नुभएको थियो। मन्त्री आफ्ना आसेपासे, प्रशंसक र चाप्लुस व्यक्तिहरूबाट घेरिएर आफ्ना कार्यकक्षमा मलाई बोलाउने गर्नुहुन्थ्यो। उहाँ अत्यन्त क्रान्तिकारी नेताको रूपमा आफ्नू छवि देखाउन प्रगतिशील नाराकासाथ आफ्नू भावी योजनासमेत सबैलाई सुनाउने गर्नुहुन्थ्यो। आफू बाहेक अरू सबै नेता तथा मन्त्रीहरूलाई काम नलाग्ने र समय अनुसार काम गर्न नसक्ने भनेर उहाँहरूको आलोचना गर्नुहुन्थ्यो।

तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालालाई उहाँ सधैं गाली गर्नुहुन्थ्यो। त्यसका अतिरिक्त बेलामौकामा राजामाथि पनि उहाँ विषबमन गर्नेगर्नुहुन्थ्यो। उहाँले बाहिरबाट जति क्रान्तिकारी र प्रगतिशील देखिने प्रयास गरे तापनि उहाँ भित्रबाट त्यति नै भ्रष्ट र पुरातनपन्थी हुनुहुन्थ्यो। उहाँले मन्त्रालयमा गठन गरेको मनिटरिङ्ग सेलले विभाग र कार्यालयहरूमा गएर मनिटरिङ्गका नाममा मन्त्रीका लागि "मनी" बटुल्ने काम गर्नेगर्दथ्यो। मैले सो कुरा बिस्तारै थाहा पाउँदै गएको थिएँ, तर नबुझेजस्तो भएर म अध्ययन गर्नेतिर नै लागेको थिएँ। मैले मन्त्रीका कैयौं कमजोरीहरू थाहा पाइसकेको थिएँ तापनि उहाँको पाखण्डपूर्ण कुरा, क्रान्तिकारी नारा र प्रगतिशील भाषणलाई सुन्नुपर्ने मेरो वाध्यता थियो। सहसचिव लगायत तीनैजना महानिर्देशकहरू मन्त्रीका अन्धभक्त थिए। मन्त्रालय र अन्तर्गतका विभागहरूमा मन्त्रीले चाहेअनुसारका निर्णय र कामहरू हुनेगर्दथे। ऐन नियम एकातिर तर मन्त्रीका इशारामा सारा काम हुनेगर्दथे। कतिपय काम कुराहरू मलाई थाहै नदिईकन मन्त्री आफैं सोझै निर्णय गरेर

गर्नेगर्नुहुन्थ्यो । ती कुराहरूको समाचार पत्रिकामा निस्किएपछिमात्र मलाई थाहा हुन्थ्यो । एक पटक त्यस्तै घटना भएको थियो ।

एक दिन सेते ज्यापू भन्ने व्यक्ति श्रीगणेशमान सिंहका छोरा श्रीप्रकाशमान सिंहलाई साथमा लिएर मन्त्रीको कार्यकक्षमा गएर एउटा गैरकानूनी निवेदनमा मन्त्रीको तोक लगाएर मेरो कार्यकक्षमा सो निवेदन बुझाउन श्रीप्रकाशमान सिंह आउनुभएको थियो । मैले अध्ययन गरेर उक्त निवेदन गुठीसंस्थानमा रायका लागि लेखेर पठाइदिएको थिएँ । गुठीसंस्थानले उक्त सम्बन्धमा सर्वोच्चमा कारबाही चलिरहेको हुँदा केही गर्न नमिल्ने भनेर आफ्नू राय पठाएको थियो । गुठीसंस्थानको राय अनुसार मन्त्रीले तुरुन्त कारबाही गरेर मकहाँ पेश गर्नु भन्ने तोक लगाएको उक्त निवेदन भए तापनि तामेलीमा राख्ने भन्ने आदेश दिएर सो टिप्पणी सहितको फाइल मैले जग्गाशाखामा पठाइदिएको थिएँ । त्यस्ता गैरकानूनी निवेदनहरू मकहाँ सधैँ पेश भइरहनेहुँदा मैले त्यस निवेदनका सम्बन्धमा पनि खास कुनै चाख नराखी तामेलीमा पठाएको थिएँ । मैले त्यसलाई सामान्य कुरा सम्झिएको थिएँ । तर त्यो फाइल सामान्य नभएर त्यसमा श्रीगणेशमान सिंह, निजका छोरा श्रीप्रकाशमान सिंह र मन्त्री श्रीजगन्नाथ आचार्यको स्वार्थसमेत गाँसिएको रहेछ । सो कुरा मलाई थाहा भएको थिएन र कसैले पनि सो कुराको मलाई थाहा दिने हिम्मत गरेको पनि थिएन ।

समय बित्तै गएको थियो । त्यसको ४ महिनापछि एक दिन छलफल भन्ने साप्ताहिक पत्रिकामा जगन्नाथदेवलको गुठीको जग्गा भूमिसुधार मन्त्री श्रीजगन्नाथ आचार्यले व्यक्तिको नाममा दर्ता गराएर करोडौंको भ्रष्टाचार गरेको भनेर निस्किएको समाचार मैले देखेपछि त्यस सम्बन्धमा मलाई आश्चर्य लागेको थियो । तामेलीमा राख्न पठाएको उक्त फाइल कसरी मन्त्री श्रीजगन्नाथ आचार्यले सदर गरेर गैरकानूनी काम गर्न सक्नुभयो भन्ने लागेर जग्गाशाखाका तत्कालीन शाखाअधिकृत श्रीदिनेश राईलाई बोलाएर मैले सोधेको थिएँ । ४ महिना अघि तामेलीमा पठाएको फाइल त्यस बेलासम्ममा मैले बिर्सिसकेको थिएँ । शाखा अधिकृत श्रीदिनेश राईले सो कुरा मन्त्री श्रीजगन्नाथ आचार्यको आदेश अनुसार भएको भनेर मलाई बताएका थिए र सो फाइलका सम्बन्धमा त्यस बेला भएको विवरण पनि

उनले मलाई सुनाएका थिए ।

कुरा के भएछ भने, मैले तामेलीमा राख्ने भनेर सम्बन्धित शाखामा पठाएको टिप्पणी मन्त्री श्रीजगन्नाथ आचार्यले शाखाबाट लगेर "सचिवले जे सुकै कुरा लेखेको भए तापनि उक्त जगन्नाथ देवलको गुठीजग्गा सेते ज्यापूको नाममा दर्ता गरिदिने" भनेर गुठी संस्थानलाई सोझै आफैँले टिप्पणी सदर गरेर आदेश गर्नु भएको रहेछ र तदनुसार नै गुठीसंस्थानलाई आदेश पनि गएको रहेछ। गुठीसंस्थानका तत्कालीन प्रशासक मन्त्री श्रीजगन्नाथ आचार्यले नै नियुक्ति गरेका उहाँका मामाका छोरा श्रीकेशव पौडेल हुनुहुन्थ्यो । मन्त्री श्रीजगन्नाथ आचार्यसँगको मिलोमतो अनुसार नै उक्त करोडौं रुपैयाँ पर्ने जग्गा सेते ज्यापूका नाममा दर्ता गर्ने काम भएको रहेछ । त्यति ठूलो काम हुँदा पनि मलाई सुइँकोसमेत नदिएर निहितस्वार्थ भएका मन्त्री श्रीजगन्नाथ आचार्यले कपटपूर्ण काम गर्नुभएको रहेछ । सो कुराको रहस्य मलाई त्यति बेलामात्र खुलेको थियो, जब एमाले समर्थक छलफल भन्ने पत्रिकाले समाचारका रूपमा उक्त कुरा छापेको थियो ।

छलफल पत्रिकामा प्रकाशित भएको समाचार पढेपछि मन्त्री श्रीजगन्नाथ आचार्यले मलाई आफ्नू कार्यकक्षमा बोलाउनु भएको थियो । त्यस्तो गलत निर्णय मन्त्रीबाट हुन गएको र विपक्षीदलको पत्रिकाले अत्यन्त लाञ्छनापूर्णरूपमा सो खबर प्रकाशित गरेको देख्ता मलाई अत्यन्त दुःख लागेको थियो। मैले द्वैधमनस्थितिमा मन्त्रीको कार्यकक्षमा प्रवेशगरेको थिएँ। म मन्त्रीको कोठामा पस्ता उहाँ आफ्ना चाप्लुस प्रशंसकहरूबाट घेरिएर त्यसै कुराको चर्चा गरेर बस्नुभएको रहेछ। मन्त्रीले मलाई देख्ने बित्तिकै रिसाएर उहाँले ममाथि विषवमन गर्दै लाञ्छनायुक्त शब्दहरू बोल्न थाल्नुभएको थियो । उहाँको त्यो बीभत्सरूप देखेर म छक्क परेको थिएँ । मन्त्री श्रीजगन्नाथ आचार्य अत्यन्त छद्मभेषी मानिस हुनुभएको कुरा मैले माथि नै उल्लेख गरिसकेको छु । काम एउटा गर्ने र कुरा अर्कै गर्ने उहाँको सन्दिग्ध चरित्र थियो। त्योभन्दा पहिले पनि उहाँ त्यसैगरी कराइरहने व्यक्ति भएका हुँदा मैले त्यस दिन पनि उहाँको त्यस बीभत्सरूपलाई सामान्य रूपमा नै लिएको थिएँ। मन्त्री निकै बेर कराइसक्नु भएपछि उहाँको कराउने तुजुक सकिएको ठानेर बिस्तारै "कुरा के हो ? मन्त्रीजीले मलाई

किन बोलाउनु भएको हो ? र मैले के गर्नु पऱ्यो ? भनेर शान्त भावमा मैले मन्त्रीलाई सोधेको थिएँ ।

त्यसपछि उक्त छलफल पत्रिकामा निस्किएको खबर मलाई देखाउँदै यो गोप्यता कसले भङ्ग गऱ्यो ? भनेर अत्यन्त रिसाएको मुद्रामा उहाँले मलाई प्रश्न सोध्नुभएको थियो । त्यसको प्रत्युत्तरमा मैले मन्त्रीको कुरा बुझ्न भनेर मन्त्रीसँग नै प्रतिप्रश्न गरेको थिएँ । तर प्रश्न गर्न नपाउँदै मन्त्रीको कोठामा पहिलेदेखि नै चाकडीमा बसेका एक चाप्लुसले सोही छलफल पत्रिका अगाडि सारेर मलाई देखाएको थियो । "मैले तामेलीमा राखिसकेको फाइल कसरी मन्त्रीजीको समक्ष आइपुग्यो ? अनि कसरी त्यो जग्गा दर्ता गरियो ? भनेर मैले प्रश्न तेर्स्याएपछि मन्त्रीले सो कुराको जबाफ दिन नसकेर उल्टै मसँग झगडा गर्ने दुष्प्रयाश गर्नुभएको थियो । मन्त्री र मेरा बीचमा एक किसिमले निकै चर्को वाक्युद्ध भएको थियो ।

त्यसरी वादविवाद भएपछि मन्त्रीको कार्यकक्षमा बसेर छलफल गर्नु बेकार ठानेर म आफ्नू कार्यकक्षमा फर्किएको थिएँ । त्यसपछि मैले उक्त विवादास्पद फाइल खोज्न लगाएको थिएँ । तर मन्त्रीले उक्त फाइल पहिले नै लगेर लुकाइसक्नुभएको रहेछ । सम्बन्धित शाखामा सो फायल नभेटिएपछि विभागीय कारबाही गर्ने भनेर उक्त शाखाका अधिकृतलाई धम्की दिएपछिमात्र मन्त्री श्रीजगन्नाथले लुकाएको उक्त फाइल झिकेर ल्याएर मलाई पेश गरेका थिए । उक्त फाइल मैले आफ्नू अधीनमा राखेको थिएँ । त्यसपछि मन्त्री र मेरा बीचमा झन् कटुता बढ्दैगएको थियो । आफूले गरेको गल्ती ढाकछोप गर्न मलाई नानाथरीका दोषारोपणहरू उहाँले गर्नु भएको थियो । त्यही मौका छोपेर मन्त्रीका तथाकथित मनिटरिङ्ग सेलका सक्रिय कार्यकर्ता श्रीयोरजङ कार्की, श्रीकृष्णप्रसाद अधिकारी र मन्त्रीका छोरीज्वाई तथा निजी सचिव श्रीरामप्रसाद भण्डारी लगायतका अबसरवादी व्यक्तिहरूले मन्त्री र सचिवका बीचको सम्बन्ध बिगारेर फाइदा उठाउने दुष्प्रयास गरेका थिए ।

त्यसरी बिस्तारै मन्त्रीको पक्ष र मेरो पक्ष तयार हुँदैगएको थियो । थाहै नपाइकनै म बिस्तारै विवादमा मुछिँदैगएको थिएँ । मन्त्रीका चाकडीबाजहरूले त्यही मौकालाई सदुपयोग गरेर मेरो सरुवा गराउन मन्त्रीलाई उकास्न थालेका थिए । म ती सबै कुराहरूलाई अविचलित भएर

साक्षीभावले हेरिरहेको थिएँ र मैले आफूले गर्नुपर्ने कामहरू पनि पूर्ण सक्रियताका साथ गर्दैरहेको थिएँ । आफैँ गैरकानूनी काम गर्ने तर त्यसको दोष ममाथि थुपार्ने मन्त्रीको दुष्प्रयासबाट आफूलाई सुरक्षा गर्नु परम आवश्यक भएको मैले सम्भिmएको थिएँ । त्यसका लागि मन्त्रीले विगतमा गरेका गैरकानूनी निर्णयहरूका सबुद प्रमाणहरू पनि म गोप्यरूपमा बिस्तारै सङ्कलन गर्दैरहेको थिएँ । अत्यन्त सतर्कताका साथ मैले सम्पूर्ण प्रमाणहरू सङ्कलन गर्दा जगन्नाथदेवल र नन्दीकेश्वरबहाल लगायतका करोडौँ मूल्य पर्ने गुठीका जग्गाजमीनहरू मन्त्री श्रीजगन्नाथ आचार्यले गैरकानूनी तरिकाले निर्णय गरेर व्यक्तिगत फाइदा उठाएर विभिन्न व्यक्तिहरूका नाममा दर्ता गराउन आदेश दिएर करोडौँको हिनामिना गरेका १७ थान फायलहरू सङ्कलन गर्न म सफल भएको थिएँ । फायलहरू सङ्कलन गर्ने कार्यमा जग्गा फाँटका शाखाअधिकृत श्रीदिनेश राई र मेरा निजीसचिव श्रीविश्वनाथ शर्माले मलाई अत्यन्त सहयोग गरेका थिए ।

उपर्युक्त अनुसार मन्त्री र मेरा बीचको कटुता झन् बढ्दै गएको थियो । मन्त्रीको जस्तोसुकै गलत व्यवहार मप्रति भए पनि मैले भने आफ्नू अनुशासन छोडेको थिइन । मन्त्रीले मलाई जति दुर्व्यवहार गरे तापनि म सहेरै बसेको थिएँ । सहँदा सहँदै पनि एक दिन अलिक बढी नै मन्त्रीबाट ममाथि दुर्व्यवहार भएको थियो । त्यस मन्त्रालयमा त्यस प्रकारका दुच्छर मन्त्री श्रीजगन्नाथ आचार्यका अन्तर्गत रहेर काम गर्न नसकिने महसूस मैले गरेको थिएँ । त्यस बखत प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाका सचिव श्रीशारदाप्रसाद दाहाल हुनुहुन्थ्यो । मलाई केही अप्ठ्यारो पर्दा र कुनै काम गर्नुपर्दा पनि उहाँसँगै सल्लाह गरेर म काम अगाडि बढाउने गर्दथेँ । मन्त्रीसँग मेरो सम्बन्ध बिग्रिन थालेपछि सो कुराको जानकारी प्रधानमन्त्रीलाई दिन पहिलेदेखि नै मैले श्रीशारदाप्रसाद दाहाललाई भन्ने गरेको थिएँ । त्यस दिन घटेको घटना पनि मैले श्रीशारदाप्रसाद दाहाललाई बताएको थिएँ र मेरो सरुवा तुरुन्त भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट अरू मन्त्रालयमा गरिदिन प्रधानमन्त्रीलाई सिफारिस गरिदिन पनि मैले अनुरोध गरेको थिएँ । सो कुराका साथै मन्त्रीले गरेका गैरकानूनी निर्णयका कुराहरू पनि प्रधानमन्त्रीलाई जानकारी गराउन मैले उहाँलाई भनेको थिएँ ।

त्यसपछि अर्को दिन सचिव श्रीशारदाप्रसाद दाहालले मन्त्री श्रीजगन्नाथ आचार्यले गरेका गैरकानूनी निर्णयका फायलहरू लिएर प्रधानमन्त्रीको कार्यालयमा आउन मलाई बोलाउनु भएको थियो । मैले पनि तुरुन्तै ती सारा फायहरू लिएर प्रधानमन्त्रीलाई जानकारी दिन प्रधानमन्त्रीको कार्यालयमा म गएको थिएँ । प्रधानमन्त्रीलाई सो कुराको यथार्थ जानकारी गराउन श्रीशारदाप्रसाद दाहालले प्रधानमन्त्रीको समय मिलाइदिनु भएको थियो । मन्त्री श्रीजगन्नाथ आचार्यले गरेका गैरकानूनी निर्णयका सबै फायलहरू प्रधानमन्त्रीलाई नै मैले बुझाएको थिएँ । त्यसका साथै मन्त्री श्रीजगन्नाथ आचार्यसँग बसेर काम गर्न आफ्नू असमर्थता देखाउँदै मलाई तुरुन्तै अरू मन्त्रालयमा सरुवा गरिदिन प्रधानमन्त्रीसँग मैले अनुरोध पनि गरेको थिएँ । त्यसको जबाफमा प्रधानमन्त्रीले केही खिन्न भएर "म हेरौँला, तपाईं मन्त्री श्रीजगन्नाथसँग नडराइकन निर्धक्क भएर काम गर्दै जानुहोस्" भनेर मलाई आश्वासन दिनुभएको थियो ।

त्यसपछि दुई दिनसम्म मन्त्री आचार्य भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा आउनुभएको थिएन । मन्त्री श्रीजगन्नाथ आचार्य साह्रै रोगी र रिसाहासमेत भएका हुँदा उहाँले मसँग झगडा गरेर मन्त्रिनिवासमा गएपछि त्यसै कारणले बिरामी भएर सुत्नुभएको होला र मन्त्रालय आउन नसक्नुभएको होला भन्ने मैले त्यस बेला ठानेको थिएँ । तेस्रो दिन पनि मन्त्री श्रीजगन्नाथ आचार्य मन्त्रालयमा आउनुभएन । त्यसै दिन बेलुका प्रधानमन्त्रीका कार्यालयका सचिव श्रीशारदाप्रसाद दाहालले रेडियोबाट रातको समाचार सुन्नु भनेर प्रधानमन्त्रीले तपाईंलाई भन्नुभएको छ भनेर टेलिफोन गर्नुभएको थियो । मैले के कुरा हो ? भनेर प्रश्न गर्दा उहाँले रेडियो सुन्नु, राम्रो खबर छ भनेर भन्नुभएको थियो । सो कुरा सुनेपछि मैले प्रधानमन्त्रीसँग भेट हुँदा भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट अरू नै मन्त्रालयमा सरुवा गरिदिन भनेर अनुरोधगरेको थिएँ । तदनुसार मलाई प्रधानमन्त्रीले कुनै अरू मन्त्रालयमा मेरो सरुवा गरिदिनुभएको होला, त्यसैको खबर रेडियोमा आउन लागेको होला भन्ने मैले त्यस बेला ठानेको थिएँ । बेलुका रेडियो सुन्दा त श्रीजगन्नाथ आचार्यले भूमिसुधार तथा व्यवस्था मन्त्रीबाट दिएको राजीनामा राजाबाट स्वीकृत भएको खबर रेडियोले भनेको थियो । मलाई एक किसिमले

आफ्नू नैतिकविजय भएकोमा खुशी पनि लागेको थियो, तर त्यही झन्झटिलो मन्त्रालयमा बस्नुपरेको हुँदा दिक्क पनि लागेरआएको थियो। जेसुकै भए पनि मन्त्री श्रीजगन्नाथ भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट हटेकोमा मेरो जीउ अत्यन्त हलुका भएको महसूस मैले गरेको थिएँ।

अर्कोदिन मन्त्रालयमा गएपछि प्रधानमन्त्रीका कार्यालयका सचिव श्रीशारदाप्रसाद दाहाललाई टेलिफोन गरेर प्रधानमन्त्रीप्रति कृतज्ञता ज्ञापन गर्न मलाई उहाँको समय लिइदिन मैले अनुरोध गरेको थिएँ। सचिव श्रीशारदाप्रसाद दाहालले प्रधानमन्त्रीलाई भेट्ने समय मिलाइदिएपछि म गएर प्रधानमन्त्रीलाई भेटेर उहाँप्रति कृतज्ञता ज्ञापन गरेको थिएँ। भेटको क्रममा प्रधानमन्त्रीले मन्त्रीलाई हटाउनुपरेको मुख्य कारण मैले पेश गरेका फाइलमा देखिएका भ्रष्टाचारहरू नै भएका र राजीनामा स्वेच्छाले नदिए अख्तियारदुरुपयोग अनुसन्धान आयोगमा कारबाहीका लागि फाइल पठाउने भनेर प्रधानमन्त्रीले भनेपछि त्यहीँ प्रधानमन्त्रीको कार्यालयमा उहाँकै अगाडि बसेर मन्त्री आचार्यले आफ्नै हस्ताक्षरले तुरुन्तै राजीनामा लेखेर प्रधानमन्त्रीलाई दिनुभएको रहेछ।

उक्त राजीनामाको सक्कल प्रति नै प्रधानमन्त्रीले मलाई देखाउनुभएको थियो। मन्त्री श्रीजगन्नाथ आचार्यले आफ्नू राजीनामामा राजीनामा दिनु पर्ने कारणमा दुई कुराहरू उल्लेख गर्नुभएको थियो। पहिलो प्रधानमन्त्रीसँग कुरा नमिलेको र दोस्रो काम गर्न मन्त्रालयमा सचिवले साथ नदिएको भन्नेसमेत थिए। त्यो देखेर म छक्क परेको थिएँ। हो, मैले मन्त्रीलाई गैरकानूनी कामकुरा गर्न असहयोग गरेको थिएँ र कानूनबमोजिम निर्णय गर्न गराउन रायसल्लाह दिएको थिएँ। प्रजातान्त्रिक व्यवस्थामा मुलुकमा प्रचलित कानून अनुसार नै सबै कामकुराहरू हुनुपर्छ भनेर मन्त्रीलाई सल्लाह दिँदा उहाँले मैले उहाँलाई दिएको सही सल्लाहलाई असहयोग गरेको र मन्त्रालयका कार्यसम्पादनमा साथ नदिएको भन्ने ठान्नुभएको रहेछ। मैले मन्त्रीलाई गरेको असहयोग त्यही नै हो। प्रजातन्त्रवादी तथा क्रान्तिकारी भनिने मन्त्री त्यति ठूलो छद्मभेषी र अनैतिक हुनसक्छ भन्ने कुरा मैले त्योभन्दा पहिले कहिल्यै पनि शोचेकै थिइन। आफू अनैतिक तथा गैरकानूनी काम गर्दै जाने तर त्यसोगर्नु हुँदैन भन्दा उल्टै असल कुराको सरसल्लाह दिने सचिव जस्तो व्यक्तिका विरुद्ध नानाथरी दोषारोपण गर्ने मन्त्री श्रीजगन्नाथ

आचार्यजस्ता व्यक्तिहरू सत्तामा रहुन्जेल यो देशको उन्नति र प्रगति हुन नसक्ने कुराको सङ्केत मैले मन्त्री श्रीजगन्नाथको चरित्रबाट नै त्यसै बेला थाहा पाइसकेको थिएँ । त्यसपछि मेरो सेवाको अवधिभरिमा मैले सँगै काम गरेका मन्त्रीहरूका बारेमा मैले पाएका अनुभवहरू यसै प्रकारका अत्यन्त दुःखद् र शोचनीय थिए । उहाँहरूका बारेमा पनि प्रसङ्ग अनुसार पछि उल्लेख गर्दैजानेछु ।

उपर्युक्त अनुसार श्रीजगन्नाथ आचार्य र मेरा बीचमा भएको असमझदारी मन्त्री श्रीजगन्नाथ आचार्यको राजीनामापछि स्वतः समाप्त भएर गएको थियो । त्यसपछि केही दिनका लागि भूमिसुधार तथा व्यवस्थामन्त्रलयको काम प्रधानमन्त्री आफैँले हेर्नुभएको थियो । नयाँ मन्त्री भूमिसुधार तथा व्यवस्थामन्त्रालयमा पठाउने सम्बन्धमा एकदिन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाले मलाई बोलाएर सोध्नुभएको थियो । उहाँले त्यस बेलाका भौतिकयोजना मन्त्री श्रीबलबहादुर राईलाई भूमिसुधार तथा व्यवस्थामन्त्रालयमा मन्त्री बनाएर पठाउन कसो होला ? भनेर मेरो राय लिनु भएको थियो । श्रीबलबहादुर राईका सम्बन्धमा प्रधानमन्त्रीको प्रस्ताव आएपछि मैले अत्यन्त सतर्कताका साथ उहाँलाई नपठाउन अनुरोध गरेको थिएँ । त्यसरी अनुरोध गर्नुको कारण श्रीबलबहादुर राईले मसँग केही दिन अगाडि गरेको व्यवहार नै थियो । मन्त्री श्रीबलबहादुर राईले एकदिन मलाई भूमिसुधार तथा व्यवस्थामन्त्रालयबाट उहाँको मन्त्रालयमा बोलाएर गुठी तथा सरकारी ऐलानी जग्गा घडेरीका लागि उहाँका नाममा दर्ता गरिदिन मलाई भन्नुभएको थियो । त्यसरी सरकारी जग्गा कुनै पनि व्यक्तिको नाउँमा गैरकानूनी तरिकाले दर्ता गर्न नमिल्ने र गर्नु पनि नहुने कुरा मैले मन्त्री श्रीबलबहादुर राईलाई भनेको थिएँ । मैले उहाँको गैरकानूनी आदेश नमानेपछि त्यसै दिनदेखि मसँग उहाँ रिसाउनुभएको थियो ।

म विद्यार्थी हुँदा २०१५ सालको आमनिर्वाचनमा उहाँको निर्वाचन क्षेत्र ओखलढुङ्गामा एक महिनासम्म काठमाडौंबाट गएका विद्यार्थीहरू र स्थानीय कार्यकर्ताहरूसमेत परिचालन गरेर उहाँलाई विजयी गराउन म लागिपरेको थिएँ । त्यसरी पहिलेदेखि नै सहयोग गर्दैल्याएको प्रजातन्त्रवादी नेता श्रीबलबहादुर राईले २०१७ साल पुस १ गते राजाले सत्ता लिएपछि

अराष्ट्रियतत्त्व भएर धेरै वर्षसम्म भारतमा बसेर दुःख पाउनुभएको थियो। २०४६ सालको जनआन्दोलनपछि भएको निर्वाचनमा जनताबाट पुनः निर्वाचित भएर संसदमा आउन सफल भएका श्रीबलबहादुर राईलाई मैले ठूलै त्यागी नेता हुनुहुन्छ भन्ने ठानेको थिएँ। उहाँको वास्तविकस्वरूप सत्तामा पुगेर मन्त्री भएपछि उहाँले गरेका गलत क्रियाकलापहरूबाट मलाई थाहा हुनआएको थियो। उहाँले मजस्तो आफ्नै मन्त्रालयमा भ्रष्टाचारका विरुद्धमा अभियान चलाएर मन्त्री श्रीजगन्नाथ आचार्य जस्ता व्यक्तिलाई पनि हटाउन सक्ने व्यक्तिलाई आफ्नू मन्त्रालयमा सोझै बोलाएर गैरकानूनी तरिकाले सरकारी जग्गा आफ्ना नाममा दर्ता गराउन खोजेपछि उहाँको वास्तविक अनुहार मैले देखेको थिएँ। सो कुरा मैले नमानेपछि मसँग श्रीबलबहादुर राई रिसाउनु भएको हो। प्रधानमन्त्रीले तिनै निहितस्वार्थ भएका मन्त्री श्रीबलबहादुर राईलाई भूमिसुधार तथा व्यवस्थामन्त्रालयमा पठाउने भनेपछि मैले असहमति जनाउनु स्वाभाविकै थियो। प्रधानमन्त्रीले सो बारेमा जिज्ञासा राख्दा मैले सङ्क्षिप्तरूपमा उपर्युक्त कुरा उहाँलाई बताएको थिएँ। त्यसपछि श्रीबलबहादुर राईलाई नपठाउने र अर्कै मन्त्री खोज्ने हाम्रो सहमति भएको थियो।

केही दिन बितिसक्दा पनि नयाँ मन्त्रीको टुङ्गो नलागेपछि प्रधानमन्त्रीले मलाई बोलाएर फेरि मेरो रायसल्लाह लिनु भएको थियो। बाहिरका अरू मन्त्री ल्याउनुभन्दा त्यसै मन्त्रालयमा सहायक मन्त्री भएर काम गरिरहेका श्रीसिद्धराज ओझालाई क्षेत्रीय आधारमासमेत राज्यमन्त्रीमा बढुवा गरेर भूमिसुधार तथा व्यवस्थामन्त्रालयको काम लगाउनु उपयुक्त हुने कुराको सल्लाह मैले प्रधानमन्त्रीलाई दिएको थिएँ। तदनुसार नै प्रधानमन्त्रीले सहायक मन्त्री श्रीसिद्धराज ओझालाई राज्यमन्त्रीमा बढुवा गरेर भूमिसुधार तथा व्यवस्थामन्त्रालयमै पठाउनुभएको थियो। प्रधानमन्त्रीसँग कुरा भएपछि सो कुराको पूर्वजानकारी मैले श्रीसिद्धराज ओझालाई दिइसकेको पनि थिएँ। भूमिसुधार तथा व्यवस्थामन्त्रालय अन्तर्गत पूर्वमन्त्री श्रीजगन्नाथ आचार्यका पालामा भएका भ्रष्टाचार आदि सबै विकृतिहरू दुवैजना मिलेर हटाउने सल्लाह मैले उहाँसँग गरेको थिएँ। मेरो उदात्त सल्लाहलाई उहाँले त्यस बेला स्वीकार पनि गर्नुभएको थियो। राज्यमन्त्री भएर त्यस मन्त्रालयमा

काम गर्न थालेपछि उहाँको मति बिस्तारै बिग्रिँदै जानथालेको मैले महसूस गरेको थिएँ। उहाँका सल्लाहकारहरूले उहाँलाई पूर्वमन्त्री श्रीजगन्नाथ आचार्यकै बाटोमा हिंड्ने सल्लाह दिन लागेको कुरा मैले बिस्तारै बुझ्दैगएको थिएँ। मन्त्री श्रीजगन्नाथ आचार्यका पालामा मालपोत विभागमा कायममुकायम महानिर्देशक भएर काम गरिरहेका श्रीमुकुन्दप्रसाद आचार्यलाई हटाएर राम्रो नैतिकवान् महानिर्देशकको नियुक्ति गर्ने मैले सल्लाह दिएको थिएँ। मन्त्रालयमा काम चलिरहेको थियो। त्यसै बेलामा ACPF को अपराधनियन्त्रणसम्बन्धी अन्तर्राट्रिय भेलामा अन्तर्राष्ट्रिय निर्देशकको नाताले मैले भाग लिन मलेशियाको राजधानी क्वलालम्पुर जानुपरेको थियो।





पति पत्नी

# मलेशियामा

Asia Crime Prevention Foundation को बैठकमा भाग लिन सर्वोच्च अदालतका तत्कालीन न्यायाधीश श्रीप्रचण्डराज अनिललाई साथमा लिएर २०५० साल पुस २६ गते तदनुसार सन् १९९३ जनवरी १० तारिखका दिन नेपाली जहाज चढेर म काठमाडौंबाट सिङ्गापुर गएको थिएँ । मेरो त्यो सिङ्गापुरको पहिलो यात्रा थियो । सिङ्गापुर पुगेपछि हामीहरू त्यो रात सिङ्गापुरकै एउटा होटेलमा बसेका थियौँ । हामीहरूलाई भेट्न सिङ्गापुरमा बसेका नेपालीहरू आएका थिए । उनीहरूलाई हामीहरूले मलेशियाबाट फर्किंदाखेरि भेट्ने वचन दिएका थियौँ र उनीहरूले भने हामीहरूलाई फर्किएर आउँदा त्यहाँ बस्ने निम्तोसमेत दिएका थिए । हामीहरूले त्यस दिन अपराह्न मलेशियाको जहाज चढेर सिङ्गापुरबाट मलेशियाको राजधानी कोलालम्पुर गएका थियौँ । त्यहाँ पुगेपछि सम्बन्धित अधिकारीहरूले हामीहरूलाई विमानस्थलमा स्वागत गरेका थिए । त्यसपछि हामीहरूलाई भव्य  पाँच तारे होटेलमा लिएर गएका थिए । कोलालम्पुर पनि सिङ्गापुरजस्तै सफा, सुग्घर र हरियालीपूर्ण स्वच्छ शहर रहेछ । पुगेका दिन हामीहरूले होटेलमै बसेर विश्राम गरेका थियौँ । साँझपख सम्मेलनमा भाग लिन गएका विभिन्न देशका मित्रहरूसँग भेटघाट गरेर हामीहरूले आफ्नू सम्बन्ध सुदृढ बनाएका थियौँ ।

अर्को दिन बिहानै अन्तर्राष्ट्रिय निर्देशकहरूको बैठक भएको थियो । त्यसै बैठकबाट सम्मेलनको कार्यसूचिसमेत तयार गरिएको थियो । त्यसै दिन अपराह्न मलेशियाका शक्तिशाली प्रधानमन्त्री महाथिर अहमदले हाम्रो सम्मेलनको उद्घाटन गर्नु भएको थियो । सम्मेलन हामीहरू बसेकै होटेलको भव्य सभाकक्षमा भएको थियो । उक्त सम्मेलन अत्यन्त सुव्यवस्थितरूपमा तीनदिनसम्म चलेको थियो । सम्मेलनकै अवधिमा बीचबीचको समय निकालेर हामीहरूले कोलालम्पुर शहरको अवलोकन गरेका थियौँ । सम्मेलनको अन्तिम दिन भव्य रात्रिभोजको आयोजना मलेशियाको सरकारले

गरेको थियो । उक्त भोजकै समयमा उपहार आदानप्रदान गर्ने र बिदावारीसमेत हुने काम हामीहरूले गरेका थियौँ । उक्त साँझ अत्यन्त सम्झना गर्न योग्य साँझ भएको थियो ।

अर्को दिन बिहान सबेरै मलेशियाको राजधानी कोलालम्पुरबाट मलेशियाको ट्रेनमा चढेर अत्यन्त सुबिस्ताका साथ हामीहरू सिङ्गापुरतर्फ हिँडेका थियौँ । दिनभरि ट्रेनको यात्रा गरेर बेलुकापख हामीहरू सिङ्गापुर पुगेका थियौँ । उक्त ट्रेनको यात्रा अत्यन्त सुखदायी र स्मरणीय रहेको थियो । सुविधायुक्त ट्रेन पूर्ण हरियालीयुक्त जङ्गलको माझबाट बिस्तारै बिस्तारै हामीहरूलाई लिएर हिँडेको थियो । चाहे अनुसारको खानापिना र आराम गर्ने व्यवस्था पनि ट्रेनभित्रै भएको हुँदा हामीहरूले दिनभरिको यात्रा अत्यन्त सुखद भएको अनुभव गरेका थियौँ ।

त्यसै दिन बेलुका हामीहरू सिङ्गापुर पुगेका थियौँ । त्यहाँ पुगेपछि नेपालीहरूले सञ्चालन गरेको लजमा गएर हामीहरू बसेका थियौँ । त्यसको भोलिपल्ट सिङ्गापुर सरकारको प्रहरी सेवामा कार्यरत श्रीगोरख वान्तवाले हामीहरूलाई निम्तो गरेर आफ्ना निवासस्थानमा लगेर खाना खुआएका थिए । त्यहाँ धेरै नेपालीहरू काम गरेर बस्तारहेछन् । हामीहरूलाई अत्यन्त न्यानो सत्कार र माया उनीहरूले प्रदान गरेका थिए । नेपालीहरूको स्वागतसत्कार प्राप्त गरेपछि त्यहाँ नेपालीहरूले नै सञ्चालन गरेको एउटा नाट्यशालामा गएर नेपाली साँस्कृतिक कार्यक्रम हामीहरूले हेरेका थियौँ । अर्को दिन सिङ्गापुरका हिन्दूदेवीदेवताका मन्दिरहरूको भ्रमण गर्नुका साथै नेपाल फर्किने सन्दर्भमा हामीहरूले मुस्तफाको ठूलो पसलमा गएर उपहार पनि किनेका थियौँ । सुन्दर तथा स्वच्छ सिङ्गापुरको अवलोकन गर्ने सन्दर्भमा सार्वजनिक बसमा चढेर हामीहरूले सम्पूर्ण सिङ्गापुर शहरको परिक्रमा पनि गरेका थियौँ । सिङ्गापुरको छोटो तर स्मरणीय बसाइ समाप्त गरेर हामीहरू २०५० साल माघ ४ गते तदनुसार सन् १९९३ जनवरी १८ तारिखका दिन नेपाली जहाज चढेर सिङ्गापुरबाट काठमाडौँ फर्किएका थियौँ ।

मलेशियाको भ्रमण समाप्त गरेर काठमाडौँ फर्किएपछि म फेरि आफ्नै पूर्वनिर्धारित काममै संलग्न भएको थिएँ । समय बित्दै गएपछि भूमिसुधार तथा व्यवस्था मन्त्रालयका तत्कालीन राज्यमन्त्री श्रीसिद्धराज ओझालाई

वरिपरिबाट घेरेर बसेका भ्रष्ट चाटुकारहरूले उहाँको बुद्धि पनि पूर्वमन्त्री श्रीजगन्नाथ आचार्यको जस्तै गरेर भुटेका थिए। मैले ती कुराहरू थाहा पाएर श्रीसिद्धराज ओझालाई बारम्बार सचेत गराउने काम गर्नुपरेको थियो। मेरा अगाडि असल चरित्र भएको महानिर्देशक प्रधानमन्त्रीसँग भनेर मालपोत विभागमा ल्याउने वचन उहाँले दिनुभएको थियो तापनि अन्त्यमा गएर उहाँले भ्रष्ट तथा अनैतिक आफ्नै भिनाजु रामचन्द्र जोशी भन्ने द्वितीयश्रेणीको अधिकृतलाई कायममुकायम बनाएर मालपोत विभागमा ल्याउनुभएको थियो। मैले रामचन्द्र जोशीलाई राज्यमन्त्री श्रीसिद्धराज ओझाले ल्याउँदैहुनुहुन्छ भन्ने पहिले नै थाहा पाइसकेको हुँदा त्यस्ता भ्रष्ट तथा अनैतिक व्यक्ति आफ्नै भिनाजु भए पनि नल्याउन उहाँलाई फेरि पनि सम्झाएको थिएँ। राज्यमन्त्रीले मेरो कुरा नमानेर आफ्नू भिनाजु रामचन्द्र जोशीलाई मालपोत विभागमा का.मु. महानिर्देशक बनाएर ल्याएपछि सिद्धराज ओझामाथिको मेरो विश्वास समाप्त भएको थियो। रामचन्द्र जोशी मालपोत विभागमा का.मु. महानिर्देशक भएर गएदेखि नै नानाथरीका भ्रष्टाचारसम्बन्धी गतिविधिहरू शुरु गरेका थिए।

त्यस सम्बन्धमा राज्यमन्त्री श्रीसिद्धराज ओझालाई मैले सम्झाउने प्रयास गरेको थिएँ। म भ्रष्टाचारविरुद्धको व्यक्ति भएको हुँदा मबाट उहाँलाई भ्रष्टाचार गर्न सहयोग नपुग्ने देखेपछि एक दिन राज्यमन्त्री ओझाले उहाँलाई पैसाको साह्रै खाँचो भएको हुँदा आँखा चिम्लिइदिन मलाई आग्रह गर्नुभएको थियो। मैले त्यसको जबाफमा "त्यस मन्त्रालयमा म सचिव भएर बसुन्जेल कुनै किसिमको पनि भ्रष्टाचार कसैले पनि गर्न नपाउने भएको हुँदा यदि तपाईंलाई भ्रष्टाचार गर्ने इच्छा छ भने यो मन्त्रालयबाट सर्वप्रथम मेरो सरुवा गर्नुहोस् र तपाइलाईं जे मन पर्छ सोही गर्नुहोस्" भनेर मैले मन्त्रीलाई भनेको थिएँ। त्यसपछि उहाँ मसँग टाढा भएर विभाग र कार्यालयहरूमा भ्रष्ट का.मु. महानिर्देशकको सल्लाह लिएर आफैँले आदेशसमेत गरेर रकम उठाउन थालेको मैले थाहा पाएपछि मन्त्री र उहाँको भिनाजु रामचन्द्र जोशीलाईसमेत सँगै राखेर त्यसो नगर्न सम्झाएको थिएँ। मैले बारम्बार सम्झाइरहँदा पनि सरकारी तथा सार्वजनिक पर्ती जग्गाहरू दर्ता गराइदिने आश्वासन दिएर उनीहरूले भू-माफियाहरूबाट रकम सङ्कलन

गर्न लागेको थाहा पाएपछि मैले प्रधानमन्त्रीको सहयोग लिएर अर्को आदेश नभएसम्म पर्तीजग्गाहरू दर्ता नगर्ने भनी मन्त्रिपरिषद्बाटै निर्णय गराएर रोक्का गरिदिएको थिएँ ।

त्यसरी पर्ती जग्गा दर्ता गर्न रोकिएपछि निज रामचन्द्र जोशीले कर्मचारीहरूको सरुवा गर्ने क्रममा रकम उठाएर आफू पनि खाने र सालो राज्यमन्त्री सिद्धराज ओझालाई पनि दिने गरेको कुरा मलाई थाहा हुनआएको थियो । त्यसरी राज्यमन्त्री ओझा र निजका भिनाजु जोशीसमेतको मिलोमतोमा मालपोतविभाग र अन्तर्गतका कार्यालयहरूमा व्यापक भ्रष्टाचार हुन थालेपछि मैले भ्रष्टाचार निवारणका लागि काठमाडौं उपत्यका र बाहिरका जिल्लाहरूमा पनि विभिन्न टोलीहरू पठाएर भ्रष्ट कर्मचारीहरू उपर व्यापकरूपमा छानविन र कारबाहीसमेत गराएको थिएँ । त्यसरी अभियान नै चलाएर सबुद प्रमाणसहित झण्डै डेढ सयजति कर्मचारीहरूलाई एकैचोटि कारबाही गरिएको थियो । त्यसरी कारवाही गर्दागर्दै त्यसै समयमा फिलिपिन्सको राजधानी मनिलामा भएको Asia Crime Prevention Foundation को वार्षिक बैठकमा अन्तर्राष्ट्रिय निर्देशकको नाताले भाग लिन मैले जानुपरेको थियो ।





लेखक

# फिलिपिन्स्मा

Asia Crime Prevention foundation को अन्तर्राष्ट्रिय बैठकमा भाग लिन २०५१ साल फागुन २३ गते तदनुसार सन् १९९४ मार्च ७ तारिखका दिन नेपाली जहाज चढेर रातको समयमा म हङ्कङतर्फ उडेको थिएँ । राती हङ्कङबाट फिलिपिनो एयरलाइन्सको जहाजमा चढेर अर्कोदिन बिहान म फिलिपिन्स्को राजधानी मनिला पुगेको थिएँ । मलाई बिमानघाटमा सम्बन्धित अधिकारीहरूले स्वागत गरेर मनिलाको ५ तारे मनिला होटेलमा लगेर राखेका थिए । त्यसै दिन अपराह्ण हाम्रो बैठक भएको थियो । उक्त बैठकले आवश्यक कार्यसूची तयार गरेपछि मार्च ९ तारिखका दिन हाम्रो सम्मेलनको उद्घाटन त्यहाँका तत्कालीन राष्ट्रपति श्रीरामोसले गर्नुभएको थियो । उक्त अन्तर्राष्ट्रिय भेला अत्यन्त भव्यताका साथ तीन दिनसम्म चलेको थियो । सम्मेलनको समाप्ति भएपछि अन्तर्राष्ट्रिय प्रचलन अनुसार हाम्रो बिदाइ रात्रिभोजका साथै उपहारको आदानप्रदानसमेत गरिएको थियो । सम्मेलनका बीच बीचमा समय निकालेर सहभागी हामीहरूलाई फिलिपिन्स्का दर्शनीय स्थानहरूको पनि भ्रमण गराइएको थियो । २०४६ सालमा मैले जापानमा तालीम लिँदाका मित्रहरू Mrs. Angelita Bondoc Concepcion, र Mr. Julieto P Roxas समेतले त्यहाँ मेरो न्यानो स्वागत गरेका थिए । नयाँ र पुराना मित्रहरूसमेतसँग बिदा भएर म २०५१ साल फागुन २८ गते तदनुसार २०९४ मार्च १२ तारिखका दिन फिलिपिन्स्बाट बिहान सबेरै उडेर मध्य



मनिलाको मनिला होटलमा आयोजित अन्तर्राष्ट्रिय निर्देशकहरूको बैठकमा लेखक, १९९४।३।८



मनिला होटलमा आयोजित PCPF को साधारण सभामा भाग लिँदै लेखक

दिनमा हङ्कङ पुगेको थिएँ। त्यहाँ केही समय निकालेर हङ्कङको चुङ्किङमेन्सनमा गएर हतारहतार किनमेल गरेर साँझपख नेपाली जाहाज चढेर म काठमाडौँतर्फ उडेको थिएँ। उक्त जहाज चीनको दक्षिणी भाग माथिबाट उड्दै मध्यरातमा काठमाडौँको त्रिभुवन अन्तर्राष्ट्रिय विमान–स्थलमा उत्रिएको थियो। त्यस रात सवारीका साधनहरू केही पनि नपाइएका हुँदा म पैदलै हिंडेर घर आएको थिएँ। मेरो त्यो सम्पूर्ण यात्रा एक्लै भएको थियो र रातमा घर फर्किँदा पनि म एक्लै थिएँ। त्यसरी मेरो प्रथम फिलिपिन्स्को यात्रा समाप्त भएको थियो।



मनिला होटलमा आयोजित ACPF को अन्तिम दिन समापन समारोहमा भाग लिँदै लेखक, १९९४।३।११

उपर्युक्त अनुसार म फिलिपिन्स् जानुभन्दा अगाडि मैले भूमिसुधार तथा व्यवस्था मन्त्रालय अन्तर्गतका भ्रष्टाचारीहरूलाई अभियानकै रूपमा एकैचोटि सबैलाई कारबाही गरेको थिएँ। मेरो उक्त कारबाहीपछि तिनै भ्रष्टाचारी कर्मचारीहरूलाई साथ लिएर राज्यमन्त्री सिद्धराज ओझा र का.मु. महानिर्देशक रामचन्द्र जोशीले मेरा विरुद्धमा व्यापकरूपमा अभियान चलाएका थिए। राज्यमन्त्री ओझाको सहयोग पाएका ती भ्रष्ट कर्मचारीहरूले मेरा विरुद्धमा युद्ध नै शुरु गरेपछि मैले बाध्य भएर अझै कडा कारबाही गर्नुपर्ने भएको थियो।

त्योभन्दा अघि २०५० साल चैत्र २९ गतेको निर्णय अनुसार तत्कालीन सरकारले मलाई कायममुकायम सचिवको ठाउँमा बढुवा गरेर विशिष्टश्रेणीको सचिव बनाएर भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा नै पदस्थापन गरेको थियो। मैले जेजस्तो कारबाही गर्न थालेको भए तापनि तत्कालीन भूमिसुधार तथा व्यवस्था राज्यमन्त्री सिद्धराज ओझाले त्यस बेला उनैले मालपोत विभागको का.मु. महानिर्देशक बनाएर ल्याएको आफ्नू भिनाजु रामचन्द्र जोशीसँग मिलेर भ्रष्टाचार गर्ने विभिन्न तरिकाहरू झिकेपछि मैले तिनीहरूका विरुद्धमा कारबाही चलाएको थिएँ। कारबाही चलाउँदा निज का.मु. महानिर्देशक पनि घूस खाएको रकमसहित फेला परेको हुँदा निजउपर पनि मैले कारबाही

गरेको थिएँ । निजलाई का.मु. निर्देशकबाट हटाएर साविक पदमा झारेर मन्त्रालयमै ठाडो हाजिर गराएको थिएँ । निज जोशीलाई साथ दिने अरू भ्रष्ट कर्मचारीहरूलाई पनि कारबाही मैले चलाएको हुँदा तिनीहरूका संरक्षक राज्यमन्त्री ओझा मसँग अत्यन्त रिसाएका थिए । राज्यमन्त्री ओझाले तिनै भ्रष्ट कर्मचारीहरूको संरक्षणका लागि तत्कालीन गृहमन्त्री श्रीशेरबहादुर देउवाको नेतृत्वमा मेरा विरुद्ध तत्कालीन प्रधानमान्त्री श्रीगिरिजाप्रसाद कोइराला कहाँ प्रतिनिधिमण्डल गएको थियो । भ्रष्टाचारी कर्मचारीहरूका विरुद्धमा भ्रष्टाचारको कारबाही चलाएको हुनाले मलाई भूमिसुधार तथा व्यवस्थामन्त्रालयबाट अन्यत्रै सरुवा गरी पाउँ भनी उहाँहरूले माग राख्नु भएको थियो । भ्रष्टाचारी कर्मचारीहरूका विरुद्धमा कारबाही गर्दा गृहमन्त्रीजस्तो जिम्मेवार व्यक्तिले मलाई बोलाएर धन्यवाद र प्रोत्साहन दिनुपर्नेमा त्यसको प्रतिकूल मेरै विरुद्धमा जानु भनेको नैतिकताको दिवालियापनभन्दा अरू केही होइन भन्ने मैले त्यस बेला ठानेको थिएँ । तत्कालीन प्रधानमन्त्री कोइरालाले मलाई बोलाएर ती सबै कुरा बताउनुभएको थियो ।

धेरै अगाडिदेखि नै मैले भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट अरू मन्त्रालयमा सरुवा गरिपाउन प्रधानमन्त्री कोइरालालाई अनुरोध गरिरहेकै थिएँ । त्यस बेला आएर भ्रष्टाचारी कर्मचारीहरूलाई संरक्षण गर्न तत्कालीन गृहमन्त्री शेरबहादुर देउवा र राज्यमन्त्री श्रीसिद्धराज ओझासमेतले मेरो सरुवाका लागि तत्कालीन प्रधानमन्त्रीलाई भनेपछि मलाई सरुवा हुन सजिलो भएको थियो । भूमिसुधार तथा व्यवस्था मन्त्रालयजस्तो भ्रष्टाचारको अखडा भएको मन्त्रालयमा तीन वर्षभन्दा बढी समय सचिवको रूपमा बसेर तत्कालीन भूमिसुधार तथा व्यवस्थामन्त्री श्रीजगन्नाथ आचार्यलाई भ्रष्टाचार गरेको प्रमाणसहित मन्त्रीपदबाट राजिनामा दिन बाध्य गराउन म सफल भएपछि निज मन्त्रीका भ्रष्टाचारका सहयोगी कर्मचारीहरू केही कारबाहीमा परेका थिए । मन्त्रालय र अन्तर्गतका विभागहरूबाट केही भ्रष्टहरू आफैँ भागेका थिए भने केही मेरो सरुवा गराएर निर्भय भएर भ्रष्टाचार गर्न लागिपरेका थिए । मन्त्री श्रीजगन्नाथ त्यस मन्त्रालयबाट हिँडेपछि मेरै सिफारिसमा त्यस मन्त्रालयमा राज्यमन्त्री भएर आएका श्रीसिद्धराज ओझाले पनि पूर्व मन्त्री जगन्नाथ आचार्यकै बाटो समातेर भ्रष्टाचारमा चुर्लुम्म डुब्ने

काम गरेपछि मैले उक्त मन्त्रालयलाई छोड्नु अति आवश्यक भइसकेको थियो । सोही समयमा तत्कालीन गृहमन्त्री र राज्यमन्त्रीसमेतले भ्रष्टाचारीहरूलाई जोगाउन मलाई अरू मन्त्रालयमा सार्न तत्कालीन प्रधानमन्त्रीलाई दबाब दिएपछि मैले चाहे अनुसारकै काम भएको थियो । मैले त्यसलाई सकारात्मकरूपमै लिएको थिएँ ।

मैले मेरा कृतिहरूमध्ये दुई समीक्षात्मक ग्रन्थहरू २०२६ साल र २०४४ सालमा प्रकाशन गरिसकेको थिएँ । त्यसपछि मेरा प्रारम्भिक कालका केही गद्य र पद्य कविताहरूको सङ्ग्रह 'सिर्जनाका फूलहरू २०५१' भने भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा कार्यरत रहँदै मैले प्रकाशन गरेको थिएँ ।



कान्छो छोरो सगुनकुमार भट्टराई र कान्छी बुहारी पूजा भट्टराई (हाल सिड्नी अष्ट्रेलिया)

# प्रशासनसुधार अनुगमनसमितिमा

संवत् २०५१ साल श्रावण महिनामा भूमिसुधार तथा व्यवस्था मन्त्रालयबाट मेरो सरुवा प्रशासनसुधार तथा अनुगमनसमिति ललितपुरमा भएको थियो। मैले त्यस अनुगमनसमितिमा हाजिर भएर काम शुरु गरेपछि भूमिसुधार तथा व्यवस्थामन्त्रालयमा पाएको दुःख र पीडाबाट मलाई छुटकारा मिलेको अनुभूति भएको थियो। त्यहाँ काम गर्न अत्यन्त सजिलो थियो। तत्कालीन सरकारले २०४९ सालमा शुरु गरेको प्रशासनसुधारसम्बन्धी योजनालाई त्यस अनुगमन समितिले अनुगमनका साथै कार्यान्वयन पनि गराउने गर्दथ्यो। त्यस अनुगमन समितिका अध्यक्ष श्रीगोरक्षबहादुर न्हुच्छेप्रधान हुनुहुन्थ्यो भने सदस्यमा श्रीअच्युतबहादुर राजभण्डारी हुनुहुन्थ्यो। म त्यहाँ पदेन सदस्यसचिव भएर काम गर्दथेँ। विभिन्न टोली र कार्यदलहरू खटाएर अनुगमनसमितिले विभिन्न मन्त्रालय, विभाग र कार्यालयहरूमा पनि प्रशासनसुधार योजना कार्यान्वयन भए नभएको अध्ययन गर्ने गर्दथ्यो। प्रशासन विषयका विभिन्न दक्षहरूलाई अनुगमनसमितिले काममा पठाउनेगरेको थियो। त्यसरी विभिन्न विशेषज्ञहरूसँग भेटेर काम गर्न पाउँदा मलाई अत्यन्त सन्तोषको अनुभव भएको थियो। अध्यक्ष श्रीगोरक्षबहादुर न्हुच्छेप्रधान असाध्य मिलनसार र शिष्ट व्यक्ति हुनुहुन्थ्यो। त्यसका साथै सदस्य श्रीअच्युतबहादुर राजभण्डारी पनि सज्जन व्यक्ति भएका हुनाले मलाई त्यहाँ कामगर्न सजिलो भएको थियो। मैले त्यहाँ बसेर प्रशासनसम्बन्धी धेरै कुराहरू सिक्ने मौका पाएको थिएँ।

त्यस समयमा तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाले देशमा निर्वाचन गरेको ५ वर्षको अवधि नपुग्दै नेपाली काङ्ग्रेसभित्रको विग्रहले गर्दा मध्यावधि निर्वाचनको घोषणा गर्नुभएको थियो। हामी सचिवहरूसँग बिदा हुन प्रधानमन्त्री श्रीगिरिजाले बोलाएको बैठकमा आफ्नू दलको पूर्ण बहुमत हुँदाहुँदै मध्यावधि निर्वाचनको घोषणा गरेर नेपाली काङ्ग्रेस र देशको लागि पनि ठूलो

क्षति पुऱ्याएको कुरा उहाँलाई मैले निर्भीकरूपमा प्रष्टैसँग भनेको थिएँ। मेरो भनाइलाई उत्ताउलो भएको भनेर ठान्ने अरू सचिवहरूले चाप्लुसी गर्दै प्रधानमन्त्रीको उक्त मध्यावधि चुनावको घोषणालाई सामयिक र दरो कदम भनेर प्रशंसा गरेका थिए। श्रीगिरिजाप्रसाद कोइरालाको त्यही असामयिक कामको परिणतिले नै देश आजको यस अवस्थामा पुगेको हो। अझै कता पुग्ने हो थाहा छैन। त्यसै बेलादेखि देशमा केही अस्थिरता र अन्योलको वातावरण देखा पर्न थालिसकेको थियो। प्रतिपक्षी ए.मा.ले. समेतका दलहरू अत्यन्त मुखर भएर नेपाली काङ्ग्रेसका विरुद्धमा लागेका थिए। निर्वाचनपछि कसैको पनि बहुमत आउन नसकेर खिचडी संसद बनेको थियो। त्यस बेला श्रीगिरिजाप्रसाद कोइराला प्रधानमन्त्री कामचलाउ मात्रै हुनुहुन्थ्यो। नयाँ सरकार तुरुन्तै बन्न तयार थियो। देशमा काम गर्ने कर्मचारीहरूमा अन्यौलको वातावरण सृजना भएको थियो। त्यसै बखतमा प्रशासनसुधार अनुगमनसमितिलाई दक्षिणपूर्वी एशियाको भ्रमण गर्ने निमन्त्रणा आएको थियो। तत्कालीन सरकारको निर्णय अनुसार सदस्य श्रीअच्युतबहादुर राजभण्डारीका साथमा म उक्त भ्रमणमा गएको थिएँ।



# सिङ्गापुर र इण्डोनेशियामा

संवत् २०५१ साल मङ्सिर ११ गते तदनुसार सन् १९९४ नोभेम्बर २७ तारिखका दिन सदस्य श्रीअच्युतबहादुर राजभण्डारी र म सिङ्गापुर र इण्डोनेशियाको भ्रमणका लागि  काठमाडौंबाट सिंगापुरतर्फ हिंडेका थियौँ। काठमाडौंबाट नेपाली जहाजद्वारा सिङ्गापुर पुगेपछि त्यो रात सिङ्गापुरमै हामीहरू बसेका थियौँ। अर्को दिन बिहानै सिङ्गापुरबाट उडेर हामीहरू इण्डोनेशियाको बिमानस्थलमा दिनको मध्याह्नमा उत्रिएका थियौँ। इण्डोनेशियामा प्रवेश गर्ने प्रवेशाज्ञा हामीहरूले काठमाडौंबाट प्रस्थान गर्नु अगाडि लिएका थिएनौँ। इण्डोनेशियासमेत हेर्ने थाइल्याण्डमा रहेको नेपाली राजदूतावासबाट नै लेखापढी गराएर हामीहरूले इण्डोनेशिया प्रवेश गरेपछि त्यहीँ नै प्रवेशाज्ञा लिने व्यवस्था पनि मिलाएका थियौँ। हामीहरू हवाइजहाजद्वारा इण्डोनेशियाको राजधानी जकार्ताको विमानस्थलमा पुग्दा थाईल्याण्डमा रहेको हाम्रो नेपाली राजदूतावासले लेखापढी गरेको पत्र त्यहाँ पुगिनसकेको हुँदा हामीहरूलाई केही घण्टा इण्डोनेशियाको अध्यागमन कार्यालयले विमानस्थलमै बस्ने अनुरोध गरेको थियो। केही समयको प्रतीक्षापछि अध्यागमन कार्यालयले हामीहरूलाई प्रवेशाज्ञा दिएको थियो। विमानस्थलको कामकारबाही समाप्त भएपछि हामीहरू त्यहाँबाट होटेलमा गएका थियौँ। धेरै लाम् मोल मोलाइपछि हामीहरूले होटेलका कर्मचारीलाई अतिरिक्त महसूल तिरेपछि बस्ने कोठाको व्यवस्था मिल्न गएको थियो। त्यहाँ खुलमखुल्ला घूस माग्ने चलन रहेछ। बाहिर बिदेशबाट गएका पाहुना र पर्यटकहरूले पनि होटेलमा बस्नुपर्दा घूस खुवाएर मात्रै बस्ने कोठा पाइने रहेछ। त्यसबाट मलाई अत्यन्त आश्चर्य लागेको थियो। त्यतिमात्रै नभएर त्यहाँ विदेशी मुद्रा सटही गर्न जहाँ पायो त्यहाँ नपाइने हुँदा पनि हामीहरूलाई अत्यन्त अप्ठारो परेको थियो। हामीहरूले होटेलमा अमेरिकी डलरनै धरौटी राखेर अत्यन्त खुसामद गर्नुका साथै घूससमेत खुवाएर होटेलमा बस्न पाएका थियौँ।

काठमाडौंबाट हिँडेदेखि नै रुघाखोकीको जरो आएर म बिरामी भएको थिएँ । इण्डोनेशियाको राजधानी जकार्ता पुग्दा मलाई जरोले झन् सताएको थियो । जसरी तसरी होटेलमा बस्नेसम्म व्यवस्था मिलाए तापनि त्यो रात खाने व्यवस्था त्यस होटेलमा नभएको हुँदा बाहिर बजारबाट खाना किनेर ल्याएर खानुपर्ने भएको थियो । म बिरामी भएको हुँदा सुक्खा रोटी र तरकारीमात्रै खानेभएको थिएँ । साथमा इण्डोनेशियाको रुपैंह्या हामीहरूसँग नभएको हुँदा बजारबाट खानेकुरो किनेर ल्याएर पनि खान नसक्ने अवस्था हामीलाई त्यस बेला आइपरेको थियो ।

होटेलमा अलपत्र परेर बसेका बेला हामीहरूलाई भेट्न त्यस बेला इण्डोनेशियामै संयुक्तराष्ट्रसङ्घ अन्तर्गतको निकाय युनिसेफमा काम गर्ने नेपाली इञ्जिनीयर श्रीरामप्रसाद कोइराला अचानक त्यहाँ आइपुग्नुभएको थियो । उहाँले हामीहरू त्यस होटेलमा बसेको कुरा पत्ता लगाएर नै हामीहरूलाई भेट्न उहाँ आउनुभएको रहेछ । दुःख परेको समयमा इण्डोनेशियामा व्यवस्थित भएर बसेको नेपालीले हामीहरूलाई भेट्न जानु आपत् परेको बेला भेटिएको देवताजस्तै नै भएको थियो । उहाँबाट हामीलाई ठूलो सहयोग प्राप्त भएको थियो । हामीहरूले त्यहाँ भोग्नुपरेका सबै समस्याहरू उहाँलाई सुनाएका थियौं । उहाँले ती सबै समस्याहरूको समाधान गर्न आफ्ना साथमा रहेका ४ लाख इण्डोनेशियाको रुपैंह्या हामीहरूलाई पछि फिर्ता गर्ने गरी सापट दिनुभएको थियो । त्यसैबाट हामीले होटेलमा बुझाउनुका साथै बेलुकाको खानासमेत किनेर खाएका थियौं । परदेशमा आपत् परेको समयमा त्यसरी कोइरालाबाट प्राप्त सहयोगलाई म कहिल्यै पनि बिर्सिन सक्तिन ।

हामीहरू इण्डोनेशियाको प्रशासनसुधारसम्बन्धी कामको अध्ययन गर्न त्यहाँ पुगेको खबर राष्ट्रपतिको कार्यालयमा पहिले नै गइसकेको थियो । निर्धारित कार्यक्रम अनुसार अर्को दिन बिहानै हामीहरूलाई लिन इण्डोनेशियाका राष्ट्रपतिको कार्यालयबाट गाडी र मान्छेसमेत होटेलमा पुगेका थिए । राष्ट्रपतिको कार्यालयमा नै रहेको प्रशासनसुधारसम्बन्धी निकायमा पुगेर हामीहरूले सम्बन्धित अधिकारीहरूसँग भेटघाट गरेका थियौं । त्यस दिनभरि नै प्रशासनसुधारसम्बन्धी जो गर्नुपर्ने अध्ययन हामीहरूले गरेका थियौं र खाना पनि राष्ट्रपतिको कार्यालयमा नै हामीहरूले खाएका थियौं ।

राष्ट्रपतिको कार्यालयमा गर्नुपर्ने अध्ययनको काम समाप्त गरेपछि अर्को दिनदेखि प्रशासनसुधारसम्बन्धी काम हेर्ने विभिन्न कार्यालय र निकायहरूमा गएर हामीहरूले अध्ययन गरेका थियौँ । त्यहाँ पनि नेपालमा जस्तै प्रशासनसुधारलाई प्राथमिकता दिएको रहेछ । त्यहाँको प्रशासनसम्बन्धी सुधारको कार्यक्रम नेपालको भन्दा अत्यन्त सुव्यवस्थितरूपमा चलेको हामीहरूले पाएका थियौँ । विभिन्न उच्च ओहदाका अधिकारीहरू र राजनीतिक व्यक्तिहरूसँग पनि हामीले छलफल गरेर प्रशासनसँग सम्बन्धित आवश्यक सबै तथ्याङ्कहरू सङ्कलन गरेका थियौँ । त्यहाँ दुई दिनसम्म बसेर हामीहरूले सम्पूर्ण अध्ययन गरेर पूर्वनिर्धारित कार्यक्रम अनुसार आफ्नू काम सम्पन्न गरेका थियौँ । विभिन्न अन्तर्राष्ट्रिय निकायहरूमा काम गरेर इण्डोनेशियामा त्यस बेला बसेका नेपालीहरूले हामीहरूलाई अत्यन्त स्वागतसत्कारका साथ न्यानो माया प्रदर्शन गरेका थिए । इञ्जिनीयर श्रीरामप्रसाद कोइराला र श्रीदेवीलाल प्रधानसमेतको आयोजनामा हामीहरूलाई उहाँहरूले रात्रिभोज पनि दिनुभएको थियो । उहाँहरूको त्यो न्यानो आतिथ्य म कहिल्यै पनि बिर्सिन सक्तिन । हाम्रो पूर्वनिर्धारित कार्यक्रम समाप्त भएपछि जकार्ताका दर्शनीय स्थलहरूको हामीहरूले भ्रमण गरेका थियौँ । समुद्रको किनारामा रहेको जकार्ता शहर शुन्दर रहेछ । त्यहाँ प्रसस्त विदेशी पर्यटकहरू आउँदारहेछन् । शहरभन्दा बाहिर नेपालको जस्तै पिछडिएको भाग र शहरभित्र धनी र संभ्रान्त मान्छेहरू बस्ने विकसित आधुनिक शहरको निर्माण गरिएको रहेछ । त्यहाँको जीवनस्तर पनि हाम्रोजस्तै विभेदपूर्ण, धनी र गरीबीको खाल्टो अत्यन्त चौडा भएको मैले देखेको थिएँ । खुलेआम घुस लिने र अनैतिक काम गर्ने प्रकृतिका अपराधहरू त्यहाँ हुनेगर्दा रहेछन् । त्यहाँ अपराधको तथ्याङ्क अत्यन्त उच्च रहेको पाइएको थियो । त्यहाँका मानिसहरूको रहनसहन, लवाइ र खवाइसमते आफ्नै किसिमको रहेछ ।

इण्डोनेशियामा बाह्रौँ शताब्दीभन्दा पहिले हिन्दूधर्म र हिन्दू राजा नै रहेको इतिहासबाट देखिन्छ । पछि त्यहाँ बुद्धधर्म फैलिएको थियो । बुद्धधर्मको पतनपछि त्यहाँ विदेशीहरूको आक्रमण भएको थियो । त्यसपछि त्यहाँ केही प्रतिशत क्रिश्चियनहरू र केही प्रतिशत हिन्दूहरू भए तापनि अरू बाँकी ९०

प्रतिशतभन्दा बढी मुसलमानहरूको सङ्ख्या नै त्यहाँ भएको देखिन्छ। इण्डोनेशिया संसारमा सबभन्दा विशाल मुस्लिम आवादी भएको राष्ट्र भनेर चिनिन्छ। जावा र सुमात्रा आदि टापुहरूमा हिन्दुहरू बसेका पाइन्छन्। हिन्दूहरूको सङ्ख्या मुस्लिम जनसंख्याको अनुपातमा अत्यन्त अल्प भएको पनि हामीहरूले थाहा पाएका थियौँ। त्यहाँ समुद्रका किनारमा रहेको सुन्दर शहरको अवलोकनका साथै अन्य दर्शनीय तथा ऐतिहासिक स्थानहरूको पनि हामीले अवलोकन गरेका थियौँ। हामीहरूले जकार्तामा पाइने केही सामानहरूसमेत खरिद गरेका थियौँ। त्यहाँको कार्यक्रम समाप्त गरेर हामीहरू सन् १९९४ डिसेम्बर १ तारिखका दिन इण्डोनेशियाको राजधानी जकार्ताबाट सिङ्गापुर फर्किएका थियौँ। हामीहरू सिङ्गापुर पुगेर नेपालीहरूले सञ्चालन गरेको होटेलमा बसेका थियौँ।

माथि वर्णन गरिए अनुसार इण्डोनेशियाको छोटो कार्यक्रम समाप्त गरेर सिङ्गापुर फर्किएपछि पहिले निश्चित भएको कार्यक्रम अनुसार सिङ्गापुरबाट मलेशियाको राजधानी कुआलालम्पुर जानका लागि हामीहरूले प्रयास गरेका थियौँ। त्यसै समयमा मलेशियामा राष्ट्रिय दिवस परेको हुनाले सरकारी कार्यालयहरूमा सार्वजनिक बिदा हुने भएको थियो। एकहप्ताभन्दा लामू बिदा परेको कारण हाम्रो पूर्व निर्धारित कार्यक्रम त्यहाँ हुनसकेको थिएन। मलेशियाको कार्यक्रम नहुने भएपछि हामीहरूले त्यसको साटो सिङ्गापुरमा नै प्रशासनसुधारसम्बन्धी कामको अध्ययन गर्ने निश्चय गरेका थियौँ। हामीहरूले सिङ्गापुरको प्रधानमन्त्रीको कार्यालयमा सम्पर्क राखेर सिंङ्गापुरमा शुरुगरिएको प्रशासनसम्बन्धी कामको अध्ययन गरेका थियौँ।

त्यसैसमयमा नेपालमा पुरानो सरकारका ठाउँमा नवनिर्वाचित ए.मा.ले.को अल्पमतको सरकार गठनभएको थियो। उक्त दलले सरकारमा प्रवेश गर्नेबित्तिकै सर्वप्रथम सरकारी कर्मचारीहरू उपर नै छानविन गर्न शुरुगरेको थियो। सोही क्रममा मेरो विषयमा पनि छानविन गर्न शुरुगरेछ र सो कुराको जानकारी मलाई सिङ्गापुरमै छँदा प्राप्त भएको थियो। मैले सिङ्गापुरबाटै मसँग सोधिएका कुराहरूको जबाफ दिएको थिएँ। अध्ययनको क्रममा हामीहरूले सिङ्गापुर सरकारको प्रशासनसुधारसम्बन्धी योजनाको

विस्तृत अध्ययन एक हप्ताभन्दा बढी समय लगाएर गरेका थियौँ। प्रधनमन्त्रीको कार्यालय अन्तर्गत रहेको प्रशासनसुधारसम्बन्धी आयोजनाले हामीहरूलाई आवश्यक पर्ने सबै सूचना र तथ्याङ्कहरू उपलब्ध गराएको थियो। हामीहरूले अत्यन्त सौहार्दपूर्ण वातावरणमा उनीहरूको सहयोग प्राप्त गरेका थियौँ। अध्ययनको क्रममा सिङ्गापुर सरकारको प्रधानमन्त्रीको कार्यालयले हाम्रो न्यानू स्वागत-सत्कारसमेत गरेको थियो। सिङ्गापुरको लामू बसाइको अन्तरालमा हामीहरूले त्यहाँका दर्शनीय पर्यटनक्षेत्रहरूको पनि भ्रमण तथा अवलोकन गरेका थियौँ।



सिंगापुर शरहको एक आधुनिक भवन र प्रधानमन्त्रीको कार्यालय अगाडि लेखक, सन् १९९४ अक्टोबर ८ र १० तारिखमा

सिंगापुरको समुद्र किनारामा अच्युतबहादुरका साथ लेखक, सन् १९९४ अक्टोबर ११

सिङ्गापुरमा बसेर प्रधानमन्त्रीको कार्यालयमा भएको प्रशासन सुधार सम्बन्धी अध्ययनको कार्यक्रम समाप्त भएपछि हामीहरूले सम्बन्धित अधिकारीहरू र त्यहाँ बस्दा हामीहरूलाई सहयोग गर्ने नेपालीहरूलाई पनि धन्यवाद दिएका थियौँ। त्यसपछि बिदा भएर केही उपहारहरू खरिद गरी २०५१ साल मङ्सिर २६ गते तदनुसार सन् १९९४ डिसेम्बर १२ तारिखका दिन हामीहरू सिङ्गापुरबाट नेपाली जहाज चढेर काठमाडौँ फर्किएका थियौँ।

संयुक्त राष्ट्रसङ्घको सहयोगमा माथि उल्लेख भएका देशहरूमा हामीहरूले भ्रमण गर्नुको मुख्य उद्देश्य ती देशहरूमा प्रशासनसुधारको अवस्था के कस्तो छ र नेपालमा सञ्चालन भएको प्रशासनसुधारको काममा के कति अझै सुधार गर्न सकिन्छ भन्ने नै थियो।



# फेरि अतिरिक्त समूहमा

प्रशासनसुधार अनुगमनसमितिमा काम गर्दागर्दै एमालेको सरकारले प्रशासनसुधार अनुगमन समितिलाई २०५२ साल आषाढ मसान्तमा खारेज गरेर मलाई अतिरिक्त समूहमा हाजिर हुन पठाएको थियो। मलाई पनि एमालेजस्तो पूर्वाग्रही सरकारको अधीनमा रहेर काम गर्नुनपरेको हुँदा अत्यन्त आनन्द भएको थियो। मन्त्रिपरिषद् सचिवालयमा गएर दिनमा एक पटक हाजिर भएहुन्थ्यो। मलाई एमालेको सरकारले ९ महिनासम्म अतिरिक्त समूहमा राखेर विशिष्टश्रेणीको सचिवको तलब खुवाएको थियो। त्यो अवधि नै मेरो सबभन्दा आनन्दको समय थियो। सोही समयमा नै मैले 'बहादुर शाह खण्डकाव्य २०५२', आमाको सम्झनामा लेखिएको 'श्रद्धाञ्जलि खण्डकाव्य २०५२' र 'गीत तथा भजनसङ्ग्रह २०५२' का साथै केही कविताहरू सिर्जना गरेर प्रकाशनसमेत गरेको थिएँ। त्यसै हुनाले पनि त्यो समय मेरो जागिरे जीवनको सिर्जनात्मक समय भएको मैले महसूस गरेको छु।

एमालेको अल्पमतको सरकारले ९ महिनासम्म मलाई अतिरिक्त समूहमा राखेको थियो। त्यसपछि एमालेको सरकार हटेर नेपाली काङ्ग्रेसका नेता श्रीशेरबहादुर देउवाको नेतृत्वमा सर्वदलीय सरकारको गठन भएको थियो। त्यस सरकारले हामीहरू अतिरिक्त समूहमा रहेका विशिष्टश्रेणीका १३ जना सचिवहरूलाई विभिन्न मन्त्रालयहरूमा खटाएको थियो। त्यस सरकारले पनि मलाई न्याय गरेन। त्यसै समयमा गठन गरिएको नयाँ युवा, खेलकूद तथा संस्कृतिमन्त्रालयमा मिति २०५२ साल कार्तिक २० गतेको सरकारको निर्णयअनुसार मलाई खटाएको थियो।



# युवा, खेलकूद तथा संस्कृतिमन्त्रालयका साथै राष्ट्रिय खेलकूदपरिषद्मा

तत्कालीन सरकारले नयाँ गठन भएको मन्त्रालयमा मलाई सरुवा गरेरपठाएको थियो । उक्त मन्त्रालयमा सचिवदेखि बाहेक मन्त्रालयको भवन, अन्य भौतिक सुविधा र कर्मचारीहरूको समेत व्यवस्था भइसकेको थिएन । मैले नयाँ मन्त्रालयको सचिवको पुर्जी पाएपछि कहाँ गएर कसको सहायतामा मन्त्रालय सञ्चालन गर्ने ? भनेर तत्कालीन प्रधानमन्त्री श्रीशेरबहादुर देउवालाई सोधेको थिएँ । प्रधानमन्त्री देउवा प्रशासन र अरू कुराहरूसमेतको पनि कत्ति ज्ञान नभएका व्यक्ति हुनाले उहाँले मलाई कुनै जबाफ दिन नसकेर तत्कालीन मुख्य सचिव डा. श्रीईश्वरप्रसाद पोखरेललाई मेरो मन्त्रालयको व्यवस्था गरिदिन हचुवाको पारामा आदेश दिनुभएको थियो । मुख्यसचिवले पनि अरू कुनै खास व्यवस्था गर्न सक्नुभएको थिएन । उहाँले खेलकूदपरिषद्को त्यस बेला रिक्त रहेको सदस्यसचिवमा मलाई नै नियुक्त गरेर मन्त्रालय र परिषद्समेत दुवैतर्फको काम हेर्न लिखित आदेश दिनुभएको थियो । मलाई खेलकूदपरिषद् र उक्त नवगठित मन्त्रालयमा सचिव भएर काम गर्न कत्ति पनि इच्छा थिएन तापनि सरकारी जागिर खाएको नाताले इच्छा नहुँदा नहुँदै पनि म बाध्य भएर खेलकूदपरिषद्मा गएर हाजिर भएको थिएँ । नयाँ मन्त्रालयको स्थापना गर्न र त्यस बेला एमालेको अल्पमतको सरकारले अस्तव्यस्त पारेको खेलकूदपरिषद्लाई समेत सुव्यवस्थित गर्नु मेरो कर्तव्य हुनआएको थियो ।



सदस्यसचिवको रूपमा राष्ट्रिय खेलकूद परिषद्को कार्यकक्षमा काम गर्दै लेखक, २०५२ कार्तिक २५ गते

खेलकूदपरिषद्मा हाजिर भएपछि मैले बिस्तारै त्यस परिषद्को क्रियाकलापको अध्ययन गर्दै र त्यहींको जनशक्ति, साधन र स्रोतलाई समेत सदुपयोग गर्दै नयाँ मन्त्रालयको गठनको काम शुरुगरेको थिएँ। त्यसका साथसाथै परिषद्लाई पनि सुव्यवस्थित गर्ने काम तीव्ररूपमा मैले सञ्चालन गरेको थिएँ। लगातार दुई तीन महिनाको परिश्रमपछि ८४ जनाको दरबन्दी सहित नयाँ युवा, खेलकूद तथा संस्कृति मन्त्रालयको स्थापना खेलकूद परिषद्कै परिसरभित्र रहेको एउटा सानो पुरानो घरमा गर्न म सफल भएको थिएँ।

त्यसै बेला सन् १९९५ को डिसेम्बर १८ तारिखदेखि २७ तारिखसम्म भारतको मद्रासमा हुने सातौँ साफ खेलकूदका लागि पूर्वतयारी गर्नुपर्ने भएको हुँदा मैले रकम निकासा, खेलाडीको छनौट, प्रशिक्षण र अन्य आवश्यक व्यवस्थासमेत मिलाउनुपरेको थियो। त्यो खेलकूदपरिषद् पञ्चायत कालदेखि नै कहीं नबिकेका, दादागिरीमा लागेका र अनुशासनविहीन खेलाडीहरूको नाममा भर्ना गर्ने अखाडाको रूपमा परिचित रहेको कुरा त्यस बेला सबैलाई थाहा थियो। खासगरेर मण्डले खालका पञ्चायती व्यवस्थाका दादाहरू त्यस बेला परिषद्मा भर्ना गर्नेगरिन्थ्यो। सदस्यसचिव श्रीशरच्चन्द्र शाह, श्रीकमल थापा, कुमार श्रीखड्ग विक्रम शाहजस्ता दरबारका हजुरियाहरूका इशारामा त्यो परिषद् त्यसबेला चलेको थियो। पञ्चायत व्यवस्थाको पतन भएर नयाँ प्रजातान्त्रिक सरकार आए तापनि त्यसमा सुधार हुनसकेको थिएन। अझै त्यसमाथि ए.मा.ले.को अल्पमतको ९ महिने सरकार गठन भएपछि ए.मा.ले.ले पनि आफ्ना हुल्लडबाज कार्यकर्ताहरूको भर्ती गर्ने केन्द्रको रूपमा त्यस परिषद्लाई बनाएको थियो। म जानुभन्दा पहिले ए.मा.ले.को सरकारले सदस्यसचिवको रूपमा काठमाडौँको वागबजारमा बस्ने श्रीकेशव स्थापित भन्ने एक हुल्याहा किसिमको व्यक्तिलाई त्यहाँ नियुक्त गरी पठाइएको रहेछ। एमाले दलको इशारामा माथि उल्लेख गरे अनुसार प्रशस्त कार्यकर्ताहरू निज स्थापितले भर्ना गरेको थियो। म त्यहाँ गएपछि मलाई नयाँ मन्त्रालय स्थापना गर्ने, निकट भविष्यमा नै भारतको मद्रासमा हुने साफगेम सञ्चालन गर्ने गराउने र खेलाडीको नाममा पञ्चायतकालदेखि परिषद्मा भर्ना गरिएका विभिन्न विचारधारा बोकेका हुल्लडबाज राजनीतिक कार्यकर्ताहरूलाई तह लाउनुपर्ने काम समेतको

अभिभारा आइलागेको थियो । त्यसका अतिरिक्त जुडो, कराँते, ताइक्वान्दो लगायतका मार्सल आर्टका विवेकभन्दा मसलले काम गरेर सबैलाई तर्साएर खान पल्केका खेलाडीहरूको पनि मैले सामना गर्नु परेको थियो ।

उपर्युक्त अनुसार महाभारतको युद्धमा चक्रव्यूहमा बालक अभिमन्यु परेर घेरिएझैँ खेलकूदपरिषद् र नयाँ मन्त्रालयको समस्याभित्र परेर म घेरिएको थिएँ । त्यति हुँदाहुँदै पनि विभिन्न मित्रहरूको सहयोग लिएर कामलाई अगाडि बढाउँदै सबै कुराको व्यवस्था गर्न म सफल भएको थिएँ । नयाँ मन्त्रीको नियुक्ति भएर नआए तापनि मैले तत्कालीन प्रधानमन्त्री श्रीशेरबहादुर देउवाको निर्देशनमा काम चलाइरहेको थिएँ । तत्कालै मद्रासमा हुने साफखेलकूदका लागि अर्थमन्त्रालयसँग कुरा गरेर आवश्यक रकमको निकासाका साथै चाहिने सम्पूर्ण सामग्रीको पनि व्यवस्था मैले गरिसकेको थिएँ । त्यसका अतिरिक्त खेलाडीहरूको छनौट गरेर बन्दसिविरको सञ्चालन पनि मैले गराएको थिएँ ।






दायाँबाट कान्छो छोरो सगुनकुमार भट्टराई, सानो छोरो सतीशकुमार भट्टराई, आमा इन्दिरा भट्टराई, पिता शरदकुमार भट्टराई र ठूलो छोरो सञ्जीवकुमार भट्टराई, २०६६ माघ २ गते

# भारतको मद्रासमा

त्यसरी माथि उल्लेख भएका सम्पूर्ण कामहरू पूरा गरेर मद्रासतर्फ खेलाडी र सम्बन्धित पदाधिकारीहरूलाई पठाउने समयमा युवा, खेलकूद तथा संस्कृति मन्त्रालयमा श्रीबलबहादुर के.सी.लाई मन्त्री र सहायक मन्त्रीमा श्रीपाल्देन गुरुङलाई तत्कालीन प्रधानमन्त्रीले पठाउनुभएको थियो । उहाँहरू मन्त्रालयमा  गएपछि मलाई सहयोग हुनुको साटो उल्टो अरू समस्याहरू थपिन गएका थिए । मन्त्री र सहायकमन्त्रीका बीचमा राम्रो सम्बन्ध नहुँदा समस्याग्रस्त नयाँ मन्त्रालय र परिषद्मा अरू नयाँ समस्याहरू थपिन गएका थिए । त्यसै बीचमा सन् १९९५ को डिसेम्बर १७ तारिखका दिन म नेपालको तर्फबाट Chief de Mission भएर ३५० जति खेलाडी र पदाधिकारीसमेतलाई लिएर मद्रासतर्फ गएको थिएँ । त्यसका अतिरिक्त तत्कालीन प्रधानमन्त्रीको निर्देशन अनुसार सहायक मन्त्री श्रीपाल्देन गुरुङको नेतृत्वमा २० जना जति तत्कालीन संसदका माननीयहरू पनि मेरा साथमा जानु भएको थियो । काठमाडौंबाट खेलाडीहरूलाई लिएर भारतको राजधानी नयाँ दिल्लीसम्म नेपाली जहाजमा हामीहरू सजिलै गएका थियौं । नयाँ दिल्लीबाट मद्रास जान सजिलैसँग हवाइजहाजको व्यवस्था हुननसकेपछि मैले खेलाडी र माननीयहरूसमेतको पेलाइखानुपरेको थियो । अनेक तरहको व्यवस्था गरी अत्यन्त कष्टका साथ सबै मसँग गएका राजनीतिक व्यक्तिहरूसहित ४०० जना जति मानिसहरूलाई हवाइजहाजमा लिएर म मद्रास पुग्न सफल भएको थिएँ । त्यस बेला श्रीलङ्कामा तमिलहरूको आतङ्ककारी गतिविधिका कारणले मद्रासमा सुरक्षालाई अत्यन्त कडागरिएको थियो । म नेपालको चीफ डि मिसन भएको हुँदा सुरक्षाकर्मीहरूले




भारतको मद्रासमा भएको सातौँ SAF Games का Chef de mission को ID Card र ब्याज

चारैतिरबाट घेरेर सजिलैसँग मलाई कहीँ पनि हिँड्न दिँदैनथे।

एउटा विशाल पटाङ्गिनीमा खेलकूदग्राम बनाएर नै हामीहरूलाई सुरक्षाका साथ राखिएको थियो। म खेलाडी र पदाधिकारीहरूका साथमा त्यही विशाल खेलकूदग्राममा बसेको थिएँ। मेरा साथमा जानुभएका सहायकमन्त्री र माननीयहरूसमेतलाई एउटा राम्रो होटेलको व्यवस्था गरेर मैले राखिदिएको थिएँ। मद्रासको विशाल नेहरूरङ्गशालामा तमिलनाडुकी तत्कालीन मुख्यमन्त्री श्रीमती जयललिताले खेलकूद समारोहको उद्घाटन गर्नुभएको थियो। एकातर्फ खेलकूदमा सफलता प्राप्त गर्न खेलाडीहरूलाई प्रोत्साहन दिनु मेरो कर्तव्य थियो भने अर्कोतर्फ मेरा साथमा गएका मन्त्री, माननीय, पत्रकार र खेलकूदका पदाधिकारीहरूलाई पनि मैले रेखदेख गर्नु पर्दथ्यो। मैले उक्त गुरुतर अभिभारा पूर्ण गर्नुपर्नेभएको हुँदा त्यसलाई सहयोग पुऱ्याउन तत्कालीन प्रधानमन्त्री श्रीशेरबहादुर देउवाले पठाउनु भएका सहायक मन्त्री र माननीयहरूले मलाई सहयोग गर्नुको साटो



भारतको मद्रासमा आयोजित सातौँ SAF Games मा Olympic Village भित्र सहभागी खेलाडीहरू र पदाधिकारीहरूका साथ Chef de mission का रूपमा लेखक, १९९५ डिसेम्वर १९





भारतको मद्रासमा आयोजित सातौँ SAF Games मा Olympic Village भित्र सहभागी खेलाडीहरू र पदाधिकारीहरूका साथ Chef de mission का रूपमा लेखक, १९९५ डिसेम्वर १९ र २१

मसँग विभिन्न किसिमका सुविधा र सहुलियतहरू माग गरेर मलाई सधैँ दुःख दिइरहन्थे। अत्यन्त निम्नस्तरका मनोवृत्ति भएका ती माननीयहरू भारतमा गएर मेरो लागि अत्यन्त अभिशाप सावितभएका थिए। ती निहितस्वार्थ भएका माननीयहरूको नेतृत्व त्यस बेलाका मनोनित माननीय श्रीॐकार



भारतमा

श्रेष्ठले गर्नुभएको थियो। उहाँहरूमध्ये ॐकार श्रेष्ठ आफ्नी श्रीमतीसमेत लिएर सरकारी खर्चमा जानुभएको थियो। सबैको स्वागतसत्कार मैले नै गर्नुपर्छ भन्ने उहाँहरूको चाहना थियो। मैले पनि आफूसँग भएको स्रोत र साधनले भ्याएसम्म सबैलाई सहयोग पुऱ्याएको थिएँ। त्यति गर्दागर्दै पनि उहाँहरूले खेलकूदको सफलतातर्फ ध्यानै नदिएर आफ्नू स्वार्थ सिद्ध गर्नमात्रै मलाई दुःख दिने गरेको हुँदा एक दिन उहाँहरूका र मेरा बीचमा चर्काचर्की र भनाभनसमेत परेको थियो। देशमा त्यस खालका क्षुद्र स्वार्थ भएका माननीयहरू संसदमा भएपछि देशले कसरी प्रगति गर्ला ? भन्ने संझिएर मेरा आँखाबाट आँसुसमेत झरेको थियो। मैले त्यसै बेला नै नेपालको नवस्थापित प्रजातन्त्रको भविष्य राम्रो छैन भन्ने तिनै माननीयहरूको निम्नस्तरको क्षुद्र व्यवहारबाट अनुमान गरिसकेको थिएँ। नभन्दै पुनर्बहाल भएको प्रजातन्त्रले आफ्नू १० वर्षको कार्यकाल समाप्त गर्न नपाउँदै देशमा माओवादीबाट सिर्जित आतङ्कको स्थिति भोग्नुपरेको थियो। माओवादीसँग विभिन्न खालका संझौताहरू गरेर अन्त्यमा संयुक्तराष्ट्रसङ्घको सहयोगमा शान्तिसम्झौता भएर पनि अझै देशको भविष्य अन्धकारमय भएको नै मैले देखेको छु। यसको मूलमा २०४८ सालपछि नेपालमा निर्वाचित भएर आएका जनताका प्रतिनिधि माननीयहरू, माथि उल्लेख भए अनुसारका अत्यन्त स्वार्थी र अनैतिक भएको कारण नै हो भन्ने मैले ठानेको छु।

उपर्युक्त अनुसार मद्रासमा विभिन्न खालका समस्याहरूलाई पार गर्दै केही स्वर्ण, रजत र कांस्यपदकहरूसमेत प्राप्त गरेर खेलाडीका साथ सफलतापूर्वक म काठमाडौं फर्किएको थिएँ। काठमाडौं फर्किएर आएपछि मद्रासमा पदकहरू प्राप्त गर्ने खेलाडीहरूलाई तत्कालीन राजा श्री ५ वीरेन्द्रबाट एक भव्य समारोहका बीच सैनिक मञ्चमा सम्मानस्वरूप नगद/पुरस्कार प्रदान गरिएको थियो। उक्त सातौँ साफ गेमका अवसरमा



भारतको मद्रासमा आयोजित सातौँ SAF Games का पदक विजेताहरूलाई नगद पुरस्कार वितरण गर्दै श्री ५ वीरेन्द्र, शाही सैनिकमञ्च, टुँडिखेल, संवत् २०५२ साल पौष ३० गते।

राष्ट्रिय खेलकूद परिषद्का सदस्य सचिवको हैसियतले मैले दिएको सन्देश जुन अंग्रेजी भाषामा निम्नअनुसार छ ।

**Message**

SAF Games has always been joyous occasion for the players and athletes of South Asian countries. I am confident that the 7th SAF Games being held in Madras, India, will further enhance the friendship and cooperation among the SAARC countries.

I express my gratitude to India for hosting the 7th SAF Games. I also felicitate our delegation and players participating in the Games with the belief that they would add to the glory of the nation by their skill and performance.

Member Secretary
Sharad Kumar Bhattarai
National Sports Council of Nepal

उपर्युक्त अनुसार भारतको मद्रासमा भएको सातौँ साफ गेम्सका सन्दर्भमा मैले भोग्नुपरेका विभिन्न खालका समस्याहरूलाई पार गर्दै म काठमाडौँ फर्किएपछि मैले पूर्ववत् मन्त्रालयमा गएर आफ्नू काम शुरु गरेको थिएँ । त्यसपछि पनि मलाई मन्त्री श्रीबलबहादुर के.सी., सहायक मन्त्री श्रीपाल्देन गुरुङ र परिषद्मा कार्यरत खेलाडीहरूसमेतको समस्या यथावतै रहेको थियो । मैले तिनीहरूसँग जुझ्दै मन्त्रालयलाई अगाडि बढाउनुपरेको थियो । नवगठित मन्त्रालयमा मन्त्री र सहायक मन्त्रीका साथै आवश्यक पर्ने कर्मचारीहरूको दरबन्दी पनि पूरा भइसकेको थियो । मन्त्रालयलाई अत्यन्त सुव्यवस्थितरूपमा चलाउने तर्फ म अगाडि बढिरहेको थिएँ । त्यसै बेला २०५३ साल वैशाख २३ गते तदनुसार सन् १९९६ मे ५ तारिखका दिन संयुक्तराष्ट्रसङ्घ अन्तर्गतको परिवारनियोजन कार्यक्रम अन्तर्गत केही दिनका लागि संयुक्त राष्ट्रसंघकै आर्थिक सहयोगमा दक्षिण कोरिया र जनवादी गणतन्त्र चीनको भ्रमणमा मैले जानुपर्ने भएको थियो ।



# कोरिया र चीनमा

दक्षिण कोरिया र जनवादी गणतन्त्र चीनको भ्रमणमा जाँदा उक्त भ्रमणटोलीका नेता तत्कालीन मुख्य सचिव डा. श्रीईश्वरप्रसाद उपाध्याय हुनुहुन्थ्यो । स्थानीय विकासमन्त्रालयका सचिव श्रीविश्वराज रेग्मी, सहसचिव श्रीखेमराज नेपाल, विशेषज्ञ श्रीनीरबहादुर कार्की र युवा, खेलकूद तथा संस्कृति मन्त्रालयका तर्फबाट त्यस भ्रमणदलमा मैले पनि सम्मिलित हुने सौभाग्य पाएको थिएँ । उक्त भ्रमणमा जाने सन्दर्भमा हामीहरू काठमाडौँबाट सन् १९९६ मे ५ तारिखका दिन नेपाली जेटमा चढेर अपराह्न हङ्कङतर्फ प्रस्थान गरेका थियौँ ।

साँझमा हङ्कङ पुगेपछि केही समय त्यहाँ विश्राम गरेर रातीको उडानबाट भोलिपल्ट बिहान अर्थात् मे ६ तारिखका दिन हामीहरू कोरियाको राजधानी सिउल पुगेका थियौँ । सिउलको विमानस्थलमा पुगेपछि कोरियाका सम्बन्धित पदाधिकारीहरूले हाम्रो स्वागत गरेका थिए । त्यसपछि दक्षिण कोरियाको राजधानी सिउलमा पुगेर बिहानैदेखि हामीहरू परिवारनियोजनसम्बन्धी छलफलमा व्यस्त भएका थियौँ । त्यस दिन र भोलिपल्टसमेत परिवारनियोजनसम्बन्धी अध्ययनभ्रमणका साथै कोरियाका सिउल लगायतका विभिन्न दर्शनीय स्थलहरूमा पनि हामीहरूले भ्रमण गरेका थियौँ। त्यहाँ दर्शनीय स्थलहरूको भ्रमण गर्ने सन्दर्भमा हामीहरूले दक्षिण कोरिया र उत्तर कोरियाका बीचमा रहेको विवादास्पद सीमाको समेत भ्रमण गरेका थियौँ। सीमामा दुवैतर्फका सैनिकहरू युद्धका


दक्षिण कोरियाको राजधानी सिउलमा लेखक


दक्षिण कोरियाको राजनधानी सिउलमा सम्बन्धित अधिकारीहरूसँग छलफल गर्दै प्रतिनिधिमण्डल, मे ७

समयमा जस्तै गरेर एक अर्काका विरुद्ध बन्दुक ताकेर बसेका देखिन्थे। त्यहाँ सिउलटावरका साथै अरू पर्यटकीय स्थानहरूको समेत भ्रमण गर्दा मलाई त्यो ठाउँ अत्यन्त सुन्दर लागेको थियो। नेपाल जस्तै डाँडाकाँडाहरूका बीचमा रहेको सिउल अत्यन्त सुन्दर र मनोरम देखिन्थ्यो। आधुनिक साधन र सुविधाहरूले सम्पन्न त्यो ठाउँ अत्यन्त विकसित भएको मैले देखेको थिएँ।

उपर्युक्त अनुसार कोरियाका सबै कार्यक्रम समाप्त गरेर हामीहरू मे ८ तारिखका दिन अपराह्न सिउलबाट कोरियन हवाइजहाजद्वारा चीनको राजधानी बेजीङ पुगेका थियौँ। चीनको भ्रमण गर्ने मेरो धेरै वर्ष अघिदेखिको उत्कट अभिलाषा त्यस दिन गएर परिपूर्ण भएको थियो। चीनको राजधानी बेजीङको अन्तर्राष्ट्रिय विमानस्थलमा पुगेपछि संयुक्तराष्ट्रसंघका त्यहाँ रहेका अधिकारीहरू र चिनियाँ अधिकारीहरूले हाम्रो भव्य स्वागत गरेका थिए। अत्यन्त स्वागतसत्कारका साथ उनीहरूले हामीहरूलाई बेजीङ शहरमा रहेको झुङ्गवान भन्ने होटेलमा लगेर राखेका थिए।

अर्कोदिन मे ९ तारिखदेखि हाम्रो अध्ययनभ्रमणको कार्यक्रम अत्यन्त व्यस्तताका साथ शुरुभएको थियो। विभिन्न सङ्घसंस्थाहरूमा भ्रमण गर्दै हामीहरूले परिवारनियोजनसम्बन्धी चीनको नीति र कार्यक्रमसमेत बुझ्ने क्रममा विभिन्न सम्बन्धित विशेषज्ञहरूलाई पनि भेटेका थियौँ।

मे १० तारिखका दिन बेजीङको तेनयानमेन स्क्वायरमा रहेको जनताको ठूलो कक्ष अर्थात् पिपुल्स ग्रेट हल भन्ने अत्यन्त विशाल तथा भव्य भवनमा गएर हामीहरूले चिनियाँ कम्युनिष्ट पार्टीका जनकङ्ग्रेसका उपाध्यक्ष डा.जी पिङलाई भेटेका थियौँ। दुवै देशका बीचको मित्रताका सम्बन्धमा हामीहरूले



चीनका कम्युनिष्ट पार्टीका जनकङ्ग्रेसका उपाध्यक्ष डा.जी.पिङका साथ प्रतिनिधि मण्डल, सन् १९९६ मे १०

औपचारिकरूपमा कुरा गरेका थियौँ र त्यहाँ भ्रमण गर्नुको उद्देश्य पनि बताएका थियौँ । उहाँले दोभाषे नै नराखी हामीहरूसँग अङ्ग्रेजीमै बातचित गर्नु भएको थियो । उहाँ अत्यन्त शिष्ट र भद्र देखिनुहुन्थ्यो । त्यसै दिन चीन सरकारका संस्कृति मन्त्रीलाई भेट्न पनि हामीहरू गएका थियौँ । उहाँले हाम्रो सम्मानमा रात्रिभोजको आयोजना गर्नुभएको थियो । उक्त भोजमा चीनका माथिल्ला तहका नेता र पदाधिकारीहरूसँगसमेत हाम्रो भेटघाट र परिचय भएको थियो । काठमाडौंबाट चीनतर्फ प्रस्थान गर्ने समयमा नेपालका तत्कालीन युवा, खेलकूद तथा संस्कृतिमन्त्री श्रीबलबहादुर के.सी.ले चीनमा संस्कृति मन्त्रीसँग भेट भएमा मेरो संझना सुनाइदिनु र सम्भव भएमा भ्रमणको आदानप्रदानको व्यवस्था पनि मिलाएर आउनु भनेर भन्नुभएको हुँदा मैले सो कुरा अप्रत्यक्षरूपमा चीनका संस्कृतिमन्त्रीसँग भएको भेटको क्रममा व्यक्त गरेको थिएँ । उहाँले मेरो कुरा सुन्ने बित्तिकै नेपालका संस्कृति मन्त्रीलाई चीन भ्रमणको निमन्त्रणा तुरुन्तै मौखिकरूपमा मलाई दिनुभएको थियो। लेखापढी पछि हुँदै गर्छ, भ्रमणको तयारी गर्दैगर्नुभन्ने पनि उहाँको भनाइ थियो ।



चीनको राजधानी बेजीङको तेनयानमेन स्क्वायरमा रहेको The Great Hall of the people को अगाडि लेखक, सन् १९९६ मे १०



जनवादी गणतन्त्र चीनका संस्कृति मन्त्रीका साथ रात्रिभोजमा प्रतिनिधि मण्डल, बेजीङ, सन् १९९६ मे १०

मे ११ तारिखका दिन हामीहरू विभिन्न संस्था र व्यक्तिहरूसँग भेट्दै परिवारनियोजनको कार्यक्रमका साथै चीनमा भएको विकास र अन्य कार्यक्रमको समेत जानकारी लिँदै घुमेका थियौँ । सम्बन्धित चिनियाँ अधिकारीहरूसँग अत्यन्त




चीनका परिवारनियोजन सम्बन्धी कार्यक्रम सञ्चालन गर्ने अधिकारीहरूका साथमा नेपाली प्रतिनिधिमण्डलका सदस्यहरू, सन् १९९६ मे ११

सौहार्दका साथ छलफल गर्थ्यौं, बहस गर्थ्यौं र ठाउँ ठाउँमा आयोजना गरिएका प्रवचनहरूका कार्यक्रमहरूमा पनि हामीहरू सम्मिलित हुनेगर्दथ्यौं । हामीहरू ती सबै औपचारिक कार्यक्रमहरूका साथसाथै बीचबीचमा बेजीङभित्रका दर्शनीय पुरातात्त्विक र ऐतिहासिक स्थलहरूको पनि भ्रमण गर्ने-गर्दथ्यौं । दर्शनीय स्थलहरूमध्ये सर्वप्रथम विश्वप्रसिद्ध सातौं आश्चर्यमा पर्ने चीनको ऐतिहासिक ग्रेटवालको भ्रमण गरेर हामीहरू अत्यन्त प्रभावित भएका थियौं ।


चीनको सातौं आश्चर्यभित्र पर्ने ग्रेट वालमा प्रतिनिधि मण्डल सहित लेखक, सन् १९९६ मे ११

त्यसपछि चीनको प्रसिद्ध फर्बिडेन सिटी अर्थात् निषिद्ध शहर र तेनयानमेन स्क्वायरको पनि हामीहरूले भ्रमण गरेका थियौं । चीनका पुराना बादशाहहरू बस्ने विशाल ऐतिहासिक दरबारको क्षेत्रलाई फर्बिडेनसिटी भनिँदो रहेछ । यो फर्बिडेनसिटी भित्रको राजदरबार चीनका तत्कालीन सम्राट्ले सन् १४०७ देखि लाखौं कामदारहरू लगाएर १४ वर्षको अवधिभित्र निर्माण गराएका रहेछन् । त्यस बेलाका चीनका सम्राट्लाई जनताले देख्नसम्म पनि पाउँदैनथे अरे । सम्राट्को जीवन दरबारियाहरूबाट घेरिएर विलासमा नै बित्तथ्यो । सन् १९०८ मा चीनका अन्तिम सम्राट् पुही ३ वर्षका बालकलाई उनका पिता अर्थात् चीनका तत्कालीन सम्राट्को मृत्युपछि रुवाउँदै राजगद्दीमा राखिएको थियो अरे । त्यसै समयमा चीनमा गृहयुद्ध र उथलपुथल भएको थियो । क्रान्तिकारीहरूले सन् १९१२ मा सम्राट्को अधिकारलाई सीमित गरेका थिए भने सन् १९२४ मा गएर चीनमा राजपरम्पराको नै उन्मूलन भएको थियो ।

दोस्रो विश्वयुद्ध शुरुहुनुभन्दा पहिले सन् १९३३ मा जापानले चीनमा हमला गरेर लूटपाट मच्चाएको थियो । उक्त प्यालेस म्युजियममा राखिएका बहुमूल्य पुरातात्त्विक वस्तुहरूलाई जापानीहरूबाट सुरक्षित गरेर राख्न धेरै वर्षसम्म दरबारबाट बाहिर लगेर लुकाएर चीनका जनताले राखेका थिए । विश्वयुद्धको समाप्तिपछि धेरैजसो ती बहुमूल्य पुरातात्त्विक सामानहरू

फेरि ल्याएर प्यालेस म्युजियममै राखिएका थिए ।

त्यसरी विशाल चीनको ५००० वर्ष पुरानू राजपरम्पराको पनि अन्त्य भएको थियो । दरबारमा रहेका बहुमूल्य वस्तुहरूसहित सन् १९२५ अक्टोबर १० तारिखका दिन १० हजार कोठाहरू भएको त्यस ऐतिहासिक दरबारलाई पुरातात्त्विक सङ्ग्रहालयका रूपमा चीनसरकारले परिणत गरेको थियो । त्यसपछि त्यो दरबार सर्वसाधारण जनताका लागि पनि खुला भएको थियो । तर सन् १९३१ मा चीनमा जापानीहरूको हमला र गृहयुद्धका कारणसमेतले गर्दा त्यस दरबारमा राखिएका बहुमूल्य सामानहरू र दरबारसमेत अलपत्रमा परेका थिए । बहुमूल्य सामानहरूलाई जापानीहरूबाट जोगाउन चीनका विभिन्न ठाउँमा लुकाएर राखिएका थिए । दोस्रो विश्वयुद्धको समाप्ति र माओका लालसेनाले चीनको सत्ता आफ्नो हातमा लिएपछि छिन्नभिन्न भएको राजदरबारको जीर्णोद्धार गरिएको थियो र बाहिर लगेर राखिएका धेरैजसो बहुमूल्य सामानहरू पनि दरबारभित्रै फेरि ल्याएर राखिएका थिए । त्यस दरबारमा रहेका केही बहुमूल्य सामानहरू राष्ट्रवादी चीनको राजधानी ताइवानमा लगेर पुरातात्त्विक सङ्ग्रहालयमा राखिएका छन् भन्ने बुझिन्छ । उक्त विशाल राजदरबार हाल आएर पर्यटकहरूको दर्शनीय स्थल बनेको छ । त्यस ऐतिहासिक विशाल दरबारलाई पुरानै अवस्थामा पुऱ्याएर सुरक्षित राख्नका लागि चीन सरकारले सन् १९५४ देखि २५ करोड अमेरिकी डलर खर्च गरेर मर्मत सम्भारको काम शुरुगरेको र उक्त काम सन् २०२० सम्ममा पूरा हुनेदेखिन्छ ।



बेजीङको फर्बेडिन सिटीभित्र रहेको ऐतिहासिक दरबारमा सुरक्षित बादशाहको राजगद्दी, सन् १९९६ मे ११

उक्त दरबारमा चीनका पुराना बादशाहहरूले आफ्ना रानी, रखौटी र नानीहरूसमेत राख्नका लागि असङ्ख्य घरहरू दरबारको परिसरभित्रै बनाएका रहेछन् । नेपालमा भने पुराना राजा, महाराजा, भाइभारदार तथा राणाहरूका दरबारहरूको संरक्षण गरेर राख्न नसकेको भए तापनि २०६४ सालमा नेपालबाट राजसंस्थाको उन्मूलन भएपछि भने तत्कालीन राजा बस्ने

नारायणहिटी राजदरबारको मुख्य भागलाई नेपाल सरकारले पुरातात्त्विक सङ्ग्रहालयको रूपमा परिणत गरेर सर्वसाधारणका लागि खुला गरेको छ ।

चीनमा सन् १९४९ पछि क्रान्तिकारी कम्युनिष्टनेता माओत्सेतुङ्का पालामा सांस्कृतिक क्रान्तिका नामबाट पुराना ऐतिहासिक तथा सांस्कृतिक महत्त्वका सामग्रीहरूलाई लालसेना लगाएर मास्ने र ध्वस्त पार्ने काम पनि भएको रहेछ । हाल आएर सांस्कृतिक क्रान्तिमा विध्वंस पारिएका चीनको ऐतिहासिक कला, संस्कृति र बौद्धमन्दिरहरूसमेतलाई पुनः संरक्षण गर्न लागिएको रहेछ । हालको चिनियाँ सरकारले ती विध्वंस पारिएका ऐतिहासिक धरोहरहरूका साथै अरू ऐतिहासिक भवन, मठ र मन्दिरहरूको समेत जीर्णोद्धार गरेर आफ्नू इतिहास र संस्कृतिको संरक्षण गर्ने काम गरिरहेको हामीहरूले देखेका थियौँ । हाल आएर चीनको प्राचीन कला, सभ्यता र संस्कृतिको अवलोकन गर्न वर्षमा लाखौँलाख विदेशी पर्यटकहरू चीन जाने गर्दारहेछन् । फर्बिडेनसिटीको अगाडिपट्टि रहेको प्रसिद्ध तथा विशाल तेनयानमेन स्क्वायरमा पनि हामीहरूले समय समयमा बेजीङमा बसुन्जेल भ्रमण र अवलोकन गर्ने काम गरेका थियौँ । त्यही तेनयानमेन स्क्वायरमा चीनमा प्रजातन्त्रको माग गरेर प्रदर्शन गर्ने विद्यार्थीहरूको विशाल जुलुसलाई तत्कालीन चिनियाँ सरकारले ट्याङ्क चलाएर दमन गरेको थियो । त्यसबेला धेरै प्रजातन्त्रवादीहरूको मृत्यु भएको थियो । त्यसै कारण त्यो तेनयानमेन स्क्वायर प्रजातन्त्रवादी चीनका जनताहरूका रगतले अहिलेसम्म पनि रञ्जित भइरहेको त्यहाँ भ्रमण गर्दा मैले अनुभूति गरेको थिएँ । त्यही तेनयानमेन स्क्वायरभित्रै चीनका तत्कालीन क्रान्तिकारी तथा शक्तिशाली नेता माओत्सेतुङको मृतशरीरलाई जस्ताको तस्तै सुरक्षित गरेर राखिएको छ भन्ने मैले सुनेको हुँदा हामीहरूले त्यसको पनि अवलोकन गर्ने इच्छा चिनियाँ अधिकारीहरूसँग गरेका थियौँ, तर के कति कारणले हो त्यसपटकको भ्रमणमा हामीहरूलाई माओको मृतशरीर उनीहरूले देखाएका थिएनन् । त्यति ठूला चीनका तत्कालीन नेता माओत्सेतुङको तस्वीर खालि


चीनको राजधानी बेजीङको तेनयानमेन स्क्वायर अगाडि फर्बिडेन सिटीको मूलद्वारमा लेखक, पृष्ठभूमिमा माओत्सेतुङको तस्वीरसमेत देखिन्छ, सन् १९९६ मे ११

एक ठाउँ फर्बिडेनसिटीको मूलद्वारमामात्र राखेको हामीहरूले देखेका थियौं, अन्यत्र कहीं पनि देखेनौं ।

उपर्युक्त अनुसार जनवादी गणतन्त्र चीनको राजधानी बेजीङका विभिन्न ऐतिहासिक तथा महत्त्वपूर्ण स्थलहरूको भ्रमण र चीन सरकारले अपनाएको जनसङ्ख्यासम्बन्धी नीति र कार्यक्रमको विस्तारपूर्वक अध्ययन गर्ने काम मे ११ तारिखका दिन हामीहरूले समाप्त गरेका थियौं । त्यसै रात जनवादी गणतन्त्र चीनको राजधानीमा रहेको हाम्रो नेपाली राजदूतावासको निमन्त्रणामा दूतावासमा नै आयोजना गरिएको रात्रिभोजमा हामीहरू सम्मिलित भएका थियौं । त्यहाँ अत्यन्त सौहार्दपूर्ण वातावरणमा राजदूत श्रीयुवराज प्रधान, त्यहाँ रहेका अन्य कुटनीतिक मित्रहरू र चीनमा अध्ययन गरिरहेका केही नेपाली बिद्यार्थीहरूसँग पनि हाम्रो भेटघाट भएको थियो । मैले विदेश भ्रमण गर्दा देखेका नेपाली राजदूतावासहरूमध्ये चीनको राजधानी बेजीङको उक्त राजदूतावास व्यवस्थितरूपमा रहेको पाएको थिएँ ।

त्यसपछि हामीहरू मे १२ तारिखका दिन चीनको अर्को रमणीय शहर नान्जीङतर्फ हवाइजहाजबाट गएका थियौं । बेलुका नान्जीङमा पुगेपछि एउटा भव्य होटेलमा हामीहरूलाई राखिएको थियो । हामीहरूलाई सहयोग पु-याउन बेजीङबाटै २ जना चिनियाँ अधिकारीहरू हाम्रासाथमा नान्जीङ गएका थिए । नान्जीङ शहर अत्यन्त सफा, सुग्घर र हराभरासमेत रहेछ । आधुनिक शहरहरूमध्येमा चीनको एउटा शहर मानिंदो रहेछ । त्यहाँका जनता अत्यन्त सुखी र सम्पन्न देखिन्थे । त्यहाँ पुगेको अर्को दिन हामीहरू निर्धारित कार्यक्रम अनुसार विभिन्न कार्यक्रमहरूमा व्यस्तरहेका थियौं । जनसङ्ख्यासम्बन्धी काम हेर्ने ज्याङ्सु नियोगका साथै त्यहाँ रहेको जनसङ्ख्या कलेजमा पनि हामीहरू गएका थियौं । त्यहाँ आयोजित कर्यशालामा भागलिनुका साथै विभिन्न विद्यालयहरूको पनि हामीहरूले भ्रमण गरेका थियौं । फुर्सदका



चीनका ऐतिहासिक प्रसिद्ध राजनेता डा. सन्यातसेनको स्मारकमा लिएको तस्वीर सन् १९९६ मे १३

समयमा रमणीय तथा ऐतिहासिक स्थलहरूको भ्रमणमा पनि हामीहरू गएका थियौँ। त्यसै सन्दर्भमा जनवादी गणतन्त्र चीनका ऐतिहासिक नेता डा. सन्यातसेनको स्मारक हेर्न हामीहरूलाई लगिएको थियो।

त्यसै दिन साँझ प्रान्तीय राज्यपालद्वारा हाम्रा सम्मानमा आफ्नै निवासस्थानमा आयोजित रात्रिभोजमा हामीहरू सम्मिलित भएका थियौँ। अत्यन्त सौहार्दपूर्ण वातावरणमा दुई देशको सुमधुर मित्रताका सम्बन्धमा कुरा गर्दै हामीहरूले रातको खाना खाएका थियौँ। राज्यपालसँग बिदा भएर हामीहरू रातमा होटेलमा आएर बसेका थियौँ। त्यसप्रकार अत्यन्त रमाइलोसँग नान्जीङको भ्रमण सिध्याएर मे १४ तारिखका दिन सबेरै नान्जीङबाट लुकूभन्ने विद्यालयमा हामीहरू गएका थियौँ। त्यो पनि जनसङ्ख्यासम्बन्धी कार्यक्रम सञ्चालन गर्ने विद्यालय थियो। त्यहाँ बालबालिका पढ्ने एउटा प्राथमिक विद्यालयमा पनि हामीहरूलाई लगिएको थियो। त्यहाँ बालबालिकाहरूलाई अत्यन्त आधुनिक प्रविधिबाट पढाइएको हामीले देखेका थियौँ। त्यसै दिन अपराह्न हामीहरू विदेशीहरूको सहयोगमा चीनले चलाएको विशेष आर्थिकक्षेत्र हेर्न लुकूको नमुना आर्थिकक्षेत्रमा गएका थियौँ। त्यो आर्थिकक्षेत्र अत्यन्त विशाल र सुव्यवस्थितसमेत थियो। त्यसपछि हामीहरू लुकूबाट चीनका सुन्दर गाउँ र शहरहरू हेर्दै ट्रेनमा चढेर उक्सीतर्फ प्रस्थान गरेका थियौँ। त्यसै दिन राती उक्सीमा पुगेर हामीहरू पाहुनाघरमा बसेका थियौँ।


चीनको लुकुमा रहेको प्राथमिक विद्यालयका बालबालिकाहरूका साथ लेखक, सन् १९९६ मे १४

मे १५ तारिखका दिन सबेरै नै उक्सीको सियान भन्ने नगरमा त्यहाँका अधिकारीहरूले हामीहरूलाई लिएरगएका थिए। सियान भन्ने शहर अत्यन्त सफा सुग्घर र आधुनिक रहेछ। त्यहाँकी नगरपालिकाकी महिलामेयरले हाम्रो अतिथिसत्कार र


चीनको उक्सी प्रान्तको सियान भन्ने नगरपालिकाकी नारी मेयरका साथ दिवाभोज, सन् १९९६ मे १५

स्वागतसमेत गरेकी थिइन्। उनको भनाइ अनुसार त्यो सियान शहर चीनमा सबैभन्दा सुसम्पन्न र प्रतिव्यक्ति आम्दानी पनि बढिभएको नगर रहेछ। समारोह समाप्त गरेर दिवाभोजपछि हामीहरू त्यस सियानमा रहेका ठूलाठूला रमणीय तालहरू हेर्नगएका थियौँ। अपराह्नसम्ममा परिवारनियोजन नीति तथा कार्यक्रमसमेतको अवलोकनको काम सकिएको हुँदा हामीहरू त्यहाँबाट बिदा भएर ट्रेनद्वारा त्यहाँको मनोहर भूदृश्य, गाउँ, शहर तथा हरियालीपूर्ण डाँडाकाँडाहरू हेर्दै सङ्घाईतर्फ लाग्यौँ र राती सङ्घाईमा पुगेर हामीहरू होटेलमा बसेका थियौँ। अर्को दिन त्यहाँ सङ्घाईसङ्घका जनसङ्ख्या हेर्ने अधिकारीहरूले हाम्रो स्वागतसत्कार गरेका थिए। त्यहाँ हामीहरूले जनसङ्ख्या नियन्त्रणसम्बन्धी विषयमा अध्ययन गरिरहेका छात्रछात्रा, प्रशिक्षक र बियरफुटेड अगुवा स्वास्थ्यकर्मीहरूसमेतलाई भेटेका थियौँ। ती बियरफुटेड स्वास्थ्यकर्मीहरूको प्रचलन जनवादी गणतन्त्र चीनमा सन् १९७६/७७ मा शुरुभएको थियो। सो कुरा मैले त्यस बेला बेलायतको म्यानचेष्टर भिक्टोरिया विश्वविद्यालयमा अध्ययन गर्दा थाहा पाएको थिएँ। सोही कुराको मैले त्यहाँ जिज्ञासा राख्दा अत्यन्त गौरवका साथ चीनका सम्बन्धित अधिकारीहरूले त्यसलाई संस्मरण गरेका थिए। सङ्घाईमा पुरातात्त्विक सङ्ग्रहालयका साथै नयाँ आर्थिक क्षेत्र र आधुनिक विकासका धेरै योजनाहरूको पनि हामीहरूले अवलोकन गरेका थियौँ। हामीहरूले घरमा ल्याउन केही चिनियाँ मालसामानहरू पनि त्यहाँ किनेका थियौँ।



सियानको सुन्दर तलाउका किनारमा नगरकी नारीमेयरका साथ डा. ईश्वरप्रसाद र लेखक, सन् १९९६ मे १५

त्यसपछि त्यसै दिन सम्बन्धित चिनियाँ अधिकारीहरूसँग बिदा भएर हामीहरू अपराह्न सङ्घाईबाट जेटमा चढेर हङ्कङ गएका थियौँ। रातमा हङ्कङ पुगेर हामीहरू एउटा राम्रो होटेलमा बसेका थियौँ। हङ्कङमा कोलोन र चुङ्किङ आदि रमणीय स्थानहरूको भ्रमण गर्नुका साथै केही किनमेलसमेत गरेर २०५३ साल जेठ ५ गते तदनुसार मे १८ तारिखका दिन अपराह्न नेपाली जेटमा चढेर हामीहरू नेपालतर्फ प्रस्थान गरेका थियौँ।

हङ्कङबाट उड्ने समयमै साँझ परिसकेको हुँदा उडानको समयमा हामीहरूले खास भूदृश्य देख्न सकेका थिएनौँ । हामीहरूलाई लिएर आएको नेपाली हवाइजहाज चीनको दक्षिणी भूभाग हुँदै अन्तिममा भारतको भूमिमाथिबाट नेपाल प्रवेश गरेको थियो ।



हङ्कङको कोलोन शहर नजिक समुद्रको किनारमा लेखक, पृष्ठभूमिमा पानीजहाज देखिन्छ ।

हामीहरू राती १० बजे त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएर आ–आफ्ना घर आएका थियौँ ।

उपर्युक्त अनुसार संयुक्तराष्ट्रसङ्घको परिवारनियोजनसम्बन्धी कार्यक्रममा दक्षिण कोरिया र विशाल जनवादी गणतन्त्र चीनसमेतको अध्ययन भ्रमण समाप्त गरेर हामीहरू स्वदेश फर्किएका थियौँ ।

भ्रमण समाप्त गरेर फर्किएपछि म फेरि आफ्नै मन्त्रालयको काममा संलग्न भएको थिएँ । सन् १९९५ मा मद्रासमा भएको दक्षिण एशियाली राष्ट्रहरूका खेलाडीहरूका बीचको खेलकूद कार्यक्रम समाप्त भएपछि सन् १९९६ को जुलाई १९ तारिखदेखि १९९६ को अगष्ट ५ तारिखसम्म संयुक्तराज्य अमेरिकाको जर्जियामा हुने सेन्टेनियल ओलम्पिक गेमको तयारीमा पनि मैले लाग्नुपरेको थियो । त्यस कार्यक्रममा जानका लागि रकमको निकासा र खेलाडीहरूका साथै पदाधिकारीहरूको छनौटमा समेत मैले लाग्नुपरेको थियो । तत्कालीन युवराजाधिराज श्री ५ दीपेन्द्र र मन्त्री श्रीबलबहादुर के.सी.समेत त्यस खेलकूदमा जाने भएका हुँदा उहाँहरूका लागि पनि मैले विशेष व्यवस्था मिलाउनु पर्ने भएको थियो । अत्यन्त कुशलताका साथ सबै कामकुराहरू मिलाएर संयुक्तराज्य अमेरिकातर्फ प्रस्थान गर्ने बेलामा तत्कालीन युवराज श्री ५ दीपेन्द्रको सवारी चलाउन आवश्यक पर्ने २ करोडभन्दा बढी रकम पनि खेलकूद परिषद्का सदस्य सचिवले बुझेर त्यसको फछ्र्यौटसमेत गर्नुपर्ने परम्परा भएको हुँदा मलाई उक्त रकम बुझ्नका लागि दरबारले आदेश गरेको थियो । खेलकूदपरिषद्को सदस्यसचिवले रकम बुझ्ने, सो रकम दरबारबाट जाने कर्मचारीहरूले आफ्नै हिसाबले खर्च गर्ने र सो रकमको हिसाब भने

नेपाल फर्किएर आएपछि अर्थमन्त्रालयलाई सदस्यसचिवले बुझाउनु पर्नेहुँदा आफूले खर्चै नगरेको रकमको हिसाब बुझाउन नसकिने देखेर मैले सो रकम बुझ्न अस्वीकार गरेको थिए, तर पनि मलाई सो रकम बुझाउन धेरै प्रयास गरिएपछि मैले  अमेरिकाका तत्कालीन नेपाली राजदूत डा. भेषबहादुर थापालाई बोलाएर बुझाएमा खर्च गर्न र हिसाब बुझाउन पनि सजिलो हुने कुराको सुझाव दिएपछि तदनुसार नै व्यवस्था भएको थियो। तत्कालीन युवराजाधिराजको अभिभारा मैले बोक्नुपरेको थिएन। खेलाडीहरूको छनौटका क्रममा अत्यन्त विवाद र तानातानसमेत भएको थियो। पछि गएर सीमित रकम निकासा भएको हुँदा थोरै खेलाडी र केही पदाधिकारीहरूमात्र लिएर म उक्त खेलकूदमा जान तयार भएको थिएँ।

उपर्युक्त अनुसार सबै व्यवस्था मिलाएर ६ जना खेलाडी र ७ जना पदाधिकारीहरूसमेत लिएर २०५३ साल साउन ४ गते तदनुसार सन् १९९६ जुलाई १७ तारिखका दिन नेपालबाट दुबई हुँदै जर्मनीतर्फ नेपाली जेट चढेर म उडेको थिएँ।





बायाँबाट कान्छो छोरो सगुन, सानो छोरो सतीश, पिता शरद र ठूलो छोरो सञ्जीवकुमार भट्टराई

# संयुक्तराज्य अमेरिकामा

धेरै वर्ष अघिदेखि संयुक्तराज्य अमेरिकाको भ्रमण गर्ने इच्छा हुँदाहुँदै पनि कतिपय कारणले गर्दा मैले जाने मौका पाएको थिइन। सौभाग्यले त्यस पटक ऐतिहासिक सेण्टेनियल ओलम्पिक खेलकूदको गौरवपूर्ण विश्वप्रसिद्ध खेलमा नेपाली खेलाडीसमूहको प्रमुखको हैसियतले संयुक्तराज्य अमेरिका जान पाएको हुँदा मलाई अत्यन्त खुशि लागेको थियो। माथि उल्लेख भए अनुसार नेपालबाट प्रस्थान गरेपछि जुलाई १७ तारिखका राती जर्मनीको हवाइअड्डामा उत्रिएर त्यहीँभित्र रहेको होटेलमा रात बिताएर भोलिपल्ट अपराह्न त्यहाँबाट संयुक्तराज्य अमेरिकाको जर्जिया राज्यको राजधानी एटलाण्टातर्फ हामीहरू डेल्टा हवाइजहाजबाट उड्ने तरखरमा थियौं। जर्मनीबाट उड्ने समयमा विमानस्थलमा कडाइँका साथ यात्रीहरू र सामानसमेतको जाँच गरिएको हुँदा हामीहरूलाई उड्न केही समय ढिला भएको थियो।




Chef de Mission को Identity Card




Chef de Mission को कोटमा लगाउने ब्याज

जर्मनीबाट उडेपछि अन्धमहासागर पार गरेर संयुक्तराज्य अमेरिकाको समुद्रको तटैतटहुँदै झमक्क रात परेपछि हामीहरू एटलाण्टा पुगेका थियौं। एटलाण्टाको अन्तर्राष्ट्रिय विमानस्थलमा हामीहरू उत्रिँदा विशाल धावनमार्गमा सबैतिर हवाइजहाजै हवाइजहाजहरूमात्रै देखिन्थे। सेन्टेनियल ओलम्पिक खेलका लागि झकिझकाउ पारेर सजाइएको एटलाण्टा हवाइअड्डा अत्यन्त सुन्दर देखिन्थ्यो। विभिन्न देशहरूबाट आएका र विभिन्न वेशभूषा लगाएका खेलाडीहरू विमानस्थलमा उत्रिँदा त्यहाँ



जर्जियाको राजधानी एटलाण्टा शहरको एक विहङ्गम दृश्य, सन् १९९६ जुलाई १८

सिङ्गै विश्व जम्मा भएजस्तो देखिन्थ्यो। नयाँ उमङ्ग र उत्साहका साथ एटलान्टाको अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएपछि अध्यागमन लगायतका कार्यालयहरूमा सम्पूर्ण औपचारिकताहरू पूरा गर्दै हामीहरू त्यहाँबाट बाहिर निस्किएका थियौँ। त्यसपछि सेन्टेनियल ओलम्पिक गेमका लागि खटिएका अधिकारीहरूले हाम्रो स्वागत गरेका थिए। हामीहरूलाई त्यहीँ भित्र बनेको भव्य पण्डालमा लगेर सेन्टेनियल ओलम्पिक गेमका लागि आवश्यक पर्ने अत्यन्त आधुनिक आई. डी. (परिचयपत्र) लगायतका हामीहरूलाई आवश्यक पर्ने सम्पूर्ण सामग्रीहरू उपलब्ध गराइएका थिए। त्यहाँको प्राथमिक काम समाप्त भएपछि अबेर रातमा हामीहरूलाई त्यहाँका अधिकरीहरूले वाहनमा राखेर अत्यन्त सुरक्षापूर्वक जर्जियाको राजधानी एटलाण्टामा रहेको जर्जियाविश्वविद्यालयको परिसरभित्र बनेको ओलम्पिकभिलेजमा लगेका थिए। त्यहाँ भित्र हाम्रो आवास र खानापिनाको समेत व्यवस्था गरिएको थियो।



एटलाण्टा विश्वविश्यालयको परिसरभित्र रहेको ओलम्पिक भिलेजको एक दृश्य, सन् १९९६, जुलाई १८

जुलाई १९ तारिखका दिन सेन्टेनियल ओलम्पिक गेमको उद्घाटन एक भव्य समारोहका बीच ओलम्पिक टर्चको प्रज्ज्वलनपछि संयुक्तराज्य अमेरिकाका तत्कालीन राष्ट्रपति श्रीबिल क्लिण्टनले गरेका थिए। ओलम्पिक टर्चको प्रज्ज्वलनभने संयुक्तराज्य अमेरिकाका प्रसिद्ध मुक्केबाज श्रीमोहमद अली ( क्यासस क्ले)बाट भएको थियो। त्यो उद्घाटन समारोह यति भव्य थियो कि त्यसको वर्णन शब्दबाट गर्न म असमर्थ छु। नेपालबाट गएका खेलाडीहरूको नेतृत्व मैले गरेको हुँदा राष्ट्रिय पोशाकमा मसँग गएका खेलाडीहरू र पदाधिकारीहरूलाई साथमा लिएर म परेडमा गएको थिएँ।

संसारभरिबाट त्यहाँ जम्मा भएका खेलाडीहरूका साथ विशाल जनसमूहका बीचमा म स्वप्नसंसारमा जस्तो अगाडि बढिरहेको थिएँ। राष्ट्रिय परिधानमा त्यस परेडमा सामेल भएको मलाई एउटा अनौठो संसारमा प्रवेश गरेकोजस्तो लागिरहेको थियो। हुन त सन् १९९५ को डिसेम्बर महिनामा भारतको मद्रास

राज्यमा भएको सातौँ साफ गेममा पनि म नेपाली खेलाडीहरूका प्रमुखको हैसियतले यसै गरेर उद्घाटन समारोहमा भएको परेडमा सामेल भएको थिएँ, त्यहाँ पनि मलाई त्यस्तै खालको अनौठो अनुभूति भएको थियो। त्यो खेल केवल दक्षिण एशियाका ७ राष्ट्रका खेलाडीहरूका बीचमा भएको थियो भने त्यो सेन्टेनियल ओलम्पिक गेमभने विश्वका सम्पूर्ण देशहरूका खेलाडीहरूका बीचमा भइरहेको थियो। त्यो पहिलो खेल दक्षिण एशियाका विकासोन्मुख देशका खेलाडीहरूका बीचमा भएको थियोभने सेन्टेनियल ओलम्पिक गेम विश्वका अत्यन्त सम्पन्न राष्ट्रहरू सहभागी भएको विश्वको सर्वसम्पन्न राष्ट्र संयुक्तराज्य अमेरिकाको जर्जिया राज्यको अत्याधुनिक नगर एटलाण्टामा भइरहेको थियो। यी दुई थरी खेलहरूका बीचमा सहभागिता र साधन सम्पन्नताका दृष्टिले पनि तुलना नै हुनसक्तैनथ्यो। मद्रासमा भएको खेलमा हामीहरूको परेडको सलामी तमिलनाडु राज्यकी तत्कालीन मुख्यमन्त्री श्रीमती जयललिताले लिएकी थिइन् भने यस ओलम्पिक गेमको उद्घाटनका अवसरको परेडको सलामी भने संयुक्तराज्य अमेरिकाका शक्तिशाली युवा राष्ट्रपति श्रीबिलक्लिणटनले लिँदैथिए। यिनै कुराहरूको सम्झना र ती २ खेलहरूका बीचको तुलनासमेत मनमनमा गर्दै म त्यस अपार जनसमुद्रमा थाहा नपाइकनै अगाडि बगिरहेको थिएँ।



ओलम्पिक गेमको उद्घाटनको समयमा नेपाली खेलकूदटोली राष्ट्रपतिलाई सलामी अर्पण गर्दै, जुलाई १९


सेन्टेनियल ओलम्पिक गेमको उद्घाटनको समयमा परेडमा सहभागी नेपालीटोली, सन् १९९६, जुलाई १९

त्यसप्रकार बिस्तारै हामीहरू भव्यरूपमा सजाइएको अत्यन्त आधुनिक सुविधाहरूले सम्पन्न विशाल रङ्गशालामा प्रवेश गरेका थियौँ। रातको बेला भए पनि विजुलीबत्तीको चकाचौँध प्रकाशले दिनजस्तै प्रकाशपूर्ण विशाल रङ्गशालामा उद्घाटन समारोह हेर्न अत्यन्त धेरै दर्शकहरू खचाखच

भरिएका थिए। परेडमा अगाडि बढ्दाबढ्दै नेपालको पालो आएपछि खेलकूदको परिपाटी अनुसार खेलाडीहरूका साथ मैले पनि त्यस समारोहका सम्मानित प्रमुख अतिथिलाई सलामी दिएको थिएँ। उच्च अतिथिहरूका बीचमा संयुक्तराज्य अमेरिकाकी प्रथम महिला श्रीमती हिलारी क्लिणटनलाई देब्रेपट्टि र उपराष्ट्रपति श्रीअलगोरलाई दाहिनेपट्टि राखेर संयुक्तराज्य अमेरिकाका राष्ट्रपति श्रीबिलक्लिटन परेडको सलामी लिँदै मेरो अगाडि उभिइरहेका थिए। त्यस्तो अपूर्व क्षणमा मैले सलामी दिँदै बिस्तारै उनलाई हेरेको थिएँ। त्यसपछि म अरू खेलाडीहरूका साथ बिस्तारै बिस्तारै मानिसहरूको तरङ्गमा तरङ्गित हुँदै विशाल तथा भव्य रङ्गशालाका प्राङ्गणमा जम्मा भएको जनसमूहमा समाहित हुनपुगेको थिएँ। त्यो अपार जनसमूहका बीचमा पसेर रोमाञ्चित हुँदै त्यसैभित्र बिस्तारै म बिलीन हुँदैगएको थिएँ।

त्यसरी परेडको कार्यक्रम समाप्त भएपछि त्यहाँ विभिन्न साहसिक तथा रोमाञ्चक प्रदर्शनहरूका साथै भव्य आतसवाजीको पनि प्रदर्शन गरिएको थियो। उद्घाटनको कार्यक्रम समाप्त भएपछि राती अबेर म नेपाली खेलाडीहरू र पदाधिकारीहरूसमेतलाई साथमा लिएर निवासस्थान ओलम्पिक भिलेजमा फर्किएको थिएँ।

सेन्टेनियल ओलम्पिक खेलकूदको उक्त उद्घाटन समारोहको सम्पूर्ण दृश्य संसारभरि नै टेलिभिजनद्वारा प्रत्यक्ष प्रसारण गरिएको थियो। त्यस समयमा अष्ट्रेलियाको सिड्नी शहरमा अध्ययनरत मेरा कान्छा छोरा श्रीसगुनकुमार भट्टराईले उक्त प्रत्यक्ष प्रसारणमा प्रोसेसनमा सम्मिलित नेपाली टोलीलाई देखेको कुरा बताएका थिए।

उद्घाटनको कार्यक्रम समाप्त भएपछि जर्जिया राज्यभित्रका विभिन्न रङ्गशालाहरूमा विभिन्न खेलहरू शुरुभएका थिए। मैले नियमितरूपमा हुने विभिन्न बैठकहरूका साथै महत्त्वपूर्ण खेलहरूमा पनि सबैतिर पुग्नुपर्दथ्यो। मेरालागि WBM कारका साथमा आवश्यक पर्ने सुरक्षाकर्मीसमेत उपलब्ध गराइएको थियो। मलाई सहयोग गर्न ४ जना अमेरिकी अधिकारीहरू सहयोगीका रूपमा खटाइएका थिए। मेरो कार हाँक्ने चालक अमेरिकाको प्रसिद्ध बेल कम्पनीका जनरल मेनेजर थिए। त्यसै गरी अरू सहयोगीहरू पनि

सरकारी र निजी कम्पनीका माथिल्ला तहका पदाधिकारीहरू नै थिए । त्यहाँ सेन्टेनियल ओलम्पिक गेममा आएका प्रमुखहरूको सहयोगी भएर काम गर्दा उनीहरूको पदोन्नति हुने भएको हुँदा पनि त्यसरी सहयोग गर्न तँछाड र मछाड गरेर आउने गर्दारहेछन् । अमेरिकी संस्कार अनुसार त्यस प्रकारको सहयोग गर्नु गौरवको कुरा ठानिँदोरहेछ ।

उक्त ओलम्पिक खेलकूदमा भाग लिन गएका केही नेपाली खेलाडीहरू र केही कर्मचारीहरू पनि नेपालभन्दा बाहिर कहिल्यै नगएका र अपरिमार्जित व्यक्तिहरू थिए । उनीहरूमध्ये केही व्यक्तिहरू मौका परे त्यतै बेपत्ता भएर हराउने सम्भावना पनि थियो । एकातर्फ भाग्नबाट मैले तिनीहरूलाई रोक्नुपर्ने थियोभने अर्कातर्फ ती आलाकाँचा व्यक्तिहरूलाई बाटो काट्ता, खाना खाँदा र अरू समयमा पर्नसक्ने सम्भावित दुर्घटनाहरूबाट समेत जोगाएर सम्बन्धित खेलहरूमा सहभागिताका लागि पुऱ्याउनुपर्ने पनि मेरो जिम्मेवारी थियो । सो कुराको जिम्मेवारी मैले त्यहाँ मलाई सहयोग गर्न खटिएर आएका अमेरिकी अधिकारीहरूलाई सुम्पिएको थिएँ । त्यति गरेपछि म त्यतातर्फबाट धेरैमात्रामा निश्चिन्त भएर अरू काममा लागेको थिएँ । त्यति गरेर चारैतर्फबाट सतर्कता र सजगता अपनाउँदा अपनाउँदै पनि एक दिन एक जना अनाडी खेलाडीले हामीहरू बस्ने भवनमा जडान गरिएको आपत्कालीन घण्टी (Emergency Calling Bell) गल्तीले बजाइदिएका थिए । आपत्ति परेको बेलामा मात्रै बजाउनु पर्ने सो घण्टी अचानक बजेपछि चारैतिरबाट सुरक्षाबल, दमकलहरू र उद्धारका लागि आवश्यक पर्ने मद्दत पनि त्यहाँ आइपुगेको थियो ।

त्यसरी चारैतिरबाट हामीहरू बसेको आवासगृहमा उद्धारकर्मीहरूले घेरिसकेपछिमात्र मैले थाहा पाएको थिएँ । शुरुमा मलाई त्यस घण्टीले त्यति विधि ठूलो हल्लाखल्ला मच्चाउँछ जस्तो लागेको थिएन । उनीहरूले त्यहाँ आएर छानविन गर्दा कुनै खालको दुर्घटना नभएको देखेपछि त्यसरी घण्टी बजाएर गैरकानूनी काम गर्ने व्यक्तिको खोजिगरेर कारबाही गर्नखोजेका थिए । धेरै हल्लाखल्ला भएको थियो । विनाकाममा घण्टी बजाएको प्रमाणित भएमा १०,००० डलरसम्म जरिबाना र कैदसमेत हुने त्यहाँको कानूनी व्यवस्था रहेछ । प्रमाणित भएमा त्यसबाट सम्बन्धित खेलाडीका

देशको बदनाम हुने, खेलमा बाधा पर्ने र जरिबानासमेत तिर्नुपर्ने हुन्थ्यो । त्यसलाई अत्यन्त चतुराइका साथ जोगाइएको थियो । पछि मैले छानविन गर्दा नेपाली खेलाडीकै गल्ती भएको थाहा हुन आएको थियो । त्यस दुर्घटनापछि फेरि कुनै अप्रिय घटना हुन नपाओस् भनेर मैले बिशेष सतर्कता अपनाएको थिएँ ।

म आफ्नू दलबल सहित विभिन्न खेलकूदका कार्यक्रमहरूमा पुग्नेगर्दथेँ । खेलकूद आयोजना गरिएका केही रङ्गशालाहरू हामीहरू बस्ने ओलम्पिक भिलेज नजिकै थिए भने केही रङ्गशालाहरू धेरै टाढा पनि थिए । म सबै ठाउँमा पुग्नेगर्दथेँ ।

उपर्युक्त सेन्टेनियल ओलम्पिक गेमको उद्घाटन समारोह हुनुभन्दा केही दिन अगाडि नै नेपालबाट तत्कालीन युवराज श्री ५ दीपेन्द्र र मन्त्री श्रीबलबहादुर के.सी.समेतको दलबल ओलम्पिकखेलकूद हेर्न एटलाण्टा पुगेको थियो । उहाँहरू होटेलमा बस्नुभएको थियो । युवराजाधिराज र मन्त्रीसमेतको पनि मैले नै हेरविचार गर्नुपर्दथ्यो । जाँदाजाँदै श्री ५ युवराजाधिराजको सम्पूर्ण सामान एटलाण्टा हवाइअड्डाबाटै हराएको थियो । अत्यन्त खोजतलास गर्दा २ दिनपछिमात्रै उहाँको सामान भेटिएको थियो । आफ्ना दलबलहरूसहित जुनसुकै ठाउँमा जान पनि मलाई खुला थियो । म जहाँ पनि जान सक्तथेँ । नेपालको उच्चस्तरीय प्रतिनिधिको रूपमा मलाई त्यहाँ व्यवहार गरिएको थियो । नेपालबाट गएका युवराजाधिराज, मन्त्री र राजदूतहरूसमेतले जुन ठाउँमा प्रवेश गर्न पाउनुहुन्नथ्यो, ती ठाउँहरूमा पनि म विनारोकटोक प्रवेश गर्न पाउँदथेँ ।

त्यसप्रकारको अवसर मेरालागि विशेष महत्त्वको थियो । ओलम्पिकखेलकूद भव्यताका साथ सञ्चालन भइरहेको समयमा एक रात एटलाण्टाको सेन्टेनियल ओलम्पिक पार्कमा बमको विस्फोटन भएको थियो । त्यसले विश्वमा निकै हलचल मच्चाएको थियो । मलाई सो विस्फोटनको सम्बन्धमा काठमाडौंबाट दरबारसमेतले टेलिफोन गरेर सोधपुछ गरेको थियो । त्यस विस्फोटनबाट खास क्षति भने केही नभएको हुँदा त्यो घटना त्यसै सेलाएर गएको थियो ।

त्यसरी सुचारुरूपमा खेलकूद चलिरहेकै बेला एकदिन अचानक श्री ५

युवराजाधिराज दीपेन्द्र, मन्त्री श्रीबलबहादुर के.सी. र राजदूत डा. भेषबहादुर थापासमेत मेरो निवासस्थान रहेको ओलम्पिक भिलेजभित्र जानुभएको थियो। मैले सो समयमा हाम्रो त्यहाँ भएको गतिविधिका बारेमा उहाँहरूलाई अवगत गराएको थिएँ।


ओलम्पिक भिलेजभित्र मेरो निवासमा श्री ५ दीपेन्द्र, मन्त्री र राजदूतका साथ

म नियमितरूपमा विभिन्न रङ्गशालाहरूमा खेलकूद हेर्न जानेगर्दथैं। यसैक्रममा एक दिन शारीरिक सुगठनको प्रदर्शन हेर्न अत्यन्त भव्य तथा मनोरम डोममा दलबलसहित म पुगेको थिएँ। म जहाँ बसेको थिएँ त्यहीं संयुक्तराज्य अमेरिकाका तत्कालीन राष्ट्रपति श्रीबील क्लिणटन आफ्नी पत्नी हिलारी र छोरी चेल्सीसहित पुग्नुभएको थियो। मैले तुरुन्त नै नजिक गएर श्रीबिल क्लिणटनसँग हात मिलाउँदै त्यस प्रकारको सेन्टेनियल ओलम्पिक गेमको भव्य आयोजना गरेकोमा नेपालको तर्फबाट उहाँलाई बधाई ज्ञापन गर्नुका साथै नेपाली ओलम्पिकपीन पनि प्रदान गरेको थिएँ। त्यसबाट अत्यन्त खुशी हुँदै उहाँले मलाई धन्यवाद दिनुभएको थियो। मैले दिएको नेपाली ओलम्पिकपीन हेर्दै उहाँकी श्रीमती हिलारी र छोरी चेल्सी पनि अत्यन्त खुशिभएका देखिन्थे। सोही कुराको संस्मरण गर्दै मैले तत्कालै लेखेको कविता मेरो यात्राविवरण "यात्रैयात्रा २०५८" मा प्रकाशित भइसकेको छ। त्यसको सानू अंश यहाँ दिएको छु, जो निम्नअनुसार छ –


ओलम्पिकमा श्री ५ दीपेन्द्र, खेलाडीहरू र पदाधिकारीहरूका साथ


रङ्गशालाभित्र राष्ट्रपति बिलक्लिन्टन, हिलारी र चेल्सीका साथ लेखक

पुगेँ म भव्य डोममा अतीव भव्यता थियो ।
झिलीमिली असाध्य नै नवीन स्वर्गझैँ थियो ॥
जतातत्तै परी थिए थियो अपूर्व नर्तन ।
अगाडि सामुमा थिए हिलारिसाथ क्लिण्टन ॥
उठेर सामुमा गई दिएँ जनाउ नामको ।
दिएँ सहर्ष सूचना स्वकामको स्वधामको ॥
मिलाइ हात सुस्तरी गरेँ शुभाभिनन्दन ।
प्रफुल्ल भावमा थिए युवा सशक्त क्लिण्टन ॥
दिएँ बधाइ जो गरे प्रबन्ध विश्वखेलको ।
बढाइ विश्वभावना बढाइ भाव मेलको ॥
विनम्र भावले दिएँ प्रतीक एक खेलको ।
दिए कृतज्ञभावले जबाफ साधुभावको ॥
मिलाइ हात त्यो घडी थिएँ म भावविह्वल ।
मिल्यो जहाँ अपूर्वको सुयोग भेट मङ्गल ॥

त्यसरी संयुक्तराज्य अमेरिकाका शक्तिशाली युवा राष्ट्रपतिसँग भेट गरेको कुरा नेपालका विभिन्न सञ्चार माध्यमहरूले तत्कालै प्रसारण गरेका थिए । सो कुरा म अमेरिकामा रहँदै पनि खूब चर्चाको विषय भएको थियो । युवराज दीपेन्द्र र मन्त्री श्रीबलबहादुर के.सी.लाई त्यो कुरा सुपाच्य भएको थिएन । म नेपाल फर्किएपछि दरबारका सचिवहरूले 'अमेरिकाका राष्ट्रपतिलाई आफूलेमात्रै भेटेर युवराजलाई किन नभेटाएको ?' भनेर मसँग प्रश्न पनि गरेका थिए । अन्तर्राष्ट्रिय परिप्रेक्ष्यमा कुन बेला कसको महत्त्व बढी हुन्छ भनेर नबुझेकै कारणबाट त्यस्ता प्रश्नहरू उनीहरूले गरेका थिए। त्यस समयमा हामी नेपालीहरूले नेपालका राजा र राजपरिवारलाई अत्यन्त सम्मान र महत्त्व दिएका थियौँ। अमेरिका जस्तो अत्यन्त विकसित र प्रजातान्त्रिक देशमा भने कामको आधारमा मात्रै मानिसको महत्त्व हुनेहुँदा त्यहाँ युवराजलाई भेट्ने र भेटाउने कुराको कुनै प्रसङ्ग नै आउँदैनथ्यो । वास्तवमा म नेपालको प्रतिनिधित्व गरेर त्यहाँ गएको थिएँ भने युवराज दीपेन्द्र केवल दर्शकको रूपमा त्यहाँ जानुभएको हुँदा युवराजले राष्ट्रपतिलाई भेट्ने

कुनै कामै थिएन । सोही कुरा मैले तत्कालीन दरबारका पदाधिकारीहरूलाई सम्झाउने प्रयास गरेको थिएँ । सामन्ती मनोवृत्ति भएका दरबारियाहरूले सो कुरा बुझे कि बुझेनन् मलाई थाहा भएन ।

खेलकूदको सन्दर्भमा अमेरिकामा कहिले कहीँ युवराज दीपेन्द्र, मन्त्री र हामीहरू सबै जना साथसाथै घुम्ने र खानापिनासमेत सँगै गर्नेगर्दथ्यौँ । रेष्टुराँहरूमा कहिले युवराजाधिराज दीपेन्द्रका तर्फबाट, कहिले मन्त्री श्रीबलबहादुर के.सी.का तर्फबाट र कहिले मेरा तर्फबाट पनि हामीहरू भोजको आयोजना गर्नेगर्दथ्यौँ । श्री ५ दीपेन्द्र खान, पिउन, अमेरिकी युवतीहरूसँग भेटघाट गर्न र ख्यालठट्टा गर्नसमेत अत्यन्त कुशल हुनुहुन्थ्यो । खाना खाएको बेलामा उहाँ अत्यन्त आत्मीयता देखाएर हामीहरूसँग ख्यालठट्टा, कुराकानी र छलफलसमेत गर्नेगर्नुहुन्थ्यो । उहाँ अत्यन्त खुला व्यक्ति भएका हुनाले उहाँसँग हामीहरूलाई कुरा गर्न कुनै खालको अप्ठेरो महसूस हुँदैनथ्यो । मैले त्यस बेला मसँग भएका भिडियो क्यामरा र स्टिल क्यामराहरूसमेतबाट हाम्रा त्यहाँका क्रियाकलापहरूको भिडियो फिल्म र चित्रहरूसमेत छायाङ्कन गर्न लगाएको थिएँ । सो कुरा बुझेपछि युवराजाधिराजले रोमाण्टिक समयको भिडियो फिल्म लिन र फोटो खिच्नसमेत निषेध गर्नु भएको थियो । मैले तैपनि संस्मरणका लागि हुन्छ भनेर केही दृश्यहरू छायाङ्कन गर्न लगाएको थिएँ । तीमध्ये केही छानिएका तस्वीरहरू यस विवरणको सन्दर्भमा तल दिएको छु । नेपाल फर्किएपछि मलाई भिडियो फिल्म र तस्वीरहरू उपलब्ध गराउन युवराजाधिराजले भन्नुभएको थियो । मैले जे जति उपलब्ध हुनसकेका भिडियो फिल्म र तस्वीरहरूसमेत तयार गरेर युवराजाधिराज दीपेन्द्रलाई दिएको थिएँ ।

मैले ओलम्पिक भिलेजभित्र संयुक्तराज्य अमेरिकाका चर्चित मुक्केबाज श्रीमोहम्मद अलीलाई नेपालको ओलम्पिक पीन दिएको थिएँ । उनी त्यस बेला पक्षाघातको रोगबाट पीडित थिए । त्यसैगरी म एक दिन मेरा सहायक श्रीबद्री श्रेष्ठलाई लिएर प्रसिद्ध CNN टेलिभिजन प्रसारण केन्द्रमा पनि गएको थिएँ । त्यहाँका



मुक्केबाज मोहमद अलिलाई नेपाली ओलम्पिक पीन लगाइदिँदै लेखक



CNN को प्रसारण-केन्द्रमा लेखक

पत्रकारहरूले हाम्रो स्वागत गरेका थिए ।

त्यसैगरेर ओलम्पिक खेलकूदको अन्तरालमा समय मिलाएर हामीहरू विभिन्न दर्शनीय स्थलहरू, ओलम्पिक सेन्टेनियल पार्क र रेष्टुराँ आदिमा पनि जाने गर्दथ्यौं । ओलम्पिक खेलकूद सञ्चालन भइरहेकै समयमा बीचको खालि समय मिलाएर त्यहीं जर्जियामा नै बसोवास गरेका गौतम भन्ने व्यक्तिका साथ उनैका गाडीमा संयुक्तराज्य अमेरिकाको फ्लोरिडा राज्यमा रहेको विश्वप्रसिद्ध Disneyland हेर्न मेरा सहायक श्रीबद्री श्रेष्ठलाई लिएर म गएको थिएँ । त्यस सहयोगका लागि म गौतमजीलाई अहिलेसम्म पनि सम्झिरहन्छु । मैले त्योभन्दा पहिले त्यसकै नक्कल गरेर बनाएको Disneyland



अमेरिकाको फ्लोरिडा राज्यमा रहेको Disneyland र Adventureland मा लेखक

जापानमा पनि हेरिसकेको थिएँ । त्यसका साथै मैले त्यहाँ Scientific World र Adventureland को समेत अवलोकन गरेको थिएँ । अमेरिकाको त्यो Disneyland अत्यन्त भव्य र दर्शनीयसमेत भएको मैले पाएको थिएँ । त्यसरी मैले त्यस बेला संयुक्तराज्य अमेरिकाका केही दर्शनीय स्थानहरूको अवलोकनका साथै त्यहाँ बसेका नेपालीहरूलाई पनि भेट्ने मौका पाएको थिएँ । जसरी अत्यन्त भव्यताका साथ सेन्टेनियल ओलम्पिक गेमको उद्घाटन भएको थियो । उक्त खेलको अन्तिम विसर्जन समारोह पनि त्यसैगरी आतसबाजी र दीपावलीका साथ अति भव्यरूपमा विश्वओलम्पिक संस्थाका अध्यक्ष श्रीह्वाँ समारान्चबाट सम्पन्न भएको थियो ।

उक्त ओलम्पिक खेलकूदमा नेपालले सहभागितामात्रै जनाएको थियो । त्यस खेलमा नेपालले कुनै खालको पदक पाउने सम्भावना नै थिएन र पाएन पनि । हामीहरू एटलान्टा पुग्नेबित्तिकै हामीहरूका सम्मानमा संयुक्तराज्य

अमेरिकामा विभिन्न पेशा गरेर बसेका ५०० जति नेपालीहरू जम्मा भएर उनीहरूले एटलान्टाको सामुदायिक केन्द्र (Community Centre) मा हाम्रो स्वागत गरेका थिए । त्यस स्वागतसमारोहमा श्री ५ युवराजाधिराज दीपेन्द्र, मन्त्री श्रीबलबहादुर के.सी. का साथै उक्त सेन्टेनियल ओलम्पिक खेलकूदमा



नेपाली प्रतिनिधिमण्डलको सम्मानमा अमेरिकामा बसेका नेपालीहरूद्वारा आयोजित स्वागतसमारोहको दृश्य

सहभागी हुन गएका हामीहरू सबै आमन्त्रित थियौँ । त्यहाँ जम्मा भएका युवा नेपालीहरूले अत्यन्त उत्साह र उमङ्गका साथ अत्यन्त भावुक भएर हाम्रो स्वागत गरेका थिए । कार्यक्रमको उपान्तमा त्यहाँ जम्मा भएका युवा नेपालीहरूले युवराजाधिराज लगायत हामीहरू सबैलाई अत्यन्त रमाइलो नेपाली वातावरणका बीचमा नचाएका पनि थिए । कार्यक्रमको अन्त्यमा मैले त्यस भव्य समारोहमा त्यहीँ गएर लेखेको एउटा कविता सुनाएको थिएँ । मेरो कविता सुनेर प्रवासमा बसेका सबै युवा नेपालीहरू अत्यन्त भावुक भएका थिए । उक्त कविता यहाँ दिएको छु । जो यसप्रकार छ –

बसेर दूरदेशमा स्वदेश लौ नबिर्सनू ।
झुकेर आत्मग्लानिले यहाँ तिमी नतर्सनू ॥
जहाँ रहू युवा ! तिमी हिमाल हौ स्वरूपमा ।
म ठान्छु राजदूत हौ यहाँ समग्ररूपमा ॥
रुँदी सदैव मातृभू लिएर रुग्ण आकृति ।
हँसाउनै छ हे युवा ! स्वमातृको मुखाकृति ॥
अझै छ आत्मवञ्चना अझै छ सम्भ्रमस्थिति ।
सँभार्नुपर्छ देशमा समृद्ध शुद्ध संस्कृति ॥
छ भावना उचालिँदो र उर्लंदो छ चाहना ।

बसेर दूर देशमा गरेर दुःखसामना ॥
लडी रहेछ यो युवा यहाँ स्वभाग्य नै सँग ।
थिचेर सुप्त कामना लुकाउँदै बलैसँग ॥
छ राष्ट्र लर्खराउँदो अभाव नै अभाव छ ।
समाजमा असाध्य नै नकारिँदो स्वभाव छ ॥
छ राष्ट्र धर्मराउँदो, छ राजनीति अस्थिर ।
अझै छ नृत्य दुष्टको छ दीनता सबैतिर ॥
बसेर दूरदेशमा नबिर्स हे युवाहरू !
बरू गएर देशमै गरौँ कि ! काम लौ शुरु ॥
गरीब छौँ र रुग्ण छौँ असाध्य नै विपन्न छौँ ।
अतास लाग्छ हे युवा ! अतीव आज खिन्न छौँ ॥
सँगै थियौँ अरू बढे, पछाडि एक मात्र छौँ ।
भयौँ पछाडि खै अझै कि ! साँच्चि नै कुपात्र छौँ ॥
अतीव दुःख भोग्दछौ बसेर यो प्रवासमा ।
तिमी बढे अगाडि नै सुकार्यको प्रयासमा ॥
लुकाइ दुःख कष्ट ती बनेर धीर कर्मठ ।
लडेर नै बढे तिमी स्वलक्ष्यमा लिई हठ ॥
सिकेर काम दक्ष भै गरेर खूब सत्त्वर ।
अवश्य फर्क हे युवा ! नबिर्स गाउँको घर ॥
प्रवासमा जसै गई युवा जमात बस्तछ ।
गएर राष्ट्र आखिरी पछाडि नै त पर्दछ ॥
पढेर फुर्तिलो भई भरेर जोश जाँगर ।
अवश्य फर्क है तिमी स्वदेशमै सरासर ॥
सुपुत्रको छ चाहना स्वदेशभित्र सम्प्रति ।
बसेर देशभित्र नै बढाउ राष्ट्रको गति ॥
घुमेर ठाउँ ठाउँमा तिमी सधैँ रमाउला ।
तिमी यहाँ अवश्य नै असाध्य सुक्ख पाउला ॥
रमाइलो छ देश यो गएर रातमा तिमी ।
झुमेर नृत्यमा सधैँ मनाउला रिमीझिमी ॥

म ठान्छु आत्मवञ्चना सदैव शून्य अन्तमा ।
तिमी अवश्य पाउला यहाँ बसी उपान्तमा ॥
जहाँ तिमी रमाउँछौ र ठान्दछौ प्रपूर्ण नै ।
म ठान्छु बाह्य हुन् सबै छ भित्र ता अपूर्ण नै ॥
नबिर्स मातृभूमि ती बसेर दूरदेशमा ।
विचार छैन वा कतै कि ? फर्किने स्वदेशमा ॥
सुपुत्र भै स्वराष्ट्रको छ बन्नु राष्ट्रगौरव ।
उठी सधैँ हिमालझैँ छ छर्नु राष्ट्रसौरभ ॥
पिएर दूध मातृको हिँड्यौ समर्थ भै यहाँ ।
नबिर्स मातृभूमि ती भयौ तिमी युवा जहाँ ॥
उता स्वमातृ हेर्दछिन् बसेर नित्य द्वारमा ।
यता भने तिमी सधैँ रमाउँछौ बहारमा ॥
प्रकाश झैँ उँभो उठे बनेर दीप्तिमान् रवि ।
सदैव चम्क है युवा ! बनेर राष्ट्रको छवि ॥
असाध्य मस्त छौ कि के ? बसेर दूर देशमा ।
हराउँछौ कि वा कतै ? भुलेर यो प्रदेशमा ॥
ढलेर जान्छ बैँस यो सदैव यो छ लर्कने ।
विचार छैन वा कसो ? स्वदेश झट्ट फर्कने ॥
छ राष्ट्र साथमा सधैँ बनेर नित्य निर्भय ।
तिमी अवश्य फर्क है गरेर शक्तिसञ्चय ॥

माथि मैले उल्लेख गरे अनुसार तत्कालीन श्री ५ युवराज दीपेन्द्रसँग सम्बन्धित केही तस्वीरहरू निम्न अनुसार प्रस्तुत गरेको छु ।

उपर्युक्त अनुसार खेलकूद समाप्त भएपछि एउटा भव्य समारोहका बीचमा हामीहरूलाई विश्व ओलम्पिक समितिले प्रमाणपत्र र पदकहरूसमेत प्रदान गरेको थियो ।

त्यसपछि मसँग गएका पदाधिकारीहरू र खेलाडीहरूलाई एटलाण्टाबाट सोझै जर्मनीको फ्र्याङ्कफर्टतर्फ मैले पठाएको थिएँ । मेरा सहायक श्रीबद्री श्रेष्ठलाई साथमा लिएर म एटलाण्टाबाट हवाइजहाजद्वारा वाशिङ्टन गएर



श्री ५ दीपेन्द्रका साथ लेखक, ओलम्पिक भिलेज, जर्जिया, एटलाण्टा, संयुक्तराज्य अमेरिका



श्री ५ दीपेन्द्रका साथ लेखक, एटलाण्टा, जर्जिया



रात्रिभोजहरूमा श्री ५ दीपेन्द्रका साथ लेखक





रात्रिभोजका समयमा श्री ५ दीपेन्द्रका साथ अमेरिकीहरू, जर्जिया, एटलाण्टा, संयुक्तराज्य अमेरिका

**नेपाली राजदूतावासमा त्यस बेला काम गरिरहेका एटचाचे (नायबसुब्बा) श्रीलेखनाथ भट्टराईको पाहुना भएर एक रात वाशिङ्टनमै म बसेको थिएँ। मलाई त्यहाँका दर्शनीय स्थलहरूमा श्रीलेखनाथ भट्टराईले घुमाएका थिए।**

**त्यसरी त्यहाँ अवलोकन गरेका दर्शनीय स्थलहरूमा संयुक्तराज्य अमेरिकाका पूर्वराष्ट्रपति अब्राहम लिङ्कनको स्मारक, संयुक्तराज्य अमेरिकाका राष्ट्रपति बस्ने ह्वाइटहाउस र वाशिङटन स्थित ५५५.५ फीट उचाइ**







ह्वाइटहाउस, अब्राहम लिङ्कनको स्मारक र DC Monument अगाडि लेखक

र ५५.५ फिट गोलाई भएको DC Monument का साथै त्यहाँका विभिन्न म्यूजियमहरूसमेत थिए ।

अर्को दिन बिहानै वाशिङ्टनबाट हामीहरू हवाइजहाजद्वारा न्यूयोर्क गएका थियौँ । त्यहाँ नेपालका तर्फबाट त्यस बेला संयुक्तराष्ट्रसंघका लागि स्थायी प्रतिनिधिका रूपमा काम गरिरहनु भएका श्रीराजेन्द्र विक्रम शाहले हाम्रो सम्पूर्ण कुराको व्यवस्था गर्नुभएको थियो । हामीहरू दिनभरि संयुक्तराष्ट्रसङ्घको भवन लगायत त्यहाँ हेर्नु पर्ने महत्त्वपूर्ण दर्शनीय ठाउँहरूमा राजदूत श्रीशाहले उपलब्ध गराउनुभएको गाडीमा चढेर घुमेका थियौँ । न्यूयोर्कको भ्रमण समाप्त गरेर हामीहरू साँझपख राजदूतकै गाडी लिएर न्यूयोर्कस्थित केनेडी अन्तर्राष्ट्रिय विमानस्थलमा गएका थियौँ । राती स्थानीय समय अनुसार आठ बजे हामीहरू त्यहाँबाट उडेर सोझै जर्मनीको फ्र्याङ्कफर्ट अन्तर्राष्ट्रिय विमानस्थलमा अर्को दिन बिहान उत्रिएका थियौँ । त्यहाँ नेपाली खेलाडीहरू र पदाधिकारीहरूसमेत हामीहरूलाई पर्खिएर बसिरहेका थिए ।



ओलम्पिक सहभागिता पदक र प्रमाणपत्रहरू


अमेरिकी सल्लाहकार र गाडी चालकका साथ लेखक

मैले सबै जनालाई त्यहाँबाट नेपालतर्फ पठाएर म भने केही दिनको भ्रमणका लागि जर्मनीको बोनतर्फ गएको थिएँ । मैले पहिले नै अमेरिकाबाटै राजदूतावासका तत्कालीन प्रथम सचिव श्रीज्ञानचन्द्र आचार्यसँग कुराकानी गरेर कार्यक्रम मिलाएको हुँदा मलाई लिन नेपाली राजदूतावासको गाडी विमानस्थलमै आएको थियो ।


UN का लागि स्थायी प्रतिनिधिलाई पीन प्रदान गर्दै लेखक, सन् १९९६ अगस्ट ६



# जर्मनीमा

त्यस बेला जर्मनीको राजधानी बोनमा थियो र नेपाली राजदूतावास पनि बोनमै थियो । नेपाली राजदूतावासले पठाएको गाडीमा चढेर दिनको अपराह्नमा म दूतावासमा पुगेको थिएँ । त्यस बेला जर्मनीमा नेपाली राजदूत श्रीनवलकिशोर राई हुनुहुन्थ्यो । प्रथम सचिव आचार्य र राजदूत राईको आतिथ्यमा दूतावासको अतिथिगृहमा बसेर राइन नदीको मधुर सङ्गीतमय आवाज सुन्दै मैले एक रात बिताएको थिएँ । त्यहाँ बसेका बेला मैले समय निकालेर श्रीज्ञानचन्द्र आचार्यको सहयोगमा जर्मनीको आधुनिक शहर कोलोन, बोन र वरिपरिका अरू ऐतिहासिक तथा सांस्कृतिक स्थानहरूको पनि भ्रमण गरेको थिएँ। बोन र वरिपरिका महत्त्वपूर्ण स्थानहरूमा जर्मनसंसदभवन, त्यहाँको पुरान् ऐतिहासिक चर्च, जर्मनीका प्रसिद्ध सङ्गीतकार बिथोबिनको जन्मस्थल र स्मारकको समेत मैले अवलोकन गरेको थिएँ । त्यस बेला नेपालमा संस्कृतिमन्त्रालयको पनि सचिव म भएको हुँदा जर्मनीका संस्कृतिविद्हरूले मलाई आएर नेपाली राजदूतावासमै भेटेका थिए । मेरो त्यहाँको थोरै दिनको बसाइ भए पनि त्यसको सम्झना मलाई अहिलेसम्म पनि आइरहन्छ ।



जर्मनीका तत्कालीन नेपाली राजदूत श्रीनवलकिशोर राईका साथ दूतावासमा लेखक, सन् १९९६ अगस्ट ७



बिथोबिनको जन्मस्थलमा लेखक



जर्मनीका पूरातत्त्व तथा संस्कृतिविद्हरूका साथ दूतावासमा लेखक, अगस्ट ७

अर्को दिन बिहान खाना खाएपछि मैले राजदूतावासकै गाडीमा चढेर राइन नदीको किनारै किनार हुँदै त्यहाँका प्राकृतिक सुन्दर दृश्यहरूको

अवलोकन गर्दै त्यहाँ रहेको एउटा पुरानू सांस्कृतिक शहरको पनि भ्रमण गरेको गिएँ । त्यसपछि जर्मनीको पुरानू ऐतिहासिक शहर फ्र्याङ्कफर्टमा अपराह्ण पुगेर मैले ३ घण्टा त्यस शहरका दर्शनीय स्थलहरूको अवलोकन गरेको थिएँ । त्यहाँबाट साँझपख फ्र्याङ्कफर्टको अन्तर्राष्ट्रिय विमानस्थलमा नेपालतिर प्रस्थान गर्न म पुगेको थिएँ । जर्मनीमा बसेको छोटो समयमा जर्मनीको सम्झनाका लागि मैले त्यहीं बसेर लेखेको कविता तल प्रस्तुत गरेको छु । जो यसप्रकार छ –

द्वितीय विश्वयुद्धको महाग्रणी सुदुर्जय ।
लडी लडाइँ विश्वमा भयो अतीव निर्भय ॥
गरेर युद्ध खूब नै छिमेकमा सबैसँग ।
भयो नृशंस जर्मनी लडी भिडी क्रमैसँग ॥
बगाइ रक्तको नदी गरेर नग्न नर्तन ।
बीभत्सरूपमा बढी गरेर खूब गर्जन ॥
हुलेर ग्यासमा सबै गरेर खूब भर्जन ।
सताउँदै सधैँ गयो गरेर खूब तर्जन ॥
लडी भिडी कठैबरी पछारिएछ जर्मनी ।
भई विभक्त खण्डमा भएछ पङ्गु जर्मनी ॥
अजेय राष्ट्र जर्मनी बनेर विश्वको धुरी ।
अगाडि नै हुने थियो गरेर झन् चुरीफुरी ॥
किताबमा पढी बुँझे यी माथिका कुराहरू ।
बुझेन चित्त यत्तिले थिए कुरा निकै अरू ॥
म घुम्न हेर्न खोज्दथेँ समग्र राष्ट्र जर्मनी ।
म आज भाग्यले पुगेँ घुमेर हेर्छु जर्मनी ॥
म आज राजदूतको भएर पाहुनासरि ।
गरेँ प्रपूर्ण कामना घुमेर बोन सर्सरी ॥
छ आतिथेय दूतको छ घुम्नु नित्य कारमा ।
बसेर आज जर्मनी खुला घुमेँ बहारमा ॥
म फर्किएँ सकेर नै प्रसिद्ध खेलको क्रम ।

म आज बोनमा बसी पखाल्छु खेलको श्रम ॥
धनाढ्य शान्त जर्मनी हराभरा छ बाहिर ।
तथापि भित्र भित्र नै छ घाउ वा कतैतिर ॥
म देख्छु पारि गाउँमा अझै छ वा मरीचिका ।
छ भूत भूतकालको कुयुद्धको बिभीषिका ॥
सुसाँउँदै छ राइना अझै छ रक्त नीरमा ।
नृशंस युद्धको व्यथा अझै छ ठान्छु तीरमा ॥
छ गन्ध वायुमा अझै बीभत्स धूम्रनर्तन ।
निरीह जीवको अझै सुनिन्छ आर्त क्रन्दन ॥
म सुन्छु शब्द रातमा कराइँदो भयङ्कर ।
अतृप्त वासना लिई कि घुंछ भूत हिट्लर ॥
म देख्छु जर्मनीहुँदो छिटा अझै कलङ्कका ।
नमेटिने कि ! दाग हुन् नृशंस विश्वयुद्धका ॥
मडारिँदो जिजीविषा म देख्छु जर्मनीभरि ।
अतासिँदो छ राष्ट्र यो विमूढ भै घरी घरि ॥
स्वजातिको उचालिँदो अझै छ गर्व हिट्लरी ।
पुरानु मोह उर्लंदो म देख्छु जर्मनीभरि ॥
म देख्छु भित्र गर्भमा अदृश्यझैँ सुसाँउँदो ।
छ कृष्णशर्वरी कतै प्रकाशमा उदाउँदो ॥
छ चर्कंदो व्यथा अझै तुषाग्निझैँ अथाहमा ।
छ चिन्ह युद्धको अझै समग्र पूर्वभागमा ॥
विशाल चर्च छन् यहाँ उचा अटालिकासित ।
ध्वजा छ धर्मको अझै अतीव गौरवान्वित ॥
म देख्छु आज बोनमा निरीहभाव अङ्कित ।
बसेर दूरमा कतै छ मध्यकाल शङ्कित ॥
लडेर नाश जो भयो उठेछ फेरि तै पनि ।
कहाँ दबेर बस्छ यो अवश्य उठ्छ जर्मनी ॥

त्यसरी जर्मनीको सङ्क्षिप्त यात्रा पनि समाप्त गरेर जर्मनीको अन्तर्राष्ट्रिय विमानस्थलबाट नेपाली जहाज चढेर स्थानीय समय अनुसार

रातको ९ बजे म नेपालतर्फ उडेको थिएँ । अमेरिकामा भएको सेण्टेनियल ओलम्पिक खेलकूद र जर्मनीको छोटो यात्रासमेत समाप्त गरेर २०५३ साल साउन २५ गते तदनुसार सन् १९९६ अगष्ट १० तारिखका दिन काठमाडौं त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा म आइपुगेको थिएँ ।

म अमेरिका जाँदा मैले राष्ट्रिय खेलकूदपरिषद्बाट खर्च गर्न लगेको १० हजार अमेरिकी डलरमध्ये केवल १५०० डलरमात्र खर्च गरेर अरू बाँकी सबै परिषद्लाई नै मैले र्फिता गरिदिएको थिएँ । त्योभन्दा अगाडि लाखौँ डलर लिएर सदस्यसचिवहरू त्यसरी भएका अन्तर्राष्ट्रिय खेलकूदहरूमा जाँदा लगेको रकम सबै खर्च गरेँ भनेर अरू पनि हजारौँ डलर फेरि निकासा गरेर लिने चलन राष्ट्रिय खेलकूदपरिषद्मा रहेछ, तर मैले चाहिँ राष्ट्रिय स्वार्थलाई सर्वोपरि राखेर त्यति ठूलो सेण्टेनियल ओलम्पिक गेममा संयुक्तराज्य अमेरिका जाँदा पनि जम्मा १० हजार अमेरिकी डलर लगेको र त्यसमा पनि १५०० डलरमात्रै खर्च गरेर अरू बाँकी सबै राष्ट्रियखेलकूद परिषद्मा फिर्ता गरिदिएको थिएँ । त्यो अभूतपूर्व कुरा देखेपछि परिषद्का कर्मचारीहरू आश्चर्यचकित भएका थिए । राष्ट्रिय खेलकूदपरिषद्को इतिहासमा त्यो आदर्श आठौँ आश्चर्यमा परेको कुरा त्यस बेला चर्चामा आएको थियो ।

उक्त सेण्टेनियल ओलम्पिक खेलकूदमा नेपालबाट अमेरिका जाने नेपाली समूहमा निम्न लिखित व्यक्तिहरू सम्मिलित थिए । श्रीबद्रीनाथ श्रेष्ठ (मेरा सहायक भएर गएका सहायक चीफ अफ दि मिसन), श्रीबलबहादुर कुँवर (राजनीतिक व्यक्ति), डा. श्रीअजय शंशेर राणा (राष्ट्रिय खेलकूदपरिषद्का चिकित्सक), श्रीराजेश बज्राचार्य (कर्मचारी), श्रीपार्थसारथी सेन गुप्ता (खेलाडी), सुश्री विमला रानामगर (खेलाडी), सुश्री विभा राई (खेलाडी), श्रीटीका बोगटी (खेलाडी), श्रीसीताराम राई (खेलाडी), श्रीसुनील जोशी (खेलाडी), सुश्री निशमा गुरुङ (खेलाडी) समेत गरेर मेरो नेतृत्वमा १३ जनाको समूह गएको थियो ।

त्यसैगरेर युवराज दीपेन्द्रसँग गएको अर्को समूहमा मन्त्री श्रीबलबहादुर के.सी., श्रीरुक्म शम्शेर राणा (अध्यक्ष नेपाल ओलम्पिक समिति), श्रीमती ईश्वरी राणा र श्रीविनोद बस्नेतसमेत सम्मिलित थिए । उनीहरूका अतिरिक्त दरबारका केही उच्च अधिकारीहरू पनि गएका थिए ।

अमेरिकामा भएको उक्त सेन्टेनियल ओलम्पिक खेलकूदको कार्यक्रम सफलताका साथ समाप्त गरेर काठमाडौं फर्किएपछि मैले फेरि मन्त्रालयको काममा नै लाग्नु परेको थियो । राष्ट्रिय खेलकूदपरिषद्मा कर्मचारीहरू भर्ना गर्ने प्रक्रिया म अमेरिका जानुभन्दा पहिले नै शुरुभइसकेको थियो । उताबाट फर्किएर आएपछि त्यसै कामलाई मैले प्राथमिकता दिनुपरेको थियो । राष्ट्रिय खेलकूदपरिषद्मा चाहिनेभन्दा बढी कर्मचारीहरू भर्ना गर्न तत्कालीन मन्त्री श्रीबलबहादुर के.सी.को दबाब परेको र त्यसमा सहायक मन्त्री श्रीपाल्देन गुरुङको पनि स्वार्थ मिलेको हुँदा नयाँ कर्मचारीहरूको नियुक्ति गर्ने काममा मलाई अत्यन्त मुश्किल परेको थियो । मैले राजनीतिक दबाबबाट जोगिएर काम गर्नलाई नेपाल लोकसेवाआयोगका प्रतिनिधिको रोहबरमा नै सबै काम गराएको थिएँ । जति नियमित गर्नखोजे पनि मन्त्री र सहायक मन्त्रीका स्वार्थले गर्दा अयोग्य र नचाहिँने कर्मचारीहरूसमेत राष्ट्रिय खेलकूदपरिषद्भित्र छिर्न सफल भएका थिए । ती कर्मचारीहरू अहिलेसम्म पनि राष्ट्रिय खेलकूदपरिषद्को दायित्वका रूपमा रहेका होलान् भन्ने मैले ठानेको छु । कर्मचारीहरूको नियुक्ति गर्ने काम अन्तिम अवस्थामा पुगेको समयमै मेरो पहिलो चीनभ्रमणको अवसरमा नेपाली संस्कृति मन्त्रीका लागि मैले लिएर आएको चीनका संस्कृतिमन्त्रीको निमन्त्रणामा मेरो इच्छा नहुँदा नहुँदै फेरि पनि मैले दोस्रो पटक चीनको भ्रमणमा जानुपरेको थियो ।





परिवारका बीचमा पिता शरदकुमार भट्टराई र माता इन्दिरा भट्टराई ।

# दोस्रोपटक चीनमा

मन्त्रीपरिषद्को निर्णय अनुसार युवा, खेलकूद तथा संस्कृति मन्त्री श्रीबलबहादुर के.सी.का साथमा जनवादी गणतन्त्र चीनको दोस्रोपटकको भ्रमणका लागि काठमाडौंबाट २०५३ साल आश्विन ४ गते राती नेपाली हवाइजहाजमा चढेर चीनको सङ्घाईतर्फ म गएको थिएँ । हामीहरू जनवादी गणतन्त्र चीनको सङ्घाई शहरमा हवाइजहाजबाट बिहानीपख उत्रिएका थियौँ । सङ्घाई विमानस्थलमा चीनका अधिकारीहरूले हाम्रो स्वागत गरेका थिए र त्यसपछि हामीहरूलाई पाँचतारे होटेलमा लगेर उनीहरूले राखेका थिए । केही समय आराम गरेपछि हामीहरू सङ्घाई शहरका विभिन्न दर्शनीय ठाउँहरूमा भ्रमण गर्नगएका थियौँ । सर्वप्रथम हामीहरूलाई चीनको अमूल्य रत्न जेडबाट बनेको एउटा विशाल बुद्धको मन्दिरमा लगिएको थियो । त्यो मन्दिर ऐतिहासिक हुनाका साथै अत्यन्त रमणीय पनि रहेछ । त्यसैकारण त्यहाँ दर्शनार्थीहरूको अत्यन्त भीड हुँदोरहेछ । बाहिरबाट आउने विदेशी पर्यटकहरूको लागि त्यो मन्दिरलाई गन्तव्यस्थलको रूपमा लिइँदोरहेछ । विभिन्न देशमा देखेका बुद्धका मन्दिरहरूमध्ये सबैभन्दा रमणीय र समृद्ध त्यही बुद्धमन्दिर नै मैले देखेको थिएँ ।

त्यसपछि हामीहरूलाई सङ्घाई शहरमा रहेका विभिन्न सङ्ग्रहालय, सङ्घाईटावर र आधुनिक आर्थिक केन्द्रहरूमा पनि लगिएको थियो । दुई दिनसम्म सङ्घाईको भ्रमण गरेपछि तेस्रो दिन हामीहरू सङ्घाईबाट हवाइजहाजद्वारा बेजीङ गएका थियौँ ।

सङ्घाईबाट चाइना एयरलाइन्सको विमान चढेर बेजीङको विमानस्थलमा हामीहरू ओर्लिने बित्तिकै चीनका संस्कृतिमन्त्रालयका सहायकमन्त्री लगायतका पदाधिकारीहरूले हाम्रो भव्य स्वागत गरेका थिए । त्यहाँबाट हामीहरूलाई बेजीङको केन्द्रीय स्थल तेनयानमेन स्क्वायरमा रहेको ऐतिहासिक बेजीङसरकारी होटेलमा



सङ्घाईटावरमा केशरबहादुर कार्कीका साथ लेखक

लगेर राखेका थिए। शरद्ऋतुको समय भएको हुँदा चीनको राजधानी बेजीङ शहर अत्यन्त सुन्दर फूलैफूलले झकिझकाउ भएर नयाँ दुलही सजिएकीजस्तै देखिन्थ्यो। बेजीङमा चीनका संस्कृतिमन्त्री, सहायकमन्त्री र अरू पदाधिकारीहरूका साथमा नेपाल र चीनका बीचमा सांस्कृतिक, आर्थिक तथा खेलकूदका क्षेत्रमा आपसी सहयोग आदानप्रदान गर्ने सम्बन्धमा हाम्रो वार्ता भएको थियो।


नमस्कारको मुद्रामा रहेका चीनका संस्कृतिमन्त्रीलाई उपहार प्रदान गर्दै लेखक

त्यसरी भएको वार्ताको क्रममा पहिले चीनसरकारकै सहयोगमा बनेको काठमाडौंको राष्ट्रिय रङ्गशालाको मर्मतसुधारका साथै खेलकूदका अरू रङ्गशालाहरूको निर्माणका लागि पनि हामीहरूले अनुरोध गरेका थियौँ। सोही अनुसार चीनसरकारकै आर्थिकसहयोगमा पछि आएर काठमाडौंमा पुरानू राष्ट्रिय रङ्गशालाको जीर्णोद्धारका साथै अरू पनि धेरै खेलकूदका स्थानहरू निर्माण भएका थिए।


चीनका सहायक संस्कृतिमन्त्रीलाई नेपालको तर्फबाट उपहार प्रदान गर्दै मन्त्रीका साथमा लेखक

अर्को दिन चीनको ग्रेटवाल, नेपाली कलाकार अरनिकोले ई.सन्. १२७९ मा चीनका सम्राट् कुवलया खाँका समयमा निर्माण गरेको ह्वाइट प्यागोडा, तेनयानमेन स्क्वायर, फर्बिडेनसिटी र विभिन्न बौद्ध मन्दिरहरूसमेतको हामीहरूले भ्रमण गरेका थियौँ। त्यहाँको कार्यक्रम समाप्त गरेर हामीहरू बेजीङबाट उडेर दक्षिणपट्टिको ऐतिहासिक शहर छेन्दु गएका थियौँ। छेन्दुमा २ दिनसम्म बसेर भेटघाट र ऐतिहासिकस्थलहरूको भ्रमण सकेर हामीहरू छेन्दुबाट हवाइजहाजद्वारा तिब्बतको राजधानी ल्हासा विमानस्थलमा उत्रिएका थियौँ। ल्हासा विमानस्थलमा तिब्बतका क्रान्तिकारी


चीनको प्रसिद्ध ग्रेटवाल भ्रमण गर्न गएको बेला ग्रेटवालमाथि मन्त्रीसहित प्रतिनिधि मण्डलका साथ लेखक

परिषद्का अधिकारीहरूले हाम्रो स्वागत गरेका थिए। हामीहरूलाई होलीडे इन भन्ने भव्य होटेलमा लगेर राखिएको थियो। त्यो ठाउँ उच्च हिमालीक्षेत्रमा पर्ने हुनाले लेक लाग्ने डर भएको हुँदा आवश्यक औषधी र अक्सिजनसमेतको व्यवस्था स्थानीय सरकारले गरेको थियो।



नेपाली कलाकार अरनिकोले बेजीङमा निर्माण गरेको श्वेत स्तूपका अगाडि प्रतिनिधि मण्डलका साथ लेखक

त्यहाँ पुगेर केही समय आराम गरेपछि हामीहरूले त्यहाँका पदाधिकारीहरूसँग भेटघाट र कुराकानी गर्नुका साथै त्यहाँ रहेको नेपाली वाणिज्यदूतावासका कर्मचारीहरूसँग पनि भेटघाट गरेका थियौं। हामीहरूले ल्हासामा रहेको दलाई लामाको ऐतिहासिक पोटाला दरबार, दलाई लामाको ग्रीष्मकालीन दरबारका साथै अन्य धामिर्क तथा ऐतिहासिक स्थलहरूको समेत भ्रमण गरेका थियौं। २ दिनसम्म तिब्बतको भ्रमण गरेर हामीहरू ल्हासा विमानस्थलबाट चिनियाँ जहाजमा चढेर तिब्बतबाट काठमाडौंतिर उड्दा बिहानको समय थियो। आकाश उघ्रिएको स्वच्छ थियो। सम्पूर्ण हिमशृङ्खला र शर्वोच्च हिमशिखर सगरमाथासमेतलाई छर्लङ्ग देख्न सकिन्थ्यो। विशाल तथा उच्च हिमशृङ्खलाका काखमा रहेका हज्जारौं हिमतालहरू देखिन्थे। माथिबाट हामीहरू चढेको हवाइजहाज सगरमाथालाई दायाँ परिक्रमा गरेर नेपाल भित्र प्रवेश गरेको थियो। ती सुन्दर तथा अनुपम दृश्यहरू शब्दहरूबाट वर्णन गर्न सकिने खालका थिएनन्। हिमालयको जीवन्त सौन्दर्य र त्यसको विशालता हेर्ने धेरै



चीनको छेन्दुबाट तिब्बतको ल्हासातर्फ प्रस्थान गर्न विमानस्थलमा बिदा हुँदै लेखक



चीनको राजधानी बेजीङमा रहेको प्रसिद्ध तेनयानमेन स्क्वायरमा पूर्णिमाको जुनेली रातमा लिएको तस्वीर

दिनदेखिको मेरो धोको त्यस दिन पूरा भएको थियो। म त्यस सौन्दर्यको अवलोकनबाट अत्यन्त अभिभूत भएर गद्गद भएको थिएँ। हिमालयको त्यो अगम्य, विराट् तथा अनुपम सौन्दर्य देखेपछि संस्कृतसाहित्यका महाकवि श्रीकालिदासले लेखेको कुमारसम्भवम् महाकाव्यलाई मैले शुरुको श्लोक सम्झिएको थिएँ। जस्तै –


ल्हासामा रहेको दलाई लामाको प्रसिद्ध पोटाला दरबारमा भृकुटी र स्रन्चन्गाम्पोको चित्रका साथ लेखक

अस्त्युत्तरश्यां दिशि देवतात्मा हिमालयो नाम नगाधिराजः ।
पूर्वापरौ तोयनिधी वगाह्य स्थितः पृथिव्या इव मानदण्डः ।।

उक्त अनुपम दृश्यलाई अत्यन्त शीघ्रताका साथ मेरो भिडियो क्यामरामा मैले कैद गरेको थिएँ र हतारहतार गरेर कवितामा समेत त्यहाँको सौन्दर्यचित्रलाई लिपिबद्ध गरेको थिएँ। उक्त कविता मेरो यात्रा वर्णन 'यात्रैयात्रा २०५८' मा प्रकाशित भइसकेको छ। हिमालयको त्यो अलौकिक सौन्दर्यलाई आत्मसात् गर्दै २०५३ साल असोज १५ गतेका दिन बिहान १० बजे त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल काठमाडौँमा म उत्रिएको थिएँ। मैले २०५३ साल आश्विन ५ गतेदेखि १५ गतेसम्म मित्रराष्ट्र चीनसरकारको निमन्त्रणामा गरेको चीनको औपचारिक भ्रमण अत्यन्त स्मरणीय रहेको छ। चीन जाने र आउने हवाइजहाजको भाडा नेपाल सरकारले नै तिरेको थियोभने चीनमा बसुन्जेल चीनसरकारले खानापिना, बसोवास र आन्तरिक उडानसमेतको व्यवस्था गरेको थियो।


तिब्बतको भ्रमण समाप्त गरेर काठमाडौं फर्कने समयमा ल्हासा विमानस्थलमा बिदा हुँदै प्रतिनिधिमण्डल

चीनभ्रमणमा हामीहरू जाँदा चीन सरकारले गरेको स्वागत र अतिथिसत्कार अत्यन्त उल्लेखनीय थियो। सो कुराको उल्लेख मैले मेरो यात्रावृत्तान्तमा गरिसकेको छु। उक्त भ्रमणमा जानेहरूमा मेरा अतिरिक्त मन्त्री श्रीबलबहादुर के.सी., माननीय श्रीचन्द्रकान्त दाहाल, श्रीहरिहर शर्मा, श्रीमती ऋद्धिबाबा

प्रधान, श्रीकेशरबहादुर कार्की र श्रीआङ्दावा शेर्पा हुनुहुन्थ्यो ।

उपर्युक्त अनुसार चीनको सरकारी भ्रमण समाप्त गरेर काठमाडौं फर्किएपछि मैले फेरि पनि युवा, खेलकूद तथा संस्कृति मन्त्रालयमा मन्त्री र सहायक मन्त्रीको दबाबमा काम गर्नुपरेको थियो । मन्त्रालय र राष्ट्रिय खेलकूदपरिषद्को समेत दोहोरो उत्तरदायित्त्व लिएर काम गर्नुपर्दा मलाई अत्यन्त कष्ट भएको थियो । त्यसमा पनि मन्त्री, सहायकमन्त्री र खेलाडीहरूको समेत राप खेपेर काम गर्नुपरेको हुँदा राष्ट्रिय खेलकूदपरिषद्को सदस्यसचिवको काम छोडेर मन्त्रालयको मात्रै सचिव भएर मैले काम गर्न थालेको थिएँ ।

त्यसरी मैले राष्ट्रिय खेलकूदपरिषद् छोडेपछि रिक्त भएको राष्ट्रिय खेलकूदपरिषद्को सदस्यसचिव पदमा श्रीबद्रीनाथ श्रेष्ठ नियुक्त हुनुभएको थियो । मन्त्रालयको काम मैले सामान्यरूपमा गरिरहेकै बखत पनि मन्त्री श्रीबलबहादुर के.सी. र मेरा बीचको सम्बन्ध सुमधुर हुनसकेको थिएन । मन्त्री श्रीबलबहादुर के.सी. गैरकानूनी निर्णय गर्न बारम्बार मलाई दबाब दिइरहनुहुन्थ्यो । तर मैले गैरकानूनी निर्णय गर्न नमानेपछि उहाँ र मेरा बीचको सम्बन्ध चिसिनगएको थियो । मैले त्यस प्रकारका संवेदनहीन मन्त्रीका अधीनमा रहेर काम गर्न तत्कालीन प्रधानमन्त्री श्रीशेरबहादुर देउवासमक्ष असमर्थता देखाएपछि शिक्षामन्त्रालयको सचिवमा २०५३ साल फागुन १० गतेका दिन मेरो सरुवा भएको थियो ।

युवा, खेलकूद तथा संस्कृति मन्त्रालयमा कार्यरत रहेको अवस्थामा 'क्रान्तिदूत २०५३' नामक राजनीतिक खण्डकाव्य लेखेर मैले प्रकाशित गरेको थिएँ । उक्त खण्डकाव्यमा मैले जननायक श्रीविश्वेश्वरप्रसाद कोइरालालाई नायक र तत्कालीन राजा श्री ५ महेन्द्रलाई खलनायकका रूपमा चित्रण गरेको छु । त्यस काव्यको महत्त्व त्यस समयमाभन्दा अहिले बढेरगएको मैले देखेको छु । उक्त मन्त्रालयमा बसेर मैले साहित्यको सिर्जनाका साथै धेरै कुराहरू सिक्ने मौका पनि पाएको थिएँ । त्यसै समयमा मैले २ पटक जनवादी गणतन्त्र चीनको र एकपटक संयुक्तराज्य अमेरिकाको भ्रमण गरेको थिएँ । त्यस मन्त्रालयमा कार्यरत रहँदा जतिसुकै झन्झट भोग्नुपरेको भए तापनि केही महत्त्वपूर्ण उपलब्धिहरू प्राप्त गर्नभने म सफल भएको थिएँ ।



# शिक्षामन्त्रालयमा

युवा, खेलकूद तथा संस्कृति मन्त्रालयबाट सरुवा भएर शिक्षामन्त्रालयमा जाँदा त्यस मन्त्रालयमा त्यसबेला श्रीगोविन्दराज जोशी मन्त्री भएर कार्यरत रहेका हुँदा मलाई केही अप्ठ्यारो अनुभूति भएको थियो। किनभने उहाँ अत्यन्त बदनाम व्यक्ति भएका हुँदा मैले त्यस्तो महसूस गरेको थिएँ। शिक्षामन्त्रालयमा हाजिर भएर काम गर्न थालेपछि म मन्त्री जोशीलाई टेर्दिन भन्ने उहाँका चाकडीबाजहरूको कुरा सुनेर उहाँले शुरुदेखि नै मेरा विरुद्धमा नकारात्मक कामहरू गर्न थाल्नुभएको थियो। मलाई सोभै काम अह्राउन नसकेर मेरा सहायक कर्मचारीहरूबाट उहाँले काम लिन र साथै मेरा विरुद्धमा कर्मचारीहरू उचाल्न थालेपछि उहाँ भ्रष्टाचारीका साथै षड्यन्त्रकारी व्यक्ति पनि हुनुहुँदोरहेछ भन्ने भान मलाई हुनथालेको थियो। उहाँसँगको मेरो सम्बन्ध बिस्तारै चिसिँदै जान थालेको भए तापनि बाहिरीरूपमा भने म शिष्टाचारपूर्वक नै व्यवहार गर्नेगर्दथेँ। सचिव भएर त्यस मन्त्रालयमा गएपछि म भ्रष्टाचार विरोधी भएकोले मन्त्री श्रीगोविन्दराज जोशी सायद तर्सिनु भएको थियो होला। उहाँको व्यवहारबाट मलाई त्यस्तै लागेको थियो। उहाँका सम्बन्धमा अध्ययन गर्दागर्दै सौभाग्यले मन्त्री जोशीसँग जम्मा १३ दिनमात्र मैले काम गर्ने मौका पाएको थिएँ। त्यसै समयमा मन्त्रिपरिषद्को परिवर्तन भएर प्रधानमन्त्री श्रीलोकेन्द्रबहादुर चन्दको नेतृत्वमा राष्ट्रियप्रजातन्त्र पार्टी र एमाले मिलेर संयुक्त सरकार बनेको थियो। जसलाई छोटकरीमा चमाले सरकार भन्ने पनि चलन थियो। त्यसरी नयाँ मन्त्रीमण्डल बनेपछि श्रीगोविन्दराज जोशी शिक्षामन्त्रीको पदबाट हट्नुभएको थियो। त्यस मन्त्रिमण्डलमा उपप्रधानमन्त्री र गृहमन्त्रीसमेत बन्नुभएका श्रीवामदेव गौतमलाई नै अर्को व्यवस्था नभएसम्म शिक्षामन्त्रालय पनि हेर्ने भनेर तोकिएको थियो। केही दिन उहाँसँग शिक्षामन्त्रालयमा काम गर्दा उहाँसँग काम गर्न मलाई सजिलै लागेको थियो।

त्यसरी गौतमजीसँग काम गर्दागर्दै केही दिनपछि नै शिक्षामन्त्रालयमा

मन्त्री भएर श्रीदेवीप्रसाद ओझा आउनुभएको थियो । मन्त्री ओझा आफूलाई अत्यन्त चलाख र जानिफकार ठान्नुहुन्थ्यो । उहाँले शिक्षामन्त्रालयमा गएर बहाली गरेकै दिन त्यहाँ कार्यरत हामी राष्ट्रसेवकहरूलाई धम्कीको भाषा बोल्नुभएको थियो । त्यसरी धम्कीको भाषा बोल्नु खास गरेर मप्रति नै लक्ष्य गरिएको थियो भन्ने मलाई लागेको थियो । मैले झापा जिल्लाको प्रमुखजिल्ला अधिकारी भएर काम गरेको समयमा श्रीदेवीप्रसाद ओझा बेलाबेलामा जिल्लामा गएर पार्टीको कामको नाममा घुसघुसे काम गरेर हिँड्नेगर्नुहुन्थ्यो । खास आँट नभएका प्रभावहीन व्यक्ति भन्ने ठानेर मैले उहाँलाई पक्राउ नगरेर त्यसै छाडिदिने गरेको थिएँ । उहाँ अरू वामपन्थी नेताहरूजस्तो खुलेआम सङ्गठन गरेर प्रशासनको कोपभाजन हुन सायद हिम्मत गर्नुहुन्नथ्यो । मैले उहाँका विरुद्धमा झापाजिल्लामा बसुन्जेल कुनै पनि प्रकारको कारबाही गरेको थिइन । उहाँलाई मैले  चिनेको थिइन र उहाँको अहित हुने काम पनि मैले गरेको थिइन तापनि उहाँ मसँग भित्रभित्रै रिसाउनु भएको रहेछभन्ने कुरा त्यस दिनको मेरा विरुद्धको अभिव्यक्तिबाट मलाई थाहा हुनआएको थियो ।

त्यसपछि मन्त्रालयको काम सामान्यरूपमा अघि बढ्दै गएको थियो । जति सुकै बाहिरी सद्भाव देखाए तापनि उहाँले मलाई कुनै पनि प्रकारको अधिकार प्रत्यायोजन गर्नुभएको थिएन । मन्त्रालयका सबै काम कुराहरू आफैँले सोझै गर्न थालेपछि मलाई असाध्य सजिलो भएको थियो । मैले अधिकार प्रत्यायोजन गरेर मलाई दिनुहोस् भन्नुको साटो मन्त्रीलाई सजिलो होस् भनेर त्यस मन्त्रालयबाट मेरो सरुवा नै गरिदिन मैले मन्त्री ओझासँग बारम्बार अनुरोध गरेको थिएँ । उहाँ मलाई विश्वास गरेर काम लगाउन पनि नसक्ने र सरुवा गर्न पनि नसक्ने अवस्थामा भएपछि उहाँलाई काम गर्न अत्यन्त अप्ठेरो परेको थियो । दुर्भाग्यले बिनाकुनै करण उहाँका र मेरा बीचको सम्बन्ध सौहार्द हुन सकेको थिएन ।

त्यसैसमयमा उहाँले आफ्ना राजनीतिक सल्लाहकारमा उहाँका फुपुका छोरा श्रीराममणि पोखरेललाई नियुक्त गर्नुभएको थियो । उनको र मेरा बीचको सम्बन्ध पहाडको घरदेखि नै राम्रो भएको हुँदा मन्त्रीले गरेका गलत कामहरूका सम्बन्धमा उनी मलाई जानकारी दिने गर्दथे र मन्त्रीलाई गलत

काम नगर्न चेतावनी पनि दिने गर्दथे । मन्त्री ओझा कम पढेलेखेका व्यक्ति भएका हुँदा उहाँमा अत्यन्त हीनताबोध थियो । उहाँ मसँग दोहोरो कुरा गर्न सक्नुहुन्नथ्यो । ममाथि शङ्काको दृष्टि राखेर उहाँ मसँग व्यवहार गर्नुहुन्थ्यो । थरीथरीका व्यक्तिहरूलाई प्रयोग गरेर मेरा कार्यकक्षमा आउने जाने मान्छेहरू र मैले गरेका कुराकानीका सम्बन्धमा पनि उहाँ जानकारी राख्ने गर्नुहुन्थ्यो । सो कुरा मलाई थाहा हुन्थ्यो । म कुनै गैरकानूनी काम नगर्ने र मैले मन्त्रीका विरुद्धमा कुनै प्रकारको षड्यन्त्र पनि गर्नु नपरेको हुँदा मबाट कुनै गलत काम हुँदैनथ्यो । त्यसै कारण मन्त्री ओझाले मेरा विरुद्धमा जस्तो सुकै गलत धारणा राखे तापनि म निशङ्क भएर काम गर्ने गर्दथेँ । हुँदाहुँदै त्यस बेला मेरो पी.ए. भएर काम गर्ने जनकशिक्षा सामग्री केन्द्रबाट काजमा आएका रामचन्द्र सिलुवाल भन्ने कर्मचारीलाई पनि मन्त्री ओझाले गुप्तचरको रूपमा मेरा विरुद्धमा प्रयोग गरेको मैले थाहा पाएको थिएँ । सो कुरा मैले थाहा पाएपछि निज सिलुवाललाई तुरुन्तै निजकै कार्यालय जनकशिक्षासामग्रीकेन्द्रमा फिर्ता पठाइदिएको थिएँ । त्यसरी निज मन्त्रीको गुप्तचरलाई मैले फिर्ता पठाइदिएपछि मेरा विरुद्धमा त्यस मन्त्रालयमा बसुन्जेल फेरि खास गुप्तचरको प्रयोग गरेर मेरा कुरा मन्त्री ओझाले बुझ्न खोज्ने हिम्मत गर्नुभएको थिएन ।

मन्त्री ओझा बिस्तारै मन्त्रालय र अन्तर्गतका कर्मचारीहरूका बीचमा अप्रिय हुँदै जानुभएको थियो । उहाँको सीमित ज्ञान र क्षुद्र व्यवहारले गर्दा उहाँका राजनीतिक कार्यकर्ताहरू पनि उहाँका विरुद्ध भएका थिए । बर्दिया जिल्लामा प्रमुखजिल्लाअधिकारी हुँदा मैले कारबाही गरेका एमालेका कार्यकर्ताहरूले मन्त्री ओझाको विश्वास नगरेर मेरो विश्वास गर्नथालेका थिए । निज मन्त्री ओझाले भाषण गर्दा र कुरा गर्दा आफूलाई जति सुकै नैतिकवान् र क्रान्तिकारी भएको घोषणा गरे तापनि मैले अख्तियारदुरुपयोग निवारण आयोगको निर्देशन अनुसार भ्रष्टाचारमा कारबाही गरेका त्यस मन्त्रालय अन्तर्गतका भ्रष्ट कर्मचारीहरूलाई संरक्षण गरेर तिनलाई छुटकारा दिन मलाई मन्त्री ओझाले दबाब पनि दिनुभएको थियो । भ्रष्टाचारीहरूका संरक्षणमा मन्त्री ओझा लागेपछि मैले त्यसो नगर्न मन्त्री ओझालाई चेतावनी दिनुपरेको थियो । क्रान्तिकारी पार्टीका नेता भएर भ्रष्टाचारीहरूलाई

बोकिहिँडेमा म सो कुरा मेरो आत्मवृत्तान्तमा उल्लेख गर्नेछु । त्यतिमात्र होइन अहिले नै तपाईंका विरुद्धमा अभियान पनि चलाउँनेछु भनेर मैले चेतावनी दिएपछि मसँग उहाँले माफ माग्नुभएको थियो । त्यसपछि उहाँ मसँग केही झुक्नुभएकोजस्तो मलाई लागेको थियो । त्यसरी मन्त्री ओझा क्रमशः सबैतिरबाट नाङ्गिँदै गएपछि मन्त्रालयमा काम गर्न उहाँलाई गाह्रो परेको थियो । त्यसरी मन्त्री ओझासँग बौद्धिक तथा वैचारिक सङ्घर्ष चलिरहेकै बेला मैले दक्षिण पूर्व एशियाका राष्ट्रहरू थाइल्यान्ड, फिलिपिन्स्, भियतनाम र सिङ्गापुरको भ्रमणमा जानुपरेको थियो ।





सानीछोरी सविता अर्याल श्रीमान् बद्रीराज अर्याल र छोरीहरू सुजाता र आस्थाका साथ

# दक्षिणपूर्व एशियाका देशहरूमा

२०५४ साल भाद्र २ गते तदनुसार सन् १९९७ अगष्ट २३ तारिखका दिन डेन्मार्क सरकारको सहयोगमा दक्षिणपूर्वी एशियाका राष्ट्रहरू थाइल्याण्ड, फिलिपिन्स्, भियतनाम र सिङ्गापुरको समेत भ्रमण गर्नका लागि मैले काठमाडौंबाट थाईएयरलाइन्सको जहाजमा चढेर दिनको अपराह्न हुँदा बैंङ्ककतर्फ प्रस्थान गरेको थिएँ। मसँग जानेहरूमा श्रीअर्जुन बिष्ट, श्रीराममणि पोखरेल, श्रीजीतबहादुर थापा र डेन्मार्कबाट सल्लाहकारका रूपमा आएका श्रीएरिक विन्टर स्मिथ पनि थिए। हामीहरूले भ्रमण गर्नुको खास उद्देश्य ती देशहरूमा सञ्चालित शैक्षिककार्यक्रम र शिक्षासम्बन्धी नीतिको अध्ययन गर्नु नै थियो। सर्वप्रथम हामीहरू थाइल्यान्डको राजधानी पुगेर तीन दिनसम्म त्यहाँ बसेर थाइल्याण्डको शिक्षाविकास सम्बन्धी कार्यक्रमको अध्ययन गरेका थियौं। त्यहाँ हामीहरूले शिक्षा क्षेत्रमा काम गर्ने विशेषज्ञ, उच्चपदस्थ कर्मचारीहरू र राजनीतिक व्यक्तिहरूसँग पनि भेटेर छलफल गरेका थियौं। अध्ययनको क्रममा हामीहरूले दूरशिक्षा, प्रौढशिक्षा, नारीशिक्षा र पिछडिएका वर्गलाई दिइने शिक्षाका सम्बन्धमा पनि विस्तृत अध्ययन गरेका थियौं। अध्ययनको क्रममा हामीहरू विभिन्न विद्यालयहरू, प्रशिक्षणकेन्द्रहरू र दूरशिक्षा प्रचारप्रसार गर्ने प्रसारणकेन्द्रहरूमा पनि गएका थियौं। त्यहाँ हामीहरूले शिक्षासामग्री उत्पादन गर्ने केन्द्रहरूको पनि अध्ययन गरेर विस्तृत जानकारिलिएका थियौं।



बैङ्ककमा गरिएको शैक्षिक भ्रमणको बेला सम्बन्धित अधिकारीहरूसँग छलफल गर्दै, सन् १९९७ अगष्ट २४

त्यसरी थाइल्याण्डको भ्रमण समाप्त गरेपछि हामीहरू त्यहाँबाट शैक्षिकभ्रमणका लागि फिलिपिन्स्को राजधानी मनिला गएका थियौं। मनिलामा हामीहरूले थाइल्याण्डमा जस्तै गरेर विभिन्न विद्यालयहरू र

तालीमकेन्द्रहरूको अध्ययनभ्रमण गर्नुका साथै त्यहाँ शिक्षाका क्षेत्रमा काम गर्ने उच्चस्तरीय अधिकारीहरू र शिक्षामन्त्रीलाई पनि भेटेर छलफल गरेका थियौँ। त्यहाँ शिक्षाको क्षेत्रमा अत्यन्त द्रुततररूपमा प्रगति भइरहेको हामीहरूले पाएका थियौँ। थाइल्याण्डमा


फिलिपिन्स्को मनिलामा रहेको विद्यालयका बालबालिकासँग लेखक, सन् १९९७ अगष्ट २६

जस्तै त्यहाँको अध्ययनभ्रमण गर्दा पनि हामीहरूलाई शिक्षाक्षेत्रका सम्बन्धित व्यक्तिहरूले स्वागतसत्कार गरेका थिए।

उपर्युक्त अनुसार मनिलाको कार्यक्रम समाप्त गरेपछि फिलिपिन्स्कै एउटा सुन्दर टापु सिबु भन्ने ठाउँमा हामीहरू गएका थियौँ। सिबुमा हामीहरूलाई विभिन्न शैक्षिक गतिविधिहरूका बारेमा जानकारी दिइएको थियो। त्यहाँ घुम्ती विद्यालय, घुम्ती पुस्तकालय र सडकका अनाथ बालबालिकाहरूलाई पढाउने विद्यालयको समेत हामीहरूले अध्ययन गरेका थियौँ। त्यहाँ शिक्षासम्बन्धी सम्पूर्ण क्रियाकलाप हेर्ने शिक्षानिर्देशिका श्रीमती लाबे हुनुहुन्थ्यो। उहाँ अत्यन्त क्रियाशील र कर्मठ व्यक्ति भएकी हुँदा उहाँले हामीहरूलाई सिबु क्षेत्रको सम्पूर्ण शैक्षिकगतिविधि अत्यन्त उत्सुकताका साथ देखाउनुभएको थियो। उहाँले समुद्रको बीचमा रहेको एउटा सुन्दर रिसोर्टमा लगेर हामीहरूलाई अतिथिसत्कार गर्नुभएको थियो। त्यस क्षेत्रमा सञ्चालित अरू पनि विद्यालयहरूको निरीक्षण गराउनुका साथै त्यहाँका शैक्षिकसामग्री उत्पादन गर्ने केन्द्रहरूमा पनि हामीहरूलाई घुमाउनुभएको थियो।

सिबुको अध्ययनभ्रमण समाप्त गरेर त्यहाँबाट हामीहरू मनिला अन्तर्राष्ट्रिय विमानस्थल हुँदै हङ्कङतर्फ उडेका थियौँ। हामीहरू अबेर साँझ हङ्कङ पुगेर त्यहाँबाट तुरुन्तै भियतनामी एयरलाइन्सको जेट चढेर राती ९ बजे भियतनामको राजधानी हनोईविमानस्थलमा उत्रिएका थियौँ। राती नै हनोईको मध्यभागमा पर्ने एउटा होटेलमा लगेर हामीहरूलाई राखिएको


भियतनाममा हनोईको होचिमिन्ह सिटीमा होचिमिन्हको स्मारक अगाडि लेखक, सन् १९९७ अगष्ट २७

थियो । धेरै वर्षसम्म विदेशीहरूसँग युद्ध गरेर विजयी भएपछि राष्ट्रनिर्माणमा लागेको भियतनाम अत्यन्त द्रुततररूपमा आर्थिक विकास गरिरहेको कुरा हामीहरूले हाम्रो भ्रमणको सन्दर्भमा थाहा पाएका थियौँ । त्यहाँ बस्दा भियतनामका राष्ट्रपिता होचिमिन्हको नाममा स्थापित सङ्ग्रहालय, विभिन्न विद्यालयहरू, तालीमकेन्द्रहरू र अरू दर्शनीय स्थलहरूको पनि हामीहरूले भ्रमण गरेका थियौँ । तिनका अतिरिक्त अन्य कार्यक्रमहरूमा पनि हामीहरूलाई सम्मिलित गराइएको थियो । धेरै वर्षसम्म शक्तिशाली विदेशी राष्ट्रहरूसँग लडेर अन्त्यमा विजय प्राप्त गरेको भियतनामको इतिहास मलाई पहिलेदेखि नै थाहा थियो । म त्यस राष्ट्रको सङ्घर्षलाई अध्ययन गरिरहन्थेँ । त्यसैकारण मैले त्यहाँ भ्रमण गर्नपाएको अवसरमा अत्यन्त चाखका साथ सबै कुराको अध्ययन गरेको थिएँ ।

त्यसरी हनोईमा शैक्षिक अध्ययन गर्ने सन्दर्भमा त्यहाँ हामीहरूले शैक्षिक गतिविधिको अध्ययन गर्नुका साथै त्यहाँका उच्चस्तरीय नेताहरू र शिक्षामन्त्रीसमेतसँग शिष्टाचार भेट गरेका थियौँ । उहाँहरूसँग कुरा गर्दा राष्ट्रनिर्माण गर्ने कुरामा अत्यन्त दृढ अठोट भएको हामीहरूले पाएका थियौँ । पहिले अत्यन्त गरीब राष्ट्रहरूमध्ये पर्ने भियतनाम युद्धमा विजयी भएपछि क्रमशः चौतर्फीरूपमा विकास गर्दैगएको रहेछ । शुरुमा केवल साइकलमात्रै सडकमा देखिने त्यस ठाउँमा हामीहरू गएको बेला सडकैभरि मोटरसाइकलमात्रै देखिन्थे । त्यस सम्बन्धमा मैले जिज्ञासा राख्दा एकजना नेताले अबको १० वर्ष पछि त्यस बेला मोटरसाइकल हिंडेका सडकहरूमा गाडीहरू हिंड्ने कुरा बताएका थिए । भियतनामले एकीकरणपछि सबै क्षेत्रमा अत्यन्त द्रुतरूपमा विकास गरिरहेको हामीहरूले देखेका थियौँ ।

त्यसरी भियतनामको छोटो शैक्षिकभ्रमण समाप्त गरेर हामीहरू त्यहाँबाट दक्षिण भियतनामको पुरानू राजधानी साइगोन हुँदै भियतनामी एयरलाइन्सको हवाइजहाजद्वारा सिङ्गापुर गएका थियौँ । सिङ्गापुरमा हाम्रो शैक्षिक भ्रमणको कार्यक्रम थिएन तापनि त्यहाँ एक रात बिताएर हामीहरू २०५४ साल भाद्र १३ गते तदनुसार सन् १९९७ अगष्ट २९ तारिखका दिन काठमाडौँ फर्किएका थियौँ ।

उपर्युक्त अनुसार दक्षिणपूर्व एशियाका केही विकसित र विकासशील

राष्ट्रहरूमा सञ्चालित शैक्षिक कार्यक्रमहरूको अध्ययन गरेर फर्किएपछि मैले फेरि मन्त्रालयको काममा आफ्नू ध्यान दिएको थिएँ ।

त्यसै बेला फ्रान्समा आयोजना गरिने युनेस्कोको अधिवेशनमा भाग लिन शिक्षामन्त्री ओझाको नेतृत्वमा एउटा प्रतिनिधिमण्डल त्यसतर्फ जाने भनेर सरकारले निर्णय गरेको थियो । मलाई त्यस प्रतिनिधिमण्डलमा मन्त्रीले सामेल गर्नुभएको थिएन । उहाँले मसँग यात्रा गर्ने इच्छा नगर्नुभएको हुँदा मैले पनि उहाँसँग जाने मनसाय व्यक्त गरेको थिइन । त्यसरी जाने तयारी हुँदाहुँदै २०५४ साल असोजको अन्त्यतिर प्रधानमन्त्री श्रीलोकेन्द्रबहादुर चन्दको संयुक्त सरकार हटेर नेपाली काङ्ग्रेसको समेत सहभागितामा श्रीसूर्यबहादुर थापा प्रधानमन्त्री भएको सरकार बनेको थियो । पहिलो चरणमा प्रधानमन्त्री र केही मन्त्रीहरू मात्रै नियुक्त हुनुभएको थियो । शिक्षामन्त्रीमा कसैको पनि नियुक्ति नभएको हुँदा शिक्षामन्त्रालयको काम पनि प्रधानमन्त्री श्रीसूर्यबहादुर थापाले नै हेर्नुभएको थियो । फ्रान्समा हुने उक्त युनेस्कोको अधिवेशनमा भाग लिन शिक्षामन्त्रीको साटो मेरो नेतृत्वमा फ्रान्स जाने भनेर मन्त्रीपरिषद्बाट निर्णय भएको थियो ।





बायाँबाट क्रमशः ठूली नातीनी सुदीक्षा कोइराला, ज्वाई चण्डीप्रसाद दाहाल, छोरी सरिता दाहाल, सानी नातिनी सुप्रिया र नाति सुशान्त दाहाल, विजयादशमी २०६६ (टेक्सस, संयुक्तराज्य अमेरिका)

# फ्रान्समा

फ्रान्सको राजधानी पेरिसमा हुने युनेस्कोको २९ औं वार्षिक सभामा भाग लिन हतार हतार मन्त्रालयका सहसचिव श्रीचुमानसिंह बस्नेत र युनेस्को शाखा हेर्ने उपसचिव श्रीपुरुषोत्तम प्रधानसमेतलाई साथमा लिएर २०५४ साल कार्तिक २ गते तदनुसार सन् १९९७ अक्टोबर १९ तारिखका दिन काठमाडौंबाट नेपाली हवाइजहाज चढेर दिनको अपराह्नमा भारतको राजधानी नयाँ दिल्लीतर्फ म हिंडेको थिएँ। साँझपख नयाँ दिल्लीको इन्दिरागान्धी अन्तर्राष्ट्रिय विमानस्थलमा हामीहरू पुगेका थियौं। त्यहाँबाट मध्यरातमा फ्रान्सतर्फ प्रस्थान गर्नु पर्ने भएको हुँदा हामीहरू नजिकैको होटेलमा गएर बसेका थियौं। मेरो त्यो फ्रान्सको पहिलो यात्रा भएको हुँदा म अत्यन्त प्रफुल्लित थिएँ। हामीहरू नयाँ दिल्लीबाट एयरइण्डियाको जम्बोजेट चढेर मध्यरातमा फ्रान्सतर्फ उडेका थियौं। रातभरिजसो नै हामीहरू एयरइण्डियाको जहाजमा पश्चिमतिर उडी नै रह्यौं। उक्त विमानले हामीहरूलाई कहिले तल कहिले माथि गर्दै नचाउँदै रातभरि नै उडाएको थियो। मलाई विमानमा चढेपछि तलको भूदृश्य हेर्ने र तदनुसार आफ्नू यात्रावृत्तान्त पनि तयार गर्ने सोख थियो। राती उड्नु परेको हुँदा सो गर्नबाट म वञ्चित भएको थिएँ। म रात्रिको समयमा विमानबाट यात्रा गर्दा कहिल्यैं पनि निदाउन सक्तिनथैं र त्यहाँ पनि मैले रातभरि ननिदाएरै बिताएको थिएँ। मलाई फ्रान्समा पदार्पण गर्ने उत्सुकताले मेरो अनिदोपनलाई पनि बिर्साइदिएको थियो। एयर इण्डियाले जहाजभित्र खानापिना लगायत सबै कुराको राम्रो व्यवस्था गरेको थियो। नयाँ दिल्लीबाट उडेर हामीहरू सोझै फ्रान्सको चार्ल्स् डेगाल अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रन गइरहेका थियौं।

फ्रान्सको धरतीमाथि विमान पुगेपछि त्यहाँ बिहानको उज्यालो धरतीभरि फैलिएको थियो। सूर्यको कलिलो किरणबाट फ्रान्सको सम्पूर्ण धरती जाज्वल्यमान भएर चम्किएको थियो। मैले माथिबाटै फ्रान्सको धरतीको मनमोहक सम्पूर्ण दृश्य खेखेको थिएँ। बिहानीपखको सूर्यको किरणले चम्किएको

फ्रान्सको सम्पूर्ण भूमि अत्यन्त सस्यश्यामला र रङ्गिन देखिन्थ्यो । फ्रान्सको सम्पूर्ण भूमिमा हामीहरूले हरियाली देखेका थियौँ । माथिबाटै फ्रान्सका भवनहरू अति सुन्दर र सडकहरू चौडा देखिन्थे । हामीहरू ती सबै दृश्यहरू हेर्दै पेरिसको चार्लस् डेगाल अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएका थियौँ । त्यहाँ हामीहरूलाई लिन युनेस्कोका अधिकारीहरूका साथै फ्रान्समा रहेको नेपाली राजदूतावासका अधिकारीहरू पनि आएका थिए । उनीहरूले हामीहरूलाई सोझै विमानस्थलबाट हाम्रा निमित्त बस्नका लागि व्यवस्था गरिएको होटेलमा लिएर गएका थिए । होटेलमा केही क्षण आराम गरेपछि हामीहरू त्यहाँबाट अधिवेशनमा भाग लिने सन्दर्भमा नेपाली प्रतिनिधिमण्डलको नाम दर्ता गराउन पेरिसमा रहेको युनेस्कोको प्रधान कार्यालयमा गएका थियौँ । त्यहाँ गएर त्यसै दिनदेखि शुरुहुने महाधिवेशनमा नेपालका तर्फबाट सहभागिताका लागि हामीहरूले नाम दर्ता गराएका थियौँ ।



नयाँदिल्लीबाट एयर इण्डियाको जम्बोजेट चढेर फ्रान्सतर्फ प्रस्थान गर्दै लेखक, सन् १९९७ अक्टोबर २०

अर्को दिन अर्थात् अक्टोबर २१ तारिखको बिहानैदेखि युनेस्कोको २९ औँ अधिवेशन पेरिसमा रहेको केन्द्रीय कार्यालयको विशाल भवनमा शुरुभएको थियो । हामी नेपाली प्रतिनिधिमण्डलले पूर्णरूपमा भाग लिएका थियौँ । त्यहाँ बोल्दा सहभागीहरूले संयुक्तराष्ट्रसङ्घले स्वीकृत गरेका अङ्ग्रेजी लगायतका ५ भाषाहरूमामात्र बोल्न पाइन्थ्यो । त्यसमा हामीहरूले अङ्ग्रेजीभाषाबाटै आफ्नू मन्तव्य व्यक्त गरेका थियौँ । त्यहाँ तीन दिनसम्म चलेको महाधिवेशनको बैठक र त्यस अन्तर्गतका समितिका बैठकहरूमा समेत हामीहरूले भाग लिएका थियौँ ।



पेरिसमा भएको युनेस्कोको २९ औं अधिवेशनमा भाग लिँदै लेखक, सन् १९९७ अक्टोबर २१

पेरिसमा विभिन्न क्रियाकलापहरूमा भाग लिनुका साथै हामीहरूले समय निकालेर त्यहाँ रहेका विभिन्न ऐतिहासिक तथा सांस्कृतिक भवनहरू र

स्थानहरूको पनि भ्रमण तथा अवलोकन गरेका थियौँ। मैले त्यहाँ भ्रमण गरेका मुख्य मुख्य दर्शनीय स्थानहरूमा तत्कालीन फ्रान्सका राजा लुई चौधौँको निवासस्थान पनि पर्नआउँछ। उक्त ऐतिहासिक भर्साइल दरबार



फ्रान्सको राजधानी पेरिसमा रहेको तत्कालीन राजा लुई चौधौँको भर्साइल दरबार र दायाँपट्टि लुई सुतिरहेको तस्वीर, (बायाँबाट) पुरुषोत्तम प्रधान र चुमानसिंह बस्नेतका बीचमा लेखक, सन् १९९७ अक्टोबर २२

मेरो खास भ्रमणको मुख्य केन्द्र बन्न गएको थियो। फ्रान्सको राज्यक्रान्तिको समयमा उक्त दरबारबाट भाग्दैगरेका लुई चौधौँलाई त्यहाँका क्रान्तिकारीहरूले समातेर गिलेटिनमा हालेर हत्या गरेका थिए। फ्रान्सको राज्यक्रान्तिको प्रभावले नै सम्पूर्ण संसारभरि प्रजातन्त्रको प्रादुर्भाव भएको हुँदा त्यसको अवलोकन गर्नु मेरो चासोको विषय नै थियो। फ्रान्सको पेरिसमा रहेको भर्साइल दरबारका साथै अरू केही ऐतिहासिक तथा पुरातात्त्विक सङ्ग्रहालयहरूको पनि मैले अवलोकन गरेको थिएँ। तिनका अतिरिक्त त्यहाँको विश्वप्रसिद्ध दर्शनीय स्थल आइफिल्ड टावरमा पनि मैले चढेर पेरिस शहरको सम्पूर्णरूपमा अवलोकन गरेको थिएँ। त्यहाँको प्रसिद्ध नोत्रेदम प्राचीन चर्चका साथै अरू पनि धार्मिक स्थलहरूको मैले भ्रमण गरेको थिएँ। मेरो त्यहाँ बसाइ अत्यन्त छोटो समयको भएको हुँदा मैले त्यहाँका प्रसिद्ध पुरातात्त्विक सङ्ग्रहालय र कलासङ्ग्रहालयहको भने अवलोकन गर्नपाएको थिइन। त्यो धोकोलाई मनमै राखेर मैले त्यहाँको भ्रमण समाप्त



पेरिसको एउटा सङ्ग्रहालय भवन र विश्वप्रसिद्ध आइफिल टावर अगाडि लेखक

गर्नुपरेको थियो । छोटै समयमा भए पनि मैले पेरिस शहरको बीच छातीबाट बगेको प्रसिद्ध सीन नदीको किनारै किनार गाडीबाट यात्रा गरेर पेरिसका महत्त्वपूर्ण क्षेत्रहरूको सरसरती अवलोकन गरेको थिएँ । खास गरेर त्यहाँका पुराना कलात्मक भवनहरू, त्यहाँका नवनिर्मित आधुनिक भवनहरू र विशाल मार्गहरूको पनि मैले अवलोकन गर्ने मौका पाएको थिएँ । पेरिसका सुन्दर भवनहरूमा फ्रान्सको आफ्नै प्रकारको सुन्दर तथा रमणीय वास्तुकला रहेछ । पेरिस शहरभित्र प्रवेश गर्ने ऐतिहासिक मूलद्वार अत्यन्त भव्य र रमणीय छ ।


पेरिसको मूल प्रवेशद्वार अगाडि र त्यसैसँग जोडिएको विशाल राजमार्गका छेउमा लेखक, १९९७ अक्टोबर २३

त्यसरी मेरो छोटो समयको पेरिसको बसाईको समयमा त्यहाँ रहेका तत्कालीन नेपाली राजदूत श्रीकेशव झाले मलाई अत्यन्त स्नेह र सम्मान दिनुभएको थियो । उहाँका साथै पेरिसको नेपाली राजदूतावासमा कार्यरत अरू कूटनीतिक राष्ट्रसेवकहरूले पनि मलाई ठूलो सहयोग पुऱ्याउनुभएको थियो ।

फ्रान्सको प्रशासनिक इतिहासमा 'The Shadow of Napoleon walks every Corner and nook of France' भन्ने भनाइलाई त्यहाँ मैले महसूस गरेको थिएँ । नेपोलियनका घोडाको टापको आवाज अझै पनि फ्रान्सका सडकहरूमा प्रतिध्वनित भइरहेको जस्तो मलाई लागेको थियो । पेरिसका फराकिला तथा सधैँ पानीले पखालिएर स्वच्छ पारिएका राजमार्गहरूका दुवैतर्फ तरुणतपसीझैँ पङ्क्तिबद्धरूपमा मौन खडा वृक्षहरूमा अक्टोबर महिनाका अन्तिम दिनहरूका चिन्हहरू बिस्तारै प्रकट हुनलागेका देखिन्थे । निकट भविष्यमा नै आउन लागेको असह्य चिसो शिशिर ऋतुको स्वागतका लागि वृक्षहरू आफ्ना पुराना पातहरू बरबरती वर्षाएर प्रतीक्षा गरेर उभिएका जस्ता लाग्दथे । आउने दुर्दिनका त्रासले बगैंचाका सुन्दर फूलहरू बिस्तारै म्लान हुँदै गएका थिए । मैले पेरिसका सडकहरूमा यिनै कुराहरूको अनुभूति गरेको थिएँ ।


पेरिसमा रहेको नेपाली राजदूतावासमा तत्कालीन राजदूत केशव झा बीचमा, दायाँपट्टि लेखक र बायाँपट्टि चुमानसिंह, सन् १९९७ अक्टोबर २३

उक्त अधिवेशनमा मैले पूरै एक महिनाको समयसम्म भाग लिनुपर्दथ्यो तर मैले तुरुन्तै काठमाडौं फर्किएर अष्ट्रेलियाको भ्रमणमा जानुपर्ने भएको हुँदा बाँकी अधिवेशनमा नेपालका तर्फबाट प्रतिनिधित्व गर्न मसँग गएका सहसचिव श्रीचुमान सिंह बस्नेतलाई कार्यभार दिएर म मिति २०५४ साल कार्तिक ७ गते तदनुसार सन् १९९७ अक्टोबर २३ तारिखका दिन बिहान फ्रान्सको राजधानी पेरिसको चार्लस् डेगाल अन्तर्राष्ट्रिय विमानस्थलबाट फ्रेन्चएयरलाइन्सको हवाइजहाज चढेर जर्मनीको अन्तर्राष्ट्रिय विमानस्थल फ्र्याङ्कफर्ट फर्किएको थिएँ। त्यहाँबाट अपराह्न इण्डियन एयरलाइन्सको जम्बोजेटबाट भारतको राजधानी नयाँ दिल्लीको इन्दिरागान्धी अन्तर्राष्ट्रिय विमानस्थलमा रातको १ बजे म उत्रिएको थिएँ। त्यहीँ नजिकै रहेको होटेलमा रात बिताएर २०५४ साल कार्तिक २ गते तदनुसार सन् १९९७ अक्टोबर २४ तारिखका दिन अपराह्न नेपाली हवाइजहाजद्वारा म काठमाडौं आइपुगेको थिएँ।

उपर्युक्त अनुसार फ्रान्सको राजधानी पेरिसमा भएको युनेस्कोको २९ औं अधिवेशनमा भाग लिन म फ्रान्सतर्फ जाँदा शिक्षामन्त्रालयको समेत काम प्रधानमान्त्री श्रीसूर्यबहादुर थापाले नै हेरिरहनु भएको थियो। म फ्रान्सबाट फर्किएर कार्तिक ९ गते मन्त्रालयमा हाजिर हुन जाँदा शिक्षामन्त्रालयमा श्रीअर्जुननरसिंह के.सी. शिक्षामन्त्री भएर आइसक्नु भएको रहेछ। मन्त्रालयमा गएर मैले मन्त्रीसँग भेटघाट गरेर आफ्नो सबै कुरा बताएको थिएँ। अर्को दिन कार्तिक १० गते तदनुसार सन् १९९७ अक्टोबर २७ तारिखका दिन मैले अष्ट्रेलियातर्फ हिंड्नुपर्ने भएको हुँदा मन्त्रालयमा मैले गर्नुपर्ने सबै कामकुराहरू समाप्त गरेको थिएँ। मसँग यात्रामा जाने त्रिभुवनविश्वविद्यालय अन्तर्गतका शिक्षासंकायका डीन डा. श्रीसर्वज्ञभक्त मल्ल र मन्त्रालयका उपसचिव श्रीभीमलाल गुरुङसँग समेत भेटघाट गरेर मैले आवश्यक पर्ने सबै कागजपत्रहरूसमेत साथमा लिएको थिएँ। उक्त यात्रामा हामीहरूलाई चाहिने विदेशी मुद्रासमेतको व्यवस्था डेनिस सहायता नियोगले मिलाएको थियो।



# अष्ट्रेलियामा

२०५४ साल  कार्तिक १० गते तदनुसार सन् १९९७ अक्टोबर २७ तारिखका दिन हामीहरू अष्ट्रेलियातर्फ जाने क्रममा काठमाडौंबाट नेपाली जहाजको नियमित उडानबाट हङ्कङतर्फ उडेका थियौँ। अष्ट्रेलियाको प्रथम पटक भ्रमण गर्न लागेकोमा म अत्यन्त उत्सुक थिएँ। भूपरिवेष्टित हिमाली सानू अविकसित राष्ट्र नेपालबाट गएर मैले चारैतिर समुद्रले घेरिएको विशाल तथा विकसित अष्ट्रेलिया महादेशको भ्रमण गर्नपाउनु मेरा लागि सौभाग्यको कुरा थियो। नेपालभन्दा भिन्नै हावापानी भएको अष्ट्रेलिया देश भूमध्य रेखाको पारि पट्टि पर्दछ। त्यस राष्ट्रलाई पृथ्वीको अर्को पट्टि रहेको महादेश भनिन्छ। नेपालमा जाडो हुँदा अष्ट्रेलियामा गर्मी हुन्छ अर्थात् नेपालमा शिशिरऋतु हुँदा अष्ट्रेलियमा ग्रीष्मऋतु हुन्छ। नेपालमा घाम लागेर घमाइलो भएको समयमा अष्ट्रेलियामा वर्षा ऋतुले छुन्छ। अष्ट्रेलिया महादेशमा संसारका अरू राष्ट्रहरूमा नपाइने चराचुरुङ्गी र वन्यजन्तुहरू पाइन्छन्। त्यस प्रकारले हाम्रो देशको भन्दा भिन्नै हावापानी र जीवजन्तु भएको देशमा जान पाउँदा मलाई कल्पनालोकमा जान लागिरहेको जस्तो अनुभव भइरहेको थियो।

कार्तिक १० गते काठमाडौंबाट उडेपछि दिनको अपराह्नमा हामीहरू हङ्कङको पुरानू विमानस्थलमा उत्रिएर दिनभरिजसो नै अष्ट्रेलिया जाने उडानको प्रतीक्षामा बसेका थियौँ। अष्ट्रेलियाली दूतावासबाट हामीले भिसा लगायतका आवश्यक पर्ने सबै कागजात प्राप्त गरिसकेका थियौँ तापनि हङ्कङ विमानस्थलमा पुगेपछि त्यहाँको अध्यागमन विभागले हाम्रा सम्बन्धमा फेरि अष्ट्रेलियाको सरकारसँग सोधेर अष्ट्रेलिया पठाउने अनुमति मागेको थियो। त्यसो गर्दागर्दै साँझ झपक्कै परिसकेपछि हामीहरूलाई अष्ट्रेलिया जाने अनुमति अष्ट्रेलियाबाट प्राप्त भएको थियो।

रात परेपछि अष्ट्रेलियाको एयरलाइन्स क्वान्टास्को ठूलो २ तले जम्बोजेट चढेर अष्ट्रेलियाको सिड्नीतिर हामीहरू उडेका थियौँ। जेटमा

चढेको केही बेरपछि क्वान्टास्‌ले पेयपदार्थका साथै स्वादिष्ट खानासमेत हामीहरूलाई पस्किएको थियो । अरू मित्रहरूले यथेच्छ पेय पदार्थका साथै खाना खाएर सुतेका थिए । म भने सामान्य शाकाहरी खाना खाएर यात्राविवरण लेख्नलागेको थिएँ । यात्राविवरण लेखिसकेपछि मैले बत्ती निभाएर सुत्ने प्रयास गरेको थिएँ तर उक्त लामू उडानमा रातभरि उड्नुपरेको हुँदा सुत्ने जति प्रयास गर्दा पनि म कत्ति पनि निदाउन सकेको थिइन । ननिदाएरै मैले छर्लङ्ग रात काटेको थिएँ । बिहानीपख जहाजको झ्यालको पर्दा खोलेर हेर्दा पूर्वपट्टिबाट रातो घामको किरण म बसेको जहाजको सीटको ऐनामा आएर ठोक्किएको थियो । जहाजको मनिटरमा देखाइने विश्वको नक्सामा दृष्टि दिँदा हामीहरू अष्ट्रेलियाको महाद्वीपभित्र पसिसकेका रहेछौँ । जहाजको झ्यालबाट चियाएर तल जमीनतिर हेर्दा शुरुमा मैले सबै नाङ्गो मरुभूमि र बालुवामात्रै देखेको थिएँ । बिहानको सूर्यको प्रकाशमा टाढाटाढासम्म पनि बालुवा र मरुभूमिमात्रै चम्किरहेको देखिन्थ्यो । क्रमशः म चढेको जहाज मरुभूमिलाई पार गर्दै सिड्नीतर्फ बढिरहेको थियो । सिड्नी पुग्नुभन्दा पहिले फेरि झ्यालबाट तल धरतीमा हेर्दा हराभरा जङ्गल, घाँसे मैदान र खेतबारीहरू पनि देखिएका थिए । बिस्तारै मानिसहरूको वस्ती, गाउँ र नगर पनि देखिनथालेको थियो । एक छिनपछि समुद्रको छेउमा एउटा अत्यन्त सुन्दर शहर पनि देखिएको थियो । जहाज बिस्तारै आफ्नू गति घटाउँदै तल तल धर्तीतिर ओर्लँदै थियो । जहाज अवतरण गर्ने सुरसार कसेर आफ्ना फ्ल्यापहरू निकालेर डरलाग्दो दैँत्यजस्तो देखिएको थियो । जहाजले फन्को मार्दै समुद्रमा गएर फेरि एक पटक घुमेर सिड्नी शहरको एक छेउमा रहेको विमानस्थलमा आएर बिस्तारै भूमिस्पर्श गरेर अवतरण गरेको थियो ।

त्यसपछि हामीहरू हवाइजहाजबाट बाहिर उत्रिएका थियौँ, त्यहाँ रहेका अध्यागमन र अन्य कार्यालयहरूमा पुऱ्याउनुपर्ने सबै औपचारिकताहरू पूरा गरेर आफ्ना सामानहरूसमेत लिएर विमानस्थलबाट बाहिर निस्किएका थियौँ । बाहिर हामीहरूलाई स्वागत गर्न न्यू क्यासल युनिभर्सिटीका प्रा.डा. श्रीजोन शिलर पुग्नुभएको रहेछ । त्यसका साथै सिड्नीमा नै केही वर्षदेखि अध्ययन गरेर बसिरहेका मेरा कान्छा छोरा श्रीसगुनकुमार भट्टराई पनि

त्यहाँ मलाई लिन आएका थिए । प्रा.डा. श्रीजोन शिलरसँग केही वातचित गरेपछि मसँग गएका डा. मल्ल र गुरुङलाई सिलरसँग उहाँको घरमा जाने व्यवस्था मिलाएर म छोरा श्रीसगुनसँग उनको निवासस्थान सिड्नी हार्बर गएको थिएँ । केही बेर छोराका निवासस्थानमा बसेर त्यहाँ मैले छोराका साथमा हार्बर ब्रिजलाई पृष्ठभूमि बनाएर तस्वीरसमेत लिएको थिएँ । त्यसै दिन मैले न्यू क्यासलतर्फ जानुपर्ने भएको हुँदा फेरि फर्किएर सिड्नी आउँदा साथै बस्ने भनेर छोरालाई वचन दिएर म श्रीजोन शिलरका घरमा गएको थिएँ । त्यहाँबाट शिलरको कारमा हामीहरू न्यू क्यासलतिर प्रस्थान गरेका थियौँ । न्यू क्यासल जाँदाखेरि बाटामा हरियालीपूर्ण सानासाना पहाडहरूको बीचबाट मनोरम दृश्यको अवलोकन गर्दै साँझपख न्यू क्यासल शहरमा हामीहरू पुगेका थियौँ ।


सिड्नी विमानस्थलमा प्रा.डा.जोन सिलरका साथ प्रा.डा.सर्वज्ञभक्त मल्ल र लेखक


सिड्नीमा रहेको हार्बर ब्रिजका अगाडि छोरा सगुनका साथमा लेखक, सन् १९९७ अक्टोवर २८

त्यसरी समुद्रको तीरमा रहेको अत्यन्त सुन्दर न्यू क्यासल शहरमा हामीहरू पुगेपछि हाम्रा लागि व्यवस्था गरिएको एउटा छुट्टै घरमा गएर हामीहरू बसेका थियौँ। आवासमा नै खानेदेखि लिएर सबै व्यवस्था न्यू क्यासल युनिभर्सिटीले नै मिलाएको हुँदा हामीहरूलाई कुनै खालको असुविधा भएको थिएन। वास्तवमा त्यहाँ हाम्रो भ्रमणको व्यवस्था डेन्मार्क सरकारको तर्फबाट डेनिडाले नै मिलाएको थियो। प्रत्यक्षरूपमा डेनिडा त्यहाँ देखा नपरेर बाहिरीरूपमा सम्पूर्ण व्यवस्था न्यू क्यासल युनिभर्सिटीले नै मिलाएको जस्तो देखिन्थ्यो। गएका दिन राती खाना खाएर हामीहरूले आराम गरेका थियौँ। अर्को दिन बिहानै स्वल्पाहारपछि प्रा.डा. श्रीजोन शिलरका साथ हामीहरू न्यू क्यासल विश्वविद्यालय गएका थियौँ। हराभरा जङ्गलको बीचमा विशाल न्यू क्यासल युनिभर्सिटीको परिसर रहेछ। हामीहरूलाई


प्राथमिक विद्यालयका शिक्षक र विद्यार्थीहरूसँग छलफल गर्दै प्रा.डा.सर्वज्ञभक्त मल्ल र लेखक

प्रा.डा. श्रीजोन शिलरले विश्वविद्यालयका सम्बन्धित विभागहरूमा पुऱ्याएर हाम्रो परिचय गराउनुभएको थियो । त्यस दिन दिनभरि नै विश्वविद्यालयभित्र नै भेटघाटमै हामीहरू व्यस्त भएका थियौँ ।

न्यू क्यासल विश्वविद्यालयले अर्को दिन हामीहरूलाई बिहान सबेरै नै सरकारी प्राथमिक विद्यालयहरूको अध्ययनका लागि लगएको थियो । अत्यन्त सुव्यवस्थितरूपमा प्राथमिक विद्यालयहरू सञ्चालित भएका देख्दा हाम्रा देशका प्राथमिक विद्यालयहरूको पनि त्यो अवस्था कहिले प्राप्त होला भन्ने कल्पनाले मलाई छोएको थियो । अत्यन्त अनुशासित तथा नियमितरूपमा उपस्थित हुने शिक्षकहरूको सुयोग्य शिक्षणमा त्यहाँका कलिला विद्यार्थीहरू अत्यन्त अनुशासनपूर्वक पढिरहेका देखिन्थे । नेपालका सरकारी विद्यालयको जस्तो छाडापन र अनुशासनहीनता त्यहाँका सरकारी विद्यालयहरूमा सपनामा पनि शोच्न सकिँदैनथ्यो । दिनभरि नै विद्यालयको परिक्रमा गरेर हामीहरू बेलुका आफ्नू निवासमा फर्किएका थियौँ । पातलो जनसङ्ख्या भएको त्यो नगरी जता हेऱ्यो उतै हरियाली र मनोरम देखिन्थ्यो । जताततै मनोरम बगैँचा र वाटिकाहरू देखिने त्यो शहर मानौँ कल्पनाको शहरजस्तो लाग्दथ्यो ।

त्यसरी नियमितरूपमा हामीहरू न्यू क्यासल युनिभर्सिटीमा जानेगर्दथ्यौँ र विभिन्न सम्बन्धित विभागहरूमा गएर नेपालमा आवश्यक पर्ने शिक्षानीतिका साथै शिक्षासम्बन्धी कार्यक्रमको बारेमा छलफल गर्दथ्यौँ र जानकारीसमेत लिन्थ्यौँ । त्यस विश्वविद्यालयमा रहुन्जेल हामीहरूले धेरैजसो सैद्धान्तिक विषयमा नै त्यहाँका प्राध्यापकहरू तथा विशेषज्ञहरूसँग छलफल गरेका थियौँभने केही मात्रामा अध्यापन गरिरहेका कक्षाहरूमा पनि गएर त्यहाँको अध्यापनको निरीक्षण गरेका थियौँ । अत्यन्त उच्च तहको अध्ययन, अध्यापन र साधनसमेतले सम्पन्न भएको त्यस विश्वविद्यालयमा अत्यन्त क्रियाशील विद्यार्थीहरू अध्ययन गरिरहेका हामीहरूले देखेका थियौँ । हामीहरूले एक हप्ताको न्यू क्यासल युनिभर्सिटीको अध्ययन भ्रमणको क्रममा नै एक दिन ट्रेनबाट सिड्नी गएर सिड्नी शहरको पनि



न्यू क्यासल युनिभर्सिटीका प्राध्यापकहरूसँग भेटघाट गर्दै लेखक

अवलोकन गरेका थियौँ।

त्यसप्रकार सिड्नीमा हामीहरूले त्यस बेला हुनलागेको ओलम्पिक खेलकूदको निर्माणाधीन रङ्गशालाका साथै विभिन्न खेलकूदका स्थानहरू पनि हेरेका थियौँ।


न्यू क्यासल युनिभर्सिटीका प्राध्यापकहरूसँग कक्षामा छलफल गर्दै मल्ल र लेखक

विश्वप्रसिद्ध सिड्नीको अपेरा घरको अवलोकनका साथै सिड्नीटावर पनि हामीहरू चढेका थियौँ। सिड्नीटावर चढेर माथिबाट हेर्दा सिड्नीशहर कल्पनाको संसारजस्तो अत्यन्त मनोरम देखिन्थ्यो। समुद्रका बीचबीचमा टापुहरू, ती टापुहरूलाई एक आपसमा जोड्न बनाइएका ठूलाठूला सुन्दर पुलहरू र टापुहरूमा बनेका सुन्दर आधुनिक भवनहरू देखिन्थे। त्यसरी समुद्र, टापु, हरियाली र अत्यन्त सुन्दर आधुनिक भवनहरूको सम्मिश्रण भएको त्यो मनोहर भूदृश्यलाई सिड्नीटावरको उच्च बिन्दुबाट हेर्दा मानौँ सप्तरङ्गी इन्द्रेणीको मनोरम दृश्यजस्तो मैले देखेको थिएँ। सिड्नीटावरको माथिल्लो तलाको कक्षबाट घुमेर हेर्दा जता हेऱ्यो उतै रमाइलैरमाइलो देखिन्थ्यो। सिड्नी शहरको भ्रमण गर्ने सन्दर्भमा ठूलाठूला सडकका दुवै किनारामा सुन्दर फूलबारीहरू र अत्यन्त मनोरम भवनहरू देखिन्थे। कतै कतै ठूलाठूला चर्चहरू देखिन्थेभने कतै मुसलमानका मस्जिदहरू पनि देखिन्थे। त्यसैगरी जैन र बौद्धका साथसाथै साईबाबाका उपासनाकेन्द्रहरू पनि देखिन्थे। मैले घुमेर हेर्दा खास वैदिक सनातन हिन्दुहरूका मन्दिरहरू भने कहीँ पनि देखेको थिइन। सिड्नी शहरको बाहिरतर्फ गाउँमा गएर हेर्दा साना साना राता टायलले छाएका वरिपरि फूलबारी भएका चिटिक्क परेका राम्रा राम्रा घरहरू हरिया जङ्गलका बीचबीचमा देखिन्थे।


सिड्नी टावरका अगाडि मल्लका साथ लेखक

बेलायतमा जस्तै छुट्टाछुट्टै बस्न चाहने अष्ट्रेलियावासीहरू पनि एकान्त तथा शान्तिप्रिय नै देखिन्थे । वास्तवमा त्यहाँ बस्ने धेरैजसो वासिन्दाहरू बेलायतबाट धेरै समय अघि विभिन्न कारणले बसाइँ सरेका बेलायतका नै नागरिकहरू भएको कुरा इतिहासबाट थाहा हुन्छ ।

बेलायती मानिसहरू त्यहाँ जानुभन्दा पहिले अष्ट्रेलिया महादेशमा त्यहाँका आदिवासीदेखि बाहेक बाहिरका कोही मानिसहरू थिएनन् । अष्ट्रेलियाका आदिवासीहरूलाई त्यहाँ याबोरिजन भनिंदोरहेछ । बेलायतका गोराहरू अष्ट्रेलियामा गएर बसोवास गर्नथालेपछि बिस्तारै त्यो राष्ट्र बेलायतको उपनिवेशमा परिणत भएको थियो । बेलायतले आफ्नू शासन अष्ट्रेलियामा गर्नथालेपछि त्यहाँका आदिवासीहरू र जङ्गली जनावरहरू पनि बिस्तारै लोप हुँदैगएका रहेछन् । हाल केही मात्रामा जङ्गलका छेउछाउमा मात्र उनीहरूलाई देख्न पाइने रहेछ । हाम्रो छोटो अष्ट्रेलियाको बसाइमा त्यहाँका आदिवासी याबोरिजनहरूलाई हामीहरूले देख्न पाएका थिएनौं । उनीहरूको बारेमा केवल चर्चामात्रै सुनेर हामीहरूले चित्त बुझाउनु परेको थियो ।

त्यसरी सिड्नीशहरको परिभ्रमण सकेर त्यसै दिन फेरि हामीहरू न्यू क्यासल नै फर्किएका थियौँ । सो भ्रमणमा छोरा सगुन मेरा साथमा नै थिए । न्यू क्यासल युनिभर्सिटी फर्किएपछि सम्बन्धित प्राध्यापक र प्राज्ञहरूसँगसमेत अन्तिम कार्यक्रममा भाग लिएर बिदावारी हुँदै हामीहरू काठमाडौं फर्किने सन्दर्भमा फेरि सिड्नी नै गएका थियौँ । सिड्नीमा गएर हामीहरू डार्लिङ हार्बरमा नोभोटेल भन्ने भव्य होटेलमा बसेका थियौँ । त्यस दिन दिनभरि नै सिड्नीका विभिन्न दर्शनीय स्थलका साथै समुद्रको किनारमा गएर समुद्रको दृश्य हामीहरूले हेरेका थियौँ । त्यस साँझ डार्लिङ हार्बर समुद्रक्षेत्रमा रहेको एकोरियमका साथै अन्य दर्शनीय स्थलहरूको पनि हामीहरूले भ्रमण गरेका थियौँ । त्यस क्षेत्रमा साँझको बेला घुम्न आउने मानिसहरूको



न्यू क्यासल युनिभर्सिटीका प्राध्यापकहरूसँग बिदाबारी हुँदै लेखकका साथ डा.मल्ल र गुरुङ

घुइँचोले गर्दा शहर अत्यन्त कोलाहलपूर्ण हुँदोरहेछ । त्यस रात त्यहाँ हामीहरूले चाइनाटाउनको रेष्टुराँमा खाना खाएका थियौँ ।


अष्ट्रेलियाको समुद्रको किनारामा गएर समुद्रको जलबाट सेचन गर्दै लेखक, सन् १९९७ नोभेम्बर ७

त्यसरी अष्ट्रेलियाको न्यू क्यासल विश्वविद्यालयको अध्ययन भ्रमण समाप्त गरेर सन् १९९७ अक्टोवर ८ तारिखका दिन बिहान सबेरै हङ्कङतर्फ प्रस्थान गर्ने सन्दर्भमा हामीहरू सिड्नीको अन्तर्राष्ट्रिय विमानस्थलमा गएका थियौँ । सिड्नीको भ्रमण गर्दा सधैँ साथैमा रहेका छोरा श्रीसगुन, प्रा.डा. श्रीजोन शिलर र


सिड्नीको विमानस्थलमा हामीहरूलाई बिदा गर्न आएका प्रा.डा.सिलर, श्रीमती सिलर र छोरा सगुन, नोभेम्बर ८

उनकी पत्नीसमेत हामीहरूलाई बिदा गर्न विमानस्थलमा आएका थिए । त्यहाँबाट बिदा भएर हामीहरू हङ्कङतर्फ उडेका थियौँ । अष्ट्रेलियाबाट फर्किंदा पनि दिन र रातभरि नै हामीहरू उडेर रातमा हङ्कङ अन्तर्राष्ट्रिय विमानस्थलमा अक्टोवर ९ तारिखको रातमा उत्रिएका थियौँ । दुई दिन हङ्कङको चुङ्किङमेन्सन भन्ने ठाउँमा हामीहरू बसेका थियौँ ।

उपर्युक्त अनुसार दुई हप्ताको अष्ट्रेलियाको भ्रमण समाप्त गरेर हामीहरू २०५४ साल कार्तिक २४ गते तदनुसार सन् १९९७ नोभेम्बर १० तारिखका दिन हङ्कङबाट नेपाली हवाइजहाज चढेर काठमाडौं फर्किएका थियौँ ।

त्यसरी अष्ट्रेलियाको भ्रमण समाप्त गरेपछि म फेरि शिक्षा मन्त्रालयमै

उपस्थित भएर आफ्नू काममा लागेको थिएँ । त्यस बेला शिक्षामन्त्रालयमा मन्त्री श्रीअर्जुन नरसिंह के.सी हुनुभएको हुँदा मलाई काम गर्न सजिलो थियो । उहाँ विद्यार्थी अवस्थादेखि नै मेरा मित्र हुनुभएका हुँदा उहाँको मसँग मित्रवत् व्यवहार थियो । मन्त्रालयको काममा कुनै खालको बाधाव्यवधान उहाँबाट हुँदैनथ्यो । जे काम गर्नुपर्दा पनि अत्यन्त सौहार्दका साथ सल्लाहले गरिन्थ्यो । मन्त्रीले सबै अधिकार विश्वासका साथ मलाई नै प्रत्यायोजन गर्नुभएको थियो । उहाँ अत्यन्त उदार र व्यापक जनसम्पर्क भएका व्यक्ति हुनुहुन्थ्यो । उहाँका भाइहरू धेरै जना भएका र मन्त्रीभन्दा पनि मन्त्रीका भाइहरूको आदेश पालना गर्नुपर्ने भन्ने बाहिरबाट मैले सुन्नेगर्थें तापनि मलाई भने मन्त्रीका कुनै पनि भाइ र नातागोताहरूले समेत दुःख दिएका थिएनन् । मन्त्रीका भाइहरू सबैले मलाई चिन्दथे र दाइ भनेर सम्बोधन गर्नेगरेका हुँदा पनि मलाई कुनै खालको काममा अप्ठेरो पर्न गएको थिएन । उनीहरू दाइको साथी भनेर मलाई अत्यन्त आदर गर्दथे ।

नुवाकोट जिल्लाका काङ्ग्रेसका डा. श्रीरामशरण महत र श्रीअर्जुननर्सिंह के.सी. समेत दुवैजना जल्दाबल्दा नेताहरू त्यस बेला मन्त्रीको पदमा बहाल हुनुहुन्थ्यो । उहाँहरूका बीचमा मेलमिलाप नभएको हुँदा श्रीअर्जुननर्सिंह के.सी.को मान्छे भन्ने ठानेर मन्त्री श्रीरामशरण महत मलाई शङ्काको दृष्टिले हेर्नुहुन्थ्यो । म दुवैथरीलाई उत्तिकै आदर गर्दथें । म कसैको पनि मानिस नभएर सरकारको सचिव भएको हुँदा भरसक कानून बमोजिम काम गरेर सबैको चित्त बुझाउन चाहन्थें र म आफ्नू उद्देश्यमा सफल पनि भएको थिएँ ।



# पाकिस्तानमा

२०५३ साल चैत्र २४ गते तदनुसार सन् १९९७ अप्रिल ५ तारिखका दिन संयुक्तराष्ट्रसङ्घद्वारा पाकिस्तानको इस्लामावादमा आयोजना गरिएको गरीबीनिवारणसम्बन्धी सम्मेलनमा भाग लिन समाजकल्याण मन्त्रालयकी सहसचिव श्रीमती उर्मिला श्रेष्ठ र परराष्ट्रमन्त्रालयका उपसचिव श्रीदीनेश भट्टराईलाई साथमा लिएर पाकिस्तानी हवाइजहाज चढेर लाहोर हुँदै इस्लामावाद म गएको थिएँ। त्यहाँ पुगेपछि पाकिस्तानी अधिकारीहरूले हामीहरूलाई एउटा होटेलमा लगेर राखेका थिए। इस्लामावादमा रहेको नेपाली राजदूतावासका प्रथम सचिव श्रीसुमनले हाम्रो सत्कार गरेका थिए। दुई दिने गरीबीनिवारणसम्बन्धी सम्मेलनमा भाग लिनुका साथै पाकिस्तानका दर्शनीय तथा ऐतिहासिक स्थानहरूको पनि हामीहरूले भ्रमण गरेका थियौँ। इस्लामावादका केही मस्जिदहरूमा पनि हामीहरू गएका थियौँ।

त्यसरी गरिएको भ्रमणका सन्दर्भमा इस्लामावादको वरिपरि हामीहरूलाई घुमाइएको थियो। त्यसरी घुम्दा मलाई त्यहाँ अझै पनि हाम्रा पुर्खाहरूले उच्चारण गरेको वेदध्वनिको गुञ्जन चारैतिर गुञ्जिरहेको जस्तो लागेको थियो। त्यही क्षेत्रमा हाम्रा पूर्वज ऋषिहरूले वेदमन्त्रहरू देखेका थिए। त्यही ठाउँमा बसेर हाम्रा पुर्खाहरूले उपनिषद्को रचना गरेका थिए। त्यही पवित्र धर्तीमा बसेर हाम्रा पुर्खाहरूले रामायण, महाभारत, पुराण र अरू धर्मशास्त्रहरूको पनि प्रणयन गरेका थिए। ती क्षेत्रहरूमा हिन्दूहरूका पवित्र मन्दिर र देवालयहरू पनि थिए। त्यही पवित्र भूमिमा गाईको पूजा हुन्थ्यो र बरपीपलका चौतारीहरू निर्माण गरिन्थे। तिनै क्षेत्रहरूमा हिन्दूहरूका पवित्र सिन्धु लगायतका पाँच नदीहरू थिए। त्यही पवित्र भूमिमा हाल टक्सिला भन्ने तक्षशिला थियो, जहाँ हाम्रा प्राचीन ऋषिमुनिहरू तपस्या गरेर अहं ब्रह्मास्मि भन्दथे। जुन क्षेत्रमा सधैँ ॐकारको पवित्र नाद गुञ्जायमान भइरहन्थ्यो। जुन धर्तीबाट “वसुधैव कुटुम्बकम्” र “सहनाववतु” जस्ता विश्वजनीन उदात्त भावनाहरूको उद्घोष हुनेगर्दथ्यो।

जहाँका मन्दिर र देवालयहरूमा सधैँ घण्ट र शङ्खका नादहरू गुञ्जन्थे। आज आएर त्यही धर्तीका ती पवित्र मन्दिरहरू खण्डहरमा परिणत भएका छन् भने केही फलामका बारभित्र मौन अवस्थामा झोक्राएर बसिरहेका छन्। आज त्यहाँ जतातत्तै अग्लाअग्ला मस्जिदका धरहराहरूबाट ठूलाठूला आवाजमा लाउड्स्पिकरहरू अल्ला हो अकबर भनेर कराइरहेका सुनिन्छन् भने छेउमै जीर्णशीर्णरूपमा रहेका मन्दिहरू उँधो मुण्टो लगाएर झोक्राइरहेका जस्ता देखिन्छन्। विश्ववन्दनीया गौमाताहरू आज त्यस धर्तीमा निरीह बनेर विधर्मीका बधशालाहरूमा प्राणविसर्जन गरिरहेका छन्। त्यहाँका हाम्रा प्राचीन नदी, तलाउ र पोखरीहरू आज दीनहीन अवस्थामा विधर्मीका पापका पोकाहरू बोकेर सुसाइरहेका छन्।

यस्तै यस्तै हृदयविदारक दृश्यहरू संझँदै र हेर्दै म २०५३ साल चैत्र २७ गते तदनुसार सन् १९९७ एप्रिल ८ तारिखका दिन इस्लामावादबाट लाहोरहुँदै काठमाडौं फर्किएको थिएँ। पाकिस्तानको भ्रमणको सन्दर्भमा ममा उत्पन्न भएको अनुभूतिलाई मैले कविताका रूपमा अभिव्यक्त गरेको थिएँ। सो कविता मेरो यात्रावृत्तान्त 'यात्रैयात्रा २०५८' मा प्रकाशित भइसकेको छ। त्यसका केही पङ्क्तिहरू तल दिएको छु। जस्तैः–

हाम्रो साझा उही धर्ती भिन्नै लाग्छ कताकता।
सधैँभरि चिने जस्ता अनुहार जतातता॥
माटामा छ उही गन्ध आफ्नै जस्तो जहाँतहाँ।
समष्टिमा उही देख्छु आफ्नैपन यहाँ उहाँ॥
सोधौँ सोधौँ यहाँ लाग्छ भीड भित्र कसैसँग।
धेरैका चेहरा मिल्छन् आफ्ना नै चेहरासँग॥
पवित्र भूमिमा देख्छु एकतर्फी ढलीमली।
पूजा हुन्थे जहाँ गाई बन्दैछन् आज ती बलि॥
कस्तो हो धर्म यो तिम्रो अरूको धर्म छेक्दछौ।
अरूको धर्म नासेर आफ्नो उन्नति देख्दछौ॥
स्वत्व सर्वस्व नासेर पारेछौ हिन्दू निर्बल।
देखिन्छ पाकमा बग्दो हिन्दूको आँसुको भल॥

गान्धार अब कन्धार बनेको छ यतै कतै ।
पुराना हिन्दूका स्थान भ्रष्ट देख्छु जताततै ।।
टक्सिला हुन गो ऐले तक्षशिला कता गयो ।
पवित्र हिन्दुको सिन्धु हराए सरहै भयो ।।
पाँचोटा नदीको क्षेत्र दुर्गम्य सरि भैसके ।
हिन्दूका स्थल हुन् सारा अरूका हात गै सके ।।
पुर्खाको पुण्य धर्ती यो बिरानो झैँ भयो सब ।
आफ्नू धाम गुमाएर गए द्यौता कहाँ अब ।।
ईशका धाम हुन् सारा दुवै मन्दिर मस्जिद ।
तिमी मन्दिर भत्काई गर्छौ निर्माण मस्जिद ।।
यो कस्तो धर्म हो तिम्रो अरूका आँसु झार्दछौ ।
निकृष्ट स्वार्थका लागि आफ्ना नै भाइ मार्दछौ ।।
हिन्दूले गर्दछन् जे जे उल्टो नै सब गर्दछौ ।
धर्ममा अति अन्धा छौ मार्दछौ अनि मर्दछौ ।
मौन छन् हिन्दूका स्थान उच्च मस्जिद बोल्दछ ।
कस्तो अन्याय हो यस्तो साह्रै नै मुटु पोल्दछ ।।
नमाज पढ्दछौ नित्य अल्ला भन्दै कराउँछौ ।
अरूको धर्म नासेर आफ्नो धर्म बढाउँछौ ।।
धर्मको मर्म हो सेवा सेवाले धर्म बढ्दछ ।
बुझ्दैनौ धर्मको मर्म कसरी धर्म बढ्दछ ।।
समत्वभाव हो धर्म धर्मले अघि सर्दछौ ।
अरूको धर्म नासेर के तिमी धर्म गर्दछौ ।।
सम्पूर्ण धर्मको सार गर्नु हो सबको भलो ।
जहाँबाट यहाँ आयौँ जाने हो एउटै थलो ।।

शिक्षामन्त्रालयमा प्रथम पटक सचिव भएर काम गर्दा तत्कालीन शिक्षामन्त्री श्रीअर्जुननरसिंह के.सी.सँग अत्यन्त मित्रताका साथ मैले काम गर्ने मौका पाएको थिएँ । सरकारी जागिरको सन्दर्भमा सोही अवधिमा नै मलाई सबभन्दा बढी सन्तुष्टि प्राप्त भएको थियो । कुनै कुरामा पनि मतभिन्नता र

राय बझाउनुपर्ने स्थिति अरू मन्त्रीहरूसँग काम गर्दाको जस्तो त्यहाँ भएको थिएन। त्यसैकारणले नै मलाई शिक्षामन्त्रालयमा काम गर्दा अत्यन्त सन्तुष्टि मिलेको थियो। शिक्षामन्त्रालयमा मेरा सहयोगीका रूपमा काम गर्ने अधिकृतहरू र अन्य राष्ट्रसेवकहरूले पनि मलाई अत्यन्त सहयोग गरेका थिए। शिक्षामन्त्रालयको कार्यक्षेत्र अत्यन्त विस्तृत भएको हुँदा सधैँ नै मैले व्यस्त रहनु परेको थियो। लाखौँलाखको सङ्ख्यामा विश्वविद्यालयदेखि लिएर प्राथमिक विद्यालयहरूसम्ममा काम गर्ने विद्वान् प्राध्यापकहरू र शिक्षकहरूसँग समेत मैले काम गर्नु पर्दथ्यो। शिक्षामन्त्रालय अन्तर्गत काम गर्ने जनशक्ति अरू मन्त्रालयहरूमा भन्दा बढी संवेदनशील, प्राज्ञिक र शिक्षित भएको हुँदा कुनै पनि नीतिनिर्माण गर्दा र निर्णय गर्दासमेत अत्यन्त होस पुऱ्याउनुपर्ने हुन्थ्यो। सामान्य त्रुटिबाट पनि ठूलो प्रतिक्रिया उत्पन्न हुनसक्ने हुँदा त्यसतर्फ सदासर्वदा चनाखो भएर मैले काम गर्नुपर्ने हुन्थ्यो। शिक्षासचिव विभिन्न विश्वविद्यालयहरूको सिनेटको पदेन सदस्य हुने र विश्वविद्यालयहरूको नीतिनिर्माणमा पनि सहभागी हुनुपर्नेहुँदा मैले सदासर्वदा सबैतिरको जानकारी र ज्ञानसमेत राख्नुपर्ने हुन्थ्यो। प्राज्ञहरूसँग सधैँ अन्तरक्रिया गर्नुपर्नेहुँदा मैले विभिन्न विषयमा अध्ययन गरेर सधैँ तयारी अवस्थामा रहनु पर्दथ्यो। विभिन्न विश्वविद्यालयहरूमा बारम्बार दीक्षान्त समारोहहरू भइरहने र तिनमा शिक्षासचिवको उपस्थिति अनिवार्य मानिने हुँदा पनि मैले सधैँ व्यस्त भइरहनु पर्दथ्यो। विश्वविद्यालयहरूमध्ये कुनैमा राजा कुलपति हुने र कुनैमा



महेन्द्र संस्कृत विश्वविद्यालय दाङमा भएको दीक्षान्त समारोहका अवसरमा कुलपति श्री ५ वीरेन्द्र र प्रधानमन्त्री श्रीसूर्यबहादुर थापाका पछाडि बीचमा लेखक, २०५४ साल मंसिर १४ गते।






महेन्द्र संस्कृत विश्वविद्यालय दाङमा र त्रिभुवन विश्वविद्यालय कीर्तिपुरमा भएको दीक्षान्त समारोहमा लेखक

प्रधानमन्त्री कुलपति हुने तत्कालीन कानूनी व्यवस्था थियो। त्यसै कारण शिक्षासचिवले सबै कुरामा ध्यान दिएर काम गर्नुपर्ने हुनआउँदथ्यो। त्यसका अतिरिक्त शिक्षामन्त्रालय अन्तर्गतका विभिन्न विभाग, कार्यालय र विश्वविद्यालय अनुदान आयोगसमेतको बैठकमा धेरै जसोमा अध्यक्ष भएर काम गर्नु पर्दथ्यो भने केहीमा सदस्य भएर मैले काम गर्नुपर्दथ्यो।



त्रि.वि.वि. कीर्तिपुरको २५ औँ दीक्षान्त समारोहको परेडमा अरू उपकुलपतिहरू र त्रि.वि.सभाका सदस्यहरूका साथ लेखक

उच्चमाध्यमिक शिक्षापरिषद्मा शिक्षामन्त्री पदेन अध्यक्ष र शिक्षासचिव पदेन सदस्य हुने व्यवस्था भएको हुँदा दश जोड दुई सम्बन्धी शैक्षिक गतिविधिमा पनि मैले सधैँ संलग्न भइरहनु पर्ने हुन्थ्यो।






दायाँबाट पछाडि उभिनेमा क्रमशः ठूलो छोरा सञ्जीवकुमार भट्टराई, ठूली बुहारी सुषमा भट्टराई, सानी बुहारी सुस्मिता भट्टराई, सानो छोरा सतीशकुमार भट्टराई, कान्छी बुहारी पूजा भट्टराई, कान्छो छोरो सगुनकुमार भट्टराईका साथ अगाडिपट्टि बस्ने पिता शरदकुमार भट्टराई र माता इन्दिरा भट्टराई

# उज्बेकिस्तानमा

२०५४ साल मङ्सिर २० गते तदनुसार सन् १९९७ डिसेम्बर ६ तारिखका दिन मध्यएशियामा रहेको उज्बेकिस्तानको राजधानी तासकन्दमा युनेस्कोले आयोजना गरेको शिक्षा सबैका लागि भन्ने विश्वसम्मेलनमा भाग लिन मैले जानुपरेको थियो । उक्त राष्ट्र धेरै वर्षसम्म सोभियत सङ्घको अधीनमा रहेको थियो । सोभियतसङ्घको पतनपछि उज्बेकिस्तान स्वतन्त्र भएको थियो । सोभियतसङ्घको विश्वमा नाम चलेको बेला म सोभियतसङ्घको भ्रमण गर्न चाहन्थेँ । वास्तवमा सोभियतसङ्घमा साम्यवादी शासन व्यवस्था स्थापना भएपछि संसारको आधा भागलाई आफ्नू प्रभावक्षेत्रमा राखेर संसारभरि नै उक्त राष्ट्रले शक्तिको प्रदर्शन गरेको थियो । त्यस बेला पुँजीवादी प्रजातान्त्रिक राष्ट्रहरूको नेतृत्व संयुक्तराज्य अमेरिकाले गरेको थियो भने साम्यवादी राष्ट्रहरूको नेतृत्व सोभियतसङ्घले गरेको थियो । दोस्रो विश्वयुद्ध पछि एशिया, अफ्रिका, ल्याटिन अमेरिका र थुप्रै अरू गरीब राष्ट्रहरूलाई पनि आफ्नू प्रभावक्षेत्रभित्र राखेर सोभियतसङ्घले साम्यवादको अत्यन्त तीव्र गतिमा प्रचारप्रसार गरेको थियो । त्यस बेला विश्वको झण्डै आधा भागलाई सोभियतसङ्घले आफ्नू प्रभावक्षेत्रमा पारेर साम्यवादी विचारधारालाई द्रुततररूपमा फैलाएको थियो । त्यसरी विश्वभरि नै आफ्नू प्रभाव फैलाएर राजनीतिक सहयोग र आर्थिक सहयोगसमेत दिन सफल भएको सोभियतसङ्घ केवल राजनीतिक र आर्थिक क्षेत्रमा मात्रै माथि नपुगेर वैज्ञानिक क्षेत्र लगायत अन्य विकासकार्यमा पनि अग्रणी थियो । ब्रह्माण्डीय अनुसन्धान र भूउपग्रह प्रक्षेपणको क्षेत्रमा पनि संयुक्तराज्य अमेरिकासँग सोभियतसङ्घले प्रतिस्पर्धा गरेको थियो । अन्तरिक्षमा भूउपग्रह पठाउने कामका साथै चन्द्रमामा प्राणी (लाइका कुकुर) सहितको यान पठाउने काममा पनि अमेरिकालाई सोभियतसङ्घले जितेको थियो । सोभियतसङ्घले यान्त्रिक तथा भौतिक विकासमात्र गरेर मानवीय विकास गर्न नसकेको हुँदा अन्ततोगत्त्वा सन्

१९८० को दशकपछि पतन हुनुपरेको थियो । मिखायल गोर्वाचेभ राष्ट्रपति भएको समयमा प्रजातन्त्रप्रतिको उनको प्रतिबद्धताको कारण सोभियतसङ्घ अन्तर्गतका राष्ट्रहरू स्वतन्त्र हुनगएका थिए । सोभियतसङ्घको विखण्डन भएपछि सोभियत रुस सीमित राष्ट्रको रूपमा परिणत हुनगएको थियो । बाँकी रहेका राष्ट्रहरूलाई लिएर सोभियत रुसले आफ्नू देशमा साम्यवाद असफल भएपछि प्रजातन्त्रको बहाली गरेको थियो ।

उपर्युक्त अनुसार सोभियतसङ्घको उन्नति भएका बेला मैले त्यस राष्ट्रको भ्रमण गर्ने मौका नपाए तापनि त्यस बेला तत्कालीन सोभियतसङ्घ अन्तर्गतको एक राष्ट्र उज्बेकिस्तानको भ्रमण गर्न पाएकोमा मलाई सन्तोषै लागेको थियो । त्यसै समयमा मेरा ज्येष्ठ सुपुत्र श्रीसञ्जीवकुमार भट्टराई युक्रेनमा एरोनटिकल इञ्जिनीयरिङ्ग विषय पढ्न गएका थिए । म युनेस्कोको निमन्त्रणामा तास्कन्द जाने सन्दर्भमा काठमाडौँबाट उडेर नयाँ दिल्ली पुगेपछि तास्कन्द जाने हवाइजहाजको टिकट नपाइएको हुँदा मैले दुई दिन त्यहीँ बस्नुपरेको थियो । दुई दिनपछि नयाँ दिल्लीबाट सोभियत रुसमा निर्मित इलुसीन नाम गरेको हवाइजहाज चढेर म उज्बेकिस्तानको राजधानी तासकन्दतर्फ उडेको थिएँ । नयाँ दिल्लीबाट उडेपछि सस्यश्यामला पञ्जाबको भूमि पार गर्दै पाकिस्तानको भूमिमाथि उड्दै पाकिस्तानपछि हिउँले ढाकेका अफगानिस्तानका अग्लाअग्ला दुर्गम पहाडहरूका साथै अनकण्टार क्षेत्रहरू पार गर्दै म उज्बेकिस्तानतर्फ उडेको थिएँ । माथिबाट हेर्दा कहीँ सेता बादलले ढाकिएकी धरती देखिइन्थिन् भने कहीँ हरिया जङ्गल, उजाड मरुभूमि, भयङ्कर अग्ला पहाड र उर्वराभूमिहरू पनि देखिन्थे । फुस्रा डाँडाकाँडा र खोलानालाहरूलाई पार गर्दै सेतै हिउँले ढाकेको भूमिभित्र म प्रवेश गरेको थिएँ । उज्बेकिस्तानको भूमिभित्र प्रवेश गरेपछि सेतो हिमशृङ्खलाका साथै हरियो भूमि पनि देखिन थालेको थियो । त्यसै बेला हावाको भुमरीभित्र परेर म चढेको जेट नृत्य गर्दै दायाँ कोल्टे परेर बिस्तारै तलतल ओर्लन थालेको थियो । यान्त्रिकी खेती गरिएको उज्बेकिस्तानको राजधानी तास्कन्द बिस्तारै नजिक हुँदै गएको थियो । क्रमशः जेटले भूमिस्पर्श गर्दै धावनमार्गलाई छोएको थियो र हवाइअड्डाको नजिकै गएर रोकिएको थियो ।

म हवाइजहाजबाट उत्रिएपछि मलाई लिन स्थानीय अधिकारीहरूका

साथै युनेस्कोका प्रतिनिधिहरूसमेत त्यहाँ आएका थिए। अध्यागमनको काम समाप्त गरेर मलाई लिन आएका प्रतिनिधिहरूका साथ म होटेल गएको थिएँ। बाहिरबाट हेर्दा होटेल भव्य देखिए तापनि भित्रको व्यवस्था अत्यन्त तल्लो तहको थियो। तातो पानी लगायत अन्य सुविधाहरू पनि होटेलमा उपलब्ध थिएनन्। अत्यन्त निम्नस्तरको खाना मलाई होटेलले उपलब्ध गराएको थियो। वास्तवमा मैले त्यस होटेलमा बसेर केही खानै सकेको थिइन। म शाकाहारी भएको र त्यस होटेलमा जताततै गाई र गोरुको मासुको दुर्गन्ध आउने भएकाले पनि मलाई त्यस होटेलमा बस्न अत्यन्त सकस भएको थियो। बाहिर भौतिक सुन्दरता देखिए तापनि भित्र भने तास्कन्द शहरको स्थिति होटेल जस्तै अत्यन्त शोचनीय थियो।

तास्कन्दमा युनेस्कोले आयोजना गरेको शिक्षा सबैका लागि र खास गरेर नारीशिक्षाको सम्मेलन तीन दिनसम्म चलेको थियो। आयोजकहरूले हुनेसम्म राम्रो व्यवस्था गर्नखोजेका थिए। सम्मेलनको क्रममा नै हामी विभिन्न राष्ट्रका सहभागीहरूलाई तास्कन्दमा रहेका दर्शनीय स्थलहरूको भ्रमण गराइएको थियो। भ्रमण गरेका स्थानहरूमा पुराना ऐतिहासिक सङ्ग्रहालयहरू उल्लेखनीय थिए। भारतीय उपमहाद्वीपमा हमला गरेर इस्लाम धर्म फैलाउने काममा त्यहींका हमलावरहरू मुख्यरूपमा भएको पनि सङ्ग्रहालयको अवलोकनबाट थाहा हुनआएको थियो। त्यहाँबाट भारतवर्षमा आक्रमण गर्नेहरूमध्येमा तैमुरलङ भन्ने व्यक्ति पनि उज्बेकिस्तानकै एक लडाकू थिए। त्यसका साथै मैले बजार, नगर र तास्कन्द शहरको पनि भ्रमण गरेको थिएँ। त्यहाँबाट किनेर ल्याउनुपर्ने खास कुनै वस्तु नपाइएको हुँदा मैले केही सुकेका फलफूल बाहेक अरू थोक केही पनि किनेको थिइन।

त्यसरी ३ दिन तास्कन्दमा चलेको शिक्षा सबैको लागि भन्ने कार्यक्रम समाप्त गरेर २०५४ साल मङ्सिर २६ गतेका दिन म तास्कन्दबाट इलुसीन हवाइजहाज चढेर फेरि नयाँ दिल्लीतर्फ उडेको थिएँ। उताबाट फर्किएर आउँदा पनि मैले पहिले देखेजस्तै पृथ्वीका थरीथरी दृश्यहरू देखेको थिएँ। फर्किएर आउने क्रममा आकाशमा बादल नभएको हुँदा अझ प्रष्टसँग चारैतिरको सम्पूर्ण सुन्दर दृश्य देख्ने शुभ अवसर मैले पाएको थिएँ। खास गरेर नेपालको उत्तरतिर देखिने सेतो उच्च हिमालको शृङ्खला त्यहाँसम्म जोडिएको हुँदा

पनि मलाई त्यहाँ नेपालकै सम्झना आइरहेको थियो । उच्च सेतो हिमशृङ्खलाको अवलोकन गर्दै म ताजकिस्तानको धरती नाघेर अफगानिस्तान, पाकिस्तान र भारतको भूमि पार गर्दै नयाँ दिल्लीतर्फ उडिरहेको थिएँ । म चढेको हवाइजहाज सोभियतसङ्घकै समयमा बनेको अत्यन्त पुरानू प्रविधिको सुविधाशून्य विमान थियो । उक्त विमान हावाको थप्पडमा परेर बेलाबेलामा तलमाथि गरेर बम्पिङ गरिरहने हुँदा मलाई अत्यन्त डर लागेको थियो । मनमा त्रास बोकेर अत्यन्त सकसका साथ उडान समाप्त गरेर म नयाँ दिल्ली विमानस्थलमा उत्रिएको थिएँ । फर्कंदा पनि काठमाडौं आउने हवाइजहाजको टिकट तुरुन्तै उपलब्ध नभएको हुँदा नयाँ दिल्लीस्थित हयात होटेलमा मैले दुई रात बस्नु परेको थियो । त्यस पछि हवाइजहाजको टिकट मिलाएर २०५४ साल मङ्सिर २८ गते तदनुसार सन् १९९७ डिसेम्बर १४ तारिखका दिन म काठमाडौं फर्किएको थिएँ । काठमाडौंदेखि तास्कन्दसम्म र तस्कन्ददेखि फेरि फर्किएर काठमाडौं आउन्जेलसम्मको यात्राविवरण कवितामा हवाइजहाजमै बसेर मैले लेखेको थिएँ । जुन कविता यात्रैयात्रा नामक कवितासङ्ग्रह २०५८ मा प्रकाशित भइसकेको छ ।

उपर्युक्त अनुसार उज्बेकिस्तानको भ्रमण सकेर नेपाल फर्किएपछि मैले पुनः शिक्षामन्त्रालयको काममा नै व्यस्त भएर लाग्नुपरेको थियो । मैले त्यहाँ काम गर्दागर्दै फुर्सद निकालेर 'अमरसिंहको चिट्ठी' नामक खण्डकाव्य तयार गरेको थिएँ । उक्त काव्य २०५३ सालमा नै नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानले प्रकाशन गरेर विमोचनसमेत गराएको थियो । शिक्षामन्त्रालयको वातावरण अत्यन्त अनुकूल भएको हुँदा मलाई काम गर्न कुनै पनि खालको असहजता उत्पन्न भएको थिएन ।

शिक्षामन्त्रालयमा अत्यन्त सहजताका साथ काम गरिरहेको भए तापनि मैले २०२७ सालदेखि लिएर २०४९ सालसम्म गृहमन्त्रालयमा विभिन्न पदहरूमा बसेर काम गरेको हुँदा मलाई भित्रैदेखि एक पटक गृहमन्त्रालयको सचिव हुने रहर थियो । २०४९ सालमा मैले बढुवा पाउँदा गृहमन्त्रालयकै सचिवमा पाउनु पर्नेमा तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाले आफ्नू साइनुपर्ने श्रीभोजराज पोखरेललाई गृहको अनुभव कत्ति पनि नभए तापनि गृहसचिवमा ल्याएर मलाई भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा

पठाएका थिए । मैले यो कुरा माथि नै उल्लेख गरिसकेको छु । गृहमा जाने मेरो इच्छा मेरा अन्तःकरणमा संस्कारका रूपमा सुदृढ भएर बसिरहेको थियो । मौका परेका बखत गृहमन्त्रालयको सचिव भएर जानेतर्फ मैले आफ्नू प्रयास जारिराखेको थिएँ ।

२०५२ सालमा पनि मैले गृहमन्त्रालयमा सचिव भएर जान धेरै प्रयास गरेको थिएँ । त्यस बेला श्रीखेमराज रेग्मी विभिन्न शक्तिकेन्द्रहरूमा धाएर मलाई गृहमन्त्रालयमा जान नदिएर उनी आफैँ गएका थिए । युवा, खेलकूद तथा संस्कृति मन्त्रालयबाट शिक्षामन्त्रालयमा जाने समयमा पनि मैले गृहमन्त्रालयमा जाने प्रयास गरेको थिएँ । सो समयमा पनि नेपाली काङ्ग्रेस र श्रीगिरिजाप्रसाद कोइरालाका भित्रियाका रूपमा परिचित जे जस्तो सुकै काम गर्न पनि पछि नपर्ने श्रीपद्मप्रसाद पोखरेल गृहमन्त्रालयमा सचिव भएर जान सफल भएका थिए । म शिक्षामन्त्रालयमा प्रथम पटक गएपछि पनि गृहमन्त्रालयमा जाने मेरो आकाङ्क्षा मरिसकेको थिएन ।





बायाँबाट पछाडि उभिनेमा क्रमशः ठूली नातिनी सुजाता अर्याल, ठूली छोरी सरिता दाहाल, सानी छोरी सविता अर्याल, सानी नातिनी आस्था अर्याल, अगाडिपट्टि बस्नेमा नातिनी सर्वज्ञा भट्टराई, सानी बुहारी सुस्मिता भट्टराई आमा इन्दिरा भट्टराई र ठूली बुहारी सुषमा भट्टराई

# फेरि गृहमन्त्रालयमा

त्यसप्रकारको लामू सङ्घर्ष र प्रयासपछि श्रीसूर्यबहादुर थापाको नेतृत्वमा नयाँ मन्त्रिमण्डल बनेको अवसरमा तत्कालीन गृहमन्त्री श्रीखुमबहादुर खड्काको सहयोग पाएर म २०५४ साल माघ २ गते गृहमन्त्रालयमा सचिव भएर गएको थिएँ । गृहमन्त्रालयबाट त्यस बेलाका सचिव पद्मप्रसाद पोखेल अख्तियार दुरुपयोग अनुसन्धान आयोगको कारबाहीमा परेर निलम्बनमा परेका हुँदा मैले गृहमन्त्रालयमा जाने मौका पाएको थिएँ । गृहमन्त्रालयमा सचिव भएर गएपछि त्यहाँ गएर काम गर्ने मेरो इच्छा पूरा भएको थियो । त्यस समयमा श्रीसूर्यबहादुर थापा प्रधानमन्त्री र श्रीखुमबहादुर खड्का गृहमन्त्री भएका हुँदा मलाई गृहमन्त्रालयमा काम गर्न खास कुनै समस्या थिएन । श्रीखुमबहादुर खड्का प्राय:गरेर गृहमन्त्रालयमा नआउने र बाहिरबाटै आफूलाई फाइदा हुने काम गरिहिंड्नेहुँदा गृहमन्त्रालयमा उहाँको कुनै खास दबाब पर्दैनथ्यो । त्यसैकारण मसँग उहाँको धेरैजसो भेट पनि हुँदैनथ्यो ।

त्यससमयमा माओवादीसमस्या क्रमश: जिल्लाहरूमा बढ्दै गएको हुँदा शान्तिसुरक्षा कायम गर्ने काममा नै मेरा धेरैजसो दिनहरू बित्दथे । त्यस बेलाका प्रहरीप्रमुख अच्युत खरेलको बानी ठूलो हुनु पर्ने र आफूलाई फाइदा पुऱ्याउने मानिसहरूकै चाकडी र सेवा गर्नेहुँदा पनि उनी प्राय: शक्तिकेन्द्रहरूमै धाइरहन्थे । मैले काम परेर बोलाउँदामात्रै उनी गृहमन्त्रालयमा आउँदथे ।

त्यस बेला तत्कालीन प्रधानमन्त्री श्रीसूर्यबहादुर थापा, अर्थ मन्त्री श्रीरवीन्द्रनाथ शर्मा, गृहमन्त्री श्रीखुमबहादुर खड्का र प्रहरीप्रमुखसमेत मिलेर अन्तर्राष्ट्रिय त्रिभुवन विमानस्थलमा रहेको भन्सारबाट सुनको अवैध आयात गरेर पैसा कमाइरहेका छन् भन्ने पत्रपत्रिकाहरूमा व्यापक चर्चा हुन थालेपछि मैले तत्कालीन प्रहरीप्रमुखलाई बोलाएर त्यसो नगर्न सम्झाएको थिएँ । प्रधानमन्त्री र मन्त्रीहरूलाई संझाउन सक्ने सामर्थ्य ममा नभएको हुँदा मेरा मातहतका प्रहरीप्रमुख खरेललाई भने त्यस्ता अवैध काममा नलाग्न संझाउनु मैले आफ्नू कर्तव्य ठानेको थिएँ । मैले जति संझाएर

सचेत गराए तापनि उनी त्यस अवैध काममा लागी नै रहेको कुरा विभिन्न सूत्रहरूबाट मलाई थाहा हुनेगर्दथ्यो। मभन्दा माथिका मन्त्री खड्का र मभन्दा मुनिका प्रहरीप्रमुखसमेत त्यस प्रकारको अवैध काममा संलग्न भएपछि मैले गृहमन्त्रालयका कामकुराहरू र निर्णय गर्दा पनि अत्यन्त सतर्क हुनुपरेको थियो। मभन्दा पहिलेका गृहसचिव पनि सोही अवैध समूहमा लागेर काम गर्नेहुँदा त्यस बेला सो अवैध काममा कुनै खालको बाधा व्यवधान उत्पन्न हुँदैनथ्यो होला तर म गृहसचिव भएर गएपछि त्यो समूहलाई मेरै कारणले अत्यन्त बाधा उत्पन्न भएको मैले महसूस गरेको थिएँ। जसरी तसरी गृहमन्त्रालयको काम मैले अगाडि बढाइरहेकै थिएँ।

त्यसैसमयमा नेपाल प्रहरीभित्र दुई जना प्रहरीप्रमुखहरूको व्यवस्था गर्नका लागि मन्त्रिपरिषद्मा प्रस्ताव पठाउन तत्कालीन प्रधानमन्त्री श्रीसूर्यबहादुर थापाले गृहमन्त्रालयलाई आदेश गर्नुभएको थियो। तत्कालीन संविधान र प्रहरी ऐनमा समेत दुई जना प्रहरीप्रमुखहरू राख्ने व्यवस्था नभएकाले प्रस्ताव पेश गर्न नमिल्ने भनेर मैले जबाफ दिएको थिएँ। त्यसरी तत्कालीन प्रधानमन्त्री श्रीसूर्यबहादुर थापाले दुई जना प्रहरीप्रमुखहरू राख्नुपर्ने कारणका सम्बन्धमा पनि यहाँ केही उल्लेख गर्नु प्रासङ्गिक हुने ठान्दछु।

२०५१ सालमा भएको मध्यावधि निर्वाचनमा कुनै पनि दलको बहुमत नआएपछि एमालेका नेता श्रीमनमोहन अधिकारीको नेतृत्वमा अल्पमतको सरकार बनेको थियो। उक्त सरकारमा श्रीखड्गप्रसाद ओली गृहमन्त्री बन्नुभएको थियो। अल्पमतको एमालेको सरकार ९ महिनामा नै हटेपछि २०५२ साल कार्तिक महिनामा श्रीशेरबहादुर देउवा प्रधानमन्त्री हुनुभएको थियो।

त्यसपछि २०५३ सालको अन्त्यतिर श्रीशेरबहादुर देउवाको सरकार हटेर श्रीलोकेन्द्रबहादुर चन्द प्रधानमन्त्री भएको एमाले सहितको सरकार बनेको थियो। त्यस सरकारमा श्रीवामदेव गौतम उपप्रधानमन्त्रीसहितको गृहमन्त्री हुनुभएको थियो। उहाँ गृहमन्त्री भएपछि तत्कालीन प्रहरीप्रमुखलाई हटाएर श्रीध्रुवबहादुर प्रधानलाई प्रहरी प्रमुख बनाइएको थियो। अवधि नै नपुगी पदबाट सरकारले हटाएको हुँदा सर्वोच्च अदालतबाट पुरानो प्रहरीप्रमुख थामिएपछि प्रहरीप्रमुखबाट श्रीध्रुवबहादुर प्रधान स्वतः हट्नगएका थिए। त्यसपछि तत्कालीन प्रधानमन्त्रीले उनलाई सल्लाहकारमा नियुक्त गरेर

राख्नुभएको थियो । निज श्रीध्रुवबहादुर प्रधानलाई पनि प्रहरीप्रमुख मानेर नै प्रधानमन्त्रीको सल्लाहकारमा राखिएको हुँदा अप्रत्यक्षरूपमा त्यस बेलाको सरकारले दुई जना प्रहरीप्रमुखलाई मान्यता दिएको देखिन्थ्यो । सोही कुरालाई वैधरूप दिन प्रस्ताव मन्त्रिपरिषद्मा प्रस्तुत गर्न तत्कालीन गृहमन्त्रीलाई प्रधानमन्त्रीले भनेपछि गृहन्त्रीले पनि दुई जना प्रहरीप्रमुखहरूको नियुक्ति गर्ने प्रस्ताव निर्णयका लागि मन्त्रिपरिषद्मा पठाउने व्यवस्था तुरुन्तै गर्न मलाई भन्नुभएको थियो । गैरकानूनी तरिकाले दुई जना प्रहरीप्रमुख राख्न मिल्दैन, त्यसका लागि मन्त्रिपरिषद्मा प्रस्ताव पठाउन पनि मिल्दैन भनेर मैले प्रस्ताव तयार गर्न नमानेपछि तत्कालीन गृहमन्त्री श्रीखुमबहादुर खड्काले मेरो कुरालाई स्वीकार गरेर फाइल त्यसै थन्क्याइदिनुभएको थियो ।

जसरी पनि श्रीध्रुवबहादुर प्रधानलाई प्रहरीप्रमुख बनाउनुपर्ने बाध्यता तत्कालीन प्रधानमन्त्री श्रीसूर्यबहादुर थापालाई आइलागेपछि मलाई एक दिन उहाँले आफ्नै कार्यकक्षमा बोलाएर प्रस्ताव पेश गर्न आदेश दिनुभएको थियो । सो सम्बन्धमा मैले तत्कालीन गृहमन्त्री श्रीखुमबहादुर खड्कालाई दिएकै जबाफ उहाँलाई पनि दिएको थिएँ । त्यसपछि थापाले तत्कालीन मुख्यसचिव श्रीबलरामसिंह मल्लको संयोजकत्वमा मन्त्रिपरिषद्का सचिव श्रीकेशवराज राजभण्डारी, तत्कालीन कानूनसचिव श्रीतीर्थमान शाक्य र मसमेत समावेश भएको एउटा कार्यदल गठन गरेर सो सम्बन्धमा छलफल गराउनु भएको थियो । छलफलको क्रममा कुनै पनि हालतमा दुई जना प्रहरीप्रमुखको नियुक्ति गर्न नमिल्ने भनेर मैले अडान लिएपछि तत्कालीन मुख्यसचिव र मेरा बीचमा भनाभनसमेत भएको थियो । मदेखि बाहेक समितिमा रहेका सबैजना दुई जना प्रहरीप्रमुखको पद सिर्जना गर्ने पक्षमा एकमत देखिन्थे । तर कानून अनुसार नमिल्ने कुरा दर्शाएर कार्यदलको बैठकको निर्णयपुस्तिकामा मैले आफ्नू भिन्न राय दिएपछि सोही कुरा दर्शाएर तत्कालीन प्रधानमन्त्री श्रीसूर्यबहादुर थापालाई तत्कालीन मुख्यसचिव श्रीबलरामसिंह मल्लले टिप्पणी पेश गरेका थिए । आफू जसरी पनि प्रहरीप्रमुख हुनका लागि श्रीध्रुवबहादुर प्रधानले विभिन्न शक्तिकेन्द्रहरूबाट मलाई दबाब दिने धृष्टता गरेका थिए । म भने ती सबै कुराहरूलाई अत्यन्त सहजताका साथ लिएर आफ्नू सिद्धान्तमा अविचल अडिएर बसेको थिएँ ।

त्यसरी दुईजना प्रहरीप्रमुख राख्ने सम्बन्धमा तानातान चलिरहेको समयमा तत्कालीन गृहमन्त्री श्रीखुमबहादुर खड्काको नेतृत्वमा लागूऔषधनियन्त्रणसम्बन्धी विषयमा संयुक्तराष्ट्रसङ्घले आयोजना गरेको अधिवेशनमा भाग लिन अष्ट्रियाको राजधानी भियना जाने कार्यक्रम बनेको थियो । अन्त्यमा सो विवाद बढ्दै गएपछि तत्कालीन गृहमन्त्री खड्का उक्त अधिवेशनमा नगएर उहाँको ठाउँमा म जाने भनेर मन्त्रिपरिषद्ले निर्णय गरेको थियो। त्यसरी गृहमन्त्रीको साटो म अधिवेशनमा भाग लिन अष्ट्रियाको राजधानी भियना जाने भनेर मन्त्रिपरिषद्बाट निर्णय हुनु अत्यन्त रहस्यको विषय भएको कुरा त्यस बेला मैले सम्झिएको थिएँ । मलाई भियनातिर पठाएर मेरो ठाउँमा का.मु. गृहसचिव भएर काम गर्ने गृहमन्त्रालयका तत्कालीन विशेष सचिव श्रीमान् श्रेष्ठबाट प्रहरीप्रमुखमा दुई जनाको दरबन्दी सिर्जना गर्न लगाउने सल्लाह तत्कालीन प्रधानमन्त्री र गृहमन्त्रीका बीचमा भएपछि मलाई भियना पठाउँने निर्णय भएको रहेछ । सो कुरा भियनाबाट फर्किएपछिमात्रै मलाई थाहा भएको थियो ।





ठूलो छोरा सञ्जीवकुमार भट्टराई र ठूली बुहारी सुषमा भट्टराई

# अष्ट्रियामा

२०५४ साल फागुन २७ गते तदनुसार सन् १९९८ मार्च ९ तारिखका दिन गृहमन्त्रालयको लागूऔषधनियन्त्रण महाशाखाका प्रमुख श्रीज्ञानकाजी शाक्य र तत्कालीन गृहमन्त्री खड्काका पी.ए. श्रीरामबहादुर खड्कालाई साथमा लिएर म भियनातर्फ जाने सन्दर्भमा काठमाडौंबाट नयाँदिल्लीतर्फ भारतीय हवाइजहाज चढेर गएको थिएँ। मैले त्योभन्दा पहिले यूरोपका राष्ट्रहरूमा जर्मनी, बेलायत, नेदरल्याण्ड र फ्रान्ससमेतको भ्रमण गरिसकेको थिएँ। भियना अत्यन्त सुन्दर र शान्त ठाउँ भएको कुरा मैले विभिन्न माध्यमहरूबाट थाहा पाइसकेको थिएँ। मलाई अष्ट्रियाको भ्रमण गर्ने उत्कट आकाङ्क्षा भए तापनि मौका नपरेको हुँदा जान सकेको थिइन। त्यस पटक पनि गृहमन्त्री स्वयं नै उक्त अधिवेशनमा भाग लिन जाने हुँदा मैले जान पाउने कुरै थिएन। मैले आशै नगरेको कुरा पनि भाग्यले घुमाएर मैले नै जानु पर्ने बनाइदिएकोमा शुरुमा मलाई विश्वासै लागेको थिएन।



भगवान् श्रीशिवका अगाडि शाक्यका साथ लेखक, नयाँदिल्ली, सन् १९९८ मार्च ९

त्यसरी त्यस दिन नयाँ दिल्ली पुगेर इन्दिरागान्धी अन्तर्राष्ट्रिय हवाइअड्डाको नजिकै रहेको हयात होटेलमा गएर केही समय हामीहरूले विश्राम गरेका थियौँ। त्यसै दिन अपराह्न हामीहरू त्यहाँबाट एयरइण्डियाको जम्बोजेट चढेर अष्ट्रियातर्फ गएका थियौँ। हामीहरू पश्चिमतिर उड्दैजाँदा पनि घाम माथि नै देखिन्थे। हामीहरूले क्रमशः भारत, पाकिस्तान, अफगानिस्तान र मध्यपूर्वका राष्ट्रहरू नाघेपछि मात्र रात परेको थियो। खाना खाएपछि मैले विमानमा निदाउने प्रयास गरेको थिएँ तर हवाइजहाजमा ननिदाउने मेरो बानी भए अनुसार म निदाउन सकेको थिइन। ननिदाएरै

मैले रात बिताएको थिएँ । यूरोपका धेरै राष्ट्रहरू नाघ्दै गएपछि अर्को दिन बिहानको रिमरिममा स्वीट्जरल्यान्डको आल्पस् पहाडमाथि हामीहरू उडिरहेको दृश्य हवाइजहाजको झ्यालबाट मैले देखेको थिएँ । पहाडको त्यो विशाल शृङ्खला देखेर म अत्यन्त खुशिभएको थिएँ । मैले त्यसका सम्बन्धमा तत्कालै माथिबाटै केही शब्दचित्रहरू उतारेको थिएँ । क्रमशः जहाज गएर स्वीट्जरल्यान्डको ज्यूरिक भन्ने अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएको थियो । त्यस बेला पूर्वबाट झुल्किएको रातो सूर्यको किरणले ज्यूरिक शहरलाई रङ्गिन बनाइरहेको थियो । रातभरिको अनिदोले मलाई लठ्याइरहेको थियो तापनि त्यो अनुपम दृश्य देखेर म अत्यन्त प्रफुल्लित भएको थिएँ ।

त्यसप्रकार रातभरिको उडानपछि हामीहरू स्वीट्जरल्यान्डको ज्यूरिक बिमानस्थलमा पुगेका थियौँ । त्यहाँ हवाइजहाजबाट बाहिर निस्किएर केही समय ज्यूरिक हवाइअड्डामा आराम गरेका थियौँ । प्रतीक्षालयको केही समयको विश्रामपछि हामीहरूलाई अर्को हवाइजहाजले अष्ट्रियाको राजधानी भियनातर्फ लिएर उडेको थियो । सेतो हिउँले ढपक्कै ढाकिएका चारैतिरका पहाडका सुन्दर दृश्यहरूलाई माथिबाट नै अवलोकन गर्दै हामीहरू अष्ट्रियाको राजधानी भियनातर्फ उडेका थियौँ । केही समयको उडानपछि हामीहरू भियनाको अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएका थियौँ । त्यहाँ हामीहरूलाई स्वागत गर्न आयोजकका तर्फबाट अधिकारीहरू आएका थिए । हामीहरू उनीहरूकै साथमा लागेर एउटा सानू तर सुविधायुक्त होटेलमा गएर बसेका थियौँ । हामीहरू होटेलभित्र पसेपछि त्यहाँ पातलो हिउँको वर्षा भएको थियो । घामको छड्के प्रकाशमा आकाशबाट बर्सिएको सेतो हिउँको वर्षाले हाम्रो स्वागत गरेको थियो ।


भियनास्थित संयुक्तराष्ट्रसंघको सम्मेलन केन्द्र अगाडि खड्काका साथ लेखक

होटेलमा केही बेर आराम गरेर बिहानको खाना खाएपछि सम्मेलन केन्द्रमा गएर हामीहरूले आफ्नू नाम दर्ता गराएका थियौँ । त्यस पछिको त्यस दिनको बाँकी समय हामीहरूले भियना शहरको अवलोकन गर्नुका साथै त्यहाँ बसेका नेपालीहरूसँगको भेटघाटमा नै बिताएका थियौँ ।

सन् १९९८ मार्च ११ तारिखदेखि हाम्रो सम्मेलन शुरुभएको थियो । त्यस

सम्मेलनमा विश्वभरिका विभिन्न राष्ट्रहरूका प्रतिनिधिहरू जम्मा भएका थिए । संसारभरि फैलिएको लागूऔषधको अवैध व्यापारलाई कसरी नियन्त्रण गर्ने र नयाँ पुस्ताको भविष्य कसरी सुरक्षित गर्ने भन्ने सम्बन्धमा व्यापक छलफल भएको थियो । त्यहाँ अङ्ग्रेजी भाषाका अतिरिक्त अन्तर्राष्ट्रिय सम्मेलनमा बोल्न पाउने भनेर संयुक्तराष्ट्रसङ्घले स्वीकृत गरेका रसियन, फ्रेञ्च, चिनियाँ, स्पेनी लगायतका भाषाहरूमा विभिन्न राष्ट्रका प्रतिनिधिहरूले बोलेका थिए । ती सबै भाषाहरूको तुरुन्तै अनुवाद गर्ने व्यवस्था पनि त्यहाँ थियो । हामीहरूले भने अङ्ग्रेजी भाषामा नै बोलेका थियौँ । तीन दिनसम्म चलेको त्यो महत्त्वपूर्ण बैठकमा भाग लिनुका साथै अन्त्यमा संयुक्तराष्ट्रसङ्घका तर्फबाट आयोजना गरिएको बिदाइ समारोहमा समेत हामीहरू सम्मिलित भएका थियौँ । हामीहरूले भियनामा रहेका विभिन्न पुरातात्त्विक सङ्ग्रहालयहरू, संरक्षित पुराना भव्य दरबारहरू, सुन्दर वाटिकाहरू र अन्य दर्शनीय स्थलहरूको पनि अवलोकन गरेका थियौँ । त्यसै बीचमा एक साँझ त्यहाँ बस्ने नेपालीहरूले हाम्रो सम्मानमा आयोजना गरेको रात्रिभोजमा पनि हामीहरू सम्मिलित भएका थियौँ । अष्ट्रियाको राजधानी भियना र तत्कालीन चेकोस्लोभाकियाको राजधानी प्राग दुइटै प्राचीन शहरहरू अत्यन्त राम्रा थिए भनेर इतिहासमा उल्लेख गरेको पाइन्छ । तिनै दुइटा शहरहरूलाई लिएर अङ्ग्रेज लेखक चार्ल्स डिकेन्सनले "The tale of two cities" भन्ने उपन्याससमेत लेखेका थिए । ती दुइटा शहरहरूमध्ये भियनाको भ्रमण गरेर कृतार्थ हुने मौका मैले पाएको थिएँ ।


भियनाको अन्तर्राष्ट्रिय सम्मेलन केन्द्रमा लागूऔषध सम्बन्धी नियन्त्रण बैठकमा भाग लिँदै लेखक


भियनास्थित एउटा सुन्दर पुरातात्त्विक दरबारका अगाडि प्रतिनिधिमण्डलका साथ लेखक


भियनामा रहेको सुन्दर स्मारकका अगाडि प्रतिनिधिका साथ लेखक



# लन्डनमा

त्यसरी विश्वका भावी सन्तति र विश्वसमुदायको समेत भविष्य सुनिश्चित गर्ने उद्देश्यले संयुक्तराष्ट्रसङ्घको आयोजनामा भएको उक्त महत्त्वपूर्ण लागूऔषधनियन्त्रणसम्बन्धी अधिवेशनमा भाग लिएर हामीहरू भियनाबाट बिदा हुने सुरसारमा थियौँ। हामीहरू त्यहाँ बसुन्जेल विभिन्न कार्यक्रमहरूमा अत्यन्त व्यस्त हुनुपरेको हुनाले केही थकाइ पनि लागेको थियो। संयुक्तराष्ट्रसङ्घले आयोजना गरेको रात्रिभोजपछि सबैसँग बिदा भएर हामीहरू त्यहाँबाट लन्डनतर्फ प्रस्थान गर्ने सन्दर्भमा भियनाको अन्तर्राष्ट्रिय विमानस्थलबाट सन् १९९८ मार्च १४ तारिखका दिन दिनको तेस्रो प्रहरमा अष्ट्रियन हवाइजहाज चढेर हामीहरू लन्डनतर्फ उडेका थियौँ। हामीहरू लन्डनतर्फ प्रस्थान गरेर माथि आकाशमा पुगेपछि तल पृथ्वीतिर हेर्दा सेता बादलका थोप्लाथोप्लीले ढाकिएकी यूरोपकी धरती वसन्त ऋतुको स्वागतका लागि तयार भएर बसेकी जस्ती देखिन्थिन्। हामीहरू उडेको हवाइजहाजलाई कहिले चारैतिरबाट आएर नाना आकारका विचित्र बादलका दलहरूले पूर्णरूपमै छोपिदिन्थे। कहिले भने बादलभित्र व्याप्त भएको प्रखर हावाले हामी चढेको जेटलाई थप्पड हानेर कोक्रो हल्लाए झैँ गरेर हल्लाइदिन्थ्यो। हामी यात्रीहरू आफ्नू सीटको सहारा लिएर त्राहि माम् हुँदै आँखा चिम्लिएर सासससमेत रोकेर बसिरहन्थ्यौँ। केही क्षणपछि त्यो सारा त्रासदीपूर्ण बादलको दल फाटेर कहाँकहाँ पुग्दथ्यो। त्यसपछि आकाश र धरतीको दृश्य अत्यन्त सुन्दर देखिन्थ्यो।

त्यसरी बादलसँग लुकामारी खेल्दै हामीहरू चढेको हवाइजहाज लन्डनको हिथ्रो विमानस्थलमा साँझपख उत्रिएको थियो। २०३४/०३५ सालमा बेलायती सरकारको छात्रवृत्तिमा भिक्टोरिया म्यान्चेष्टर युनिभर्सिटीमा एक वर्ष जनप्रशासन सम्बन्धी विषय अध्ययन गर्न बेलायतमा म बसेको थिएँ। सो कुराको विवरण मेरो बेलायतसम्बन्धी यात्रावृत्तान्तमा माथि परिसकेकै छ। त्यसरी बीस वर्षपछि मैले फेरि आङ्लभूमिमा पाइला टेक्न पाएकोमा मलाई

अत्यन्त खुशी लागेको थियो । हिथ्रो विमानस्थलमा हवाइजहाजबाट उत्रिएपछि हामीहरूलाई लिन लन्डनमा रहेको नेपाली राजदूतावासका अधिकारीहरू आएका थिए । उनीहरूले हामीहरूलाई केसिङ्टन दरबार नजिक रहेको नेपाली राजदूतावासमा लिएर गएका थिए । नेपाली राजदूतावासमा त्यस बेला राजदूत श्रीसिंहबहादुर बस्नेत थिए । हामीहरू लन्डनमा बसुन्जेल हाम्रा लागि बस्ने र खानेसमेतको व्यवस्था दूतावासले नै मिलाएको थियो । त्यस बेला दूतावासमा तत्कालीन राजा वीरेन्द्रका कान्छा छोरा श्रीनिराजन शाह र राजा ज्ञानेन्द्रकी छोरी प्रेरणासमेत बसेका रहेछन् ।


बायाँबाट – खड्का, शाक्य, निराजन, लेखक र राजदूत, नेपाली राजदूतावास, लन्डन, सन् १९९८ मार्च १५

सन् १९९८ मार्च १५ तारिखका दिन दूतावासमा नै बिहानको खाना खाएर हामीहरू बेलायतको संसदभवन, हाइट पार्क, स्पिकर्स कर्नर, केसिङ्टन दरबार, हाल रानी बसेको बकिङ्घम दरबार, बृटिश म्युजियम, लन्डन टावर आदि स्थानहरूमा घुम्दै हामीहरू टेम्स नदीको किनारातर्फ पनि घुम्न गएका थियौं । त्यसै दिन अपराह्न बृटिश लाइब्रेरीका साथै लन्डनमा रहेका विभिन्न पुरातात्त्विक सङ्ग्रहालयहरूमा समेत हामीहरू गएका थियौं । साँझपख लन्डनका महत्त्वपूर्ण बजारहरूको भ्रमण गर्ने सन्दर्भमा आवश्यक केही मालसामानहरू पनि हामीहरूले खरिद गरेका थियौं । खास गरेर बेलायतमा पाइने कोटका लागि ऊनबाट बनेको ट्विड् कपडा पनि हामीहरूले किनेका थियौं । दिनभरिको लन्डन शहरको परिभ्रमण गरेर हामीहरू साँझपख राजदूतावासमै फर्किएर बसेका थियौं ।


महात्मागान्धीका साथ, मेडम टुसाद सङ्ग्रहालय, लन्डन, सन् १९९८ मार्च १६

सन् १९९८ मार्च १६ तारिखका दिन बिहानको स्वल्पाहारपछि मैले २०३४/२०३५ सालमा १ वर्षसम्म बेलायतमा बस्दा पनि हेर्न छुटेको विश्वभरिका प्रमुख नेताहरूको सजीव जस्तै देखिने मैनका आकृतिहरू (मूर्ति) बनाएर राखिएको सङ्ग्रहालय म्याडम टुसाद (Madame tussauds) पनि त्यस पटक मौका मिलेकाले म हेर्न गएको थिएँ । त्यो

सङ्ग्रहालयको अवलोकन गरेर मैले विश्वभरिका सुनाम र बदनाम विश्वमानवहरूको दर्शन गर्ने मौका पाएको थिएँ । त्यस सङ्ग्रहालयभित्र पसेर हेर्दा साँच्चैको भूतकालमा पुगेर त्यस बेलाका महान् व्यक्तिहरूसँग भेटिरहेको र कुरा गरिरहेको जस्तो अनुभूति मलाई भएको थियो । त्यसबाट म अत्यन्त अभिभूत भएको थिएँ । केवल इतिहासको किताबमामात्रै पढिएका ती विश्वप्रसिद्ध विभिन्न व्यक्तित्त्वहरूलाई एकै ठाउँमा एकै चोटि साकाररूपमा जस्तो देख्न पाउनु मेरा लागि अत्यन्त ठूलो मौकाको कुरा थियो । सो सङ्ग्रहालयको निर्माण गरेर त्यहाँ भ्रमण गर्ने जिज्ञासु पर्यटकहरूको जिज्ञासालाई परिपूर्ण गरिदिन आफ्नू अथाह सम्पत्ति खर्च गर्ने फ्रान्सकी महामना दानवीर म्याडम टुसादलाई सहस्र अभिवादन गर्दै म त्यहाँबाट बाहिर निस्किएको थिएँ । बाहिर गाडीमा चढेर गुडिरहँदा पनि मैले त्यस सङ्ग्रहालयभित्र भर्खरै देखेका व्यक्तित्त्वहरूले मेरो मानसपटललाई उद्वेलित गरिरहेका थिए । खास गरेर गिलेटिनमा काटिँदै गरेका फ्रान्सका तत्कालीन राजा लुई सोह्रौँको दृश्य अत्यन्त हृदयविदारक थियो । दोस्रो विश्वयुद्धका खलनायक जर्मनीका एडोल्फ हिट्लरलाई सजीवरूपमा देखेर म तर्सिएको थिएँ । अर्कोतर्फ विश्वशान्तिका अग्रदूत भगवान् बुद्ध, भारतका महान् शान्तिवादी नेता महात्मा गान्धी, दोस्रो विश्वयुद्धका महानायक बेलायतका तत्कालीन प्रधानमन्त्री विन्स्टन


श्रीमती इन्दिरा गान्धी र राजीव गान्धीका साथ, मेडम टुसाद सङ्ग्रहालय, लन्डन, सन् १९९८ मार्च १६


बेलायती राजपरिवारका साथ, मेडम टुसाद सङ्ग्रहालय, लन्डन, सन् १९९८ मार्च १६


अमेरिकी राष्ट्रपतिहरूका साथ, मेडम टुसा सङ्ग्रहालय, लन्डन, सन् १९९८ मार्च १६


जर्मनीका तानासाह एडोल्फ हिट्लरका साथ, मेडम टुसाद सङ्ग्रहालय, लन्डन, सन् १९९८ मार्च १६

चर्चिल, अमेरिकी दासत्वमोचनका नायक तत्कालीन राष्ट्रपति अब्राहम लिङ्कन, जनवादी गणतन्त्र चीनका क्रान्तिकारी नेता माओत्सेतुङ्ग र साम्यवादी चिन्तनका सूत्रधार कार्लमार्क्स् आदि महान् व्यक्तिहरूलाई पनि एकै ठाउँमा सजीव जस्तै देखेर म इतिहासकै गर्भमा एक छिन हराएको थिएँ ।



सुतिरहेका लुई सोह्रौँका साथ, मेडम टुसा सङ्ग्रहालय, लन्डन, सन् १९९८ मार्च १६

दुई दशक अगाडि बेलायतमा एक वर्षसम्म बसेर अध्ययन गर्दा देखेका चेहराहरू, शहरका परिदृश्यहरू र विशाल मार्गका दुवैतिर वर्षा, घाम र हिउँसमेतको ताडनालाई सहेर तपस्वीझैं बसेका वृक्षहरूलाई पनि उस्तै उस्तै चिने चिने जस्तो मलाई लागेको थियो । लन्डन शहर त्यो दुई दशकको अन्तरालमा खास परिवर्तन भएको जस्तो मलाई लागेको थिएन । टेम्स नदीको अथाह जलराशि लन्डन टावरब्रिजको मुनिबाट अनवरत बगेर अथाह सागरको गर्भमा विलीन भइसकेको थियो । लन्डन शहर भने आफ्नू ओरालो लागेको अतीत हेरेर झोक्राइरहेको जस्तो देखिन्थ्यो । मानिसहरू पहिले जस्तै जिजीविषाको सङ्घर्षमा रातदिनै दौडिइरहेका देखिन्थे । एकातिर लन्डन शहर रातदिन नै दौडिरहन्थ्यो र मानिसहरू कोलाहलमै बाँच्न बानी परिसकेका थिए । अर्कातिर अथाह वेदना र अशान्तिलाई भित्रै लुकाएर अस्ताउन लागेको सूर्यलाई टुलुटुलु हेरेर लन्डन शहर बाँचिरहेको जस्तो देखिन्थ्यो ।

भियनापछि लन्डन शहरको दुई रात र दुई दिनको बसाइ समाप्त गरेर नेपाली राजदूतावासका राजदूत श्रीसिंहबहादुर बस्नेतलाई र दूतावासका मित्रहरूलाई पनि धन्यवाद ज्ञापन गर्दै हामीहरू सन् १९९८ मार्च १६ तारिखका दिन अपराह्न काठमाडौं प्रस्थान गर्न गेटविक विमानस्थलतर्फ लागेका थियौं । हामीहरूलाई लन्डन बसुन्जेलसम्म दर्शनीय स्थलहरूको भ्रमण गर्न, एयरपोर्टसम्म आउन र जानसमेत नेपाली राजदूतावासले नै यातायातको साधन उपलब्ध गराएको थियो । जसबाट लन्डन शहरको परिक्रमा गर्न हामीहरूलाई अत्यन्त सजिलो भएको थियो । गेटविक विमानस्थलबाट साँझपख हामीहरू नेपाली जेट चढेर नेपालतर्फ उडेका थियौं । त्यसपछि

जर्मनीको फ्र्याङ्कफर्टमा पुगेर उक्त जेट केही बेर रोकिएको थियो। त्यहाँबाट पनि यात्रीहरू लिएर मध्यरातमा दुबईतर्फ उडेको थियो। रातभरि उडेर २०५४ साल चैत्र ४ गते बिहान ७ बजे हामीहरू दुबई विमानस्थलमा पुगेका थियौँ। त्यहाँ हामीहरूले जेटबाट बाहिर उत्रिएर केही बेर विश्राम गरेका थियौँ। दुबई विमानस्थलको ड्यूटी फ्री पसल नेपालीहरूका लागि अत्यन्त प्रिय र प्रसिद्ध भएको हुँदा हामीहरूले पनि आफूसँग बचेखुचेका विदेशी मुद्राहरू त्यहीँ खर्च गरेर केही आवश्यक सामाग्रीहरू खरिद गरेका थियौँ। बिहान ८ बजे दुबईबाट नेपाली जेटमा चडेर दिनको अपराह्न हुँदा काठमाडौंको त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा हामीहरू उत्रिएका थियौँ। उपर्युक्त अनुसार भियना यात्राको साथै पुरानू सम्झनालाई ताजा पार्दै लन्डनको रमाइलो यात्रासमेत समाप्त गरेर २०५४ साल चैत्र ४ गते म घरभित्र पसेको थिएँ।

त्यसरी अष्ट्रियाको राजधानी भियनामा भएको लागूऔषध नियन्त्रणसम्बन्धी बैठकमा भाग लिएर काठमाडौं फर्किएपछि मैले गृहसचिवको हैसियतले गर्नुपर्ने गृहमन्त्रालयको उत्तरदायित्त्व फेरि सम्हालेको थिएँ। गृहमन्त्रालयमा हाजिर भएर काम शुरुगरेपछि मैले माथि उल्लेख गरे अनुसार मलाई गृहमन्त्रीको ठाउँमा भियना सम्मेलनमा पठाएर प्रहरी प्रमुखमा २ जना व्यक्ति राख्नेगरी निर्णय गर्नु कानून विपरीत हुन्छ भनेर मैले दिएको रायका विपरीत म बाहिर हिँडेपछि का.मु. सचिव श्रीमान् श्रेष्ठबाट प्रस्ताव तयार गराउन लगाएर मन्त्रिपरिषद्मा गृहमन्त्रीले पेश गर्नुभएछ। गृहमन्त्री खँड्का सम्मेलनमा भाग लिन नगएर मलाई पठाएको हुँदा सो कुरा मैले पहिले नै अनुमान गरिसकेको थिएँ। त्यसरी मलाई विदेश पठाएर तत्कालीन प्रधानमन्त्री श्रीसूर्यबहादुर थापा र तत्कालीन गृहमन्त्री श्रीखुमबहादुर खँड्काको मिलोमतोमा प्रहरीप्रमुखमा दुई जना रहने गरी पद सिर्जना गर्नेगरी मन्त्रिपरिषद्बाट निर्णय भएर कार्यान्वयनका लागि म काठमाडौं फर्किनुभन्दा पहिले नै हतार हतार गरेर निर्णय गृहमन्त्रालयमा आएछ।

उक्त निर्णय अनुसार दुई जना प्रहरीप्रमुखहरूको पद सिर्जना गरेको कुरा दर्ता गर्न तत्कालीन का.मु. गृहसचिव श्रीमान् श्रेष्ठले तुरुन्तै प्रहरी किताबखानामा आदेश दिएछन्। त्यस बेला प्रहरी किताबखानाको निर्देशक

भएर काम गरिरहेका श्रीराजकुमार निरौलालाई सो दर्ता गर्नको लागि त्यस समयमा प्रधानमन्त्रीका सल्लाहाकार भएर बसेका श्रीध्रुवबहादुर प्रधानले दबाब दिएछन् । प्रचलित कानूनमा अविचल भएर काम गर्न मैले भियना जानुभन्दा पहिले नै उनलाई निर्देशन दिइसकेको थिएँ । मेरै निर्देशनलाई आधार मानेर निज निरौलाले मन्त्रिपरिषद्को निर्णय भए तापनि किताबखानामा दर्ता गर्ने सम्बन्धमा का.मु. गृहसचिवले आदेश दिँदैमा म एउटा प्रहरीप्रमुखको ठाउँमा दुइटा व्यक्ति रहने गरी पद सिर्जना गरेर किताबमा दर्ता गर्न सक्तिन । गृहसचिव विदेशबाट फर्किएर आएपछि उहाँले जे जस्तो आदेश दिनुहुन्छ सो अनुसारमात्र म गर्न सक्तछु भनेर श्रीराजकुमार निरौलाले सशक्त जबाफ दिएपछि किताबखानामा पददर्ता हुन नसकेर त्यसै थन्किएको रहेछ ।

भियनाबाट फर्किएर गृहमन्त्रालयमा मैले काम शुरुगरेपछि मलाई सो कुराको जानकारी तत्कालीन प्रहरीकिताबखानाका निर्देशक श्रीराजकुमार निरौलाले दिएका थिए । तत्कालीन प्रधानमन्त्री र तत्कालीन गृहमन्त्रीसमेतले मन्त्रिपरिषद्बाट निर्णयसमेत गराएर कानून विपरीत काम गर्न गराउन दुष्प्रयास गरेकोमा चट्टान जस्तो भएर त्यस षड्यन्त्रलाई विफल गराउन गृहमन्त्रालयको एउटा सामान्य अधिकृतले साहस गरेकोमा म उनीसँग अत्यन्त प्रभावित भएको थिएँ । त्यसका लागि उनलाई मैले हृदयदेखि नै धन्यवाद दिएको थिएँ । त्यसै गरी गृहमन्त्रालयमा त्यस बेला मलाई कानूनी सल्लाह दिने कानूनअधिकृत लगायतका मेरा सहयोगी राष्ट्रसेवकहरूले मलाई हृदयदेखि नै सहयोग गरेको हुँदा मन्त्रिपरिषद्को त्यस प्रकारको गैरकानूनी निर्णयलाई पनि उल्टाउन म सफल भएको थिएँ । त्यस प्रकार आफ्नू कर्तव्यमा अविचल रहेर काम गर्ने अधिकृतहरू नेपालको निजामतीप्रशासनमा पाउनु अत्यन्त दुर्लभ भएको कुरा मैले त्यस बेला महसूस गरेको थिएँ ।

त्यसप्रकारको कानूनविपरीत काम गर्न भियनासम्मेलनजस्तो महत्त्वपूर्ण विश्वसम्मेलनलाई पनि उपेक्षा गर्नसक्ने तत्कालीन गृहमन्त्रीको बुद्धि देखेर मलाई उनीप्रति अत्यन्त दया लागेर आएको थियो भने साथै म जस्तो सामान्य गृहसचिवको नैतिकताले थिचिएर मलाई बाहिर पठाएरमात्रै त्यस

प्रकारको कानूनविपरीत काम गर्न खोज्ने तत्कालीन गृहमन्त्री श्रीखुमबहादुर खड्काप्रति मलाई भित्रैदेखि घृणा पनि लागेर आएको थियो। त्यस कामकारबाहीले मेरो उनीप्रति रहेको विश्वास सदाका लागि समाप्त भएर गएको थियो। त्यसपछि जति समयसम्म गृहमन्त्रालयमा रहेर तत्कालीन गृहमन्त्री श्रीखुमबहादुर खड्कासँग मैले काम गरेँ, सो अवधिभरि मैले अत्यन्त सतर्क भएर काम गर्नुपरेको थियो। मेरै कारणले मन्त्रिपरिषद्को उक्त निर्णय कार्यान्वयन नभएको हुँदा त्यसरी सरकारको निर्णय कार्यान्वयन नगर्ने गृहसचिवमाथि नै कानूनी कारबाही गर्नुपर्छ भनेर पनि मन्त्रिपरिषद्मा छलफल भएको रहेछ। त्यसरी छलफलहुँदा मन्त्रिपरिषद्ले गरेको अवैध तथा गैरकानूनी निर्णयलाई रोकेर मन्त्रिपरिषद्को इज्जतलाई जोगाउन सहयोग गर्ने यस प्रकारका दूरदर्शी र साहसी गृहसचिवलाई पुरस्कृत गर्नु पर्नेमा उल्टै कारबाही कसरी गर्ने ? भनेर श्रीविजय गच्छेदारसमेतका केही मन्त्रीहरूले मन्त्रिपरिषद्को बैठकमा प्रश्न उठाएपछि सो कुरा त्यसै सेलाएर गएको रहेछ। त्यस कुरालाई अगाडि बढाएर ममाथि कारबाही गराउन अघि सर्नेमा तत्कालीन मुख्यसचिव श्रीबलरामसिंह मल्ल मुख्यरूपमा रहेछन्। उनी आफ्नू आँट कत्ति नभएका, प्रधानमन्त्री र मन्त्रीहरूले जे जस्तो गैरकानूनी आदेश दिए तापनि विनासुझबुझ कार्यान्वयन गर्न अघि सर्ने खालका अत्यन्त अयोग्य व्यक्ति थिए। उनकै कारणले म जस्तो कर्तव्यपरायण सचिवले त्यस बेला दुःख पाउनुपरेको थियो। निज मल्लले म मन्त्रिपरिषद्कै निर्णय बमोजिम विदेश भ्रमणमा जाँदा पनि ममाथि वक्रदृष्टि राखेर नाना थरीका लेखापढी गरेर मलाई बेलाबेलामा दुःख दिन खोजेका थिए। सो कुरा प्रसङ्ग अनुसार पछि उल्लेखगर्नेछु।

त्यसरी गृहमन्त्रालयमा सचिव भएर मैले अत्यन्त दृढताका साथ काम गरिरहेकै बेला तत्कालीन प्रधानमन्त्री श्रीसूर्यबहादुर थापाको सरकार हटेर श्रीगिरिजाप्रसाद कोइरालाको नेतृत्वमा अर्को संयुक्त सरकार बन्नगएको थियो। त्यसरी बनेको सरकारमा श्रीखुमबहादुर खड्काको ठाउँमा श्रीगोविन्दराज जोशी गृहमन्त्री भएका थिए। गृहमन्त्री भएर श्रीगोविन्दराज जोशी आएपछि मैले गृहमा बसेर काम गर्ने सम्भावना नै थिएन। किनभने श्रीगोविन्दराज जोशीसँग शिक्षामन्त्रालयमा केवल १३ दिनमात्रै काम गर्दा पनि

निजको षड्यन्त्रकारी र भ्रष्टाचारी प्रवृत्ति देखेर म अघाइसकेको थिएँ। म त्यस प्रकारका भ्रष्ट तथा षड्यन्त्रकारी मन्त्रीसँग बसेर काम गर्न चाहन्नथैँ। मैले एकातर्फ त्यसरी शोचिरहेको थिएँ भने अर्कातर्फ श्रीगोविन्दराज जोशीले पनि मजस्तो गैरकानूनी काम गर्न नदिने कट्टर गृहसचिवसँग बसेर भ्रष्टाचार गरेर धन कमाउन नसक्ने देखेपछि उनले भ्रष्टाचार गर्न सहयोग दिने गृहसचिवको खोजी गर्नु स्वाभाविकै थियो। मसँग प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाका किचेन क्याविनेटका सदस्य र उनका परिवारका सदस्यहरूमध्ये उनकी छोरी सुजाता र भाउजु नोना कोइरालाहरू पनि पहिलेदेखि नै मलाई गैरकानूनी काम गराउन नसकेकोमा असन्तुष्ट भइसकेका थिए।

त्यसपछि गृहमन्त्री भएर गृहमा आएका जोशीसमेतको आँखामा म बिजाएपछि मैले गृहमन्त्रालयमा बसेर काम गर्ने कुरै थिएन। जोशी गृहमन्त्री भएर आउने बित्तिकै उनको भ्रष्टाचारी समूहमा मिल्नसक्ने गृहसचिवको खोजी उनले गर्नथालेका थिए। गृहमन्त्रालयमा भ्रष्टाचार गरेको अभियोगमा अख्तियारदुरुपयोग अनुसन्धान आयोगमा कारबाही चलेर निलम्बनमा परेका एकजना सचिव त्यसैसमयमा निलम्बनबाट फुकुवा भएर सामान्यप्रशासन मन्त्रालयमा सचिव भएका थिए। पहिलेदेखि नै कोइराला परिवारको भित्रिया भइसकेका ती सचिव उनीहरूका लागि अत्यन्त सजिला व्यक्ति थिए। मन्त्री जोशीलाई पनि नैतिकताको परिधि बाहिर गएर काम गर्न सक्ने त्यस्तै खालका गृहसचिवको आवश्यकता थियो। तत्कालीन प्रहरीप्रमुखसँग पनि पहिले भन्सारको महानिर्देशक भएर काम गर्दा र प्रथमपटक गृहमन्त्रालयमै गृहसचिव भएर काम गर्दासमेत उनीहरूका बीचमा सबै गर्ने नगर्ने कामकुराहरूमा मन मिलिसकेको थियो। त्यसैकारण उनलाई पनि त्यस्तै गृहसचिव चाहिएको थियो। त्यस्तै खालको जेसुकै काम गर्न नहिच्किचाउने व्यक्तिसँग तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाको, उनकी भाउजू नोना कोइरालाको र छोरी सुजाता जोष्टको पनि कुरा मिल्ने भएपछि मेरा ठाउँमा तिनै सचिवलाई मिति २०५५ साल वैशाख १४ गते बसेको मन्त्रिपरिषद्को बैठकमा निर्णय गराएर गृहमन्त्रालयमा ल्याइएको थियो। मलाई सामान्यप्रशासन मन्त्रालयको सचिवमा पठाइएको थियो।

श्रीगिरिजाप्रसाद कोइराला प्रधानमन्त्री भएर बसे तापनि पहिलेदेखि नै

उनलाई घरका आफन्तहरू र निहित स्वार्थ भएकाहरूले घुमाएर काम गराउने कुरा सर्वविदित नै थियो । उनको कुनै कुरामा पनि विचार गरेर काम गर्ने क्षमता नभएको हुँदा उनी धेरै पटक भ्रष्टाचारसम्बन्धी विवादमा परिसकेका पनि थिए । त्यस्ता बुद्धि र विवेक नभएका व्यक्तिबाट सही निर्णय हुन सक्तैन भन्ने कुरा भूमिसुधार तथा व्यवस्था मन्त्रालयमा जानुपर्दादेखि नै मैले बुझिसकेको थिएँ । गृहमन्त्रालयमा बसेर शान्तिसुरक्षा कायम गर्नेजस्ता महत्त्वपूर्ण काम गर्दागर्दै अत्यन्त संवेदनशील समयमा गृहसचिवजस्तो महत्त्वपूर्ण पदमा बसेर काम गरिरहेको व्यक्तिलाई प्रधानमन्त्रीले एक वचनसम्म पनि नसोधी सरुवा गर्नु आश्चर्य लाग्दो कुरा थियो । गृहमन्त्री श्रीगोविन्दराज जोशीले नैतिकताको दृष्टिले मसँग काम गर्न सक्ने हिम्मत नभएर गृहमन्त्रालयमा आएको तीन दिनभित्रै मेरो सरुवा गराएर अर्को सचिव ल्याएपछि निज जोशीको नैतिकता र हिम्मतप्रति मलाई दया लागेर आएको थियो । मैले तुरुन्तै सरुवापुर्जी बुझेर निज अनैतिक गृहमन्त्री श्रीगोविन्दराज जोशी र आफ्नू बुद्धि र विवेकले काम गर्ने क्षमता नभएका तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालासमेतसँग भेट्ने र बिदा हुने सामान्य शिष्टाचार पनि पूरा नगरीकनै म सामान्य प्रशासन मन्त्रालयमा हाजिर हुनगएको थिएँ ।






सानो छोरा सतीशकुमार भट्टराई र सानी बुहारी सुस्मिता भट्टराई

# सामान्य प्रशासन मन्त्रालयमा

मन्त्रिपरिषद्को निर्णय अनुसार सामान्य प्रशासन मन्त्रालयमा सहजरूपमा गएर मैले काम गर्न थालेको थिए । मैले गृहमन्त्रालयमा सधैँ व्यस्त रहेर काम गर्नु पर्दा हुने मानसिक तनाव र शारीरिक झन्झटसमेतबाट मलाई मुक्ति मिलेको थियो । सामान्य प्रशासन मन्त्रालयमा त्यस बेला श्रीविमलेन्द्र निधि मन्त्री थिए । २०३४/०३५ सालमा धनुषा जिल्लाको प्रमुखजिल्ला अधिकारी भएर काम गर्दा उनलाई र उनका बाबु श्रीमहेन्द्रनारायण निधिसमेतलाई निग्रानीमा राखेर अवैध कामकुरा गर्नबाट मैले रोकेको थिएँ । सो कुरा श्रीविमलेन्द्र निधिलाई थाहा थियो । सबै कुरा थाहा भए तापनि बाहिरीरूपमा अत्यन्त शिष्टतापूर्वक व्यवहार गर्ने उनको स्वभाव थियो । भित्रीरूपमा भने उनी मसँग सधैँ सतर्क रहेको मैले महसूस गरेको थिएँ । त्यस मन्त्रालयमा कहिलेकाहीँ कर्मचारीहरूको सरुवा र बढुवा गर्ने काम बाहेक अरू खास काम नपर्ने हुँदा मन्त्री र मेरो सामान्यतया भेट पनि भइरहँदैनथ्यो । त्यस बेला सामान्य प्रशासन मन्त्रालयमा विशेष सचिव श्रीविद्युत्राज चालिसे थिए । उनी अत्यन्त कमजोर मानसिकता भएका दुर्व्यसनी व्यक्ति थिए । उनीबाट काम लिन सजिलो पर्ने हुँदा मन्त्री निधिले प्रायः उनलाई नै बोलाएर काम लगाउने गर्दथे । मलाई पनि त्यसबाट सजिलै भएको थियो । तत्कालीन सचिवका समयमा तयार पारिएको निजामती कर्मचारीकै विरुद्धको निजामती सेवा ऐन पारित गराउन मन्त्री निधि, श्रीपूर्णबहादुर खड्का र केही एमालेका सांसदहरू हात धोएर पछि लागेका थिए । तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाको अदूरदर्शिताले गर्दा कर्मचारीहरूका हितविपरीतको उक्त ऐन संसदबाट सर्वसम्मतिले पास भएको थियो । कर्मचारीका विरुद्धको उक्त निजामतीसेवा ऐन मैले नचाहँदा नचाँहँदै पनि पारित हुन गएको थियो । त्यस बेलाका सांसदहरू कर्मचारीका विरुद्धमा एक भएर लागेका थिए । नेपाली काङ्ग्रेस र एमालेका सांसदहरू कहिल्यै कुनै विषयमा पनि एक हुँदैनथे भने कर्मचारीका विरुद्धको उक्त ऐन पारित गर्न भने एकमत भएका थिए ।

परिवर्तित कानूनी व्यवस्था अनुसार महालेखानियन्त्रण कार्यालयका

लेखासमूहका कर्मचारीहरूको सरुवा पनि सामान्य प्रशासन मन्त्रालयले गर्नेभएको थियो । सोही सम्बन्धमा मन्त्री निधिको ध्यान गएको थियो । मेरा अगाडि कुनै कुरा गर्न नसक्ने तर त्यस बेलाका महालेखानियन्त्रक श्रीमुकुन्द अर्याललाई एक्लै बोलाएर लेखाका कर्मचारीहरूको सरुवा गर्ने कुरा उनले मेरा जानकारीमा नल्याईकनै सोझै मिलाउन प्रयास गरेका थिए । त्यसरी मलाई छलेर सोझै महालेखानियन्त्रकसँग कुरा मिलाउनु निज मन्त्री निधिको कुनियत भएको कुरा पनि मैले अनुमान गरेको थिएँ । त्यस बेला महालेखानियन्त्रण कार्यालय अन्तर्गतका राम्रा कार्यालयहरूमा सरुवा हुने अधिकृतहरूले ठूलो ठूलो रकम माथि बुझाउने गरेको कुरा पनि मैले थाहा पाएको थिएँ । त्यसै लोभमा परेर मन्त्री निधिले काइते बुद्धि लगाएर भित्रभित्रै खेल खेलिरहेको पनि मेरो जानकारीमा आएको थियो । उनले जतिसुकै काइतेबुद्धि लगाए तापनि सामान्य प्रशासन मन्त्रालयका सचिवको स्वीकृति बेगर सरुवा हुन नसक्ने हुँदा उनी त्यसै लेचाएर बसेको कुरा पनि मलाई थाहा थियो । मैले ती सबै कुरा थाहा पाएर पनि थाहा नपाएजस्तो गरेर आफ्नो काम गरिरहेको थिएँ ।

त्यसै बेलामा अन्तर्राष्ट्रिय स्तरमा हुने सामान्य प्रशासनसम्बन्धी यूरोपाको बैठक सिङ्गापुरमा हुने र त्यसको लगत्तै सामान्य प्रशासनसम्बन्धी अर्को बैठक मकाओमा हुने भनेर त्यसको पनि निम्तो मैले प्राप्त गरेको थिएँ । ती दुवैथरी निम्तामा जानका लागि मन्त्रिपरिषद्को निर्णय भएर मेरा हातमा हवाइजहाजको टिकट र डलरसमेत आइसकेको थियो । मलाई सम्मेलनमा भाग लिन जान मन्त्रिपरिषद्बाट बारम्बार ताकेता भइरहेकै बेलामा शिक्षामन्त्रालयमा दोहोऱ्याएर मन्त्रिपरिषद्ले मेरो सरुवा गरिदिएको थियो । त्यसरी मेरो सामान्य प्रशासन मन्त्रालयबाट सरुवा भइसकेपछि मैले सामान्य प्रशासन मन्त्रालयको सचिवको हैसियतले विदेशमा गएर सम्मेलनमा भाग लिनु मेरो नैतिकताले नदिने ठानी मेरा मातहतमा काम गर्ने बिशेष सचिव श्रीविद्युत्राज चालिसेलाई ती दुवै बैठकमा भाग लिनका लागि मैले पठाइदिएको थिएँ । मन्त्रिपरिषद्को निर्णय भइसकेपछि जुनसुकै मन्त्रालयमा सरुवा भएको भए तापनि नेपालको तर्फबाट प्रतिनिधित्व गरेर जानुहुन्छ भन्ने त्यस बेलाको मान्यता थियो । अरू मन्त्रालयका सचिवहरू त्यस्ता बैठकहरूमा खोजीखोजी जानेगर्दथे । मलाई पनि जानु भनेर मन्त्रिपरिषद् सचिवालयले अनुमति दिएको थियो, तर मैलेभने त्यसप्रकारको बैठकमा जानु उपयुक्त ठानिन र गइन पनि ।



# दोस्रोपटक शिक्षामन्त्रालयमा

मन्त्रिपरिषद्को मिति २०५५ साल असोज ८ गतेको निर्णय अनुसार मेरो पुनः शिक्षामन्त्रालयमा सरुवा भएको थियो । त्यसरी मेरो फेरि शिक्षामन्त्रालयमा नै सरुवा हुनुपर्ने कारण तत्कालीन शिक्षासचिव श्रीखेमराज रेग्मी र शिक्षामन्त्री श्रीअर्जुन नरसिंह के.सी.का बीचमा भएको झगडा नै थियो । शिक्षामन्त्रालयमा पहिलो पटक मैले काम गर्दा त्यहाँका प्रायः धेरैजसो समस्याहरू समाधान भएका थिए । म त्यहाँबाट सरुवा भएर मेरो ठाउँमा श्रीखेमराज रेग्मी गएपछि उनको अहं र बढी घमण्डको कारण शिक्षामन्त्रालयमा फेरि समस्या खडा हुनगएर मन्त्रालय सम्हाल्नै नसकिने अवस्थामा पुगेपछि मलाई शिक्षामन्त्रालयको समस्या समाधान गर्न मन्त्रिपरिषद्ले तीन महिनाको छोटो अवधिभित्र नै सामान्य प्रशासन मन्त्रालयबाट फेरि शिक्षामन्त्रालयमा सरुवा गरेको थियो । म त्यसरी दोहोऱ्याएर कुनै पनि मन्त्रालयमा जान चाहन्नथेँ । बरू म मेरो अवकाश हुने अवधिसम्म बिदामा नै बस्न चाहन्थेँ । त्यसरी मैले नचाहँदा नचाहँदै पनि तत्कालीन शिक्षामन्त्री श्रीअर्जुन नरसिंह के.सी.को हार्दिक आग्रहले उहाँलाई हार्न नसकेर मात्रै म बिदामा नबसेर शिक्षामन्त्रालयमा हाजिर हुनगएको थिएँ ।

शिक्षामन्त्रालयमा दोस्रो पटक गएर हाजिर भएपछि मलाई काम गर्न कुनै खालको अप्ठेरो परेको थिएन । श्रीदेवीप्रसाद ओझा शिक्षामन्त्री हुँदा उनकै कारणले शिक्षामन्त्रालय अन्तर्गतका विभिन्न निकायमा काम गर्ने प्रमुखहरूसँग मेरो सम्बन्ध केही चिसिन गएको थियो । दोस्रो पटक शिक्षामन्त्रालयमा सचिव भएर गएपछि मसँग उनीहरूले सम्बन्ध सुधारेका थिए । उच्चमाध्यमिक शिक्षापरिषद्का तत्कालीन उपाध्यक्ष डा. श्रीतीर्थ खनियाँलाई मन्त्री श्रीदेवीप्रसाद ओझाले हटाएर अर्को मानिस त्यस ठाउँमा ल्याएपछि उनी पनि मसँग रिसाएका थिए । त्यस बेला त्यसमा मेरो केही हात थिएन भन्ने कुरा खनियाँले बुझ्न सकेका थिएनन् । डा. खनियाँले सर्वोच्च अदालतमा रिट हालेपछि फेरि थामिएर उच्चमाध्यमिक शिक्षापरिषद्को उपाध्यक्षमै पुनर्बहाली गरेर काम गर्न शुरुगरेका थिए । दोस्रो पटक म

शिक्षासचिव भएर गएपछि डा. खनियाँले पुरान् कुराको वास्तविकता बुझेर मसँग सम्बन्ध सुधारेका थिए। त्यसपछि भने म शिक्षामन्त्रालयमा सचिव भएर रहुन्जेल डा. खनियाँ र मेरा बीचमा अत्यन्त सुमधुर सम्बन्ध कायम हुनसकेको थियो। त्यसैगरेर प्राथमिक शिक्षा विकास विभागका निर्देशक श्रीअर्जुन बिष्टले पनि पूर्व शिक्षामन्त्री श्रीदेवीप्रसाद ओझाको आड लिएर मसँग जुध्नखोजेका थिए। मैले निजलाई कानूनी कारबाही गरेर ठेगान लगाएपछि उनी आफ्नू तहमा झरेर काम गर्नथालेका थिए। उनी पनि म दोस्रो पटक शिक्षामन्त्रालयमा सचिव भएर गएपछि पुरान् गल्ती नदोहोरिने कुरामा मलाई विश्वास दिलाउँदै मसँग मिलेर काम गर्न राजी भएका थिए। त्यसैगरी श्रीदेवीप्रसाद ओझाका पालामा सम्बन्ध बिग्रिएका अरू राष्ट्रसेवक, प्राध्यापक र शिक्षकहरूसमेत त्यसपटक मसँग नजिक भएर काम गर्न अग्रसर भएका थिए। त्यो सबै हुनुको कारण त्यस बेलाका शिक्षामन्त्री श्रीअर्जुन नरसिंह के.सी. मेरो अनुकूल भएर नै हो।

दोस्रोपटक शिक्षामन्त्रालयमा गएर मन्त्रीसँग समन्वय राखेर मैले अत्यन्त सुझबुझका साथ काम गर्न थालेपछि म जानुभन्दा अगाडि सचिव श्रीखेमराज रेग्मी र मन्त्रीका बीचमा भएको वैमनस्यको कारणले लथालिङ्ग भएको मन्त्रालयको काम क्रमशः सुध्रिएको थियो। मन्त्री र सचिवको झगडाले केवल मन्त्रालय, विभाग र कार्यालयहरूका कामहरूमात्रै नबिग्रिएर अन्तर्राष्ट्रिय क्षेत्रबाट शिक्षाको विकासका लागि प्राप्त हुने सहायतामा समेत अत्यन्त नकारात्मक प्रभाव परेको थियो। म गएपछि मैले राष्ट्रिय र अन्तर्राष्ट्रिय दुवै स्तरमा सम्बन्ध सुधार्ने काम गरेको थिएँ। त्यस बेला विदेशी दातृराष्ट्र र संस्थाहरूमा विश्वबैङ्क, डेनिडा, स्विस सहायतानियोग, युनिसेफ, स्विडेन, नर्वे र यूरोपियन यूनियनसमेतले सहायता र ऋणसमेत दिन रोकेका थिए। म दोस्रो पटक शिक्षामन्त्रालयमा गएर सबै स्वदेशी र विदेशी विशेषज्ञ, दाता र सल्लाहकारहरूसमेतसँग भेटेर छलफल गरेपछि सहायता पुनः प्राप्त हुने वातावरण बनेको थियो। त्यसका लागि तुरुन्तै अमेरिकाको वाशिङ्टनमा रहेको विश्वबैङ्कको प्रधानकार्यालयमा गएर सम्बन्धित अधिकारीहरूसँग कुरा गरेपछिमात्रै अरू दातृराष्ट्र र संस्थाहरूसँग कुरा गर्न सजिलो हुने भन्ने राय प्राप्त भएपछि मैले सोही कुरा तत्कालीन शिक्षामन्त्रीलाई जानकारी गराएको थिएँ। वास्तवमा विश्वबैङ्कबाट सीड

मनीको रूपमा ऋण वा आर्थिक सहयोग प्राप्त नभएमा अरू अन्तर्राष्ट्रिय दातृराष्ट्र र संस्थाहरूले कुनै प्रकारको सहयोग नगर्ने अन्तर्राष्ट्रिय प्रचलन भएको हुँदा पनि रोकिएर रहेको सबैतिरको सहयोग फेरि खुलाउन विश्वबैङ्कको अनुकूल स्वीकृति आवश्यक थियो ।

त्यसरी विश्वबैङ्कमा गएर कुरा नगरीकन कतैबाट पनि सहयोग प्राप्त नहुने भएपछि विश्वबैङ्कमा गएर कुरा गर्न मलाई नै पठाउने कुरा मन्त्रिपरिषद्बाट निर्णय भएको थियो । मलाई गृहमन्त्रालयबाट प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाले आफू प्रधानमन्त्री हुने बित्तिकै मिति २०५४ साल माघ २ गते अन्यायपूर्वक सरुवा गरेर सामान्य प्रशासनमन्त्रालयमा पठाएपछि म प्रधानमन्त्रीले जति सुकै पटक बोलाए तापनि भेट्न गएको थिइन । उनको बुद्धि र विवेकविनाको कामकारबाहीले म उनलाई भेट्न नै चाहन्नथेँ । त्यस्ता प्रधानमन्त्रीसँग भेटेर काम गर्नुभन्दा टाढै रहनु श्रेयस्कर भन्ने मैले ठानेको थिएँ । त्यसरी बर्ष दिनसम्म प्रधानमन्त्रीले आग्रह गरेर भेट्न बोलाउँदा पनि म आफ्नै अडानमा बसिरहेको थिएँ ।

त्यसै बेला मलाई मन्त्रिपरिषद्ले अमेरिकामा गएर विश्वबैङ्कसँग कुरा गर्न भनेर नेपालकातर्फबाट प्रतिनिधि तोकेर निर्णय गरेको थियो । त्यसो भए तापनि म सजिलैसँग अमेरिका जाने पक्षमा थिइन । उक्त निर्णयपछि प्रधानमन्त्रीले बारम्बार भेट्न मलाई बोलाएका थिए । त्यसबाट पनि म उनलाई भेट्न नगएपछि उनले आफ्नू पी.ए. श्रीगोकर्ण पौडेललाई गाडी र गाड सहित शिक्षामन्त्रालयमा मलाई लिन पठाएका थिए । त्यसरी लिन पठाउँदा पनि मैले जान नमानेपछि पि.ए. श्रीगोकर्ण पौडेलले मलाई प्रधानमन्त्रीको तर्फबाट पहिले गरेको गल्ती र भूलको क्षमा माग्दै जसरी पनि प्रधानमन्त्रीलाई भेटिदिनुपऱ्यो भन्ने अन्तिम आग्रह गरेपछि म बाध्य भएर प्रधानमन्त्रीलाई भेट्न सिंहदरबार गएको थिएँ ।

त्यसरी लामू अन्तरालपछि प्रधानमन्त्री कोइरालासँग मेरो भेट भएपछि उहाँले गृहमन्त्रालयको सचिवबाट सामान्यप्रशासन मन्त्रालयको सचिवमा छोटो अवधिमा नै मलाई सरुवा गरेकोमा मसँग क्षमा याचना गर्नुभएको थियो । सो सरुवा कोइरालालाई थाहा नै नदिएर गरिएको भन्ने पनि उहाँको भनाइ थियो । प्रधानमन्त्री सामर्थ्यहीन भएपछि वरिपरि बसेका निहित स्वार्थीहरूले

ठूलाठूला निर्णयहरू पनि प्रधानमन्त्रीको जानकारीविना नै गराएर आफ्नू स्वार्थपूर्ति कसरी गर्दारहेछन् भन्ने यो एउटा ज्वलन्त उदाहरण हो। प्रधानमन्त्री आफैँले सो कुरा मलाई भनेको हुँदा विश्वास नगर्ने ठाउँ पनि थिएन।

त्यसरी लामू समयदेखि प्रधानमन्त्री र मेरा बीचमा चिसिएको सम्बन्ध त्यस दिन उहाँले क्षमा याचना गरेपछि र अनभिज्ञतासमेत दर्शाएपछि पुनः सुध्रिनगएको थियो। मन्त्रिपरिषद्को निर्णय अनुसार अमेरिका गएर विश्वबैङ्कका उच्च अधिकारीहरूसँग कुराकानी गरेर रोकिएको सहायता जसरी पनि खुलाउन मलाई प्रधानमन्त्री कोइरालाले आग्रह गर्नुभएको थियो। वास्तवमा प्रधानमन्त्री कोइराला र उहाँको मन्त्रिपरिषद्ले म त्यति सक्षम छु भन्ने कुरा कसरी थाहा पाएर मलाई नै विश्वबैङ्कमा कुरा गर्नका लागि त्यसरी खटाएका थिए ? सो कुराबाट म आफैँलाई नै आश्चर्य लागेको थियो। प्रधानमन्त्रीको त्यस प्रकारको अनुनयविनयपछि म आफ्नो अडान छाडेर अमेरिका जान तयार भएको थिएँ। प्रधानमन्त्रीसँग मैले छानेका मानिसहरू साथमा लिएर जान पाउनुपर्छ भनेर सर्त राखेपछि उहाँले मैले छानेका मानिसहरू साथमा लिएर विश्वबैङ्कका अधिकारीहरूसँग कुरा गर्न अमेरिका जान सहमति जनाउनुभएको थियो। तदनुसार शिक्षामन्त्री, डा. तीर्थ खनियाँ र सहसचिव श्रीचुमानसिंह बस्नेतलाई समेत साथमा लिएर जाने प्रस्ताव मन्त्रिपरिषद्मा मैले पठाएको थिएँ। मन्त्रिपरिषद्बाट सोही कुरा स्वीकृत भएरआएको थियो। अमेरिका जाने कारबाही चलिरहेकै बेलामा तत्कालीन शिक्षामन्त्री श्रीअर्जुन नरसिंह के.सी.लाई हटाएर प्रधानमन्त्री कोइरालाद्वारा उहाँका ठाउँमा श्रीकुलबहादुर गुरुङलाई शिक्षामन्त्रीमा नियुक्त गरिएको थियो। त्यसरी अचानक शिक्षामन्त्री फेरिएपछि मलाई मन्त्रालयमा काम गर्न र अमेरिका जानमासमेत अप्ठेरो परेको थियो। त्यसै कारण विश्वबैङ्कका अधिकारीहरूसँग कुरा गर्नजाने मेरो कार्यक्रम केही दिनका लागि परसरेको थियो। नयाँ नियुक्त शिक्षामन्त्री श्रीकुलबहादुर गुरुङसँग केही दिन सँगै काम गरिसकेपछि उनी नयाँ भए तापनि काम सिकेर गर्न खोज्नेजस्ता देखिएका हुँदा उनीसँग बसेर काम गर्न सकिन्छ कि ? भन्ने मलाई लागेको थियो। तर काम गर्दैजाँदा पछि पछि मैले उनलाई त्यसरूपमा पाउन सकिन।



# दोस्रोपटक अमेरिकामा

२०५५ साल पुस २० गते सोमबारका दिन रातको समयमा शिक्षामन्त्रीसहितको प्रतिनिधिमण्डल लिएर गल्फएयरको हवाइजहाज चढेर अमेरिका जाने क्रममा काठमाडौंबाट उडेर दुबईतर्फ म गएको थिएँ। कृष्णपक्षको रात हुँदा हवाइजहाजबाट तल भूमिमा केही पनि देखिँदैनथ्यो। सारा रातभरि हामीहरू अन्धकारमा नै उडिरहेका थियौं। त्यो मेरो दोस्रो पटकको अमेरिकाको यात्रा थियो। प्रथम पटक अमेरिकाको भ्रमण गर्दा संयुक्तराज्य अमेरिकाको राजधानी वाशिङ्टन डी.सी. र विश्वका राष्ट्रहरूको सम्मेलनकेन्द्र संयुक्तराष्ट्रसङ्घको कार्यालय रहेको न्यूयोर्क शहरको पनि मैले भ्रमण गरिसकेको थिएँ। त्यसरी पहिले नै अमेरिकाका महत्त्वपूर्ण स्थानहरूको मैले भ्रमण गरिसकेको भए तापनि संयुक्तराज्य अमेरिका जस्तो विशाल राष्ट्रको भ्रमण गर्ने रोमाञ्चकारी इच्छा भने ममा विद्यमान थियो।

त्यसपटक नेपाल सरकारको तर्फबाट विश्वबैङ्कसँग आर्थिक सहायताको लागि वार्ता गर्न गएको हुँदा मेरो जोश र जाँगर झन् बढेको थियो। म टोलीको प्रमुख भएको र मसँग शिक्षामन्त्रीसमेत जानुभएको हुँदा मेरो हैसियत भिन्नै किसिमले बढेको थियो। हवाइजहाजमा चढेर बेलुकाको खाना खाँदाखाँदै हामीहरू सर्वप्रथम दुबई पुगेर उत्रिएका थियौं। त्यहाँ केही क्षण हवाइजहाज रोकिएको थियो। जहाज इन्धनका साथै यात्रीहरू पनि भरेर उडेको थियो। त्यस पछि आबुधावीको राजधानी बहराइनमा गएर फेरि हवाइजहाज रोकिएको थियो। त्यहाँ पनि केही बेर हामीहरूलाई विश्राम गर्ने मौका जहाजले दिएको थियो। त्यहाँ पनि ओर्लिने र चढ्ने यात्रीहरू प्रशस्तै थिए। केही समयको विश्रामपछि त्यो हवाइजहाज फेरि उड्यो र सोझै संयुक्तअधिराज्य बेलायतको राजधानी लन्डनतर्फ सोझिएको थियो।

त्यसरी हामीहरू काठमाडौंदेखि नै अँधेरी रातमै उडेका थियौं भने आबुधाविबाट लन्डनतर्फ उड्दा पनि हामीहरू उडेको सारा क्षेत्र अन्धकारले नै व्याप्त थियो। हवाइजहाजमा राती यात्रा गर्दा रातभरि नै म सुत्नैसक्तिनथेँ।

त्यहाँ पनि म सुत्नसकेको थिइन। जेटमा हामीहरूलाई सुविधायुक्त बस्ने ठाउँ दिइएको थियो। ओर्कनफर्कन मिल्ने ठाउँ प्रशस्त थियो तापनि रातभरि नै म निदाउनसकेको थिइन र मलाई निद्रा नपरेर अत्यन्त अशान्ति भएको थियो। जता फर्किएर निदाउन खोजे तापनि म निदाउन सकेको थिइन र सारा जीउ दुखिरहेको थियो। यूरोपका देशहरू नाघ्दै हामीहरू हवाइजहाजमा उडिरहेका थियौँ। सोझै अमेरिका जाने हवाइजहाज नपाइएको हुँदा बेलायतको राजधानी लन्डनको हिथ्रो विमानस्थलमा उत्रन हामीहरू उडिरहेका थियौँ। माथि हवाइजहाजबाट हेर्दा यूरोपका आकाशभरि जताततै बादलै बादल देखिन्थ्यो। हावाको चपेटामा परेर त्यो विशाल हवाइजहाज कहिलेकाहीँ कोत्रो हल्लिए झैँ हल्लिने गर्दथ्यो। हवाइजहाज कहिले निकै तल झर्थ्यो र फेरि माथि उक्लिन्थ्यो।

त्यसरी हाम्रो यात्रा चलिरहेको थियो। विनाआधारको यानमा चढेर हामीहरू आँखा चिम्लिएर भगवान्को नाम लिइरहेका थियौँ। आफ्नू छट्पटीलाई बिर्सन हवाइजहाजको झ्यालको पर्दा खोलेर म बाहिरतिर हेर्नेगर्दथेँ। त्यस बेला स्थानीय समय अनुसार बिहानको सात बजेको थियो र बिहान पूर्वबाट झुल्किएका कलिला घामका राता किरणहरूले जेटलाई छोइसकेको थियो। तलको पृथ्वीभने माथिबाट अँध्यारै देखिन्थ्यो।

त्यसै बेला हामीहरू चढेको हवाइजहाज हिथ्रोको धावनमार्गमा उत्रिएको थियो। हामीहरू बिस्तारै बेलायतको भूमिलाई टेक्दै हवाइजहाजबाट बाहिर निस्किएका थियौँ। विमानस्थल भित्रको औपचारिकता पूरा गरेर हामीहरू बाहिर निस्कँदा हाम्रो स्वागत गर्न बेलायतमा रहेको नेपाली राजदूतावासका प्रथमसचिव श्रीप्रदीपकुमार खतिवडासमेतका अधिकृतहरू त्यहाँ पुगेका थिए। नेपाली राजदूतावासको गाडीमा राजदूतावासका अधिकारीहरूसँग बसेर हामीहरूले २ घण्टा लन्डन शहरको चक्कर लगाएका थियौँ। बिहानीपखको लन्डनको वातावरण अत्यन्त चिसो थियो तापनि सूर्यको न्यानो ताप पाएर हामीहरू आनन्दित भएका थियौँ। हामीहरू २ घण्टापछि फर्किएर अमेरिकाको वाशिङ्गटनतर्फ उड्नका लागि फेरि हिथ्रोविमानस्थलमै गएका थियौँ। निर्धारित समयभित्र हामीहरू बृटिशएयरवेजको हवाइजहाज चढेर अमेरिकातर्फ उडेका थियौँ। लन्डन शहर माथिबाट पश्चिमतर्फ उड्दै त्यो हवाइजहाज

मध्याह्नको समयमा घामको प्रखर किरणले चमक्क चम्किँदै फुर्तिका साथ माथिल्लो आकाशमा चढेको थियो । माथि गएर धरतीतर्फ हेर्दा सम्पूर्ण धरती सेतो बादलको ओड्ने ओढेर सुतेकीजस्ती देखिन्थिन् । त्यसैगरी आन्ध्रमहासागर पनि बादलले ढाकिएको थियो । आन्ध्रमहासागरको अपार जलराशिको दर्शन गर्ने मेरो आकाङ्क्षा त्यसै हराएरगएको थियो । ज्ञानी महात्माहरूले सांसारिक मोहबन्धनलाई छाडेर सांसारिक प्रपञ्चबाट माथि उठेर आत्मचिन्तनमा एकाकार भएजस्तै त्यो हवाइजहाज पनि पृथ्वीको जड तुषारो र आवरणका रूपमा रहेको कालो बादललाई पनि नाघेर स्वच्छ निर्मल आकाशमा शान्तभावमा आफ्नू गन्तव्यतर्फ अगाडि बढिरहेको थियो ।

त्यसरी पृथ्वी र समुद्रको अनुपम दृश्य हेर्न नपाएपछि मैले विरक्त बन्दै हवाइजहाजमा प्रदान गरिएको बिहानको खाना खाएर आफ्नै सीटमा ओढ्नेले मुख छोपेर आन्ध्रमहासागर बादलको ओढ्नेभित्र लम्पसार परेर सुतेझैँ म पनि लम्पसार परेर सुतेको थिएँ । ६ घण्टापछि बिउँझिएर झ्यालको पर्दा खोलेर बाहिर हेर्दा हामीहरू चढेको जेट आन्ध्रमहासागरलाई पार गरेर संयुक्तराज्य अमेरिकाको सीमाभित्र पसिसकेको रहेछ । माथि झ्यालबाट हेर्दा अमेरिकाका अग्लाअग्ला गगनचुम्बी भवनहरू, कृषियोग्य भूमिहरू, विशाल हरिया मैदानहरू र हरिया जङ्गलहरू पनि देखिनथालेका थिए । मैले माथिबाटै केही पर वाशिङ्टनको राष्ट्रपति बस्ने भवन ह्वाइट हाउस र त्यहीँ नजिकैको अग्लो धरहरा पनि देखेको थिएँ । हामीहरू चढेको जेट बिस्तारै बिस्तारै फ्ल्याप र पाङ्ग्राहरू निकालेर धावनमार्गमा उत्रिएको थियो । हामीहरू जेटबाट बाहिर उत्रिएर अध्यागमन आदि कार्यालयहरूमा गर्नुपर्ने औपचारिकता समाप्त गरेर आफ्ना सरसामानहरू साथमा लिएर टर्मिनल भवनबाट बाहिर निस्किएका थियौँ ।

हामीहरूसँग शिक्षामन्त्री श्रीकुलबहादुर गुरुङ पनि गएका हुँदा स्वागतार्थ अमेरिकाको राजधानी वाशिङटनमा रहेको नेपाली राजदूतावासका राजदूत श्रीदामोदर गौतम र अरू अधिकारीहरू पनि त्यहाँ गएका थिए । उनीहरूले हाम्रो स्वागत गर्नुका साथै हामीहरूलाई बस्ने व्यवस्था गरिएको होटेलसम्म राजदूतावासकै गाडीमा लिएर गएका थिए । बाटोमा चारैतिर हिउँले ढाकेको धरती, मैदान र विशाल अमेरिकी भवनहरूको अवलोकन गर्दै

हिउँले सेतै ढाकिएका फराकिला अमेरिकी राजमार्गहरूमा गुड्दै साँझपख होटेल नर्मण्डीमा पुगेर हामीहरूले विश्राम गरेका थियौँ।

अर्को दिन हामीहरूले डेनिडाको सहयोगमा नेपालमा सञ्चालित प्राथमिकशिक्षासम्बन्धी कार्यक्रमका सम्बन्धमा सम्बन्धित कार्यालयमा गएर छलफल गरेका थियौँ। वाशिङ्टन पुगेको तेस्रो दिन बिहानको समयमा स्वल्पाहारपछि फुर्सदै भएको हुँदा हामीहरू अमेरिकाको संसदभवन जसलाई क्यापिटल हिल पनि भनिन्छ, हेर्न गएका थियौँ। त्यसबेला संसद चलिरहेको थिएन। तैपनि त्यस संसदभवनमा कार्यरत कर्मचारीहरूसँग भेटेर हामीहरूले कुराकानी गरेका थियौँ। विश्वप्रसिद्ध क्यापिटल हिल वास्तवमा मलाई साँच्चै दर्शनीय र आकर्षक लागेको थियो। केही बेर क्यापिटल हिल र त्यसको विशाल उद्यानमा घुमेर हामीहरूले फोटो खिच्ने र भिडियो क्यामराबाट दृश्य उतार्ने कामसमेत गरेका थियौँ। त्यसपछि क्यापिटल हिलकै अगाडि रहेको सङ्ग्रहालयहरूको क्षेत्रमा हामीहरू गएका थियौँ। विशाल भवनहरू निर्माण गरेर राखिएका विभिन्न पुरातात्त्विक वस्तुहरूको हामीहरूले अवलोकन गरेका थियौँ। त्यसमा राइट बन्धुले निर्माण गरेको प्रथम हवाइजहाजदेखि लिएर नील आर्मस्ट्रङ्गले चन्द्रमाको यात्रा गरेर चन्द्रमाबाट पृथ्वीमा ल्याएको ढुङ्गा र माटोसमेत प्रदर्शनका लागि राखिएको रहेछ।


अमेरिकाको संसदभवन क्यापिटलहिल अगाडि लेखक

अमेरिकाका ती विभिन्न सङ्ग्रहालयहरूको अवलोकन गर्दा पृथ्वीको सृष्टिको प्रथम प्रभातदेखि लिएर अहिलेको ब्रह्माण्डीय विकासको चरम अवस्थासम्मको अवलोकन गर्नपाइएको थियो। ती सङ्ग्रहालयहरूभित्र पसेर हेर्नथालेपछि त्यहीं नै हराइँदोरहेछ। मैले त्यस्तै नै अनुभव गरेको थिएँ। त्यताबाट अब्राहमलिङ्कनको स्मारक र भियतनामयुद्धको बेलामा मारिएका अमेरिकी सैनिकहरूको समाधिस्थल आर्लिङ्टन क्षेत्रमा पनि हामीहरू पोटोम्याक नदी तरेर गएका थियौँ। असङ्ख्य अमेरिकी सैनिकहरूको

विनाउद्देश्य मृत्यु भएको सम्झेर मलाई दुःख लागेको थियो । भियतनामको युद्धमा लाखौँ अमेरिकी सैनिकहरू मारिएका थिए । मानवविनाशक आधुनिक हतियारहरू प्रयोग गरेर असङ्ख्य भियतनामीहरूको हत्या त्यस बेला अमेरिकाले भियतनाममा गरेको थियो । पछि गएर भियतनामी बहादुर तथा राष्ट्रभक्त जनतासँग हार खाएर अमेरिकाले पछि हट्नु परेको लाजलाग्दो अवस्थाको स्मरण त्यो समाधि देखेपछि मलाई भएको थियो ।

मैले २०५४ साल भाद्र १० गते भियतनामको भ्रमण गर्दा पनि त्यस्तै खालको अनुभव गरेको थिएँ । संयुक्तराज्य अमेरिकाले विनाउद्देश्य असङ्ख्य मानिसको भियतनाममा हत्या गरेझैँ हाल इराकमा गरिरहेको लडाइँको पनि त्यस्तै लाजलाग्ने परिणाम हुनसक्ने कुरा सहजै अनुमान गर्न सकिन्छ । आर्लिङ्टनमा रहेको अमेरिकी सैनिकहरूको समाधिस्थलको यात्रापछि हामीहरू त्यहीँ नजिकै बसोवास गरिरहेकी सुश्री कल्पना विष्ट भन्ने नेपाली छात्राको निवासस्थानमा दिउँसोको खाना खान गएका थियौँ । उनी ललितपुर पुल्चोककी विष्टकी छोरी थिइन् र हामीहरूलाई त्यहाँसम्म जाने आउने हवाइजहाजको टिकटको व्यवस्था मिलाउने स्टुडेन्टस् ट्राभल्स्का मालिक श्रीशिवराम प्रसाईंकी साली थिइन् । कल्पनाले आफ्ना मातापिता, भाइ र बहिनीहरूसमेत भएर हाम्रो स्वागत तथा सत्कार गरेकी थिइन् । उनले पूर्णरूपमा नेपाली तरिकाले आफ्नू आवास सजाएकी रहिछन् र हामीहरूलाई पूर्णरूपमा नेपाली परिकार नै तयार गरेर खुवाएकी थिइन् । अत्यन्त सौहार्दपूर्ण वातावरणमा खाना खाएर हामीहरू उनीहरूलाई धन्यवाद दिँदै त्यहीँ नजिकै रहेको प्राथमिकशिक्षाको केन्द्रमा गएका थियौँ ।


अमेरिकामा बसेकी सुश्री कल्पना विष्टको निवासस्थानमा उनका मातापिताहरूसमेतका साथ प्रतिनिधिमण्डल

प्राथमिकशिक्षाको केन्द्रमा गएर अमेरिकामा सञ्चालन भएको प्राथमिकशिक्षाको कार्यक्रम र सञ्चालनका निमित्त तयार भएका नीतिहरूका सम्बन्धमा पनि हामीहरूले जानकारी लिएका थियौँ । त्यस पछि दिनको अपराह्नमा संयुक्तराज्य अमेरिकाको शक्तिशाली रक्षामन्त्रालय रहेको क्षेत्र पेन्टागनको भ्रमण गर्दै साँझपख हामीहरू होटेल नर्मण्डी फर्किएका थियौँ ।

दिनमा घाम लागेको भए तापनि साँझपख चारैतिर हिउँ पर्नथालेको थियो । हामीहरूलाई होटेलबाट निस्कनै नसक्ने गरेर हिउँको चिसोले कक्र्याएको थियो ।

त्यसरी हामीहरूलाई हिउँले अत्यन्त सताएको भए तापनि त्यस रात वाशिङ्टनमा रहेको नेपाली राजदूतको निम्तोमा रात्रिभोजका लागि राजदूतको निवासमा हामीहरूले जानुपर्ने थियो । हामीहरूलाई लिन राजदूतले आफ्नै गाडी पठाएका हुँदा जान र आउन हामीहरूलाई कुनै समस्या परेको थिएन । बाटोमा बाक्लै हिउँ परेर गाडी चलाउन अत्यन्त अप्ठ्यारो भएको थियो । चारैतिर बाक्लै सेतो हिउँ परेको हुँदा सडक, भवन तथा चौरहरू सेताम्मे देखिन्थे । त्यस्तो बाक्लो हिउँमा पनि दक्ष चालकले हामीहरूलाई राजदूतको आवासमा सजिलैसँग पुऱ्याएका थिए । गाडीबाट झरेर आवासतर्फ जाने ठाउँ केही उकालो सिंढी चढेरमात्रै आवासभित्र पुगिने हुँदा त्यहाँ बाक्लो हिउँ परेर हिंड्नै नसकिने भएको थियो । हामी नेपालीहरूले त्यस्तो हिउँ नदेखेका र हिउँमा हिंड्ने बानीसमेत नभएका हुँदा त्यति छोटो दूरी हिंडेर पार गर्न पनि हामीहरूलाई अत्यन्त मुश्किल परेको थियो । हिउँमा लगाउने जुत्ता भिन्नै खालका हुने र हामीहरूले लगाएका जुत्ता साधारण जुत्ता भएका हुँदा पनि हिउँमा टेक्दा चिप्लिएर पछारिने डर थियो । राजदूतको आवासभित्र गएर अत्यन्त न्यानू वातावरणमा नेपाली परिकारका खानाहरू हामीहरूले खाएका थियौं ।

त्यस बेला त्यहाँका राजदूत नेपालका पूर्व मुख्यसचिव श्रीदामोदर गौतम भएका हुँदा मेरो उहाँसँग राम्रो परिचय थियो । नेपालमा हुँदा उहाँ हामीहरूसँग राम्रो खुलेर कुरा गर्नुहुन्नथ्यो र उहाँ आफूलाई अरू सामान्य व्यक्तिभन्दा माथिको ठान्नुहुन्थ्यो । उहाँको पालामा नेपालको निजामतीप्रशासनमा अत्यन्त विचलन आएको थियो । त्यस बेलाको सरकारले गैरकानूनी तरिकाले सेवाबाट हटाइएका राष्ट्रसेवकहरूको सुरक्षा गर्न उहाँले सक्नुभएको थिएन । त्यतिमात्रै नभएर अन्त्यमा सरकारी सेवाबाट उहाँ आफैंलाई रातारात सरकारले अवकाश दिंदा पनि उहाँले थाहा पाउन सक्नुभएको थिएन । उहाँ एक किसिमले असफल भएर नै मुख्यसचिव जस्तो गरिमामय पदबाट हट्नुभएको थियो । पछि तत्कालीन सरकारले

उहाँलाई संयुक्तराज्य अमेरिकाको गरिमामय राजदूत पदमा नियुक्ति गरेर उहाँको आँसु पुछेको थियो । त्यस पछिमात्रै उहाँको मनोबल उठेको जस्तो देखिन्थ्यो । रात्रिभोजको समयमा उहाँले आफ्ना विगतका पीडाहरू हामीहरूसँग सहजरूपमा व्यक्त गर्नुभएको थियो । सायद विदेशमा भएर होला उहाँले नेपालमा उच्चपदमा बस्दाखेरिको जस्तो अहं र घमन्डीपन देखाउनुभएको थिएन । नेपालको तत्कालीन राजनीतिक, आर्थिक, सामाजिक र अन्य विविध विषयमा निकै लामू चर्चाका साथसाथै रात्रिभोज खाएर अबेर रातमा हामीहरू राजदूतकै गाडीबाट होटेल नर्मण्डी फर्किएका थियौँ । फर्किंदा बाटामा अझै बाक्लो हिउँ जमिसकेको हुँदा चालकलाई गाडी चलाउन अत्यन्त कठिन भएको थियो । हिउँमा गाडी चलाउँदा चिप्लिएर दुर्घटना हुने डर भएको हुँदा हामीहरू अत्यन्त सतर्क भएका थियौँ । जसरी तसरी चालकले हामीहरूलाई होटेल नर्मण्डीमा पुऱ्याएका थिए ।

वाशिङ्टन पुगेको चौथो दिन हामीहरूलाई राजदूतावासका प्रथम सचिव श्रीदिनेशराज भट्टराईले अमेरिकाका राष्ट्रपति बस्ने ह्वाइट हाउसको अवलोकन गर्न प्रवेशाज्ञाका साथ हामीहरूलाई बिहानै लिएर गएका थिए । शिक्षामन्त्रीसहितको उच्चस्तरीय नेपालको प्रतिनिधिमण्डल भएकोहुँदा ह्वाइटहाउसका अधिकारीहरूले पनि हाम्रो अत्यन्त सत्कार र आदरसमेत गरेका थिए । हामीहरूलाई राष्ट्रपति बसिरहेकै घरको सम्पूर्ण चोटाकोठाका साथै राष्ट्रपतिको बैठक कोठा, विदेशीहरूलाई भेट्ने ओभल नाम गरेको भव्य कक्ष, विभिन्न राष्ट्रपतिहरू बसेका कक्षहरू, राष्ट्रपतिले खाना खाने र बाहिरबाट आउने ठूलाठूला अतिथिहरूलाई भोज खुवाउने डाइनिङ्ग हल, विदेशीहरूले विभिन्न राष्ट्रपतिहरूलाई उपहारका रूपमा दिएका अमूल्य सामानहरूको सङ्ग्रहालय, राष्ट्रपतिको पुस्तकालय, राष्ट्रपति बसेर पढ्ने अध्ययन कक्ष, राष्ट्रपतिको कार्यालय र राष्ट्रपतिले


ह्वाइटहाउसभित्र राष्ट्रपतिको बैठकमा मोनालिसाको चित्रका अगाडि (बायाँबाट) चुमानसिं, शिक्षामन्त्री र लेखक

गर्ने मन्त्रीसँगको क्याबिनेट बैठकको सभाकक्षसमेत हामीहरूलाई अत्यन्त विस्तृतरूपमा अवलोकन गराइएको थियो। अरू दर्शकहरूलाई ह्वाइट हाउसभित्र फोटो खिच्ने र भिडियो चलचित्र उतार्नेसमेतको कुरामा निषेध गरिएको थियोभने हामीहरूलाई विशेष अतिथिका रूपमा व्यवहार गरेर ह्वाइट हाउसका सम्पूर्ण कक्षहरूको फोटो र भिडियो चलचित्रसमेत उतार्न अनुमति दिइएको थियो। मैले त्यसरी लिएका तस्वीरहरू र भिडियो चलचित्रहरूसमेत मसँग अझै सुरक्षित छन्।

उपर्युक्त अनुसार ह्वाइट हाउसको अवलोकनपछि पश्चिमी द्वारबाट हामीहरू बाहिर निस्किएका थियौँ। त्यस बेला पनि त्यहाँ अत्यन्त बाक्लो हिउँ परिरहेको थियो। हिउँमा चिप्लिने डरले हामीहरू ह्वाइट हाउसबाट बाहिर निस्कनसकेका थिएनौँ। केही बेर ह्वाइट हाउसको बरण्डामा नै हामीहरूले ओत लागेर बस्नुपरेको थियो। त्यस समयमा अमेरिकाका तत्कालीन युवा राष्ट्रपति श्रीबिल क्लिण्टनले आफ्नै कार्यालयकी कर्मचारी कुमारी लिवेन्स्कीसँग अवैध यौनसम्बन्ध राखेको अभियोगमा विश्वभरि नै व्यापक चर्चा परिचर्चा चलिरहेको थियो। सो सम्बन्धी मुद्दा त्यस समयमा संयुक्तराज्य अमेरिकाको अदालतमा चलिरहेको थियो। त्यस काण्डले गर्दा शक्तिशाली तथा फुर्तिला राष्ट्रपति श्रीबिल क्लिण्टन बदनाम भएका थिए। मैले ओलम्पिक खेलको समयमा एटलाण्टामा भेट्ता मेरो उनीप्रति जुन श्रद्धा थियो त्यस बेला लिवेन्स्की काण्डले गर्दा त्यो श्रद्धा मरेरगएको थियो। ह्वाइट हाउसभित्र भ्रमण गर्दा पनि मैले त्यही कुरा संझिरहेको थिएँ।

सन् १९९६ मा ओलम्पिक खेलको समयमा संयुक्तराज्य अमेरिका जाँदा पनि ह्वाइट हाउसलाई मैले बाहिरबाट नै अवलोकन गरेको थिएँ। त्यस बेला अत्यन्त हतार भएकोहुँदा ह्वाइट हाउसभित्र पसेर अवलोकन गर्ने मैले फुर्सदै पाएको थिइन। मैले ह्वाइट हाउसको फोटो र भिडियो बाहिरबाटै खिचेर चित्त बुझाउनुपरेको थियो। फेरि त्यति चाँडै संयुक्तराज्य अमेरिका गएर ह्वाइट हाउसभित्र विस्तृतरूपमा भ्रमण गरेर फोटो र भिडियोसमेत खिच्छुभन्ने कुराको मलाई विश्वासै थिएन। मौका परेर फेरि दोस्रो पटक मैले वाशिङ्टनको भ्रमण गरेको थिएँ र मलाई इच्छा लागे अनुसारको

फोटो र भिडियो खिच्नेसमेत मौका मैले त्यस पटक पाएको थिएँ। त्यसबाट मलाई अत्यन्त सन्तुष्टिको अनुभूति भएको थियो। तर त्यस विशाल ह्वाइट हाउसमा बस्ने युवा राष्ट्रपति श्रीबिल क्लिण्टनभने आफ्नै कार्यालयकी कर्मचारी सुश्री लिवेन्स्कीसँगको यौनदुराचारको मुद्दा खेपेर भ्रोक्राएर बसेका थिए।

त्यस बेला सबै अमेरिकीहरूले राष्ट्रपति श्रीबिल क्लिण्टनमाथि औँलो ठड्याएर प्रश्न गरिरहेका थिए, के यही हो त शक्तिशाली अमेरिकाका राष्ट्रपतिको चरित्र ? वास्तवमा पश्चिमी जगत्मा माथिल्लो ओहदामा पुगेका व्यक्तिहरूको मात्रै शुद्ध चरित्रको आवश्यकता ठानिन्छ। तर तल्लो तहका व्यक्तिहरूले जे गरे पनि हुने हो त ? त्यो पनि त्यहाँ एउटा प्रश्नवाचक चिन्हकै रूपमा खडा भएको मैले पाएको थिएँ। हाम्रो नेपाल जस्तो अल्पविकसित र पछौटे राष्ट्रमा तल्लो तहका व्यक्तिहरूको शुद्ध चरित्रको अपेक्षा गरिन्छ भने माथिल्लो तहका व्यक्तिहरूको चरित्रमाथि कसैले पनि औँलो ठड्याउन सक्तैन। यही कुरा विकसित राष्ट्रहरू र विकासोन्मुख राष्ट्रहरूका बीचमा रहेको पार्थक्य हो जस्तो त्यस बेला मलाई लागेको थियो। जुन व्यक्तिले आफूलाई नै जित्न सकेको छैन र आफ्ना इन्द्रियहरूलाई नै वश गर्नसकेको छैनभने त्यस्ताले राष्ट्रपतिको पद ता के संसारै जिते पनि के फाइदा ? त्यस्ता व्यक्तिको संसारमा कहिल्यै पनि सन्मान हुँदैन।

सन् १९९६ मा एटलाण्टामा मैले भेटेका श्रीबिल क्लिण्टन, उनकी पत्नी श्रीमती हिलारी क्लिण्टन र छोरी सुश्री चेल्सीलाई त्यस बेला संझिएको थिएँ। त्यति सानू सुखी परिवारमा श्रीबिल क्लिण्टनको चरित्रले गर्दा केही मनोमालिन्य र आपसी अविश्वाससमेत सिर्जना भएकोमा मलाई दुःख लागेको थियो। जुनसुकै राष्ट्रको पनि राष्ट्रप्रमुख र सरकारप्रमुख नैतिकवान् हुनुपर्छ, नभए राष्ट्र तिनीहरूकै सिको गरेर अधःपतनतिर जान्छ भन्नु कुनै अत्युक्ति ठहरिने छैन। त्यस समयमा संयुक्तराज्य अमेरिकाका वासिन्दाहरू राष्ट्रपति क्लिण्टनको दुश्चरित्रका कारण संसारका सामू नतमस्तक भएर हिंडेका देखिन्थे।

उपर्युक्त अनुसार ह्वाइट हाउस र ह्वाइट हाउसभित्र बस्ने राष्ट्रपति श्रीबिल क्लिण्टनको सम्बन्धमा शोच्दै ह्वाइट हाउस बाहिर हिउँ परिरहेकै



अमेरिकामा

भए तापनि म अरूका साथसाथै लागेर बाहिर निस्किएको थिएँ । त्यहाँबाट हामीहरू विश्वबैङ्कका अधिकारीहरूसँग कुरा गर्न विश्वबैङ्कको केन्द्रीय कार्यालयमा गएका थियौँ । त्योभन्दा पहिले रोकिएको नेपालको प्राथमिक–शिक्षाका निमित्त विश्वबैङ्कबाट उपलब्ध गराइने आर्थिक सहायता र ऋणका सम्बन्धमा पनि आवश्यक कुरा मिलाई हामीहरू बेलुकीपख होटेल नर्मण्डी फर्किएका थियौँ ।



वाशिङ्टनस्थित विश्वबैङ्कको केन्द्रीय कार्यालयमा (बायाँबाट) लेखक, डा. तीर्थ खनियाँ र मन्त्री कुलबहादुर गुरुङ

त्यसरी विश्वबैङ्कसँग हामीहरूले सहायता उपलब्ध गराउने सम्बन्धमा अन्तिम चरणको वार्ता पनि समाप्त गरेर त्यहाँ गएको आफ्नू काम पूरा गरेका थियौँ । अर्को दिन अर्थात् पाँचौँ दिन बिहान सबेरै नै नेपाली राजदूतावासमा गएर राजदूत गौतमसँग र अन्य मित्रहरूसँग पनि बिदावारी भएर हामीहरू मध्याह्नमा वाशिङ्टनबाट हवाइजहाजद्वारा सान्फ्रान्सिस्कोतर्फ प्रस्थान गरेका थियौँ । वाशिङ्टनबाट सान्फ्रान्सिस्कोतर्फ उडेपछि हामीहरू चढेको हवाइजहाज फन्को मार्दै अनन्त आकाशको गहिराइमा उक्लिएको थियो । उक्त हवाइजहाज कहिले बादलभित्र छिर्दथ्यो भने कहिले बादलमाथि निस्किएर सफा नीलो आकाशमा विचरण गर्दथ्यो । कहिले हावाको भुमरीभित्र परेर कोक्रो हल्लिएझैँ हल्लिएर हामीहरूलाई अत्याउने गर्दथ्यो । बादल र हावाको भुमरीबाट माथि उठेपछि हवाइजहाजले आफ्नू गति लिएको थियो र तलमाथि नगरी उड्न थालेको थियो । उडेर केही पर गएपछि बादलको कालो पर्दा फाटेको थियो र मैले जहाजको झ्यालबाट तलको धरती देख्न पाएको थिएँ । त्यस बेला अमेरिकामा हिउँ पर्ने समय भएको हुँदा सम्पूर्ण जमीन हिउँले सेतै ढाकिएको थियो । मानौँ सेतो हिउँको ओड्ने ओढेर सम्पूर्ण अमेरिकी धरती गुटुमुटु भएर सुतिरहेकी जस्ती देखिन्थिन् । कतै कतै सेतो हिउँको सतहमाथि सूर्यको चम्किलो किरण पर्दा सप्तरङ्गी सुन्दर दृश्यसमेत देखिन्थ्यो ।

म संयुक्तराज्य अमेरिकाको सम्पूर्ण धरती घुमेर हेर्न चाहन्थेँ । मेरो इच्छा संसारमा सबभन्दा विकसित राष्ट्र अमेरिकाको सम्पूर्ण भागको भ्रमण गर्ने थियो । मैले त्यसरी सम्पूर्ण भाग घुमेर हेर्ने मौका नपाएको भए

तापनि त्यस पटकको यात्रामा वाशिङ्टनदेखि सान्फ्रान्सिस्कोसम्मको भाग अर्थात् आन्ध्रमहासागरदेखि प्रशान्त महासागसम्मको अमेरिकी धरती आकाशबाटै भए पनि अवलोकन गर्न मैले पाएको थिएँ। माथिबाट हेर्दा कहीँ डरलाग्दा चट्टान, कहीँ विशाल नदीहरू, कहीँ उर्वरा सस्यश्यामल विशाल मैदानहरू र कहीँ विशाल तलाउहरू पनि मैले देखेको थिएँ।

त्यसरी ७ घण्टा लाम् उडानको अवधिभरि हवाइजहाजमा नै बसेर मैले यात्रावृत्तान्त लेखेको थिएँ। हवाइजहाजले क्रमशः तल ओर्लिने क्रम शुरुगरेपछि मैले जहाजको झ्यालबाट हेर्दा सान्फ्रासिस्कोको धरती देखेको थिएँ। मैले माथिबाट लामालामा विशाल पुलहरू, भव्य भवनहरूले युक्त शहरहरू, थुम्काथुम्की परेको पहाडी भूदृश्य भएको सान्फ्रान्सिस्को भूमि र नजिकै अगाध जलराशि भएको नीलो प्रशान्त महासागरलाई पनि देखेको थिएँ। बिस्तारै आफ्नू गतिलाई सीमित गर्दैलगेर हामीहरू चढेको हवाइजहाज समुद्रको किनारामा रहेको अन्तर्राष्ट्रिय धावनमार्गमा उत्रिएको थियो। त्यहाँको अध्यागमन कार्यालयबाट बाहिर निस्किएर एउटा ट्याक्सीमा चढेर समुद्रको किनारै किनार सान्फ्रान्सिस्को शहरको सुन्दर दृश्यावलोकन गर्दै साँझपख हामीहरू हयात होटेलमा गएर बसेका थियौँ।

होटलमा केही बेर आराम गरेपछि त्यस शहरको दृश्यावलोकन गर्न हामीहरू होटेलबाट बाहिर निस्किएका थियौँ। ओरालो परेको भूबनौटमा भूमिको स्वरूप अनुसार बनेका अग्ला अग्ला भव्य सुन्दर घरहरूको बीचबाट हामीहरू प्रशान्त महासागरको किनारातर्फ गएका थियौँ। प्रशान्त महासागरकै किनारामा निर्माण गरिएको त्यो शहर अत्यन्त सुन्दर देखिन्थ्यो। साँझमा सूर्यको सुनौलो किरण प्रशान्त महासागरमा परेर त्यसको प्रतिबिम्ब शहरभरि फैलिँदा त्यो सुन्दर शहर अझ सुन्दर देखिएको थियो। रातको समयमा पनि झिलिमिली बिजुलीबत्तीको प्रकाशले सिंगारिएको त्यो शहरको प्रतिबिम्ब छातीभरि पहिरिएर प्रशान्त महासागर गहनाले झकिझकाउ भएकी सुन्दरी जस्तो देखिन्थ्यो। एकातिर त्यसरी साँझको समयमा प्रशान्त महासागरमा परेको सूर्यको सुनौलो बिम्बको प्रतिबिम्बले सान्फ्रान्सिस्को शहर सुरम्य देखिन्थ्यो भने अर्कातिर रातमा सान्फ्रान्सिस्को शहरमा बलेको चकाचौधपूर्ण बिजुलीको प्रतिबिम्ब प्रशान्तमहासागरमा परेर सागर शोभायमान भएको पनि देखिन्थ्यो।

त्यसरी त्यो शहर र सागरका बीचमा सौन्दर्यको आदानप्रदान अहर्निश भइ नै रहँदोरहेछ । हामीहरूले त्यो सुन्दर दृश्यावलीको अवलोकन गर्दै एक रात सान्फ्रान्सिस्को शहरमा बिताएका थियौँ ।

अर्को दिन सबेरै उठेर हामीहरूले सान्फ्रान्सिस्को शहरको बजारमा गएर केही सामानहरू किनमेल गरेका थियौँ । मैले एउटा यहूदीको हीरा पसलमा गएर श्रीमतीका लागि कानमा लगाउने हीराको टप किनिदिएको थिएँ भने अरू मित्रहरूले पनि त्यसै गरी विभिन्न सामानहरू किनेका थिए । बिहान बजारको परिक्रमा गरेर दिनको मध्याह्न समयमा हामीहरू प्रशान्त महासागरको लामृ उडानका लागि सान्फ्रान्सिस्को शहरबाट एयरपोर्टतर्फ प्रस्थान गरेका थियौँ । एयरपोर्टभित्र हामीहरूले केही समय त्यहाँ रहेको सुन्दर बजारको परिक्रमा पनि गरेका थियौँ । मैले घुमेका संसारभरिका एयरपोर्टभित्र त्योभन्दा सुन्दर र व्यवस्थित बजार कहीँ पनि देखेको थिइन । अत्यन्त मनमोहक तरिकाले सजाइएको त्यस बजारमा आफूलाई तत्कालै आवश्यक पर्ने केही मालसामानहरू खरिद गरेर अपराह्न हुँदा हामीहरू त्यहाँबाट प्रशान्तमहासागर पारगर्दै दक्षिण कोरियाको राजधानी सिउलतर्फ उडेका थियौँ ।

त्यसपछि जहाजले फन्को मार्दै हामीहरूलाई प्रशान्त महासागर माथिको अनन्त गहिरो आकाशमा पुऱ्याएको थियो । प्रशान्त महासागर आन्ध्र महासागरभन्दा धेरै नै फराकिलो र गहिरो पनि भएको कुरा भूगोलको अध्ययनबाट थाहा हुन्छ । त्यस दिन आकाश बादलले नढाकिएर सम्पूर्णरूपमा खुला थियो । हवाइजहाजको झ्यालबाट तल हेर्दा नीलो विशाल प्रशान्त महासागर जताततै फैलिएको देखिन्थ्यो । नीलो महासागरमा केही पानीजहाजहरू र मस्तुल भएका केही साना जहाजहरू पनि आफ्ना गन्तव्यतिर बिस्तारै बिस्तारै हिँडिरहेका देखिन्थे । प्रशान्त महासागरको अनन्त जलराशिमा ठूलाठूला छालहरू उर्लिरहेका माथिबाटै देखिन्थे । एउटा विशाल छाल अगाडि बढ्थ्यो र त्यसका पछिपछि फेरि सैयौँ छालहरू पछि लागेर आउँथे । ती सबै छालहरू आखिरी किनारामा पुगरे शान्त हुन्थे । त्यसै गरेर प्रशान्त महासागरमा अनन्त कालदेखि ज्वारभाटाहरू उठ्तै बस्तै गरिरहेका छन् र यो क्रम अनन्त कालसम्म चली नै रहने छ ।

त्यसैगरेर हामीहरू पनि यो सृष्टिचक्रको पार पाइनसक्नु छालमा परेर कहिले कुनै योनिमा र कहिले कुनै योनिमा घुमिरहेका छौं । यस दुश्चक्रबाट पार पाउन अत्यन्त मुश्किल छ । यस दुश्चक्रका सम्बदन्धमा श्रीमद्भागवतको षष्ठस्कन्धको पन्ध्रौं अध्यायको तेस्रो श्लोकमा यस्तो कुरा लेखिएको छ । जस्तै – 'यथा प्रयान्ति संयान्ति स्रोतो वेगेन वालुकाः । संयुज्यन्ते वियुज्यन्ते तथा कालेन देहिनः ॥' अर्थात् भेलमा बगेका बालुवाका कणहरू कहिले एकै ठाउँमा जम्मा हुन्छन् र फेरि कहिले बाढीमा परेर छुट्टिएर टाढाटाढा पुग्दछन् । हाम्रो जीवन पनि त्यस्तै भाग्यको ज्वारभाटामा परेर कहिले मिल्ने र कहिले छुट्टिने काम अनवरतरूपमा गरी नै रहन्छ ।

प्रशान्त महासागरको माथिबाट उड्न थालेपछि हामीहरूलाई दिनको खाना हवाइजहाजमा खुवाइएको थियो । दक्षिण कोरियाको राजधानी सिउल पुग्नलाई अझै धेरै बेर उड्नु पर्ने भएको हुँदा म सुतेको थिएँ । केही घण्टा मस्तसँग सुतेर उठ्ताखेरि घामको पहेँलो किरण झ्यालबाट भित्र पसिरहेको मैले देखेको थिएँ । त्यसरी मस्त निदाएर उठ्ने बित्तिकै घामको कलिलो प्रकाश जहाजभित्र पसेको हुँदा मैले रातभरि सुतेर बिहान उठेको सम्झिएर बाथरुममा गएर दाँत माझ्नेदेखि स्नान गर्ने काम पनि समाप्त गरेर म बाहिर निस्किएको थिएँ । आफ्नू सीटमा आएर बसेपछि यताउति हेर्दा मैले नुहाएको देखेर सबै साथीहरू हाँसिरहेका थिए । मैले जिज्ञासा व्यक्त गर्दा अहिले भर्खर साँझ पर्दैछ, बिहान भएको छैन भनेर साथीहरूले भनेपछि म झल्याँस्स भएको थिएँ । त्यसपछि त्यसै बिषयलाई लिएर एक छिन हाँस्ने काम पनि भएको थियो ।

त्यसपछि म फेरि झ्याल खोलेर अस्ताउनलागेको सूर्यको दृश्य हेर्न थालेको थिएँ । सूर्यको पहेँलो छाया परेर सम्पूर्ण प्रशान्त महासागर सुनौलो देखिएको थियो । सूर्यका किरणमा रङ्गिँदै प्रशान्त महासागरका असङ्ख्य छालहरू माथि उठ्ने र तल झर्ने गरिरहेका थिए । माथिको अनन्त आकाशबाट विशाल नीलो प्रशान्त महासागर हेर्दा म आफैँ स्वप्नसंसारमा पुगेजस्तो त्यसबेला मलाई लागेको थियो । टेक्ने र समाउने पनि कुनै आधार नभएको विशाल जेटमा चढेर उडिरहँदा अनौठो लागेरआउँथ्यो । हामीहरू उड्दाउड्दै दिन र रात छुट्याउने काल्पनिक रेखा, जसलाई Date Line भनिन्छ ।

अङ्ग्रेजी शब्दकोशमा यसलाई "The line east & west of which the date differs the 180th meridian with deviations" भनेर उल्लेख गरेको पाइन्छ । त्यसरी Date Line लाई पनि हामीहरूले उड्दाउड्दै पार गरिसकेका थियौँ । त्यही रेखा काटेपछि हाम्रा दिनहरू पनि घटबढ हुने गर्दछन् । हामीहरू हवाइजहाजमा उडेर पूर्वबाट पश्चिमतर्फ जाँदा दिन बढेको हुन्छ भने पश्चिमबाट पूर्वतर्फ उडेर आउँदा दिन घटेर जान्छ । त्यसैगरेर हाम्रा कहिले दिन लामा हुन्छन्भने कहिले रात लामा हुन्छन् ।

त्यसरी हामीहरू संयुक्तराज्य अमेरिकाको सानफ्रान्सिस्कोबाट लगातार ११ घण्टा उडिरहेका थियौँ । उड्दाउड्दै जेटमा घाम अस्ताएका थिए । हामीहरू त्यसबेला चीन र जापानको बीच समुद्रबाट दक्षिण कोरियातर्फ उडिरहेका थियौँ । झमक्क साँझ परिसकेको थियो र जेटभित्र बत्तीहरू बालिएका थिए । त्यसैबेला जहाजमा हामीहरूलाई रातको खाना पस्किइएको थियो । खाना खाँदाखाँदै जेट तल तल झर्दै कोरियाको राजधानी सिउलको धावनमार्गमा उत्रिने सुरले कोल्टो परेर बाङ्गिएको थियो । एकै छिनमा सिउल धावनमार्गमा हवाइजहाज उत्रिएको थियो र हामीहरू केही क्षण आराम गर्न एयरपोर्ट भित्रको प्रतीक्षालयमा गएका थियौँ । केही यात्रीहरू त्यहीँ उत्रिएका थिए । त्यसै बीचमा हवाइजहाजभित्र सरसफाई गर्ने कामका साथै त्यहाँबाट हवाइजहाजमा चढ्ने यात्रीहरूलाई पनि चढाउने काम भएको थियो । केही छिन रोकिएर नयाँ यात्री, इन्धन र हामी पुराना यात्रीहरूसमेतलाई लिएर त्यो जहाज सिउलको धावनमार्गबाट सिङ्गापुरतर्फ उडेको थियो । निकै रात भइसकेको हुँदा अँधेरी रातलाई आफ्ना जाज्वल्यमान प्रकाशले चिर्दै जेट माथिल्लो आकाशमा पुगेर सोझै सिङ्गापुरको धरतीतिर सोझिएको थियो । मैले जेटको झ्यालबाट बाहिर चियाएर हेर्दा सबैतिर अन्धकारैअन्धकार देखेको थिएँ । तल समुद्रमा कहीँकहीँ पानीजहाजका बत्तीहरू झल्याकझुलुक देखिन्थे ।

केही घण्टाभित्रै हामी चढेको जेट सिङ्गापुरको चाङ्गी अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएको थियो । मध्यरात पनि नाघिसकेको हुँदा हामीहरूलाई निद्राले ग्रस्त पारिसकेको थियो । अध्यागमन आदिको काम समाप्त गरेर विमानस्थलबाट हामीहरू सिङ्गापुर शहरमा गएर एउटा होटेलमा बसेका

थियौँ । हामीहरू अबेर रातमा सुतेका हुँदा अर्को दिन केही ढिलो उठेका थियौँ । बिहानको नित्यकर्म सिध्याएर स्वल्पाहारपछि अन्तर्राष्ट्रिय पर्यटकका रूपमा अत्यन्त सहजताका साथ हामीहरू अवलोकनका लागि सिङ्गापुरको भव्य तथा स्वच्छ बजारमा निस्किएका थियौँ । हामीहरू बजार घुम्दैघुम्दै सामान्यरूपमा नेपालीले किनमेल गर्ने मुस्तफाको डिपार्टमेन्टल स्टोरमा गएर आफूलाई चाहिने सरसामानहरू किनेर आफूसँग भएका विदेशी मुद्राहरू त्यहीँ नै बुझाएर हलुका भएका थियौँ । दिनभरि किनमेल र बजारको अवलोकन गरेर बेलुका होटेलमै गएर रातको खानापछि हामीहरूले लामॣ उडानको थकाइमार्दै आराम गरेका थियौँ ।

त्यसरी संयुक्तराज्य अमेरिकादेखि लिएर सिङ्गापुरसम्मको लामॣ उडानपछि त्यहाँबाट २०५५ साल पुस २९ गते बिहानै हामीहरू काठमाडौंतर्फ उड्नका लागि चाङ्गी अन्तर्राष्ट्रिय विमानस्थलतर्फ  गएका थियौँ । नेपाली जेटमा चढेर बिहान १० बजे सिङ्गापुरबाट हामीहरू थाइल्याण्डको राजधानी ब्याङ्कक हुँदै काठमाडौंतर्फ उडेका थियौँ । माथिबाट हेर्दा समुद्रले घेरिएको हराभरा मलेशिया, थाइल्याण्ड, म्यान्मार र बङ्गलादेशको भूमिलाई नाघ्दै हामीहरू हिन्दमहासागरमाथि उडेका थियौँ । हामीहरू चढेको जेट हिन्दमहासागरलाई पार गर्दै भारतको कलकत्ता माथिबाट सोझै नेपालतर्फ सोझिएको थियो । दिनको अपराह्न हुँदा चारकोशे झाडीको माथिबाट महाभारतका शृङ्खलाहरूलाई नाघ्दै उत्तरमा देखिने उच्च सेता हिमशृङ्खलाहरूको अवलोकन गर्दै हामीहरू चढेको हवाइजहाजले त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा प्रवेश गरेको थियो ।

२०५५ साल पुस २० गतेदेखि लिएर २९ गतेसम्मको पूर्वबाट पश्चिम उडेर अमेरिकाको भ्रमण समाप्त गरेर अमेरिकाबाट फेरि पूर्वतर्फ उडेर पृथ्वीको एक फन्को पूर्ण गरेपछि हामीहरू काठमाडौं फर्किएका थियौँ । त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा पुऱ्याउनुपर्ने सबै कानूनी प्रक्रिया पूरा गरेर हामीहरू साँझपख आआफ्ना वाहनहरूमा चढेर घर फर्किएका थियौँ । हाम्रो १० दिनको यात्रा सफलताका साथ पूर्ण भएको थियो । त्यसरी तत्कालीन सरकारको निर्णय र तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाको विशेष आग्रहमा शिक्षामन्त्रालय अन्तर्गतको प्राथमिक शिक्षाको विकासका लागि आवश्यक पर्ने आर्थिक सहायता र ऋणको समेत व्यवस्था विश्वबैङ्कसँग

मिलाएर काठमाडौं फर्कन पाएकोमा मलाई अत्यन्त खुशीको अनुभव भएको थियो ।

उपर्युक्त अनुसार विश्वबैङ्कसँगको सम्बन्ध सुधारेर काठमाडौं फर्किएपछि मैले फेरि शिक्षामन्त्रालयको आफ्नू कार्यभार सम्हालेको थिएँ । मन्त्री श्रीकुलबहादुर गुरुङ र मसमेत बाहिर रहेका अवधिका कामहरू त्यसै थुप्रिएर बसेका हुँदा रातदिनै लगाएर मैले काम गर्नुपरेको थियो । त्यसबेला जिल्लाहरूमा माओवादीको आतङ्कको समस्या अत्यन्त उग्ररूपमा बढेको हुँदा शिक्षाको क्षेत्रमा पनि त्यसको प्रभाव परेको थियो । धेरै जिल्लाका शिक्षकहरू माओवादीको ज्यादती सहन नसकेर शिक्षामन्त्रालयमा नै हाजिर भएर बसेका थिए । मन्त्रालयमा हाजिर हुन खोज्ने शिक्षकहरूको सङ्ख्या बिस्तारै बढ्दैगएको थियो । त्यसरी एकातर्फ जिल्लाका विद्यालयहरूमा शिक्षकहरूको अभावले पठनपाठनको काम रोकिनगएको थियो भने अर्कातर्फ मन्त्रालयमा धेरै शिक्षकहरूलाई हाजिर गराएर तलबभत्ता खुवाउनुपर्ने भएको हुँदा मन्त्रालयमा समेत समस्या उत्पन्न भएको थियो । त्यसप्रकारले माओवादीबाट उत्पन्न भएको शैक्षिक समस्याका साथसाथै मन्त्रालय र अन्तर्गतका अरू समस्याहरूले पनि मलाई सताएको थियो । शिक्षामन्त्री श्रीकुलबहादुर गुरुङ बाहिरबाट हेर्दा सोझा र भलाद्मीजस्ता देखिए तापनि भित्रीरूपमा उनी त्यस्ता थिएनन् । उनी प्रशासनिक ज्ञान कत्ति पनि नभएका र निर्णय गर्ने क्षमता पनि नभएका व्यक्ति हुँदा मन्त्रीबाट खास कुनै सहयोग पाउन मैले सकेको थिइन । आफ्नू सीमित स्वार्थमा घेरिएर काम गर्ने मन्त्रीबाट मलाई सहयोगको साटो समस्या नै खडाभएको थियो । तै पनि जसरी तसरी मैले काम चलाउँदै गएको थिएँ ।

माथि उल्लेख भए अनुसार संयुक्तराज्य अमेरिकाको राजधानी वाशिङ्टनमा रहेको विश्वबैङ्कमा गएर अनौपचारिकरूपमा आर्थिकसहयोगका लागि कुराकानी मिलाएर फर्किने बित्तिकै फेरि शिक्षामन्त्रालयबाट उक्त सहायताको औपचारिक कुराकानी र संझौताका लागि एक उच्च स्तरीय प्रतिनिधिमण्डल संयुक्तराज्य अमेरिकाको राजधानी वाशिङ्टनतर्फ जानुपर्नेभएको थियो । म भर्खरै अमेरिकाबाट लामू उडान उडेर फर्किएको हुँदा फेरि तुरुन्तै सोही कामका लागि अमेरिका जाने पक्षमा थिइन । मेरा

ठाउँमा अरू कुनै अधिकारीलाई पठाउने भनेर मैले मन्त्रीपरिषद्मा प्रस्ताव पेशगरेको थिएँ । शिक्षामन्त्रीको पनि त्यसैमा सहमति थियो । मन्त्रिपरिषद्मा सो प्रस्ताव गएपछि प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाले मलाई बोलाएर फेरि उक्त सम्झौताका लागि मलाई नै नेतृत्व गरेर जान आग्रह गरेका थिए । म नगएमा सम्झौता हुन नसक्ने ठानेर प्रधानमन्त्री कोइरालाले सायद त्यो विशेष आग्रह मसँग गरेका थिएहोलान् । त्यति छोटो ९ दिनको अन्तरालमा फेरि लामू हवाइजहाजको उडानमा उड्दाखेरि मेरो स्वास्थ्य बिग्रिन्छ भन्ने कुरा दर्शाएर अनुरोध गर्दा पनि प्रधानमन्त्री कोइरालाले मेरा ठाउँमा अरू कसैलाई पनि पठाउन नमानेपछि बाध्य भएर मैले नै नेतृत्व गरेर फेरि अमेरिका जानु पर्ने भएको थियो । मैले जानु नै पर्ने भएपछि मेरा साथमा मैले नै रोजेका सहयोगीहरू लान पाउनु पर्छ भन्ने पहिलेको जस्तै शर्त राखेपछि उनले सो मेरो शर्तलाई स्वीकार गरेका थिए । त्यसपटक मेरा साथमा जानेहरूमा राष्ट्रिय योजना आयोका शिक्षामन्त्रालय हेर्ने सदस्य डा. श्रीनिर्मलप्रसाद पाण्डे, उच्चमाध्यमिक शिक्षापरिषद्का सदस्य डा. श्रीश्रीराम लामिछाने, कानूनमन्त्रालयका सहसचिव श्रीउदय नेपाली, शिक्षामन्त्रालय विद्यालयप्रशासन महाशाखाका सहसचिव श्रीचुमानसिंह बस्नेत र अर्थमन्त्रालय वैदेशिक सहायता शाखाका सहसचिव श्रीमाधवप्रसाद घिमिरेसमेत थिए ।





# तेस्रोपटक अमेरिकामा

२०५५ साल फागुन ८ गते शनिबारका दिन मध्याह्न हुँदा इण्डियन एयरलाइन्सको जेट चढेर प्रतिनिधिमण्डललाई साथमा लिएर म नयाँ दिल्लीतर्फ उडेको थिएँ। संयुक्तराज्य अमेरिकाको त्यो मेरो तेस्रो भ्रमण थियो। हामीहरू काठमाडौंबाट उडेर साँझपख दिल्लीस्थित इन्दिरागान्धी अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएका थियौं। हामीहरू केही समयको विश्रान्तिका लागि विमानस्थल नजिकै रहेको होटेल हयातमा गएका थियौं। केही क्षणको विश्रान्तिपछि हामीहरूले अर्को विशाल हवाइजहाज चढेर पश्चिमतिर उड्नु पर्ने भएको हुँदा तुरुन्तै फर्किएर इन्दिरागान्धी अन्तर्राष्ट्रिय विमानस्थलमा हामीहरू गएका थियौं। त्यहाँबाट लुफ्थान्सा एयरलाइन्सको विशाल बोइङ्ग जेट चढेर साँझपख अमेरिकातर्फ जाने क्रममा जर्मनीको राजधानी फ्र्याङ्कफर्टतर्फ उडेका थियौं। हवाइजहाजमा चढिसकेपछि केही क्षणमा नै रात पर्नलागेको जस्तो देखिएको थियो।

पश्चिमतिर उड्दै गएपछि दिन पनि लम्मिदै जानेभएको हुँदा हामीहरू जति जति पश्चिमतिर उड्दैजान्थ्यौं उति उति नै दिन लम्बिँदै गएजस्तो भएको थियो। घामको पहेँलो मन्द प्रकाशले हामी चढेको जेटलाई छोई नै रहेको थियो। त्यो जेट बेलाबेलामा हावाको प्रचण्ड झोक्कामा परेर तल र माथि गरेर हल्लिन्थ्यो। कोक्रामा राखेर बालकलाई हल्लाएझैँ हामीहरूलाई पनि साँझपख जहाजले हल्लाएर सुताउन खोजेको जस्तो भान हुन्थ्यो। हामीहरू चढेको विशाल बोइङ्ग जेट ४५ हजार फिट उचाइमा पुगेर सोझै जर्मनीको फ्र्याङ्कफर्टतिर सोझिएको थियो।

त्यसरी बिस्तारै हवाइजहाजले स्थिर गति लिएर हल्लिन छाडेको थियो। क्रमशः रातको अँध्यारो पनि आकाशभरि फैलिँदै गएपछि हवाइजहाज भित्र झलमल्ल बत्ती बालिएको थियो। त्यसपछि अत्यन्त शान्त तथा अविचल हवाइजहाजमा हामीहरूलाई खानाका विविध परिकारहरू पस्किएका थिए। म केही वर्षदेखि शाकाहारी खाना खाने भएकाले शाकाहारीलाई

भनेजस्तो खाना हवाइजहाजभित्र पाउँन मुश्किल पर्दथ्यो । सामान्य खाना पनि यात्रा गर्नुभन्दा केही दिन पहिले नै आदेश गरेमात्रै त्यस बेला खान पाइन्थ्यो । मैले यात्रा गर्नुभन्दा केही दिन पूर्व नै आदेश गरेको हुँदा मेरा लागि राम्रै खाना उपलब्ध गराइएको थियो । प्रायः त्यस प्रकारका यात्रामा अरू यात्रीहरूलेभन्दा साकाहारी खाना खानेहरूलाई पहिले नै खाना पस्किने चलन हुँदोरहेछ । खाना खानुभन्दा अगाडि नाना थरीका पेयपदार्थहरू पनि हवाइजहाजमा उपलब्ध गराइने हुँदा अरू मसँग गएका मित्रहरू नाना थरीका स्वादिला पेयपदार्थहरू लिएर मस्त भएका थिए । मैले भने सामान्य कोकाकोला र भुइँकटहरको रस लिएर खाना खाएको थिएँ । कुनै प्रतिबन्ध नभएर पनि मैले मासुसमेत खान छोडिदिएको हुँदा अरूले खाएको देखेर पनि मलाई कुनै आकर्षण हुँदैनथ्यो । अरूले खाएको देख्दा म त्यसतर्फ लालायित हुन्नथेँ । बरू अरूले त्यस प्रकारको लागू पेयपदार्थ खाएर झुलिरहँदा म भने शाकाहारी खाना खाइसकेर यात्राविवरण लेखेर मस्त भइरहेको हुन्थेँ ।

आफ्नै मस्तीमा रहेर लेख्ने बानी भएको हुँदा मलाई त्यस प्रकारका लामालामा उडानहरूमा पनि कुनै खालको झर्को र समय बढी भएको भानै हुँदैनथ्यो । लेख्न छाडेका बेला म विमानमा उपलब्ध हुने सिनेमा र भिडियोहरू हेरेर मस्त हुन्थेँ । खास गरेर विशिष्ट श्रेणीमा बस्नेहरूका लागि त्यस प्रकारका छुट्टै प्रदर्शनका उपकरणहरू उपलब्ध गराइएका हुन्थे । आफूलाई जस्तो प्रकारको दृश्य हेर्न इच्छा लाग्थ्यो त्यस्तै प्रकारको दृश्य हेरेर म आफ्नू समयको सदुपयोग गर्नेगर्दथेँ । लुफ्थान्साको हवाइजहाजभित्र खाना उपलब्ध गराउनेदेखि लिएर सबै प्रकारका सेवाहरू उपलब्ध गराउने परिचारिकाहरू अत्यन्त सहयोगी र सहानुभूतिपूर्ण भएका देखिन्थे । कुनै यात्रीलाई कुनै दुःख र कष्ट परेमा तुरुन्तै सेवा र सहयोग गर्न उनीहरू सधैँ तत्पर रहेका देखिन्थे ।

त्यसरी एकै परिवारका जस्ता भएर केही समय जेटभित्र हामीहरूसँगै बस्तछौँ, सँगै खान्छौँ र एक आपसका सुख दुःख पनि साटासाट गर्दछौँ, तर केही क्षणपछि नै फेरि छुट्टिएर आफ्ना आफ्ना गन्तव्यतर्फ लाग्दछौँ । संसारमा जे जस्तो परिपाटी छ त्यसै अनुरूपको परिपाटी हवाइजहाजभित्र पनि

देखिन्छ। त्यस लुफ्थान्साको जेटमा पनि मैले यात्राभरि त्यस्तै खालको अनुभव गरेको थिएँ। हवाइजहाजका परिचारिकाहरूले जहाजभित्रका सम्पूर्ण बत्ती निभाएर सुत्ने वातावरण बनाइदिएपछि मैले पनि सुत्ने प्रयास गरेको थिएँ। लागू पेयपदार्थ सेवन गरेका अरू यात्रीहरू मस्त निदाइसकेका थिए तर मैलेभने कहिले लेखेर र कहिले छट्पटाएर नै रात काटेको थिएँ। जेटले आफ्नू गन्तव्य ताकेर उड्ने काम गरिरहेकै थियो। बिहानीपख जेटको पर्दा खोलेर पूर्व दिशातिर हेर्दा बिस्तारै बिहानको सूर्यको सुनौलो किरण हवाइजहाजको झ्यालमा आएर ठोकिएको थियो। तल पृथ्वीतिर हेर्दाभने त्यस बेलासम्म पनि अँध्यारै देखिन्थ्यो। ४५ हजार फीट माथिको आकाशको उचाइमा चाँडै सूर्यको दर्शन हुने र पृथ्वीमा भने बिस्तारै सूर्यको प्रकाश फैलिनेहुँदा त्यस्तो देखिने गर्दछ। रातभरि नसुतेको भए तापनि आफ्नू नित्यकर्म समाप्त गरेर मैले ताजा जस्तो हुने प्रयास गरिरहेको थिएँ।

दिल्लीबाट सोझै अत्यन्त उच्च आकाशमा उडेको लुफ्थान्साको विशाल बोइङ जेट बिस्तारै जर्मनीको फ्र्याङ्कफर्ट विमानस्थलतर्फ ओर्लिने सुरसार गरेर तलतल जमीनतर्फ झर्दै थियो। बिस्तारै हवाइजहाज जर्मनीको फ्र्याङकफर्टको धावनमार्गमा उत्रिएर केही समयका लागि त्यहीं रोकिएको थियो। त्यस बेला स्थानीय समय अनुसार बिहानको साढे सात बजेको थियो। हामीहरू त्यस हवाइजहाजबाट ओर्लिएर फ्र्याङ्कफर्टको विशाल एयरटर्मिनलभित्रको यात्रीप्रतीक्षालयमा गएका थियौं। हामीहरू विशिष्टश्रेणीका यात्री भएका हुँदा हामीहरूका लागि त्यहाँ त्यसै प्रकारको विशेष शिष्टाचारको व्यवस्था गरिएको थियो। त्यस विशिष्टश्रेणीको प्रतीक्षालयमा उपलब्ध भएका विविध प्रकारका खाना र पेयपदार्थको सेवन गरेर हामीहरूले ४ घण्टा आनन्दसँग त्यहाँ बिताएका थियौं।

त्यसरी त्यहाँ प्रतीक्षा गरेर बस्दा त्यस प्रतीक्षालयको भिन्नै रौनक र विशेषता मैले पाएको थिएँ। बाथरुममा दीर्घशङ्का र लघुशङ्का गर्न जाँदा कमठ पनि विशेष प्रकारको मैले देखेको थिएँ। दिसापिसाब गरिसकेपछि कमठको माथिल्लो ढकनी आफैँ घुमेर सम्पूर्ण सफाइको काम गर्दथ्यो र फेरि आफैँ बन्द भएर यथास्थानमा बस्दथ्यो। त्यसप्रकारको कमठ मैले संसारभरिका धेरै विकसित राष्ट्रहरू घुम्दा पनि देखेको थिइन। केही

क्षणपछि हामीहरू फेरि आफ्नू गन्तव्यतर्फ जान हवाइजहाजभित्र प्रवेश गरेका थियौँ । त्यहाँ पहिले हामीसँगै यात्रा गर्ने केही यात्रीहरू ओर्लिसकेका थिएभने अरू केही नयाँ यात्रीहरू हामीहरूसँगै यात्रा गर्न हवाइजहाजभित्र चढेका थिए । यो विचित्र संसारको भेट्ने र छुट्टिने परिपाटी त्यस हवाइजहाजभित्र पनि लागूभएको थियो । हामीहरू जर्मनीको फ्र्याङ्कफर्ट विमानस्थलमा ओर्लंदा पूर्वतिरबाट सुनौला घामको किरण फैलिइरहेको थियो भने ४ घण्टा त्यहाँ बसेर फेरि यात्रा गर्न दिनको मध्याह्नमा हवाइजहाजमा चढ्दा चारैतिर कालो बादलले ढाकेर सिमसिम पानी परिरहेको थियो । हामीहरू चढेको त्यो शक्तिशाली हवाइजहाज बादलको कालो आवरणलाई फोर्दै ठाडै उच्च आकाशतर्फ बिस्तारै उठिरहेको थियो ।

कालो बादलको आवरणलाई फोरेर जहाज माथि स्वच्छ नीलो उच्च आकाशमा पुगेर संयुक्तराज्य अमेरिकाको राजधानी वाशिङ्टनतर्फ सोझै उडेको थियो । पहिलेको उडानजस्तै त्यस पटक पनि तलको सम्पूर्ण धरती र आन्ध्रमहासागरसमेतलाई बाक्लो बादलले ढाकिदिएको हुँदा तलको दृश्य मैले केही पनि देख्नपाएको थिइन । त्यस पटक पनि मैले आन्ध्रमहासागर जर्मनी र अमेरिकाको बीचको भूभागलाई हेर्ने मौका पाएको थिइन । सायद मेरो अमेरिकाको यात्रा त्यही नै अन्तिम यात्रा हुनेथियो । त्यसैकारणले पनि म धित मर्ने गरी सम्पूर्ण दृश्य हेर्नचाहन्थैं । त्यही कुरा शोच्ता शोच्तै जेटले जर्मनीको धरती र आन्ध्रमहासागरलाईसमेत पार गरेर संयुक्तराज्य अमेरिकाको धरतीमा प्रवेश गरिसकेको थियो । त्यस बेला बादल फाटिसकेको हुँदा मैले तलको दृश्य देख्नथालेको थिएँ । हवाइजहाज बोष्टन, न्यूयोर्क आदि अमेरिकी शहरहरू नाघ्दै वाशिङ्टनतर्फ उडिरहेको थियो । केही समयपछि नै मैले माथिबाट वाशिङ्टनको विमानस्थललाई देखेको थिएँ । हवाइजहाज विमानस्थलमा ओर्लियो र हामीहरू पनि त्यहाँ पुऱ्याउनुपर्ने औपचारिकताहरू सबै पुऱ्याएर आफ्ना सामानहरू लिएर विमानस्थलबाट बाहिर निस्किएका थियौँ ।

त्यसपछि हामीहरूलाई लिन वाशिङ्टनस्थित नेपाली राजदूतावासका प्रथमसचिव श्रीदिनेश भट्टराई दूतावासको वाहनसहित त्यहाँ पुगेका थिए । उनकै साथ हामीहरू वाशिङ्टनमा रहेको नेपाली राजदूतावास नजिकैको

मिरियट होटेलमा गएर बसेका थियौँ। बेलुकाको खाना खान हामीहरू होटेल नजिकै रहेको विशाल राजमार्गको छेउको रेष्टुरेण्टमा गएका थियौँ। खाना खाएर होटेलतर्फ फर्किनलाग्दा हामीहरूलाई त्यहाँका जँड्याहा काला अमेरिकीले हमला गर्नखोजेको थियो। मैमाथि आइलागेको जँड्याहाले झण्डै मलाई पछारेको थियो। त्यो देखेपछि अरू मसँग गएका साथीहरूले होहल्ला गरेपछि त्यो जँड्याहा भागेको थियो। अमेरिकाका शहरहरूमा रातबिरात हिँड्न त्यस्तै जँड्याहाहरूका कारणले अत्यन्त डरलाग्दो हुनेरहेछ। मैले त्यसै पटकको यात्रामा मात्र त्यस प्रकारको घटनाको अनुभव गरेको थिएँ। त्यसपछि होटेल मिरियटमा पुगेर हामीहरूले हवाइजहाजको लामू उडानको थकाइलाई रातभरि सुतेर मेटेका थियौँ।

तेस्रो दिन अर्थात् २०५५ साल फागुन १० गते बिहानको आफ्नू नित्य कर्म समाप्त गरेर स्वल्पाहारपछि विश्वबैङ्कका अधिकारीहरूसँग सम्झौतावार्ता गर्न वाशिङ्टन डी.सी.मा रहेको विश्वबैङ्कको केन्द्रीयकार्यालयमा हामीहरू गएका थियौँ। त्यसै दिनदेखि नै हाम्रो सम्झौतावार्ता शुरुभएको थियो। शुरुका दिनमा विश्वबैङ्कका सम्बन्धित अधिकारीहरू त्यसमा पनि खास गरेर कानूनी सल्लाहकार एक महिलाले नाना थरीका प्रश्नहरू गरेर हाम्रो सम्झौतावार्तालाई सहजरूपमा अघि बढ्न दिएकी थिइनन्। लामू छलफलपछि हामीहरूले विश्वबैङ्कका ती अधिकारीहरूलाई केही संझाउन सफल भएका थियौँ।

फागुन १० गते राती हामी प्रतिनिधिमण्डलका सबै सदस्यहरूलाई राजदूत गौतमले रात्रिभोजका लागि बोलाएका थिए। पहिलो पटकजस्तै त्यस पटक पनि हिउँ परेर हामीहरूलाई हिँड्नडुल्न अत्यन्त बाधा पुगेको थियो। राजदूत गौतमसँग नेपालको तत्कालीन राजनीति र अमेरिकाको समग्र विषयमा लामू चर्चा गर्दै हामीहरूले रात्रिभोज खाएका थियौँ। त्यस अवसरमा तत्कालीन कानून सचिव श्रीतीर्थमान शाक्य पनि त्यस भोजमा पुगेका थिए। रात्रिभोजपछि होटेल मिरियटमै फर्किएर हामीहरू बसेका थियौँ।

फागुन ११ गते बिहान सर्वप्रथम हामीहरू पहिलेको भ्रमणमा जस्तै अमेरिकी राष्ट्रपति बस्ने भवन ह्वाइट हाउसको अवलोकनका लागि गएका थियौँ। पहिलेको जस्तै त्यस पटकको ह्वाइट हाउसको भ्रमणमा पनि हाम्रा

साथ नेपाली राजदूतावासका प्रथम सचिव श्रीदीनेश भट्टराई गएका हुँदा हामीहरूलाई राष्ट्रपतिभवन ह्वाइट हाउसभित्रका चोटाकोठाहरू घुम्नुकासाथै फोटो खिच्न र भिडियो फिल्म लिनसमेत अनुमति प्राप्त भएको थियो। पहिलो पटक त्यहाँ भ्रमण गर्दा हिउँ पर्नुका साथै चिसो हावा चलेर हामीहरूलाई अत्यन्त सताएको थियो भने त्यो दोस्रो पटकको भ्रमणमाभने



ह्वाइट हाउसको मूल प्रवेशद्वारमा (बायाँबाट) श्रीराम, सुरक्षा अधिकारी, उदय र लेखक

हिउँ र हावाहुरीले समेत कम दुःख दिएको थियो। वातावरणमा बिस्तारै गर्मी चढ्दै गएर ह्वाइट हाउसभित्रका बगैंचाहरूमा वसन्तले प्रवेश गर्न



ह्वाइट हाउस भित्रको अब्राहम लिङ्कनकक्षमा डा.श्रीराम लामिछाने र सुरक्षाअधिकारीका बीचमा लेखक

लागेको भान हुन्थ्यो। म पहिले त्यस ह्वाइट हाउसभित्र प्रवेश गर्दा राष्ट्रपति श्रीबिल क्लिणटनको कुमारी मोनिका लिवेन्स्कीसँगको अवैध

यौनसम्बन्धको चर्चाले अत्यन्त प्रश्रय पाएर राष्ट्रपतिभवन नै अँध्यारो जस्तो देखिएको थियो। त्यस बेला अदालतमा मुद्दा चलिरहेको थियो। राष्ट्रपतिभवनभित्र राखिएको पूर्व राष्ट्रपति केनेडीको तस्वीर लाजले झुके जस्तो देखिन्थ्यो। चारैतिरको वातावरण अत्यन्त धूमिल र निराशापूर्ण भएको भान हुन्थ्यो भने त्यस पटक राष्ट्रपति क्लिण्टनले अमेरिकी जनतासँग र अदालतसँग पनि रुँदै क्षमा याचना गरेका हुँदा अमेरिकी जनताले उनलाई क्षमा दिएछन् र अदालतले पनि राष्ट्रपति क्लिण्टनलाई सफाइ दिएछ। त्यसरी अदालत र जनतासमेतबाट सफाइ पाएपछि राष्ट्रपति क्लिण्टनको मनोबल उठेको रहेछ। त्यस सम्बन्धी चर्चा अमेरिकामा त्यसै सेलाएर गएको मैले पाएको थिएँ।

त्यसरी मुद्दामा क्लिण्टनले सफाइ पाएपछि त्यो क्लिण्टनको विजय हो कि मोनिका लिवेन्स्कीको विजय हो निश्चितरूपमा कसैले पनि भन्न सक्तैनथ्यो। संयुक्तराज्य अमेरिकामा राष्ट्रपति क्लिण्टन विरुद्धको चर्चा संसारभरि फैलिएपछि त्यसैको बारेमा किताबहरू लेखेर र प्रकाशन गरेर लेखकहरू र प्रकाशकहरूले प्रशस्त सम्पत्ति कमाएका थिए। त्यसबाट चर्चाकी नायिका मोनिका लिवेन्स्कीले पनि प्रशस्तै डलर आर्जन गरिन् भन्ने आम सञ्चारका माध्यमहरूबाट थाहा हुन्थ्यो। बदनाम भएर पनि त्यसैको माध्यमबाट धनी हुने चलन पश्चिमी विकसित राष्ट्रहरूमा चल्दोरहेछ तर हाम्रोजस्तो नैतिक परम्परा सशक्त भएको राष्ट्रमा भने त्यस्तो चल्दैन। अमेरिकी समाजमा त्यसप्रकारको अनैतिक कामलाई पनि प्रोत्साहन दिएर सम्पत्ति आर्जन गर्नु सायद त्यहाँको नैतिक चरित्रको अवमूल्यनको परिचायक नै भएको मान्नुपर्ने हुन्छ। केवल भौतिक समृद्धि र उन्नतिलाई मात्रै विकासको मापदण्ड मान्ने पश्चिमी समाजलाई नैतिकता र चरित्रबलको आध्यात्मिक पाठ पढाउनु पनि आवश्यक भएको देखिन्छ। अन्यथा त्यही अनैतिकता र दुश्चरित्रबाटै त्यस देशको पतन अवश्यम्भावी भएको कुरामा दुई मत हुनसक्तैन।

हामीहरू ह्वाइट हाउसका सबै कक्षहरूमा पहिलो पटकको भ्रमणजस्तै गरेर घुमेका थियौं। हामी त्यहाँ अवलोकन गर्नजाँदा राष्ट्रपति र उनको परिवार त्यसै भवनको माथिल्लो तलामा बसेका थिए। हामीहरू तल्लो

भुइँतलाका कक्षहरू, माथिल्लो तलामा रहेको राष्ट्रपतिको अध्ययन कक्ष र पुस्तकालयमा समेत गएका थियौँ । त्यसरी राष्ट्रपति बस्ने भवनमा राष्ट्रपति त्यहीँभित्र हुँदाहुँदै दर्शकहरूलाई राष्ट्रपति भवनको अवलोकन गर्नदिनु एउटा अनौठो उदाहरण हो । संयुक्तराज्य अमेरिकाजस्तो शान्तिसुरक्षाको दृष्टिकोणले अत्यन्त संवेदनशील ठाउँमा पनि त्यसरी विश्वास गरेर हामीहरूजस्ता सामान्य व्यक्तिहरूलाई प्रवेश गर्नदिनु र निर्धक्क सबै चोटाकोठामा घुम्न दिनु एउटा आश्चर्य लाग्दो कुरा हो । म त्यसबाट अत्यन्त प्रभावित भएको थिएँ । निकै लामू समयसम्मको ह्वाइट हाउसभित्रको भ्रमण समाप्त गरेर हामीहरू ह्वाइट हाउसबाट बाहिर निस्किएका थियौँ । आकाश उघ्रिएर घाम लागिरहेको हुँदा पहिलो पटकको भ्रमणजस्तो हामीहरूले त्यस दिन जाडो र हिउँसमेतको दुःख भोग्नुपरेको थिएन ।

राष्ट्रपतिभवन ह्वाइट हाउसको भ्रमण समाप्त गरेपछि हामीहरू विश्वबैङ्कका अधिकारीहरूसँग सम्झौतावार्ता गर्न विश्वबैङ्कको केन्द्रीयकार्यालयको विशाल भवनमा फेरि गएका थियौँ । त्यस दिन पनि विश्वबैङ्कका अधिकारीहरूका साथै बैंकको कानूनी सल्लाहाकार महिलासँग अघिल्लो दिनको जस्तै लामू तर्क र वितर्कमै धेरै समय हामीहरूले बिताउनुपरेको थियो । मलाई चिसो लागेर रुघाखोकीको ज्वरोले अघिल्लो दिनदेखि नै अत्यन्त दुःख दिएको हुँदा मैले जाँगर लाएर त्यस दिन कुरा गर्नसकेको थिइन । त्यसैकारणले पनि वार्तामा ढिलाइभइरहेको थियो । मध्याह्नको खाना खाएपछि मैले विश्वबैङ्कको भवनमै रहेको अस्पतालमा गएर त्यहाँका डाक्टरहरूसँग स्वास्थ्यपरीक्षण गराएको थिएँ ।

त्यसरी स्वास्थ्यपरीक्षण गराउँदा डाक्टरहरूले मलाई केही दिन अस्पतालमै भर्ना भएर औषधोपचार गराउने सल्लाह दिएका थिए । त्यसरी भर्ना भएर अस्पतालमा बस्दा सम्झौतावार्तामा बाधा पुग्ने र हामीहरूले मिलाएको सम्पूर्ण कार्यक्रम नै बदल्नुपर्नेहुँदा सोही कुरा डाक्टरहरूलाई संझाउँदा उनीहरूले मलाई औषधी दिएर बिदा गरेका थिए । त्यहाँको चलन अनुसार सामान्य रोगमा कडा औषधी दिइँदोरहेनछ । अपराह्नपछि हामीहरू निर्धारित कार्यक्रम अनुसार फेरि सम्झौतावार्तामा सम्मिलित भएका थियौँ । सम्झौतावार्तामा विश्वबैङ्कका तर्फबाट कानूनी

सल्लाहाकारले खोचे थापेर दुःख दिएको हुँदा उनलाई सटिक जबाफ दिएर चित्त बुझाउन मसँग प्रतिनिधिमण्डलमा गएका कानूनमन्त्रालयका सहसचिव श्रीउदय नेपालीलाई मैले अह्राएको थिएँ । उनले त्यसप्रकारका धेरै अन्तर्राष्ट्रिय सम्झौताहरूमा भाग लिइसकेका हुँदा मेरो इशारा बुझेर सोही अनुसार नेपालका तर्फबाट सशक्त प्रतिवाद गरेका थिए । त्यसपछि विश्वबैङ्कका तर्फबाट खटिएकी कानूनी सल्लाहकारको चित्त बुझेको थियो । त्यसरी लाम् बहसपछि साँझपख हाम्रो सम्झौतावार्ता सकारात्मकरूपमा टुङ्गो लागेर हामीहरू दुवैतर्फका प्रतिनिधिमण्डका नेताहरूले सम्झौतापत्रमा हस्ताक्षर गरेका थियौँ । नेपाली प्रतिनिधिमण्डलले भने अनुसार नै सम्झौता भएको थियो ।

त्यसपछि हामीहरू विश्वबैङ्कका अधिकारीहरू र नेपाली राजदूतसमेतसँग बिदा भएर उसै दिन साँझपख एउटा गाडी भाडामा लिएर न्यूयोर्क जाने क्रममा बाल्टिमोरतर्फ लागेका थियौँ । मलाई केही दिनदेखि चिसो लागेर ज्वरो र रुघाखोकीले सताइरहेको कुरा माथि नै उल्लेख गरिसकेको छु । विश्वबैङ्कको अस्पतालले उपलब्ध गराएको रुघाखोकीको औषधी सेवन गर्दै म यात्राको लागि अरू मित्रहरूसँग साथै निस्किएको थिएँ । त्यस दिन बेलुका हामीहरू बाल्टिमोरमा गएर एउटा होटेलमा बसेका थियौँ । त्यहाँ मेरो प्रतिनिधिमण्डलमा अर्थमन्त्रालयबाट गएका सहसचिव श्रीमाधव घिमिरे आफ्ना सम्बन्धीसँग भेट्ने भनेर हामीहरूसँग छुट्टिएर अर्कै ठाउँमा गएर बसेका थिए । उनी आफूलाई असाध्य चलाख र कुशल हुँ भन्ने ठान्दथे । वास्तवमा उनी आफूलाई फाइदा हुने कुरा तुरुन्तै गरिहाल्दथे र आफूलाई फाइदा नहुने कुरातिर वास्तै गर्दैनथे । बाल्टिमोरबाट नै उनी हामीहरूसँग छुट्टिएर एक्लै काठमाडौँ फर्किएका थिए ।

मलाई रुघाखोकीको ज्वरोले अत्यन्त सताइरहेकै थियो तापनि बाल्टिमोरमा होटेलबाट बिहानै उठेर साथीहरूका साथ बाल्टिमोर शहरको दृश्यावलोकन गर्न म पनि गएको थिएँ । घुमघाम र खानापछि हामीहरू बाल्टिमोरबाट अपराह्न पिटस्बर्गतर्फ प्रस्थान गरेका थियौँ । दिनभरि बाटामा पर्ने मनमोहक दृश्यहरू हेर्दै र रोकिएको बेलामा अमेरिकी जनताहरूसँग भलाकुसारी पनि गर्दै साँझमा हामीहरू गाडीबाट पिटस्बर्ग शहरको बीचमा

पर्ने ह्याम्पटन भन्ने होटेलमा पुगेर बसेका थियौँ। त्यहाँ पुगेपछि ठूलो पानी परेको थियो र मलाई ज्वरोले झन् सताएको थियो। अर्को दिन हामीहरू त्यस शहरको दृश्यावलोकन गर्न गाडीबाटै गएका थियौँ। बीचमा पिटस्बर्ग नदी र वरिपरि नेपालको जस्तै पहाडी भूबनौट भएको भूक्षेत्रमा त्यो शहर निर्माण भएको हुँदा अत्यन्त दर्शनीय रहेछ। त्यो शहर घुम्दाघुम्दै र दृश्यावलोकन गर्दागर्दै पानी पर्नथालेको हुँदा त्यहाँ बसोवास गर्ने नेपालीहरूको निम्तोमा उनीहरूका घरमा गएर हामीहरूले साँझको खाना खाएका थियौँ। नेपालीघरको खानापछि शहरको रातको झिलिमिली हेर्दै हामीहरू होटेलमै फर्किएका थियौँ। अघिल्लो दिनको वासमा कानूनमन्त्रालयका सहसचिव श्रीउदय नेपाली र म एउटै कोठामा दुइटा पलङमा सुतेका थियौँ। राती आएको टेलिफोन पनि हामीहरू दुवै जना बिरामी भएर अशक्त भएका कारण हामीहरूले उठाउनसकेका थिएनौं।

त्यस्तो अशक्त हुँदाहुँदै पनि रोगलाई पेलेर गाडीबाट लामू यात्राका लागि प्रस्थान गरेका हामीहरू पिटस्बर्गबाट प्रस्थान गर्दाखेरि केही सन्चोजस्ता भएका थियौँ। न्यूयोर्क पुग्न धेरै लामू बाटो काट्नुपर्नेहुँदा हामीहरूले पिटस्बर्गबाट बिहान सबेरै उठेर न्यूयोर्कतर्फ प्रस्थानगरेका थियौँ। बिहानको खाना बाटोमा पर्ने एउटा सानू होटेलमा खाएपछि हामीहरू लगातार गाडीमा कुनै अल्छी नमानीकन दिनभरि गुडी नै रहेका थियौँ। गाडीकी चालिका एउटी भारतीय मूलकी महिला थिइन्। ती युवती फुर्तिली भए तापनि हामीहरूलाई जस्तै रुघाखोकीको ज्वरो आएर उनी बिरामी परेकिथिइन्। जस्तै भए तापनि उनले कत्ति पनि अल्छी नमानीकन हामीहरूलाई पूर्वनिर्धारित कार्यक्रम अनुसार अत्यन्त सहजताका साथ गाडीमा लिएर गइरहेकी थिइन्। बाटोमा हामीहरूले घना हरिया जङ्गल र विशाल खेतीका फार्महरू लगायत जनावरहरू चराउने ठूलाठूला हरिया चौरहरू पनि देखेका थियौँ। विशाल अमेरिकी धरतीमा जता हेऱ्यो उतै विशालै विशालता देखिन्थ्यो।

त्यस दिन बिहानदेखि बेलुकैसम्म गरेको यात्रामा राजमार्गका दायाँबायाँ फाट्टफुट्ट सामान्य घरहरू बाहेक हामीहरूले शहर र मानवबस्तीसमेत देखेका थिएनौं। दिनभरि गाडीमा यात्रा गरेर साँझमा एउटा सानू बस्तीमा रहेको

अर्को ह्याम्पटन भन्ने होटेलमा गएर हामीहरू बसेका थियौँ। त्यहाँ रात बिताएर अर्को दिन बिहानै त्यहाँबाट प्रस्थान गरेर ह्यारिसबर्ग भन्ने न्यूयोर्क नजिकैको क्षेत्रमा हामीहरूले प्रवेश गरेका थियौँ। ह्यारिसबर्गको विशाल मैदान, हरिया फाँटहरू र हरिया वनवाटिकाहरूका बीचबाट त्यही नजिकैको भव्य शहरसमेतलाई हेर्दै हामीहरू न्यूयोर्क शहरभित्र प्रवेश गरेका थियौँ।

विशाल न्यूयोर्क शहरको प्रवेशमार्गको चौडा सडक हुँदै हामीहरू त्यसैको छेउमा रहेको होटेल डेजमा गएर बसेका थियौँ। त्यहाँ नै आफ्ना सामानहरू सबै राखेर अर्को दिन सबेरै सर्वप्रथम न्यूयोर्कस्थित संयुक्तराष्ट्रसङ्घमा नेपालका राजदूत भएर बसेका श्रीनरेन्द्र विक्रम शाहलाई हामीहरूले भेटेका थियौँ। त्यहाँ भेटघाट समाप्त गरेपछि न्यूयोर्कस्थित संयुक्तराष्ट्रसङ्घको विशाल भवनतर्फ हामीहरू राज–दूतावासका प्रथम सचिव श्रीदुर्गा भट्टराईका साथ गएका थियौँ। मेरो त्यो दोस्रो पटकको संयुक्तराष्ट्रसङ्घको भ्रमण थियो। त्योभन्दा पहिले हेर्न बाँकिरहेका सबै कक्ष र सम्मेलनस्थलहरू पनि हेर्ने मौका मैले पाएको थिएँ। हामीहरू त्यहाँ जाँदा तत्कालीन अमेरिकी राष्ट्रपति श्रीबिल क्लिन्टनकी पत्नी श्रीमती हिलारी क्लिन्टनले त्यहाँ नारीसशक्तिकरणको विषयमा भाषण दिइरहेकी थिइन्। उनी आफैँमा एउटी सशक्त महिला र कानून विषयकी विदुषीसमेत भएकी हुँदा उनका श्रीमान्ले गरेका गल्तीहरूलाई सुधार्न सहयोग गर्दै अत्यन्त उच्च मनोबलका साथ आफ्नू जीवनलाई उनले अगाडि बढाइरहेकी थिइन्।


अमेरिकी स्वतन्त्रताकी प्रतिमूर्ति (Statue of Liberty) को अगाडि

त्यसरी संयुक्तराष्ट्रसङ्घभवनको भ्रमणपछि त्यसै दिन हामीहरू स्वतन्त्रताकी मूर्ति (Statue of Liberty) को अवलोकन गर्न फेरीमा चढेर मूर्ति रहेको समुद्रका बीचको टापुमा गएका थियौँ। बेलायतको उपनिवेशबाट संयुक्तराज्य अमेरिका स्वतन्त्र भएपछि त्यस बेला फ्रान्सका विख्यात कलाकारले

बनाएर अमेरिकालाई उपहारका रूपमा दिएको त्यो स्तन्त्रताको मूर्तिलाई अमेरिकाको न्यूयोर्क सिटी नजिकैको समुद्रको बीचको सुन्दर टापुमा राखिएको रहेछ । टाढाबाट हेर्दा सामान्य जस्तो देखिने तर नजिकै गएर




अमेरिकाको न्यूयोर्कमा रहेको विश्वप्रसिद्ध Statue of Liverty र World Trade Center अगाडि लेखक

हेर्दा विशाल मूर्तिको आकृति देखेर म अत्यन्त प्रभावित भएको थिएँ । त्यस मूर्तिको भित्रैबाट माथि टुप्पासम्म जाने घुमाउरो भऱ्याङ बनाइएको रहेछ । त्यसैमा चढेर मूर्तिको टाउकासम्म पुगेर त्यहाँको वरिपरिको सम्पूर्ण दृश्यको अवलोकन हामीहरूले गरेका थियौँ । त्यो यात्रा मेरो जीवनको अत्यन्त स्मरणीय यात्रा हो । मैले त्यहाँको सम्पूर्ण दृश्य यथार्थमा वर्णन गर्न नसके तापनि केही शब्दचित्रमात्र यहाँ प्रस्तुत गर्ने प्रयास गरेको हुँ ।

त्यहाँको भ्रमण समाप्त गरेर हामीहरू न्यूयोर्क शहरको छेउमा बनेको सुन्दर बगैंचामा एकै छिन विश्राम गरेर त्यस बेला विश्वविख्यात मानिने न्यूयोर्क शहरको छातीमा रहेको त्यहाँका सर्वोच्च जुम्ल्याहा भवन Twin tower को अवलोकन गर्न हामीहरू गएका थियौँ । विजुलीबाट चल्ने शक्तिशाली लिफ्टमा चढेर हामीहरू भवनको सबभन्दा माथिल्लो तलामा पुगेर सम्पूर्ण न्यूयोर्क शहरको अवलोकन गरेका थियौँ । त्यहाँ चढेर दूरबीनबाट हेर्दा न्यूयोर्क शहरमात्रै नभएर वरिपरिका अमेरिकी शहरका गगनचुम्बी भव्य भवनहरू पनि हामीहरूले देखेका थियौँ । हामीहरूलाई भित्र विशाल कक्षमा लगेर त्यो जुम्ल्याहा भवनको निर्माणको प्रारम्भिक कालदेखि लिएर भवन तयार भइसकेको अवस्थासम्मको सम्पूर्ण दृश्य चलचित्रको माध्यमबाट देखाइएको थियो । त्यसका अतिरिक्त सम्पूर्ण न्यूयोर्क शहरको

सुन्दर दृश्य पनि पहिलेदेखि तयार पारेर राखिएको आकर्षक चलचित्रमा देखाइएको थियो । हामीहरू त्यसपछि जुम्ल्याहा भवनभित्र रहेका विभिन्न भव्य पसल र कार्यालयहरूको अवलोकन गर्दै भवनबाट बाहिर निस्किएका थियौँ ।

विश्वको गौरवका रूपमा रहेका ती जुम्ल्याहा भवनलाई सन् २००१ को सेप्टेम्बर ११ तारिखका दिन केही पागल आतङ्ककारीहरूले सामान्य नागरिकहरूले यात्रा गरिरहेका दुईओटा विशाल अमेरिकी जेटहरू अपहरण गरेर ती भवनहरूमा ठोक्काएका थिए । त्यसबाट ती दुइटै भवनहरू जगैसम्म भत्किनुका साथै त्यस भवनभित्र काम गर्ने हजारौँ निर्दोष मानिसहरूका साथै दुइटै जाहाजहरूमा यात्रा गरिरहेका यात्रीहरू र चालक दलका सदस्यहरूकोसमेत मृत्यु भएको थियो । त्यस दिनलाई अमेरिकामा कालो दिवसका रूपमा मनाउने गरिन्छ । अहिले पनि त्यो त्रासदीपूर्ण दिनको सम्झनाले म अत्यन्त दुःखी हुनेगर्दछु । ती विशाल जुम्ल्याहा भवनको सम्झना मलाई अहिलेसम्म पनि बेला बेलामा आइरहने गर्दछ । अब त त्यो सम्झनामा मात्रै सीमित भएर रहनगएको छ । त्यसरी जुम्ल्याहा भवनको भ्रमणपछि हामीहरू न्यूयोर्क शहरका अरू गगनचुम्बी भवनहरू हेर्दै अगाडि बढेका थियौँ । अत्यन्त योजनाबद्ध तरिकाले निर्माण गरिएका त्यस न्यूयोर्क शहरका विशाल तथा फराकिला राजमार्गहरू हुँदै हामीहरू होटेल डेजमा फर्किएका थियौँ ।

सन् १९९८ मार्च ५ का दिन बिहानदेखि नै हामीहरूले बजारका अरू भागहरू घुम्ने र राजदूतसमेतसँग भेटघाट गर्ने काम सकेर दिउँसोको खाना खाएपछि न्यूयोर्कमा रहेको विशाल अन्तर्राष्ट्रिय केनेडी विमानस्थलतर्फ हामीहरू गएका थियौँ । त्यहाँबाट हामीहरू साँझपख जर्मनीको त्यस बेलाको राजधानी बोनमा रहेको अन्तर्राष्ट्रिय विमानस्थल फ्र्याङ्कफर्टतर्फ उडेका थियौँ । अन्धकारमय रातमा हामीहरू चढेको लुफ्थान्साको विशाल जेट आन्ध्र महासागरको माथिको आकाशमा उडेको थियो । रातभरि नै नसुतेर बिहान ६ बजे फ्र्याङ्कफर्ट एयरपोर्टमा म उत्रिएको थिएँ । मसँग यात्रा गर्ने साथीहरू पनि सायद अनिदै थिए होलान्, सो कुरा मलाई थाहा भएन । त्यहाँ उत्रिएपछि त्यहाँबाट तुरुन्तै अर्को हवाइजहाज चढेर जर्मनीको पुरानू

राजधानी बर्लिनतर्फ हामीहरू प्रस्थान गरेका थियौँ । जर्मनीको यात्रा गर्दा जहिले पनि बर्लिनको यात्रा गर्ने लालसाले मलाई सताइरहन्थ्यो । द्वितीय विश्वयुद्धको केन्द्रीय स्थल बर्लिन र त्यस युद्धको नायक हिट्लरको इतिहाससमेत पढेर मलाई जर्मनीको बर्लिनको यात्रा गर्ने आकाङ्क्षा बाल्यावस्थादेखि थियो । मैले धेरै पटक बर्लिनको यात्रा गर्नखोजेको थिएँ तापनि परिस्थितिले साथ नदिएको हुँदा यात्रा गर्न सकेको थिइन । त्यस पटक भने मौका परेको र मेरो जागिरे जीवनको अन्तिम समय पनि भइसकेको हुँदा मसँग यात्रा गरिरहेका डा. निर्मलप्रसाद पाण्डे र श्रीउदय नेपालीसमेतलाई साथमा लिएर म बर्लिनतर्फ उडेको थिएँ ।

हामीहरू चढेको लुफ्थान्साको हवाइजहाज सोभ्कै फ्र्याङ्कफर्टबाट बर्लिनको विमानस्थलतर्फ उडेको थियो । बर्लिनतिर उडिरहेको जहाजको झ्यालबाट म जर्मनीको अवलोकन गरिरहेको थिएँ । इतिहासमा वर्णित हिट्लरको नेतृत्वमा जर्मनीका ठूलाठूला सडकहरूमा मार्चपाष्ट गरिरहेका युद्धपिपासु जर्मनका विशाल सेनाहरूलाई माथिबाटै कल्पना गरेर मैले देखिरहेको थिएँ । त्यतिमात्र नभएर जर्मनीका सेनाहरूले विश्वभरि नै हमला गरेर लाखौँलाख निरपराध नागरिकहरू र सैनिकहरूलाई पनि मारेको काल्पनिक दृश्य म माथिबाटै देखिरहेको थिएँ । अभ्कै त्योभन्दा पनि बीभत्स दृश्य निरपराध लाखौँलाख यहूदी आबालवृद्धबनिता समेतलाई ग्यासच्याम्बरमा हालेर सामूहिक हत्या गरेको भयङ्कर नरसंहारको दृश्य पनि म माथिबाटै कल्पना गरेर देखिरहेको थिएँ । उड्दाउड्दै मैले मित्रराष्ट्रहरूका हमलामा परेर पिल्सिएका जर्मन नागरिकहरूले गरेको हाहाकार र युद्धनायक हिट्लरले आफ्नी प्रेमिकाका साथ गरेको आत्महत्याको बीभत्स दृश्य पनि म माथिबाटै कल्पना गरेर देखिरहेको थिएँ । त्यसरी म दोस्रो विश्वयुद्धको इतिहासको कालखण्डमा पुगेर कल्पनालोकमै हराइरहेका बेला हामीहरू चढेको हवाइजहाजले हामीहरूलाई अत्यन्त हल्लाएको थियो । त्यस हल्लाइबाट झसङ्ग भएर म फेरि आफ्नै संसारमा फर्किएको थिएँ । हवाइजहाज बिस्तारै धावनमार्गतर्फ उत्रिने सुरसार कसेर तलतल झरिरहेको थियो । एकै छिनमा हामीहरू बर्लिनको अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएका थियौँ । अध्यागमनको काम सिध्याएर एउटा ट्याक्सी लिएर हामीहरू

ट्याक्सीचालककै सल्लाहमा एउटा होटेलमा गएर बसेका थियौँ । जानुभन्दा पहिलेदेखि नै हामीहरूले होटेलको बन्दोबस्त नगरेका हुँदा राम्रो होटेल पाएका थिएनौँ । सामान्य होटेलमै एक रातका लागि व्यवस्था मिलाएर सामानहरू त्यही होटेलमा थन्क्याएर बिहानको खानापछि हामीहरू बर्लिनशहरको अवलोकनका लागि होटेलबाट बाहिर निस्किएका थियौँ ।

स्थानीय पथप्रदर्शकको सहायता लिएर हामीहरूले कतै ट्याक्सीमा चढेर, कतै ट्रेनमा चढेर र कतै पैदलै बर्लिनशहरको भ्रमण गरेका थियौँ । बर्लिनशहरको भ्रमण गर्दा त्यहाँ आधुनिकताभन्दा पनि ऐतिहासिक दृश्य सबैतिर देखिन्थ्यो । त्यसरी बर्लिनशहर घुमेर हेर्दा सबै ठाउँमा त्यस बेलाको समृद्ध तथा विकसित बर्लिनमा नाजीसेनाहरू युद्धउन्मादका साथ घुमिरहेका जस्तो मलाई लागेको थियो । जता गयो उतै द्वितीय विश्वयुद्धमा मित्रराष्ट्रका सेनाहरूले हानेका बमहरूले छिन्नभिन्न भएर भग्नावशेषका रूपमा बाँचिरहेका पुराना घर, स्मारक, चर्च र सडकहरू देखिन्थे । त्यसै बेलानै भौतिकविकास गर्न अत्यन्त सफल देखिएको जर्मनी त्यस प्रकारको नरसंहारकारी दोस्रो विश्वयुद्धमा नलागेको भए आज संसारमा सबैभन्दा विकसित तथा विश्वमा अग्रणी राष्ट्र हुनेथियो होला भन्ने कल्पना गर्दै मैले अन्यमनस्कभावमा बर्लिनशहरको परिक्रमा गरेको थिएँ ।

दिनभरि बर्लिनशहरको परिक्रमा गरेर बेलुकाको खाना बर्लिनशहरकै एउटा रेष्टुरेण्टमा खाएर साँझपख हामीहरू होटेल फर्किएका थियौँ । अर्को दिन बर्लिनशहरको सम्पूर्ण परिक्रमा गर्न यात्रीबसको व्यवस्था गरेर हामीहरू पथप्रदर्शकका साथ बिहानैदेखि गएका थियौँ । हामीले ऐतिहासिक बर्लिन शहरको एकफन्को मध्याह्नसम्ममा लगाइसकेका थियौँ । मैले त्यसरी यात्रा गर्ने क्रममा हिट्लरका समयमा बनेका क्षतविक्षत ठूलाठूला भवनहरू, बर्लिनशहरभित्र बनेका आकर्षक तथा भव्य द्वारहरू, ठूलाठूला बगैँचा र मैदानहरूका साथै विशाल सार्वजनिक स्थलहरूको पनि अवलोकन गरेको थिएँ । जर्मनीको सम्पूर्ण धरती दोस्रो विश्वयुद्धपछि विजेता मित्रराष्ट्रहरू अमेरिका, फ्रान्स, बेलायत र रूससमेतका अधीनमा रहेको थियो । त्यसरी विभाजित जर्मनीलाई साम्यवादी रूसले आफ्नू अधीनमा परेको भागलाई पर्खाल लगाएर विभाजन गरेको थियो । त्यसरी विभक्त जर्मनीका नागरिकहरू

अत्यन्त दुःखी थिए भन्ने मैले सुनेको थिएँ । म त्यस विभाजित जर्मनी र जर्मनको पर्खाललाई हेर्न चाहन्थेँ तर मैले बर्लिनको पर्खाल भत्किएपछिमात्रै त्यहाँको यात्रा गर्ने सौभाग्य पाएको थिएँ । मैले यात्रा गरेको त्यस कालखण्डमा भने विभक्त जर्मनी एक भइसकेको थियो । त्यसबेला बर्लिनको पर्खालको कहीँ पनि चिन्हसमेत देखिँदैनथ्यो । यात्राको क्रममा मैले सो कुराको जिज्ञासा राख्दा हामीहरूलाई घुमाउन लिएर जाने पथप्रदर्शकले बर्लिनको पर्खाल भत्काएर राखिएका केही टुक्राहरूमात्रै देखाएका थिए । प्रायः त्यहाँ घुम्न जाने पर्यटकहरूले बर्लिनको पर्खालको सम्बन्धमा जिज्ञासा राखेमा तिनै भग्नावशेष पर्खालका टुक्राहरू देखाएर चित्त बुझाउने गरिँदो रहेछ ।



दोस्रो विश्वयुद्धमा बम लागेर क्षतविक्षत स्मारक अगाडि लेखक

त्यसरी भग्नावशेषका रूपमा रहेको बर्लिनशहरमा घुम्दै जाँदा जर्मनीको राजधानी फेरि बर्लिनमा नै सार्ने जर्मनसरकारको निर्णय अनुसार धमाधम नयाँ निर्माण भइरहेको पनि हामीहरूले देखेका थियौँ । बसमा चढेर घुम्दाखेरि त्यस बेलासम्म पनि दोस्रो विश्वयुद्धमा ग्यासच्याम्बरमा हालेर हिट्लरले मारेका असङ्ख्य यहूदीहरूको लाशको असह्य दुर्गन्ध आइरहेको भान मलाई भएको थियो । चारैतिर मानिसहरूको चीत्कार र हाहाकार मैले कल्पनामा सुनेको थिएँ । त्यसरी दुर्गन्ध र चीत्कारको कल्पना गर्दागर्दै थाम्नै नसक्ने गरेर मैले वान्ता गरेको थिएँ । त्यसपछि मलाई बर्लिनशहरको भ्रमण गर्ने इच्छा भएको थिएन । त्यसपछि हामीहरू होटेलमा फर्किएर आएका थियौँ । होटेलबाट चेक आउट गरेर हामीहरू फ्र्याङ्कफर्टतर्फ प्रस्थान गर्नका लागि ट्याक्सीमा चढेर हिँडेका थियौँ ।

बर्लिनको सङ्क्षिप्त भ्रमण समाप्त गरेर त्यहाँबाट अन्तर्राष्ट्रिय विमानस्थलतर्फ हामीहरू गएका थियौँ । पहिले आएकै जस्तो गरेर त्यही

तरिकाले फ्र्याङ्कफर्ट अन्तर्राष्ट्रिय विमानस्थलमा पुगेर हामीहरू उत्रिएका थियौँ। त्यसरी एकीकरण भइसकेको जर्मनीको एक फन्को लगाएर हामीहरू काठमाडौँतर्फ फर्किने क्रममा फ्र्याङ्कफर्ट अन्तर्राष्ट्रिय विमानस्थलको प्रतीक्षालयमा केही समय बसेर अपराह्नको खाना त्यहीँ खाएका थियौँ। लामू प्रतीक्षापछि साँझपख सन् १९९८ मार्च ८ तारिखका दिन हामीहरू फ्र्याङ्कफर्ट विमानस्थलबाट लुफ्थान्साको विशाल जम्बो जेट चढेर नयाँदिल्लीतर्फ उडेका थियौँ। रातको समयमा अरू यात्राहरूजस्तै मैले पीडा भोग्नुपरेको थियो। मसँग गएका अरू मित्रहरू भने आफ्ना इच्छा अनुसारका पेयपदार्थ र खानाहरू खाएर आनन्दका साथ सुतेका थिए।

मैले आफ्नू यात्रावृत्तान्त लेखेर नै सारा रात बिताएको थिएँ। त्यहाँबाट रातभरि उडेर बिहानीपख हामीहरू नयाँदिल्ली इन्दिरागान्धी अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएका थियौँ। त्यहाँ नजिकै रहेको होटेलमा गएर हामीहरूले केही बेर विश्राम गरेपछि सन् १९९८ मार्च ९ तारिख तदनुसार २०५५ साल फागुन २५ गतेका दिन बिहान नयाँदिल्लीबाट इन्डियन एयरलाइन्सको हवाइजहाज चढेर हामीहरू काठमाडौँ त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएका थियौँ। त्यसरी हामीहरूले नेपालमा शिक्षा विकासका लागि विश्वबैङ्कसँग सम्झौता गरेर संयुक्तराज्य अमेरिकाको राजधानी वाशिङ्टन, बाल्टिमोर, पिटस्बर्ग, ह्यारिसबर्ग, न्यूयोर्क, बर्लिन, बोन र दिल्ली हुँदै १८ दिनपछि हामीहरू नेपाल फर्किएका थियौँ। मसँग गएका अरू मित्रहरूलाई त्यस यात्राका सम्बन्धमा के कस्तो अनुभूति भएको थियो मलाई थाहा छैन, तर मलाई भने त्यो यात्राको सम्झना कहिल्यै बिर्सन नसक्ने गरी अन्तःकरणमा संस्कारका रूपमा टाँसिएर रहेको छ। त्यसैको सम्झनास्वरूप मैले यात्रैयात्रा नामक कवितासङ्ग्रह २०५८ मा यस कुरालाई पनि समावेश गरेर प्रकाशित गरिसकेको छु र यस अनुस्मृतिमा पनि त्यसलाई अझै विस्तारपूर्वक उल्लेख गरेको छु।

त्यसरी छोटो अवधिमा नै दुई दुई पटक संयुक्तराज्य अमेरिकाको राजधानी वाशिङ्टनमा रहेको विश्वबैङ्कको केन्द्रीय कार्यालयमा गएर नेपालको प्राथमिक शिक्षाविकासका लागि नेपालले चाहे अनुसारकै सम्झौता गरेर फर्किएपछि म फेरि शिक्षामन्त्रालयकै काममा संलग्न भएको थिएँ।

मेरो अनुपस्थितिमा थुप्रिएर रहेका मैले गर्नुपर्ने सबै कामहरूसमेत समाप्त गरेको थिएँ । त्यसबेलाका शिक्षामन्त्री अकुशल र एकोहोरो प्रवृत्तिका भएका हुँदा उनीबाट कुनै पनि निर्णय चाँडो हुनसक्तैनथ्यो । काममा अत्यन्त सुस्ती आएपछि काम गराउनेहरूको दबाब मन्त्रालयमा पर्नु स्वाभाविकै थियो । त्यसरी दबाब पर्न थालेपछि मन्त्री मन्त्रालयमा नबसेर बाहिर हिँड्नेगर्दथे ।

त्यस बेला शिक्षामन्त्रालयमा राज्यमन्त्रीमा श्रीरामजनम चौधरी थिए । उनी अत्यन्त आलाकाँचा र हौडे थिए । उनी आफू र आफ्ना व्यक्तिहरूका स्वार्थका लागि जे गर्न पनि तयार हुन्थे । उनले भनेका कानूनविपरीतका कामहरू मबाट नहुने भएपछि उनी मसँग सधैँ झगडा गरिरहन्थे । कहिले उनी युनेस्कोको कोषबाट रकम माग्दथे भने कहिले आफूले पाउनेभन्दा बढी मन्त्रालयका अरू गाडीहरू लिएर दुरुपयोग पनि गर्दथे । ती कुराहरूबाट उनलाई रोक्न खोज्दा उनी गुण्डाले जस्तै राष्ट्रसेवकहरूसँग ठाडै झगडा गर्न आइलाग्दथे । एकातिर मन्त्री अदक्ष र चिसा व्यक्ति थिए भने अर्कातर्फ राज्यमन्त्री बुद्धिविहीन हौडे व्यक्ति भएको हुँदा मलाई मन्त्रालयमा काम गर्न अत्यन्त अप्ठ्यारो परेको थियो । मैलै आफ्ना अन्तर्गतका सहयोगीहरू लिएर जसरीतसरी काम चलाइरहेकै थिएँ । शिक्षामन्त्री बिस्तारै नजानिदो तरिकाले आफ्ना मानिसहरू भर्ना गर्ने र अरू फाइदासमेत उठाउन लागेका थिए । तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाको आड लिएर उनी जे पनि गर्न तयार भएका थिए ।

त्यसैबेला बूढानीलकण्ठ आवासीय विद्यालयका तत्कालीन प्रधानाध्यापक श्रीनारायणप्रसाद शर्माको अवधि सकिएको थियो । उनी भ्रष्ट तथा अनैतिक व्यक्ति भएका हुँदा उनका ठाउँमा अर्को सक्षम तथा नैतिकवान् प्रधानाध्यापकको नियुक्ति गर्ने सम्बन्धमा मैले दिएको राय नमानेर निजबाट आफ्नू व्यक्तिगत स्वार्थसिद्ध गरेर दरबारले पालेको मण्डले किसिमको उही भ्रष्ट तथा अनैतिक व्यक्तिलाई नै त्यहाँ फेरि विद्यालयको प्रधानअध्यापकमा मन्त्रीले नियुक्त गरेपछि मन्त्री र मेरा बीचमा विश्वासको सङ्कट पैदा हुनगएको थियो । मैले मन्त्रालयमा भएका कामहरूलाई मन्त्री र राज्यमन्त्रीको सहयोग नभए तापनि अत्यन्त दक्षताका साथ अगाडि बढाइरहेकै थिएँ ।

त्यसरी शिक्षामन्त्रालयमा काम गरिरहेकै बेला नेपालमा सञ्चालित प्राथमिक विद्यालयहरूका लागि आर्थिक सहायता उपलब्ध गराउन मित्रराष्ट्र डेन्मार्कको यात्रा मैले गर्नु पर्ने भएको थियो । त्यसै सन्दर्भमा विश्वबैङ्कको केन्द्रीय कार्यालय रहेको स्थान संयुक्तराज्य अमेरिकाको राजधानी वाशिङ्टनमा गएर सम्झौता गरेर फर्किएको कुरा मैले माथि नै उल्लेख गरिसकेको छु । विश्वबैङ्कसँग सम्झौता भएपछिमात्रै अरू दाताराष्ट्र तथा निकायहरूले आर्थिक सहायता दिने अन्तर्राष्ट्रिय प्रचलन रहेछ । तदनुरूप मैले आर्थिक सहायता उपलब्ध गराउन डेन्मार्क जानुपर्नेभएको थियो । तर मैले छोटो अबधिमा बारम्बार बाहिर जानुपरेको हुँदा डेन्मार्क जाने पक्षमा म थिइन । अन्त्यमा तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाले फेरि पनि मलाई बोलाएर जान करै लगाएका हुँदा डेन्मार्क सरकारसँग कुरा गरेर संझौता गर्न जानुपरेको थियो । श्रीगिरिजाप्रसाद कोइरालासँगको मेरो सम्बन्ध त्यति सुमधुर हुनसकेको थिएन । उनका परिजनका कारण उनमा केही कमजोरीहरू देखिन्थे । अन्त्यमा छोरी सुजातालाई उपप्रधानमन्त्री बनाएको कारण उनको उचाइमा केही कमी आएको थियो । तर ती सबै कमी कमजोरीहरू आतङ्ककारी माओवादीलाई हतियार बिसाएर शान्तिप्रक्रियामा ल्याउनुका साथै प्रजातान्त्रिक परिपाटिभित्र प्रवेश गराउन मुख्य भूमिका खेलेकाहुँदा उनका सबै दुर्बलताहरू छोपिएका थिए । अन्त्यमा उनी सबै दलका साझा केन्द्रबिन्दु बनेका थिए । धेरै लामो बिरामीपछि २०६६ साल चैत्र ७ गते उनको मृत्यु भएको थियो । मृत्युपछि उनको शवयात्रामा उर्लिएको जनसमूह र सबै दलका नेताहरूले व्यक्त गरेको शोकसन्देशका कारण उनको उचाइ अझै बढ्नगएको थियो ।



# डेन्मार्कमा

संवत् २०५५ साल फागुन ३० गते शनिवारका दिन राष्ट्रिय योजनाआयोगका उपाध्यक्ष श्रीपृथ्वीराज लिगल, सदस्य डा.श्रीनिर्मलप्रसाद पाण्डे, सहसचिव श्रीचुमानसिंह बस्नेत, निर्देशक श्रीअर्जुन बिष्ट, डा.श्रीमीनबहादुर बिष्ट र डेन्मार्क सरकारका तर्फबाट नेपालमा रहेका प्रतिनिधि श्रीएरिक विण्टर स्मिथसमेतलाई साथमा लिएर डेन्मार्क जान म त्रिभुवन विमानस्थल गएको थिएँ। मेरो प्रतिनिधिमण्डलमा सम्मीलित हामीहरू सबैजना दिनको अपराह्नमा काठमाडौंबाट थाइल्याण्डको राजधानी बैङ्कक जान उडेका थियौँ। साँझमा बैङ्कक पुगेर अमारी भन्ने होटेलमा हामीहरू बसेका थियौँ। त्योभन्दा पहिले पनि बैङ्कक हुँदै जापान, चीन, फिलिपिन्स, भियतनाम, कोरिया आदि पूर्वका देशहरूको भ्रमण मैले गरेको थिएँ। त्यस पटक भने त्यहाँबाट पूर्वतर्फको यात्रा नगरेर पश्चिमतर्फ थाईएयरलाइन्सको जम्बो जेट चढेर डेन्मार्कतर्फ उड्ने तरखरमा म थिएँ।

चैत्र १ गते बिहानै बैङ्ककबाट हामीहरू डेन्मार्कतिर उडेका थियौँ। बैङ्ककबाट उक्त हवाइजहाज बङ्गलादेश, भारत, नेपाल, चीन र पाकिस्तानमाथिहुँदै सोझै यूरोपतिर उडेको थियो। जहाज उडेपछि दिन अत्यन्त खुलेकोहुँदा माथिबाट धरतीका नाना थरीका मनोरम दृश्यहरू हेर्दै म यात्रा विवरण पनि लेखिरहेको थिएँ। तल धरतीमा मानिसले जतिसुकै कृत्रिम सीमा बनाएर आफ्ना राज्यहरू खडा गरे तापनि माथिबाट हेर्दा धरतीमा कुनै खालको सीमा पनि देखिएको थिएन। पृथ्वीका विभिन्न कालखण्डका राजा, महाराजा र अधिनायकहरूले पृथ्वी आफ्नै बनाउन अनादिकालदेखि नै जतिसुकै मानवसंहारकारी युद्ध गरेका भए तापनि आखिरी कसैले पनि पृथ्वीलाई आफ्नी बनाउन सकेका थिएनन्। अहिले पनि आ–आफ्नो सीमा लगाएर पृथ्वीलाई सीमाबद्ध गर्न खोजे तापनि पृथ्वी कसैको सीमामा बाँधिएकी छैनन्। सीमा बाध्नेहरू यही पृथ्वीको सीमाभित्र माटोमा विसर्जन भएर जाने गर्दछन्। यो शाश्वत नियम हो।

त्यस्तैप्रकारका नानाथरी कुराहरू शोच्तै एशिया र यूरोपका सीमाहरू नाघ्दै डेन्मार्कतर्फ म उडिरहेको थिएँ । मैले झ्यालबाट पृथ्वीतिर हेरिरहेको बेला कहिले वायुको चपेटामा परेर हवाइजहाज नृत्य गर्दथ्यो भने कहिले कुहिराभित्र पसेर हराउँदथ्यो । उड्दाउड्दै हवाइजहाजले उपलब्ध गराएको खाना खाएर म केही क्षण सुतेको थिएँ । बोइङ्ग कम्पनीको जम्बो जेटको माथिल्लो तलाको विशिष्टश्रेणीको सीटमा बसेको म हवाइजहाजले उपलब्ध गराएका नाना थरीका मनोरञ्जनका साधनहरू प्रयोग गरेर मस्त भएर रमाइरहेको थिएँ । जहाजको मनिटरमा हेर्दा त्यस बेला हामीहरू उज्बेकिस्तानको धरती पार गर्दै ताजकिस्तान, तुर्कमेनिस्तान र काजकिस्तानका माथिबाट क्रमैले उड्दै गएका थियौँ । झ्यालबाट बाहिर चियाएर तल धरतीमा सर्वत्र सेतै हिउँमात्रै देखिन्थ्यो । हिउँमा परेको सूर्यको प्रतिबिम्ब बेलाबेलामा मेरो आँखामा आएर पनि ठोकिनेगर्दथ्यो । हवाइजहाज उड्दाउड्दै जर्जिया र युक्रेनमाथि पुगेको थियो । त्यसपछि हवाइजहाज कोल्टो फेरेर मस्को र खार्कोबको बीच भएर उडेको थियो । रूसीसङ्घबाट फुटेका लात्भिया र लिथोनिया भन्ने राष्ट्रहरू पनि मैले माथिबाटै देखेको थिएँ ।

त्यसरी विभिन्न राष्ट्रहरूलाई पार गर्दै साँझपख डेन्मार्कको राजधानी कोपेनहेगनको अन्तर्राष्ट्रिय विमानस्थलमा गएर हामीहरू उत्रिएका थियौँ । विमानस्थलमा हामीहरूलाई स्वागत गर्न डेन्मार्कको सरकारका तर्फबाट जोनी भन्ने व्यक्ति आएका थिए । उनले हामीहरूलाई डेन्मार्कको राजधानी कोपेनहेगन शहरको केन्द्रमा रहेको सुन्दर एलेक्जान्द्रा भन्ने होटेलमा लगेर राखेका थिए । हामीहरू पुग्दा सिमसिम पानी र हिउँसमेत परिरहेको हुँदा कोपेनहेगन शहर सम्पूर्ण अँध्यारो देखिन्थ्यो । सधैँ कुहिरोले ढाकिएर सिमसिम पानी परिरहने हुँदा त्यहाँको सम्पूर्ण वातावरण नै अँध्यारो देखिन्थ्यो । कोपेनहेगन शहर स्वच्छ र सफा भए तापनि सधैँ पानी परिरहने हुँदा घुमफिर र हिंडडुल गर्न असाध्य असजिलो भएको महसूस हामीहरूले गरेका थियौँ । कोपेनहेगन पुगेका दिन हामीहरूले पूर्णरूपमा विश्राम गरेर नै दिन बिताएपछि साँझपख पानी पर्न केही बन्द भएको थियो । त्यसपछिमात्रै हामीहरू कोपनहेगन शहर घुम्न बाहिर निस्किएका थियौँ ।

दोस्रो दिन हाम्रा नेपाली छात्रछात्राहरू पढ्ने विश्वविद्यालयको निरीक्षण गर्न हामीहरू गएका थियौँ। नेपालका विभिन्न विद्यालयहरूमा त्यस बेला अध्यापन गरिरहेका केही शिक्षकहरू त्यहाँ केही बर्षदेखि विद्यार्थीको रूपमा एम्.फिल्.र विद्यावारिधिको कक्षामा समेत अध्ययन गरिरहेका थिए। त्यसपछि त्यसै दिन अपराह्न हामीहरू शिक्षामन्त्रालय, परराष्ट्र मन्त्रालय र डेनिडाको कार्यालयमा समेत गएर उच्चस्तरीय अधिकारीहरू र राजनीतिक व्यक्तिहरूसँग हामीहरूले भेटघाट गरेका थियौँ। भेटघाटका क्रममा नेपालमा सञ्चालित आधारभूतशिक्षाको गुणात्मक सुधारका लागि हामीहरूले कुराकानी गरेका थियौँ। त्यस देशले वास्तवमा विनाराजनीतिक स्वार्थ धेरै ठूलो सहयोगको राशि नेपाललाई शिक्षाको क्षेत्रमा प्रदान गरिरहेको थियो।

त्यहाँ पुगेको तेस्रो दिन केही विद्यालयहरूको र एउटा विशाल पुस्तकालयको निरीक्षणसमेत गर्न हामीहरू गएका थियौँ। ती विद्यालय र



डेन्मार्कको शिक्षामन्त्रालयको प्राङ्गणमा श्रीचुमानका साथ र कोपेहेगनस्थित विश्वविद्यालयको प्राङ्गणमा लेखक

पुस्तकालयहरू पूर्ण आधुनिक प्रविधिले सञ्चालित रहेछन्। बिहानको कार्यक्रम सिध्याएर हामीहरू खाना खाएपछि अपराह्न कोपेनहेगन शहरको भ्रमण गर्न गएका थियौँ। दिन उघ्रिएर घाम लागेको हुनाले अत्यन्त रमाइलो भएको थियो। शहरभरि नै हामीहरू जता जता गयौँ सबैतिर नङ्गा फिल्महरूको प्रदर्शन भइरहेको देखिन्थ्यो। त्यहाँ वात्सायनको कामसूत्र र फ्रायडको यौनसम्बन्धी मनोविज्ञानले जताततै काम गरेको देखिन्थ्यो।

त्यस देशमा लोकलाजको नामै छैन कि ? जस्तो मलाई लागेको थियो । जता गयो उतै नाङ्गा तथा कामुक मान्छेहरूका भीडको बीचबाट हिँडिरहेको जस्तो मलाई लाग्दथ्यो । लोकलाजको सीमा कतिसम्म हुनुपर्छ भन्ने कुराको ख्यालै नभएको मैले त्यहाँ देखेको थिएँ । अरू मित्रहरूलाई के कस्तो लागेको थियो ? तर मलाई भने त्यहाँको सामाजिक परिपाटि अत्यन्त उच्छृङ्खल र लोकलाजले विहीन भएको लागेको थियो । वास्तवमा त्यो देश भौतिकरूपमा विकसित भए पनि नैतिक र मानवीयरूपमा भने विकसित भएको थिएन भन्ने कुरा ती उच्छृङ्खल तथा अनैतिक कामकुराहरूबाट थाहा हुन्थ्यो ।

डेन्मार्कको राजधानी कोपेनहेगनमा बसुन्जेल हामीहरू धेरै जसो शिक्षाको क्षेत्रमा नै घुमेका थियौँ । त्यस राष्ट्रको शिक्षानीति अनुसार विद्यार्थीहरूले केवल किताब र गुरुको भरमा मात्र नपरेर आफ्नै शोचाइबाट पनि अघि बढ्नुपर्छ भन्ने देखिएको थियो । अर्को दिन हामीहरू बिहानै उठ्दा झलमल्ल घाम लागिरहेको थियो । त्यस देशमा घाम लागेको दिनलाई विशेष उत्सवको दिन मानिँदोरहेछ । हामीहरूले पनि उत्सव मनाउँदै सडकको परिक्रमा गरेका थियौँ । त्यहाँ पुगेको चौथो दिन हामीहरू फेरि शिक्षामन्त्रालयमा गएर त्यस राष्ट्रको शिक्षायोजना र शिक्षानीतिका बारेमा विस्तृत जानकारी लिएका थियौँ । त्यसै दिन विशेष शिक्षाको केन्द्र हेर्नका लागि हामीहरूलाई केन्द्रमा लगिएको थियो । त्यहाँ कसरी शिक्षालाई व्यवहारिकरूपमा लागू गर्नसकिन्छ भन्ने सम्बन्धमा प्रदर्शन गराइएको थियो । त्यसबाट हामीहरू अत्यन्त प्रभावित भएका थियौँ । त्यहाँका बालबालिकाहरूका लागि सञ्चालित भएका विद्यालयहरूमा सबैलाई खानाको सुविधाका साथै विनाशुल्क पढाउने र किताबहरू पनि  निःशुल्क उपलब्ध गराउने नीतिसमेत रहेछ ।

त्यसैदिन अपराह्न अशक्त बालबालिकाहरूका लागि सञ्चालित विद्यालयमा र हिलरोड भन्ने नगरपालिकामा पनि हामीहरू गएका थियौँ । त्यहाँ विकेन्द्रित शिक्षाप्रणालीको एउटा सुन्दर नमुना हामीहरूले देख्न पाएका थियौँ । त्यसपछि त्यतैबाट शिक्षाको स्रोतकेन्द्रमा पनि हामीहरूले भ्रमण गरेर त्यसको जानकारी लिएका थियौँ । त्यहाँबाट फर्किएर होटेलतर्फ आउने क्रममा हामीहरूले प्राचीन राजाको फ्रेडरिकबर्ग भन्ने पुरानू हरियो

दरबारको पनि अवलोकन गरेका थियौँ । त्यो दरबार पुरानू भए तापनि पर्यटकहरूका लागि अत्यन्त सुरक्षित गरेर राखिएको रहेछ । त्यस दिनको



डेन्मार्कको पुरानू राजदरबारको प्राङ्गणमा डा.पृथ्वीराज लिगल र डा.निर्मल पाण्डेका साथ लेखक



राजदरबारको भित्री कक्षमा अर्जुन बिष्टका साथ लेखक

कार्यक्रम समाप्त गरेर हामीहरू होटेल फर्किएका थियौँ ।

हामीहरू कोपेनहेगन पुगेको छैटौँ दिन शनिबार परेको थियो । त्यस दिन सबैतिर बिदा नै भएको हुनाले हामीहरू त्यहाँको स्थानीय ट्रेन चढेर समुद्रको तटमा रहेको क्ल्याम्पनबर्ग भन्ने मृगकुञ्जमा गएका थियौँ । अत्यन्त घना हरियो जङ्गलका बीचमा त्यहाँका स्थानीय मृगहरू पालिएका रहेछन् । दिनभरि समुद्रको तीरमा र मृगवाटिकामा घुमेर हामीहरूले दिनको खाना पनि त्यही वाटिकाको रेष्टुराँमा खाएका थियौँ । त्यो अत्यन्त सुन्दर डेनिस गाउँ थियो । छोटो समयमा पनि हामीहरूले डेन्मार्कको गाउँको पनि अवलोकन गरेका थियौँ । त्यसै दिन साँझ त्यहाँको विश्वविद्यालयमा अध्ययन गरिरहेका नेपाली विद्यार्थीहरूले हाम्रा सम्मानमा आयोजना गरेको रात्रिभोजमा हामीहरू गएका थियौँ । राती अबेरसम्म नेपाली विद्यार्थीहरूका साथै डेनिस शिक्षाविद्हरूसँग पनि रात्रिभोजमा सामेल भएर राती अबेर हामीहरू होटेल फर्किएका थियौँ ।

सातौँ दिन बिहान सबेरैदेखि नै जोनीका साथ हामीहरू डेन्मार्कको राजधानी कोपेनहेगन र त्यस वरिपरि रहेका ऐतिहासिक तथा प्राचीन धेरै

ठाउँहरूको भ्रमण गर्नगएका थियौँ । हामीहरू पुरानू राजदरबार, मत्स्यकन्या भएको ठाउँ, संसदभवन र बहुमूल्य राजकीय जुहारतहरू राखिएको ठाउँमा पनि गएका थियौँ । त्यसरी घुम्दाघुम्दै हामीहरू विशाल उत्तरी समुद्रको तीरमा पनि पुगेका थियौँ । त्यहाँ प्राचीन डेन्मार्कको इतिहासका साथसाथै प्राचीन वस्तुहरूको पनि सङ्ग्रहालय रहेछ । प्राचीन समयमा त्यो डेन्मार्क कहिले जर्मनीको अधीनमा, कहिले स्विडेनको अधीनमा र कहिले बृटेनको अधीनमा पनि पर्दो रहेछ ।

त्यससमयमा बलिया राष्ट्रहरूले निर्धा राष्ट्रहरूलाई हत्याउने परम्परा अनुसार जुन राष्ट्र बलियो हुन्छ उसैले लडाइँ गरेर डेन्मार्कलाई आफ्नू उपनिवेश बनाउँदोरहेछ । प्राचीन समयमा धेरै पटक धेरै राष्ट्रहरूको उपनिवेशमा परेर दुःख पाएको डेन्मार्क अन्त्यमा दोस्रो विश्वयुद्धको समयमा जर्मनहरूको अधीनमा परेको रहेछ । दोस्रो विश्वयुद्धको समाप्तिपछि जर्मनहरूबाट पनि स्वतन्त्र भएर डेन्मार्कले हाल एक सार्वभौमसत्ता सम्पन्न राष्ट्रको रूपमा सर्वाङ्गीणविकास गरेर आफ्नू राष्ट्रलाई अरू यूरोपेली राष्ट्रहरूको दाँजोमा पुऱ्याएको रहेछ । त्यतिमात्रै नभएर आर्थिकविकासको शिखरमा चढ्दैगएको डेन्मार्कले हाम्रो नेपालजस्ता धेरै विकासोन्मुख राष्ट्रहरूलाई विभिन्न क्षेत्रमा विकासका लागि खुला दिलले आर्थिक सहयोग पनि गर्ने गरेको रहेछ । हामीहरू पनि नेपालमा आधारभूतशिक्षाको विकासका लागि आर्थिक सहयोग माग्न त्यहाँ गएका थियौँ । समुद्रले घेरिएको र धेरैजसो पानी परेर अँध्यारो नै रहने त्यो सानू राष्ट्र हाल आर्थिक दृष्टिकोणले अत्यन्त सम्पन्न भएको रहेछ । प्राचीन समयमा आफ्ना छिमेकी राष्ट्रहरूबाट जतिसुकै थिचोमिचो खेप्नुपरेको भए तापनि त्यस राष्ट्रका जनताभने सधैँ शान्तिकै लागि बाँचेका रहेछन् । कहिल्यै पनि कसैसँग लडाइँ र झगडा नगर्ने ती राष्ट्रका जनता साँच्चैका शान्तिप्रिय भएर नै हाल विकास गरिरहेको देख्दा मलाई अत्यन्त खुशी लागेको थियो ।

उपर्युक्त अनुसार त्यहाँको एक हप्ताको कार्यक्रम समाप्त गरेर सम्बन्धित व्यक्तिहरूसँग बिदाबारी हुँदै र डेनिस सरकारलाई हार्दिक धन्यवादसमेत ज्ञापन गर्दै २०५५ साल चैत्र ८ गते दिनको अपराह्णहुँदा हामीहरू नेपाल फर्किने क्रममा त्यहाँको विमानस्थलमा गएका थियौँ । त्यसबेला त्यहाँ

मूसलधारे पानी परिरहेको थियो । त्यसैकारण निर्धारित समयमा हवाइजहाज उड्न नसकेपछि हामीहरूले विमानस्थलको प्रतीक्षालयमै बसेर तीन घण्टा बिताउनुपरेको थियो । पानी थामिएपछि साँझपख स्थानीय समय अनुसार सवा पाँच बजे हामीहरू बैंङ्ककतर्फ उड्न थाईएयरको बोइङ्ग दुई तले जम्बो जेट चढेका थियौं । फर्किंदा पनि हामीहरूलाई हवाइजहाजको माथिल्लो विशिष्ट श्रेणीको सीटमा नै ठाउँ दिइएको थियो ।

कोपेनहेगनबाट हवाइजहाज उडेर ४५००० फीटमाथि पुगेर बैङ्ककतर्फ सोझिएको थियो । रातको समय भएको हुनाले मैले हवाइजहाजको झ्यालबाट जाँदाको समयमा जस्तो पृथ्वीको दृश्य देख्न पाएको थिइन । खानापछि हामीहरूले आराम गरेका थियौं । एक हप्ता अगाडि डेन्मार्क जाँदा जुन बाटोबाट हामी चढेको हवाइजहाज गएको थियो सोही बाटोबाट फेरि बैङ्ककतर्फ फर्किंदै थियो । मेरो पुरानू बानी अनुसार म रातभरि नै सुत्नसकेको थिइन । जसरीतसरी मैले रात बिताएको थिएँ ।

अर्को दिन बिहानीपख हामीहरू चढेको जेट बैङ्कक विमानस्थलमा उत्रिएको थियो । हामीहरू विमानबाट उत्रिएर बैङ्ककको विशाल एयरटर्मिनलको प्रतीक्षालयभित्र गएर बसेका थियौं । त्यहाँको पसलमा हामीहरूले घरका लागि सामान्य उपहारहरू किनेका थियौं । त्यसपछि नेपालतर्फ उड्नका लागि सानू प्रतीक्षालयमा एक छिन हामीहरूले प्रतीक्षा गर्नुपरेको थियो । त्यहाँ प्रतीक्षा गरेर बस्दाबस्दै मैले २०२२ सालमा शाखा अधिकृतको परीक्षा दिंदा सामेल भएकी श्रीमती वीना पाण्डेलाई भेटेको थिएँ । उनी पछि अमेरिका गएर उतै अमेरिकी नागरिकसँग बिहा गरेर उनले घरजम गरेर बसेकी रहिछन् । मैले उनको बारेमा कुरामात्रै सुनेको थिएँ तर त्यस दिन उनी पनि आफ्ना पतिसहित अमेरिकाबाट बैङ्ककहुँदै माइत नेपाल आउने क्रममा त्यहीं हवाइजहाजको प्रतीक्षा गरेर बसेकी रहिछन् । ३२ वर्षपछि मैले उनलाई अचानक त्यहाँ भेट्दा अत्यन्त खुशी लागेको थियो । उनले पुराना कुराको सम्झना गर्दै आफ्नू अमेरिकी जीवनको बारेमा पनि मलाई भनेकी थिइन् । उनका छोराछोरीहरू पढेलेखेर आफ्नै खुट्टामा उभिने भइसकेका रहेछन् । अमेरिकी सामाजिक परिपाटि अनुसार उनका छोराछोरीहरूले स्वतन्त्ररूपमा कामकाज गरेर घरजम पनि

गरिसकेका रहेछन् । बूढेसकालमा आएर उनी र उनका अमेरिकी पतिमात्रै भिन्नै बस्ने गर्दारहेछन् । त्यसरी धेरै दिनपछिको सम्झना आपसमा आदानप्रदान गर्दै हामीहरू काठमाडौं आउने थाईएयरको जेट चढेर काठमाडौं आएका थियौं ।

त्यस दिन आकाश अत्यन्त सफा भएको हुँदा मैले झ्यालबाट बाहिरी दृश्य हेर्दै आफ्नू यात्राविवरण लेख्दै थाईल्याण्ड, बर्मा, बङ्गलादेश र भारतको भूमि पार गर्दै नेपाल प्रवेश गरेको थिएँ । महाभारतको पहाडलाई अत्यन्त सहजताका साथ पार गरेर हामीहरू चढेको जहाज २०५५ साल चैत्र ९ गते सोमवारका दिन दिनको एक बजे काठमाडौंको त्रिभुवनअन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएको थियो । त्यसरी मैले सरकारको सेवामा रहेर अन्तिम विदेशको यात्रा गरेको थिएँ । त्यही वर्ष चैत्र महिनाको २५ गते मैले सरकारको सेवाबाट स्वैच्छिक अवकाश लिने निश्चय गरेको हुँदा पनि मैले डेन्मार्कको त्यस यात्रालाई अन्तिम यात्रा भनेर संज्ञा दिएको हुँ ।

उपर्युक्त अनुसार डेन्मार्कको यात्रा समाप्त गरेर शिक्षा मन्त्रालयमा मेरो अनुपस्थितिमा मैले गर्नु पर्ने बाँकी रहेका कामहरू समाप्त गरेर म २०५५ साल चैत्र २५ गते विशिष्ट श्रेणीको सचिव भएको पाँच वर्षको अवधि पुग्नुभन्दा पहिले नै सेवाबाट स्वैच्छिक अवकाश लिने भएको हुँदा म त्यसै तयारीमा लागेको थिएँ ।

मलाई तत्कालीन मुख्यसचिव श्रीबलरामसिंह मल्लले मिति २०५५ साल फागुन ८ गतेदेखि २०५५ साल फागुन २५ सम्म विश्वबैङ्कको केन्द्रीय कार्यालय रहेको संयुक्तराज्य अमेरिकाको राजधानी वाशिङ्टनमा सम्झौता गर्न गएको अवधि लामू भएकाले किन त्यति लामू अवधि विदेशमा बस्नुपरेको हो ? भन्ने प्रश्न राखेर मसँग जबाफ मागेका थिए । मैले आफ्नू जबाफमा तत्कालीन सरकारको निर्णय अनुसार विश्वबैङ्कसँग सम्झौता गरी आधारभूत शिक्षाविकासका लागि उक्त बैङ्कमा रोकिएको आर्थिक सहायता र ऋणसमेत फुकाएर आएको हुँ । त्यस सम्बन्धमा कुनै खालको जबाफ दिइरहनु नपर्ने भनेर मैले उत्तर दिएको थिएँ । त्यसरी आफैं मुख्यसचिव रहेको मन्त्रिपरिषद्को बैठकले निर्णय गरेर महत्त्वपूर्ण अन्तर्राष्ट्रिय स्तरको सम्झौता गरेर नेपाललाई महत्त्वपूर्ण आर्थिक सहयोग उपलब्ध

गराउन सफल भएको मलाई तत्कालीन सरकारले धन्यवाद ज्ञापनको साथै पुरस्कृतसमेत गर्नु पर्नेमा अझ उल्टो किन लामू अवधि अमेरिकामा बस्नुपरेको हो ? भनेर मुख्यसचिवजस्तो जिम्मेवार पदमा बसेको व्यक्तिले म तत्कालीन सरकारको विशिष्टश्रेणीको शिक्षासचिवलाई सोध्नु हास्यास्पद कुरा बाहेक अरू केही थिएन । त्यस प्रकारका सामान्य ज्ञान र विवेकसमेत नभएका मुख्यसचिवले तत्कालीन सरकारलाई के कस्तो सल्लाह दिए होलान् ? सहजै अनुमान गर्न सकिन्छ । त्यस्तै अयोग्य तथा ज्ञानशून्य मुख्यसचिवको सल्लाहले नै तत्कालीन सरकार असफल भएको हो भन्न सकिन्छ । त्यसरी अयोग्य मुख्यसचिवसँग अर्थशून्य लेखापढी हुँदाहुँदै मैले अवकाश लिने समय आइसकेको थियो । त्यस बेलाका शिक्षा मन्त्री पनि अत्यन्त अकर्मण्य र भित्रका चिसा व्यक्ति भएका हुनाले मैले अवकाश लिने बेलासम्ममा पनि उनले मन्त्रालयको काममा मलाई भरपर्दो सहयोग गरेका थिएनन् ।



जेठो छोरो सञ्जीवकुमार भट्टराईको शुभविवाहको अवसरमा आमन्त्रित भएर आउनुभएका श्रीगिरिजाप्रसाद कोइरालाका साथ आफ्नै घरमा लेखक, २०५६ साल फागुन १८ गते

२०५५ साल चैत्र २१ गतेका दिन स्वैच्छिक अवकाशका लागि तत्कालीन सरकारलाई मैले निवेदन दिएको थिएँ । तदनुसार २०५५ साल चैत्र २५ गतेदेखि लागू हुनेगरी तत्कालीन सरकारले मलाई स्वैच्छिक अवकाश

दिएको थियो । त्यसरी मेरो सेवाको अवधि ३२ वर्ष २ महिना र ८ दिन पुगेका दिन चैत्र २८ गते सेवाबाट सगौरव मैले अवकाश लिएको थिएँ । सेवाबाट अवकाश लिँदालिँदै मैले आफ्नू जागिरे जीवनका सम्बन्धमा एउटा कविता लेखेको थिएँ । उक्त कविता मेरो पत्रैपत्र भन्ने कवितासङ्ग्रह २०५८ मा प्रकाशित भइसकेको छ । उक्त कविताको केही अंश निम्न अनुसार दिएको छु –

पश्चिमाशा पुगे सूर्य लामू छाया झऱ्यो पर ।
गरेँ जीवनमा मैले लामू यात्रा निरन्तर ॥
काँडा माथि हिँडेँ कैले फूलमा कहिले परेँ ।
कहिले व्योमको यात्रा कैले जमीनमा झरेँ ॥
आफैँ उठेँ सधैँ आफ्नै चरित्र बलले गरी ।
विनादाग विनादोष म गएँ सजिलै तरी ॥
फर्की अतीतमा हेर्दा दृश्य देख्छु थरीथरी ।
घुम्दछन् नेत्रमा सारा चलचित्र घुमे सरि ॥
खाएँ जागिर सानैमा आफूमा नै गरी भर ।
बितेछन् बर्ष बत्तीस सेवा गर्दै निरन्तर ॥
अवकाश लिई ऐले सेवाबाट भएँ पर ।
मेरो संस्कारमा व्याप्त जागिरै छ अझै तर ॥
कस्तो हो यो नशा जस्तो मात लागे सरी सदा ।
बिर्सेर पनि बिर्सिन्न दुःख दिन्छ यदाकदा ॥
युवावस्था गयो मेरो यसै जागिरमा पसी ।
गुमाएँ अनि के पाएँ शोच्छु एकान्तमा बसी ॥
गुमाएँ पनि के भन्नु बित्थ्यो आयु निरन्तर ।
पाएँ नै पनि के भन्नु छैन तात्त्विक अन्तर ॥
धेरै बित्यो आयु मेरो घुम्दै नित्य यताउता ।
विनाज्ञान विनाहोस हाम फाल्दै जतातता ॥
खुला बन्द सबै देखेँ भोगेँ विभिन्न शासन ।
बनेँ शासनको अङ्ग गर्दै आदेश पालन ॥
स्मृतिमा कति छन् मेरा कति विस्मृतिमा गए ।

चाहे ती जेसुकै होलान् मेरा अङ्ग सबै भए ॥
जानीजानी गरेँ यद्वा नजानी नबुझी गरेँ ।
मैले स्वीकार्नु नै पर्छ मैले जस्तो जहाँ गरेँ ॥
जे भयो सो भयो पैले आखिरी हुनु नै भयो ।
इतिहास भयो सारा टाढा टाढा कता गयो ॥
मैले बिर्सनु नै पर्छ मेरा विगतका दिन ।
किन तै पनि सम्झन्छु के छ बाँकी अझै लिन ॥
लाम् जागिरमा बस्ता भोगें जागिरको सुख ।
अझै संस्कार बाँकी छ त्यतैतर्फ छ उन्मुख ॥
पूर्वपश्चिम चाहे होस् चाहे दक्षिण उत्तर ।
गई काम गरेँ मैले खुशीसाथ सबैतिर ॥
रोजाइ अनि छोडाइ भएन कहिल्यै कहीँ ।
मेरालागि सबै एक सम्म लाग्थ्यो जहींतहीं ॥
लाम् जागिर खाएर मेरो संस्कार नै बस्यो ।
दिनचर्या बन्यो मेरो दिमागदिलमा पस्यो ॥
अवकाश लिई ऐले निवृत्तिसाथ बस्तछु ।
म आफ्नै घरको स्वामी म आफैँसँग मस्त छु ॥
दशपाँच गयो ऐले गयो सर्कारको डर ।
जी हजूरी छुटे सारा भोगेथेँ जो निरन्तर ॥
पुराना पत्र फ्याँकेर मान्छे खोज्छ नयाँनयाँ ।
यौटा जीवनको यात्रा सकियो शुरु भो नयाँ ॥
कर्मका वश छन् सारा प्राणी स्थावरजङ्गम ।
प्रारब्ध कर्ममा जे छ सोही भोगेर घुम्छु म ॥
कर्मबाट उठी माथि ज्ञानतर्फ दिई मन ।
बाँच्नेछु ज्ञानकै निम्ति बाँकी निवृत्त जीवन ॥

*काठमाडौं, २०५५ चैत्र २८ गते*



# सेवाबाट अवकाश लिएपछि

त्यसरी लामो अवधिसम्म सरकारको सेवामा रहेर मैले अवकाश लिँदा ममा एउटा रिक्तता र भविष्यप्रतिको अनिश्चितता उत्पन्न भएको थियो । म त्यसबेला कुनै पनि आयोग वा उच्चस्तरीय सरकारी नियुक्ति पाएमा केही वर्ष सेवा गर्ने मनस्थितिमा थिएँ । विभिन्न आयोग र निकायहरूमा नियुक्ति गर्ने भनेर मलाई तत्कालीन सरकारका प्रमुखहरूले आश्वासन दिएका थिए तापनि आफ्नै मानिसहरूलाई राख्ने वा लोभलालचामा परेर चाप्लुस र अनैतिक व्यक्तिहरूलाई नै त्यस प्रकारका आयोग र उच्च निकायहरूमा राख्न थालेपछि त्यस प्रकारको नियुक्ति प्राप्त गर्नेतर्फ ममा विरक्ति आएको थियो ।

सेवाबाट अवकाश प्राप्त गरेको १ वर्षसम्म उपर्युक्त अनुसारको पद पाएको भए फेरि सेवा गर्ने ममा लालसा थियो, तर पछिभने क्रमशः इच्छा घट्दै गएको थियो । कुनै पनि प्रकारको पदमा बसेर काम गर्नु आफूलाई नै अपहेलित गर्नु हो भन्ने ठानेर मैले त्यसपछि तत्कालीन सरकारहरूले विभिन्न आकर्षक पदहरूमा काम गर्न मलाई बोलाए तापनि म गएको थिइन । ती पदहरूमा काम गर्न जानु त परै जाओस् , त्यसका लागि बोलाउने राजनीतिक व्यक्तिहरूलाई भेट्न जानसम्म पनि मलाई घृणा लागेर आएको थियो । त्यतिमात्र होइन, तत्कालीन राजा वीरेन्द्रले विशेष कामका लागि दरबारको उच्च ओहोदामा राखेर मबाट सेवा लिने भन्ने दरबारको इच्छालाई पनि मैले अस्वीकार गरेको थिएँ । आफ्नू अमूल्य समय सरकारी सेवामा समाप्त गरेर अवकाश पछिको बाँकी जीवनको समय पनि परमार्थका लागि सदुपयोग नगर्नु आफ्नू मूर्खता नै हने भन्ने ठानेर मैले दायाँबायाँ कतै नशोची वेदान्तचिन्तन र सामाजिक सेवाको काममा नै आफ्नू बाँकी जीवन अर्पण गर्ने निश्चय गरेको थिएँ । त्यसपछि म तदनुरूप नै अहिलेसम्म पनि अनवरतरूपमा आफ्नू दिनचर्यामा संलग्न भइरहेको छु ।



# नेपाल स्काउटमा

मैले आफूलाई वेदान्तचिन्तन र समाजसेवाको काममा संलग्न गराइरहेकै बेला २०५७ साल भाद्र ३ गते नेपाल स्काउटको प्रमुख आयुक्तमा मैले इच्छा नगर्दा नगर्दै पनि राष्ट्रिय परिषद्को बैठकले सर्वसम्मतिबाट मलाई निर्वाचित गरेपछि म त्यहाँ काम गर्न बाध्य भएको थिएँ। वास्तवमा तत्कालीन शिक्षामन्त्री श्रीआमोदप्रसाद उपाध्यायले त्यस समयमा नेपाल स्काउटमा रहेको व्याप्त भ्रष्टाचार र अनियमिततालाई हटाएर राष्ट्रिय तथा अन्तर्राष्ट्रियस्तरमा नेपाल स्काउटको छविलाई स्वच्छ पारिदिन अनुरोध गरेपछि मैले केवल १ वर्षका लागि सो पद स्वीकार गरेर शिक्षामन्त्रीबाट शपथग्रहण गरेको थिएँ।

सरकारको लामू सेवाबाट अवकाश लिएपछि कहीं पनि वैतनिक जागिरमा प्रवेश नगर्ने, कसैबाट प्रदान गरिने मान, सम्मान र पदवीसमेत स्वीकार नगर्ने अठोट गरेर बसिसकेको मलाई मेरो स्वीकृति नलिइकनै नेपाल स्काउटको केन्द्रीय कार्यालयको प्रमुख आयुक्तमा त्यसरी निर्वाचित गरेको हुँदा मेरो चित्त बुझेको थिएन। नेपाल स्काउट केन्द्रीय कार्यालयको प्रमुख आयुक्तको पद कुनै वैतनिक जागिर नभएर स्वयंसेवी किसिमको सामाजिक सेवा गर्ने संस्था नै भएको हुँदा मेरो अठोट विपरीतको पद थिएन। तै पनि म कसैको अधीनमा बसेर र कसैबाट निर्देशित भएर काम गर्न चाहन्नथेँ। मेरा विरुद्धमा उठेर असफल भएका श्रीराम लामिछाने काठमाडौं उपत्यका भित्रका केही स्काउटरहरूलाई भड्काएर विद्रोही भएका थिए तापनि म गएर काम गर्न थालेपछि उनी आफ्ना अनुयायीहरूका साथ मसँग आएका थिए। उनीहरूले भविष्यमा कुनै वैमनस्य नराखी मलाई सहयोग गर्ने वचन दिएका हुँदा श्रीराम लामिछाने लगायतका व्यक्तिहरूलाई विभिन्न पदमा नियुक्त गरी मैले काम लगाएको थिएँ।

उपर्युक्त अनुसार सबैथरी स्काउटरहरूलाई एकै ठाउँमा ल्याएर काम गर्न म सफल भएपछि नेपाल स्काउट भित्रको भ्रष्टाचार र विकृतिलाई

हटाउँदै धेरै वर्षदेखि अनुशासनहीन भएको नेपाल स्काउटलाई सुधार गर्नु मेरो पहिलो कर्तव्य थियो । दोस्रो नेपाल स्काउटभित्र अनावश्यकरूपमा भर्ना गरेर राखिएका कर्मचारीहरूको छटनी गरेर नेपाल स्काउटको केन्द्रीय कार्यालयलाई चुस्त तथा दुरुस्त बनाएर अगाडि बढाउनु थियो । त्यसरी योजनाबद्ध तरिकाले काम गरिरहेकै बेला एशिया क्राइम प्रिभेन्सन फाउण्डेशन जापानको निम्तोमा सन् १९९९ नोभेम्बर २३ तारिखदेखि २५ तारिख तदनुसार संवत् २०५६ साल मङ्सिर ७ गते देखि ९ गतेसम्म भारतको नयाँदिल्लीमा हुने ए.सी.पी.एफ को विश्वसम्मेलनमा भाग लिन सम्मेलनको निम्तो प्राप्त भएको थियो । उक्त सम्मेलनमा भाग लिन मङ्सिर ६ गते महान्यायाधिवक्ता श्रीबद्रीबहादुर कार्की, सुश्री इन्दिरा राणा, श्रीवेदव्यास क्षेत्री, श्रीकृष्णवल्लभ काफ्ले र डा. मीनबहादुर पौडेलहरूका साथमा म पनि नयाँदिल्ली गएको थिएँ । हामीहरूलाई अशोका होटेलमा राखिएको थियो । सम्मेलनमा भाग लिएर वि.सं.२०५६ साल मङ्सिर ११ गते म नेपाल फर्किएको थिएँ ।



भारतको राजधानी नयाँ दिल्लीमा भएको ACPF को विश्वसम्मेलनमा नेपाली प्रतिनिधिमण्डलका साथ लेखक

त्यसपछि उक्त संस्थाको जनवादी गणतन्त्र चीनको राजधानी बेजीङमा हुने विश्व सम्मेलनमा भाग लिन अन्तर्राष्ट्रिय निर्देशकको हैसियतले मैले जानुपर्ने भएको थियो । म त्यस बेला नेपाल स्काउटको प्रमुख आयुक्त भएर काम गरिरहेको र सो संस्थाको सम्पर्कमन्त्रालय शिक्षामन्त्रालय भएको हुँदा केवल औपचारिकताको लागि मैले चीनमा आयोजना गरिने उक्त विश्वसम्मेलनमा सहभागी हुन जाने कुराको जानकारी शिक्षामन्त्रालयमा दिएको थिएँ । त्यस बेलाका शिक्षामन्त्रालयका सचिव खगेन्द्र बस्नेतले उक्त सम्मेलनमा भाग लिन नेपाल स्काउटको प्रमुख आयुक्त जान नमिल्ने, सम्बन्धित क्षेत्रको व्यक्ति जानुपर्ने भनेर बीचमा टाँग अड्याउन खोजेर आफ्नू दुष्टता प्रदर्शित गरेका थिए । मलाई शिक्षामन्त्रालयको स्वीकृति अथवा अस्वीकृतिसँग कुनै कुराको सरोकार थिएन । म स्वयंसेवी भएर

आफ्नै घरको पैसा खर्च गरेर नेपाल स्काउटको सेवा गरिरहेको व्यक्तिलाई मेरो व्यक्तिगत हैसियतमा आएको निम्तोलाई पनि निज खगेन्द्र बस्नेतले रोक्न खोजेको देख्दा निजको नीचताप्रति मलाई अत्यन्त दया लागेर आएको थियो ।

सोही कुरा दर्शाउँदै मलाई चीन जानबाट रोक्न निज बस्नेतले तत्कालीन शिक्षाराज्यमन्त्री श्रीदिलेन्द्रप्रसाद बडुका समक्ष टिप्पणी पेश गरेका रहेछन् । राज्यमन्त्री बडुले व्यक्तिगत हैसियतमा प्राप्त निम्तो भएको हुँदा श्रीशरदकुमार भट्टराईलाई चीन जानबाट रोक्न नमिल्ने भनेर निर्णय गरेका थिए ।





औपचारिक राष्ट्रिय पोशाकमा विभिन्न विभूषण, अलङ्कार र पदकसहित लेखक

# तेस्रोपटक चीनमा

माथि उल्लेख भए अनुसार भारतको राजधानी नयाँ दिल्लीमा भएको Asia Crime Prevention Foundation को विश्वसम्मेलन पछि अर्को विश्वसम्मेलन जनवादी गणतन्त्र चीनको राजधानी बेजीङमा हुने निर्णय भएको थियो । सोही निर्णयानुसार मलाई निम्ता प्राप्त भएको हुँदा उक्त विश्वसम्मेलनमा भाग लिनका लागि म अरू नेपाली मित्रहरूका साथ नेपाली हवाइजहाज चढेर २०५७ साल असोज २३ गते तदनुसार सन् २००० अक्टोबर ९ तारिखका दिन चीनको राजधानी बेजीङतर्फ प्रस्थान गरेको थिएँ । त्यसरी विश्वसम्मेलनमा भाग लिन जानेहरूमा मेरा अतिरिक्त तत्कालीन महान्यायाधिवक्ता श्रीबद्रीबहादुर कार्की, तत्कालीन मानव अधिकार आयोगकी सदस्या श्रीइन्दिरा राणा, डा. श्रीमीनबहादुर पौडेल, श्रीकेदार पौडेल र श्रीजयराज पौडेलसमेत थिए ।

काठमाडौंबाट थाईको हवाइजहाजद्वारा प्रस्थान गरेर सर्वप्रथम हामीहरू थाईल्याण्डको राजधानी बैङ्कक पुगेका थियौं । त्यसै दिन साँझ थाईएयरलाइन्सकै हवाइजहाजबाट उडेर हामीहरू मध्यरातमा हङ्कङ पुगेर त्यहाँ रहेको नेपाली महावाणिज्यदूत श्रीजैनेन्द्र जीवनको पाहुना भएर चुङ्किङम्यान्सनमा बसेका थियौं । भोलिपल्ट हामीहरू चाइनाएयरलाइन्सको अत्याधुनिक जेट चढेर बेजीङतिर दिनको मध्याह्नमा प्रस्थान गरेका थियौं र साँझ बेजीङ पुगेका थियौं । हामीहरूलाई लिएर जाने चाइनाएयरलाइन्सको बोइङ कम्पनीको अत्याधुनिक ७३७ नम्बरको हवाइजहाज भएको हुँदा हामीहरू अत्यन्त आरामका साथ बेजीङ पुगेका थियौं । मेरो जनवादी गणतन्त्र चीनको त्यो तेस्रो पटकको यात्रा थियो ।

बेजीङको अन्तर्राष्ट्रिय विमानस्थलमा उत्रिएपछि हामीहरूलाई उक्त अन्तर्राष्ट्रिय सम्मेलनका अधिकारीहरूका साथै चिनियाँ महान्यायाधिवक्ताको कार्यालयका अधिकारीहरूसमेत स्वागत गर्न हवाइअड्डामा आएका थिए । हाम्रा साथमा त्यस बेलाका नेपालका महान्यायाधिवक्ता श्रीबद्रीबहादुर

कार्की पनि थिए । चीनका सम्बन्धित अधिकारीहरूले हाम्रो भव्य स्वागत गरेका थिए । त्यसपछि झण्डावाल गाडीमा राखेर हामीहरूलाई बेजीङ शहरको परिक्रमा गराउँदै सोङ्ह भन्ने एउटा भव्य होटेलमा लगेर सम्बन्धित अधिकारीहरूले राखेका थिए । हामीहरू त्यो रात घुम्न बाहिर कहीँ पनि नगएर होटेलमा नै आराम गरेर बसेका थियौँ । अर्को दिन बिहानैदेखि हामीहरूलाई चीनका सम्बन्धित अधिकारीहरूले सरकारी वाहनमा राखेर फर्बिडेन सिटी लगायतका विभिन्न दर्शनीय स्थलहरूमा घुमाउन लगेका थिए ।



चीनको राजधानी बेजीङविमानस्थलमा चिनियाँ अधिकारीका साथ हात मिलाउँदै लेखक, सन् २००० अक्टोवर १०

त्यसैदिन मध्याह्नमा हामीहरू चीनको प्रसिद्ध ग्रेटवाल हेर्न गएका थियौँ । त्यसभन्दा पहिले मैले दुई पटक चीनको यात्रा गर्दा गएको ग्रेटवालको भागमा नलगेर त्यसपटक भने अर्कै भागमा लगेर हामीहरूलाई चिनियाँ मार्गदर्शकहरूले घुमाएका थिए । त्योबेला शरद्ऋतुको समय थियो तापनि पानी र हिउँसमेत परेको हुँदा अत्यन्त जाडो भएको थियो । त्यस कारण मैले ग्रेटवालमा रहेको पसलमा ऊनी ज्याकेट किनेर लगाएको थिएँ । साह्रै जाडो भएको हुँदा हामीहरू तुरुन्तै होटेल फर्किएका थियौँ । चीन पुगेको तेस्रो दिन हाम्रो अन्तर्राष्ट्रिय सम्मेलन तेनयानमेनस्क्वायर भित्रको विशाल भवनमा बिहानैदेखि शुरुभएको थियो । त्यस विशाल सभाकक्षलाई अङ्ग्रेजीमा The great hall of the pepole भनिँदो रहेछ । त्यसै विशाल तथा भव्य कक्षमा हाम्रो विश्वसम्मेलनको उद्घाटन चीनका तत्कालीन प्रधानमन्त्री श्रीली फेङले गरेका थिए । त्यस सम्मेलनमा भाग लिन विश्वभरिकै प्रतिनिधिहरू त्यहाँ भेला भएका हुँदा त्यो ऐतिहासिक भेला थियो भन्ने मैले ठानेको थिएँ । विश्वसम्मेलन शुरुभएपछि बीचबीचमा हामीहरू दर्शनीय स्थलहरूको




विश्वसम्मेलनमा उपलब्ध गराइएको प्रवेशपत्र

अवलोकन गर्न यात्रा गर्नेगर्दन्थ्यौँ ।

हामीहरूले त्यस पटक भ्रमण गरेका दर्शनीय स्थलहरूमध्ये तेनयानमेनस्क्वायर भित्रको एउटा भव्य घरमा राखिएको माओको शवको अवलोकनसमेत थियो । पहिलेका दुई पटकका यात्रामा मैले जति प्रयास गरे पनि हेर्न नपाएको माओत्सेतुङको उक्त लाशलाई त्यस पटक भने मैले अवलोकन गर्नपाएको थिएँ । जनवादी गणतन्त्र चीनका तत्कालीन शक्तिशाली नेता माओत्सेतुङ तात्कालिक आफ्ना सम्पूर्ण क्रियाकलापहरू समाप्त गरेर चिरनिद्रामा सुतेजस्ता देखिन्थे । उनका आँखाहरू बत्तीका प्रकाशमा टल्किरहेका थिए । माओको त्यो परिणति देख्दा जतिसुकै शक्तिशाली र क्रान्तिकारी भए तापनि अन्ततोगत्त्वा कालका मुखमा सधैँका लागि सबैले पर्नु नै पर्नेरहेछ भन्ने ज्ञान हुन्छ । विश्वविजेता र भयङ्कर पराक्रमी भए तापनि सृष्टिको प्रथम प्रभातदेखि नै अहिलेसम्म कोही पनि चिरञ्जीवी बनेर बाँच्नसकेको छैन । त्यहाँबाट निस्किएपछि मलाई त्यस्तै खालको श्मशानमा हुने वैराग्यले छोएको थियो ।

त्यसपछि हामीहरू बेजीङमा रहेको गरीबहरूका बस्तीमा गएका थियौँ । त्यहाँका गरीबहरू पनि नेपाली गरीबहरू जस्तै अत्यन्त दीनहीन अवस्थामा बाँचेका हुँदारहेछन् । त्यस दिन हामीहरू सम्पूर्ण शहर घुमेर साँझपख फेरि आएर सम्मेलनमा सहभागी भएका थियौँ । अर्को दिन बिहानै बुद्धका विशाल मूर्तिहरू रहेको लामामन्दिरमा गएका थियौँ । चीनजस्तो अत्यन्त नास्तिक साम्यवादी देशमा पनि बुद्धका मूर्तिहरू र मन्दिरहरू यत्रतत्र मर्मत र सम्भार गरेर राखिएका देख्दा मलाई अत्यन्त खुशी लागेको थियो । त्यताबाट दिनमा सम्मेलन स्थलमा फर्किएर हामीहरूले भाग लिएका थियौँ । त्यस दिनको साँझ हामीहरू चाइनिज ब्याले नाटक हेर्न विशाल नाचघरमा गएका थियौँ । भाषा बुझ्न नसके तापनि हाउभाउबाट उक्त ब्याले अत्यन्त उत्कृष्ट थियो भन्ने कुरा मैले अनुमान गरेको थिए ।

सन् २००० अक्टोवर १५ तारिखका दिन बिहान हामीहरू भूमिगत रेल चढेर बेजीङ रेडियोको नेपाली विभागमा गएका थियौँ । त्यहाँबाट नेपालीमा सधैँ समाचार प्रसारण हुन्छ भन्नेकुरा मलाई थाहा थियो तापनि समाचार प्रसारण गर्ने रेडियो केन्द्रको अवलोकन भने त्यसै पटक गर्ने शुभ अवसर

मैले पाएको थिएँ। त्यहाँ गएर हामीहरू सबैले आ–आफ्नू सन्देश दिएका थियौँ र रेडियोबाट सो प्रसारण पनि भएको थियो। मैले दिएको कवितात्मक सन्देश निम्न अनुसार थियो। जस्तै –

भुलेर वैमनस्य ती बनेर शान्त सुस्थिर।
बढी रहेछ चीन यो विकासकार्यकातिर॥
विशाल राष्ट्र चीन यो विशाल शक्तिको घर।
विशाल नै विशालमा विशालता निरन्तर॥
म देख्छु आज चीनमा जताततै छ उन्नति।
उठोस् अझै उँभो उँभो गरोस् सधैँ समुन्नति॥

त्यसरी मैले चीनप्रति शुभकामना व्यक्त गरेको थिएँ। त्यताबाट फर्किएर हामीहरू सम्मेलन स्थलमा गएका थियौं। उक्त सम्मेलन पनि त्यसै दिन समाप्त भएको थियो। बिदाइभोज त्यसै रात बेजीङको भव्य ग्रीष्मप्रासादमा दिइएको थियो।

सन् २००० अक्टोबर १६ तारिखका दिन बिहानै हाम्रो यात्रा चीनको रमणीय स्थल हाइन भन्ने टापुमा हुने व्यवस्था गरिएको थियो। त्यसै रात भयङ्कर समुद्री आँधी आएर हाइन टापुमा जान नसक्ने भएपछि हामीहरू बेजीङमै बसेर त्यहाँका बाँकी दर्शनीय स्थलहरू अवलोकन गर्नेतर्फ लागेका थियौँ।

अक्टोबर १७ तारिखका दिन बिहानै बेजीङ शहरको बाहिरपट्टिको पर्वतशृङ्खलामा रहेको प्राचीन प्राकृतिक गुफा हेर्न हामीहरूलाई लगिएको थियो। त्यो गुफा नेपालको खोटाङ जिल्लाको हलेँसी महादेवस्थानको गुफा र पोखरामा रहेको महेन्द्र गुफाजस्तै रहेछ। गुफाका भित्रपट्टि चमेराहरू बसेका हुँदा अत्यन्त फोहोर र पानी पलाएर हिंड्नै नसकिने थियो तापनि सकेसम्म पर्यटकहरूका लागि सुविधा प्रदान गर्ने कोशिश त्यस गुफाका प्रबन्धकहरूले गरेका थिए। त्यताबाट फर्किएर हामीहरू चीनको बेजीङ शहरमै रहेको सिर्जनाको संसार हेर्न गएका थियौँ। त्यहाँ संसारभरिका आश्चर्य लाग्दा र अनौठा वस्तुहरूका नमुनाहरू दुरुस्तै निर्माण गरेर पर्यटकहरूलाई अवलोकन

गर्नका लागि राखिएका रहेछन् । त्यो भ्रमण गरेर संसारकै भ्रमण गरेजस्तो मलाई लागेको थियो । बेजीङभरिको शुरुदेखि अन्त्यसम्मको यात्रामा हामीहरूलाई सुहाओ भन्ने चिनियाँ दोभाषे मित्रले पथप्रदर्शकको रूपमा साथ दिएका थिए । उनी अत्यन्त सहृदयी, नेपालीहरूलाई माया गर्ने र नाम पनि मुकुन्द भन्ने नेपाली नै राखेका असल मित्र थिए । उनी धेरै वर्षसम्म काठमाडौंमा रहेको चिनियाँ दूतावासमा सम्पर्क अधिकारी भएर बसेका रहेछन् । त्यसै हुँदा उनी नेपाली भाषा राम्रोसँग नेपालीले बोलेजस्तै बोल्दथे । उनले गरेको अत्यन्त आत्मीय सहयोग म कहिल्यै पनि बिर्सन सक्तिन । त्यसरी मुकुन्दको सहयोग पाएर हाम्रो एक हप्ताको चीनको राजधानी बेजीङको बसाइ अत्यन्त स्मरणीय भएको थियो ।

सन् २००० अक्टोवर १७ तारिखका दिन बेलुका बेजीङमा रहेको नेपाली राजदूतावासको निम्तोमा हामीहरू रात्रिभोजमा गएका थियौं । उक्त रात्रिभोजको अवसरमा हामीहरूले राजदूत, दूतावासका अरू अधिकारीहरूका साथसाथै चीनमा त्यसबेला अध्ययन गरिरहेका केही विद्यार्थीहरूलाई पनि भेटेर हामीहरूले कुरा गर्ने मौका पाएका थियौं । अत्यन्त सौहार्दपूर्ण वातावरणमा रात्रिभोजमा सम्मिलित भएर हामीहरूले होटेलमै फर्किएर आराम गरेका थियौं ।

सन् २००० अक्टोबर १८ तारिखका दिन बिहान सबेरै नै होटेल छाडेर हामीहरू हवाइजहाज चढेर मनोरम च्याङ्सी भन्ने शहरमा गएका थियौं । बेजीङमा भएको विश्वसम्मेलनपछि नेपालका तत्कालीन महान्यायाधिवक्ता श्रीबद्रीबहादुर कार्कीका साथमा हामीहरू चीनका महान्यायाधिवक्ताको



लुसाङ पहाडमा चिनियाँ मित्रहरूका साथ नेपाली प्रतिनिधिमण्डल

निमन्त्रणामा औपचारिक भ्रमणका निमित्त च्याङ्सी गएका थियौँ । च्याङ्सी पुगेपछि हामीहरूलाई त्यहाँको सरकारी महान्यायाधिवक्ताको कार्यालयले राम्रो स्वागतसत्कार गरेको थियो । हामीहरूलाई हवाइअड्डाबाटै सोझै लुसाङ भन्ने रमणीय तथा ऐतिहासिक पहाडमा लगिएको थियो । गाडीबाट तीन घण्टा यात्रा गरेपछि हामीहरू अग्ला पहाडका शिखरमा बनेको सुन्दर तथा दर्शनीय स्थलमा पुगेका थियौँ । साँझमा पुगेर हामीहरू त्यहाँको सरकारी अतिथिगृहमा बसेका थियौँ ।



लुसाङ पहाडको ऐतिहासिक वृक्षहरू रहेको क्षेत्रमा चिनियाँ मित्रहरूका साथ नेपाली प्रतिनिधिमण्डल



चीनका शक्तिशाली नेता माओको लुसाङ पहाडमा रहेको ऐतिहासिक विश्रामगृह अगाडि प्रतिनिधिमण्डल

अक्टोबर १९ तारिखका दिन बिहानैदेखि हामीहरूलाई त्यहाँका दर्शनीय तथा ऐतिहासिक स्थलहरूमा घुमाइएको थियो । ती दर्शनीय स्थलहरूमध्ये चीनका क्रान्तिकारी नेता माओत्सेतुङ, च्याङ्काइसेक र डा. सन्यात्सेनका घरहरूमा पनि हामीहरूलाई लगिएको थियो । त्यस बेला ती तीन थरी नेताहरू एकै ठाउँमा बसेर सरसल्लाह र बैठकसमेत गर्नेगर्दारहेछन् । पछिमात्र उनीहरूका बीचमा मतभिन्नता भएर झगडा भएको रहेछ । त्यहाँ रहेका ती राजनेताहरूका घरमा उनीहरूले प्रयोग गरेका सबै सामानहरू पर्यटकहरूका अवलोकनका लागि जस्ताको तस्तै सुरक्षा गरेर राखिएका रहेछन् । ती राजनेताहरूका तस्वीरहरू र हस्ताक्षरहरूसमेत त्यहाँ सुरक्षित भएको हामीहरूले देखेका थियौँ । त्यतिमात्रै नभएर त्यहाँ माओत्सेतुङले आफ्नै

हस्ताक्षरले लेखेको 'लुसाङ पहाड आरोह' भन्ने कविता पनि जस्ताको तस्तै राखिएको रहेछ । एउटा प्रसिद्ध चिनियाँ कवि लाओथिङका सँगसँगै अरू कविका कविताहरू पनि त्यहाँ सुरक्षित राखेको हामीले देखेका थियौँ । त्यस पहाडमा पुराना वृक्षहरूलाई अत्यन्त सुरक्षित गरेर राख्नुका साथै सांस्कृतिक क्रान्तिका समयमा विध्वंस भएका विभिन्न मन्दिरहरूलाई पनि पुनर्निर्माण गरेर राखिएका हामीहरूले देखेका थियौँ । साम्यवादी चीन पहिले नास्तिक भए तापनि हाल आएर त्यहाँका जनतामा बिस्तारै धर्मप्रतिको आस्थामा वृद्धि हुँदै गएको त्यहाँको यात्राबाट मैले महसूस गरेको थिएँ ।



लुसाङ पहाडमा रहेको एउटा पुरातात्त्विक द्वारमा चिनियाँ मित्रहरूका साथ नेपाली प्रतिनिधिमण्डल

त्यसैदिन अपराह्न हामीहरू फेरि च्याङसीको नाङचाङ फर्किएका थियौँ । च्याङ्सीको नाङचाङमा हामीहरूलाई अत्यन्त भव्य होटेलमा लगेर राखिएको थियो र अत्यन्त न्यानो अतिथिसत्कारसमेत गरिएको थियो । खास गरेर त्यो भ्रमण तत्कालीन नेपालका महान्यायाधिवक्ता श्रीबद्रीबहादुर कार्कीका लागि आयोजना गरिएको थियो र हामीहरूलाई पनि भ्रमण दलमा सम्मिलित गराइएको थियो । त्यो च्याङ्सीको नाङचाङ शहर अत्यन्त विकसित रहेछ । त्यहाँका जनता साह्रै नै आर्थिकरूपले सम्पन्न रहेछन् ।

सन् २००० अक्टोबर २० तारिखका दिन बिहान च्याङ्सीको नाङचाङ शहर घुमेर हामीहरूले अवलोकन गरेका थियौँ । त्यहाँ छोटो भ्रमण गर्नुका साथै दुवैतर्फका प्रतिनिधिमण्डलका बीचमा सौहार्दपूर्ण वातावरणमा बातचितसमेत भएको थियो । त्यसरी त्यहाँको सङ्क्षिप्त कार्यक्रम समाप्त गरेर अक्टोबर २० तारिखका दिन अपराह्न च्याङ्सीको नाङचाङ शहरबाट चीनको अर्को विकसित शहर सेन्जेनतर्फ हामीहरू प्रस्थान गरेका थियौँ । सेन्जेनमा पनि हामीहरूलाई सरकारी वकिलको कार्यालयका


च्याङ्सीको नाङचाङमा चीनका महान्यायाधिवक्ताले दिएको रात्रिभोजमा लेखक

अधिकारीहरूले भव्य स्वागत गरेका थिए । त्यो ठाउँ हङ्कङसँग जोडिएको क्षेत्र भएको हुँदा अरू शहरभन्दा विकसित र समृद्धसमेत देखिन्थ्यो । त्यस नगरले उद्योग, कृषि र वाणिज्यको क्षेत्रमा अत्यन्त विकास गरेको रहेछ । त्यो रात सेन्जेन नगरपालिकाको अतिथिगृहमा हामीहरू बसेका थियौँ । अक्टोबर २१ तारिखका दिन बिहानै उठेर त्यहाँ निर्माण गरिएको सानू चीन (Mini China) हेर्न हामीहरू गएका थियौँ । एउटा सीमित क्षेत्रमा चीनभित्रका सम्पूर्ण जात, जाति, संस्कृति, धर्म, सम्प्रदाय र परम्परा मान्नेहरूको झलक देखिने गरेर सजीवरूपमा राखिएको रहेछ । त्यो कुनै पुरातात्त्विक वस्तुको सङ्ग्रहालय नभएर जीवित मानिसहरूको जिउँदो सङ्ग्रहालय रहेछ । त्यो अवलोकन गरिसकेपछि सम्पूर्ण चीनको नै एक झल्कोमा अवलोकन गरेजस्तो भान मलाई भएको थियो ।



च्याङ्सीको नाङचाङ शहरमा रहेको एउटा ऐतिहासिक स्थानमा चिनियाँ मित्रहरूका साथ नेपाली प्रतिनिधिमण्डल



नाङचाङ शहरको भ्रमणको समयमा पानी पर्न थालेको हुँदा छाता ओडेर घुम्दै प्रतिनिधिमण्डलका साथ लेखक

उपर्युक्त अनुसार मेरो चीनको तेस्रो भ्रमणको अन्तिम चरणमा अक्टोबर २१ तारिखका दिन अपराह्न सेन्जेनबाट मोटरको बाटो हुँदै हामीहरू हङ्कङतर्फ प्रस्थान गरेका थियौँ । हङ्कङमा पुगेर हामीहरू नेपाली महावाणिज्यदूत श्रीजैनेन्द्र जीवनको पाहुन भएर बसेका थियौँ । घर फर्कने सन्दर्भमा हङ्कङमा केही उपहारहरू किनमेल गरेर २०५७ साल कार्तिक ६ गते तदनुसार सन् २००० अक्टोबर २२ तारिखका दिन थाईएयरको हवाइजहाजद्वारा बैङ्कक हुँदै त्यसै दिन अपराह्न हामीहरू जुन बाटोबाट गएका थियौँ सोही बाटो हुँदै काठमाडौं फर्किएका थियौँ । मैले सरकारी सेवाबाट अवकाश लिएपछि विदेशमा गरेको त्यो पहिलो भ्रमण थियो । अर्को शब्दमा भन्ने हो भने मेरो जीवनको त्यो चीनको अन्तिम भ्रमण थियो । उपर्युक्त अनुसार जनवादी गणतन्त्र चीनको राजधानी बेजीङमा भएको अपराधनियन्त्रणसम्बन्धी

विश्वसम्मेलनका साथै चीनका महान्यायाधिवक्ताको निम्तो मानेर म २०५७ साल कार्तिक ६ गते काठमाडौँ फर्किएको थिएँ। काठमाडौँ फर्किएपछि मैले आफ्नू दिनचर्या पूर्ववत् सञ्चालन गरेको थिएँ।

उपर्युक्त अनुसार मैले चीनको भ्रमण समाप्त गरेर काठमाडौं फर्किएपछि अरू सामाजिक कार्यका अतिरिक्त नेपाल स्काउटको सुधारको काम पनि अत्यन्त सक्रियताका साथ शुरु गरेको थिएँ। मैले नेपाल स्काउटमा गर्नुपर्ने तीन ओटा कामहरूमध्ये मुख्य काम नेपालस्काउटको केन्द्रीय कार्यालयमा काम गर्ने पदाधिकारीहरूले धेरै वर्षदेखि गरेको आर्थिक हिनामिनाउपर कारबाही र बेरुजु भएको रकम असूलउपर गर्नुपर्ने पनि थियो। आर्थिक हिनामिना गर्ने व्यक्तिहरूलाई कानूनी कारबाही गरेर उक्त रकम असूलउपर गर्ने काम गरिएको थियो। त्यसै गरी बेरुजु गर्ने व्यक्ति उपर पनि कानूनी कारबाही गरिएको थियो। त्यसरी काम गर्दागर्दै अष्ट्रेलियाको मेलबोर्न भन्ने शहरमा एशियाप्रशान्त क्षेत्रको क्षेत्रीय स्काउटको सम्मेलनमा भाग लिन २०५७ साल कार्तिक १५ गते तदनुसार सन् २००० नोभेम्बर १ तारिखका दिन मैले त्यसतर्फ प्रस्थान गर्नुपरेको थियो।





यज्ञमण्डपमा श्रीमती इन्दिरा भट्टराई, छोरी सविता, सरिता, सानी बुहारी सुस्मिता, ठूली बुहारी सुषमा र ठूलो छोरा सञ्जीवका साथ लेखक, २०६६ माघ ३ गते

# दोस्रोपटक अष्ट्रेलियामा

२०५७ साल कार्तिक १५ गते मध्याह्नमा थाईएयरको हवाइजहाज चढेर अष्ट्रेलियाको मेलबोर्नतर्फ जाने क्रममा म काठमाडौँबाट बैङ्ककतर्फ उडेको थिएँ । सोही दिन अपराह्न बैङ्ककमा पुगेर मध्यरातमा थाईएयरको बोइङ कम्पनीको जम्बो जेट चढेर म अष्ट्रेलियातर्फ उडेको थिएँ । मेरो सधैँको जस्तै राती हवाइजहाजमा यात्रा गर्दा ननिदाउने बानी त्यहाँ पनि लागूभएको थियो । खानापिनापछि मसँगै यात्रा गरिरहेका अरू यात्रीहरू मस्तसँग निदाएका थिए भने म निदाउन सकेको थिइन । रातभरि सिनेमा हेरेर र यात्राविवरण लेखेर मेरो रात बितेको थियो । बिहानीपख हवाइजहाजको झ्याल खोलेर हेर्दा पूर्वतर्फबाट कलिलो सूर्यको किरणले म चढेको हवाइजहाजलाई स्पर्श गरिसकेको थियो । तल धरतीतिर हेर्दा कतै मरुभूमि र कतै हरियो वनसमेत मैले देखेको थिएँ । बिस्तारै समुद्रको तीरको सुन्दर सिड्नी शहर देखिएको थियो र म चढेको हवाइजहाज सिड्नीको त्यही धावनमार्गमा गएर उत्रिएको थियो ।

मेरा कान्छा छोरा श्रीसगुनकुमार भट्टराई त्यस बेला काठमाडौंमा नै भएका हुँदा सिड्नीमा मैले भेट्नुपर्ने कसैलाई थिएन । केही बेर सिड्नीमा हवाइजहाज रोकिएर इन्धन र यात्रुहरूसमेतलाई लिएर अष्ट्रेलियाको मेलबोर्नतर्फ उडेको थियो । त्यसै दिन अपराह्न म मेलबोर्न पुगेको थिएँ । मलाई स्वागतसत्कार गर्न अष्ट्रेलियाका स्काउटहरू हवाइअड्डामा नै आएका थिए । उनीहरूले मलाई लगेर एउटा होटेलमा राखेका थिए । त्यस दिन नाम दर्ता गर्ने काम भएको थियो भने अर्को दिन बिहानैदेखि हाम्रो सम्मेलन शुरुभएको थियो । पहिलो दिन अष्ट्रेलियाका शिक्षामन्त्रीले भव्य समारोहका बीच सम्मेलनको उद्घाटन गरेका थिए । सम्मेलनमा आ–आफ्ना देशहरूमा भइरहेका स्काउटका गतिविधिहरूका बारेमा प्रतिवेदन प्रस्तुत गरिएको थियो र प्रतिवेदनमाथि छलफलसमेत भएको थियो । पहिलो दिनको छलफल समाप्त गरेर राती अष्ट्रेलियाको स्काउटले दिएको रात्रिभोजमा हामीहरू गएका थियौँ । दोस्रो

दिन पनि बिहानैदेखि हाम्रो बैठक शुरुभएको थियो । अपराह्नको बैठक समाप्त गरेर हामीहरू अष्ट्रेलियाका गभर्नरले आयोजना गरेको स्वागत समारोहमा गभर्नर बस्ने भव्य भवनमा गएका थियौं । स्वागतसत्कारको काम समाप्त भएपछि हामीहरूलाई क्राउन भन्ने एउटा विशाल तथा भव्य होटेलमा लगिएको थियो । त्यहाँ जुवा खेल्ने मानिसहरू जम्मा हुँदा रहेछन् । दसौं हजार मानिसहरूले एकै ठाउँमा जुवा खेलेको देखियो । त्यहाँ जुवा खेलेर हार जित गर्दा रहेछन् । अबेरसम्म खेलको तमासा हेरेर राती होटेलमा म फर्किएको थिएँ । मैले नेपालमै सञ्चालित भएका थुप्रै जुवाघरहरूमा र विदेशमा कैयौं पटक भ्रमण गर्दा त्यहाँका जुवाघरहरूमा पनि म कहिल्यै पनि पसेको थिइन । मेलबोर्नमा भने मैले पहिलो पटक जुवा खेलेको ठाउँमा गएर हेरेको थिएँ । त्यो मेरो जीवनको पहिलो अनुभव थियो ।



मेलबोर्नमा भएको एशिया तथा प्रशान्तक्षेत्रको क्षेत्रीय स्काउटको सम्मेलनमा सहभागी हुँदै लेखक, नोभेम्बर ३


मेलबोर्नमा भएको एशिया तथा प्रशान्तक्षेत्रको क्षेत्रीय स्काउटको

सम्मेलन शुरु भएको तेस्रो दिनको पहिलो सत्रमा छलफल गरेर त्यसको निर्णय बैठकलाई सुनाउने काम भएको थियो । त्यसपछि तीनदिने बैठकको समापन समारोह दिनको खानापछि अपराह्नमा भएको थियो । राती अष्ट्रेलियाको स्काउटले एउटा भव्य होटेलमा आयोजना गरेको रात्रिभोजमा म गएको थिएँ । त्यस होटेलमा कार्यरत केही नेपाली छात्रछात्राहरूलाई मैले भेटेको थिएँ । उनीहरू विभिन्न विद्यालयहरूमा


अष्ट्रेलियाको मेलबोर्नमा भएको स्काउटको क्षेत्रीय सम्मेलनमा अष्ट्रेलियन सहभागीका साथ लेखक, नोभेम्बर ५

पढ्नुका साथै समय मिलाएर काम पनि गर्दारहेछन् । अष्ट्रेलिया पुगेको सातौँ दिन बिहानै हामी सहभागीहरूलाई घोडाको रेसकोर्समा लगिएको थियो । बेलायतमा जस्तै त्यहाँ पनि घोडा दौड भनेपछि अत्यन्त चाखका साथ बूढाबूढी, केटाकेटी, युवायुवती सबैले भाग लिँदारहेछन् । रेसमा बाजी पनि राखिँदो रहेछ र लाखौँलाखको हारजीत पनि हुँदोरहेछ । मैले पनि घोडामा बाजी लगाएको थिएँ, तर मैले बाजी लगाएको घोडाले रेस नजितेको हुनाले मैले बाजी जित्न सकेको थिइन । बेलायतमा बस्दा हेरेजस्तै त्यहाँको घोडदौड पनि अत्यन्त रोमाञ्चक भएको मैले पाएको थिएँ । प्रायः गरेर त्यहाँ भेला भएका नारीहरू अर्धनग्न अवस्थामा देखिएका थिए । हाम्रो संस्कार र संस्कृतिभन्दा भिन्नै संस्कार र संस्कृति भएका अष्ट्रेलियावासीहरूलाई मैले आफ्नै संस्कार बोकेको आँखाले हेरेर पनि सायद त्यस्तो अर्धनग्न अवस्थामा देखेको थिएँ होला । घोडदौडको कार्यक्रम सिध्याएर म बेलुका आएर होटेलमा बसेको थिएँ ।


अष्ट्रेलियाको मेलबोर्नमा भएको स्काउटको क्षेत्रीय सम्मेलनमा क्षेत्रीय निर्देशक किमका साथ लेखक, नोभेम्बर ६


अष्ट्रेलियाको मेलबोर्न शहरमा लेखक, नोभेम्बर ६

त्यसरी अष्ट्रेलियामा भएको स्काउटको सम्मेलनमा भाग लिएर २०५७ साल कार्तिक २७ गते तदनुसार सन् २००० नोभेम्बर १३ तारिखका दिन मेलबोर्नबाट सिड्नी हुँदै ब्रिस्बेन धावनमार्गमा उत्रिएर मैले केही बेर विश्राम गरेको थिएँ । त्यहाँबाट दिनको अपराह्न पाँच बजे उडेपछि हवाइजहाज धेरै माथि ४५ हजार फीटको उचाइमा पुगेर रक्ह्याम्टन, डर्बन, टिमोर, बण्डाहुँदै इण्डोनेशियाको माथिबाट उडेर मलक्कालाई पार गर्दै ब्रुनाइमाथिको आकाशबाट उडेको थियो । त्यसपछि मलेशियाको धरतीलाई पार गर्दै थाईल्याण्डको राजधानी बैङ्ककको विमानस्थलमा पुगेर मध्यरातमा म चढेको थाईएयरको हवाइजहाज उत्रिएको थियो । मध्यरातमा हवाइजहाजबाट उत्रिएर विमानस्थलभित्रै रहेको अतिथिगृहमा गएर मैले रात बिताएको थिएँ ।

२०५७ साल कार्तिक २८ गते बिहान नै थाईएयरको एयरबसमा चढेर म काठमाडौँतर्फ उडेको थिएँ। बैङ्ककबाट उडेपछि म्यान्मार, बङ्गलादेश र भारतको धरतीलाई पार गर्दै म काठमाडौंको त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा दिनको अपराह्न हुँदा उत्रिएको थिएँ। नेपाल स्काउटको तर्फबाट नेपाल स्काउटको प्रमुखआयुक्त भएपछि अन्तर्राष्ट्रिय सम्मेलनमा प्रथम पटक मैले भाग लिएर म नेपाल फर्किएको थिएँ। मैले धेरै पटक अन्तर्राष्ट्रिय सम्मेलनहरूमा नेपालका तर्फबाट उच्चस्तरीय प्रतिनिधि मण्डलको नेतासमेत भएर भागलिइसकेको थिएँ। नेपाल स्काउटको कुनै अनुभवै नभएको मैले दैवसंयोग नेपाल स्काउटको तर्फबाट भाग लिएको त्यो नै पहिलो पटक थियो। स्काउटको बैठक अरू बैठकभन्दा भिन्नै खालको हुँदोरहेछ, अनुशासित सैनिकको सम्मेलनजस्तो। अष्ट्रेलियामा स्काउटलाई अत्यन्त सम्मान गर्दारहेछन्। नेपालमा भने स्काउटको सम्मान र इज्जत नभएको देख्दा मलाई साह्रै ग्लानि भएको थियो। वास्तवमा नेपालमा स्काउटलाई राजनीतिक व्यक्तिदेखि लिएर तल्ला तहका साधारण व्यक्तिहरूसमेतले परिचय नपाएको हुँदा पनि नेपालमा स्काउटको सम्मान हुन नसकेको होला भन्ने मैले ठानेको थिएँ।

त्यसरी अष्ट्रेलियाको मेलबोर्नमा भएको स्काउटको एशिया तथा प्रशान्तक्षेत्रको क्षेत्रीय सम्मेलनमा भाग लिएर काठमाडौँ फर्किएपछि मैले अरू सामाजिक तथा धार्मिक संस्थाहरूका साथै स्वयंसेवीका रूपमा नेपाल स्काउटको प्रमुख आयुक्त भएर गर्नुपर्ने कामहरू अत्यन्त सक्रियताका साथ गरेको थिएँ। नेपाल स्काउटको केन्द्रीय कार्यालयभित्र धेरै वर्षदेखि विद्यमान भ्रष्टाचार, अनुशासनविहीनता, आर्थिक हिनामिना र कर्मचारीप्रशासनमा समेत सुधार गर्नुपर्ने भएको हुँदा मैले सो काम नेपाल स्काउटको राष्ट्रियपरिषद्बाट निर्णय गराएर शुरु गरेको थिएँ। धेरै वर्षदेखिको बेरुजु र हिनामिनालाई रुजु गरी बाँकी लिनु पर्ने व्यक्तिहरूसँग कडाइका साथ कारबाही गरेर असूलउपर गराएको थिएँ। नेपाल स्काउटभित्र धेरै वर्षदेखि विद्यमान रहेको अनुशासनविहीनतालाई पनि बिस्तारै अनुशासनमा ल्याउने काम भएको थियो। धेरै वर्षदेखि रोकिएर रहेको जिल्लास्तरीय स्काउटलाई दिनु पर्ने आर्थिक सहायताका साथै विकासको काम पनि सक्रियताका साथ

सम्पन्न गरिएको थियो ।

नेपाल स्काउटको केन्द्रीय कार्यालयमा त्यसको स्थापनाकालदेखि नै दरबारको निगाह प्राप्त भइरहने परम्परा अनुसार त्यहाँ चीफस्काउटदेखि प्रमुख आयुक्तसम्म दरबारले नै खटाउने व्यवस्था कानूनद्वारा गरिएको हुँदा त्यहाँ दरबार र दरबारिया मानिसहरूकै प्रभुत्व चल्ने गरेको थियो। नेपालमा २०४६ सालको जनआन्दोलनले प्रजातन्त्रको पुन:स्थापना गरेपछि अरू निकायहरूमा जस्तै नेपाल स्काउटमा पनि नयाँ ऐन र नियम बनेका थिए। पुराना ऐन र नियमहरू अनुसार साबिकमा राजारानी नेपाल स्काउटका प्रमुख संरक्षक र संरक्षिकाका साथै युवराज र युवराज्ञी नेपाल स्काउटको चीफस्काउट हुने व्यवस्था थियो भने परिवर्तित कानूनमा त्यो प्रावधान हट्न गएको थियो । म परिवर्तित कानून आसार निर्वाचित भएर त्यहाँ प्रमुख आयुक्त बन्न गएको थिएँ । मैले त्यहाँ गएर नेपाल स्काउटको केन्द्रीय कार्यालयलाई सुधार्ने काम थालेपछि त्यहाँभित्र स्थापनाकालदेखि नै भएका भ्रष्टाचार र आर्थिक हिनामिनाको छानविन र कारबाही गर्ने काममा अत्यन्त जटिलता आएको मैले महसुस गरेको थिएँ । कारबाही गर्दा धेरै जसो दरबारले नियुक्त गरेका र दरबारका चाकडीदारहरू नै पर्ने हुँदा दरबारले तिनलाई संरक्षण गर्न खोजेको थियो । सो सम्बन्धमा दरबार र अरू शक्तिकेन्द्रहरूसमेतबाट आउने दबाबलाई वास्ता नगरेर मैले कानून बमोजिम कारबाही गर्न थालेपछि दरबार मसँग रिसाउँदै गएको कुरा मैले थाहा पाएको थिएँ । त्यसरी कारबाही गर्दा मसँगै काम गरिरहेका सहप्रमुख आयुक्त श्रीराम लामिछानेसमेत पर्न गएका थिए। नेपाल स्काउटका सम्बन्धमा उल्लेख गर्दा त्यसको पृष्ठभूमिसमेत संक्षिप्तमा उल्लेख गर्नु म सान्दर्भिक ठान्दछु ।

२०५७ साल भाद्र ३ गते धेरै वर्षको अन्तरालमा नेपाल स्काउट केन्द्रीय कार्यालयमा प्रमुखआयुक्त लगायत पदाधिकारीहरूको निर्वाचन भएको थियो । शिक्षामन्त्रालयमा दुई दुईपटक सचिव भएर मैले काम गर्दा नेपाल स्काउटको केन्द्रीय कार्यालयभित्र भएको भ्रष्टाचार र आर्थिकहिनामिनाका बारेमा मलाई धेरै कुराहरू थाहा थियो। म राष्ट्रिय परिषद्को पदेन सदस्य भए तापनि नेपाल स्काउटको काम कारबाहीप्रति मेरो चित्त नबुझेको हुँदा मैले कुनै पनि

बैठकमा भाग लिएको थिइन। मलाई वास्तवमा भित्रैदेखि नै त्यस बेलाको नेपाल स्काउटको क्रियाकलाप मन परेको थिएन। मलाई त्यहाँको क्रियाकलापप्रति अत्यन्त घृणा थियो। म शिक्षासचिव भएर काम गरिरहेकै समयमा नेपाल स्काउटमा त्यस बेला कार्यरत श्रीराधेश्याम शर्मा भन्ने व्यक्तिले शिक्षासचिवबाट अवकाश प्राप्त गरेपछि नेपाल स्काउटको प्रमुख आयुक्त भएर नेपाल स्काउटलाई सुधार गरिदिन अनुरोध गर्ने गरेका थिए। मैले सो कुरालाई सामान्य कुराकै रूपमा लिएर उडाउने गरेको थिएँ।

मैले २०५५ साल चैत्र २५ गते सरकारी सेवाबाट अवकाश लिएर कहीँ पनि काम नगर्ने मनस्थिति बनाएर वेदान्तदर्शनको अध्ययन र समाजसेवामा लागेर बसेको बेलामा २०५७ साल भाद्र ३ गते भएको नेपाल स्काउटको प्रमुख आयुक्तको पदमा मैले इच्छा नगर्दा नगर्दै पनि श्रीराधेश्याम शर्माहरू जस्ता शुभेच्छुकहरूले निर्वाचनमा मलाई विजयी गराएका रहेछन्। त्यसरी विजयी भएपछि कानून अनुसार मलाई प्रमुख आयुक्तमा नियुक्त गर्न तत्कालीन शिक्षामन्त्री श्रीआमोदप्रसाद उपाध्यायका समक्ष पेश गरिएको रहेछ। शिक्षामन्त्री र मेरा बीचमा सम्पर्क र चिनाजानसमेत थिएन। त्यसरी म विजयी भएपछि शिक्षामन्त्रीले मलाई घरमै लिन पठाएका थिए। मन्त्रीलाई भेट्न नेपाल स्काउटको केन्द्रीय कार्यालयमै म गएको थिएँ। कुनै हालतमा पनि नेपाल स्काउटको प्रमुख आयुक्त पदमा म बस्तिन भनेर मैले भनेपछि शिक्षामन्त्री श्रीआमोदप्रसाद उपाध्यायले 'तपाईं जस्ता समर्थ व्यक्तिलाई नेपाल स्काउटको सुधार गर्नका निमित्त राष्ट्रिय परिषद्ले निर्वाचन गरे अनुसार मैले नियुक्त गरेको हुँ। म व्यक्तिगतरूपमा तपाईंलाई चिन्दिन, तर शिक्षामन्त्रालयमा सचिव भएर तपाईंले राम्रो काम गर्नु भएको कुरा मैले शिक्षामन्त्रालयबाट थाहा पाएको हुँदा तपाईलाई विश्वास गरेर नै नेपाल स्काउटको राष्ट्रिय परिषद्ले गरेको तपाईंको निर्वाचनलाई मैले सदर गरेको हुँ। मैले सदर गरिसकेपछि यदि तपाईंले सो पद स्वीकार गर्नु भएनभने मैले पनि मन्त्रीको पद छाड्नु पर्ने हुन्छ। मेरो पद र इज्जतसमेत जोगाइदिनका लागि पनि तपाईंले नेपाल स्काउटको प्रमुख आयुक्तमा बसेर काम गरिदिनु पऱ्यो' भनेर अत्यन्त विनयपूर्वक मलाई अनुरोध गरेपछि मैले मन्त्रीको भनाइलाई हार्न नसकेर १ वर्षका लागि सो पद स्वीकार गरेको थिएँ।

उक्त निर्वाचनमा प्रत्याशी भएर हारेका श्रीराम लामिछाने र उनका समर्थकहरूले त्यसपछि विरोधस्वरूप शिक्षामन्त्रीलाई कालो झण्डा देखाएका रहेछन् र साथै म जानु अगाडि नेपाल स्काउट केन्द्रीय कार्यालयको परिसरभित्र ढुङ्गामूढासमेत गरेका रहेछन्। सुरक्षाका लागि प्रहरीसमेत बोलाइएको रहेछ। सो कुरा मलाई शिक्षामन्त्रीले भनेका थिए। मैले राष्ट्रिय परिषद्को विश्वास र मन्त्रीको अनुरोधलाई समेत स्वीकार गरेर नेपाल स्काउटभित्र भएको सम्पूर्ण विकृतिलाई सुधार गर्ने प्रतिबद्धताका साथ १ वर्षका लागि प्रमुख आयुक्तको पद स्वीकार गरेको थिएँ।

निर्वाचनमा हारेपछि बहिष्कार गरेर हिँडेका श्रीराम लामिछाने लगायतका केही स्काउटरहरूलाई बोलाएर आफ्नू कार्यसमितिभित्र समावेश गर्नु मैले आवश्यक ठानेर नेपाल स्काउटमा काम शुरु गरेको केही दिनभित्रै मैले उनीहरूलाई बोलाएर सम्झाउने काम गरेको थिएँ। उनीहरूले पनि उचित स्थान पाएमा सहयोग गर्ने वचन दिएपछि बहिष्कार गर्नेहरूमध्येका नेता श्रीराम लामिछानेलाई पुरुषतर्फको सहप्रमुख आयुक्त, श्रीरवीन्द्रप्रसाद पाण्डेलाई पुरुषतर्फको अन्तर्राष्ट्रिय आयुक्त र श्रीरामगोपाल कर्माचार्यलाई पुरुषतर्फको जनसम्पर्क आयुक्तमा नियुक्त गरेको थिएँ। त्यसरी महिलातर्फको सहप्रमुख आयुक्त बाहेक अरू सबै पदमा मैले योग्यता हेरेर सबैलाई नियुक्त गरेर काम लगाएको थिएँ। राष्ट्रिय सचिवमा भने श्रीयज्ञबहादुर ओली म त्यहाँ जानुभन्दा पहिले नै अनेक चालबाजी गरेर आउन सफल भएका रहेछन्। त्यही पदमा श्रीराधेश्याम शर्मा पनि आउन चाहँदा रहेछन् तर श्रीयज्ञबहादुर ओलीको चालबाजीका अगाडि उनको केही चलेनछ। म निर्वाचित भएकै दिन मन्त्रीले बोलाए अनुसार राती नै नेपाल स्काउटको केन्द्रीय कार्यालयमा पुग्दा सो कुरा मैले थाहा पाएको थिएँ। मलाई जोसुकै राष्ट्रिय सचिव भए पनि कुनै फरक नपर्ने हुँदा मैले कसैको पक्ष र विपक्षमा बोल्ने आवश्यकता ठानेको थिइन।

नेपाल स्काउटभित्रको काम बिस्तारै चल्दै गएको थियो। मलाई महिलातर्फको सहप्रमुख आयुक्त नियुक्त गर्ने सम्बन्धमा अत्यन्त दबाब पर्ने गरेको थियो। त्यस पदमा काठमाडौं उपत्यका भित्रका स्काउटहरू र बिस्तारै बाहिरका स्काउटहरूको पनि सुश्री पुष्पलता भट्टराईलाई नियुक्त

गर्ने भनेर दबाब पर्न थालेको थियो । धेरै समयको अडानपछि केही नचलेर मैले नचाहँदा नचाहँदै पनि सुश्री पुष्पलता भट्टराईलाई नियुक्त गर्नुपरेको थियो । उनी अत्यन्त घमण्डी, अव्यावहारिक र असामयिक महिला भएकी हुनाले मलाई मन परेको थिएन । उनीबाट नेपाल स्काउटको कामकुरा बिग्रन्छ भन्ने मलाई आशङ्का हुँदाहुँदै पनि मैले बाध्य भएर नियुक्त गर्नु परेको थियो । पुरुषतर्फका सहआयुक्त श्रीराम लामिछाने र महिला तर्फकी सहआयुक्त सुश्री पुष्पलता भट्टराईका दुर्गुण र खराब आचरणहरू मलाई त्यस बेलासम्म थाहा थिएन । त्यसरी सबै व्यवस्था मिलाएर काम गर्दा गर्दै मैले तत्कालीन शिक्षामन्त्रीलाई वचन दिएको १ वर्ष पूरा भएको थियो । सोही कुरा दर्शाएर मैले शिक्षामन्त्रीलाई राजीनामा दिएको थिएँ । मैले राजीनामा दिएपछि ६ महिनासम्म नेपाल स्काउटमा म उपस्थित हुन गएको थिइन । मेरो राजीनामा स्वीकृत नगरीकनै तत्कालीन शिक्षामन्त्री श्रीआमोदप्रसाद उपाध्याय शिक्षामन्त्रीको पदबाट हटेका थिए । त्यसपछि म बाध्य भएर हाजिर हुन गएको थिएँ । त्यसै बेलामा स्काउटको विश्वसम्मेलनमा भाग लिन ग्रीसतर्फ अन्तर्राष्ट्रिय आयुक्त श्रीरवीन्द्रप्रसाद पाण्डेलाई साथमा लिएर म गएको थिएँ ।





नेपाल स्काउटको प्रमुख आयुक्तको परिधानमा
विभूषणहरू र अलङ्कारसहित लेखक

# ग्रीसमा

२०५९ साल आषाढ २८ गते तदनुसार सन् २००२ जुलाई १२ तारिखका दिन शुक्रबार अपराह्न १ बजेर ४० मिटेन जाँदा फेरि विदेशको यात्रातर्फ थाईको उडान नं. TG 320 एयर बस A 300 चढेर ब्याङ्कक‌तर्फ साथमा श्रीरवीन्द्र पाण्डेलाई लिएर म उडेको थिएँ । मैले त्योभन्दा पहिले पनि धेरै पटक त्यसैगरी विदेशको यात्रा गरिसकेको थिएँ । शुरु शुरुमा मलाई विदेशको यात्रा गर्न असाध्य मन लाग्दथ्यो र कैयौँ पटक बलै गरेर पनि म विदेशमा लामू समयसम्म अध्ययन गर्न र तालीमका निमित्त पनि गएको थिएँ । उमेर छिप्पिँदै गएपछि मलाई विदेश जाने इच्छा कम हुँदै गएको थियो । विभिन्न मन्त्रालयमा बसेर विभिन्न हैसियतले काम गर्दा मन नभए पनि कर्तव्य पालनाका लागि विदेश जानै पर्ने हुन्थ्यो । प्रत्येक पटक अन्तिम यात्रा सम्झिएर पनि बारम्बार विदेशको यात्रामा विभिन्न समयमा विभिन्न मन्त्रालयहरूबाट र व्यक्तिगतरूपमा पनि म जानेगर्दथेँ । सरकारको सेवामा रहेर अन्तिम समयमा पनि मैले अनिच्छावश तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाको विशेष आग्रहमा वैदेशिक सहयोगका लागि वार्ता र सम्झौतासमेत गर्न संयुक्तराज्य अमेरिकाको राजधानी वाशिङ्टनमा रहेको विश्वबैङ्कको कार्यालयमा २ पटक र डेनिस सरकारसँग कुरा गर्न डेन्मार्कको राजधानी कोपेनहेगनको यात्रा पनि मैले गरेको थिएँ । म बारम्बार विदेशको यात्रामा जान्थेँ तापनि बिस्तारै गएर विदेश यात्राप्रति मेरो अत्यन्त अनाकर्षण बढेको थियो ।

सरकारको सेवाबाट २०५५ साल चैत्र २५ गते अवकाश लिएपछि तीर्थयात्रा बाहेक अरूतिर यात्रामा नजाने भनेर मैले निश्चय गरेको थिएँ तापनि २०५७ सालमा अपराधनियन्त्रणसम्बन्धी विश्वसम्मेलनमा भाग लिन जनवादी गणतन्त्र चीनको यात्रा र स्काउटको एशियाप्रशान्त सम्मेलनमा भाग लिन नेपाल स्काउटका तर्फबाट अष्ट्रेलियाको मेलबोर्नमा म गएको थिएँ । उमेर र विचारको कारणले पनि त्यसपछि विदेश यात्राको क्रम

टुङ्ग्याउने मैले शोचेको थिएँ। भाग्यको विडम्बनाले भनौं कि ! फेरि स्काउटको विश्वसम्मेलनमा भाग लिन मैले अन्तर्राष्ट्रिय आयुक्त श्रीरवीन्द्रप्रसाद पाण्डेलाई साथमा लिएर ग्रीसको राजधानी एथेन्स हुँदै सम्मेलनस्थल थेसालोनिकी तर्फ जान म हिँडेको थिएँ।

हवाइजहाज त्रिभुवन विमानस्थलबाट निर्धारित समयमा उडेको थियो। साँझपख ब्याङ्कक विमानस्थलमा गएर हवाइजहाज उत्रिएको थियो। ब्याङ्कक विमानस्थलमा साँझपख उत्रिएपछि त्यहाँबाट एथेन्सतर्फ जानका लागि ४ घण्टासम्म उडानको प्रतीक्षा गरेर हामीहरूले ब्याङ्कक अन्तर्राष्ट्रिय विमानस्थलमा नै कुरेर बस्नुपरेको थियो। रातको १ बजेर १० मिनेट जाँदा बोइङ कम्पनीको भीमकाय ७७७–३०० नम्बरको हवाइजहाज ५०० भन्दा बढी यात्रीहरू, सामान र आफ्नू विशाल शरीर सहितको इन्धन बोकेर ७,९१६ किलोमिटर टाढा रहेको ग्रीसको राजधानी एथेन्सका लागि प्रस्थान गरेको थियो।

पश्चिमी सभ्यता, इतिहास, दर्शन र साहित्यको समेत उद्गमस्थल मानिने अत्यन्त प्राचीन देश ग्रीसको यात्रा गर्ने मेरो आकाङ्क्षा धेरै वर्षदेखि सुषुप्त अवस्थामा मनमा रहेको थियो। इलियड र ओडिसी जस्ता पश्चिमी संसारका प्राचीनतम महाकाव्यहरूका रचयिता महाकवि होमरको जन्मस्थल, सोक्रेटस् जस्ता परम ज्ञानी सन्तको जन्मभूमि, प्लेटो जस्ता महान् राजनीतिक चिन्तकको चिन्तनस्थली, अरस्तु जस्ता अद्वितीय बहुमुखी प्रतिभाका धनी दार्शनिकको साधना तथा शैक्षिक क्षेत्र र एलेक्जेण्डर जस्ता वीर सम्राट्को जन्मभूमि ग्रीस मेरो गन्तव्य देशको सूचीमा पहिलेदेखि नै परेको थियो। भाग्यले जुराइनसकेको हुँदा मैले ग्रीसको भ्रमण गर्ने मौका पाएको थिइन। त्यस पटक भने विश्वस्काउटको ३६ औँ सम्मेलनको निम्ता प्राप्त भएपछि मेरो आकाङ्क्षा पूर्ण भएको थियो।

हामीहरू थाईल्याण्डबाट उडेको १० घण्टापछि उक्त हवाइजहाज ग्रीसको स्थानीय समय अनुसार बिहान १०:३० बजे ग्रीसको राजधानी एथेन्सको अन्तर्राष्ट्रिय विमनस्थलमा उत्रिएको थियो। भन्सार र अध्यागमनको समेत काम सकेर हामीहरू विमानस्थलबाट बाहिर निस्किएका थियौँ। हामीहरूलाई लिन स्थानीय स्काउटहरू त्यहाँ आएका थिए। उनीहरूकै

साथमा बसमा चढेर घुम्दै स्काउटको कार्यालयमा पुगेर हामीहरू सम्मेलन हुने ठाउँ थेसालोनिकीतर्फ जान रेल्वेस्टेशनतर्फ त्यहाँको भूमिगत रेल चढेर गएका थियौँ। रेल्वेस्टेशनमा गएर २ घण्टाभन्दा बढी समय प्रतीक्षा गरेपछि अरू विदेशी स्काउटहरूका साथ हामीहरू दिनको अपराह्नहुँदा थेसालोनिकीतिर प्रस्थान गरेका थियौँ। सुविधायुक्त रेल चढेर यात्रा गर्दा बाटामा पर्ने रमणीय डाँडाहरू, खेतीयोग्य जमीनहरू र पशुपालन गर्ने हरिया चउरहरू पार गर्दै हामीहरू साँझपख थेसालोनिकी पुगेका थियौँ।

दक्षिण ग्रीसभन्दा केही राम्रो समुद्रका किनारमा रहेको थेसालोनिकी शहर अत्यन्त रमणीय देखिँदोरहेछ। पुराना ऐतिहासिक घरहरू र आधुनिक घरहरूको समेत मिश्रण रहेको त्यो नगर ऐतिहासिक भएर पनि अत्यन्त रमणीय रहेछ। थेसालोनिकी म्यासेडोनियाको राजधानी र ग्रीसको दोस्रो ठूलो शहर रहेछ। त्यस नगरको नाम क्राइष्ट जन्मनुभन्दा पहिले ३१६ मा कासान्ड्रोस भन्ने व्यक्तिले आफ्नी श्रीमती थेसालोनिकीका नाममा राखेका रहेछन्। थेसालोनिकी एलेक्जेण्डर महान्की बहिनी रहिछन्। उपर्युक्त ऐतिहासिक पृष्ठभूमि रहेको सुन्दर शहर थेसालोनिकीभित्र श्रीरवीन्द्र पाण्डे र म ट्याक्सीद्वारा प्रवेश गरेका थियौँ। हाम्रा लागि त्यहाँको स्काउटले ए.बी.सी. भन्ने होटेलमा बस्ने व्यवस्था गरेकोमा हामीहरू त्यहाँ ढिलो पुगेका हुँदा होटेलले हाम्रो रिजर्भेशन रद्द गरेको रहेछ। त्यहाँ ठाउँ नपाएपछि स्थानीय स्काउटले हामीहरूलाई मिनरवा भन्ने होटेलमा लगेर राखेको थियो। राती हामीहरू आराम गरेर होटेलमै बसेका थियौँ।

२०५९ साल असार ३० गते तदनुसार सन् २००२ जुलाई १४ तारिखका दिन बिहान हामीहरू नाम दर्ता गर्नका लागि क्याप्सिस होटेलमा गएका थियौँ। त्यसै दिन साँझ ६:०० बजे अरस्तू-विश्वविद्यालयमा आयोजित सर्वधर्मप्रार्थनासभामा हामीहरू सामेल भएका थियौँ। अवकाशप्राप्त क्षेत्रीयनिर्देशक श्रीकिमका सम्मानमा एशियाप्रशान्तक्षेत्रीयसमितिले आयोजना गरेको स्वागत समारोहमा हामीहरू रातमा गएका थियौँ। सो समारोहमा नेपालका तर्फबाट श्रीकिमलाई नेपाल स्काउटको दोस्रो ठूलो अलङ्कार रूपौलो कटुसद्वारा मैले सम्मान गरेको थिएँ।

जुलाई १५ तारिखका दिन ९:०० बजे क्याप्सिस होटेलमा बिहान

आयोजित एशियाप्रशान्तक्षेत्रको क्षेत्रीय बैठकमा गएर हामीहरूले भाग लिएका थियौँ। दिनमा हाम्रो विश्वसम्मेलनको उद्घाटनसत्र शुरु भएको थियो। केही समय त्यहाँ विभिन्न स्काउट नेताहरूको भाषण सुनेर हामीहरू राती समुद्रको किनारामा रहेको थेसालोनिकीको कन्सर्ट हलमा सङ्गीत सुन्न गएका थियौँ। सङ्गीत अत्यन्त आकर्षक र मनोहारी थियो।

जुलाई १६ तारिखका दिन स्काउटको विश्वसम्मेलन निर्धारित समयमा बिहान ९ बजेदेखि नै शुरु भएको थियो। दिनभरि सम्मेलनमा भाग लिएर राती अफ्रिकन महादेशबाट गएका स्काउटहरूले प्रस्तुत गरेको सङ्गीत कार्यक्रम सुन्न हामीहरू गएका थियौँ।

जुलाई १७ तारिखका दिन बिहान ९ बजेदेखि नै सम्मेलनको कार्यक्रम शुरु भएको थियो। त्यसपछि ११.१५ बज्दा हामीहरू नौसातर्फ बस चढेर प्रस्थान गरेर दिनको १२.३० बजे नौसाको सुन्दर उपवनमा पुगेका थियौँ। त्यहाँको वनभोज क्षेत्रमा पुगेर हामीहरू दिनभरि नै वनभोजका साथसाथै हाम्रो उपसमितिलाई तोकिएको काम पनि हामीहरूले गरेका थियौँ। त्यहाँ ग्रीकको प्राचीन सांस्कृतिक नृत्य र सङ्गीतसमेत प्रस्तुत गरिएको थियो। नेपालका तामाङ, शेर्पा आदि आदिवासीहरूले लगाउने जस्तो परम्परागत परिधान पहिरिएर महिला टोलीले र पृथ्वीनारायण शाहको समयमा सिपाहीले लगाउने जस्तो लुगा पुरुष टोलीले लगाएर नृत्य गरेका थिए। महिलाहरूले आफ्ना टाउकामा सुनका ठूलाठूला फूलहरू र गलामा पटनाका मालाहरू लगाएका थिए। केशप्रसाधन पनि हाम्रो नेपाली परम्परा जस्तै मिल्दोजुल्दो देखिन्थ्यो र टाउकामा सबैले ओढ्ने बेह्रेका थिए। करिब २ घण्टासम्म चलेको सांस्कृतिक कार्यक्रम मलाई अत्यन्त रमाइलो लागेको थियो। अरू वाद्ययन्त्रहरू ग्रीक परम्पराकै भए तापनि सनई जस्तो बाजा हाम्रो जस्तै थियो। पञ्चैबाजाको तालमा नाच्ने युवायुवतीहरूले पनि


ग्रीसको थेसालोनिकीमा आयोजित स्काउटको विश्वसम्मेलनमा सहभागीहरूका साथ लेखक, २००२ जुलाई १५


ग्रीसको थेसालोनिकीको नौसा भन्ने सुन्दर वनभोजस्थलमा आयोजित ग्रीसको प्राचीन साँस्कृतिक कार्यक्रमको एक झलकका साथ लेखक, २००२ जुलाई १६

मलाई नेपाल सम्झाएका थिए । नाचौं नाचौं लाग्ने त्यस मनमोहक कार्यक्रममा हाम्रा सहभागी युवा स्काउटहरू पनि अत्यन्त मस्त भएर नाचेका थिए । रमाइलो कार्यक्रममा दिनभरि सामेल भएर हामीहरू राती ११ बजे होटेलमा फर्किएका थियौं ।

जुलाई १८ तारिख तदनुसार श्रावण २ गते बिहानै ९ बजेदेखि हाम्रो विश्वसम्मेलनको कार्यक्रम शुरु भएको थियो । सदा झैं प्रार्थनाबाट हाम्रो कार्यक्रम शुरु भएको थियो । त्यस दिनको प्रार्थनाका सदुक्तिहरू मलाई असाध्य मन परेको हुँदा तल उद्धृत गरेको छु । जस्तैः-

a. Darkness cannot driveout darkness; only light can do that. Hate cannot driveout hate; only love can do that – Martin Luther King.
b. Friendship is like a boomerang; you giveout your friendship to another chap and then to more and more and they give you their friendship in return. So your original friendship and goodwill, as it goes to others, increases in strength and brings back this goodwill to you in return, Just as the boomerang comes ba

उपर्युक्त भनाइहरू हाम्रा वेदका "सहनाववतु सहनौ भुनक्तु" र श्रीमद्भगवद्गीताका "उद्धरेदात्मनात्मानं नात्मानमवसादयेत् । आत्मैव ह्यात्मनो बन्धुरात्मैव रिपुरात्मनः । परस्परं भावयन्तः श्रेयपरमवाप्स्यथः" भन्ने जस्तै मैले पाएको थिएँ । त्यसपछि अघिल्लो दिन नौसामा छलफल भएका वोजम सम्बन्धी ७ बुँदाहरूको रणनीति (Strategy for Scouting) का सम्बन्धमा विभिन्न कार्यदलहरूले दिएका प्रारम्भिक प्रतिवेदनमाथि छलफल भएको थियो र प्राथमिकता तोक्ने सम्बन्धमा मतदान भएको थियो । दिनको खानापछि हामीहरू होटेल गएका थियौं । बेलुका ७ बजे क्याप्सिस होटेलमा थाईल्याण्डले आयोजना गर्ने विश्वज्याम्बुरीको उपलक्ष्यमा स्वागत समारोहको आयोजना गरेको थियो र त्यसमा हामीहरू सहभागी भएका थियौं । रातमा फर्केर हामीहरू समुद्रको किनारातर्फ घुम्न गएका थियौं र राती अबेर होटेलमा फर्किएर सुतेका थियौं ।

२०५९ साल श्रावण ३ गते तदनुसार सन् २००२ जुलाई १९ का दिन हामीहरू सबेरै उठेर अरस्तूको पार्कको नजिक समुद्रको किनारामा घुम्न

गएका थियौँ । सुन्दर तथा मनमोहक बिहानीमा शान्त समुद्रको छातीमा प्रतिबिम्बित थेसालोनिकी शहरको पृष्ठभूमिमा हामीले तस्वीर खिचेका थियौँ । त्यसै साथमा रहेको अरस्तूको पार्कमा गएर अरस्तूको मूर्तिकासाथ तस्वीर खिच्ने काम पनि हामीहरूले गरेका थियौँ । वास्तविकरूपमा ग्रीसका महान् विद्वान्, दार्शनिक र भविष्यद्रष्टा अरस्तू कस्ता थिए ? त्यस समयको उनको मूर्ति वा तस्वीर थियो वा थिएन कसैलाई थाहा छैन, तर त्यस पार्कमा स्थापित उनको मूर्ति (स्ट्याचू) भने अत्यन्त शालीन देखिन्थ्यो । हाम्रा पूर्वीय ऋषिमुनिहरूको जस्तै आकारप्रकार भएका, धोती फेरेका, खराउ लगाएका, दाह्रीजुँगा र लामू कपाल पालेका सन्तमहात्माका रूपमा ऋषिकल्प अरस्तूलाई मैले देखेको थिएँ । उनले तत्कालीन मेसेडोनियाका राजा फिलिपका छोरा राजकुमार एलेक्जेण्डरलाई पढाएका थिए । तिनै क्रान्तदर्शी अरस्तूको सुयोग्य शिक्षादीक्षा पाएर एलेक्जेण्डर सामान्य राजाबाट विश्वविजयी सम्राट् एलेक्जेण्डर द ग्रेट बनेका थिए । अरस्तू जस्ता विद्वान्कै कारण प्राचीन ग्रीस संसारभरि भाषा, साहित्य, दर्शन, विज्ञान आदि विस्तार गर्न सफल भएको थियो । वास्तवमा पश्चिमी सभ्यताको जनकका रूपमा ग्रीक र रोमन सभ्यतालाई मानिएको छ । त्यस प्रकारको मान्यता दिलाउन विद्वान् दार्शनिक अरस्तूको प्रमुख देन छ । अरस्तूका सम्बन्धमा विभिन्न विद्वान्हरूका विभिन्न भनाइहरू पाइन्छन् । सो सम्बन्धमा अरस्तूको काव्यशास्त्र भन्ने ग्रन्थका लेखक डा. नगेन्द्रको भनाइ यहाँ उद्धरण गर्नु सान्दर्भिक ठान्दछु:-




थेसालोनिकीमा रहेको ग्रीसका महान् विद्वान् तथा दार्शनिक अरस्तूको मूर्तिका साथै पार्कमा लेखक, २००२ जुलाई १९

"पाश्चात्य सभ्यता र संस्कृतिको मूल स्रोत ग्रीकज्ञानविज्ञान हो । त्यसको मूल प्रेरणाकेन्द्र अरस्तूको प्रतिभा हो । ग्रीक (यूनानी) भाषामा अरस्तूको वास्तविक नाम "अरिस्तोतेलेस" हो । अरस्तूको जन्म इ.पू. ३८४ मा ग्रीसको स्तगिरा भन्ने ठाउँमा भएको थियो । उनका पिताको नाम निकोमाखस थियो र उनी मेसेडोनियाका राजा अभ्युन्तस द्वितीयका

राजदरबारमा राजवैद्य थिए । शुरुशुरुमा अरस्तूको शिक्षादीक्षा उनका पिताको रेखदेखमा भएको थियो । उनी छोरा अरस्तूलाई पनि आफू जस्तै वैद्य बनाउन चाहन्थे तर उनको असामयिक मृत्यु भएका कारण अरस्तू स्वतन्त्र भएका थिए । इ.पू. ३६८ मा अरस्तूले एथेन्स गएर त्यस समयमा प्लेटोले स्थापना गरेको प्रसिद्ध विद्यापीठ (एकेडेमी) मा पढेका थिए । प्लेटोसँग रहेर उनले करिब २० वर्षसम्म पढेका थिए र उनी विविध विधाका विद्वान् थिए । पछि गएर त्यसै एकेडेमीमा उनले प्राध्यापन पनि गरेका थिए ।

प्लेटो अरस्तूको प्रतिभाबाट अत्यन्त प्रभावित थिए र उनलाई प्लेटोले एकेडेमी (विद्यापीठ) को मस्तिष्कको संज्ञा दिएका थिए । हुन ता अरस्तूले आफ्ना गुरु प्लेटोका अनेकौँ सिद्धान्तहरूको दृढतापूर्वक खण्डन गरेका थिए तर पनि गुरुशिष्यका बीचको सुमधुर सम्बन्ध भने पछिसम्म यथावत् कायमै रहेको थियो । इ.पू. ३४८ तिर प्लेटोको मृत्यु भएको थियो । त्यस पछि अरस्तू हरमेइअसको निमन्त्रणामा एथेन्सबाट अस्सौस नगरमा गएका थिए । त्यसै नगरमा अरस्तूले एकेडेमीको एक शाखाको स्थापनासमेत गरेका थिए । उनले त्यहीँ विवाह गरेर सन्तानसमेत जन्माएका थिए ।

इ.पू. ३४३ मा अरस्तू मेसेडोनियाका राजा फिलिपका छोरा राजकुमार सिकन्दरका गुरु भएका थिए । सिकन्दर विश्वप्रसिद्ध सम्राट् भइञ्जेलसम्म पनि गुरुचेलाका बीचको सम्बन्ध अत्यन्त राम्रो थियो । इ.पू. ३३५ मा अरस्तूले एथेन्सको नजिकै एपोलोमा आफ्नो एउटा स्वतन्त्र “ल्युकेउम” भन्ने विद्यापीठ खोलेका थिए । जहाँ विद्याका सबै अङ्गउपाङ्गहरूको पढाइ हुन्थ्यो । अरस्तू प्रायः यताउति हिँडेर विद्यार्थीहरूलाई पढाउँने गर्दथे । त्यो उनको अनौठो शिक्षणप्रविधि थियो र त्यसै आधारमा नै उनको शिक्षापद्धतिको नामकरण पनि भएको थियो । इ.पू. ३२३ मा भारतबाट फर्कँदा अहिलेको इराक राज्यको बेबिलोन भन्ने ठाउँमा सिकन्दर महान्को मृत्यु भएको थियो । त्यस पछि अरस्तूका जीवनमा विपत्तिहरू आउन थालेका थिए । उनले पनि सुकरातले भोगेको जस्तो दुर्भाग्य झण्डै भोग्नु परेको थियो । उनले एथेन्सबाट अन्यत्र भागेर आफ्नो ज्यान जोगाएका थिए । अन्त्यमा अरस्तू इ.पू. ३२२ मा आफ्नू जन्मभूमि स्तगिराको नजिक

खलकिस भन्ने नगरमा फर्केर आएका थिए । त्यही नगरमा उनको पेटको रोगबाट मृत्यु भएको थियो ।"

अरस्तू अत्यन्त प्रत्त्युत्पन्नमति र बहुमुखी प्रतिभाले सम्पन्न विद्वान् थिए । यद्यपि भौतिक विज्ञान र त्यसमा पनि प्राणीविज्ञान उनको विषय थियो तर पनि उनी अनेक विधाका पारङ्गत आचार्य थिए । ज्ञानविज्ञानका सबै क्षेत्रमा उनको पहुँच थियो । उनले आफ्नू ६२ वर्षको जीवनसम्ममा ४०० जति ग्रन्थहरूको रचना गरिसकेका थिए । तिनमा तर्कशास्त्र, भौतिकशास्त्र, मनोविज्ञान, भौतिकविज्ञान, ज्योतिर्विज्ञान, राजनीतिशास्त्र, आचारशास्त्र, साहित्य आदि प्रमुख थिए । उनी ग्रीस देशका त्यस समयका अद्वितीय विद्वान् थिए । पश्चिमी जगत्को भाषा, दर्शन, विज्ञान, साहित्यसमेतलाई उनले प्रभाव पारेका थिए । पश्चिमी सभ्यताको विकासमा उनको अद्वितीय देन रहेको कुरा मैले त्यस देशको भ्रमण गरेको बेला प्रत्यक्षरूपमा अनुभव गरेको थिएँ । अरस्तूको मूर्तिलाई सश्रद्ध नमन गर्दै त्यस पार्कबाट म बिदा भएको थिएँ ।

सन् २००२ जुलाई १९ का दिन बिहान ९ बजे विश्वसम्मेलनको अन्तिम सत्र शुरु भएको थियो । प्रार्थनापछि नियमित कार्यक्रम अगाडि बढेको थियो । तेह्रौं World Scout Moot 2008 का लागि भएको मतदानमा मोजाम्बिकले जितेको थियो । दसौं World Scout Youth Forum, 38th World Scout Conference in 2000 का लागि सर्वसम्मतिले गणतन्त्र कोरिया छानिएको थियो । दिनको खानाको समयमा लक्जेम्बर्गका स्काउटसँग ककनी तालीम केन्द्र तथा अन्तर्राष्ट्रिय क्याम्पसाइटका बारेमा कुराकानी भएको थियो । त्यस समयमा नेपाल स्काउटका लागि लग्जेम्बर्ग सरकार र स्काउटले प्रदान गरेको लाखौंलाख रकम श्रीराम लामिछानेले लक्जम्बर्गबाट स्काउटको प्रतिनिधि भएर त्यस बेला काठमाडौंमा बसेका पाउलसमेतसँग मिलेर ककनी तालीमकेन्द्र निर्माण गर्ने नाउँमा हिनामिना गरेको सम्बन्धमा निज लामिछाने उपर कारबाही भइरहेको थियो । निज त्यस हिनामिनाबाट जोगिन लग्जेम्बर्गका स्काउटमार्फत् त्यहाँका राजदरबारका युवराजबाट नेपालका युवराज पारसलाई भनाएर जोगिन प्रयास गरिरहेका थिए ।

वास्तवमा लग्जेम्बर्गका जनता र सरकारले नेपाल स्काउटको ककनी

तालीम केन्द्रको निर्माणका लागि दिएको रकम लामिछाने र लग्जेम्बर्गका भ्रष्ट स्काउटसमेत मिलेर हिनामिना गरेकाले त्यसबाट जोगिन उनीहरूले त्यस प्रकारको चाल चलेका थिए। त्यहाँ लग्जेम्बर्गका स्काउटका प्रतिनिधिहरूसँग कुरा गर्दा उनीहरू श्रीराम लामिछानेलाई कारबाही गरेकोमा असन्तुष्ट देखिन्थे। नेपाल स्काउटमा मेरो अवधि सकिएपछि श्रीराम लामिछानेलाई नै प्रमुख आयुक्त बनाएर आफ्नू मनपरी गर्ने योजनामा लग्जेम्बर्गको स्काउटसमेत लागेको तिनीहरूसँग भएको कुराकानीबाट मैले त्यसै बेला अनुमान गरेको थिएँ। त्यति ठूलो रकम विदेशीसँग मिलेर भ्रष्टाचार गर्ने श्रीराम लामिछाने नेपाल स्काउटको प्रमुख आयुक्तमा जतिसुकै ठूलो विदेशी शक्ति र नेपालको दरबार लागे पनि सम्भव छैन भन्ने मैले त्यस बेलाठानेको थिएँ। तर भ्रष्ट र अनैतिकहरूले जे पनि गर्न सक्दारहेछन्। त्यस सम्बन्धमा विस्तृतरूपमा प्रसङ्ग अनुसार तल उल्लेख गर्नेछु।

त्यसैदिन अपराह्न विश्वसम्मेलनमा विभिन्न प्रस्तावहरू पारित भएका थिए। तुरुन्तै थाइल्याण्डमा हुन लागेको World Jamburee 2002 र 2005 मा ट्युनिसियामा हुने World Conference र Youth Forum को निम्तासमेत दिने काम भएको थियो। त्यसैगरेर राष्ट्रवादी चीनको ताइवानमा आयोजना हुने Rovermoot को पनि निम्तो बाँडिएको थियो। अन्त्यमा World Scout Committee की नयाँ Chairperson Mrs. Dr. Marry Luise को भाषणपछि सभाका सभापति Rebert de la hunt ले सभा विसर्जगरेका थिए। अन्तिम Closing Ceremony र Closing Dinner का लागि Thessaloniki का Governer का निवासमा जाने सूचनाका साथ ३६ औँ World Scout Conference समाप्त भएको थियो।

त्यसैदिन रातको ९ बजे Governer का निवासस्थानमा हाम्रो समापन समारोह शुरु भएको थियो। Governer को निवास ३ तिरबाट समुद्रले घेरिएको अत्यन्त सुन्दर टापुमा थियो। ग्रीसको सुन्दर वास्तुकलाले युक्त उक्त भव्य भवन बत्तीले अत्यन्त सिँगारिएको थियो। ग्रीष्मऋतुको साँझमा समुद्रको मन्दमन्द हावाले शीतलता प्रदान गरिरहेको थियो। धरतीमा रङ्गीचङ्गी दीपमालाले Governer को सरकारी आवास देदीप्यमान भएर चम्किएको

थियो भने खुला आकाशमा भवनमाथि चम्किएका पूर्णचन्द्रमाले झन् भवनको शोभा बढाउन सहयोग गरिरहेका थिए। औपचारिक वक्तव्य र समापन वक्तव्य दिने काम सकिएपछि सामान्य रात्रिभोज लिएर बङ्गलादेशका ६ जना मित्रहरू, श्रीरवीन्द्र पाण्डे र म होटेलमा फर्किएका थियौँ। होटेलबाट सामान लिएर रातको ११.३० बजे थेसालोनिकी रेल्वेस्टेशनमा हामीहरू गएका थियौँ। १२ बजे मध्यरातमा एथेन्सतर्फ हामीहरूले प्रस्थान गरेका थियौँ। ट्रेनमा सुत्ने व्यवस्था भएकाले रातमा म आनन्दसँग सुतेको थिएँ।

२०५९ साल श्रावण ४ गते तदनुसार जुलाई २० तारिखका दिन बिहान ६ बजे एथेन्स रेल्वेस्टेशनमा उत्रिएर एथेन्स बजारको पुरानू बजारमा रहेको बङ्गाली टोलमा रहेको होटेलमा गएर हामीहरू बसेका थियौँ। एरिष्टोफेनिसमा बङ्गालीहरूकै रेष्टुराँमा गएर सामान्य खानापछि ट्राभलएजन्सीमा गएर जुलाई २२ तारिख सोमबारका दिन अपराह्ण ४ बजे जेनेभा जाने स्विस्एयरको हवाइटिकट पनि हामीहरूले लिएका थियौँ।

त्यसपछि बङ्गाली पथप्रदर्शकलाई साथमा लिएर बङ्गाली मित्रहरूका साथ एथेन्स शहरको अवलोकन गर्न दिनको १ बजे हामीहरू बाहिर निस्किएका थियौँ। ग्रीसलाई हेलेनिक गणतन्त्र भनिँदो रहेछ। सर्वप्रथम एथेन्सको पुरानू संसद भवन अगाडि हामीहरू गएका थियौँ। जुन भवनमा हाल ऐतिहासिक पुरातात्त्विक सङ्ग्रहालय राखिएको रहेछ। त्यसको बाहिरपट्टि घोडामा चढेको फूर्तिलो व्यक्तिको सालिक राखेको रहेछ। झट्ट परबाट हेर्दा नेपालमा टुँडिखेलका छेउमा राखिएको श्रीपेचसहितको श्री ३ जङ्गबहादुरको सालिक जस्तै त्यो मूर्ति मैले देखेको थिएँ। नजिकै गएर हेर्दा सन् १८२१ मा भएको ग्रीसको स्वतन्त्रता सङ्ग्रामका नायक थियोडर कोलोकोत्रोनिसको त्यो सालिक रहेछ। त्यसपछि हामीहरू घुम्दै ग्रीसको नयाँ संसदभवन हेर्न गएका थियौँ। भव्य संसद भवनका अगाडि राखिएको मानवीय प्रतीक र परम्परागत ग्रीक सैनिकको अनवरत चलिरहने कवाज हेर्न पनि त्यहाँ आगन्तुकहरूको सधैँ भीड लागिरहने रहेछ। त्यसलाई अज्ञात सैनिकहरूको समाधिस्थल


ग्रीसका स्वतन्त्र सेनानी थियोडर कोलोकोत्रोनिसको सालिक

पनि भनिँदो रहेछ । संसदभवन अगाडिको त्यस स्थललाई संसदीय चोक (Constitutional Square) पनि भनिँदो रहेछ । त्यो दर्शनीय मानवप्रतीक हेरेर हामीहरू ओलम्पिक रङ्गशाला हेर्न गएका थियौँ । ग्रीकपरम्परा अनुसारको सेतो सिंहमर्मरले बनेको अत्यन्त सुन्दर त्यो रङ्गशाला रहेछ । त्यसलाई The Panathenian Stadium (The site of the first modern Olympic Games in 1986) पनि भनिँदो रहेछ ।

सन् २००४ को सेप्टेम्बरमा ग्रीसको एथेन्समा आयोजना हुने ओलम्पिक खेलमा ओलम्पिकज्योति त्यसै रङ्गशालामा बालेर ओलम्पिक खेलकूद शुरु गरिने कुरा पनि थाहा भएको थियो । त्यो ओलम्पिक खेल ग्रीसको ओलम्पिया भन्ने ठाउँमा क्राइष्टको जन्मभन्दा ७७६ वर्ष पहिले देवताका प्रमुख जिउसका सम्मानमा एलिसका राजा इफ्टिसले शुरु गराएका थिए । पाँचौ शताब्दी पूर्वसम्म त्यो ओलम्पिक खेल सामान्यरूपमा चल्दै ग्रीकसंसारमा अत्यन्त प्रसिद्ध भएको थियो । अहिले पनि संसारको जुनसुकै कुनामा ओलम्पिक खेलकूद भएमा पनि ओलम्पिकज्योति त्यही ओलम्पियाडमा बालेर लैजानु पर्ने चलन यथावत् कायमै छ । त्यही ग्रीसको धरतीबाट शुरु भएको विश्वप्रसिद्ध ओलम्पिक खेलकूद फेरि त्यसको जन्मभूमिमा आएर सन् २००४ मा हुने भएको खबरले मलाई अत्यन्त खुशी बनाएको थियो । सो कुरा १९९६ मा अमेरिकी शहर एटलाण्टामा भएको ओलम्पिकको शतवार्षिकी खेलकूदमा नेपाली Contingent को नेतृत्व गरेर जाँदा मलाई उसै बेला थाहा भएको थियो । सो कुरा मैले बिर्सिसकेको रहेछु । त्यस ओलम्पिक स्टेडियममा जाँदामात्र मलाई सो कुराको संस्मरण हुन आएको थियो ।

त्यसपछि बिस्तारै घुम्दै हामीहरू प्राचीन Olympieon zeus को मन्दिर हेर्न गएका थियौँ । जसको बारेमा अङ्ग्रेजीमा यस्तो वर्णन गरिएको पाइन्छ । जुन निम्न अनुसार छः–

Worship of Zeus in the area of the olympeion is attested from early historical times, and there was a temple here already in the early 6th C.BC. During the period of the tyranny, in 515 BC, Peisistratos the Younger, grandson of the famous peisistrator, endeavoured to replace this early temple with a new one of large dimensions, on the model of thows in Asia

Minor. Construction had reached the level of the crepis when the tyranny at Athens was overthrown. The Athenians refused to continue with the building of it, so that the democracy should not bring to completion a work that, although brilliant, was a reminder of the hated tyranny. In 174 BC, the King of Syria, Antiochos IV Epiphanes, continued the work, with Cossutius, a Roman, as his architect. The level of the entablature was reached before work came to a halt in 163 BC, on the death of Antiochos.

After his stay in Athens in AD 124-125, the emperor Hadrian decided to finish the temple, and it was inaugurated in AD 131. This temple was one of the largest in the ancient world, and stood in a large open space measuring 250x130 m; it was 110.35m long and 43.68m wide, and is in the Corinthian order. There were two rows of 20 columns in the sides and three rows of 8 colums on the ends, giving a total of 104 colums, which were 17.25 m high, with a base diameter of 1.70m. Only 16 are now preserved, 13 at the south-east corner and 3 near the south-west corner; the middle one of these last fell after a storm in 1852 and now lies on the ground. The cella housed a chryselephantine statue of Zeus and a statue of Hadrian, who was honoured Jointly with the god. A rectangular poros enclosure wall measuring 205.85x128.72m was constructed and butteressed with built pillars. Entrance to the enclosure was by a small propylon on the north side.

After the Construction of the temple, the Athenians honoured Hadrian by building an arched gateway, 18m high, 13.50m wide and 2.30m deep, in the north-west corner of the enclosure. The central arch is 6.20m wide and surmounted by Corinthian columns and pilasters, with Ionic epistyles at the ends and pediment in the centre. On the epistyle blocks above the arch and the columns, on the side of the old city (west facade) is carved the inscription: "This is Athens, formerly the city of Theseus, while on the side facing the sanctuary and the extension of the city by Hadrian, is the inscription: "This is the city of Hadrian and not of Theseus".

The remains of other important sanctuaries have been excavated in the area immediately bordering on the Olympieion to the north. The foundations of a Classical temple just outside the south side of the enclosure wall of Olympieion have been identified with the Delphinion, the sanctuary of Appolo Delphinios. A small peristyle Doric temple of Roman times, surrounded by an enclosure wall, has heen identified with the Kronion, the sanctuary of Kronos and Rhea. finally, the remains of a large rectangular peristyle and the foundations of a small temple, to the south-west of the Kronion, have been identified with the Panhellenion, the sanctuary of Zeus Panhellenios.

त्यसरी हामीहरू केही महत्त्वपूर्ण स्थानहरूको परिभ्रमण र अवलोकन गरेर एथेन्स बजारको बीचोबीच हुँदै होटेलमा फर्किएका थियौँ । ग्रीष्मऋतुको मध्यदिनमा हामीहरू घुम्न निस्किएका हुँदा बाहिर अत्यन्त गर्मी थियो । पानी जति खाए पनि कमै हुने र जता गए पनि गर्मी हुने हुँदा दिनभरिको हाम्रो घुमाइ अत्यन्त कष्टकर भएको थियो । एथेन्स शहरमा घुम्दा जहाँ पनि महिलाहरू देखिन्थे । अझ तिनमा पनि भर्खर यौवन चढ्दै गरेका मदमत्त युवतीहरू अत्यन्त कठिनताका साथ लाजमात्रै छोपेर प्रायः नग्न अवस्थामा हिंडेका देखिन्थे । ग्रीसका एथेन्स, थेसालोनिकी र अरू शहरहरूका महिलाहरूको पनि त्यस्तै अवस्था थियो । हाम्रो पूर्वीय संस्कार र संस्कृतिमा हुर्किएका अत्यन्त शालीन र सभ्यताका साथ हिंड्ने नारीहरू देख्न बानी परेका मेरा आँखाले शरीरमै छाला जस्तो टप्प टाँसिएका र अत्यन्त पातला परिधानमा आफ्ना शरीरका उन्नत र अवनत सम्पूर्ण अङ्गहरूलाई उत्तेजकरूपमा प्रदर्शन गर्दै हिंडेका युवतीहरूलाई देखेर म आफैँ लज्जित भएको थिएँ । मभित्र रहेको नारीप्रतिको श्रद्धा र विश्वासमा विचलनको भाव आउन खोजेको थियो । नारीहरूले उपभोग गरिरहेको त्यस देशको नारीस्वतन्त्रतामाथि नै प्रश्नचिन्ह लागेको मैले अनुभव गरेको थिएँ । "यत्र नार्यस्तु पूज्यन्ते रमन्ते तत्र देवताः" भन्ने उदात्त पूर्वीय भावनाको अभाव त्यहाँ मैले देखेको थिएँ र नारीहरू विलासिताका साधनमा मात्रै परिणत भएको पनि मैले महसूस गरेको थिएँ ।

श्रावण ५ गते आइतबार तदनुसार २१ जुलाईका दिन बिहानैदेखि हामीहरू  एथेन्सका महत्त्वपूर्ण पुरातात्त्विक ठाउँहरूको अवलोकन गर्न

निस्किएका थियौँ । हामीहरू सर्वप्रथम प्राचीन क्यालोकक्याथेड्रल, एकेडेमी युनिभर्सिटी, नेशनल लाइब्रेरी र ओमोनिया स्क्वायर गएका थियौँ । उक्त एकेडेमी युनिभर्सिटी प्लेटोले खोलेका थिए र त्यसैमा अरस्तूले पढेका थिए । एकेडेमीका प्राङ्गणमा स्थापित विभिन्न आकर्षक मूर्तिहरू र भित्तामा लेखिएका भित्तिचित्रहरूले ग्रीक कलाको उत्कृष्टतालाई प्रमाणित गरिरहेका थिए । एकेडेमी युनिभर्सिटीका चोकहरूमा स्थापित अग्लाअग्ला प्रस्तरस्तम्भ र त्यसमाथि राखिएका विशिष्टस्तरका देवी, देवता र मानिसका मूर्तिहरूले पनि ग्रीकमूर्तिकलाको परम्पराको विशिष्टतालाई इङ्गित गरिरहेका थिए । सुन्दर भवन र प्राचीन दरबारका चोकहरूमा अग्लाअग्ला ढुङ्गाका खम्बाहरू ठड्याएर मूर्ति राख्ने परम्परा नेपालमा पनि पहिलेदेखि अहिलेसम्म पनि चलिरहेको देखिन्छ । हाम्रा हनुमान्ढोका दरबारस्क्वायर, पाटन दरबारस्क्वायर, भक्तपुर दरबारस्क्वायर, विभिन्न देवदेवीहरूका मन्दिर र धर्मशालाहरूका प्राङ्गणमासमेत अग्लाअग्ला ढुङ्गाका स्तम्भहरू ठड्याएर तत्कालीन राजा, रानी, भारदार, देवी, देवता र पशुपक्षीका मूर्तिहरूसमेत प्रशस्तरूपमा राख्ने गरेको पाइन्छ । ग्रीकपरम्परामा स्तम्भहरू बाटुला, कलात्मक र अत्यन्त सुललित हुँदारहेछन् । नेपालमा भने प्राचीन समयका प्रायः चारपाटे, अपरिष्कृत र सामान्यरूपका स्तम्भहरू ठड्याएका पाइन्छन् । ग्रीकमूर्तिहरू सबै नै सिंहमर्मरका सुन्दर र आकर्षकरूपमा निर्माण गरेर स्थापना गरेका पाइए ।


एथेन्सका प्राचीन भवनहरूमा ग्रसीसको स्थापत्य कला र मूर्ति कलाको एक नमूना यहाँ देख्न सकिन्छ ।


प्राचीन ग्रीसको स्थापत्य कला र मूर्तिकलाको एक

त्यसपछि हामीहरू लिकाभिट्स् हिलमा निर्मित अति प्राचीन सेण्ट् जर्जियस् चर्चमा गएका थियौँ । एथेन्स् महानगरीको मध्यभागमा रहेको कडा चट्टान भएको उक्त हिलमा पैदल जान नसकिने भएकाले सुरुङभित्रबाट चल्ने केबुलकारबाट हामीहरू माथि डाँडामा गएका थियौँ । डाँडाका

टुप्पामा सुन्दर स्यान् चर्च रहेछ । घना छहारी भएको एउटा वृक्ष डाँडाको चुचुरोमा जीवन्त तरुणतपस्वीको रूपमा सबैलाई प्रचण्ड गर्मीमा प्रखर सूर्यको तापबाट संरक्षण दिएर ठिङ्ग उभिइरहेको थियो । त्यस ठाउँबाट हेर्दा एथेन्स शहरका सम्पूर्ण भागहरू देखिँदा रहेछन् । त्यो डाँडो एक्रोपोलिसको म्युजियम रहेको डाँडोभन्दा धेरै अग्लो रहेछ । त्यस डाँडाका टुप्पाबाट चारैतिर घुमेर हेर्दा जेटमा चढेर आकाशाबाट हेरेजस्तो एथेन्स महानगरीका समुद्रदेखि लिएर चारैतिरका दृश्यहरू अत्यन्त सुन्दर र सुस्पष्टरूपमा देखिने रहेछन् । त्यहाँ चढेर हेर्दा मैले विद्यार्थी अवस्थामा काठमाडौँको धरहराका टुप्पामा चढेर काठमाडौं उपत्यकाको दृश्य हेरेजस्तो मलाई लागेको थियो । अर्को शब्दमा वर्णन गर्ने हो भने हाम्रो स्वयंभूको डाँडामा चढेर काठमाडौँ उपत्यकालाई हेर्दाको अनुभूति पनि मलाई त्यहाँ भएको थियो । अझ त्यसलाई अरू मुलुकका अग्ला धरहराहरूसँग पनि तुलना गरेर हेर्ने हो भने दिल्ली शहरलाई कुतुबमीनारका टुप्पाबाट, टोकियो महानगरलाई टोकियो टावरबाट, सिड्नी शहरलाई सिड्नी टावरबाट, पेरिस शहरलाई आइफिल्ड टावरबाट, संयुक्तराज्य अमेरिकाको राजधानीलाई वाशिङ्गटन शहरको टावरबाट र जनवादी गणतन्त्र चीनको साङ्घाई शहरलाई साङ्घाई टावरबाट हेरेको जस्तो अनुभव मलाई भएको थियो । अरू सबै टावर, मीनार र धरहराहरू मानव निर्मित हुन् भने हाम्रो स्वयम्भू डाँडा जस्तै त्यो डाँडो प्राकृतिक हो ।


ग्रीसको राजधानी एथेन्सामा रहेको प्रसिद्ध ऐतिहासिक एक्रोपोलिस क्षेत्रको एक दृश्य

त्यहाँको अवलोकन समाप्त गरेपछि हामीहरू एथेन्सको अत्यन्त प्राचीन पुरातात्त्विक महत्त्वको विशाल क्षेत्र एक्रोपोलिसको अवलोकन गर्न गएका थियौँ । त्यो एक्रोपोलिसको निर्माण

क्राइष्टको जन्मभन्दा पहिले ४४७–४३२ को बीचमा भएको रहेछ । त्यहाँ प्राचीन दरबार, घर र मन्दिरहरूका अवशेषहरू चारैतिर छरिएका देखिन्थे । ती सबैको बीचमा ढुङ्गिलो पहाडमाथि विशाल स्तम्भहरू भएको एक्रोपोलिस



एक्रोपोलिस म्यूजियमभित्र राखिएका प्राचीन ग्रीसका मूर्तिकलाका नमूनाहरू

मन्दिरको विशाल क्षेत्र रहेछ । त्यहाँ पनि धेरैजसो भत्किसकेका मन्दिरका भग्नावशेषहरू यत्रतत्र छरिएका देखिन्थे । त्यस बेला तिनको जीर्णोद्धार गरेर संरक्षण गर्ने काम भइरहेको देखिन्थ्यो । त्यसै क्षेत्रको एक छेउमा एक्रोपोलिस म्युजियम स्थापित गरिएको रहेछ । त्यस म्युजियममा त्यस एक्रोपोलिस क्षेत्रका मूर्तिहरू, भग्नावशेषहरू र अन्य सङ्ग्रहणीय पुरातात्त्विक वस्तुहरू सङ्ग्रह गरेर राखिएका रहेछन् । जसमा एलेक्जेण्डर, प्लेटो, सोक्रेटस् र अरस्तूका मूर्तिहरूसमेत देखिन्थे । त्यही ठाउँमा प्राचीन ग्रीसका महान् दार्शनिक शुकरातलाई उनको अद्वितीय विद्वत्ताका कारण त्यस समयका क्रूर शासकहरूले थुनेर राखेका थिए । अन्त्यमा विष खुवाएर उनलाई प्राणदण्ड दिइएको थियो । उनलाई विष खुवाउनु अघि उनका शिष्यहरूले "जीवनभरि अध्यात्मशास्त्र र दर्शन पढेर तपाईंले के जान्नु भयो ? भनेर प्रश्न सोधेका थिए । त्यसको उत्तरमा Socrates ले भनेका थिए – "I am wiser than my contemporaries because I alone know that I know nothing. *(Bertrand Russel. The Scientific outlooks, Topics and openion)* भनेर उनले आफ्ना शिष्यहरूलाई उत्तर दिएका थिए ।

त्यसैगरेर हाम्रो पूर्वीय दर्शनमा पनि जसले ब्रह्मसाक्षात्कार गरिसकेर पनि केही बुझ्केको छैन भन्छ, त्यही व्यक्ति नै सबैभन्दा जान्ने हो र जसले जान्दछु भन्छ त्यसले केही पनि जानेको हुँदैन "यस्यामतं तस्य मतं मतं यस्य न वेद सः । अविज्ञातं विजानतां विज्ञातमविजानताम् ॥" भनेर केनोपनिषद् (२।३) ले भनेको पाइन्छ । सुकरातले पनि हाम्रो वेदान्तदर्शनकै भाषा बोलेर आफ्ना चेलाहरूलाई जबाफ दिएका थिए । त्यही कुरालाई भर्तृहरिले आफ्नू नीतिशतकमा यसरी व्यक्त गरेका छन् । जस्तैः– "यदा किञ्चिज्ज्ञोऽहं द्विप इव मदान्ध समभवं तदा सर्वज्ञोऽस्मीत्यभवदवलिप्तं मम मनः । यदा किञ्चित्किञ्चिद् बुधजनसकाशादवगतं तदा मूर्खोऽस्मीति ज्वर इव मदो मे व्यपगतः ॥"

उपनिषद् र भर्तृहरिका शाश्वत वाक्यहरूको समेत स्मरण गर्दै म एक्रोपोलिसको डाँडाबाट फेदीमा ओर्लिएको थिएँ । माथि अग्लो डाँडामा चढ्नु पर्ने भएको र ग्रीष्मऋतुको मध्याह्नको प्रचण्ड गर्मीले गर्दा अरू मित्रहरूले माथि चढ्न हिम्मत नगरेपछि म एक्लै नै माथि चढेको थिएँ । शहरको बीचमा रहेको त्यस डाँडाबाट एथेन्सको वरिपरिको केही भाग देखिँदो रहेछ ।

उक्त एक्रोपोलिस थुम्कीका सम्बन्धमा डा. गोविन्दराज भट्टराईको कान्तिपुरको २०६३ साल कार्तिक ५ गतेको अङ्कमा प्रकाशन भएको, "एथेना मन्दिरबाट महाकवि सम्झँदा" भन्ने लेख मेरो यस यात्रावृत्तान्तसँग प्रासङ्गिक भएको हुँदा त्यसको केही अंश मैले यहाँ साभार उद्धृत गरेको छु । जो यसप्रकार छ –

"एथेन्स शहरको मध्यभागमा उभिएको एक्रोपोलिस थुम्कीमा चढेपछि हामीलाई एउटा अलौकिक भूमिमा टेकेको आनन्दले छोप्यो । एथेना देवीको त्यो विशाल मन्दिर, डोरिक र आइयोनिक शैलीमा निर्मित प्रस्तरका कल्पनाशील र भव्य स्तम्भ देख्ता हामी आश्चर्यमा पर्‍यौं । विद्या, बुद्धि र विवेककी देवी एथेनाको नाममा निर्मित विशाल मन्दिर, त्यसमाथिको पार्थिनन देवीको मन्दिर, अजङ्गको अकल्पनीय उच्चता र सौन्दर्य बोलिरहेको प्रवेशद्वार, त्योभन्दा तलका देवीदेवतालाई दुःखान्त नाटक देखाउने विशाल रङ्गमञ्च, अझ तलको अगोरा, वरिपरिका भग्न किल्लामा यो मानव सभ्यताको मिर्मिरेमा रचित सौन्दर्य र विशालता हेर्न आएका हजारौँहजार दर्शनार्थीको लाम थियो ।

त्यससागरमा बग्दै र पाइला सार्दै पहराको शिरमा पुग्यौँ । पत्थरले पत्थरमाथि बनेका प्राचीन वास्तुकलाका अद्वितीय र अजङ्गका सपना त्यहाँ थिए । हजारौँ वर्षका युद्ध, आक्रमण, आगलागी, बर्बरता र प्राकृतिक प्रकोपले मेट्न नसकेका ती महान् कलाकृतिका वरिपरि चट्टानमाथि उभिएर चारैतिर अनन्तसम्म फैलिएको एथेन्स नगरतिर दृष्टिपात गरिरहेको बेला मलाई हाम्रा महाकवि लक्ष्मीप्रसाद देवकोटाको सम्झना भयो । उनले रचेको प्राचीन ग्रीसको महिमा स्मरण गराउने काव्य प्रमिथसको सम्झना भयो । नेपाली साहित्यले आधा शताब्दी पहिले विश्वको प्राचीन सभ्यताको एउटा कथालाई काव्यमा ढालेको थियो । त्यसदेखि यता विश्वसभ्यताका कुनै पात्र वा घटनालाई लिएर लेखिएको कुनै कृति नेपाली साहित्यमा आएको छैन । प्रमिथसले महाकविको विस्तृत र उदारता प्रमाणित गर्दछ । त्यसमा उनको विद्रोही चेतन र उन्मुक्तिप्रेम प्रतिबिम्बित हुन्छ । एक्रोपोलिसको डाँडामा एथेनादेवीको मन्दिरछेउ उभिएर मैले एकपल्ट महाकविलाई सम्झेँ ।" तिनै एथिनादेवीको नामबाट ग्रीसको राजधानीको  नाम एथेन्स रहन गएको रहेछ ।

एक्रोपोलिसको अवलोकनपछि शहरका अन्य दर्शनीय स्थानहरूको अवलोकन गर्दै विश्रामका लागि हामीहरू होटेल फर्किएका थियौँ । केही बेरको आरामपछि एकेडेमी ओमोनिया स्क्वायरबाट स्थानीय बसमा चढेर हामीहरू समुद्रको किनारामा गएका थियौँ । एथेन्स शहरका दक्षिण छेउमा बसको लामू यात्रापछि समुद्रमा पुगेर केही साथीहरूले पौडी खेलेका थिए । साँझको शीतल हावाबाट आनन्दित हुँदै समुद्रको किनारामा हामीहरू धेरैबेर घुमेका थियौँ । बेलुका फेरि बस चढेर एथेन्सका जनताको, शहरवासीको र रात्रिजीवनको समेत अवलोकन गर्दै हामीहरू बसेको डिप्लारी स्ट्रिट ३, थियाद्रु, ओमोनियामा फर्किएका थियौँ । इण्डियन टेष्टी रेष्टुराँमा खाना खाएर रातमा अत्यन्त कडा गर्मी सहँदै हामीहरू सुतेका थियौँ ।

२०५९ साल श्रावण ५ गते तदनुसार २००२ जुलाई २२ तारिखका दिन बिहान एक छिन बाहिर घुमेर होटेलमा हामीहरू फर्किएका थियौँ । त्यहाँ पुगेदेखि नै इण्डियन टेष्टी रेष्टुराँमा खाना खाएको हुँदा मेरो पेट बिग्रिएको थियो । त्यसै कारण बिहान पानी र चिसो पेय पदार्थमात्र मैले लिएको

थिएँ । १२ बजे होटेलबाट चेकआउट गरेर बङ्गाली मित्रहरूका साथ दिनको १ बजे एथेन्स शहरबाट एयरपोर्टतर्फ हामीहरू हिँडेका थियौँ । एथेन्सबाट ४६ किलोमिटर टाढा एयरपोर्ट भएको हुँदा त्यहाँ पुग्न हामीहरूलाई १ घण्टा लागेको थियो । २ बजे हामीहरू एयरपोर्ट पुगेका थियौँ । जर्मनहरूले बनाइदिएको नयाँ एयरपोर्ट अत्यन्त राम्रो रहेछ । Check in गरेर सुरक्षा जाँच र अध्यागमन कार्यालयमा पुऱ्याउनु पर्ने विधिविधान पूरा गरेर स्विट्जरल्यान्डको जेनेभातर्फ उड्ने तयारीमा हामीहरू प्रतीक्षालयभित्र पसेका थियौँ । जहाज चढ्न पङ्क्तिमा लाग्ने बेलामा स्विस्एयरकी कर्मचारीले मसँग बोर्डिङ पास मागेकी थिइन् ।

त्यसबेला म मेरो यात्राविवरण लेख्न व्यस्त भएको थिएँ र यात्राभरि नै मौका पाएको बेला म त्यसै गर्दथेँ । मैले कमिज र वेष्टकोटको जेपमा छामें तर बोर्डिङ्पास भेटिएन । मैले भित्र पस्तापस्तै त्यो हराइसकेको रहेछु । त्यसरी यात्रामा बोर्डिङ्गपास पहिलो पटक मैले हराएको थिएँ । बाहिर निस्किएँ । भित्र पसेँ । सुरक्षा अधिकारीको कार्यालयमा गएँ । अध्यागमन कार्यालयमा गएँ । कहीँ नभेटिएपछि त्यही कुरा स्विस्एयरको प्रवेश काउण्टरमा गएर मैले बताएको थिएँ । अरू यात्रीहरू विमानतर्फ गइसकेका रहेछन् र मेरा सहयात्री श्रीरवीन्द्र पाण्डे भने छक्क परेर छट्पटाइरहेका रहेछन् । म चाहिँ बोर्डिङपास अर्को बनाएर उड्न पाइने भरोसामा थिएँ र आखिरी त्यही भयो पनि । स्विस्एयरका कर्मचारीहरूले मलाई अस्थायी बोर्डिङ्पास बनाइदिएपछि म जहाजमा चढ्न पाएको थिएँ ।

त्यसरी अचानक मेरो बोर्डिङपास हराउँदा पनि मैले थाहा नपाउनु अन्यत्र कतै ध्यान नदिएर यात्रावृत्तान्त लेख्न व्यस्त हुनु नै थियो । वास्तवमा म लेख्न थालेपछि दायाँबायाँ केही देख्तिन र लेखाइमा यति ध्यानमग्न हुन्छु कि एक किसिमले मलाई समाधि नै लागे जस्तो हुन्छ । मलाई त्यहाँ पनि त्यस्तै भएको थियो ।



# स्वीट्जरल्यान्डमा

एथेन्सको विमानस्थलबाट हामीहरू स्विस्एयरको LX1823 नं. को एभ्रो विमानको उडानबाट स्थानीय समय अनुसार अपराह्न ४.३० बजे स्वीट्जरल्यान्डको जेनेभातर्फ उडेका थियौँ । मेरा साथमा एक जना फ्रेञ्च नागरिक तर हाल स्वीट्जरल्यान्डमा बसोवास गर्ने प्याट्रिक गान्टेश पनि बसेका थिए । उनी विमा कम्पनीमा काम गर्ने अत्यन्त मिलनसार व्यक्ति थिए । उनी धेरैथरी भाषा जान्ने र धर्मका बारेमा पनि ज्ञान भएका बुद्धिजीवी मान्छे रहेछन् । त्यसैकारण उनीसँग कुरा गर्न मलाई अत्यन्त रमाइलो भएको थियो । हामीहरू कुरा गर्दै उडिरहेका थियौँ । हामीहरू कुन बाटो भएर कसरी उडिरहेका थियौँ भन्ने कुरा मलाई हवाइजहाजबाट तल देखाउँदै उनले सबै कुरा बताइरहेका थिए । मलाई अत्यन्त खुशी लागेको थियो । एथेन्सको विमानस्थलबाट हवाइजहाज सोभै पश्चिमतिर उडेको थियो ।

ग्रीसका गाउँ र सुक्खा डाँडाहरू पार गर्दै हवाइजहाज विशाल नीलो समुद्रमाथि उडिरहेको थियो । त्यो समुद्र ग्रीस र इटलीका बीचमा पर्ने याड्रियाटिक समुद्र थियो । त्यो समुद्र तरिसकेपछि जहाज इटलीको भूमिमाथि हुँदै सोभै स्वीट्जरल्यान्ड ताकेर उडेको थियो । इटलीतर्फ लागेपछि भूमि हराभरा र रसिलो मैले देखेको थिएँ । त्यसपछि सुन्दर इटलीको शहर मिलान र त्यहाँको विमानस्थल पनि देखिएको थियो । बिस्तारै हिउँले ढाकिएका सुन्दर पर्वतशृङ्खलाहरू र हरिया जङ्गलहरूले ढाकिएका पहाडहरू पनि देखिन थालेका थिए । हेर्दाहेर्दै इटलीराज्यभित्र पर्ने आल्प्स् पर्वतशृङ्खला पनि देखिएको थियो । मैले त्योभन्दा पहिले धेरै पटक बेलायत, अमेरिका, फ्रान्स र जर्मनीतर्फ उड्दा पनि हवाइजहाजबाट आल्प्स् पर्वतशृङ्खलाको केही भाग देखेको थिएँ । त्यस दिन भने दिन उघ्रिएको हुँदा पहिले देखेको भन्दा त्यस पर्वतशृङ्खलालाई अत्यन्त सुन्दर र मनोहररूपमा मैले देखेको थिएँ । कहीं कहीं अत्यन्त धारिला भएर माथि उठेका श्वेतमुकुटमण्डित

पर्वतहरू पनि देखिन्थे भने कतै कतै भने अत्यन्त विस्तृतरूपमा फैलिएका पर्वतशृङ्खलामा हिउँको थुप्रो पनि देखिन्थ्यो । कतै कतै हिउँ पग्लिएर अनवरतरूपमा झरिरहने पानीका सुन्दर झरना, छाँगा र छहराहरू पनि देखिन्थे । त्यसै गरी विशाल आल्प्स् पर्वतशृङ्खलाका भित्री पत्रैपत्रमा स्वच्छ सफा पानीका अक्षयस्रोतकारूपमा अनन्तकालदेखि रहेका निर्मल कुण्ड र पोखरीहरूको दृश्य पनि देखिन्थ्यो ।

जहाजको उचाइबाट ती सारा दृश्यहरू देखेर २०५३ साल कार्तिक महिनामा जनवादी गणतन्त्र चीनको सरकारी भ्रमण समाप्त गरेर तिब्बतबाट हिमालपारको उडानमा विश्वको अत्युच्च सगरमाथामाथिबाट फन्को मार्दै काठमाडौँतर्फ आउने क्रममा हिमालयका पत्रैपत्रभित्र मैले जुन दृश्य देखेको थिएँ सोही दृश्य त्यहाँ पनि देखेर म अत्यन्त भावुक भएको थिएँ ।

मलाई त्यसबेला आफ्ना हिमाली शृङ्खलाहरूको सम्झना आइरहेको थियो । त्यसैबेला त्यो हवाइजहाज अत्यन्त तीव्र गतिले स्वीट्जरल्यान्डको धरतीभित्र पसिसकेको कुरा सहयात्री प्याट्रिकले मलाई बताएका थिए । उनको भनाइ अनुसार त्यो विशाल आल्प्स् पर्वतशृङ्खला तीन राष्ट्रहरूमा पर्दोरहेछ । एक भाग इटलीमा, अर्कोभाग अष्ट्रियामा र तेस्रो भाग स्वीट्जरल्याण्डमा पर्दोरहेछ । हामीहरू इटलीको भाग काटेर स्वीट्जरल्याण्डको भागमा पर्ने आल्प्स् पर्वतमाथि उडिरहेका थियौँ । त्यहाँ पनि पर्वतशृङ्खलाको विशालता, उच्चता र सौन्दर्य उस्तै देखिन्थ्यो ।

त्यो प्रकृतिको मनोरम तथा उदात्त उपहारलाई विभिन्न राष्ट्रहरूले टुक्रा टुक्रा पारेर भाग लगाएर सीमाबद्ध गरेका छन् । शक्तिशाली राष्ट्रहरूले सम्पूर्ण मानवमात्रको अमूल्य प्राकृतिक सम्पदालाई आफ्नू स्वार्थको घेरामा राखेर अरूको प्राप्तिबाट त्यसलाई वञ्चित गरेका छन् भनेर म शोचिरहेको थिएँ । अनुमति र पारपत्रको झन्झट लगाएर आवतजावत गर्न रोक लगाएका छन् । त्यो अनुपम प्रकृतिको साझा भण्डारमा सबैले निर्बाध विचरण गर्न पाउनु पर्छ भन्ने मेरो तर्कना थियो ।

त्यसैबेला प्याट्रिकले एउटा अति सुन्दर बाटुलो अत्युच्च श्वेतमुकुटयुक्त पर्वतराजतर्फ इङ्गित गर्दै "मोण्ट ब्लाँ" भनेर मलाई देखाएका थिए । फ्रेँच भाषामा Mont Blanc अर्थात् त्यसलाई White Mountain भनिँदो रहेछ ।

त्यस पछि मैले स्विट्जरल्यान्डतर्फ अझ सुन्दर पर्वतशृङ्खला र सस्यश्यामला मनोहर भूमिलाई माथिबाट देखेको थिएँ र माथिबाटै त्यो शान्तिप्रिय तटस्थ भूमिलाई मैले नमन पनि गरेको थिएँ। माथिबाट देख्तैखेरि हृदय अत्यन्त प्रसन्न र प्रफुल्ल भएर आएको थियो। त्यस सुन्दर भूमिमा आउने मेरो धेरै दिनदेखिको उत्कट आकाङ्क्षा त्यस दिन पूर्ण भएको थियो। माथिबाटै जेनेभा शहरको गहना भएर शहरको बीचमा रहेको विशाल निर्मल तलाउलाई पनि देखेर म अत्यन्त आनन्दित भएको थिएँ।

हामीहरू चढेको विमान स्थानीय समय अनुसार साँझ ६.१५ बजे ( ग्रीसभन्दा १ घण्टा समय ढिलो भएकोले) जेनेभाको विमानस्थलमा ओर्लिएको थियो। त्यसपछि हामीहरू अध्यागमन आदिको झन्झटबाट पार हुँदै विमानस्थलबाट बाहिर निस्किएका थियौं। त्यस मुलुकमा पारपत्र र अनुमतिपत्रको आधिकारिकताका सम्बन्धमा केही कडा नीति भएको देखियो तर अरू कुरामा भने अत्यन्त उदार भएको मैले पाएको थिएँ। हामीहरू विमानस्थलबाट बाहिर निस्किएर एउटा ट्याक्सी लिएर जेनेभा शहरको बीचमा पर्ने होटेल कार्मेनमा गएर बसेका थियौं। होटेलमा Check in गरेपछि निश्चिन्त भएर हामीहरू जेनेभा शहर र जेनेभाको प्रसिद्ध विशाल ताल हेर्न गएका थियौं।

एथेन्सको अत्यन्त गर्मी र फुङ्ग उडेको उराठलाग्दो ठाउँबाट शीतल, रमाइलो र हराभरा ठाउँमा पुग्दा बयान नै गर्न नसकिने गरी मलाई आनन्दको अनुभूति भएको थियो। अत्यन्त तीव्र गतिमा बगिरहेको निर्मल र स्वच्छ पानी शहरको बीचमा देखेर नदीहरूको देशबाट आएको तर सधैं नै पानीका लागि काकाकुल भएर बस्नुपर्ने म जस्तो आफैंमा अभिशप्त मान्छेलाई त्यो सुन्दर वातावरण पाएर आनन्द लाग्नु स्वाभाविकै थियो। प्रकृतिले दिएर पनि भाग्यले ठगिएका नेपालीहरूलाई त्यो सुन्दर देशमा गएर केही गर्ने प्रेरणा प्राप्त भए पनि नेपाल फर्किने बित्तिकै सबै कुरा बिर्सिएर नियतिको त्यही दुर्गति र अभिशाप भोगेर बाँच्नु सिवाय अरू केही उपाय छैन। सफा तथा चौडा सडकहरू, शिक्षित तथा सभ्य मानिसहरू र शालीन तथा सौम्य व्यवहारबाट सबैको मन जित्ने कला नै त्यहाँका विशेषताहरू रहेछन्।

संयुक्तराष्ट्रसङ्घको सदस्य नहुँदा पनि संयुक्तराष्ट्रसङ्घ अन्तर्गतका महत्त्वपूर्ण

निकायहरूले त्यसै राष्ट्रको भूमिमा कार्यालय खोलेर काम गर्नुबाट पनि त्यस राष्ट्रको र त्यस राष्ट्रका जनताको महत्त्व थाहा हुन्छ । त्यहाँका सडकहरूमा हिँड्ने महिलाहरू पनि अरू पश्चिमी राष्ट्रहरूमा जस्तो खास गरेर ग्रीसमा जस्तो अर्धनग्न अवस्थामा हिँडेका मैले देखेको थिइन । संसारभरिका मानिसहरूको आगमनस्थल र मिलनकेन्द्र भएर पनि केही अपवाद बाहेक सबैको सन्तुलित र समझदारीपूर्ण व्यवहार प्रदर्शित हुन्थ्यो । सायद सभ्य र शालीन स्थलमा पुगेपछि पछौटे राष्ट्रहरूबाट आएका मान्छेहरूलाई पनि सुसंस्कृत र शालीन व्यवहार गर्न प्रेरणा प्राप्त हुने रहेछ ।

विशाल तालको निर्मल पानीको छातीमा रातको बत्तीले झिलिमिली भएको सम्पूर्ण जेनेभा नगरी निर्मल तालभित्र पौडी खेलिरहेको जस्तो देखिन्थ्यो । तालको मध्यभागबाट निस्किएर आकाशको नीलो छातीलाई अङ्कमाल गर्दै मानवनिर्मित गगनचुम्बी फोहोराहरू आकाश ताकेर झरझराइरहेका देखिन्थे । त्यसबाट निस्किएका जलका असङ्ख्य ससाना कणहरूले हावाको रथमा सवार भएर तालको किनारमा परिभ्रमण गर्ने पर्यटक र आगन्तुक यात्रीहरूलाई स्वागत गर्दै स्वर्गीय शीतलता प्रदान गरिरहेका अनुभूति हुन्थ्यो । विशाल तालको सौन्दर्य, निर्मल पानीमा प्रतिबिम्बित जेनेभा शहरको मनमोहक छवि, उन्नत फोहराहरूका शीतल जलका कणहरूबाट अभिषिक्त नवयुवायुवतीहरूको जमात र जता हेर्‍यो उतै हेरिरहुँ जस्तो लाग्ने जेनेभा नगरीको त्यो आकर्षक परिवेशले सबैलाई मोहनी लगाउने गर्दोरहेछ । अझ म जस्तो पहिलो पटक जेनेभा पुगेको अनाडी र बेला न कुबेला भावुक भएर कविता लेख्न मन पराउने भुलक्कड व्यक्तिको त के कुरा गर्ने ?



जेनेभाको केन्द्रस्थलमा रहेको मनमोहक तथा गगनचुम्बी फोहरासहितको तलाउको छेउमा लेखक

त्यस रात शुक्लपक्षका पूर्णिमाका चन्द्रमाको अपूर्व कान्तिको छटा तलाउको पूर्वपट्टिका डाँडाबाट निर्मल तलाउमा परेर त्यो तलाउलाई त्यसले अत्यन्त शोभायमान बनाइरहेको देखिन्थ्यो । जेनेभा शहर र त्यस तलाउको

सौन्दर्य अभिवृद्धिका लागि नै डाँडामाथि जाज्वल्यमान चन्द्रमा टाँगेर प्रकृतिले राखेको जस्तो मलाई लागेको थियो । जेनेभाको मुटुमा रहेको त्यो सुशान्त, सौम्य तथा निर्मल तालको अनुपम सौन्दर्यमा मुग्ध हुँदै राती अबेरसम्म त्यहीँ बसेर हामीहरू होटेल फर्किएका थियौँ ।



स्वीट्जरल्याण्डको सुन्दर शहर जेनेभाको केन्द्रस्थलमा रहेको रमणीय तलाउका किनारामा लेखक

२०५९ साल श्रावण ६ गते तदनुसार जुलाई १३ तारिखका दिन सबेरै उठेर बिहानको जेनेभा नगरीको प्रदूषणमुक्त शहर तथा निर्मल तालको सौन्दर्य अवलोकन गर्न फेरि ट्राममा चढेर हामीहरू गएका थियौँ । त्यहाँको आर्थिक जीवनस्तर अत्यन्त उठेको र जे पनि महँगो भएको हुँदा म जस्तो नेपालीले त्यहाँ किनमेल गर्न सक्नु असम्भवै थियो । ट्याक्सी र ट्राम लगायतका सवारीका साधनहरू अत्यन्त महँगा थिए भने अन्य दैनिक उपभोगका सामानहरू पनि महँगा नै थिए । विश्वमा घडी निर्मातामा सर्वश्रेष्ठ भनेर नाम कमाएको त्यो देशमा घडी पनि अत्यन्त महँगा हुँदारहेछन् । तिनै स्विस् घडीहरू बरू नेपालमा नै सस्तो मूल्यमा पाइन्छन् ।

त्यसै दिन ज्यूरिक जाने ट्रेनको टिकट लिनका लागि ट्राम चढेर कोर्नाभिन (Cornavin) भन्ने ठाउँमा हामीहरू गएका थियौँ । प्रत्येक घण्टाको अन्तरालमा रातदिनै जेनेभाबाट ज्यूरिक ट्रेन जाने भएकाले अर्को दिन बिहानमात्रै ज्यूरिक जाने निश्चय गरेर होटेलमा एक रातका लागि अरू भाडा तिरेर अर्थात् जुलाई २३ को रात पनि जेनेभामै बस्ने हामीहरूले निश्चय गरेका थियौँ । पहिलेको कार्यक्रम अनुसार जेनभामा जुलाई २२ तारिखको एक रातमात्र बस्ने कार्यक्रम थियो । हामीहरूलाई दिनभरि फुर्सद भएको हुँदा विश्वस्काउटको जेनेभास्थित केन्द्रीय कार्यालयमा गएर सबैसँग हामीहरूले भेटघाट गरेका थियौँ । त्यहाँ केही उपहारहरूका साथै नेपाल



विश्वस्काउटको जेनेभास्थित केन्द्रीय कार्यालय भवन र जेनेभाको बीचमा रहेको सालिकको अगाडि लेखक

स्काउटको स्वर्णजयन्तीका अवसरमा प्रकाशित स्मारिकासमेत समर्पण गरिएको थियो । त्यस दिन अपराह्न जेनेभा बजारका विभिन्न स्थानहरूको भ्रमण गर्नुका साथै पुनः उक्त मनमोहक तालमा गएर घुम्नाका साथै त्यहाँ विभिन्न तस्वीरहरूसमेत हामीहरूले लिएका थियौँ । अङ्ग्रेज कवि Thomas Hardy को "Far from the madding crowd" लाई आत्मसात् गर्दै सबै सांसारिक झन्झटहरूलाई बिर्सिएर एक छिन भए पनि मैले त्यहाँ आनन्द लिने प्रयास गरेको थिएँ । आनन्द भनेको बाहिर नपाइने आफैँभित्र पाइने हुँदा त्यो पनि व्यर्थको प्रयासमात्रै मैले त्यस बेला सम्झिएको थिएँ । महाकवि लक्ष्मीप्रसाद देवकोटको "खोज्छन् सबै सुख भनी सुख त्यो कहाँ छ । आफू मिटाइ अरूलाई दिनु जहाँ छ । तर्कन्न त्यो रुखमुनि जुन साथ मिल्छ" भन्ने कविता मैले संझिएको थिएँ । त्यस पछि हामीहरू घुम्दै हल्लिँदै जेनेभाका दक्षिण, पश्चिम र पूर्वतिरका अत्यन्त सुन्दर तथा श्यामल वृक्षविरुवाहरूले सुशोभित डाँडाहरू र पर्वतशृङ्खलाहरूलाई हेर्दै होटेलमा फर्किएका थियौँ ।



जेनेभाको मनमोहक तलाउका किनारमा अवस्थित रमणीय भवनहरूका बीचमा लेखक

२०५९ साल श्रावण ७ गते तदनुसार सन् २००२ जुलाई २४ तारिखका दिन सबेरै हामीहरू उठेर नित्यकर्म समाप्त गरी होटेल कार्मेनबाट बिहान ५ बजे चेक आउट गरेर बाहिर निस्किएका थियौँ । ट्राम चढेर कोर्नाभिन पुगेर ज्यूरिकविमानस्थलका लागि ट्रेनको टिकट लिएर बिहान ६.३० बजे अत्यन्त सुन्दर, सफा र सुविधायुक्त ट्रेनको माथिल्लो तल्लामा बसेर ज्यूरिकतर्फ प्रस्थान गर्न हामीहरू उद्यत भएका थियौँ । मैले विश्वका धेरै ठाउँहरूमा घुम्दा पनि दुई तले ट्रेनमा भने चढेको थिइन । माथिल्लो तलामा बसेर झ्यालबाट बाहिर हेर्दा हवाइजहाजमा चढेजस्तै मलाई अनुभूति भएको थियो । हामीहरू चढेको ट्रेन जेनेभाको छातीमा रहेको विशाल तथा निर्मल तालको पश्चिमी किनाराबाट लुँजातर्फ आरामका साथ बिस्तारै गुडिरहेको थियो । पूर्वबाट भर्खरै झुल्किएको बिहानीपखको सूर्यको मधुरो प्रकाश बादलको पातलो पर्दाबाट छानिएर तलाउका पानीमा प्रतिबिम्बित भइरहेको

थियो । तलाउका वरिपरि देखिने घना वृक्षयुक्त सुन्दर पहाडहरूले तालको सौन्दर्यलाई झन् बढाइरहेका थिए ।

हामीहरू चढेको ट्रेनका दुवैतिर सस्यश्यामला भूमि, हरिया वृक्ष र किसानका मनोरम घरबारीहरू देखिन्थे । राम्रो पङ्क्ति मिलाएर बनाइएका राता टायलका छाना भएका मनोरम घरहरू दुवैतर्फ थिए । कुशलताका साथ गरिएको उन्नत वैज्ञानिक खेतीबाट सप्रिएका किसानका बारीहरूमा बोटबिरुवाहरू लहलह देखिन्थे । सूर्यले बादलको घुम्टोभित्रबाट कहिले चियाएर धरतीतर्फ हेर्ने र कहिले भने लुक्ने काम गरिरहेका थिए । हामीहरू फ्रान्सको पश्चिमी सीमालाई बिस्तारै छाडेर पूर्वतिर गइरहेका थियौँ । उत्तरतिरका अग्लाअग्ला सुन्दर पहाडहरू मैले ट्रेनको झ्यालबाट देखिरहेको थिएँ ।

बिहान ७ बजे हामीहरू चढेको ट्रेन लुँजामा पुगेर रोकिएको थियो । त्यहाँ केही यात्रीहरू ट्रेनबाट ओर्लिएका थिए र केही यात्रीहरू ट्रेनमा चढेका थिए । क्षणमा भेट्ने र फेरि छुट्टिने संसारको क्रम त्यहाँ पनि लागू भएको थियो । लुँजासम्म पुग्दा पनि विशाल तालको एक छेउ देखिइरहेकै थियो । तालको पूर्वी भाग, ताल वरिपरि पर्वतका फेदीमा बसेका सुन्दर गाउँहरू र नगरहरू म देखिरहेको थिएँ । भिरालोजस्तो जमीनका दुवै किनारामा बसेका बस्तीहरू अत्यन्त सुन्दर देखिन्थे । लहर मिलाएर लगाइएका अङ्गुरका लहलह परेका लहराहरू तहैतह मिलाएर गरिएको खेतीको सौन्दर्यले पनि स्वीट्जरल्याण्डको सुन्दर कलात्मक भूमि अझ सुन्दर देखिन्थ्यो । ठाउँठाउँमा ठिक्कका हरिया घना वृक्षका पङ्क्तिहरू, कतै वैज्ञानिक खेतीपाती र बीचबीचमा बनेका किसानका सुन्दर घरहरू साँच्चै आकर्षक देखिन्थे । घरपालुवा भेडा, गाई र अन्य पशुपक्षीहरू पनि ट्रेनबाट मैले देखेको थिएँ । जता हेर्‍यो उतै सुन्दरताको राज्य त्यस धरतीमा हेरेर भ्याउन सकिने कुरै थिएन । आँखालाई अत्यन्त आनन्द र मनलाई त्यस धरतीको अवलोकनले शान्ति प्रदान गरिरहेको थियो । हामीहरू चढेको त्यो ट्रेन कहिले डाँडामाथि चढेर घुम्दथ्यो भने कहिले खोँच र खोल्सातिर झर्दथ्यो । कहिले सुरुङको भित्रबाट छिरेर आफ्नू गन्तव्यतिर दौडन्थ्यो ।

त्यसपछि जेनेभाको विशाल तालको छेउ पनि देखिन छाडिसकेको

थियो । हामीहरूलाई ज्यूरिकविमानस्थलमा पुऱ्याउन त्यो ट्रेन भूमिको भित्री भागतर्फ पसिरहेको थियो । हामीहरू चढेको त्यो ट्रेन कहिले बिस्तारै कम्मर बङ्ग्याउँदै नक्कल पारेर नृत्य गर्दै हिंड्ने गदथ्यो । टाढाटाढाका सुन्दर डाँडाहरूमा बिजुलीका, टेलिभिजनका, टेलिफोनका र त्यस्तै अरू पनि थुप्रै टावरहरू म देखिरहेको थिएँ । सुन्दर ट्रेनमा सवार भएर हराभरा धरतीको छातीमा गुडिरहँदा मलाई सपनाजस्तो अनुभूति भएको थियो । जति टाढासम्म हेरे पनि सुन्दर सस्यश्यामला धरतीको पत्रैपत्र मैले देखेको थिएँ । कविको कल्पनामा वर्णित मनमोहक र तिलस्मी साहित्यको संसारजस्तो जादूमय भूमि भूस्वर्ग स्वीट्जरल्यान्डको पावन धरतीमा नै म त्यस बेला हराइरहेको थिएँ ।

नेपालका हाम्रा नेताहरू पनि नेपाललाई स्वीट्जरल्यान्ड जस्तो सुन्दर बनाउने भनेर भाषण गर्दछन्, जनतालाई सपना बाँड्दछन् र मत पाएर विजयी पनि हुन्छन् । शक्ति प्राप्त गरेपछि भने सबै कुरा बिर्सिएर आफ्नै लागिमात्रै स्वीट्जरल्यान्डको धरती रोज्दछन् । देशलाई स्वीट्जरल्यान्ड जस्तो विकसित बनाउने प्रयास छोडेर आफूले कमाएको धन स्वीट्जरल्यान्डका ब्याङ्कहरूमा राखेर जीवन सुखसँग बिताउने गर्दछन् । के नेताहरूले नेपाललाई स्वीट्जरल्यान्डजस्तै बनाउने भनेर वाचा गरेको त्यही हो त ? आफूमात्रै त्यस धरतीमा गएर आनन्द मनाउने ? होइन भने नेपालको उस्तै धरती किन हामीले उन्नत बनाउन सकेनौं र सधैं परमुखापेक्षी भएर बाँच्न किन वाध्य भएका छौं ? आज विकासोन्मुख राष्ट्रका धेरै नेताहरूले आफ्नू देशलाई स्वीट्जरल्यान्ड बनाउनुको साटो देशको धन लुटेर लगेर स्वीस्ब्याङ्कमा राखेर देशलाई ठगिरहेका छन् । चाहे इरानका पूर्वराजा शाह हुन्, चाहे फिलिप्पिन्सका पूर्वराष्ट्रपति फर्डिनान्ड मार्कोस वा इन्डोनेशियाका पूर्वराष्ट्रपति सुहार्तो नै हुन् । तिनीहरू सबैले आफ्नू देश लूटेर त्यसै देशमा सम्पत्ति लगेर थुपारेका थिए । अरू धेरै ज्ञात अज्ञात व्यक्तिहरूले पनि यस्तै गरेका होलान् । हाम्रो गरीब देशका धनी नेता वा सम्भ्रान्त व्यक्तिहरूले पनि नेपालको सम्पत्ति लगेर स्वीस्ब्याङ्कमा राखेका होलान् । त्यो सम्पत्ति फर्काएर नेपालमा लान सके पनि हाम्रो नेपाललाई उन्नत तथा विकसित बनाउने हाम्रो सपना कालान्तरमा पूरा हुने थियो कि ?

माथिका पङ्क्तिहरू लेख्तालेख्तै त्यसबेला नेपालमा चलिरहेको आतङ्ककारी माओवादीको वर्वरतापूर्ण क्रियाकलाप हठात् मैले सम्झिएको थिएँ । कालान्तरमा नेपाल स्वीट्जरल्यान्ड बन्न सक्ने मेरो कल्पना पनि त्यसबाट चूर्णचूर्ण भएर छरिएको थियो । म झल्याँस्स कल्पनाको संसारबाट बिउँझिएको थिएँ । मेरो कल्पना सोम शर्माका बाबुको सपनामा सातुको घैंटो फुटेर सातु छरिएजस्तै गरेर छरिएको थियो । नेपाल स्वीट्जरल्यान्डजस्तो बन्ने सुदूर भविष्यको कल्पना पनि मेरो भत्किएको थियो । निराश हुँदै ज्यूरिकतर्फ जानलागेको त्यही सुन्दर ट्रेनबाट बाहिरको मनोरम दृश्यावली हेर्दै हृदयमा उठेको अग्निको ज्वालालाई शान्त पार्ने प्रयास म गरिरहेको थिएँ ।

त्यसरी मैले कल्पना गर्दागर्दै हामीहरू चढेको ट्रेन बर्नमा पुगेको थियो । बर्न स्वीट्जरल्यान्डको राजधानी भएको हुँदा त्यहाँ ठूलो स्टेशन रहेछ । त्यहाँ निकै बेर ट्रेन रोकिएर ज्यूरिकतर्फ बढेको थियो । सुन्दर पहाडी नदी, सुन्दर शहर, चारैतर्फ वनजङ्गल र हरियाली भएको बर्न शहर अत्यन्त सुन्दर देखिन्थ्यो । लामू सुरुङबाट ट्रेन छिरेर अगाडि बढेको थियो । त्यो अँध्यारो सुरुङ निस्पट्ट कालो गुफाजस्तो देखिन्थ्यो । भित्रभित्रै जमीन र पर्वतमुनिबाट हामीहरू हिँडिरहेका थियौँ । हामीहरू चढेको ट्रेन कहिले सुरुङबाट बाहिर निस्कन्थ्यो र कहिले फेरि धरतीको अँध्यारो गुफाभित्र पसेर लुकामारी खेल्ने गर्दथ्यो ।

नजिकैको विशाल राजमार्गमा बस र कारहरू दौडिरहेका देखिन्थे । ठिक्कका र चिटिक्क परेका धूपीका र नाम थाहा नभएका थुप्रै थुप्रै वृक्षहरूको घना जङ्गल सर्वत्र देखिन्थ्यो । सर्वत्र राम्रा घर र घरहरूका प्राङ्गणमा मनोरम फूलबारी पनि मैले देखेको थिएँ । कतै पाकेको गहुँको खेती देखिन्थ्यो भने कतै लहलह जौ, आलु, अङ्गुर र नचिनेका थुप्रै थरीका बालीनालीहरू पनि देखिन्थे । नहर लाग्न नसक्ने भिरालो जमीनमा गरिने खेतीका लागि पानीको के कस्तो व्यवस्था होला भनेर मेरो मनमा जिज्ञासा पैदा भइरहेको थियो तर त्यहाँ सोध्न पाइँदैनथ्यो, किनभने कसैले पनि अङ्ग्रेजीमा जबाफ नै दिन सक्तैनथे । आफ्नू जिज्ञासा आफैँसँग राखेर म हिँडिरहेको थिएँ । खेती अत्यन्त उन्नत र सप्रिएको लहलह भएको हुँदा

भिरालो जमीन भए पनि सिञ्चाइको व्यवस्था अवश्य नै हुनुपर्ने अनुमान मैले गरेको थिएँ ।

स्वीट्जरल्यान्डको धरती अत्यन्त मिलेको उर्वर देखिन्थ्यो । ठिक्क उचाइ भएका हराभरा डाँडाहरू, सामान्य प्रवाह भएका नदीनाला र झरनाहरू, डरलाग्दा भीरपाखाहरू नभएको र मिलेको सामान्य भूमि भएको हुँदा खेती, पशुपालन, उद्योगधन्दा, वनपालन गर्न र जडीबुटीसमेत लगाउन सकिने अत्यन्त रसिलो अनुपम भूमि देखिन्थ्यो । सदावहार जङ्गल, रुखपात र आल्प्स्को पर्वतमालाबाट अनवरत बगिरहने नदी र झरनाको कारणबाट स्वीट्जरल्यान्ड प्रकृतिको वरदपुत्रकारूपमा संपोषित र परिवर्धित भएको रहेछ ।

नेपालजस्तै भूपरिवेष्टित देश भएर पनि असल छिमेकीहरूको सकारात्मक सहयोग प्राप्त भइरहेको हुँदा समुद्रको निकास नभएको दुःखद परिस्थिति नेपालले जस्तो स्वट्जरल्यान्डले भोग्नु परेको रहेनछ । संसारमा सबभन्दा बढी प्रतिव्यक्ति आय भएको स्वीट्जरल्यान्ड विश्वको नमुना राष्ट्र भएर बाँचेको छ । अरू राष्ट्रभन्दा अलग अस्तित्व कायम गरेर तर सबैसँग मिलेर बस्न यो सफल भएको छ । अत्यन्त संयमित र सन्तुलितरूपमा त्यस राष्ट्रलाई उन्नति र शान्तिको मार्गमा अग्रसर गराएर संसारको नमुना राष्ट्र बनाउन सफल त्यस राष्ट्रका नेताहरूको सिको हाम्रो जस्तो पछौटे तथा भूपरिवेष्टित सानो राष्ट्रका नेताहरूले पनि गर्नु पर्ने हो ।

अब केवल सगरमाथा, हिमाल र बुद्धको नाममात्र लिएर उन्नति गर्ने र जीवित रहने समय जान लागिसकेको छ । कसले संझाउने हाम्रा नेता र राष्ट्रनिर्माताहरूलाई ? त्यही कुरा शोच्ताशोच्तै र लेख्तालेख्तै म जेनेभाबाट बिहान ६.३० बजे प्रस्थान गरेर क्रमशः लुजाँ, फ्रीबर्ग, बर्न, शोलुथन, ओल्टेन, अराऊ आदि स्टेशनहरूहुँदै ज्यूरिक आइपुगेको थिएँ । मेरा साथमा श्रीरवीन्द्रप्रसाद पाण्डे पनि थिए । ज्यूरिक ट्रेनस्टेशन फराकिलो रहेछ । त्यहाँबाट धेरैतिर ट्रेनहरू जाने र आउने भएका हुँदा फराकिलो स्टेशन, धेरै ट्रेनहरू र यात्रीहरूको पनि निकै भीडभाड हुँदोरहेछ । एक छिन त्यो ट्रेन त्यहाँ रोकिएर ज्यूरिकविमानस्थलतर्फ बिस्तारै बढेको थियो ।

त्यसरी जेनेभाबाट प्रस्थान गरेर ज्यूरिकविमानस्थलको टर्मिनल भवनको

भुइँतलामा गएर हामी चढेको ट्रेन रोकिएको थियो।  त्यहाँबाट हामीहरू ४ तलामाथि लिफ्टबाट चढेका थियौँ। हामीहरू त्यहाँ निर्धारित समयभन्दा पहिले नै पुगेको हुँदा Check in को समय भइसकेको थिएन। केही समय प्रतीक्षा गरेपछि काउन्टर खुल्यो र हामीहरू Check in गरेर भित्र पसेका थियौँ। त्यसपछि हामीसँग प्रशस्त समय भएको हुँदा चारैतिर घुमेर हामीहरूले हेरेका थियौँ। घरमा कोशेली ल्याउन टर्मिनल भवनभित्रकै पसलहरूमा मिठाइ र चकलेट हामीहरूले खरिद गरेका थियौँ। आउँदा मैले ज्यूरिक शहरलाई ट्रेनबाटै देखेको थिएँ। त्यसैकारण समय भएर पनि ज्यूरिक शहरको भ्रमण गर्ने विचार मैले छाडिदिएको थिएँ। जेनेभा शहर घुमिसकेपछि ज्यूरिक शहर घुम्नुको कुनै आकर्षण थिएन भन्ने मैले ठानेको थिएँ।

त्योभन्दा पहिले संवत् २०५५ साल फागुनमा पनि अष्ट्रिया जाने सन्दर्भमा म ज्यूरिक पुगेको थिएँ। स्वीट्जरल्यान्डका शहरहरूमा ग्रीष्मऋतुको प्रचण्ड गर्मीमा पनि दिनमा केही गर्मीजस्तो लागे तापनि बिहान, बेलुका र रातमा भने जाडो नै हुने रहेछ। दिनहरू अत्यन्त रमाइला हुँदा रहेछन्। म जस्तो नेपालको हावापानी, खासगरेर काठमाडौँको हावापानीमा हुर्किएको मान्छेलाई त ग्रीसको गर्मीमा टिक्न नै गाह्रो परेको थियो। हामीहरू अध्यागमन कार्यालयबाट पार हुँदै हाम्रालागि जहाज चढ्न निर्धारण गरिएको ढोका नम्बर बी ३१ मा गएका थियौँ। अपराह्न २.२० बजे हामीहरूलाई जहाजभित्र बोलाइएको थियो। हामीहरू पङ्क्तिबद्ध भएर जहाजभित्र प्रवेश गरेका थियौँ। बोइङ कम्पनीको ७४७ जम्बो जेट अत्यन्त विशाल दुई तले थियो। हामीहरूलाई ६९ नं. को पङ्क्तिमा बस्ने सीटहरू दिइएका थिए। जुन सीटहरू पछाडिबाट तेस्रो पङ्क्तिमा पर्दथे। हामीहरू निर्धारित समयभन्दा पनि दुई घण्टा पहिले Chech in गर्न पुग्दा पनि हामीहरूलाई त्यति पछाडि स्थान दिएको देख्दा मलाई आश्चर्य लागेको थियो। जे भए तापनि हामीहरू तिनै सीटहरूमा गएर बसेका थियौँ।

उक्त जहाज निर्धारित समय अपराह्न २.४५ बजे अत्यन्त गर्जनाका साथ ज्यूरिक विमानस्थलबाट ठाडै ठडिएर उडेको थियो। जहाजबाट हेर्दा ज्यूरिक शहर अत्यन्त सुन्दर देखिन्थ्यो। जहाज उडेर उचाइ लिँदै बादलभन्दा माथि पुगेको थियो। धरतीलाई बादलले पूर्णरूपमा ढाकेको हुँदा त्यसपछि

मैले कुनै पनि तलका दृश्यहरू देख्न पाएको थिइन। वायुको भुमरीभित्र परेर बेला बेलामा जहाज अत्यन्त हल्लिने गर्दथ्यो। कहिलेकाहीँ त कैयौँ हजार फीट तलसम्म जहाज झर्दथ्यो। त्यसरी बादल र हावाको थप्पडमा परेर हवाइजहाज तल र माथि गर्दा मलाई धेरै वर्ष अगाडि त्यसै आल्प्स् पर्वतशृङ्खलामा हवाइजहाज दुर्घटना भएर मृत्यु भएका पब्लिकसाइन्सकलेज लैनचौरका श्रीअमृतप्रसाद प्रधानको एक्कासी सम्झना भएको थियो। हवाइजहाज तलमाथि गर्दै ब्ल्याकसीलाई काटेर अगाडि बढेर सुस्थिर गतिमा उड्न थालेको थियो। आकाशलाई बादलले ढाकेको हुँदा बाहिर केही देखिँदैनथ्यो। बिस्तारै रात पनि पर्दैगएको थियो। जहाजभित्र बत्ती बालिएका थिए र हामीहरूलाई खाना पनि खुवाउन थालिएको थियो। म शाकाहारी भएको हुँदा खास मेरा लागि खानाको व्यवस्था थिएन। पाउरोटी र नौनीघिउबाटमात्रै मैले चित्त बुझाउनु परेको थियो।

त्यस समयमा हवाइजहाजबाट बाहिर केही नदेखिए तापनि जहाजभित्रको मनिटर हेर्दा हामीहरू ३७००० फीटको माथिबाट टर्की, इराक र इरानलाई पार गरेर मध्यपूर्वको आकाशमा उडिरहेका थियौँ। त्यसपछि अफगानिस्तान र पाकिस्तानको धरतीलाई नाघ्दै क्रमशः दिल्ली र काठमाडौंको बीचबाट बङ्गलादेशको माथि हुँदै थाईल्याण्डको ब्याङ्कक विमानस्थलमा पुगेर २५ जुलाईका दिन बिहान स्थानीय समय अनुसार ६.०० बजे हामीहरू विमानबाट उत्रिएका थियौँ।

त्यसपछि नेपाल जाने हवाइजहाजको प्रतीक्षामा प्रतीक्षालयमा गएर हामीहरू चारघण्टाभन्दा बढी समयसम्म कुरेर बसेका थियौँ। हामीहरू फेरि त्यहाँबाट पनि थाईएयरलाइन्सकै हवाइजहाजमा चढेर काठमाडौं फर्कनको लागि बिहान १०.४० बजे Check in गरेर हवाइजहाजभित्र पसेका थियौँ। केही ढिला गरेरमात्रै हामीहरूलाई हवाइजहाजभित्र बोलाइएको थियो। स्थानीय समय अनुसार ११.३० बजे हामी नेपाल आउने यात्रीहरूलाई लिएर ब्याङ्ककबाट थाईएयरलाइन्सको एयरबस काठमाडौंतर्फ उडेको थियो। ३७००० फीटमाथिबाट हामीहरूलाई लिएर उक्त जहाजले क्रमशः थाईल्याण्ड, म्यान्मार, बङ्गलादेश र भारतको भूमिसमेत पार गर्दै नेपाल प्रवेश गरेको थियो। हामीहरू दुई हप्ता अगाडि त्यही बाटो त्यसै गरी

काठमाडौंबाट गएका थियौं भने त्यस दिन फेरि त्यही बाटो त्यसै गरी काठमाडौं फर्किएका थियौं । उड्दाउड्दै महाभारतको डाँडामा आइपुगेपछि हवाइजहाजले निकै हल्लाएको थियो ।

त्यसरी हवाइजहाजमा स्वीट्जरल्यान्डको ज्यूरिकदेखि १२ घण्टा लगातार उड्नुपरेको हुँदा मेरा खुट्टाहरू सुन्निएर मलाई असह्य वेदना हुन थालेको थियो । रातको अनिदो, उपयुक्त खानाको अभाव र हवाइजहाजमा बस्दाखेरिको असुविधासमेतले गर्दा म एक किसिमले बिरामीजस्तै भइसकेको थिएँ । मलाई ग्रीसदेखि नै ग्यास्ट्रिकले दुःख दिइरहेको थियो । कहिले कुन बेला तल जमीनमा झरेर गोडा सोझ्याउनु जस्तो मलाई भइरहेको थियो । अझ त्यसमाथि हवाइजहाजको भयङ्कर बम्पिङले गर्दा मानसिक दुःख पनि मलाई भएको थियो ।

त्यसरी शारीरिक र मानसिक दुवै दुःखहरू सहँदै म २०५९ साल श्रावण ९ गते बिहिबार तदनुसार सन् २००२ जुलाई २५ तारिखका दिन काठमाडौंको त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा आएर जहाजबाट उत्रिएको थिएँ । हवाइजहाजको लामू उडानपछि धरतीमा टेक्दा मलाई जुन अनुभूति भएको थियो त्यो अनुभूति मैले तुरुन्तै कवितामा व्यक्त गरेको थिएँ । जो यस अनुसार छ :-

हे धर्तिमाता ! जति दूर भागौँ । आकाश ताकी जति दूर लागौँ ॥
जाऊँ जहाँ अन्तिम फर्किआइ । म बस्छु तिम्रै पदमा रमाई ॥
लागेँ म टाढा अति दूर लागेँ । यद्वा म आफैँसँग दूर भागेँ ॥
म लाउँदै नित्य छु आत्मपासो । पोखौँ गई कोसँग यो गुनासो ॥
गर्दै बहाना म थरीथरीका । चाहन्छु के के जगतै भरीका ॥
बिर्सेर सत्कार्यहरू समस्त । घुमेर चारैतिर हुन्छु मस्त ॥
समुद्रका छालहरू नियाली । गुफाहरूमा पनि दीप बाली ॥
खोजेँ गई सुन्दर देशसम्म । सौन्दर्यको कोष जहाँ छ टम्म ॥
खोजेँ त्यहाँ खोज्नु रहेछ भूल । खोजेँ गई खालि भयो फजूल ॥
टाढा गएँ खूब बनेँ अनाथ । फर्केर आएँ म भएँ सनाथ ॥
हे धर्तिमाता ! जति दूर भागेँ । आकाश ताकी जति दूर लागेँ ॥
आफैँ हराएँ अति नै डराएँ । हे धर्तिमाता ! अब फर्किआएँ ॥

उपर्युक्त अनुसार ग्रीसमा भएको विश्वस्काउटको सम्मेलनमा भाग लिएर फर्किएपछि मैले परिषद् र कार्यसमितिको निर्णय अनुसार सहप्रमुख आयुक्त श्रीराम लामिछानेलाई पदबाट निलम्बन गरी छानविनसमिति गठन गरेर छानविन तथा अनुसन्धानको काम शुरु गराएको थिएँ । ग्रीसबाट फर्किएपछि मलाई पेट र पिशाब पोल्ने रोगले दुःख दिएको थियो । काठमाडौंमा डाक्टरहरूलाई जँचाउँदा राम्रो Diagnosis हुन नसकेपछि उपचारका लागि मैले भेलोर जानुपरेको थियो । त्यसरी भेलोर जाँदा म तलबाट ट्रेनको बाटो जान नसक्ने भएपछि काठमाडौँबाट दिल्लीहुँदै बङ्लोर हवाइजहाजबाट गएको थिएँ । मेरा साथमा भानिज भोला पोखरेल गएका थिए । भेलोरमा औषधी गर्ने क्रममा एउटा अविस्मरणीय घटना भएको हुँदा यहाँ उल्लेख गर्नु सान्दर्भिक ठान्दछु ।

भेलोरमा एक दिन स्वास्थ्योपचार समाप्त गरेपछि खाना खान एउटा शाकाहारी होटलमा भानिजलाई समेत लिएर म गएको थिएँ । त्यहाँ खाना खाएर रकम तिरेर बाहिर बासस्थानतर्फ हामी गएका थियौँ । बासस्थानमा पुगेर हेर्दा भानिजले बोकेको रकम सहितको ब्याग होटेलमै छुटेको थाहा भयो । त्यस ब्यागमा ट्राभलर चेक, पासपोर्ट र नगद रु.७० हजारसमेत राखिएको थियो । त्यति धेरै रकम हराएपछि भेट्न सकिने आशा कमै लिएर हामीहरू फेरि होटलमा ब्याग खोज्न फर्किएका थियौँ । हामीहरूसँग ब्यागमा राखेको रकम बाहेक एक रुपैया पनि साथमा थिएन । हराएको ब्याग र रकम नभेटिएमा हामीहरूलाई काठमाडौँ फर्कनसमेत खर्चको अभाव हुने थियो । तर होटलमा गएर काउन्टरमा मेनेजरसँग सोध्दा मेरो रकम सहितको ब्याग छुन पनि नछोइकन जस्ताको तस्तै राखिदिएको रहेछ । त्यो ब्याग मलाई जिम्मा लगाइदिएका थिए । त्यसप्रकारको उच्च नैतिकता र इमानदारीबाट म अत्यन्त प्रभावित भएको थिएँ । त्यसका लागि मैले पुरस्कार दिन खोज्दा उनले स्वीकार गरेका थिएनन् । त्यसपछि मैले उनलाई हार्दिक धन्यवाद दिँदै कृतज्ञता ज्ञापन गरेको थिएँ । यो घटना मेरो


तत्कालीन युवराज पारसका साथ नेपाल स्काउटमा लेखक

जीवनको नौलो घटना भएको हुँदा यहाँ उल्लेख गरेको हुँ ।

त्यसरी भेलोरको मिशिनरी अस्पतालमा गएर औषधोपचार गरेर काठमाडौँ फर्किएपछि म फेरि कार्यालयमा उपस्थित भएर मैले आफ्नू काम शुरु गरेको थिएँ । त्यस सन्दर्भमा विभिन्न व्यक्तिहरू उपर भ्रष्टाचार र आर्थिक हिनामिनाका सम्बन्धका अनुसन्धान र छानविन गर्ने कामहरू मैले अगाडि बढाएको थिएँ । अनुसन्धान र छानविन गर्दै जाँदा श्रीराम लामिछाने र सुश्री पुष्पलता भट्टराईसमेतले तत्कालीन शिक्षामन्त्री श्रीयोगप्रसाद उपाध्यायका समयमा लग्जेम्बर्गको स्काउटसँग ककनीमा स्काउटका लागि तालीमकेन्द्र बनाउने भनेर शिक्षामन्त्रीकै उपस्थितिमा सम्झौता गरेका रहेछन् । उक्त निर्माणसमितिको संयोजकमा नेपाल स्काउटका तर्फबाट श्रीराम लामिछाने र उपसंयोजकमा सुश्री पुष्पलता भट्टराईलाई राखिएको रहेछ । सो समितिमा श्रीरवीन्द्रप्रसाद पाण्डे र श्रीरामगोपाल कर्माचार्यसमेतलाई राखिएको भए तापनि उनीहरूलाई थाहै नदिई लग्जेम्बर्गको नेपालमा रहेको पाउल भन्ने व्यक्तिसँग मिलेर नेपाल स्काउटको स्वीकृति नै नलिई लाखौँलाख रकम खर्च गरेको देखिन आएको थियो । वास्तवमा तत्कालीन शिक्षामन्त्री श्रीयोगप्रसाद उपाध्यायकी भाञ्जी सुश्री पुष्पलता भट्टराई भएकी हुँदा उनलाई अघि सारेर श्रीराम लामिछानेले उक्त सम्झौता गराएका रहेछन् । त्यसरी नेपाल स्काउटको नाममा श्रीराम लामिछाने र सुश्री पुष्पलता भट्टराईले लग्जेम्बर्गका स्काउटका प्रतिनिधि पाउलसँग मिलोमतो गरेर रकम हिनामिना गर्नेगरेका रहेछन् । सो कुरा अनुसन्धानको क्रममा देखिन आएको थियो ।

त्यस अनुसन्धानपछि निज श्रीराम लामिछानेसमेतलाई कारबाही गर्नुपर्ने देखिएको थियो । सोही कुरा नेपाल स्काउटको कार्यसमिति र राष्ट्रिय परिषद्मा पेश गर्दा हिनामिना गर्नेको नाइके श्रीराम र सम्बन्धित सबै व्यक्तिहरूलाई कारबाही गर्ने निर्णय भएपछि सक्रियताका साथ अरू छानविन गर्ने काम शुरु भएको थियो । निजले आफूलाई जोगाउन नेपालको दरबार, लक्जेम्बर्गको दरबार, प्रधानमन्त्री, शिक्षामन्त्री, लगायतका सबै शक्तिकेन्द्रहरूमा धाएका थिए । तत्कालीन शिक्षामन्त्री श्रीदेवीप्रसाद ओझा, शिक्षासहायकमन्त्री श्रीरवीन्द्र खनाल, युवराज पारसका सचिव डा.फणिराज

पाठक लगायतले श्रीरामलाई जोगाउन ममाथि साम, दान, दण्ड र भेदसमेतका सबै उपायहरू प्रयोग गर्ने दुष्प्रयास गरेका थिए। दरबारको आदेशको आडमा लोभलालचामा परेर श्रीदेवीप्रसाद ओभ्ठाले श्रीरामलाई जोगाउन अत्यन्त प्रयास गरेका थिए। तिनको दुष्प्रयास सफल नहुँदै उनी हटेर शिक्षामन्त्रालयमा श्रीहरिबहादुर बस्नेत मन्त्री भएर गएका थिए। उनले शिक्षामन्त्रालयमा पाइला राख्ने बित्तिकैदेखि दरबारको आदेश भनेर श्रीरामलाई जोगाउन ज्यान दिएर लागिपरेका थिए। निज लामिछानेलाई जोगाउन नेपालका सबै शक्तिकेन्द्रहरू लागेका भए तापनि परिषद् र कार्यसमितिको निर्णय विपरीत निज लामिछानेलाई माफी दिन नसक्ने हुँदा मैले निजलाई निलम्बन गरेर छानविन गर्ने काम जारी नै राखेको थिएँ।

त्यसबेला नेपाल स्काउटको जिल्लास्तरको निर्वाचन समाप्त भएको थियो। तर राष्ट्रियस्तरको निर्वाचन गर्नुपर्ने समय भने आइसकेको थिएन। त्यसैबेला शिक्षामन्त्री श्रीहरिबहादुर बस्नेतले चुनावमा बढी चाख लिएर जानकारी लिन थालेका थिए। उनको त्यो असामान्य गतिविध देखेपछि उनी दरबारको निर्देशनमा नेपाल स्काउटमाथि हस्तक्षेप गर्न तयार भएको मैले शङ्का गरेको थिएँ। त्यसपछि मैले नियमित प्रक्रिया अनुसार नै प्रमुखआयुक्त लगायतका पदाधिकारीहरूको निर्वाचनको कार्यक्रम प्रकाशित गराएको थिएँ।

उक्त कार्यक्रम अनुसार २०६१ साल असार ५ गते राष्ट्रियस्तरको निर्वाचन सम्मपन्न भएको थियो। त्यसैक्रममा प्रमुखआयुक्तको सर्वसम्मतिले निर्वाचन गरेर नेपाल स्काउटको तत्कालीन कानून अनुसार चीफस्काउट शिक्षामन्त्री श्रीहरिबहादुर बस्नेतको स्वीकृतिका लागि शिक्षामन्त्रालयमा पठाइएको थियो। उनले उक्त सर्वसम्मतिबाट निर्वाचित भएका प्रमुखआयुक्तको नियुक्ति गरी पठाउनु पर्नेमा ४ महिनासम्म निर्वाचनको उक्त परिणाम मन्त्रालयमै रोकेर राखेका थिए। अन्त्यमा भ्रष्टाचारको अभियोगमा निलम्बनमा परेर प्रमुखआयुक्तको उमेदवार हुन नै नपाएर अयोग्य ठहरिएका श्रीराम लामिछानेलाई नेपाल स्काउटको प्रमुखआयुक्तमा शिक्षामन्त्री श्रीहरिबहादुर बस्नेतले निर्लज्जतापूर्वक धाँधली गरी पाँडेपजनी गरेका थिए। उनले उक्त गैरकानूनी काम दरबारको निर्देशन र त्यसबेला उनका

तथाकथित सल्लाहकार श्रीखगेन्द्र बस्नेतको सल्लाह अनुसार गरेका थिए। उनले गरेको उक्त गैरकानूनी तथा धाँधलीपूर्ण नियुक्तिबाट नेपाल स्काउटमा विकृतिहरू उत्पन्न हुन जाने प्रष्टरूपमा देखिन आएको थियो।

नेपालमा २००७ सालको प्रजातान्त्रिक आन्दोलन सफल भएदेखि नै संविधानसभाको निर्वाचन गरेर जनप्रतिनिधिहरूले निर्माण गरेको संविधानबाट नै राष्ट्र सञ्चालन गर्ने सपना माओवादीसँग भएको अन्य दलहरूको १२ बुँदे सम्झौता र त्यसपछि भएका विभिन्न सम्झौताबाट पूराभएको थियो। त्यसपछि भएको संविधानसभाको निर्वाचन र संविधानसभाले २०६५ साल असार ४ र ६ गते राष्ट्रपति र उपराष्ट्रपतिको निर्वाचनको साथै प्रधानमन्त्रीको निर्वाचनसमेत पूरा गरेको थियो। यसप्रकार नेपालमा माओवादीको सशस्त्र जनक्रान्तिबाट शुरुभएको राजनीतिक अस्थिरता संविधानसभाको निर्वाचनपछि समाप्त भएजस्तो भएको थियो। तर माओवादी दलको प्रवृत्ति र अरू दलहरूको मिलेर काम गर्न नसक्ने प्रवृत्तिले गर्दा यो शान्तिप्रयास कतिसम्म दिगो हुन्छ ? यसै भन्न सकिँदैन।

राजा ज्ञानेन्द्रको २०६५ साल जेठ २९ गते नारायणहिटी राजदरबारबाट बहिर्गमन भएपछि नेपालको २४० वर्षको शाहवंशीय राजाहरूको कालखण्ड पनि समाप्त भएको थियो। नारायणहिटी राजदरवारलाई तत्कालीन प्रधानमन्त्री श्रीगिरिजाप्रसाद कोइरालाले २०६५ साल असार १ गते राष्ट्रिय सङ्ग्रहालयको रूपमा घोषणा गर्दै अनावरणसमेत गरेका थिए।

२०५५ साल चैत्र २५ गते सरकारी सेवाबाट अवकाश लिएपछि अहिलेसम्म यस्तै सन्दिग्ध वातावरणमा म बाँचिरहेको छु। शुरुकै प्रकरणहरूमा मैले उल्लेख गरे अनुसार सेवाबाट अवकाश लिने बित्तिकै कुनै उपयुक्त काम भेट्टाएको भए गर्ने इच्छा केही मात्रामा मलाई थियो, तर पनि आध्यात्मिक र सामाजिक काममा नै लाग्ने तर्फ मेरो बढी इच्छा थियो। त्यस पछि तत्कालीन विभिन्न सरकारहरूका पालामा मलाई आकर्षक पदका लागि बोलाइएको भए तापनि सबैलाई तिरस्कार गरेर म आफ्नू लक्ष्य तर्फ नै उन्मुख भएको थिएँ।

२०६१ साल माघ १९ गतेपछि राजा ज्ञानेन्द्रले क्रमशः सम्पूर्ण शासन आफ्नू हातमा लिएर मन्त्रिपरिषद्को अध्यक्षसमेत भएर काम गर्न थालेपछि

पनि मलाई विभिन्न ओहदाहरूमा रहेर काम गर्न बोलाइएको थियो । कुनै पनि पदमा बसेर काम गर्न मैले अनिच्छा व्यक्त गरेको थिएँ । आठ दलको सरकारले पनि मबाट काम लिने प्रयास गरेको थियो । म भने कुनै पनि काममा संलग्न भएर यो वृद्धावस्थामा फेरि सांसारिक झन्झटमा फस्ने मनस्थितिमा थिइन र अहिले पनि छैन । मेरा लागि अब सम्पूर्ण पद, पैसा र शक्ति त्याज्य भइसकेका छन् । मेरो एउटामात्रै चाहना नेपालमा शान्ति आओस् र नेपालीहरू शान्तिसँग बाँच्न पाउन् भन्नेमात्रै हो । यसका लागि माओवादी लगायत सबै दलहरूका नेताहरूमा सद्बुद्धि आओस् भनेर म भगवान्सँग प्रार्थना गर्दछु ।

सेवाबाट अवकाश लिएपछि र त्यसभन्दा पहिलेदेखि नै गर्दै आएका केही सामाजिक, धार्मिक र साहित्यसम्बन्धी क्रियाकलापहरूका साथै त्यस बेला गर्न नभ्याइएका व्यावहारिक कामहरूमासमेत मैले संलग्न हुनु परेको थियो र अहिले पनि केहीमात्रामा म संलग्न भइरहेको छु । सो सम्बन्धमा सङ्क्षिप्त विवरण निम्नअनुसार प्रस्तुत गर्नु म सान्दर्भिक ठान्दछु ।

## जयतुसंस्कृतम्मा

जहानियाँ राणाहरूको कडा शासनकालमा २००४ सालमा तीनधारा संस्कृत छात्रावासमा बस्ने संस्कृतका विद्यार्थीहरूले चलाएको अभियानको नाममा यसको स्वर्णजयन्तीको अवसरमा २०५३ सालदेखि सञ्चालन गरिएको संस्थाको नाम जयतुसंस्कृतम् हो । राणाशासनको घोर निष्पट्ट कालरात्रिमा पनि त्यही जयतुसंस्कृतम् अभियानले क्षीण प्रकाशको आभा फैलाएको थियो । त्यसैले बीजारोपण गरेको अभियानले २००७ सालमा नेपालमा प्रजातन्त्र ल्याउन सहयोग पुऱ्याएको थियो । त्यसैको आधारशिलामा खडा भएको जयतुसंस्कृतम् संस्थामा म २०५३ सालदेखि नै संलग्न हुँदै आएको थिएँ । त्यस बेला म सदस्यमात्रै थिएँ भने केही वर्षदेखि संस्थाको उपाध्यक्षसमेत भएर म काम गरिरहेको छु ।

२००४ सालका जयतुसंस्कृतम् अभियानका नायक श्रीभद्र शर्मा त्यस संस्थाका संस्थापक अध्यक्ष थिए भने पछि गएर संरक्षकमात्र भएका

थिए । हाल उनी दिवङ्गत भइसकेका छन् । नेपालमा संस्कृतको संवर्द्धन र संरक्षणका लागि त्यस संस्थामा रहेर मैले हुनेसम्म सहयोग पुऱ्याउने प्रयास गरेको छु ।

नेपाललाई नयाँ अन्तरिम संविधानले धर्मनिरपेक्ष राष्ट्रको रूपमा घोषणा गरेपछि संस्कृत भाषाको गन्तव्य अन्धकारमय भएको छ । संस्कृत भाषाकै विरोध गरेर क्रान्तिकारी हुन खोज्ने केही राजनैतिक दलहरूले संस्कृत भाषालाई सधैँका लागि नेपालबाट बिदा गर्न खोजिरहेका छन् । संस्कृतमा रहेको ज्ञान, विज्ञान, दर्शन, धर्म आदि उदात्त र सार्वजनीन कुराहरूलाई बुझ्न नसक्ने यी राजनीतिक व्यक्तिहरूले संस्कृत भाषाको विरोध गरेर आफ्नै खुट्टामा बञ्चरो हान्ने काम गरिरहेका छन् । दक्षिणपूर्व एशियाका सम्पूर्ण आधुनिक भाषाहरूकी जननी संस्कृत भाषामा नपाइने कुनै विषय पनि छैन । यो भाषा नजानेमा आफ्नै नाम पनि शुद्धसँग उच्चारण गर्न नसक्ने हुँदा शुद्धसँग लेख्न र बोल्नका लागि यो भाषा अनिवार्यरूपमा जान्नु पर्ने देखिन्छ ।

संस्कृत भाषामा लेखिएका वेद, महाभारत, पुराण, धर्मशास्त्र, साहित्य, दर्शन, चिकित्सा आदि विषयका ग्रन्थहरूमा सबै कुराहरू पाइन्छन् । संस्कृत भाषामा जति समृद्ध र परिष्कृत धर्म, दर्शन, साहित्य, विज्ञान र कलाकौशलसमेत समष्टिरूपमा अरू कुनै भाषामा पनि पाउन सकिँदैन । पश्चिमी जगत्का धेरै राष्ट्रहरूले संस्कृत भाषामा लेखिएका वेद, पुराण आदि ग्रन्थहरूबाटै सिकेर आफ्नू राष्ट्रलाई आधुनिकीकरण गरेर समृद्ध पार्न सफल भएका छन्। हाम्रा राजनीतिज्ञहरू भने संस्कृत भाषाको महत्त्वलाई नबुझेर त्यसको नै बिरोध गरिरहेका छन्। यो विडम्बनाको कुरा हो। संस्कृत भाषा नाम अनुसार नै सभ्य तथा सुसंस्कृत व्यक्तिहरूले पढिने भाषा हो । जो मान्छे जति सभ्य र सुसंस्कृत हुँदै जान्छ उसले उति नै संस्कृत भाषा पढेर यस भाषामा अन्तर्निहित ज्ञान, विज्ञान र दर्शनको अगाध समुद्रभित्र पौडी खेलेर ऊ सधैँका लागि धन्यधन्य र कृतकृत्य हुन चाहन्छ ।

पश्चिमी जगत्का म्याक्समुलर, विल्सन, शोपेनहावर आदि विद्वान्हरूले त्यसै गरेका थिए। हाम्रा नेताहरूले संस्कृत भाषाको महत्त्व नै नबुझेर

जति घृणा गरिरहेका छन् त्यति नै बढी माया र आदर पश्चिमी जगत्मा आज संस्कृत भाषाले पाइरहेको छ। धेरैजसो विकसित मुलुकहरूका विश्वविद्यालयहरूमा संस्कृत भाषाको पढाइ हुने गर्दछ। तिनमा पनि खास गरेर अद्वैतदर्शन र साङ्ख्यदर्शनको बढी पढाइ हुने गरेको बुझिन आएको छ। संस्कृत पढेका नेपाली विद्वान्हरूको अहिले पश्चिमी जगत्मा माग भइरहेको छ। नेपालमा भने वर्तमान समयमा संस्कृत भाषा पढाउन पहिलेदेखि स्थापित विद्यालयहरू धमाधम बन्द गरिँदै छन् र संस्कृत पढेका विद्वान्हरूलाई अत्यन्त उपेक्षाका साथ हेर्न थालिएको छ।

त्यसैकारण यस भाषाका विद्वान्हरू अहिले देशबाट नै बिस्तारै बाहिरतर्फ पलायन भइरहेका छन्। यस प्रकारको संस्कृत भाषाको दुरावस्थालाई रोकेर नेपाली भाषा र नेपाली राष्ट्रियताको जगेर्ना गर्नु आज सबै नेपालीको प्रमुख दायित्त्व हुन आएको छ। होइनभने समयले कसैलाई पनि पर्खिँदैन। हामीहरूलाई पश्चिमी भाषा र संस्कृतिको महा भेलले बगाएर अथाह संसारको कुन कुनामा पुऱ्याएर विलीन गराउने हो कसैले भन्न सक्तैन।

## विश्वहिन्दूमहासङ्घमा

संसारभरिका हिन्दूहरूलाई एकै छाता मुनि सुसङ्गठित गर्न र हिन्दूधर्मलाई अन्य धर्महरूको थिचोमिचोबाट जोगाएर राख्न २०३७ सालमा नेपालमा विश्वहिन्दूमहासङ्घको अन्तर्राष्ट्रिय सम्मेलन भएको थियो र त्यसको केन्द्रीय कार्यालय नेपालमै स्थापनासमेत भएको थियो। त्यसबेला नेपालमात्रै विश्वमा एउटा हिन्दूअधिराज्य भएको हुँदा नेपालमा नै विश्वहिन्दूमहासङ्घको केन्द्रीय कार्यालय राख्नुका साथै नेपालीलाई नै यसको अध्यक्षमा निर्वाचितसमेत गरिएको थियो। योगी नरहरिनाथ यस संस्थाका पहिला अध्यक्ष भएका थिए भने त्यसपछि क्रमशः अरू विभिन्न व्यक्तिहरू पनि यस संस्थाका अध्यक्ष भएका थिए।

म यस संस्थामा २०५३ सालदेखि नै सदस्यको रूपमा काम गर्दै आएको थिएँ। यस संस्थाको उद्देश्य अनुरूप जुन गतिमा यस संस्थाले काम गर्न सक्नु पर्दथ्यो सो अनुसार काम गर्न सकेको थिएन। अध्यक्ष भरतकेशर

सिंहले विश्वहिन्दूमहासङ्घका तर्फबाट राजा ज्ञानेन्द्रलाई खुशी पार्न २०६० साल माघ ९ गतेका दिन राजकीय प्रज्ञाप्रतिष्ठान कमलादीमा आयोजना गरिएको एक समारोहमा हिन्दुसम्राट्का रूपमा उनको अभिनन्दन गरेका थिए। अभिनन्दनको समयमा राजा ज्ञानेन्द्रको गोडा धुने र आरती उतार्ने काम नगर्न हामीहरूले जतिसुकै सल्लाह दिएको भए तापनि उनले सो काम गरेरै छाडेका थिए। भरतकेशरको उक्त कामबाट राजा ज्ञानेन्द्रका साथै विश्वहिन्दूमहासङ्घको पनि बदनाम हुन गएको थियो।


वि.हि.म. अन्तर्राष्ट्रियको बैठकमा लेखक

त्यसपछि हिन्दूमहासङ्घ राजाको संस्थाको रूपमा आँखी हुन गएको थियो। नेपालमा माओवादी र सात दलका बीचमा १२ बुँदे सम्झौता भएपछि राजा ज्ञानेन्द्र झन् एकलिँदै गएपछि भरतकेशर सिंहले विश्वहिन्दूमहासङ्घको अन्तर्राष्ट्रिय अध्यक्षको नाताले राजाको पक्षमा त्यस बेला ठाउँ कुठाउँमा बोलिहिँडेका थिए। त्यसबाट पनि विश्वहिन्दूमहासङ्घ राष्ट्रिय र अन्तर्राष्ट्रिय क्षेत्रमा समेत झन् बदनाम भएको थियो। अन्तरिम शासनविधानमा नेपाल राज्यलाई धर्मनिरपेक्ष राज्य भनेर उल्लेख भएपछि विश्वहिन्दू–महासङ्घको प्रभाव चारैतिर झन् घट्तै गएको छ। हाल विश्वहिन्दुमहासङ्घको अन्तर्राराष्ट्रिय समितिको अध्यक्षमा महासेनानी हेमबहादुर कार्की निर्वाचित भएका छन्। त्यसपछि मैले त्यस सङ्घमा कार्यकारी सदस्य भएर काम गर्न छाडिसकेको छु।

# जयेन्द्र सरस्वती स्वर्णमहोत्सवकोषमा

यस संस्थामा संलग्न भएर मैले २०५७ साल माघ २३ गतेदेखि शुरु गरेर २०६४ साल कार्तिक १७ गतेसम्म अध्यक्ष भएर काम गरेको थिएँ। यो संस्था भारतका काञ्चिकामकोटिपीठम्का श्रीशङ्कराचार्यको शुभाशीर्वाद पाएर संस्थापित भएको थियो। उहाँकै सहयोगले सुदूरपश्चिमाञ्चलको धनगढीमा मेडिकल कलेज स्थापना गर्ने उद्देश्य अनुरूप काम भएको थियो

र त्यसको प्रारम्भिक कार्यका रूपमा दुईओटा भवनहरू पनि मेरा कार्यकालमा तयार गरिएका थिए । त्यसका लागि नेपाल सरकारले करिव ८० बिगाहा सरकारी जग्गा उपलब्ध गराएको छ भने कोषका तर्फबाट अरू ८ बिगाहा जग्गासमेत किन्ने काम भएको छ ।

त्यसरी अत्यन्त उत्साहका साथ निर्माणको काम भइरहेकै बेला काञ्चिकामकोटिपीठम्का श्रीशङ्कराचार्यलाई नाना थरीका अभियोगहरू लगाएर त्यहाँको सरकारले थुनामा राखेपछि श्रीशङ्कराचार्यसँग यस कोषको सम्बन्ध पनि विच्छेद हुन गएको थियो । त्यसपछि हामीहरूले अरू दाता र सहयोगी संस्थाहरू खोजेर अस्पताल पूरा गर्ने हरसम्भव प्रयास गरेका थियौं । त्यस समयमा नेपालको शान्तिसुरक्षाको स्थिति अत्यन्त खराब भएको कारण स्वदेशी तथा विदेशी कुनै पनि संस्था धनगढीमा गएर काम गर्न इच्छुक नभएपछि सो काम त्यसै रोकिएर रहन गएको थियो । मेरो कार्यकाल समाप्त भएर मेरा ठाउँमा डा. चेतराज पन्त निर्वाचित भएका थिए । उनले आफ्नू कार्यकालमा त्यो अधुरो कार्यलाई पूरा गर्नेछन् भन्ने मैले आशा एवं विश्वास लिएको छु ।

# श्रीराजर्षिजनकस्मृतिकोषमा

यस कोषको स्थापना २०५४ साल कार्तिक १ गतेका दिन मेरो अध्यक्षतामा गरिएको थियो । २०५५ साल मङ्सिर १४ गतेसम्म यस कोषलाई विनादर्ता नै सञ्चालन गरिएको थियो भने २०५५ साल मङ्सिर


२०५७ सालको सम्मान प्रा.डा. दीर्घराज घिमिरेलाई अर्पण



२०५९ सालको सम्मान अद्वैत संस्थालाई अर्पण

१४ गते विधिवत्रूपमा जिल्ला प्रशासनकार्यालय काठमाडौंमा दर्ता गराएर सुचारुरूपमा काम सञ्चालन गरिएको थियो । यस कोषका संस्थापकहरूमा

हेमराज ज्ञवाली, श्रीभीमबहादुर अधिकारी, प्रा. श्रीशिवगोपाल रिसाल, श्रीशारदाप्रसाद दाहाल, डा. श्रीगोविन्द टण्डन, प्रा.डा. श्रीऋषिराम पोखरेल र श्रीगोपालप्रसाद भण्डारी लगायतका व्यक्तिहरू थियौँ। यस संस्थाले आफ्नो स्थापनाकालदेखि नै विधान अनुसारका विभिन्न रचनात्मक कामहरू गरिरहेको छ। जसमा कोषको मुखपत्र जनक पत्रिका वार्षिकरूपमा प्रकाशन गर्दै आएको छ। कोषले प्रत्येक अङ्कमा खास एउटा दार्शनिक, हिन्दुधर्मसम्बन्धी वा भक्तिको विषय छानेर विद्वान् लेखकहरूबाट महत्त्वपूर्ण लेखहरू प्राप्त गरेर तिनको प्रकाशन गर्दै आएको छ। त्यसको प्रधान सम्पादकमा म रहेको छु भने सम्पादकहरूमा श्रीहेमराज ज्ञवाली र डा. श्रीगोविन्द टण्डनसमेत हुनुहुन्छ।

त्यसैगरी कोषको विधान अनुसार वार्षिकरूपमा दर्शन, भक्ति र हिन्दुधर्मसम्बन्धी महत्त्वपूर्ण ग्रन्थहरूको पनि यस कोषले प्रकाशन गर्दै आएको छ। त्यसरी प्रकाशित भएका ग्रन्थहरूमा ब्रह्मजिज्ञासा, पशुपतिको सेरोफेरो, वेदस्तुति, ज्ञान र भक्ति, रासपञ्चाध्यायी, सन्तमहिमा र ब्रह्मसाक्षात्कारसमेत छन्। कोषको विधान अनुसार कोषबाट सम्मानित भएका विद्वान् व्यक्ति तथा संस्थाहरूमा डा. स्वामी रामानन्द गिरि, प्रा.डा. दीर्घराज घिमिरे, प्रा. गोपालनिधि तिवारी, अद्वैत संस्था नेपाल, प्रा. शिवगोपाल रिसाल, पं. विष्णुप्रसाद न्यौपाने, स्वामी आत्मानन्द गिरि र स्वामी पुण्यानन्द गिरिसमेत हुनुहुन्छ।

## राष्ट्रिय खेलकूदपरिषद्मा

युवा, खेलकूद तथा संस्कृति मन्त्रालयको सचिवमा नियुक्त भएर काम गरेको कुरा मैले माथि नै उल्लेख गरिसकेको छु। त्यसै समयमा राष्ट्रिय खेलकूदपरिषद्को सदस्य सचिवसमेत भएर काम गर्ने भनेर २०५२ साल कार्तिक २१ गते तत्कालीन मुख्यसचिव डा.श्रीईश्वरप्रसाद उपाध्यायले तत्कालीन मन्त्रिपरिषद्को निर्णय अनुसार मलाई नियुक्तिपत्र दिनुभएको थियो। मैले त्यस


राष्ट्रिय खेलकूद परिषद्मा लेखक

परिषद्मा रहेर २०५३ साल फागुन महिनासम्म काम गरेको थिएँ । मैले जीवनमा सामान्य खेदकूद बाहेक विशेष खेलकूद केही नजानेको भए तापनि प्रारब्धले मलाई राष्ट्रिय खेलकूद परिषद्को सदस्यसचिव बनाएर सन् १९९६ को डिसेम्बर महिनामा भारतको मद्रासमा भएको साफ खेलकूदजस्तो महत्त्वपूर्ण खेलमा नेपालको तर्फबाट Chef de mission भएर जाने मलाई सौभाग्य प्राप्त भएको थियो । सो सम्बन्धी विवरण मैले माथि नै दिइसकेको छु । त्यसैगरेर संयुक्तराज्य अमेरिकाको एटलाण्टामा सन् १९९६ सेप्टेम्बर महिनामा भएको Sentenial Olympic Game मा नेपालको तर्फबाट Chef de mission भएर जाने सौभाग्य पनि मैले पाएको थिएँ। सो सम्बन्धी विस्तृत विवरण पनि मैले माथि नै दिइसकेको छु ।

# साहित्यिक गतिविधिमा

मैले साहित्यको क्षेत्रमा २०१५ सालदेखि नै आफ्नो कलम चलाएको थिएँ । सो सम्बन्धी विवरण पनि मैले माथि नै विस्तृतरूपमा दिइसकेको छु । घरको वातावरण साहित्यिक भएको र काठमाडौँ आएपछि पनि मेरो सम्पर्क कवि शिरोमणि लेखनाथ पौडेल, नाट्यशिरोमणि श्रीबालकृष्ण सम, राष्ट्रकवि श्रीमाधव घिमिरे, कवि भूपी शेरचनलगायतका वरिष्ठ साहित्यकार र महारथीहरूसँग सम्पर्क भएपछि मेरो साहित्यको क्षेत्रमा अझै प्रगति भएको थियो । फलस्वरूप मैले २०२६ सालमा नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानबाट कवितामा स्वर्णपदक र नगदपुरस्कारसमेत प्राप्त गरेको थिएँ ।



नाट्यसम्राट् बालकृष्ण सम र राष्ट्रकवि माधव घिमिरेका बीचमा लेखक, पार्दी, पोखरा, २०२८ साल

त्यस क्रमलाई अघि बढाउँने सन्दर्भमा २०५३ सालदेखि हामी केही साहित्यिक मित्रहरू मिलेर छन्दविधामा लेखिएका कविताहरूलाई प्रोत्साहन दिने दृष्टिकोणले व्यक्तिहरूका निजी घरका कोठाहरूमा कविगोष्ठी गर्ने काम शुरु गरेका थियौं । पालैपालोसँग प्रत्येक काव्यप्रेमी कविहरूका घरमा

कविगोष्ठी नियमितरूपमा हामीले सञ्चालन गर्दै आएका थियौँ । उक्त कविगोष्ठी शुरु भएको एक दशक पूरा भएको हुनाले २०६३ सालमा हामीहरूले त्यसको दशक पनि मनाएका थियौँ । कोठामा बसेर छन्दविधाका सीमित कविहरूका बीचमा कविगोष्ठी गरिने भएको हुँदा त्यसको नाम नै कोठेकविगोष्ठी (को.क.) हुन गएको थियो । मैले पनि आफ्नू निवासस्थानमा र नेपाल स्काउटमा प्रमुख आयुक्त भएर कार्यरत रहँदा धेरै पटक कविगोष्ठीको आयोजना गर्ने सौभाग्य पाएको थिएँ । हाल आएर सो कविगोष्ठी सुचारुरूपमा सञ्चालन हुन सकेको छैन । त्यसका सञ्चालकहरू सबै बिस्तारै वयोवृद्ध हुँदै गएका हुनाले पनि यसमा शिथिलता आएको होला भन्ने मैले ठानेको छु ।



कवि श्रीभूपी शेरचनका साथ कवितागोष्ठीको अवसरमा कुराकानी गर्दै लेखक, तानसेनदरबार, पाल्पा, २०४१

साहित्यको क्षेत्रमा मैले २०१५ सालदेखि नै कलम चलाएको थिएँ । म सिकारु अवस्थामा पद्य र गद्य गरी दुवै विधामा कविताहरू लेख्ने गर्दथेँ । मैले पछि गएर निबन्ध र समीक्षात्मक लेखहरू पनि लेखेको थिएँ । मैले आफ्नू कलम चलाउँदै गएर केही समयपछि खण्डकाव्यहरू पनि सिर्जना गरेको छु । ती मध्ये समीक्षात्मकग्रन्थहरूमा– उसैको लागि र फेरि उसैको लागिको एक समीक्षात्मक कृति २०२६ र ऋतुमन्थन समीक्षात्मकग्रन्थ २०४४ ।

सिकारु अस्थामा लेखिएका गद्यपद्यात्मक कविताहरूको सङ्ग्रह सिर्जनाका फूलहरू २०५१, विविधयात्रा कवितासङ्ग्रह २०५५, यात्रैयात्रा कवितासङ्ग्रह २०५८, पत्रैपत्र, पत्रात्मक कवितासङ्ग्रह २०५८, गीत तथा भजनहरू २०५२ पर्नआउँछन् ।

खण्डकाव्यहरूमा बहादुर शाह खण्डकाव्य २०५२, श्रद्धाञ्जलि खण्डकाव्य २०५२, अमरसिंहको चिट्ठी खण्डकाव्य २०५३, क्रान्तिदूत खण्डकाव्य २०५३, पृथ्वीविजय काव्य २०५८ समेत छन् ।

आध्यात्मिक विषयमा लेखिएका केही पुस्तकहरू ज्ञान र भक्ति २०६३,

रासपञ्चाध्यायी २०६४, ब्रह्मसाक्षात्कार २०६५, ब्रह्मसूत्रसार २०६६ र उपनिषत्सार २०६६ समेत पर्नआउँछन् ।

गद्यसाहित्यमा तीर्थयात्रासम्बन्धी यात्रावृत्तान्त २०६४ र जीवनीपरक अनुस्मृति २०६७ समेत छन् ।

माथि उल्लेख भएका मेरा क्रियाकलापहरू बाहेक मैले अरू पनि विभिन्न सामाजिक तथा धार्मिक संस्थाहरूमा संलग्न भएर काम गरेको थिएँ भने अहिलेसम्म पनि केही संस्थाहरूमा स्वयंसेवीका रूपमा म काम गरिरहेकै छु । मनुष्यको शरीर पूर्वजन्मको असल कर्मको फलबाट नै प्राप्त हुन्छ भन्ने शास्त्रहरूको भनाइ पाइन्छ । खास गरेर गृहस्थाश्रममा बस्ने गृहस्थीहरूले नित्य र नैमित्तिक कर्महरू अनिवार्यरूपमा गर्नुपर्ने नै हुन्छ । भगवान् श्रीकृष्णले गीतामा बताउनु भए अनुसार कर्म नगरीकन कुनै पनि प्राणी रहन सक्तैन । प्राणीहरूमा सर्वश्रेष्ठ मनुष्यले त झन् अहोरात्र मन, वचन र कर्मले समेत काम गरिरहेकै हुन्छ । वर्णाश्रम धर्म अनुसार विद्याध्ययन गरेर गृहस्थाश्रममा प्रवेश गरिसकेपछि अविद्याकामकर्मद्वारा आफ्ना अन्तःकरणमा सञ्चित रहेका वासनाहरूलाई पखालेर चित्त शुद्ध गर्नका लागि पनि निष्काम कर्म गर्नैपर्ने हुन्छ । निष्काम कर्मबाट अन्तःकरणमा रहेको मलदोष नाश भएपछि अन्तःकरण शुद्ध हुन्छ । 'चित्तस्य शुद्धये कर्म न तु वस्तूपलब्धये' भनेर शास्त्रहरूमा उल्लेख भएको पाइन्छ । अन्तःकरण शुद्ध भएपछि त्यहाँ रहेको विक्षेप दोष हटाउन भक्ति गर्नुपर्दछ । भक्तिबाट चित्त स्थिर भएपछि त्यहाँ रहेको आवरण दोषलाई हटाउन ज्ञानको आवश्यकता पर्दछ । भक्तिलाई ज्ञान प्राप्तिका साधनका रूपमा लिइएको छ । शास्त्रहरूमा 'भक्तिर्ज्ञानाय कल्पते' भनेर पनि उल्लेख गरेको पाइन्छ । आवरण दोष नहटेसम्म ब्रह्मप्राप्ति हुन असम्भव छ । त्यसका लागि ज्ञानको आवश्यकता पर्दछ । 'ऋते ज्ञानान्न मुक्ति' भनेर उपनिषद्हरूले


अमरसिंहको चिट्ठीको लोकार्पणमा लेखक


यात्रैयात्रा र पत्रैपत्रको लोकार्पण गर्दै कविवर श्रीमाधव घिमिरेका साथ लेखक, २०५९ साल

उद्घोष गरेका छन्। त्यसै कुरालाई भगवान् श्रीकृष्णले गीताका १८ अध्यायहरूमा प्रथम षट्कमा कर्मको महत्त्व, दोस्रो षट्कमा भक्तिको महत्त्व र अन्तिम षट्कमा ज्ञानको महत्त्व दर्शाउनु भएको छ। गृहस्थाश्रममा रहेका हामीजस्ता गृहस्थहरूले गर्नुपर्ने नित्य र नैमित्तिक कर्महरू अनिवार्यरूपमा गर्नैपर्ने देखिन्छ। मैले पनि गुरुहरूबाट उपदेश पाए अनुसार हाल ती कर्महरू भर्सक गर्ने प्रयास गरिरहेको छु। गृहस्थले गर्नैपर्ने कर्तव्यहरूमध्ये मातापिताको सेवा र वचनपालन, छोराछोरीहरूलाई उचित शिक्षादीक्षा दिनु, शिक्षादीक्षा प्राप्त भएपछि छोराहरूको व्रतबन्ध संस्कार र छोराछोरीहरूको विवाह पनि गरिदिनु पर्ने हुन आउँछ। तदनुसार मैले आफूले गर्नु पर्ने कर्तव्यहरू सबै पूरा गरिसकेको छु।


दायाँबाट रमेश खकुरेल, कमलमणि दीक्षित, प्रह्लाद पोखरेल, कोषराज न्यौपाने र लेखक, कोठे कविगोष्ठी, २०६५

# धार्मिक तथा सामाजिक कार्यहरूमा

श्रीसञ्जीवकुमार भट्टराई र श्रीसतीशकुमार भट्टराईको व्रतबन्ध २०४० साल चैत्र महिनामा झापा जिल्लाको कन्काइमाइको किनारामा र श्रीसगुनकुमार भट्टराईको व्रतबन्ध  २०४३ सालमा पाल्पा जिल्लाको तानसेनमा वैदिक विधिपूर्वक सम्पन्न भएको थियो।

मैले अध्ययन गर्दागर्दै ठूली छोरी सरिता २०१६ साल पुस महिनामा खोटाङ जिल्लाको रावा लामीडाँडाको घरमा जन्मिएकी हुन्। उनको विवाह २०४० साल माघ महिनामा खोटाङ जिल्ला खोक्सेली निवासी श्रीचण्डीप्रसाद दाहालसँग भएको थियो। म त्यस समयमा झापा जिल्लाको प्रमुख जिल्ला अधिकारीको पदमा कार्यरत


छोरो सगुनको व्रतबन्धमा भिक्षादान गर्दै आमा इन्दिरा, तानसेन दरबार, २०४३

थिएँ । हाल ज्वाईं श्रीचण्डीप्रसाद दाहाल नेपाल सरकारको सहसचिवमा कार्यरत हुनुहुन्छ । यसैबीचमा छोरी सरितालाई अमेरिका जाने चिट्ठा परेको हुँदा दुई छोरी र एक छोरासमेतलाई साथमा लिएर अमेरिका गएकी


चण्डीप्रसाद दाहाल र सरिता दाहाल, झापा वि.सं. २०४०



सुदीक्षा, सुप्रिया (इलु) र सुशान्त, टेक्सस, अमेरिका

छन् । ठूली छोरी सुश्री सुदीक्षा, सानी छोरी सुश्री सुप्रिया र छोरा सुशान्त हाल अमेरिकामा नै अध्ययन गरिरहेका छन् । सुदीक्षाको मोरङ निवासी निरज कोइरालासँग टेक्सस, अमेरिकामा सन् २००७ मा विवाह भइसकेको छ । उनीहरूको भविष्य उज्वल हओस् भन्ने हामीहरू कामना गर्दछौँ ।


सुदीक्षाको विवाहको तस्वीर

सानी छोरी सविताको जन्म २०२५ साल मङ्सिर महिनामा काठमाडौँको मैतिदेवी फाँटमा श्रीरामप्रसाद तण्डुकारको घरमा डेरा गरेर बसेको बेला


श्रीबद्रीराज अर्याल र श्रीमती सविता अर्यालको विवाहको तस्वीर, संवत् २०४६ साल असार


छोरीहरू सुश्री सुजाता र आस्थाका साथ सानी छोरीर ज्वाइँ

भएको थियो । उनको विवाह २०४६ साल असार महिनामा काठमाडौँ जिल्लाको बालाजू निवासी श्रीबद्रीराज अर्यालका साथ काठमाडौँ जिल्लाको वत्तीसपुतलीमा रहेको घरबाट भएको थियो । हाल ज्वाईं श्रीबद्रीराज अर्याल नेपाल सरकारको द्वितीय श्रेणीको अधिकृतमा कार्यरत हुनुहुन्छ । सानी छोरी सविताका दुई  छोरीहरू सुश्री सुजाता र सुश्री आस्था हाल

अध्ययनगरिरहेका छन् । सानी छोरी सविता आफ्ना पति श्रीबद्रीराज अर्यालका साथ विजयचोक, प्रयागमार्ग, बत्तीसपुतलीको घरमा बसिरहेकी छन् ।

छोरा सञ्जीवकुमार भट्टराईले युक्रेनबाट एरोनटिकल विषयमा इञ्जीनियरिङ गरी नेपाल फर्किएपछि उनको विवाह २०५६ साल फागुन १८ गतेका दिन कास्की जिल्ला निवासी न्यायाधीश श्रीकृष्णप्रसाद उपाध्याय पौडेलकी छोरी सुश्री सुषमासँग सम्पन्न भएको थियो । उनले केही समय नेपालकै विभिन्न हवाइ कम्पनीहरूमा काम गरेपछि हाल उनी क्यानडामा गएर AIR CANADA नामक सरकारी हवाइ कम्पनीमा काम गरिरहेका छन् । विस्तार विस्तार उतैतिर बस्ने सुरसारमा उनले हाल क्यानडाको भ्यान्कुभर भन्ने शहरमा घरसमेत किनिसकेका छन् ।


सञ्जीवको विवाहका समयको तस्वीर

सानो छोरा सतीशकुमार भट्टराईको विवाह २०५८ साल असार १६ गतेका दिन काठमाडौंको महाङ्काल निवासी श्रीसज्जनप्रसाद ढुङ्गानाकी छोरी सुस्मिता (इनु) ढुङ्गानाका साथ भएको थियो । हाल उनकी एउटी छोरी सर्वज्ञा जन्मिएकी छन् । हाल उनी डनवस्को भन्ने विद्यालयमा शिक्षिका भएर काम गरिरहेकी छन् । हाल उनीहरूकी छोरी सुश्री सर्वज्ञा तीन कक्षामा पढिरहेकी छन् ।


सतीशको विवाहको समयको तस्वीर



सतीश र श्रीमती सुस्मिताका साथ छोरी सर्वज्ञा

छोरा श्रीसगुनकुमार भट्टराईले प्रवेशिका परीक्षा प्रहरीको विद्यालय साँगाबाट उत्तीर्ण गरेका थिए । शङ्करदेव क्याम्पस काठमाडौंमा पढ्दापढ्दै उच्च शिक्षाका लागि उनी २०५१ सालमा अष्ट्रेलिया गएका थिए । त्यही नै पढाइ पूरा गरेर हाल सिड्नी शहरमा उनी काम गरिरहेका छन् । उनको

विवाह २०६२ साल असार २६ गते संखुवासभा जिल्लाको मादीबिर्ता निवासी श्रीमुक्तिनाथ दाहालकी छोरी पूजासँग भएको थियो । हाल उनीहरू दुवै जना अष्ट्रेलियाको सिड्नी शहरमा काम गरिरहेका छन् र त्यहीं नै घरसमेत किनेर बसोवास गर्दै आएका छन् ।


सगुनको विवाहको तस्वीर, २०६२ असार २६

त्यसरी मैले गृहस्थ आश्रमको धर्म अनुसार गर्नु पर्ने छोराछोरीहरूको शिक्षादीक्षा, व्रतबन्ध र विवाहसमेत समाप्त गर्ने काम गरेको थिएँ । छोरीहरूको विवाह म सरकारी सेवामा कार्यरत रहँदा नै सम्पन्न भएको थियो भने छोराहरूको विवाह चाहिं मैले सरकारी सेवाबाट अवकाश प्राप्त गरेपछि भएको थियो । मैले गृहस्थाश्रममा रहेर गर्नु पर्ने कर्तव्यहरूका साथसाथै तीर्थयात्रा, व्रत, उपासना र धार्मिक कार्यहरू पनि यथाशक्य गर्ने प्रयास गर्दै आएको छु ।

ज्येष्ठ सुपुत्र र पुत्रवधू क्यानडाबाट घर आएको शुभ अवसरमा विभिन्न देवीदेवताहरूको पूजा, पाठ, ग्रहशान्तिका लागि जप, भूमिदान, लघुरुद्रीका साथै लाखवत्ती प्रज्वलनसमेत घरमा २०६६ साल माघ ३ गते गरिएको थियो ।

## श्रीपशुपति अर्चना सुव्यवस्था प्रतिष्ठानमा

हाल २०६६ सालको प्रारम्भदेखि नै म यस प्रतिष्ठानको संस्थापक सदस्यको रूपमा संलग्न भइरहेको छु ।

## तीर्थयात्रामा

मैले विद्यार्थी अवस्थादेखि नै स्वदेश र विदेशका विभिन्न तीर्थहरूको यात्रा गर्ने प्रयास गरेको थिएँ । २०१६ साल मङ्सिर १४ गतेदेखि २०१६ साल पुस १४ गतेसम्म १ महिना भारत सरकारको निमन्त्रणामा विद्यार्थीको

हैसियतले नेपालका विभिन्न कलेजका विद्यार्थीहरूका साथ All India को भ्रमण मैले गरेको थिएँ। सो समयमा कलकत्तामा भगवती श्रीकालीको, उडिसा राज्यमा विभिन्न देवीदेवताहरूको र मद्रासमा श्रीमीनाक्षी देवी लगायतका धेरै देवदेवीहरूको दर्शन र पूजा अर्चना गर्ने मौका मैले पाएको थिएँ। त्यसै गरी मैसूरमा श्रीचामुण्डा देवीको, मथुरावृन्दावनमा भगवान् श्रीकृष्णाको, नयाँदिल्लीमा विभिन्न देवीदेवताहरूको र वनारसमा काशी श्रीविश्वनाथको समेत पूजा अर्चना गर्ने सौभाग्य मैले पाएको थिएँ।

त्यसबेला म अनजान विद्यार्थी भएको हुनाले मैले कुनै पनि देवीदेवताहरूको महत्त्व बुझ्केको थिइन। त्यसपछि २०३८ सालमा बर्दिया जिल्लामा प्रमुखजिल्लाअधिकारी भएर बसेको समयमा श्रीरामको जन्मभूमि अयोध्याको सपरिवार दुई पटक मैले यात्रा गरेका थिएँ। त्यसै गरेर २०५२ साल पुस २९ गतेदेखि २०५२ साल माघ ५ गतेसम्म म, मेरी श्रीमती इन्दिरा भट्टराई र श्रीउद्धव भट्टराईसमेतले काशी, प्रयाग र गयाको समेत यात्रा गरेका थियौं। त्यस पटक भने मलाई तीर्थयात्राको र त्यहाँ रहेका देवीदेवताहरूको बारेमा केही ज्ञान भइसकेको थियो तापनि जवानीको उन्माद र सरकारी ओहदाको अहंका कारणले मेरा अन्तःकरणमा विद्यमान रजोगुण र तमोगुणको भावले गर्दा गङ्गा मैली भएकी मैले देखेको थिएँ। वास्तवमा गङ्गाको आध्यात्मिक महत्त्व नबुझ्केर त्यसबेला मलाई त्यस्तो भ्रम उत्पन्न भएको थियो। सामान्य मानिसको दुर्गन्ध वा फोहोरले आध्यात्मिकरूपमा गङ्गा कहिल्यै पनि अशुद्ध र मैली हुन्नन् भन्ने कुरा मैले बुझ्दै गएपछि गरिएका गङ्गास्नानहरूमा मलाई त्यस प्रकारको अन्यथाभाव उत्पन्न भएको थिएन। मैले २०५२ साल माघ १ गते मकरसंक्रान्तिका दिन प्रयागमा गएर त्रिवेणीमा स्नान गर्नुका साथै २०५२ साल माघ २ गते गया गएर पुषेऔंसीका दिन पितृहरूको नाममा मैले श्राद्ध गरेको थिएँ। त्यसका अतिरिक्त मैले भगवान् बुद्धले सर्वप्रथम उपदेश गरेको स्थान सारनाथ र वनारस हिन्दुविश्वविद्यालयको समेत भ्रमण गरेको थिएँ।

त्यसैगरेर भारतको कलकत्ता राज्यको मायापुरीमा आयोजना गरिएको विश्वहिन्दुमहासङ्घको सम्मेलनमा भाग लिन श्रीतारणीप्रसाद भट्टराईलाई साथमा लिएर २०५७ साल मङ्सिर १८ गते म काठमाडौंबाट विराटनगर

गएको थिएँ । मङ्सिर १९ गते विराटनगरबाट प्रस्थान गरेर मङ्सिर २० गते मायापुरी पुगिएको थियो । त्यहाँ भएको विश्वहिन्दुमहासङ्घको सम्मेलन समाप्त गरेर हामीहरू मङ्सिर २२ गते कलकत्ता गएका थियौँ । त्यहाँ श्रीकालिकाको दर्शन गरेर त्यहाँबाट मङ्सिर २३ गते प्रस्थान गरेर भगवान् श्रीजगन्नाथको दर्शन गर्न हामीहरू जगन्नाथपुरी पुगेका थियौँ । त्यहाँ जानेमा श्रीरामप्रसाद रिजाल, श्रीमती योगमाया रिजाल र श्रीतारणीप्रसाद भट्टराईका साथमा म पनि थिएँ । त्यहाँको दर्शन समाप्त गरेर हामीहरू मङ्सिर २५ गते तिरुपति बालाजी पुगेका थियौँ । त्यहाँ भगवान् श्रीतिरुपतिको दर्शन गरेर हामीहरू मङ्सिर २७ गते रामेश्वरम् पुगेका थियौँ । त्यहाँ भगवान् श्रीरामेश्वरम्को दर्शन गरेर त्यहाँबाट हामीहरू मङ्सिर २९ गते बिहान कन्याकुमारी पुगेका थियौँ । त्यहाँको कार्यक्रम पनि समाप्त गरेर हामीहरू मङ्सिर ३० गते त्यहाँबाट वनारसतर्फ प्रस्थान गरेका थियौँ । वनारस पुगेर भगवान् श्रीविश्वनाथ आदि देवीदेवताहरूको र विन्ध्याचलमा गएर श्रीविन्ध्यवासिनी देवीको दर्शन गरेर हामीहरू २०५७ साल पुस ७ गते वनारसबाट काठमाडौं फर्किएका थियौँ ।



गङ्गास्नानपछि प्रार्थना गर्दै श्रीमती इन्दिराका साथ लेखक, दशाश्वमेधघाट, वाराणसी, २०५२ पुस ३० गते

त्यसपछि २०५८ साल मङ्सिर महिनाको २८ गते म, मेरी श्रीमती, श्रीरघुनाथ भण्डारी, श्रीऋषिकेश पाण्डे र उनकी श्रीमतीसमेत ५ जना सर्वप्रथम काशी गएका थियौँ । त्यहाँ भगवान् विश्वनाथको दर्शनपछि ७ दिनसम्म श्रीमद्भागवत महापुराण आफैँले पारायण गरेर त्यसपछि हामीहरू ट्रेनबाट सोझै द्वारका गएका थियौँ । त्यसपछि सोमनाथ, ॐकारेश्वर, महाकालेश्वर, पुष्कर, मथुरावृन्दावनको यात्रा समाप्त गरेर फेरि काशीमै हामीहरू फर्किएका थियौँ । त्यहा काशीविश्वनाथ, विन्ध्यवासिनी, महाकालेश्वरलगायत अरू देवीदेवताको समेत दर्शन गरेर २०५८ साल माघ २ गते काठमाडौं हामीहरू फर्किएका थियौँ ।

तीर्थयात्राकै क्रममा २०६१ साल जेठ २८ गते म, मेरी श्रीमती, श्रीरघुनाथ भण्डारी, श्रीगोविन्द कोइराला र उनकी श्रीमतीसमेत भएर हामीहरू भारतको उत्तराञ्चल राज्यमा रहेका श्रीयमुनोत्तरी, श्रीगङ्गोत्तरी, श्रीकेदारनाथ र श्रीबद्रीनाथ धामको समेत दर्शन गर्न गएका थियौँ। त्यताको यात्रा गर्ने क्रममा सर्वप्रथम हामीहरू हरिद्वार र अन्त्यमा ऋषिकेश पुगेर काठमाडौं फर्किएका थियौँ।

यसरी माथि उल्लेख भएका विभिन्न तीर्थहरूको यात्रावृत्तान्त २०६४ सालमा प्रकाशन भइसकेको छ। यहाँ सङ्क्षिप्त विवरणमात्र दिइएको हो। तीर्थयात्राको यथार्थ विवरण उक्त पुस्तिकाबाट नै जानकारी हुन सक्ने म ठान्दछु। त्यसैगरी मैले आफ्नू क्षमता र विश्वास अनुसार आफूले जानेका र आफ्नू क्षमताले भ्याएसम्मका धार्मिक कृत्यहरूसमेत म गर्दै आएको छु।

२०५५ साल चैत्र २५ गते मैले सेवाबाट अवकाश लिए पछि अवकाश प्राप्त जीवनमा केही धार्मिक कार्यहरू गर्ने उद्देश्यले सर्वप्रथम २०५६ साल, २०५७ साल, २०५९ साल र २०६० सालमा नवदुर्गा भगवतीको विधिपूर्वकको पूजा, पाठ र आराधनासमेत काठमाडौंमा रहेका केही भट्टराई बन्धुहरूलाई समेत सहभागि गराएर मैले आफ्नै घरमा गराएको थिएँ। त्यसपछि पनि नवदुर्गा भगवतीको पूजा भट्टराई बन्धुहरूकै आयोजनामा भइरहेको छ। तदनुसार २०५८ सालमा श्रीउद्धवकुमार भट्टराईका घरमा देवीपूजा भएको थियो। २०५७ सालमा मेरो घरमा भएको देवी पूजामा तत्कालीन प्रधानमन्त्री श्रीकृष्णप्रसाद भट्टराई र तत्कालीन मन्त्री श्रीबलबहादुर के.सी.समेत सम्मिलित हुनुहुन्थ्यो। उक्त अवसरमा श्रीबलबहादुर के.सी.ले श्रीमद्देवीभागवत महापुराणको पारायण मेरै घरमा गराउनु भएको थियो। त्यसरी २०५६ सालमा मेरै अग्रसरतामा मेरै घरमा शुरु भएको देवी पूजाको क्रम अहिलेसम्म पनि चालू नै रहेको छ।


यज्ञमण्डपमा परिवारसहित लेखक

उपर्युक्त अनुसार २०६१ सालदेखिको देवीपूजाको व्यवस्था मिलाउने अभिभारा गामनाङबिर्ताका भट्टराई बन्धुहरूको जिम्मामा परेको छ। म

पनि त्यसमा पूर्णरूपमा सम्मिलित भएर जगदम्बा भगवतीको पूजाआराधनामा संलग्न भइरहेको छु ।

मैले २०१६ सालमा विद्यार्थी अवस्थादेखि नै विभिन्न मित्रराष्ट्रहरूको भ्रमण गर्ने शुभअवसर पाएको थिएँ । विदेश भ्रमण गर्ने मेरो क्रम २०५९ साल साउन ९ गते तदनुसार सन् २००२ जुलाई १५ तारिखसम्म नै अविच्छिन्नरूपमा चलेको थियो । त्यसरी मैले भ्रमण गर्दा विभिन्न देशका विभिन्न महत्वपूर्ण व्यक्तिहरूसँग भेट्ने शुभअवसर पाएको थिएँ । त्यसका अतिरिक्त मैले बेलायतको मेडमटुसा म्युजियममा स्थापित व्यक्तित्वहरूसँग पनि साक्षात्कार हुने मौका पाएको थिएँ । त्यसरी मैले साक्षात्कार हुने शुभअवसर पाएका विदेशी व्यक्तिहरूमा सन् १९५९ को डिसेम्बर महिनामा भारत भ्रमण गर्दा तत्कालीन केन्द्रीय शिक्षामन्त्री एस.के. श्रीमालीसँग भेट भएको थियो । त्यसको लामू अन्तरालपछि सन् १९९६ को जुलाई महिनामा संयुक्तराज्य अमेरिकाको जर्जिया राज्यको एटलाण्टामा जाँदा संयुक्तराज्य अमेरिकाका तत्कालीन राष्ट्रपति श्री बिलक्लिन्टनसँग भेट भएको थियो । त्यसैसमयमा विश्वप्रसिद्ध अमेरिकी मुक्केवाज मोहम्मदअलिसँग पनि मैले भेटेको थिएँ । सन् २००० नोभेम्बर महिनामा अष्ट्रेलियाको भ्रमण गर्दा त्यहाँका गभर्नर जनरलसँग पनि मैले भेट गर्ने शुभअवसर पाएको थिएँ । सो सम्बन्धी यथार्थ विवरण माथि नै परिसकेको छ ।

## गीता समुदय प्रकाशनमा

केही वर्ष अघिदेखि गीता समुदय प्रकाशन नामक संस्थामा म उपाध्यक्ष भएर काम गरिरहेको छु । उक्त संस्थाले प्रकाशन गरेको समुदय त्रैमासिक आध्यात्मिक पत्रिकाको सम्पादकसमेत भएर हाल म कार्यरत छु । उक्त संस्थाका संस्थापक अध्यक्ष श्रीकुलशेखर शर्माज्यू हुनुहुन्थ्यो । हाल त्यसको अध्यक्षमा डा.गोविन्द टन्डन हुनुहुन्छ । समुदय पत्रिका नियमितरूपमा प्रकाशन भइरहेको छ । सम्पादक मण्डलमा मेरा अतिरिक्त प्रधान सम्पादक डा.गोविन्द टन्डन र श्रीहेमराज ज्ञवालीसमेत रहनुभएको छ ।



# उपसंहार

एकदशकभन्दा पनि लामो समयदेखि मैले लेख्न थालेको यो अनुस्मृति अर्थात् जीवनयात्राको क्रम अब टुङ्गिएको छ । चेतनाको सञ्चार हुन थालेपछि र मैले सम्झन थालेपछिका जीवनका केही घटनाहरूलाई मैले यसमा लिपिबद्ध गर्ने प्रयास गरेको छु । यो लेख्ता मैले सातदशकको आफ्नू विगतलाई अत्यन्त विहङ्गम र सूक्ष्मरूपले हेर्ने कोशिश गरेको छु । अहिलेको धरातलबाट विगतलाई फर्केर हेर्दा चलचित्रजस्तो मलाई यसले अत्यन्त रोमाञ्चित बनाउनेगर्दछ । आफ्नै विगत सम्झँदा आफैँलाई आश्चर्य लागेर आउँछ ।

पुख्र्यौलीपछि बाल्यजीवन हुँदै निरीह छात्र जीवनमा प्रवेश गर्दा र त्यसपछि पनि जीवनको यात्रा कुन दिशातर्फ मोडिने हो भन्ने कुरा मलाई थाहा थिएन । दोहोरो पढाइ, छात्रराजनीति, सङ्घर्ष, कारागारभित्र र बाहिर हुँदै मेरो छात्रजीवन अत्यन्त गतिशील भएर बितेको थियो । दायाँबायाँ नहेरेर राजनीतिमा होमिने मेरो चाहनालाई २०१७ साल पुस १ गतेको घटनाले समाप्त गरिदिएको थियो । अरू कुनै उपाय नदेखेपछि बाध्य भएर सं. २०२२ साल माघ महिनामा सरकारी सेवामा मैले प्रवेश गर्नुपरेको थियो ।

त्यसरी अनिच्छावश सरकारी सेवामा प्रवेश गरेको हुँदा नै धेरै वर्षसम्म म त्यहाँभित्र सहजाउन सकेको थिइन । जागिरेको संस्कार नभएको मेरो वंशपरम्परामा म नै पहिलो निजामती सेवाको जागिरे थिएँ । त्यसैकारणले पनि म त्यसभित्र घुलमिल हुन सायद सकिरहेको थिइन होला, मलाई त्यस्तै लाग्दथ्यो त्यसबेला ।

आफैँसँग लुकामारी खेल्दै, अन्यमनस्क हुँदै र वितृष्णा राख्ताराख्तै पनि म जागिरमा टाँसिई नै रहेँ । विभिन्न संस्कार, धारणा र स्वभाव भएका मान्छेहरूका साथ मैले सहकारी एवं सहकर्मी बन्नुपरेको थियो । २०२२ सालको माघ २१ गतेदेखि रक्षामन्त्रालयको शाखा अधिकृतबाट शुरुभएको मेरो जागिरे जीवन २०५५ साल चैत्र २५ गते शिक्षामन्त्रालयको सचिवपदबाट समाप्त भएको थियो ।

३२ वर्ष दुई महिना ८ दिन लामू जागिरे जीवनमा मैले मन्त्रालयदेखि लिएर विभाग, जिल्ला र अञ्चलकार्यालयका विभिन्न पदमा रहेर काम गरेको थिएँ। यसै अन्तरालमा म पाँच सन्तानको पिता पनि भइसकेको थिएँ। दुःख र सुखको चाकाचुलीमा घुम्दै, चहचह गर्दै, रुँदै र हाँस्दै मैले आफ्नू प्रारब्धको जाँतोमा पिसिनु परेको थियो। त्यसबेला म कालिदासको 'कस्यात्यन्तं सुखमुपनतुं दुःखमेकान्ततो वा नीचैर्गच्छत्युपरि च दशा चक्रनेमिक्रमेण' लाई सम्झेर आइपरेका झञ्झावातहरूलाई सहने गर्दथेँ।

मैले प्राप्त गरेको संस्कार र भावना अनुरूप नै आफ्नू जीवन सञ्चालन गर्ने प्रयास आजसम्म पनि म गरिरहेको छु।

'मातृवत् परदारेषु' को सिद्धान्तलाई मैले अक्षरशः पालना गरेको छु र एकनारी ब्रह्मचारीको व्रतमा पनि म उत्तीर्ण भएको छु।

'परद्रव्येषु लोष्ठवत्' मा पनि म खरो उत्रिएको छु। किनभने नीतिशास्त्रले भनेको पनि छ। जस्तै –

अकृत्वा परसन्तापं अगत्वा खलमन्दिरम्।
अनुल्लङ्घ्य सतां मार्गं यत्स्वल्पमपि तद्बहुः॥

*– नीतिवचन, कल्याण ८४।१*

उपर्युक्त नीतिशास्त्रको सिद्धान्तलाई पनि भर्सक मैले पालना गरेको छु। राजस्व, शिवस्व, देवस्व, ब्रह्मस्वका साथै अन्याय र अनीतिको द्रव्य पनि मैले जानेर लिएको छैन। आफैँले गरेको स्वच्छ आर्जन र पैतृक सम्पत्तिबाट मेरो निर्वाह चलिरहेको छ। अरूसँग हात थापेर नलिने मेरो सिद्धान्त २०२७ सालमा राजा महेन्द्रले दिने इच्छा गरेर पनि मैले लिन अस्वीकार गरेबाट प्रष्ट हुन्छ। सो कुरा पोखराको सन्दर्भबाट स्पष्ट हुने नै छ।

'आत्मवत्सर्वभूतेषु यः पश्यति'लाई भने मैले पालना गर्न सकिन। किनभने गृहप्रशासनमा प्रवेश गरेपछि मैले सैनिक तालीम लिनुपरेको थियो। हतियार चलाउने तालीम लिएको र जिल्लाको प्रशासक पनि भएको नाताले त्यसबेला ममा मद चढेको थियो। त्यसै प्रमादले मलाई निर्दोष पशुपक्षीको हत्या गराएको थियो। म हत्यारा शिकारी बनेको थिएँ। त्यो सम्झँदा पनि अहिले मलाई अत्यन्त पीडा हुन्छ। त्यस कामको म प्रायश्चित्त गर्न चाहन्छु र पश्चात्ताप गर्दछु।

म जिल्लामा प्रशासक भएर बस्ता कानून अनुसार शान्तिसुरक्षा कायम गर्न प्रहरीलाई आदेश दिँदा, भ्रष्टाचार नियन्त्रण गर्दा र सार्वजनिक अपराध नियन्त्रण गर्ने कार्बाही गर्दा पनि मबाट जान अन्जानमा पनि मान्छेले दुःख पाएका हुनसक्तछन् । त्यतिमात्रै नभएर जवानी र शक्तिको जोशमा मैले नाम चलाउने उद्देश्यले बढी महत्त्वाकाङ्क्षी भएर अनावश्यक उत्ताउलो भएर काम पनि गरेको हुनसक्तछु । यी कुराहरू सम्झेर पनि मलाई अहिले पश्चात्ताप हुन्छ ।

यीभन्दा पनि ठूलो गल्ति ब्राह्मण भएर पनि अज्ञानवश सुरापान गरेको छु । सुरापानलाई शास्त्रले महापातक भनेको छ । त्यसको प्रायश्चित्त रामेश्वरम् गएर शिवको दर्शन गर्नाले हुन्छ भन्ने गुरु र शास्त्रको भनाइ अनुसार भगवान् श्रीरामेश्वरको दर्शन र पूजा गरेर त्यस महापातकबाट निर्मुक्त भएको मैले ठानेको छु ।

प्रायश्चित्त र पश्चात्ताप पछि बिस्तारै सांसारिक तृष्णाबाट बाहिर निस्कन म प्रयासरत छु । छोराबुहारीलाई घरको काम सबै जिम्मा लगाएर पाहुनाजस्तो भएर घरमा बस्न हामी दम्पती हाल प्रयत्नशील छौँ । घरमा नै बसेर पनि शुभकार्यका साथै ज्ञान र भक्तिमा लागेमा घर बन्धन हुँदैन भन्ने श्रीमद्भागवतको सदुक्तिलाई हामी दुवैले परिपालन गर्ने प्रयास हाल गर्दैआएका छौँ । भागवतको सदुक्ति यस्तो छ । जस्तै –

गृहेष्वाविशतां चापि पुंसां कुशलकर्मणाम् ।
मद्वार्तायातयामानां न बन्धाय गृहा मता ॥

पुत्रदाराप्तबन्धूनां सङ्गमः पान्थसङ्गमः ।
अनुदेहं वियन्त्येते स्वप्नो निद्रानुगो यथा ॥

इत्थं परिमृशन्मुक्तो गृहेष्वतिथिवद् वसन् ।
न गृहैरनुबध्येत निर्ममो निरहङ्कृतः ॥

*– भा. ४।३०।१९, ११।१७।५३, ५४*

नम्रताको कमीले पनि मैले दुःख पाएको छु । विनम्र व्यक्तिले नै सफलता प्राप्त गर्दछ र सुख पनि पाउँछ । तर अहङ्कार रहुञ्जेल त्यो सम्भव छैन । अहिले आएर म बिस्तारै अहङ्कारलाई सधैँका लागि विसर्जन गर्ने प्रयत्न

गरिरहेको छु। यस सन्दर्भमा भर्तृहरिको सदुक्तिको स्मरण गर्नु म सान्दर्भिक ठान्दछु। जस्तै –

यदा किञ्चिज्ज्ञोऽहं द्विप इव मदान्धः सम भवम्
तदा सर्वज्ञोऽस्मीत्यभवदवलिप्तं मम मनः।
यदा किञ्चित्किञ्चिद् बुधजनसकाशादवगतम्
तदा मूर्खोऽस्मीति ज्वर इव मदो मे व्यपगतः॥

आफ्ना सन्तान, सम्बन्धी र परिजनहरू बिस्तारै टाढा हुँदै जानु सकारात्मक कुरा मैले ठानेको छु। मेरो सामर्थ्य अनुसार जीवनभरि नै यिनीहरूलाई माथि चढाउने भऱ्याङको खुड्किलो हुन पाएकोमा म अत्यन्त सन्तुष्ट छु। खुड्किलाको काम माथि उक्लन खोज्नेलाई सहयोग पुऱ्याउनेमात्रै हो, प्रत्युपकार खोज्ने त्यसलाई अधिकार छैन। माथि उकिलसकेको व्यक्तिले आफूले टेकेर उक्लिएको भऱ्याङको खुड्किलोलाई प्रायः फर्केर हेर्नेगर्दैन, हेर्नु उसले आवश्यक ठान्दैन र हेर्ने उसलाई फुर्सद पनि सायद हुँदैन। परिजन, स्वजनहरूसमेत बिस्तारै पर हुँदै जानु संसारको यो शाश्वत नियम हो। यसमा आश्चर्य मान्नु पर्ने केही छैन। यसलाई स्वाभाविकरूपमा लिनु नै बुद्धिमानी हुन्छ। अन्त्यमा जानुपर्ने पनि एक्लै हो। अतः अहिलेदेखि नै आफन्तहरूसँगको स्नेह कम हुँदै जानु भगवत्कृपा नै हो भन्ने मैले ठानेको छु। यही कुरो प्रकारान्तरले कुन्तीले भगवान् श्रीकृष्णसँग मागेकी पनि थिइन्। जस्तै –

अथ विश्वेश विश्वात्मन् विश्वमूर्ते स्वकेषु मे।
स्नेहपाशमिमं छिन्धि दृढं पाण्डुषु वृष्णिषु॥

*– भागवत १।८।४१*

अवकाश लिएपछि मैले प्राप्त गर्ने निवृत्तिभरणदेखि बाहेक अन्यत्रबाट प्राप्त हुने आर्थिक लाभ, पुरस्कार, भत्ता, सम्मान, सम्मानपत्र, उपाधिलगायतका कुनै पनि कुरा स्वीकार नगर्ने मैले निश्चय गरेको छु। यस निश्चयबाट कुनै अवस्थामा पनि विचलित नहुने मेरो दृढ सङ्कल्प छ।

मैले मेरो जीवनमा गरेका राम्रा नराम्रा सबै कुरा सम्झेसम्म सही र सत्य विवरण माथि दिइसकेको छु। विद्यार्थी अवस्थामा मलाई राजनीतिको

केही चस्का थियो तर अहिलेभने छैन। चस्का छ भने अद्वैतवेदान्त र ब्रह्मज्ञानको चस्का छ। यसै जीवनमा कसरी ब्रह्मज्ञान गर्ने र जन्ममरणको दुश्चक्रमबाट सधैंका लागि कुन उपायबाट मुक्त हुने भन्नेमात्रै चिन्ता छ।

सांसारिक तृष्णालाई बढाउने रचना गर्न छोडेर हाल केही भक्तिपरक र अरू अद्वैतवेदान्तपरक ग्रन्थहरू लेख्नेतर्फ नै मैले आफूलाई उन्मुख गरेको छु। जसमा ज्ञान र भक्ति, रासपञ्चाध्यायी, ब्रह्मसाक्षात्कार, उपनिषत्सार र ब्रह्मसूत्रसारहरूसमेत पर्दछन्। भविष्यमा पनि यसैतर्फ मेरो कलम चलिरहने छ। जतिसम्म र जहाँसम्म भगवान्को कृपा हुन्छ म लेख्तैरहनेछु।

भगवान् शङ्कराचार्यले सानै उमेरमा संन्यास लिन चाहनुभएको थियो। तर पतिको मृत्यु भइसकेको र एउटै मात्र छोरालाई पनि संन्यासी हुने अनुमति शङ्कराचार्यकी आमाले दिनुभएन। बरु उहाँले बिहा गरेर घरगृहस्थी जमाउन छोरालाई सल्लाह दिनुभयो। उहाँ छोराबाट सन्तानको मुख हेर्नका लागि बुहारी घरमा भित्र्याउन चाहनु हुन्थ्यो। तर शङ्कराचार्य बिहा गर्नुको साटो सर्वकर्मसंन्यास गरेर संन्यासी हुन चाहनुहुन्थ्यो। जति अनुरोध गर्दा पनि आमाले अनुमति नदिएपछि शङ्करले कविताद्वारा अनुमति माग्नु भएको थियो। जो यस प्रकार छ –

प्रबलानिलवेगवेल्लितध्वजचीनांशुककोटिचञ्चले।
अपि मूढमतिः कलेवरे कुरुते कः स्थिरबुद्धिमम्बिके॥

अति दुर्जयवायुवेगले कपडाको ध्वज काम्छ थर्थर।
ध्वज नै सरि देह अम्बिके ! क्षणमै जान्छ भएर जर्जर॥

कतिनाम सुता नलालिताः कति वा नेह बधूरभुञ्जिहि।
क्व नु ते क्व च ताः क्व वा वयं भवसङ्गः खलु पान्थसङ्गमः॥

कति पुत्र पियार गर्नुभो कति वा पुत्रवधू पसे घर।
अब अम्ब ! कहाँ गए तिनी सब हुन् पान्थसमान अस्थिर॥

भ्रमतां भववर्त्मनि भ्रमात् न हि किञ्चित् सुखमम्ब लक्ष्यये।
तदवाप्यचतुर्थमाश्रमं प्रयतिष्ये भवबन्धमुक्तये॥

भ्रमले भवमा बनी भ्रमी घुमिरेछौं भयले ससम्भ्रम।
सुख छैन यहाँ कहीं कतै सब संसार रहेछ यो भ्रम।
भवको भय हर्न अम्बिके ! दिनुहोस् जान चतुर्थ आश्रम॥

उक्त कविता सुनेपछि आमाबाट शङ्करले संन्यास लिने अनुमति पाउनुभएको थियो । यसबाट उहाँ आफैँमात्रै मुक्त हुनु भएन, बरू परवर्ती धेरै मुमुक्षुहरूलाई पनि मुक्त हुने बाटो उहाँले देखाउनुभयो । यस दुःखमय संसारबाट मुक्त हुन मुमुक्षुहरूलाई घच्घच्याएर शङ्करले उठाउनुभयो । दुःखमोचनका सम्बन्धमा कश्मीरको शारदापीठमा विद्वान्हरूलाई दिनुभएको उद्बोधनयुक्त शङ्करको उपदेश अत्यन्त मननीय छ । जुन यसप्रकार छ –

जन्म दुःखं जरा दुःखं  मृत्युर्दुःखं पुनः पुनः ।
संसारसागरो दुःखं तस्माज्जाग्रत जाग्रतः ॥

रानी मदालसा आफ्ना छोराहरूलाई कोक्रामा छँदादेखि नै ब्रह्मज्ञान दिएर जगाउने गर्दथिन् । उनका छोराहरू ब्रह्मज्ञान गरेर मुक्त भएका थिए । मदालसाले छोराहरूलाई दिएको उपदेश यस्तो छ –

शुद्धोऽसि बुद्धोऽसि निरञ्जनोऽसि संसारमायापरिवर्जितोऽसि ।
संसारस्वप्नं त्यज मोहनिद्रां मदालसा वाक्यमुवाच पुत्रम् ॥

यस्ता उपदेशहरूबाट हामीहरूले शिक्षा लिन सक्नुपर्दछ । यसबाट तुरुन्तै मोक्ष प्राप्त नभए तापनि मोक्षको मार्गतर्फ उन्मुख हुन यसले सहयोग पुऱ्याउँछ । श्रीमद्भागवतमा यस कुराको उल्लेख पाइन्छ । महाभारतको युद्धको शुरुमा नै भगवान् श्रीकृष्णबाट सुनेको ज्ञानयोग अर्थात् गीताज्ञान अर्जुनले राज्यसञ्चालनको व्यस्तताले बिर्सिसकेका थिए । तर अन्त्यमा उनलाई त्यस ज्ञानको स्फुरण भएको थियो र त्यसैबाट उनी मुक्त भएर गएका थिए । जुन कुरा श्रीमद्भागवतमा यसरी उल्लेख भएको छ । जस्तै –

गीतं भगवता ज्ञानं यत्तत्सङ्ग्राममूर्धनि ।
कालकर्मतमोरुद्धं पुनरध्यगमद् विभुः ॥

*– भागवत १।१५।३०*









१. उसैको लागि र फेरि उसैको लागि एक अध्ययन – २०२६
२. ऋतुमन्थन, समीक्षात्मकग्रन्थ – २०४४
३. सिर्जनाका फूलहरू, कवितासङ्ग्रह – २०५१
४. बहादुर शाह, खण्डकाव्य – २०५२
५. श्रद्धाञ्जलि, शोककाव्य – २०५२
६. गीत तथा भजनहरू – २०५२
७. अमरसिंहको चिट्ठी, खण्डकाव्य (ने.रा.प्र.प्र.) – २०५३
८. क्रान्तिदूत, खण्डकाव्य – २०५३
९. विविधयात्रा, कवितासङ्ग्रह (साझाप्रकाशन) – २०५५
१०. यात्रैयात्रा, कवितासङ्ग्रह – २०५८
११. पत्रैपत्र, कवितासङ्ग्रह – २०५९
१२. पृथ्वीविजय, काव्य – २०६२
१३. ज्ञान र भक्ति – २०६३
१४. रासपञ्चाध्यायी – २०६४
१५. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
१६. ब्रह्मसाक्षात्कार – २०६५
१७. उपनिषत्सार – २०६७
१८. ब्रह्मसूत्रसार – २०६७
१९. अनुस्मृति – २०६७